जेठा पुत्र भए तिनै नृपतिका * प्रख्यात जन्मेजय ।
गर्थे शासन जेष्ठ पुत्र नृपका * प्राचीनवान् निर्भय ॥७२
सम्पाती तिनका र पुत्र उनका * राजा अहंपाति हुन् ।
तिन्का श्री जयसेन श्री अरिहका * छोरा महाँभौम हुन् ॥
धेरै यै क्रमले भए अरु पनी * राजाहरू सद्मति ।
श्री दुष्यन्तजिका भरत् सुत भए * यै देशमा भूपति ॥७३
भूमायू तिनका सुहोत्र उनका * सत्पुत्र हस्ती भए ।
यिन्ले नै पछि हस्तिनापुर भनी * प्रख्यात पारी लिए ॥
नाती हुन् नृप श्रेष्ठ संवरणका * विख्यात राजा कुरु ।
तेजस्वी कुरु - वंशका हुन गए * सम्पूर्ण राजाहरू ॥७४

जो भन्छ सुन्छ पुरुको, कुरुको चरित्र ।
त्यस्ले दुवै कुल सपार्छ गरी पवित्र ॥
आशीष पितृहरुको पनि पाइ धेर ।
पुग्नेछ देह त्यजि त्यो पछि विष्णुनेर ॥७५॥

राजा शान्तनु र गङ्गाको कथा

हे राजन् ! नृपती महाभिष भए * इक्ष्वाकुको वंशमा ।
बस्थे यज्ञ गरेर स्वर्गपुरि ती * श्री इन्द्रका साथमा ।
सारा देव मिलेर क्वै दिन गए * -थे सृष्टिकर्ता कहाँ ।
कोही कारणले उपस्थित भइन् * भागीरथीजी त्यहाँ ॥७६
हावा तेज चलेर चादर लग्यो * तिन्को उडाई जब ।
चिम्ले नेत्र ति देवता सकलले * मानेर लज्जा तब ॥
हेरे मोह भई महाभिषजिले * गङ्गा तिरै बेसरी ।
त्यो देखी नृपलाई श्राप दिनुभो * ब्रह्माजिले त्यै घरी ॥७७

मान्छेको जुनि पाइ क्यै दिनपछी * यै स्वर्गमा आउला ।
जुन् गङ्गातिर मन् दियौ पछि उनै * -लाई पनी पाउला ॥
गर्नेछौ जब क्रोध हे नरपते ! * भागीरथीको प्रति ।
मेरो श्राप छुटेर त्यै बखतमा * सप्रन्छ तिम्रो मति ॥७८
गङ्गाले पनि भूपको रुचि बुझी * उन्कै गरी चिन्तन ।
लागेका तल खस्न अष्टवसुको * देखिन् दुखी जीवन ॥
सोधिन् ती वसुलाइ पाप गरि के * यस्तो भयो दुर्गति ।
गङ्गाको सुनि प्रश्न श्रेष्ठ वसुले * विन्ती गरे हे सति ॥७९॥
गाई नन्दिनी श्री वशिष्ठ मुनिकी * हामी हरूले हर्‍यौं ।
मान्छे हो भनि श्राप पाई मुनिको * यो दुर्गतीमा पर्‍यौं ॥
आफ्ना पुत्र बनाई जन्म दिनुहोस् * गङ्गे ! हजुर्ले अब ।
चाँडै मुक्त हुने उपाय पनि क्यै * पर्नेछ गर्नू तब ॥८०॥
तिन्को विन्ति सुनी 'तथास्तु' वसुहो ! * त्यस्तै गरौंला भनी ।
गंगा फिर्नु भयो, गए वसुहरू * अत्यन्त खुशी बनी ॥
यौटा भूप प्रतीप यै पृथिविमा * बस्थे तपस्या गरी ।
तिघ्रामा गइ दाहिनेतिर बसिन् * गंगा बनी सुन्दरी ८१॥
सोधे झट्ट प्रतीपले तिमि शुभे ! * को हौ मलाई भन ?
बोलिन् गर्छु हजूरकै नरपते ! * स्वामी भनी चिन्तन ॥
छोरीको र बुहारिको छ भवमा * प्रख्यात जुन् आसन ।
त्यस्मा आइ बसेपछि म कसरी * पत्नी बनाऊँ भन ॥८२॥
माने ता म बुहारिको पदमहाँ * राख्छु भनेथे जब ।
बोलिन् हुन्छ त्यसै म गर्दछु सबै * बिन्ती छ यौटा अब ॥
छोरालाइ हजूरको म सँगको * कैह्ले नभन्नू कुरा ।
तिन्को बात सुनी भने नृपतिले ! * गर्छु प्रतिज्ञा पुरा ॥८३॥

ज्ञानी पुत्र प्रतीपका हुन गए * श्री शान्तनू सुन्दर ।
तिन्को कीर्ति र धर्म वर्णन गरी * सक्ने कहाँ को छ र ? ॥
राजा खेल्न शिकार क्वै दिन गए * गङ्गाजिको तीरमा ।
गङ्गा सुन्दर रूपकी बनि पुगिन् * श्री भूपका पासमा ॥९४
देखा देख गरेर मोहित भए * राजा र गङ्गा तहाँ ।
सोधे भूपतिले गएर नजिकै * खुशी भई मन् महाँ ॥
तिम्रो देखि स्वरूप मोहित भएँ * को हौ ? शुभे ! लौ भन ?
मेरा साथमहाँ विवाह गरिल्यौ * आनन्द मानीकन ॥९५॥
बोलिन् भागिरथी प्रसन्न मनले * स्वीकार गर्छु तर ।
गर्नेछु जति जे जहाँ म जहिले * ठानी सबै सुन्दर ॥
छेक्ने छैन कदापि अप्रिय पनी * बोल्दीन भन्नू भए ।
तिन्को बात सबै सुनेर नृपले * स्वीकार गर्दै गए ॥९६॥
ल्याएथे घरमा बसालि रथमा * श्री शान्तनूले जब ।
भोगे भोग प्रशस्त सात क्रमले * छोरा भएथे तब ।
गङ्गाले जलमा लगीकन सबै * छोरा बगाई दिइन् ।
आठौं पुत्र भएर फेरि अघिभैं *ती फ्याँक्नलाग्दी भइन्९७
रोकी भूपतिले भने तिमिसरी * होवैन क्वै दुष्टिनी ।
को हौ ? स्पष्ट बताउ बालक सबै * मार्नें बृथा पापिनी ॥
लागिन् भन्न कबोल जो नरपते ! * गर्नू भएको थियो ।
पैल्हेको व्यवहारले सकल त्यो * मिथ्या गराई दियो ॥९८
पैल्हेको इतिहास वर्णन गरी * सुंपेर छोरो पनि ।
मेरो श्राप छुट्यो भनीकन गइन् * आनन्द मान्दै तिनी ॥
शुक्राचार्य कहाँ ति देवव्रतले * नीती पढेथे सब ।
आए पढन गुरू बृहस्पति कहाँ * शास्त्रा सारा तब॥९९॥

पाए योग्य गुरू पछी परशुराम् * —लाई धनुर्वेदको ।
इच्छा पूर्ण भयो सुपुत्र हुनगै * सम्पूर्ण ती भूपको ॥
गर्थे राज्य तिनी प्रजा सुजनको * इच्छा पुऱ्याई कन ।
डुल्दै ती यमुना नदी तट पुगे * सानन्द कोही दिन ॥२००
देखी सत्यवती निषाद दुहिता * राम्री त्यहाँ भूपले ।
सोधे मोह भई बताउ सुमुखी * को हौ भनी प्रेमले ॥
बोलिन् सत्यवती म दास-दुहिता * हूँ हीन हे भूपती !
मान्छे तार्दछु नाउबाट म सदा * धर्मार्थ हे सद्मति ! ॥१॥
येती बात सुनेर, दास-पतिको * राजा घरैमा गए ।
छोरी देउ विवाह गर्दछु भनी * तत्काल भन्दा भए ॥
राजाको सुनि बात दास-पतिले * बिन्ती गरे राम्ररी ।
छोरीकै सुत भूप बन्दछ भने * दिन्छु सुता सुन्दरी ॥२॥
फर्के भूप सुनी असम्भव कुरा * सार्है दुखाई मन ।
देखी चिन्तित धेर देवव्रतले * आफ्ना पिताजी ~न ॥
सोधे, ज्ञात भएर कारण पुगे * तत्काल देवव्रत ।
छोरीको तिमीले विवाह गरिद्यौ * मेरा पिताजी-सित ॥३॥
पैह्लेको निज प्रश्न दास-पतिले * फेरी सुनाई दिए ।
आफ्नू सत्य कबोल देवव्रतले * तत्काल भन्दा भए ॥
गर्ने छैन विवाह राज्य पनि यो * भोग्दीन कैह्ले पनि ।
तिम्रै नाति हुनेछ भूप, रहने * छु ब्रह्मचारी बनी ॥४॥
डर्लाग्दो सुनि यो कबोल खुशिले * तत्काल छोरी दिए ।
बाबूलाई लगेर दास—दुहिता * आनन्दले सुम्पिए ॥
तिन्को सत्य कबोलले गरि पछी * श्रीभीष्म नाऊँ भयो ।
पाई इच्छित सुन्दरी नृपतिको * सन्ताप सारा गयो ॥५

छोरालाइ दिए तुरुन्त नृपले * आशीष धेरै थरी।
इच्छामृत्यु हुनेछ शत्रु रणमा * जित्छौ लड़ाइँ गरी॥
गङ्गाका सुतको चल्यो पछि ठुलो * गाङ्गेय नाऊँ पनि।
गर्थे आदर बन्धुको, स्वजनको * नीती पुऱ्याई तिनी॥६॥
छोरा सत्यवती प्रियातिर भए * श्री शान्तनूका दुई।
चित्राङ्गद् र विचित्रवीर्य बलिया * सत्कीर्ति वाला भई॥
केही काल बित्यो र शान्तनु गए * त्यो देह त्यागी जब।
चित्राङ्गदूकन राज्य सुम्पनुभयो * भीष्मजीले तब॥७॥
ज्ञानीको, मुनिको, प्रजा सुजनको * अत्यन्त हेलाँ गरी।
गद्दीमा बसि झन् अनीति खल झैं * गर्दै गए बेसरी
चित्रांगद् भनि नामको अति बली * गन्धर्व योटा थियो।
त्यस्ले युद्ध गरेर रोकि पथमा * तिन्लाइ मारीदियो॥८॥
पाए राज्य विचित्रवीर्य वयमा * साने भए तापनि।
रक्षा भीष्मजिले गरे जतनले * कर्तव्य हो यै भनी॥
छोरी तीन ति काशिराज नृपका * अत्यन्त राम्रा थिए।
यिन्को गर्छु सँगै स्वयंवर भनी * निम्ता पठाई दिए॥९॥
भाईको म विवाह गर्दछु भनी * गाङ्गेय त्याहाँ गए।
कन्या तीन हरेर आफ्नु रथमा * तत्काल राख्ता भए॥
आए रोक्न अगाडि शाल्व प्रभृती* जो-जो त्यहाँ भूपती।
शेखी झारि समस्त भूपहरुको * पारे ठुलो दुर्गति॥१०॥
ल्याएथे घरमा जितेर रणमा * ती तीन कन्या जब।
अम्बा जेठि थिइन् उनै अघिसरी * बिन्ति गरिन् यो तब॥
मेरो ता अघि शाल्वका संग बिहा* गर्ने प्रतिज्ञा थियो।
त्यस्तो सत्य कबोल यो बलजफत*-मा व्यर्थ जानेभयो॥११॥

यस्तो बात सुनी बिदा गरिदिए * तिन्लाई जाऊ भनी ।
बाँकी शेष ति अम्बिका र बहिनी * अम्बालिकाजी पनि ॥
भाईका संगमा बिहा गरिदिए * सन्तानका खातिर ।
तिन्को मृत्यु छिटै भयो क्षय भई * लागेर भोगैतिर ॥१२॥

धृतराष्ट्र र पाण्डवहरूको उत्पत्ति

येती कथा सुनिसकीकन भूपतीले ।
सोधे प्रसन्न भइ फेरि यथा क्रमैले ॥
पाऊँ म सुन्न कुरु-वंश भए कसोरी ।
मानेन चित्त सुनुँ भन्दछ फेरि-फेरी ॥१३॥

वैशम्पायनले भने नरपते ! * श्री कृष्णको सम्झना ।
गर्दै सुन्नुहवस् प्रसन्न मनले * पुग्ला सबै कामना ॥
दोटै पुत्र मरेर सत्यवतिले * सन्ताप मान्दी भइन् ।
आफ्नू वंश चलाउनाकन स्वयं * गांगेयलाई भनिन्॥१४॥
हो यो योग्य कुरा प्रजा स्वजनको * औ शास्त्रले सम्मत ।
बाबू ! राज्य चलाउने तिमि विना * देख्तीनँ अर्को म त ॥
हे बाबू ! तिमिले बुहारिहरुमा * सन्तान पैदा गर ।
तिम्रा भाइ मरेर वंश सहजै * डुब्ने भयो सुन्दर ॥१५॥
ज्ञानी, सत्यप्रतिज्ञ श्रेष्ठ तिमि झैं * क्वै छैन अर्को भनी ।
आपद्धर्म बुझेर राज्य गर यो * आज्ञा छ मेरो पनि ॥
माताको सुनि बात उत्तर दिए * श्री भीष्मले सादर ।
हे माता ! जति भन्नुभो हजुरले * साँचो कुरा हो तर ॥१६॥
मैले सत्य कबोल त्यागिदनँ ठुलो * साम्राज्य पाए पनि ।
ब्रह्मा, इन्द्र र शम्भुको पद पनी * त्यागनेछु तुच्छै गनी ॥

त्यागनेछैन कबोल सत्य कहिले * यो प्राण त्यागछु बरु ।
यो बाहेक सबै म मान्छु खुशिले * जे भन्नुहोला अरू ॥१७॥
लागिन् भन्न बुझाइ सत्यवतिले * श्री भीष्मलाई त्यहाँ ।
आएथे जसरी पराशर अघी * गङ्गा किनारा महाँ ॥
जन्मी व्यासजीले म आउँछु भने * डाक्नू भएका घरी ।
दिन्छौ सम्मति डाक्नको यदि तिमि * डाक्छु म येही घरी ॥१८
माताको सुनि बात उत्तर दिए * आज्ञा भयो सुन्दर ।
डाक्नूहोस् मुनि व्यासलाई कुलको * रक्षार्थं लौ सादर ॥
इच्छा भीष्मजिको बुझीकन गरिन् * श्री व्यासको सम्झना ।
पाए थाह तुरुन्त व्यास मुनिले * गर्थे जहाँ साधना ॥१९॥
आई झट्ट गरे प्रणाम जननी *-लाई र सोधे पनी ।
माता ! कष्ट परेर के हजुरले * डाक्नू भएको भनी ॥
छोराको सुनि बात सत्यवतिजी * बोलिन् बुझाई कन ।
आँट यो राज्य चलाउने सुत बिना * यो वंश नै नाशिन ॥२०॥
मेरो भूपतिको प्रजा र कुलको * रक्षार्थं नै सादर ।
हे बाबू ! यि बुहारिबाट तिमिले * सन्तान पैदा गर ॥
माताको सुनि बिन्ती खिन्न मनले * स्वीकार गर्दा भए ।
रात्रीमा म हुनेछु हाजिर भनी * तत्काल ती गै गए ॥२१॥
आपद्धर्मं र योग्य हो भनी सबै * नीती सुनाई कन ।
राजी पारि लिइन् ति सत्यवतिले * आफ्ना बुहारी कन ॥
चिल्लो देहभरी घसेर रतिको * इच्छा नराखी कन ।
पौंचे व्यास नियोग गर्न श्रुतिको * आज्ञा गरी पाल्न ॥२२॥

लामू जटा अधिक दाह्री जुँघा छ कैलो ।
देख्दै भयङ्कर स्वरूप लँगोटि मैलो ॥

देखिन् खडा जब मुनीकन सामु माहाँ।
चिम्लिन् दुवै नयन धेर डराइ त्याहाँ ॥२३॥
फर्कें नियोग सकि व्यास मुनी तुरुन्त।
जन्मान्ध जन्मन गए धृतराष्ट्र पुत्र ॥
यो राज्य गर्न सुत योग्य भएन फेरी।
डाकिन् ति व्यासकन नै नगरेर ढेरी ॥२५॥

आई व्यास गरे नियोग अघि झैं * अर्की बुहारी महाँ।
जाँदा सामु भएर श्वेत रूपकी * सान्हे डराई त्यहाँ ॥
छोरा श्वेत स्वरूपका हुन गए * श्री पाण्डु पैदा जब।
डाकिन् फेरि सुपुत्र खातिर त्यहाँ * श्री व्यासलाई तब ॥२५॥
पैह्लेको डर सम्झि आफु नगई * ती अम्बिकाले पनि।
दासीलाइ गरी सिंगार मुनिको * सामू पठाइन् अनि ॥
राम्रो चाकरिले प्रसन्न मुनिजी * -लाई गराई जब।
गर्भाधान गरी दिए वर पनि * दासत्व छुट्ने तब ॥२६॥
मातालाइ सबै भनी उऋण भै * श्री व्यास फर्की गए।
ज्ञानी उत्तम पुत्र श्री विदुरजी * धर्मांश ले जन्मिए ॥
राजा पाण्डु भए पनी सकल काम * श्री भीष्मले गर्दथे।
नीतिपूर्वक राज्य शासन गरी * रैती खुशी पार्दथे ॥ २७ ॥
गन्धारी शुभ लक्षणा सुबलकी * छोरी थिइन् सुन्दरी।
तिनको श्री धृतराष्ट्रका सँग बिहा * गर्दा भए त्यै घरी ॥
हे राजन् ! यदुवंशका नरपती ! * श्री शूरसेन् जो थिए।
तिनकी पुत्रि थिइन् पृथा गुणवती * ती पाल्न माग्दा दिए॥२८
कुन्तीभोजकहाँ सदा अतिथिको * सत्कार गर्नू संनी।
मुग्पे काम पृथा कुमारिकन त्यो * सानन्द गर्थिन् तिनी ॥

दुर्वासा ऋषिजी कुनै दिन पुगे * ती भूपतीका घर ।
तिन्को चाकरि ती पृथा सुमुखिले * गर्दी भइन् सुन्दर ॥२९॥
यौटा मन्त्र दिए खुशी भइ पृथा * -लाई मुनीले त्यहाँ ॥
डाक्नेछयौ जुन देवताकन उनै * हाजीर होलान् भनी ।
यो आशीष दिई गए मुनि जसै * गर्छु परीक्षा भनी ।
सम्झिन् सूर्यजिलाई. मन्त्र बलले * तत्काल आए तिनी ॥३०॥
डाक्यौ हे सुमुखी ! मलाइ किन हो* तिन्ले भनेथे जब ।
बोलिन् यो अपराध जो हुनगयो * माफी दिनूहोस् अब ॥
आज्ञा भो अनि सूर्यले गर तिमी * संभोग हे सुन्दरी ! ।
छोरो एक हुनेछ श्रेष्ठ भवमा * मेरा कृपाले गरी ॥३१॥

कौमार्य रक्षा पनि हुन्छ तिम्रो ।
इच्छा पुऱ्याऊ अब झट्ट मेरो ॥
येती भनी भोग गरे तुरन्त ।
पैदा भए कर्ण भनी सुपुत्र ॥ ३२ ॥

फर्की सूर्य गएपछि मनमहाँ * चिन्ता पऱ्यो कुन्तिको ।
त्यो छोरो जलमा बगाउँदि भइन् * रक्षार्थ दुष्कर्मको ॥
पाएथे पछि सूतपुत्र अधिरथ् * -जीले उही बालक ।
राधा पत्नि थिइन् उनै अधिसरी * पाल्दी भइन् बालक ॥३३
इच्छा पूर्ण गराइ दान तिनिले * गर्दा पछी लोकमा ।
दानी कर्ण भनेर ख्याति हुनगो * सम्पूर्ण संसारमा ॥
कुन्तीको पछि जुन् स्वयम्वर भयो* राजा अनेकौं गए ।
पैऱ्हाइन् जयमाल पाण्डुकन नै * राजा अरू फर्किए ॥३४॥
कुन्तीको सँगमा विवाह हुनगो * श्री पाण्डुजीको जब ।
सारा रैति रिझाइ राज्य गरि ती * बस्ता भएथे तब ॥

दोस्रो गर्छु विवाह लौ अब भनी * श्री पाण्डुका खातिर ।
मागे मद्र नरेशकी ति दुहिता * श्री भीष्मले सादर ॥३५॥
उन्ले खुशि भई बिहा गरिदिए * माद्री र श्री पाण्डुको ।
लागे गर्न विहार पाण्डु खुशिले * स्वामी बनी राज्यको ॥
केही कालपछी ति दिग्विजयका * खातीरमा निस्किए ।
जो राजा रणमा जिते ति सबले * सर्वस्व सुम्पी दिए ॥३६॥
पाण्डुले धृतराष्ट्रलाइ धन त्यो * सारा गरे अर्पण ।
धेरै श्री धृतराष्ट्रले गरि लिए * यज्ञादि सोही क्षण ॥
कीर्ति खूब ठूलो भयो पृथिवीमा * श्री पाण्डुको त्यो घरी ।
गर्थे दान र धर्म कर्म कुलको * रक्षार्थ धेरै थरी ॥३७॥
कन्या देवककी गईकन स्वयं * मागेर श्री भीष्मले ।
ल्याई गर्नुभयो बिहा विदुरको * अत्यन्त नै स्नेहले ॥
केही कालपछी गए वनमहाँ * श्री पाण्डु पत्नी लिई ।
लागे मार्न अनेक जन्तु वनका * ठूलो शिकारी भई ॥३८॥
सोही जंगलमा ठूलो मृग बनी * पत्नी लिई साथमा ।
डुल्थे क्वै ऋषिपुत्र भोग-रत भै * अत्यन्त आनन्दमा ॥
हाने त्यै मृगलाई तीक्ष्ण शरले * अज्ञानमा पाण्डुले ।
लागी त्यो शर चोट खप्न नसकी * ती आत्तिए कष्टले ॥३९
लागे भन्न रिसाइ हे नरपते ! * हूँ तुच्छ जन्तू तर ।
मार्दैनन् तिमि झैं सुविज्ञ नृपले * देखेर कामातुर ॥
तस्मात् श्राप म दिन्छु जुन् बखतमा * गर्छौ तिमीले रति ।
मर्नेछौ जसरी म मर्छु अहिले * उस्तै भई दुर्गति ॥४०॥
यस्तो श्राप सुनेर खिन्न मनले * श्री पाण्डुजी फर्किए ।
पाए श्राप जसो गरेर वनमा * सम्पूर्ण म दा भए ॥

यो संवाद सुनेर बन्धु घरमा * चिन्ता परी आत्तिए।
हो यो दैवगती भनेर मनमा * सन्तोष मान्दा भए॥४१॥

एती कथा सुनिसकीकन भूपतीले।
विस्तारपूर्वक म सुन्छु भनी कमैले।
सोधे बताउनुहवस् मुनिजी! मलाई।
छोराहरू कति भए धृतराष्ट्रलाई॥४२॥

वैशम्पायनले भने नरपते! * श्री व्यास कोही दिन।
पाल्नुभो धृतराष्ट्रका घरमहाँ * गर्छु भनी भोजन॥
गान्धारी सतिले गरिन् खुशि भई * आतिथ्य औ चाकरी।
बोले व्यास खुशी भएर वरदान् * लौ माग हे सुन्दरी! ॥४३
मागिन् स्वामि समानका सयजना * छोरा तिनीले जब।
इच्छा पूर्ण हुनेछ जान्छु म भनी * श्री व्यास फर्के तब॥
जन्मेनन् सुत गर्भ धारण गरी * चौबीस मैन्हा बित्यो।
डल्लो एक फलाम झैं अति कड़ा * आघातले जन्मियो॥४४
आँटिन् फ्याक्न रिसाइ पिण्ड तिनिले* श्री व्यास पुग्नूभयो।
रोकी झट्ट घड़ा मगाइ घृतका * लौ राख भन्नूभयो।
राखीए सयमाथि एक बढ़ता * यौटा घड़ामा जल।
चोभी त्यै जलभित्र पिण्ड मुनिले* पारे स्वयं निर्मल॥४५
लागे काट्न स्वयं बनाइ टुकुरा * त्यो पिण्डको ती मुनि॥
छोरीको पनि कल्पना गरिरहिन् * यौटी म पाऊँ भनी॥
तिन्को भाव बुझेर एक बढ़ता * टुक्रा मुनीले गरे।
रक्षा गर्नु भनी सबै घटमहाँ * प्रत्येक टुक्रा धरे॥४६॥
एती काम सकेर व्यास खुशि भै * आफ्नो कुटीमा गए।
मैह्ना चौबिसका पछी सय जना * छोराहरू जन्मिए॥

छोरी एक भइन् कनिष्ठ सबमा * ती दुःशला नामकी ।
राखेथे धृतराष्ट्रले पछि स्वयं * छोरी कुनै वैश्यकी ॥४७
छोरा एक युयुत्सु नामक भए * ती वैश्य - पुत्रीतिर ।
दुर्योधन् जब जन्मियो तब भयो * उत्पात चारैतिर ॥
रुन्थे श्वान र श्याल कुक्कुरहरू * चिच्याउँथे झन् खर ।
पानी खूब परी हुरी अति चली * ढाक्यो चतुर्दिक्तिर ॥४८
आए भीष्म तथा गुणी विदुरले * देखेर त्यस्तो स्थिति ।
भन्छन् श्री धृतराष्ट्रलाई मनले * जाने सुनेको जति ॥
राजन् ! यो सुत जन्मदा नगरमा* उत्पात बर्ता भयो ।
त्याग्नू पर्दछ पुत्र यो न त कुनै * संहार गर्नेछ यो ॥४९॥
नीति यै रितका अरू पनि भने * धेरै बुझाई तर ।
मानेनन् धृतराष्ट्रले, सुत यसै * को त्याग्न सक्ने छ र ?
राजन् ! पाण्डु विरक्त भै वनमहाँ * गछ्र्न् तपस्या भनी ।
वानप्रस्थ लिएर अग्नि सँगमा * सानन्द निस्के तिनी ॥५०
पोंची ती शतशृङ्ग पर्वत महाँ * लागे तपस्यातिर ।
माद्री कुन्ति दुवै बसेर नृपको * गर्थे सदा आदर ॥
केही कालपछी भने नृपतिले * डाकेर कुन्ती कन ।
क्यै सन्ता न भएन पितृहरूको * तिर्ने कसोरी ऋण ॥५१॥

डाकी सुविज्ञ द्विज कोहि प्रिये ! तिमीले ।
जन्माइ पुत्र कुलको गर त्राण ऐले ॥
नीति र धर्म सब खूब विचारि भन्छ ।
लाग्दैन पाप पनि केही हुकूम दिन्छु ॥ ५२ ॥

स्वामीको सुनि यो कुरा मनमनै * सन्तोष मानी कन ।
कुन्तीले विनती गरिन् कर दुवै * जोरेर सोही क्षण ॥

हो यो पाप अधर्म निन्द्य पनि हो * स्त्री जातिका खातिर ।
आज्ञा मान्नु हजूरको पनि त हो * कर्तव्य मेरो तर ॥५३॥
यौटा यत्न सुनाउँछु हजुरले * मान्नू भए त्यो कुरा ।
पाईं सन्तति योग्य हामिहरूको * होला कि इच्छा पुरा ॥
दुर्वासा ऋषिबाट प्राप्त वरले * इच्छा गरेका घरी ।
सक्छु डाक्न तुरुन्त जस्कन पनी * तिनूको कृपाले गरी ॥५४
आज्ञाहोस् कुन देवताकन गरूँ * स्वामी ! म आवाहन ।
कुन्तीको सुति बात पाण्डु नृपती * बोले खुशी भैकन ॥
शुभ्रे ! डाक तुरुन्त 'धर्मकन' लौ * सत्पुत्रका खातिर ।
रक्षा गर्न स्वधर्मको र कुलको * होऊ तिमी तत्पर ॥५५॥
आज्ञाले पतिको गरिन् सुमुखिले * आह्वान श्री धर्मको ।
आए धर्म तुरुन्त मन्त्र बलले * सामू महाँ कुन्तीको ॥
तिनूको भाव बुझी समागम गरी * फर्केर जाँदा भए ।
मैन्हा पूर्ण भई युधिष्ठिर भनी * छोरा त्यहीं जन्मिए ॥५६
होला बालक सत्यनिष्ठ भवमा * कीर्ती फिंजाई लिने ।
इच्छापूर्ण हुनेछ यो नृपतिले * आकाश-वाणी सुने ॥
राजा खूशि भई भने गर पृथा * आह्वान श्री वायुको ।
होला पुत्र अवश्य खूब बलियो * रक्षार्थ यो वंशको ॥५७॥
आज्ञाले पतिको गरिन् सुमुखिले * तत्काल आवाहन ।
आई वायु गरी समागम गए * सानन्द फर्की कन ॥
मैन्हा पूर्ण भएर भीम बलिया * पैदा भएका घरी ।
आयो बाघ ठूलो भयङ्कर त्यहाँ * मार्ने इरादा गरी ॥५८
मारे त्यस्कन पाण्डुले तर पृथा * उठ्ता डराई कन ।
काखाबाट लडेर भीम बलिया * पच्छारिए त्यै क्षण ॥

तिन्को चोट परेर चूर्ण हुनगो * यौटा ठुलो पत्थर ।
राजा रानि परेर छक्क शिशुको * रक्षा गरे सादर ॥५९॥
होला यो बलवान पुत्र भवमा * आकाशवाणी भयो ।
त्यो सुन्दाहुँदि कुन्तिको, नृपतिको * सन्ताप सारा गयो ।
अर्को एक सुपुत्रको पनि भयो * इच्छा ति राजाकन ।
सम्झी झट्ट महेन्द्रलाई तपको * बाँधीलिए आसन ॥६०॥
मैन्हा बाऱ्ह सहेर कष्ट नृपले * गर्दा तपस्या त्यहाँ ।
आई इन्द्र स्वयं भने नरपते ! * इच्छा छ के मन्महाँ ॥
यौटा पुत्र हजूर झैं दिनुहवस् * तिन्ले भनेथे जब ।
बोले इन्द्र हुनेछ पुत्र तिमिले * इच्छा गरे झैं अब ॥६१॥
कुन्तीले पनि त्यो कुरा सुनि गरिन्* तत्काल आवाहन ।
आई इन्द्र गरे समागम अनी * पैदा भए अर्जुन ॥
तिन्को जन्म हुँदा बजे थरिथरी * बाजाहरू स्वर्गमा ।
वर्षा पुष्प, अबीरको पनि गरे * -थे देवले हर्षमा ॥६२॥
वाणी मेघ समानको गरि त्यहाँ * आकाशवाणी भयो ।
तेजस्वी शिव झैं पराक्रममहाँ * होला पछी श्रेष्ठ यो ॥
कीर्ती वृद्धि गराउनेछ कुलको * यो पुत्रले भूपति ।
गर्ला राज्य समस्त पृथ्विभरिका * राजा र शत्रु जिती ॥६३॥
बस्थे जो नृपका कुटी वरिपरी * ज्ञानी तपस्वी मुनि ।
वाणी अमृत झैं सुनी खुशि भए * राजा र रानी पनि ॥
बोले भूपतिले दया गर पृथा * माद्री भइन् दुःखिनी ।
स्वामीको बुझि भाव स्पष्ट मनको * बोल्दी भइन् भामिनी ॥६४
इच्छा पूर्ण हुनेछ मन्त्र-बलमा * विश्वास राखी कन ।
हे माद्री ! गर देवताकन कुनै * तत्काल आवाहन ॥

माद्रीले सुनि बात अश्विनिकुमार् * -लाई गरिन् सम्झना ।
जम्ल्याहा सुत जन्मिए सुमुखिको* त्यस्तै थियो कामना ॥६५
कान्छाको सहदेव औ नकुल नाम् * राख्दा भए ज्येष्ठको ।
पाईं ती दुइ पुत्र ताप मनको * सारा गयो माद्रिको ॥
भेजेका वसुदेवले थरि-थरि * सामग्रिका साथमा ।
आई कश्यपले गरे क्रमसितै * संस्कार त्यै स्थानमा ॥७६
बस्थे कौरव हस्तिनापुर महाँ * सानन्द राजा बनी ।
राजा पाण्डु भने बसी वनमहाँ * गर्थे तपस्या पनि ॥
उत्पत्ती कुरुको र पाण्डु-कुलको * संक्षेपमा वर्णन ॥
वैशम्पायनले गरे नृपतिले * सुन्थे खुशी भैकन ॥७७॥

राजा पाण्डुको मृत्यु र पाण्डहरूको प्रस्थान—

केही काल बित्यो यसै तरहले * हे भूप ! कोही दिन ।
राजा पाण्डु बसे गरी स्फटिकको * ठूलो शिला आसन ।
चारैतर्फ थियो बसन्त ऋतुको * राम्रो छटा त्यो घरी ।
माद्री भूपतिको बसी नगिचमा * गर्दै थिइन् चाकरी ॥७८॥
बिर्से श्राप ति विप्रको अटल झन् * आफ्नू हुने दुर्गति ।
माद्रीका सँग भोगमा रत हुना- * साथै मरे भूपति ॥
लागे गर्न विलाप पत्नि दुइले * रोई कराई कन ।
सम्झाई कुटिका छिमेकिहरूले * क्यै शान्त पारे मन ॥७९॥
कुन्तीलाइ गरी प्रणाम करमा * सुम्पेर छोरा दुई ।
माद्री भूपतिका सँगै सति गइन् * अत्यन्त दुःखी भई ॥
सुन्दा मृत्यु ति पाण्डुको ऋषि-मुनि * सन्तप्त सारा थिए ।
ज्ञानी कश्यपले क्रिया शिशुहरू * द्वारा गराई दिए ॥८०॥

कुन्तीलाइ र पाँच पाण्डव सबै * -लाई लिई साथमा ।
सुम्पे श्री धृतराष्ट्रजी, विदुरजी * श्री भीष्मका हातमा ॥
रानी सत्यवती बुहारिहरु लो * वन्मा तपस्या गरी ।
पाइन् मोक्ष र स्वर्गको सुख ठुलो * तिन्ले मरेका घरी ॥८१॥
माद्रीको अनि पाण्डुको गरिदिए * श्राद्धादि राम्रो गरी ।
रोएथे धृतराष्ट्र औ विदुरजी * श्री भीष्मजी बेसरी ॥
आफ्ना बान्धव हस्तिनापुर भरी * जो-जो थिए ती पनि ।
रोए भूपतिको चरित्र अधिको * सम्झेर दुःखी बनी ॥८२॥

भीमलाई विष ख्वाउनू —

राजन् क्यै ! दिनमा स्वयं पुरिनगो * घाऊ ठुलो कष्टको ।
बिर्से शोक सबै अली-अली गरी * श्री पाण्डुका मृत्युको ॥
लागे बढ्न समस्त बालकहरू * श्री चन्द्रमा झैं गरी ।
खेल्थे आपुसमा मिलीकन सबै * आनन्दले राम्ररी ॥८३॥
छोरा श्री धृतराष्ट्रका सय थिए * तिलाइ श्री भीमले ।
एक्लै खेलमहाँ लछारि सहजै * हिर्काउँथे बेगले ॥
जन्मे भीम तथा सुयोधन दुवै * हे भूप ! एकै दिन ।
देखिन्थे ति दुवै समान बलका * जस्ता त्यसै कारण॥८४॥
खेल्दामा पनि चोट पाइ भिमको * दुष्टात्म दुर्योधन ।
लागे गर्न विचार पाण्डवहरू *-लाई निभाई दिन ॥
सल्लाहा सय भाइले गरिसकी * गङ्गा किनारा महाँ ।
चाहीने सब वस्तु राखि घर क्वै * तैयार पारी त्यहाँ ॥८५
डाकी पाण्डवलाइ दिव्य रथमा * राखेर दुर्योधन ।
गर्नू पर्छ विहार दिव्य जलमा * भन्ने बुझाई कन ॥

पौंचाए रथलाई वायु गतिले * हाँकेर तिनूले जब ।
लागे गर्न विहार स्वच्छ जलमा * जो-जो गएथे सब ॥८६॥
केही बेरपछी सबै थकित भै * आएर प्रासादमा ।
लागे भोजन गर्न ती थरि-थरी * मिष्ठान्न आनन्दमा ॥
मार्ने निश्चय राखि तीक्ष्ण विषका* सामग्रि जो-जो थिए ।
त्यो दुर्योधनले लगीकन स्वयं * ती भीमलाई दिए ॥८७॥



भीमलाई विष दिनु

खाएथे जब कालकूट विष त्यो * थाहै नपाई कन ।
लागी नींद थकाइ बेसरि सुते * ती भीम सोही क्षण ॥
मौका पाइ गएर दुष्टहरूले * बाँधेर राम्रो गरी ।
गङ्गाका जलमा लगेर रिसले * फ्याँकीदिए बेसरी ॥८८॥
सोधेथे जब श्री युधिष्ठिरजिले * केही नजान्ने बनी ।
बोले खोज्नु वृथा छ भीम घरमा * पैल्हे पुगेहुन् भनी ॥८९॥

ती सारा रथमा बसेर पुरमा * तत्काल फिर्दा भए।
कुन्तीलाइ तथा गुणी विदुरजी * -लाई सुध्याई लिए॥
सारा बात सुनी सकी विदुरले * मन्मा गरी निश्चय।
बोले दिक्क नमानि केहि, घरमै * बस्नू भई निर्भय॥९०॥
कोही छैन समर्थ मार्न बलवान् * ती भीमलाई कहीं।
यस्मा कारण क्यै अवश्य छ; स्वयं* ती आईपुग्छन् यहीं॥
व्यर्थैमा झगरा बढाउन कुनै * गर्दै नगर्नू कुरा।
गर्नू पर्दछ हामिले सहन ती * छन् दुष्टतामा पुरा॥९१
यस्तो अर्ति दिई सकी विदुरजी * फर्की गएथे जब।
केही बेर गरेर खोजनि बसे * चारै जना पाण्डव॥
पानीमा डुबि नागलोक सहजै * ती भीम पुग्दा भए।
तिन्को निश्चल देहले थिचिइँदा * नागादि क्यै मारिए॥९२
यस्मा क्रोध गरेर सर्पहरुले * तिन्लाई टोके जब।
पैल्हेको विष वेग भीम विरको * सारा गएथ्यो तब॥
आई चेत समस्त बन्धन जती * बल्ले चुँडाली दिए।
धेरै सर्प पनी निमोठि रिसले * तत्काल मार्दा भए॥९३
यो संवाद लिएर वासुकिकहाँ * बाँकी बचेका गए।
देखी वासुकिले जनाइ करुणा * सानन्द आज्ञा दिए॥
नातीका पनि नाति बालक यिनै * हुन् शूरसेन् भूपका।
हुन् दौहित्र यि नाग आर्यकजिका * सत्पुत्र हुन् पाण्डुका॥९४
यौटैको रसले पनी बल हुने * हज्जार हात्ती जति।
अमृत् झैं रसकुण्डको छ दिनु त्यो * यी खान सक्छन् जति॥
यो आज्ञा सुनि दूतले लगिदिए * त्यो कुण्डका पासमा।
खाएथे रस आठ कुण्डहरुको * तत्काल एक् सासमा॥९५

आएथ्यो बल आठ् हजार गजको * श्री भीमका देहमा
निद्रा लागि सुते ति आठ दिन ता * नागादिकै लोकमा ॥
जागेथे जब भीम वासुकिजिले * सत्कार फेरी गरे ।
त्याई भोजनका निमित्त बढिया * सामग्रि सामू धरे ॥९६॥

खाई सकेपछि खुशी भइ वासुकीले ।
चाँडै पुऱ्याउनु भने चर डाकि पैल्हे ॥
श्रीहस्तिनापुर लगीकन भीमलाई ।
छाडेर दूत फिरिगो मनमा रमाई ॥

आमालाइ गरे प्रणाम पहिले * श्री भीम पौंचीकन ।
पाई भाइ युधिष्ठिरादि सबको * खुशी भएथ्यो मन ॥
त्यो दुर्योधन दुष्टको कुमतिको * इच्छा सुनाई कन ।
आमाका सँग नागका नगरको * सारा गरे वर्णन ॥९८॥
त्यो संवाद सुनी सबै खुशि भए * कुन्ती तथा पाण्डव ।
फेरी मार्न भनी कड़ा विषहरू * झुक्क्याइ खवाए जब ॥
त्यो सारा विषलाई भीम विरले * खाई पचाई दिए ।
तिन्ले मार्न गरे प्रयास जति त्यो * सारा वृथा पार्दिए ॥९९॥
मन्त्री भाइ सबै मिलीकन तिनी * सल्लाह गर्थे जति ।
त्यो सारा बुझि भीमले सहजमै * पार्थे सदा दुर्गति ॥
अर्ती पाइ युयुत्सुको, विदुरको * मौका विचारी कन ।
बस्थे पाण्डवले सही दुःख जति * दिन्थे ति दुर्योधन ॥३००

कृपाचार्य र द्रोणको उत्पत्ति —कौरव पाण्डवको शिक्षा

हे राजन् ! कुरुराजका सुत तथा * पाँचै जना पाण्डव ।
खेल्थे खेलहरू अनेक थरिका * ठूला भए क्यौं जब ॥

सारा शास्त्र पढाउने कृप थिए * तिन्का गुरूजी अनि ।
दिन्थे द्रोण गुरु सुशास्त्रहरूको * शिक्षा दयालु बनी ॥१॥
श्री जन्मेजय भूपले सुनि कथा * शङ्का उठाई कन ।
केही बेर गरी विचार सहसा * एकाग्र पारी मन ॥
वैशम्पायनलाइ रोकि बिचमैं * सोधे कृपाचार्यको
उत्पत्ति पहिले बताउनुहवस् * इच्छा भयो सुन्नको ॥२॥
राजाको सुनि प्रश्न यो खुशि भई * तत्काल बोले मुनि ।
ज्ञानी गौतमका थिए सुत कुनै * यौटा शरद्वान् भनी ॥
त्यागी पन्थ ति वेदको, हुन गए * ज्ञाता धनुर्वेदका ॥
गर्थे ती तप उग्र, जङ्गलमहाँ * खानी थिए ज्ञानका ॥३॥
तिन्को त्यो तपदेखि इन्द्र मनमा * लागे निकै आत्तिन ।
भेजे जानपदी भनेर गणिका *-लाई बुझाई कन ॥
पौंची आश्रममा सुरम्य मुनिको * त्यो अप्सरा सुन्दरी ।
देख्दैमा द्विजको प्रसन्न मन भो * हेरी रहे बेसरी ॥३०४॥
रोकेथे मनलाई ज्ञान बलले * तिन्ले सकेको जति ।
तिन्को वीर्यस्खलित भएछ सहजे * थाहै नपाई रति ॥
त्यो जानेपछि दिक्क मानि द्विजले * शस्त्रास्त्र फ्याँकी दिए ।
त्यागी आश्रम त्यो नबोलि मुखले * तत्काल जाँदा भए ॥५॥
बल्दो वीर्य बगेर बाँडिन गयो * आफैं दुई भागमा ।
पुत्री एक सुपुत्र जन्मन गए * त्यस्बाट त्यै स्थानमा ।
दैवेच्छा नृप शन्तनू पुगि त्यहीं * देखे दुवै बालक ।
आयो क्यै करुणा अनि खुशि भई * राजा बने रक्षक ॥६॥
पालेथे दरबारमा लगि दुवै * -लाई कृपापूर्वक ।
राजालाई चिन्हे बढेपछि दुवै * -ले आफ्नु संरक्षक ॥

राखे नाम कृपी तथा कृप भनी * ती भूपतीले जब ।
त्यो जाने द्विजले प्रभाव तपको * ठूलो हुनाले सब ॥७॥
विद्या आफ्नु गई लुकेर कृपजी * -लाई सिकाई दिए ।
केही काल पछी तिनै कृपजिले * श्री भीष्मकाहाँ गई ।
विद्या ती कुरु पाण्डवादि विरमा * बाँडे दयालु भई ॥८॥
शिक्षाले कृपको भए सकल ती * सानन्द पारङ्गत ।
द्रोणाचार्यजिलाई डाक्न दिनुभो * श्री भीष्मले संमत ॥
आए द्रोण अनी सबै शिशुहरू * शिक्षार्थ सुम्पीदिए ।
पाई योग्य गुरू धनुर्धर तथा * शास्त्रज्ञ सारा भए ॥९॥
सोधे भूपतिले बताउनुहवस् * हुन् द्रोण कस्का सुत ।
पाए ज्ञान कहाँ कसो गरि त्यहाँ * आए ति सुन्छु म त ॥
वैशम्पायनले भने नरपते ! * सुन्नू हवस् सादर ।
भारद्वाज मुनी थिए नियमका * पक्का तथा कट्टर ॥१०
गङ्गास्नान गरौं भनीकन गए * सानन्द कोही दिन ।
देखेथे नदी-तीरमा उभि लुगा * फेर्नै घृताची कन ॥
त्यस्को रूप अपूर्व श्रेष्ठ मुनिले * हेरी रहे बेसरी ।
आफ्नू चित्त सम्हालि रोक्न नसकी * मोहित भए त्यै घरी॥११
तिन्को वीर्य पतन् भयो कलशमा * ल्याएर राखी दिए ।
सोही काल पुगेर द्रोण तिनका * सत्पुत्र पैदा भए ॥
छोरो केहि ठूलो भएपछि दिए * शिक्षा अनेकौं थरी ।
आफ्नू काल पुगेर स्वर्गपुरिमा * जाँदा भए ती मरी॥१२॥
त्यै वेला सुत एक श्री पृषदका * पैदा भएका थिए ।
विद्याभ्यास गरी गएपछि भए * पाञ्चालका भूपती ।
बस्थे राजि गराई रैतिहरु ती * आनन्द मान्दै अति॥१३॥

कीर्ति द्रोणजिले सुने परशुराम् * -जीको छ ठूलो भनी ।
उन्लाई गुरु थाप्न आश्रममहाँ * खोज्दै पुगेथे तिनी ॥
चेलो योग्य बुझेर शस्त्रहरूको * संपूर्ण शिक्षा दिए ।
सेवा चाकरि बेसरी गरि गुरु * -लाई रिझाई लिए ॥१४॥
शिक्षा पूर्ण भए पछी गुरुजिले * लौ जाउ भन्दा भए ।
फर्की द्रोणजिले कृपीसित विहा * मागी गरेका थिए ॥
थामी आफ्नु गृहस्थ धर्म घरमा * श्री द्रोण बस्ता भए ।
केही कालपछी ति द्रोण कृपिका * छोरा त्यहीं जन्मिए ॥१५॥

अश्वत्थामा नामको पुत्र पाई ।
आमा बाबू बस्न लागे रमाई ॥
मागे तिन्ले एक दिन् दूध खान ।
आमाले त्यो पुत्रलाई त छल्न ॥१६॥
पीठो घोली झोल सेतो बनाई ।
दींदा खाए पुत्रले त्यो रमाई ॥
यस्तो वार्ता द्रोणजीले सुनेर ।
देखी आफ्नू कष्ट चिन्ता गरेर ॥१७॥

दिन्छन् द्रव्य कि मित्र हुन् द्रुपदले * भन्ने विचारी कन ।
पौंचे द्रोण ति भूपका नगरमा * भेट् गर्न सोही क्षण ॥
देखी भूपतिलाई सोधनि गरे * हे मित्र ! भन्दै जब ।
बोले क्रोध गरेर झट्ट नृपले * तिन्लाई रोकी तब ॥१८॥
माग्ने भिक्षुकले मलाई कसरी * भन्छौ सखा लौ भन ?
हुन्छन् मित्र समान नीति छ यही * भन्छन् सबै सज्जन ।
राजाको बुझ भिक्षु मित्र कहिल्यै * हुन्नन् कुनै निर्धन ।
पढ्दाको जति मित्रता अघि थियो * त्यो स्वार्थ हो ब्राह्मण ॥१९॥

धेरै यै रितका गरे अरु पनी * निन्दा घमण्डी बनी ।
त्यस्को उत्तरमा नबोलि अरु क्यै * निस्के म जान्छु भनी ॥
साटो फेर्न ति हस्तिनापुर गए * सान्हैे रिसाई जब ।
देखेथे कुरु पाण्डवादि पथमा * खेल्थे भकुण्डो सब ॥२०॥
उफ्री शुष्क इनारमा परि गयो * तिनको भकुण्डो गई ।
धेरै यत्न गरे निकाल्न नसकी * हेर्थे सबै घेरिई ॥
यो देखीकन द्रोणले नगिच गै * जोरेर साना तृण ।
आफ्नो औंठि र गेंद वेधि तृणले * तानी लिए त्यै क्षण ॥२१
देखी शौर्य ति द्रोणको गइ भने * श्री भीष्मलाई सब ।
आई भीष्मजिले लगेर पुरमा * राखे खुशी भै तब ॥
मेरा सन्ततिलाई योग्य रितले * शिक्षा दिनूहोस् मुने !
जे इच्छा मनमा छ त्यो हजुरको * पूरा म गर्छु भने ॥२२॥
शिक्षा द्रोणजिले दिए शिशुहरू * -लाई अनेकौं थरी ।
विद्याभ्यास गरी दुबै थरि भए * विख्यात योद्धा सरी ॥
राखे एक चरो लगेर रुखमा * गर्छु परीक्षा भनी ।
डाकी शिष्यहरू क्रमैसित सबै * -लाई उभ्याए अनि ॥२३
आज्ञाले गुरुको युधिष्ठिर गए * पैल्हे अगाड़ी सरी ।
सोधे द्रोणजिले बताउ तिमिले * के देख्दछौ राम्ररी ॥
बोले ती म चरो र वृक्ष गुरुजी * देख्छु यि भाई पनि ।
सक्तैनौ तिमी लक्ष्यभेद्न बस लौ * बोले गुरूजी अनि ॥२४
सारालाइ भने क्रमैसित उही नै * नै वाक्य श्री द्रोणले ।
पाई उत्तर एकनास सबको * रातो भई क्रोधले ॥
डाकी अर्जुनलाइ सोधनि. गरे * के देख्तछौ लौ भन ।
बोले अर्जुन लक्ष्यबाहिक अरू * केही कतै देखिदनँ॥२५॥

मक्नेछौ तिमी लक्ष्य भेद्‌न गुरुले * सानन्द आज्ञा दिए।
हानी बाण किरीटिले सहजमै * तारो खसाली लिए॥
त्यो देखी गुरुले प्रसन्न मनले * टाँसेर छाती महाँ।
धेरै अर्जुनलाइ आशिष दिए * सन्तोष मानी त्यहाँ॥२६॥

एकलव्यको गुरु-भक्ति—

यौटा पुत्र थियो निषाद-पतिको * शूरो बलीयो पनि।
आएथ्यो जब 'एकलव्य' गुरुको * सामू म पढ्छु भनी॥
जानी शूद्र गरे तिरष्कृत निकै * त्यस्‌को गुरु द्रोणले।
माटाको गुरु मूर्ति थापि वनमा * बस्तो भयो भक्तिले॥२७
लाग्यो गर्न ठुलो परीश्रम गरी * अभ्यास शस्त्रादिको।
केही कालपछी अलौकिक भयो * ज्ञाता धनुर्वेदको॥
खेल्थे खूब शिकार द्रोण संगमा * सारा कुरु-पाण्डव।
यौटा दुष्ट कुकुर पछी-पछि गयो * थाहै नपाई तब॥२८॥
देखेथ्यो जब एकलव्यकन त्यो * लाग्यो र चिच्याउन।
हान्यो बाण झिकेर सात मुखमा * त्यसले रिसाई कन॥
भाग्यो त्यो दगुरेर बोल्न नसकी * बाणै समेतको जब।
देखी कुक्कुरको दशा पर्खिगए * आश्चर्यमा पाण्डव॥२९॥
खोज्दै ती सब एकलव्य विरको * पुग्दा भए सामुमा।
देख्दैमा गुरुलाइ शूद्र खुशिले * पर्दो भयो पाउमा॥
त्यस्को देखि ठुलो पराक्रम, भयो * ईर्ष्या किरीटी कन।
तिन्को भाव बुझेर द्रोण गुरुले * माग्दा भए त्यै क्षण॥३०
मेरो शिष्य बनेपछी अब तिमी * देऊ गुरू - दक्षिणा।
मेरो आशिषले हुनेछ सहजै * पूरा सबै साधना॥

यो आज्ञा गुरुको सुनेर तिनिले * विन्ती गरे सादर ।
जे इच्छा छ हजूरको म अहिल्यै * गर्छु गुरो ! हाजिर ॥३१॥
मागेथे तिमी देउ दक्षकरको * अंगुष्ठ आफ्नो भनी
औंला काटि तुरुन्त सामु गुरुको * राखी दिए लौ भनी ॥
तिन्को साहस देखि द्रोण गुरुजी * खुशी भएका थिए ।
औंला तर्जनी मध्यमा बिच धरी * सिक्ने इरादा लिए ॥३२॥
चिन्ता क्यै मनमा थिएन गुरुले * अंगुष्ठ मागे भनी ।
क्यै सन्तोष थियो बरु वचनको * पालन् गरें लौ भनी ॥
शक्ती त्यो करमा रहेन अघि झैं * तिन्को, प्रशस्तै तर ।
योद्धा वीर पराक्रमी हुन गए * सम्पूर्णमा सुन्दर ।३३॥

द्रोणाचार्यका शिष्यहरूको शस्त्रकौशल :--

हे राजन् ! धृतराष्ट्रका नगिच गै * श्री द्रोणले क्यै दिन ।
बोले कौशल हेर्नुहोस् सुतहरू * ज्ञाता भए सज्जन ! ॥
भन्छन् श्री धृतराष्ट्र द्रोणगुरुजी * आज्ञा भयो सुन्दर ।
जे चाहिन्छ, जती छिटै विदुरले * गर्नन् सबै हाजिर ॥३४॥
यौटा पारिदिए तयार बलियो * ठूलो र राम्रो घर ।
राखे हेर्न बसेर स्त्री-पुरुषले * मञ्चादि चारै तिर ॥
राजा श्रीधृतराष्ट्र मन्त्रि कृपजी * भूरिश्रवा वाह्लिक ।
द्रोणाचार्य र सोमदत्त पुरका * साना ठूला बालक ॥३५॥
गान्धारी अनि कुन्तिका मित-हितू * जो दास - दासी थिए ।
दर्जा माफिक स्थानमा गइ सबै * सानन्द बस्ता भए ॥
आज्ञाले गुरुका ति कौरवहरू * पैल्हे अगाड़ी सरी ।
थाले कौशल अस्त्र-शस्त्रहरूको * आश्चर्य पार्ने गरी ॥३६॥

घोड़ामा कहिले चढ़ेर गजमा * आकाश माथी गई ।
गर्थे कौशल हेर्दथे जनहरू * तस्बीर जस्ता भई ॥
कुन्ताकुन्ति र ढाल खड्ग तरवार् * शक्ती, गदा, तोमर ।
गर्दै आपुसमा प्रहार नकली * देखाउँथे सुन्दर ॥३७॥
आफाफ्ना करमा गदा लिइ उभे * श्री भीम दुर्योधन ।
मत्ता हात्ति समान मण्डप भरी * डुल्थे गरी गर्जन ॥
कानैमा धृतराष्ट्रका विदुरले * भन्थे बुझाई कन ।
गान्धारीसित कुन्तिले समरको * गर्थिन् सबै वर्णन ॥३८॥
लागे लड्न निकै रिसारिस गरी * श्री भीम दुर्योधन ।
छोरालाइ पठाई झट्ट गुरुले * रोके बुझाई कन ॥
आए मण्डप मध्यमा गुरुजिको * आज्ञा लिई अर्जुन ।
जानेको जति अस्त्र कौशल सबै * लागे ती देखाउन ॥३९॥
आग्नेयास्त्र गरी प्रहार पहिले * आगो निकाली लिए ।
फेरी वारुण अस्त्रले जल झिकी * सारा निभाई दिए ॥
वायव्यास्त्र चलाइ खूब बलियो * आँधी उठेको थियो ।
पर्जन्यास्त्र चलाइ बादल झिकी * त्यसलाई रोकीदियो॥४०॥
पृथ्वी-पर्वत देखिने अनि स्वयं * आफू अदृश्यै हुने ।
सान्है सानु तथा ठूलो क्षणमहाँ * पारी दिए देखिने ॥
देखी कौशल अस्त्र-शस्त्रहरूको * 'स्याबास' भन्दा भए।
सारा दर्शकले बजाइ थपरी * सान्है कराई दिए ॥४१॥
आए कर्ण पनी उसै बखतमै * शस्त्रास्त्रले सज्जित ।
लागे भन्न किरीटिलाइ सहसा * पारौं भनी लज्जित ॥
देखायौ तिमीले पराक्रम जती * त्यो देखि बर्ता गरी ।
सक्छु कौशल गर्न यी जनहरू * हेरुन् बसी राम्ररी ॥४२॥

येती बात भनी गरे थरि-थरी * शस्त्रास्त्रको कौशल ।
स्याबासी सबले दिए खुशि भई * देखेर तिनको बल ॥
बोले कर्ण गरेर पूर्ण अभिमान् * आऊ लडौं अर्जुन ।
तिन्को बात सुनेर भीम सहसा * बोले रिसाईकन ॥४२॥
राजाको सुत सूत-पुत्र संगमा * लड्ने कसोरी भन ।
तिन्को बात सुनेर क्रोधित भए * तत्काल दुर्योधन ॥
डाकी ब्राह्मण अङ्गदेश भरिको * राजा बनाई दिए ।
राजाको अभिषेक पाई मनमा * श्री कर्ण खूशी भए ॥४१॥
श्री दुर्योधनले भने अब यहाँ * छन् वीर योद्धा जति ।
आउन् लड्न यी अङ्गराज सँगमा * शंका नमानी रति ॥
रोक्नूभो गुरु द्रोणले गइ स्वयं * देखी नराम्रो स्थिति ।
सन्ध्याकाल भयो र दर्शक सबै * फर्के गएका जति ॥५३॥

द्रुपद पराजय :

राजन् ! द्रोणजिले विचार मनमा * गर्दा भए लौ अब ।
सक्छन् तोड्न घमण्ड ती द्रुपदको * सम्पूर्ण यी पाण्डव ॥
डाकी शिष्यहरू सबैसित भने * ल्याओ गुरु दक्षिणा ।
मेरो आशिषले गरेर मनको * पुग्ला सबै कामना ॥५४॥
ल्याई हाजिर पार त्यो द्रुपदको * पक्रेर पाता कसी ।
त्यस्को तोड्न सके घमण्ड सहजै * हुन्छु म सार्‍है खुशी ॥
आज्ञाले गुरुको चढेर रथमा * संग्रामका खातिर ।
ढाके राज्य भरी पुगी द्रुपदको * पाञ्चाल चारैतिर ॥५५॥
देखी कौरव वीर ती नृपतिले * * सेना लिई साथमा ।
आए भाइ ससैन्य क्रोधित भई * तत्काल संग्राममा ॥

हेरौं कौरवको पराक्रम भनी * भिन्नै बसे पाण्डव ।
लागे लड्न रिसाई ती द्रुपदका * सेना तथा कौरव ॥५६॥
बीचैमा नृपले लडी सकलको * शेखी उतारी लिए ।
हाहाकार परेर कौरव जती * सम्पूर्ण भाग्दा भए ॥
त्यो देखीकन भीम, अर्जुन हिंडे * आज्ञा गुरूको लिई ।
मारे सैनिक भीमले लिइ गदा * उफ्रेर चाँडो गई ॥५७॥
पारेथे शरजालमा द्रुपदले * क्यै बेर रोकी तर ।
भागे सैनिक चोट पाइ बलियो * तत्काल चारैतिर ॥
आए भाइहरू सबै द्रुपदका * निक्कै भई तत्पर ।
हानेथे सहदेवले नकुलले * -शक्ति गदा तोमर ॥५८॥
वर्षाईकन बाण अर्जुनजिले * पानी परेझैं गरी ।
पक्री भूपतिलाइ राखि रथमा * फिर्दा भए त्यै घरी ॥
सामुन्ने गुरुको लगेर तिनिले * सुम्पी दिएथे जब ।
हाँसी द्रोणजिले भने द्रुपदजी * -लाई सुनाई तब ॥५८॥
हुन्छन् मित्र त भूप नै नृपतिका * भन्थ्यौ घमण्डी बनी ।
मान्छौ की तिमिले मलाइ अब ता * हो मित्र मेरो भनी ॥
आधा राज्य लिएर बन्छु म पनी * तिम्रो सखा भूपति ।
बोले भूपति द्रोणको सुनि कुरा * मानेर लज्जा अति ॥६०
ब्रह्मन् ! जो पहिले निरादर गरें * माफी दिनूहोस् अब ।
मान्छु योग्य सखा भनेर खुशिले * आज्ञा भएको सब ॥
देख्नूभो जब द्रोणले द्रुपदको * लज्जा तथा दीनता ।
यस्तो फेरि नगर्नु क्वैसित पनी * हे भूपती ! मूर्खता ॥६१
येती अर्ति दिएर बन्धन स्वयं * तिनको फुकाई दिए ।
आधा राज्य गरेर आफ्नु वशमा * लौं जाऊ भन्दा भए ॥

मानी बात ठुलो, गए द्रुपदजी * फर्केर आफ्नो घर ।
पाई त्यो 'अहिछत्र' राज्य गुरुको * कीर्ति भयो सुन्दर ॥६२

देखी प्रताप बल अर्जुनको अपार ।
आफू प्रति सुदृढ भक्ति, मती उदार ॥
जुन अस्त्र 'ब्रह्मशर' नाम थियो अमोल ।
सुम्पे किरीटिकन द्रोणजिले तुरुन्त ॥६३॥

युधिष्ठिरलाई युवराज बनाउनु, धृतराष्ट्रको चिन्ता र कर्णको सल्लाह

हे राजन् ! धृतराष्ट्रले जब सुने * पाँचै जना पाण्डव ।
विद्यामा, बल, बुद्धिमा र गुणमा * छन् श्रेष्ठ भन्ने तब ॥
इच्छा द्रोणगुरु र भीष्म कृपको * जानेर पक्का गरी ।
सामग्री युवराजको पद दिने * जम्बा गरी राम्ररी ॥६४॥
सुम्पे धर्मकुमारलाई पद त्यो * आनन्द मानी जब ।
आफ्ना वन्धु प्रजा ति धर्म-सुतले * राजी गराए सब ॥
पाई शासक योग्य राज्य भरिमा * चर्चा उनैको थियो ।
यस्ले झन् धृतराष्ट्रका मनमहाँ * शंका उमारीदियो ॥६५॥
ज्ञानी विप्र थिए त्यहीं कणिकनाम् * नीतिज्ञ मन्त्री पनि ।
सोधे ज्ञान गराइ पूर्ण स्थितिको * कर्तव्य के हो भनी ॥
लागे भन्न बुझाउँदै कणिकले * नीति छ यो भूपति ।
पार्नु पर्दछ शत्रुलाइ वशमा * बाँकी नराखी रति ॥६६॥
नीतीपूर्वकको उदाहरण लौ * दिन्छु म सुन्नू हवस् ।
सोही माफिक राज्य शासन गरी * चिन्ता हटाई दिनोस् ॥
यौटा स्याल थियो कुनै वनमहाँ * नीतिज्ञ बाठो पनि ।
ब्वाँसो बाघ, मुसो र न्याउरिसँगै * बस्थ्यो सखा हुन् भनी॥६७

देखे जङ्गलमा ठुलो मृग कुनै * चर्दै गरेको जब ॥
झम्टयो सिंह समात्नलाइ मृग त्यो* उफ्रेर भाग्यो तब ॥
बोल्यो स्याल, सुतेपछि मृग मुसा * विस्तार ताहाँ गई ।
चारोटा खुर काट्नुपर्दछ अनी * मर्नेछ पंगू भई ॥६८॥
मल्लाहा सबको मिल्यो, गइ मुसा * काटेर आयो खुर ।
मारेथ्यो गइ सिंहले हरिण त्यो * झम्टेर चाँडै तर ॥
मासू खान सबै सखाकन त्यहाँ * देख्यो तयारी जब ।
बोल्यो स्याल गरी बठ्याइँ मितहो * खावो नुहाई सब ॥६९॥
आफ कुर्न बस्यो गए अरु सबै * ती स्नानका खातिर ।
केही बेर गरी विचार हुनगो * त्यो स्याल चिन्तातुर ॥
बोल्यो बाघ नुहाइ आइ पहिले * देखी सखाको मुख ।
देख्छु दीन मलीन मित्र ! किन हो* आईपर्‍यो के दुख ॥७०॥
बोल्यो जम्बुक नीतिपूर्वक सखे ! * भन्थ्यो, मुसाले सुन ।
मैले युक्ति गरेर मार्न मृग यो * तिन्ले सकेका हुन ॥
धिक्काछ्छ पुरुषार्थ, वीर वनका * राजा भए तापति ।
मेरो आश्रय पाइ बाहु बलको * मासू लताछ्न् तिनी ॥७१
धेरै यै रितका कुरा अरु पनी * गर्थ्यो घमण्डी बनी ।
बोल्यो बाघ गरी विचार मृगको * यो खान्न मासू भनी ॥
आफैं गर्छु शिकार बाहुबलले * नै पेट भर्छु अब ।
येती बात भनी गयो वनमहाँ * त्यो सिंह फर्की जब ॥७२
चाँडै स्नान सकेर त्यै बखतमा * आई पुग्यो मूषक ।
अर्कों नीति झिकी बठ्याइँ गरि त्यो* बोल्दो भयो जम्बुक ॥
हे भाई ! तिमिलाइ न्याउरि अघी * जे भन्दथ्यो त्यो सुन ।
मारेको मृग बाघले जहरिलो *त्यो मासु खाऊँ किन ॥७३

भन्दै 'खाउ तिमी' भने म त सखे* खान्छु मुसा नै बरु ।
भाग्यो ज्यान बचाइ मूषक कतै * युक्ती नदेखी अरु ॥
ब्वाँसो आइपुग्यो नुहाइ खुशिले * मासु म खान्छु भनी ।
बोल्यो स्याल डरेसरि भइ स्वयं * केही नजान्ने बनी ॥७४॥
ऐह्ले नै तिमिलाइ मार्न किन हो * त्यो बाघ खोज्दै थियो ।
यस्ता बात सुनी डराइ मनमा * ब्वाँसो गएथ्यो जब ॥
आयो न्याउरि स्यालका नगिचमा* आनन्द मान्दै तब ॥७५॥
बोल्यो स्याल-सुनीतिले मितहरु * -लाई धपाएँ सखे !
आऊ युद्ध गरौं र मासु तिमिले * खानू मलाई जिते ॥
यस्ता बात सुनेर चिन्तित भयो * क्यै बेर ब्वाँसो पनि ।
भाग्यो बाघ भने म सक्छु कसरी * हो स्याल पापी खुनी॥७६।
यस्तो बात गरी विचार मनमा * ब्वाँसो पनी गै गयो ।
इच्छा पूर्ण गरेर स्याल खुशिले * त्यो मासु खाँदो भयो ॥
यस्तै नीति प्रवृत्ति आचरणले * हुन्छन् सुखी भूपति ।
पानू पर्दछ शत्रुलाइ वशमा * चाँडै सकेको जति ॥७७॥
नीती-भेद र साम, दाम सँगको * मौका विचारी कन ।
गर्नू पर्छ प्रयोग गुप्तचरको * द्वारा बुझी कारण ॥
बैरीको छल छिद्र खोजि नृपते * पर्नेछ जानी लिन ।
नीतिपूर्वक गर्नु पर्दछ सदा * यो राज्यको शासन ॥७८॥
राजन् ! पाँच तृवर्ग सात थरिका * छन् नीति धेरै तर ।
इच्छा पुग्छ जसो गरी उहि ठुलो * हो श्रेष्ठ औ सुन्दर ॥
सल्लाहा दिइ भेद नीतिहरुको * मन्त्री गएथे जब ।
देख्दा बुद्धि प्रशस्त पाण्डवहरु * -को आत्तिए कौरव॥७९॥

पाण्डवलाई वारणावत पठाउनु र लाक्षागृहको कथा—

राजाका नजिकै सुयोधन गई * विन्ती गरे हे पिता !
मुन्दैछु पुरवासिका थरिथरी * वार्ता नजाती म ता ॥
ज्ञानी भीष्म स्वयं तथा हजुरको * ख्याल नराखीकन ।
भन्छन् धर्मकुमारलाइ सबले * राजा तुल्याई दिन ॥८०॥
होलान् भूपति श्रीयुधिष्ठिर जसै * यो राज्यका मालिक ।
हाम्रो नित्य ठुलो अनादर तिनै * गर्नन् बनी रक्षक ॥
केही युक्ति निकालि हामिहरूको * रक्षा गरी बक्सियोस् ।
ऐल्हे पाण्डवलाई केहि निहुँले * अन्तै पठाई दिनोस् ॥८१॥
गर्नेछौं अनि हामिले सहजमा * यो राज्यको शासन ।
सक्छौं बन्धु प्रजा रिझाइ कुलको * सत्कीर्ति फैलाउन ॥
जाउन् पाण्डव वारणावत महाँ * क्यै कालका खातिर ।
तिन्लाई सहजै निकालि दिनको * बाटो छ यो सुन्दर ॥८२॥
छोराको सुनि यो कुरा नरपती * केही नबोले पनि ।
चिन्तामा डुबि मौन संमति दिए * गर्नेछु यस्तै भनी ॥
झन् दुर्योधनले गरे त्यस पछी * युक्ति अनेकौं थरी ।
आफ्ना पारि लिए प्रजा-जनहरू * दुर्नीतिले त्यो घरी ॥८३॥
मन्त्री दूत र दुष्ट दुर्मति जती * पाएर धेरै धन ।
गर्थे कौरवको प्रशस्त महनी * श्री कर्ण, दुःशासन ॥
राम्रो देश छ वारणावत स्वयं * जाऊन् भने भैं गरी ।
दुष्टात्मा धृतराष्ट्रले पनि भने * आफैं अगाडी सरी ॥८४॥
तिन्का नीतिहरू बुझे पनि सबै * केही नजान्ने बनी ।
बोले धर्मकुमार हामि अहिल्यै * जान्छौं खुशीले भनी ॥

योो संवाद सुनी सुयोधन भए * सान्है खुशी त्यो घरी ।
तिन्को मन्त्री थियो पुरोचन त्यहाँ * डाकेर माया गरी ॥८५॥
लागे भन्न गएर काम तिमिले * तत्काल यौटा गर ।
जान्छन् पाण्डव वारणावत छिटै * कुन्ती समेतै तर ॥
पैह्ले नै तिमिले पुगीकन त्यहाँ * सामग्रि जम्मा गरी ।
लाहाको बलियो बनाउनुपर्‍यो * दर्वार झैं राम्ररी ॥८६॥
यस्को ज्ञान नहोस् कसैकन कतै * भन्ने विचारी कन ॥
लैजाऊ बरु लौ प्रशस्त रथमा * राखी म दिन्छु धन ॥
गर्नू काम सबै तिमी चतुर छौ * धेरै भनूँ के भन ।
येती बात सुनी पुरोचन भए * तैयार सोही क्षण ॥८७॥
चाँडै नै पुगि वारणावत महाँ * तिन्ले बनाए घर ।
देख्नेले पनि भन्दथे बनिगयो * दर्वार यो सुन्दर ॥
जोरी हात दुबै बिदा हुन गए * कुन्ती तथा पाण्डव ।
गान्धारी धृतराष्ट्रका सँग भने * पाऊँ बिदा लौ अब ॥८८
आशीर्वाद दिए प्रसन्न मनले * लौ बाबु जाऊ भनी ।
टाढासम्म गए पुर्‍याउन स्वयं * भीष्मादि आफैं पनि ॥
मौका पाइ सबै भने विदुरले * क्यै गुप्त भाषा महाँ ।
जानेनन् अरूले सुने पनि कुरा * तिन्ले भनेको त्यहाँ॥९८
पाएथे सुइँको कुचक्रहरूको * सम्पूर्ण तिन्ले जब ।
राखी धैर्य सचेत भैकन सधैं * बस्ता भए पाण्डव ॥
पुग्दा पाण्डव वारणावत महाँ * सत्कार ठूलो भयो ।
आई झट्ट स्वयं पुरोचन त्यहाँ * बिन्ती चढाई लियो॥९०॥
जाऊँ त्यो दरबारमा हजुरकै * निम्ती बनेको भनी ।
लाहाको घरमा लगेर खुशिले * राख्यो नजान्ने बनी ॥

यौटा दूत त्यहाँ पुगी विदुरको * विश्वास पाऱ्यो जब ।
त्यस्ले एक सुरुङ् खनेर बलियो * तैयार पाऱ्यो तब ॥९१॥



लाक्षागृहमा पाण्डवहरू

मैन्हा बाऱ्ह बित्यो दुवै तरफले * विश्वास पार्दा महाँ ।
मौका एक मिलेर भीम विरले * आँटेर आफैं त्यहाँ ॥
आधा रात महाँ उठेर घरमा * आगो लगाई दिए ।
दाज्यू-भाइ मिलेर गुप्त-पथको * बाटो समाई लिए ॥९२॥
छोरा पाँच लिएर दैवगतिले * यौटी कुनै भिल्लिनी ।
बस्थी त्यै घरमा सपुत्र डढि त्यो * व्यर्थै मरी दुःखिनी ॥
त्यो घर्मा डढि त्यो पुरोचन ठुलो * पापी खरानी भयो ।
देखी अग्नि शिखा प्रचण्ड सबको * पैह्ले त सातो गयो॥९३॥
सुन्दा मृत्यु ति पाण्डवादि विरको * सन्ताप मानी कन ।
रोए बन्धु समान ती वरिपरी * जो बस्तथे सज्जन ॥

आएथे पुरवासि हेर्न घरको * देखेर त्यो दुर्गति ।
मन्त्रीको धृतराष्ट्रको पनि गरे * निन्दा सकेको जति ॥९४॥



लाक्ष्या गृहबाट पाण्डवको प्रणाम

निस्के पाण्डव कुन्तिलाई पिठमा * बोके बली भीमले ।
बाटो जंगलको धरीकन हिंडे * अत्यन्त नै कष्टले ॥
पाई साहस भीमको हिंडिरहे * रात्रि भए तापनि ।
गंगाका तटमा तिनीहरू पुगे * अत्यन्त दुःखी बनी ।९५
आई दूत त्यहाँ पनी विदुरको * विश्वास पार्‍यो जब ।
डुङ्गा उत्तम ल्याइ सोहि चरले * पारी गए पाण्डव ॥
जो सम्चार थियो हितू विदुरको * त्यसले सुनाई दियो ।
बस्नू धैर्य धरेर पुग्छ मनको * इच्छा भनी त्यो गयो ॥९६

पाण्डवहरूको लागि शोक-प्रकाश र क्रिया गर्नु :-

हे जन्मेजय ! वाराणावत महाँ * दुष्चक्रले जे भयो ।
त्यो सारा धृतराष्ट्रका हजुरमा * सम्चार आई पुग्यो ॥

आगोमा जलि वीर पाण्डव मरे * भन्ने सुनेथे जब ।
चिन्ताग्रस्त भए गरेर नकली * सन्ताप ती कौरव ॥९७॥
सारा शत्रु मरे भनी मनमनै * खूशी भए तापनि ।
रोएथे अपवाद मेट्न जनको * अत्यन्त दुःखी बनी ॥
गङ्गाको जलले तिलाञ्जलि दिए * कर्तव्य ठानी जब ।
लुगाको पुतली बनाइ करले * मुर्दा जलाए सब ॥९८॥
रैतीको अपवाद मेट्न सहजै * सक्नेछु भन्ने गुनी ।
सारा पाण्डवको क्रिया गरिलिए * आफ्नै थिए ती भनी ॥
चिन्ता भीष्मजिको बुझी विदुरले * डाकेर एकान्तमा ।
सारा वात भनेपछी हुन गए * श्रीभीष्म आनन्दमा॥९९॥
मेरा शत्रु मरे भनी खुशि भए * अत्यन्त दुर्योधन ।
लागे गर्न अनीतिपूर्वक सबै * त्यो राज्यको शासन ॥
राजाको डरले ति बोल्न नसकी * रुन्थे घरैमा कति ।
सम्झी पाण्डवलाइ दुःखित थिए * रैती हितैषी जति ॥४००॥

हिडिम्बासुरको आख्यान---

हे राजन् ! बनमा हिंडे दुख सही * कुन्ती तथा पाण्डव ।
योटा वृक्ष मुनी पुगेर वरको * बस्ता भए ती सब ॥
बोलिन् कुन्ति थकाइ प्यास बहुतै * लागेर आयो अब ।
थाके दाजु तथा यी भाइ दुइटै * विश्राम गर्छौं सब ॥१॥
पानी ल्याउ कुनै सरोवर यहीं * खोजेर चाँडो गई ।
योद्धा भीम हिंडे तुरुन्त जलको * खातीर भाँडो लिई ।
लागी भोक र प्यास भाइ जननी * भैंमा सुतेका थिए ।
पानी झट्ट लिएर त्यौ रुखमनी * श्री भीम फिर्दा भए ॥२॥

भूमीमा सबलाइ देखि त्यसरी * निद्रा परेको त्यहाँ ।
लागे गर्न विचार भीम विरले * दुःखी भई मन् महाँ ॥
पापीका छलमा परेर हुनगो * यस्तो नराम्रो स्थिति ।
आज्ञा पाउँ त कौरवादि खलको * पार्नै थिएँ दुर्गति ॥३॥
शय्यामा पनि नींद पर्न घरमा * जस्लाई गाऱ्हो थियो ।
त्यस्तालाइ लखेटि घोर वनमा * भैंमा सुताई दियो ॥
तेरो पूर्ण भयो मनोरथ सबै * हे दुष्ट दुर्योधन !
जाने लौ कसरी कहाँ अब भनी * आत्तिन्छ मेरो मन ॥४॥
राजन् ! त्यैं वनमा हिडिम्ब बलियो * यौटा थियो राक्षस ।
डर्थैं वीरहरू पनी असुरको * देखी ठुलो साहस ॥
पाई मानिसको सुगन्ध खलले * बैन्ही हिडिम्बा कन ।
डाकी बुझ्न भन्यो ति मानिसहरू * को हुन् र आए किन ॥५
देखी रूप ति भीमको नगिच गै * त्यो राक्षसीले जब ।
दासी हुन्छु तिमी बिहा गर भनी * बिन्ती म गर्छु अब ॥
जे भन्छौ तिमिले म गर्दछु उही * बोली हिडिम्बा तर ।
बोले भीम रिसाइ जा तँ अहिले * फर्कोर आफ्नो घर ॥६॥
बोली फेरि पराक्रमी ! गर दया * छु कामले पीडित ।
भूमीमा नभमा पनी मन गरे * छु डुल्न सक्ने म त ॥
बोले भीम थकाइ मार्न अहिले * छन् यी सुतेका सब ।
यस्मा विघ्न नपारि वीर छ भने * दाज्यू पठा गै अब ॥७॥
रैधे बेर भयो कतातिर गई * बैन्ही भनी राक्षस ।
आएथ्यो दगुरेर भीम नगिचै * खाऊँ भनी मानिस ॥
वस्त्राभूषणले सुसज्जित त्यहाँ * देखेर बैन्ही कन ।
भेजेको त तँलाइ मानिस पती * रोज्लिस् भनी दुर्जन ॥८॥

एती बात भनेर भीमतिर त्यो * माछु भनी लम्कियो ।
देखी उग्र हिडिम्बलाइ बहिनी- * को होश जाँदो भयो ॥
पक्रेथ्यो जब भीमलाइ खबले * मार्ने इरादा धरी ।
त्यस्को चोट छलेर भीम विरले * हाने गदा बेसरी ॥९॥
आमाको अनि दाजु-भाइ सबको * विग्रन्छ निद्रा भनी ।
तान्दै त्यो खललाइ क्यै पर लगे * कालाग्नि जस्तै बनी ॥
केही बेर लडे परस्पर गदा * वृक्षादिले बेसरी ।
जस्तो जन्तु घिसार्छ सिंह वनमा * पक्रेर उस्तै गरी ॥१०॥
चारै तर्फ घिसारि खूब बलले * घाँटी थिचे भीमले ॥
चिच्यायो अनि कष्ट पाइ सहसा * साह्रै ठुलो शब्दले ॥
जागे शब्द सुनेर वज्रसरिको * कुन्ती तथा पाण्डव ।
देखी छक्क परे युधिष्ठिर तथा * आमा र भाई सब ॥११॥
मार्ने निश्चयले घुमाइ बलले * क्यै बेर आकाशमा ।
पच्छारे खललाइ मार्दछु भनी * श्री भीमले भूमिमा ॥
ठूलो चोट परी मरी जमिनमा * त्यो वृक्ष झैं तेर्सियो ।
दाजू भाइ मिली सबै खुशि भए * संकष्ट ठूलो गयो ॥१२॥
इच्छापूर्ण गराउनोस् भनि निकै * रोई हिडिम्बा जब ।
कुन्तीबाट हुकुम् मिल्यो 'गर विहा' * हे भीम ! भन्ने तब ॥
त्यस्का साथ त्यहीं विवाह हुनगो * गन्धर्वको रीतिले ।
केही काल रमे त्यसैसित डुली * श्री भीम आनन्दले॥१३
छोरो एक त्यहीं घटोत्कच भनी * पैदा भयो सुन्दर ।
त्यस्ले विन्ति गऱ्यो हुनेछु जहिले * डाके पछी हाजिर ॥
येनी बात भनी घटोत्कच गयो * आमा समेतै जब ।
पक्री जङ्गलको कठोर पथ ती * फेरी हिंडे पाण्डव ॥१२॥

व्यासजीको दर्शन र बक-वध :

हे राजन् ! वनका स्वपी दुखहरू * जाँदै थिए पाण्डव ।
नाघी मत्स्य, त्रिगर्त, कीचक तथा* पाञ्चाल देशै सब ॥
यौटा जङ्गलमा बसे सब जना * विश्रामका खातिर ।
आए व्यास त्यहीं र आशिष दिई * भन्दा भए सादर ॥१५॥
बस्नू क्यै दिन एकचक्र पुरमा * छन् विप्र तिन्का घर ।
इच्छा पूर्ण हुनेछ केहि मनमा * पर्दैन मान्नू डर ॥
येती अर्ति दिएर व्यास मुनिजी * तत्काल फर्की गए ।
सोधी ब्राह्मणका पुगेर घरमा * क्यै काल बस्ता भए॥१६
गर्थे जो सुख भोग उत्तम तथा * साम्राज्यको शासन ।
राजन् ! ब्राह्मण झैं बनेर अहिले * गर्छन् ती भिक्षाटन ॥
जानी दैवगती विचित्र मनमा * संतोष मानी कन ।
काटे पाण्डवले निकै दिन गरी * सद्धर्मको पालन ॥१७॥
हे राजन् ! बक नामको अति बली * यौटा थियो राक्षस ।
गर्दा त्यो पुरमा उपद्रव सबै * दुःखी थिए मानिस ॥
पालो बाँधिदिए दिने घरपिछे * त्यो दुष्टको भोजन ।
राँगो एक प्रशस्त भात सँगमा * त्यो वस्तु लाने जन ॥१८॥
पालो आइपुगेछ सोहि घरको * बस्थे जहाँ पाण्डव ।
गर्थे आपुसमा विषाद पहिले * जान्छु म भन्दै सब ॥
आमा-बाबु र पुत्र-पुत्रि घरमा * ती चार जम्मा थिए ।
तिन्को आपतका कुरा अतिथिले * सम्पूर्ण जानीलिए॥१९॥
कुन्तीले नजिकै गईकन भनिन् * छन् पाँच मेरा सुत ।
यौटालाइ पठाउँछु म सहजै * टर्नेछ यो आपत ॥

मानेनन् पति-पत्निले अतिथिको * गर्दीनँ हत्या भनी ।
कुन्तीले गरि नीतिपूर्वक कुरा * राजी गराइन् अनि ॥२०
सामग्री सँगमा लिएर बलिया * श्री भीम आफैं गए ।
डाक्तैं राक्षसलाइ भोजन जती * संपूर्ण खाँदा भए ॥
केही बेरपछी स्वयं बक त्यहाँ * गर्जेर आई पुग्यो ।
खाँदैं भीम थिए नबोलि सहसा * उफ्री पछाडी पुग्यो॥२१॥
हान्यो मुड्कि उजाइ एक पिठमा * त्यस्ले रिसाई जब ।
त्यस्को चोट खपी नबोलि भिमले * खाई चुठेथे तब ॥
योटा वृक्ष उखेलि फेरि बकले * झम्टयो रिसाई कन ।
फ्याँके त्यैतिर वृक्ष खोसि भिमले * भन्दै पखी दुर्जन ॥२२॥
पक्र्यो कम्मरमा पछार्न बकले * फेरी अगाडी सरी ।
थाले झट्ट लछार्न पक्रि करमा * श्री भीमले बेसरी ॥
गर्थ्यो फुस्कनलाइ यत्न तनको * शक्ती लगाई सब ।
त्यस्को बात बुझेर भीम विरले * मानैं गरी मन्सुब ॥२३॥
पच्छारी कन भूमिमा असुरको * घूँडा धसी पीठमा ।
मारे घाँटि निमोठि बोलि मुखले * 'लौ जा परं धाममा' ॥
मारीयो जब दुष्ट त्यो बक अरू * त्यस्का सखा राक्षस ।
भागे प्राण बचाइ भीम विरको * देखी ठुलो साहस ॥२४॥

पाण्डवहरूको पाञ्चालतर्फ प्रस्थान :—

राजन् ! द्रौपदिको स्वयंवर सुने * क्वै विप्र द्वारा जब ।
त्याहाँ बाट विदा भईकन हिंडे * पाञ्चाल ती पाण्डव ॥
केही दूर पुगी बसे रुख मुनी * श्री व्यास आए त्यहाँ ।
ढोगे पाण्डवले र आशिष दिए * खूशी भई मन्महाँ ॥२५॥

धृष्टद्युम्न र द्रौपदी यि दुइको * वृत्तान्त सोधे तब ।
गर्दै वर्णन व्यासले शुभ कथा * सारा बताए तब ॥
बाबू हो ! ऋषिपुत्रि कोहि पहिले * यौटी थिइन् सुन्दरी ।
स्वामी योग्य नपाइ शङ्करजिको * बस्थिन् तपस्या गरी ॥२६
आई श्रीशिवले भने खुशि भएँ * मागेर लेऊ वर ।
स्वामी पाउँ म पाँचपल्ट तिनिले * भन्दी भइन् सादर ॥
आज्ञा भो शिवले 'तथास्तु' सुमुखी * पुग्नेछ इच्छा तर ।
पाउन्नौ यस जन्ममा पति कुनै * खोजे पनी सुन्दर ॥२७॥
अर्को जन्ममहाँ तिनै द्रुपदकी * छोरी भइन् सुन्दरी ।
इच्छा पूर्ण हुनेछ जाउ खुशि भै * पाञ्चालमा यो घरी ॥
येती अर्ति दिएर व्यास सहसा * पाल्नू भएथ्यो जब ।
गङ्गाका तटबाट विप्र सरि भै * जाँदा भए पाण्डव ॥२८॥
बस्थे त्यै जलमा सपत्निक कुनै * गन्धर्व क्रीडा गरी ।
देखी पाण्डवलाई क्रोधित भई * कुलैं निकै बेसरी ॥
क्रीडामा रत छु म यो पथ गरी * को हौ यता आउने ।
अन्तै जाउ कतै फिरी न त सबै * छौ व्यर्थमा मारिने॥२९॥
बोले अर्जुन गर्वका सुनि कुरा * यो शुद्ध गङ्गा तट ।
तिम्रो मात्र हुँदैन पत्नि सँगमा * जाऊ र अन्तै डट ॥
येती बात सुनेर चित्ररथले * हाने रिसाई शर ।
काटी ती शर पार्थले पनि दिए * अग्न्यास्त्रले उत्तर ॥३०॥
त्यस्ले अश्व, ध्वजा र सारथि सबै * गन्धर्वजीको जल्यो ।
मानी हार भएर लज्जित बनी * तत्काल बोल्दो भयो ॥
दिन्छु मन्त्र म 'चाक्षुषी' पृथिवीका* वस्तू सबै देखिने ।
घोडा दिन्छु प्रसिद्ध पाँच सय लौ * अत्यन्त छिटो हुने ॥३१

आग्नेयास्त्र सिकाइदेउ तिमिले * हे पार्थ ! साटो महाँ ।
तिन्को बात सुनेर स्वीकृति दिई * साथी बनाए त्यहाँ ॥
बोले अर्जुन हे सखे ! हयहरू * माग्नेछु मौका महाँ ।
जानी जानि गऱ्यौ प्रहार कसरी * ऐहले मलाई यहाँ ॥३२॥
लागे भन्न बुझाई चित्ररथले * जे हेतु हानें शर ।
स्त्रीका सामु हुने अनादर सखे ! * को खप्न सक्नेछ र ? ॥
मेरो स्त्री सँगमा हुँदा हुन गयो * यस्तो नराम्रो स्थिति ।
तिम्रो देखिन साथमा द्विज कुनै * वेदज्ञ औ सद्मति ॥३३॥
ज्ञानी योग्य वशिष्ठ झैं तिमी पनि* यौटा कुनै ब्राह्मण ।
लेऊ साथ महाँ पुरोहित, कुनै * गर्नन् सदा रक्षण ॥
बोले पार्थ वशिष्ठको विषयमा * जे जान्दछौ त्यो भन ।
लागे भन्न बुझाइ चित्ररथले * आनन्द मानीकन ॥३४॥
विश्वामित्र शिकार खेल्न बनमा * क्वै दिन् गएका थिए ।
पौंचे आश्रममा वशिष्ठ मुनिका * बाटो पनि बिर्सिए ॥
देखेथे उपयुक्त एक नृपले * गाई थिइन् 'नन्दिनी' ।
साटो दिन्छु करोड़ गाइ खुशिले * देऊ मलाई भनी ॥३५॥
माग्दा दिन्नँ भने वशिष्ठ मुनिले * ती गाइलाई जब ।
आज्ञाले नृपको समाइ बलले * लैजान लागे तब ।
रक्षा गर्नुहवस् भनी मुनिसँगै * रोइन् गई नन्दिनी ।
बोले झट्ट वशिष्ठजी गर स्वयं * आफ्नू सुरक्षा भनी ॥३६
पारी देह जुरुक्क क्रोधित भई * लागिन् जसै डुक्रिन ।
सेना पौण्ड्र किरात बर्बर यवन् * लागे सबै जन्मन ।
आज्ञाले गरि गाइको ति सबले * शस्त्रास्त्र बोकी लिए ।
मारी भूपतिका सुसैनिकहरू * सारा भगाई दिए ॥३७॥

राजाले ति वशिष्ठलाइ रिसले * शस्त्रास्त्र हान्दा भए ।
उनले शान्त रहेर तुच्छ छड़िले * सारा वृथा पार्दिए ॥
बोले भूप अनी यि क्षत्रिहरूको * धिक्कार ठान्छु बल ।
ठूलो तेज रहेछ 'ब्रह्म बलको' * ब्रह्माण्डमा केवल ॥३८॥
एती बात भनेर भूपति गए * गर्छु तपस्या भनी ।
क्षत्री विप्र बने ठुलो तप गरी * विख्यात राजा तिनी ॥
यो आख्यान सुनाई चित्ररथजी * सानन्द फर्की गए ।
डाकी धौम्य ऋषी पुरोहित गरी * आफ्ना तुल्याई लिए॥३९
त्याहाँबाट हिंडेर पाण्डवहरू * पौंचेर पाञ्चाल् महाँ ।
आफलाइ लुकाइ विप्रसरि भै * बस्थे कुह्माले कहाँ ॥
हे राजन् ! मुनि व्यासले गइ त्यहाँ* फेरी दिए दर्शन ।
कुन्ती पाण्डवले सुआदर गरी * ढोगे खुशि भैकन ॥४०॥
धृष्टद्युम्न र द्रौपदी द्रुपदका * छोरा र छोरी थिए ।
लागे भन्न बुझाई व्यास कसरी * सन्तान ती जन्मिए
शेखी इज्जत द्रोणले द्रुपदको * पैल्हे हरेका थिए ।
साटो फेर्न म पाउँ पुत्र कसरी * भन्ने विचारी लिए ॥४१॥
इच्छापूर्ण हुने म गर्छु खुशिले * क्वै यज्ञ ठूलो भनी ।
डाकी उत्तम विप्र आफ्नू मनको * इच्छा बताए अनि ॥
पुत्रेष्ठी नृपको गरे मख ठुलो * आई कुनै ब्राह्मण ।
छोरा, छोरि ती अग्निले खुशि भई* गर्दा भए अर्पण ॥४२॥
कृष्णा नाम ति श्याम वर्ण कि हुँदा * राखे विचारीकन ।
धृष्टद्युम्न ति द्रोणका हुन गए * शत्रु त्यसै कारण ॥
जानू विप्र बनी स्वयंवरमहाँ * केही नमानी डर ।
येती आर्ति दिई हिंडो पनि गए * श्रीव्यास एकातिर ॥४३॥

दुर्नीती धृतराष्ट्रको द्रुपदले * सारा सुनेकै थिए ।
पत्ता पाण्डवको लगाउन निकै * यत्नादि गर्दा भए ॥
कृष्णा अर्जुनलाइ सुम्पन ठुलो * इच्छा हुनाले गरी ।
पत्ता लाग्छ भनी स्वयंवर रचे * ती भूपले यो घरी ॥४४॥
आए देश विदेशका नरपती * पाएर निम्ता त्यहाँ ।
आफ्आफ्ना गइ स्थानमा सब बसे * जस्को थियो जुन् जहाँ ॥
धृष्टद्युम्न गएर मण्डप महाँ * बाहू उचाली कन ।
बोले-हे नरपाल ! शान्त मनले * मैले भनेको सुन ॥४५॥
सामुन्ने धनु-बाण लक्ष्य सबको * छन् राखिएका यहाँ ।
सक्ला लक्ष्य खसाल्न जुन् पुरुषले* यो रङ्ग - भूमी महाँ ॥
कृष्णाको पति हुन्छ सोहि नृपको * यै हो प्रतिज्ञा पनि ।
डाके द्रौपदिलाइ त्यै बखतमा * राजा चिह्नाउँ भनी ॥४६
जो-जो भूप त्यहाँ थिए सकलको * नाऊँ सुनाई दिए ।
गर्छु भेदन लक्ष्य यो भनि निकै * राजाहरू तम्सिए ॥
श्री दुर्योधन, शल्य, शाल्व, शकुनी* जो-जो प्रतापी थिए ।
तांदो खैंचि लिंदा घुचेडिन गई * ती भूमिमा पल्टिए ॥४७
आए कर्ण उठेर गर्दछु भनी * त्यो लक्ष्यको भेदन ।
बोलिन् द्रौपदि सूतपुत्र सँगमा * मैले बिहा गर्दिनँ ॥
फर्के कर्ण असाध्य लज्जित भई * त्यत्रो सभा बीचमा ।
आए पार्थ उठेर शान्त मनले * त्यो लक्ष्यको सामुमा ॥४८
तांदो खैंचि लिए प्रणाम गुरुजी * -लाई मनैले गरी ।
हेरी त्यो जलभित्र लक्ष्य सहजै * बेधी दिए त्यै घरी ॥
जै जैकार भयो, बजे थरि-थरी * बाजाहरू स्वर्गका ।
लावा पुष्प अबीर वर्षण गरी * खूशी भए देवता ॥४९॥

पैह्राइन् जयमाल द्रौपदि गईं * ती पार्थलाई तब ।
देखी विप्र समाज खूब खुशि भो * आनन्दको उत्सव ॥



अर्जुनको लक्ष्य भेदन

पाञ्चाली सँगमा लिईकन हिंडे * निस्की जसै अर्जुन ।
श्री दुर्योधन, शल्य आदि नृपती * लागे वृथा उफ्रन ॥५०॥
रोके भूपहरु निकै अघि सरी * संग्रामका खातिर ।
जोड़ी शल्य र भीम, कर्ण सँगमा * भो पार्थको सुन्दर ॥
लागे वर्षण गर्न अर्जुन झिकी * अत्यन्त तीखा शर ।
हाने वृक्ष उखेलि भीम विरले * ताकेर चारै तिर ॥५१॥
भागे शल्य पछारिए पछि सबै * राजा भई लज्जित ।
फर्के कर्ण पनी म लडदिनँ भनी * वेदज्ञ ब्राह्मणसित ॥
त्यो संग्राम महाँ भएर विजयी * पाँचै जना पाण्डव ।
पाञ्चाली सँगमा पुगे ति कुटिमा * आनन्द मान्दै तब ॥५२

कुन्तीका मनमा चल्ले लहड औ * दुर्वासना बेसरी ।
आमा आइपुग्यौं लिएर संगमा * भिक्षा भने त्यौं घरी ।
त्यागी पूजन देवको म कसरी * हे बाबु ! जाऊँ त्यहाँ ।
खाओ पाँचजना मिलेर खुशिले * बाँडेर आपुस्‌महाँ ॥५३॥
गैहे एति भनेर फेरि पछि ती * निस्किन् जसै बाहिर ।
देखी द्रौपदिलाइ सासु ति भइन् * अत्यन्त चिन्तातुर ॥
सोधिन् धर्मकुमारलाई तिमि नै * कर्तव्य के हो भन ।
दोषी हुन्छु कि पाप लाग्छ कि भनी * आत्तिन्छ मेरो मन ॥५४॥
बोले धर्मकुमार भाइहरु हो ! * कर्तव्य भन्छु सुन ।
जे भन्छिन् जननी प्रसन्न मनले * त्यस्को गरौं पालन ॥
यस्तै तर्कहरू बसेर कुटिमा * गर्दै थिए पाण्डव ।
सुन्थिन् द्रौपदि हर्षपूर्वक कुरा * तिन्ले गरेका सब ॥५५
पाल्नूभो बलराम कृष्णजि सबै * थाहा थियो तैपनि ।
सोधी सञ्च-बिसञ्च आदर गरे * हुन् यी हितैषी भनी ॥
गर्नेछु तिमीलाइ मद्दत पछी * मौका परेका घरी ।
येती बात भनी बिदा हुनुभयो * आनन्दले श्रीहरि ॥५६॥
धृष्टद्युम्न त्यहीं लुकेर सब यो * देख्दै र सुन्दै थिए ।
हुन् यी पाण्डव नै भनी द्रुपदजी * -लाई सुनाई दिए ॥
कुन्ती, द्रौपदि, पाँच पाण्डव सबै * -लाई लगी सादर ।
राखेथे दरबारमा नृपतिले * सेवा गरी सुन्दर ॥५७॥
सोधे वंश बताउनुस् हजुरले * संकोच छाडी कन ।
सुन्दा बात यहाँ अनेक थरिका * आत्तिन्छ मेरो मन ॥
यस्तो प्रश्न सुनेर श्री द्रुपदको * साँचो कुरा जो थियो ।
पैल्हेको इतिहास धर्म-सुतले * बिस्तार गर्नुभयो ॥५८॥

निन्दा श्री धृतराष्ट्रको द्रुपदले * गर्दा भए वेसरी ।
फिर्ता राज्य दिलाउँछु पनि भने * ती भूपले त्यो घरी ॥
कन्यादान म दिन्छु पार्थकन लौ * तिन्ले भनेथे जब ।
नामञ्जूर गरेर धर्म-सुतले * विन्ती गरे यो तब ॥५९॥
पाँचै भाइ मिली बिहा गरिलिने * आज्ञा छ माताजिको ।
शङ्का कत्ति नमानि बक्सनुहवस् * हो बात यो नीतिको ॥
कन्या गौतम गोत्रकी ति जटिला* -का सात स्वामी थिए ।
'कक्षी' नाम सुपुत्रि कण्डु मुनिले * दस् भाईलाइ दिए ॥६०॥
गर्दैनौं कहिले पनी जननिको * आज्ञा त उल्लंघन ।
राजन् ! सुम्पनुहोस् प्रसन्न मनले * आफ्नी सुपुत्री कन ॥
यस्ता बात सुनी परी सकसमा * बोल्दा भए भूपति ।
यौटी पुत्रि छ पाँचका सित बिहा * गर्दीन हे सद्मती ! ॥६१
गर्थे तर्क-वितर्क बेसरि त्यहाँ * श्री व्यास आए जब ।
सम्झाए नृपलाइ डाकि मुनिले * एकान्त पारी सब ॥
शम्भूको वरदान पाँच जनको * उत्पत्तिको वर्णन ।
पैल्हेको इतिहास द्रौपदिजिको * सारा बुझाईकन् ॥६२॥
हुन् यी इन्द्र-स्वरूप, द्रौपदि अघी * 'सौभाग्यदेवी' थिइन् ।
ऐल्हे पाण्डु-कुमार यी हुन गए * तिम्री सुता ती भइन् ॥
भन्नूभो जब व्यासले नृपतिको * सम्पूर्ण शंका गयो ।
वेदव्यास मुनी उठेर कुटिमा * सानन्द पाल्नूभयो ॥६३॥
डाकी उत्तम विप्र वेद विधिले * दानादि धेरै दिए ।
ती पाँचै जनलाइ पाँच दिनमा * श्री द्रौपदी सुम्पिए ॥
पाई उत्तम विप्र वेद विधिले * दानादि धेरै दिए ।
धेरै सम्पति दास-दासि नृपती * -ले दाइजोमा दिए ॥६४॥

नाना रत्न सुवर्ण धेर हरिले * त्याहाँ पठाई दिए ।
पाई त्यो उपहार उत्तम सबै * सानन्द राखी लिए ॥
गर्दा आग्रह भूपले घरि-घरी * पर्दैन जानू कहीं ।
लागे बस्न सबै मिलेर खुशिले * शंका नमानी त्यहीं ॥६५

दुर्योधन मन्त्रणा–

पाँचै पाण्डवको विवाह हुन गो * श्री द्रौपदीजी सित ।
गर्जन्छन् अहिले निकै द्रुपदजी * तिन्को चिताई हित ॥
यो संवाद सुनेर आत्तिन गए * अत्यन्त दुर्योधन ।
विन्ती पारिलिए पितासित गई * सान्है दुखाई मन ॥६६॥
सल्लाहा सबले मिलीकन गरे * कर्तव्य के हो भनी ।
मानू पर्छ लडेर दुष्ट शकुनी * भन्थ्यो अगूवा बनी ॥
राख्नू पर्दछ शत्रुलाइ वशमा * नीती पुऱ्याई कन ।
भन्थे भूरिश्रवा हुँदैन अहिले * हामी वृथा कुर्लन ॥६७॥
सम्झाए धृतराष्ट्रलाइ हितका * धेरै कुरा भीष्मले ।
आधा राज्य दिई मिलाउ अहिले * डाकी यहाँ प्रेमले ॥
आफ्ना हुन् ति पनी तिमी कुटिलता* गर्छौ वृथामा किन ?
योग्यायोग्य स्वयं विचार गरिल्यौ* यो राज्य आधा दिन॥६८
जे जे भीष्मजिले भने विदुरले * त्यो बात सारा सुनी ।
राजालाइ भने समर्थन गरी * साँचो कुरा हो भनी ॥
बोले श्री धृतराष्ट्र बात हितको * आज्ञा भयो भीष्मले ।
आधा राज्य म दिन्छु पाण्डवहरू * आउन् यहाँ प्रेमले ॥६९॥
येती बात गरी गएपछि सबै * एकान्त पारी कन ।
लागे भूपतिलाइ भन्न यि कुरा * श्री कर्ण दुर्योधन ॥

थाप्नू हुन्छ हजुरले पनि सही * तिन्का कुरामा किन !
खाई नून हजुरको किन भने * यो राज्य आधा दिन॥७०
रक्षामा जबसम्म ती द्रुपदको * बस्छन् त्यहाँ पाण्डव ।
पार्नु पर्छ विभेद झट्ट अनि पो * ती छुट्टिनेछन् सब ॥
मार्नू पर्छ गरेर यत्न पहिले * त्यो भीमलाई अनि ।
बाँकी चार त कर्णका शरहरू * लागेर मर्छन् खुनी ॥७१॥
मार्नू पर्दछ शत्रुलाइ सहजै * तिन्ले भनेको सुनी ।
बोले श्री धृतराष्ट्रजी मुसुमुसू * हाँसी मनैमा गुनी ॥
हे बाबू ! म छुच्चो बनूँ विदुरका * सामू वृथामा किन !
जे भन्छौ तिमिहेरुले म त सदा * मान्छू खुशी भैकन॥७२॥
गर्थे यै रितका कुरा तिनिहरू * एकान्त पारी यहाँ ।
द्रोणाचार्य र भीष्म औ विदुरजी * पौंचेर राजा कहाँ ॥
गर्थे कर्ण निकै बढीकन कुरा * कर्तव्य यो हो भनी ।
रोकी द्रोणजिले भने किन वृथा * बोल्छौ मपाइँ बनी॥७३॥
हे राजन् ! खुसिले पठाउनुहवस् * मानीस चाँडै अब ।
पाञ्चाली अनि कुन्तिका सँग सबै* आउन् यहाँ पाण्डव ॥
यो आज्ञा गुरुको सुनी नृपतिले * स्वीकार गर्दा भए ।
आज्ञाले धृतराष्ट्रको विदुरजी * तत्काल त्याहाँ गए ॥७४॥
सारा बात बुझाइ पाण्डवहरू * -लाई लिई फर्किए ।
आधा भाग लगाइ राज्य नृपले * सानन्द सुम्पी दिए ॥
इन्द्रप्रस्थपुरी बनाइ बलियो * बस्ता भए पाण्डव ।
त्याहाँबाट बिदा भई कन हिंडे * फर्कैर फेरी सब ॥७५॥

अर्जुनको तीर्थ-यात्रामा उलुपी विवाह, अप्सरोद्धार, सुभद्राहरण

राजन् ! नारदजी कुनै समयमा * डुल्दै पुगेथे त्यहाँ ।
पूजा पाण्डवले गरे ति मुनिको * खूशी भई मन् महाँ ॥
बोले नारद—पाँच भाइहरूकी * छन् एक पत्नी सती ।
बाँधी एक नियम् रहे कलहको * होवैन शङ्का रति ॥७६॥
देख्छु प्रेम मिलाप भाइहरूमा * तिम्रो असाध्यै तर ।
भन्छु एक कथा उदाहरणका * निम्ती छ त्यो सुन्दर ॥
बाबू हो ! उपसुन्द, सुन्द ति दुवै * भाई थिए राक्षस ।
ब्रह्माको वरदानले हुन गए * ती पापमा उद्यत ॥७७
पाई कष्ट अनेक देवहरूले * विन्ती गरेथे जब ।
स्त्रीमा रत्न तिलोत्तमा कन भने * ब्रह्मा खुशी भैकन ॥
चाँडै नै उपसुन्द-सुन्द दुइमा * फाटो गराऊ भनी ।
तिम्रै निम्ति लडेर आपुस महाँ * मर्छन् दुवै ती खुनी॥७८॥
गर्थे दुष्टहरू विहार खुशिले * जुन् ठाउँमा त्यो घरी ।
यो आज्ञा विधिको सुनीकन पुगिन् * त्यै ठाउँमा सुन्दरी ॥
सा-हे मेल-मिलापले तिनीहरू * बस्ने भए तापनि ।
देखी कामिनिलाइ कामवश भै * उन्मत्त जस्ता बनी ॥७९॥
लागे तान्न समाति हात बलले * एकेक आफैं तिर
'मेरी हो' त नि भन्दथे खल, भई * अत्यन्त क्रोधातुर ॥
लागे लड्न लिएर खड्ग र गदा * हो मेरि पत्नी भनी ।
काटाकाट गरी मरे खल दुवै * भाई भए तापनी ॥८९॥
तस्मात् द्रौपदीका निमित्त झगड़ा * कैल्हे नपर्ने गरी ।
राखी एक नियम् मिलीकन बसे * पाँचै जना राम्ररी ॥

अर्ती नारदको सुनेर खुशिले * राखे तहाँ बन्धन ।
यौटाका सँग एक वर्ष सुमुखी * बस्थिन् खुशी भैकन ॥८१॥
जस्ले हेर्छ गएर त्यस् बखतमा * कस्तै परे तापनी ।
त्यो बस्ला गइ बार्‍ह वर्ष वनमा * हो पाप मेरो भनी ॥
राखे बन्धन त्यो जसै मुनि पनी * सानन्द फर्की गए ।
धेरै राज्य जितेर पाण्डवहरू * त्याहाँ बसेका थिए ॥८२॥
चोरी गो-धन चोरले लगिदिए * यौटा कुनै विप्रको ।
आए गर्न पुकार ती द्विज त्यहाँ * आफ्नू ठुलो कष्टको ।
दाज्यूका घरमा सुरक्षित गरी * शस्त्रास्त्र जम्मा थिए ॥
नाघी बन्धन पार्थले ति द्विजको * रक्षार्थ झिक्ता भए ॥८३॥
पक्री चोरहरू कुटेर सहजै * गाई फिराई लिए ।
पाई गो-धन विप्रले खुशि भई * आशीष धेरै दिए ॥
दाजूलाइ भने म जान्छु वनमा * यो नाघियो बन्धन ।
बोले धर्म-कुमार पार्थ ! तिमिले * पर्दैन जानू वन ॥८४॥
दाजूका घरमा पसेर कसरी * पापी भयौ लौ भन ।
माफी दिन्छु स्वयं नजाउ यसरी * त्यागेर हामी कन ॥
सम्झाए बहुतै नमानि वनमा * जाँदा भए अर्जुन ।
गङ्गाद्वारा पुगी बसे जलमहाँ * ती स्नान गर्नाकन ॥८५॥
यौटी त्यैं जलमित्र नाग-पतिकी * कन्या उलूपी थिइन् ।
खुट्टा अर्जुनको समाइ तिनिले * पाताल तान्दै लगिन् ॥
सोधे-हे सुमुखि ! मलाइ यसरी * के हेतु ल्यायौ भनी ।
बोलिन् ती-म त कामका वश परी * सार्‍है भएँ दुःखिनी ॥८६॥
इच्छा पूर्ण गराइबक्सनुहवस् * स्वामी ! हजुर्ले अब ।
तिन्को भाव त धर्मसम्मत बुझी * इच्छा पुर्‍याए तब ॥

जन्म्यो एक त्यहीं बली सुत 'इरा * -वान्' नामको सुन्दर ।
गङ्गाद्वार महाँ फिरीकन हिंडे * श्री पार्थ पूर्वै तिर ॥८७॥
धेरै तीर्थ डुली अनेक थरिका * सत्कर्म गर्दै गए ।
फेरी ती मणिपूरका नृप कहाँ * सानन्द पुग्दा भए ॥
मागे भूपतिकी सुपुत्रि तिनले * चित्राङ्गदा सुन्दरी ।
सोधी देशहरू बिहा गरि दिए * ती भूपले राम्ररी ॥८८॥
यौटा पुत्र त्यहाँ पनि हुन गयो * चित्राङ्गदाको जब ।
एल्हे जान्छु भनी बिदा भइ हिंडे * तीर्थादि डुल्दै तब ॥
आँटे पस्न सुभद्र नाम नदिमा * ती स्नानका खातिर ।
ग्राहाले धरि पाउमा बल गर्‍यो * तानेर आफतिर ॥८९॥
ताने बेसरि पार्थले र जलको * बाहिर ल्याए जब ।
नारी दिव्य स्वरूपिणी हुन गई * त्यो रूप त्यागी तब ॥
सोधे–हे सुमुखी ! बताउ कसरी * तिम्रो भयौ दुर्गति ।
लागी भन्न–म अप्सरा अघि थिएँ * भो श्रापले यो गति ॥९०॥
मेरा चार सखीहरू पनि यहीं * छन् कष्टमा बेसरी ।
तिन्को श्राप पनी छुटाइ दिनुहोस् * राखी दया यो घरी ॥
यस्ता बात सुनेर ती सकलको * उद्धार गर्दा भए ।
जै जैकार गरेर स्वर्ग खुशिले * ती अप्सरा गैगए ॥९१॥
त्याहाँबाट हिंडेर फेरि ति पुगे * चित्राङ्गदाको घर ।
देखेथे सुत बभ्रुवाहन थियो * अत्यन्त नै सुन्दर ॥
पत्नीलाई भने गरेर सुतको * रक्षा, बसे क्यै दिन ।
मौका पाइ छिटै पठाउँछु यहाँ * मानीस मैले लिन ॥९२॥
त्याहाँबाट हिंडी प्रभास खुशिले * डुल्दै पुगे अर्जुन ।
आए भेट्न भनी सखाकन त्यहीं * श्री नन्दका नन्दन ॥

प्यारो मित्र भनी गरे प्रभुजिले * सानन्द आलिङ्गन ।
त्याहाँबाट लगेर द्वारतिमा * राख्नू भयो क्यै दिन ॥९३॥
बैन्ही उत्तम कृष्णकी त्यहिं थिइन् * योटी 'सुभद्रा' भनी ।
देखी रूप अमोल मोहित भए * ती सुन्दरीमा तिनी ॥
पाएथे जब वीर अर्जुनजिले * श्री कृष्णको सम्मति ।
क्षत्री-धर्म भनी हरीकन लगे * तिन्ले सुभद्रा सति॥९४॥
बोल्नूभो बलराम क्रोधित भई * त्यस्लाइ मार्छु भनी ।
सम्झाए हरिले र शान्त हुनुभो * आफैं दयालु बनी ॥
फर्काई गइ पार्थलाइ पुरमा * ल्याई विवाहा गरी ।
सुम्पेथे बहिनी स्वयं खुशि हुँदै * श्रीकृष्णले त्यो घरी ॥९५॥
पाई अर्जुनलाइ त्यो बखतमा * खूशी भए यादव ।
आज्ञाले हरिको गरे थरि-थरी * आनन्दले उत्सव ॥
त्याहाँबाट गई प्रभास तटमा * बाँकी बिताए दिन ।
फर्केथे घरमा लिएर सँगमा * प्यारी सुभद्रा कन ॥९६॥
ल्याई यादवले अनेक थरिका * वस्त्रदि आभूषण ।
धेरै सम्पति दाइजो भनि गरे * आनन्दले अर्पण ॥
क्यै दिन्मा अभिमन्यु जन्मन गए * छोरा सुभद्राजिका ।
पाँचोटा सुत द्रौपदी तिर भए * पाँचै जना वीरका ॥९७॥
ठूलो उत्सव दान धर्म र अरू * सत्कर्म धेरै गरे ।
दुःखी, दीन, प्रजा दरिद्र जतिको * दारिद्र्य सारा हरे ॥
रैती राजि गराइ धर्म-सुतले * राम्रो गरी शासन ।
आफ्ना वैरि अनेक भूपति जिती * बस्थे खुशी भैकन ॥९८॥
राजा श्वेतकिले गरे मख ठूलो * पैल्हे कुनै कालमा ।
धाराले घृतको अजीर्ण हुनगो * श्री अग्निका पेटमा ॥

ब्रह्मालाइ भने गएर तिनिले * संकष्ट आफ्नू जब ।
अग्नि, पार अजीर्ण शान्त सुखले * भस्मै गरी खाण्डव ॥९९
आज्ञाले विधिको गएर वन त्यो * आँटे डढाऊँ भनी ।
वर्षाई जल इन्द्रले गरिदिए * रक्षा दयालू बनी ॥
आज्ञाले शिवको सही दुख तिनी * पर्खी रहेका थिए ।
श्री कृष्णार्जुनलाइ देखि मनको * सन्ताप भन्दा भए ॥५००
इच्छा पूर्ण हुनेछ हामि दुइले * साहाय दिन्छौं भनी ।
भन्दा अर्जुनले ति 'पावक' भए * अत्यन्त खूशी अनि ॥
अर्पेथे हरिलाइ आयुध 'गदा' * कौमोदकी नामको ।
उस्तै अर्जुनलाइ 'गाण्डिव धनू' * ठोक्रो दिए बाणको ॥१॥
सारा शत्रु जितुन् भनी रथ दिए * मागेर ल्याई कन ।
रक्षा गर्न चढे त्यही रथमहाँ * श्री कृष्ण औ अर्जुन ॥



खाण्डव दाह

लागे पोल्न गएर त्यो वन ठुलो * श्री अग्निले खाण्डव ।
वर्षाए जल इन्द्रले रिस गरी * त्यो रोक्नलाई तब ॥२॥

रोके त्यो जललाइ बाणहरूको * वर्षा गरी पार्थले ।
लागे उड्न त्यहाँ भए जति सबै * जन्तूहरू वेगले ॥
आएथे जति देवता मिलि त्यहाँ * लड्ने इरादा धरी ।
पाई चोट प्रशस्त शस्त्रहरूको * भागे सबै त्यो घरी ॥३॥
देखी ती दुइको पराक्रम ठूलो * श्री इन्द्र त्याहाँ गए ।
बोले कृष्णजिलाइ माग वर क्यै * हे वीर ! इच्छा भए ॥
माग्नूभो हरिले सदा स्थिर रहोस् * हे इन्द्र ! यो मित्रता ।
मागे अर्जुनले सुरेन्द्र ! दिनुहोस् * शस्त्रास्त्रको योग्यता ॥४॥
बोले इन्द्र 'तथास्तु' कृष्णसंग औ* मौका परेका घरी ।
दिन्छु अर्जुन ! वीर शस्त्रहरूको * शिक्षा पछी राम्ररी ॥
येती बात भनेर स्वर्ग पुरिमा * श्री इन्द्र फर्की गए ।
आएथे जति देवता सँग महाँ * सम्पूर्ण जाँदा भए ॥५॥
जल्दा खाण्डव अश्वसेन मय औ * पक्षी ति शारङ्गक ।
बाँचेथे यति मात्र औ सब डढे * हात्ती कमीला तक ॥
श्री जन्मेजयले सुध्याउनु भयो * ती मात्र बाँचे किन ?
वैशम्पायनले भने नरपते ! * भन्छु म त्यो कारण ॥६॥
ज्ञानी उत्तम 'मन्दपाल' पहिले * ठूला तपस्वी थिए ।
निस्सन्तान भएर जीवन त्यसै * तिनले बिताई दिए ॥
तिनैं हो ऋण-पितृको कसरि लौ * भन्ने विचारी कन ।
जन्मेथे पछि पक्षि भैकन मुनी * शार्दूल कोही दिन ॥७॥
जन्माए सुत चार पितृहरूको * सारा तिरीयो ऋण ।
बस्थे यैं वनमा लिएर संगमा * ती चार छोरा कन ॥

आँटे त्याग्न शरीर मोह हुनगो * छोराहरूको जब ।
पारेथे मुनिले प्रसन्न तपले * श्री अग्निलाई तब ॥८॥
बोले अग्नि म दिन्छु माग मुनिजी* इच्छा भएको वर ।
बाँचुन् खाण्डव दाहमा सुतहरू * भन्दा भए सादर ॥
बाँचे कारण त्यैं परेर मुनिका * ती चार छोरा त्यहाँ ।
बाँचेथे मय 'पार्थका शरणा * आएँ म' भन्दा महाँ ॥९॥
यौटा उत्तम अश्वसेन बलियो * छोरो थियो नागको ।
माताले लिई पेटमा गगनमा * उड्दै थिई पुत्र त्यो ॥
काटेथे शिर पार्थले सहजमा * त्यो सर्पिणीको जब ।
बाँचेथ्यो उदरस्थ नाग सुत त्यो * श्री अग्नि देखी तब ॥१०॥
पाई गाण्डिव नामको धनु सखा * श्री कृष्ण संरक्षक ।
पारेथे वन-जन्तु खाक दुइले * खुशी भए 'पावक' ॥
लागे उन्नति गर्न पाण्डवहरू * राजा अनेकौं जिती ।
रैती राजि गराइ भाइ संगमा *बस्थे खुशी भैं अति ॥५११॥

॥ महाभारत आदिपर्व समाप्त ॥

*

# महाभारत-सभापर्व प्रारम्भः

मय दानवद्वारा सभाभवन निर्माण :—

येती कथा सुनि सकीकन भूपतीले ।
सोधे प्रसन्न भइ फेरि कथा क्रमैले ॥
भिन्नै थिए जब ति भाग लिई, दिएको ।
व्यर्थै विरोध किन कौरवले गरेको ॥ १ ॥
त्यो राजसूय मख पाण्डवले गरेका ।
सुन्छु सुधासरि कथा अरू जो भएका ॥
यस्तै अनेक सुनि प्रश्न ति भूपतिको ।
लागे सुनाउन कथा पहिले भएको ॥ २ ॥

ठूलो खाण्डव-दाहमा मय बच्यो * रक्षा गरे पार्थले ।
त्यस्को प्रत्युपकार गर्न मनमा * ठानेर त्यो दैत्यले ॥
लाग्यो भन्न—मलाइ जीवन दिने * हे वीर कृष्णार्जुन !
केही काम दिनूहवस् हजुरले * त्यो तिर्नलाई ऋण ॥३॥
यस्तो बात सुनी सकेर मयको * भन्दा भए पार्थले ।
त्यस्को प्रत्युपकार लिन्न म सखे !* जाऊ तिमी प्रेमले ॥
गर्छौ जिद्दि वृथा भने विनयले * श्री कृष्णलाई भन ।
आज्ञा हुन्छ जसो उसै गरि तिमी * आफ्नो बुझाऊ मन॥४॥

सोधेथे हरिलाई काम मयले * गर्छु भनी निश्चय।
आज्ञा भो हरिले बनाउ बलियो * दर्बार राम्रो मय ! ॥
त्यस्मा राख्नु सबै अलौकिक कुरा* कारीगरी सुन्दर।
यो आज्ञा हरिको सुनि मय गयो * त्यौं कामका खातिर ॥५॥



मयले श्रीकृष्णसँग सभा-भवन बनाउने आज्ञा मागेको

पैल्हे नै दरबार बिन्दुसरमा * यौटा बनेको थियो।
दैत्य श्री वृषपर्वले मख गरी * त्यो स्थान त्यागी दियो ॥
ल्यायो त्यौं सरजाम वीर मयले * सारा उखेली कन।
इन्द्रप्रस्थ महाँ सभा-भवनको * लाग्यो तयारी हुन ॥६॥
छन् राम्रा उच्च खाँबाहरू थरिथरिका, रत्नले टल्किएका।
अग्ला-अग्ला अटाली मणिमय बलिया, बार्दली घेरिएका ॥
घोटेका भूमि भित्ताभरि मणि सुनका, तेजले झल्किएका।
राम्रा-राम्रा तलाऊ बिच विविध चरा, पुष्पले शोभिएका ॥७॥

राखेथे परखाल लाख गजको * घेरेर चारै तिर ।
बुट्टा काढि गजूर बीच-बिचमा * राखी सबै सुन्दर ॥



मय-रचित सभा-भवन्

पंक्तीबद्ध गरी सजाइ गमला * छन् राखिएका पथ ।
दासी-दास थिए सुसज्जित सबै * मानूँ ति हुन् मन्मथ ॥८
भूमिमा जल झैं तथा जलमहाँ * भूमी सफा देखिने ।
राखे एक ठुलो सरोवर त्यहाँ * शंका उमारी दिने ॥
भूमीको पछि भार हर्न सजिलो * यो हुन्छ बाटो भनी ।
इच्छाले हरिको ठुलो श्रम गरी * पारे तयारी अनि ॥९॥
सारा वस्तु थिए सुरम्य सबको * मन्‌लाइ खैंची लिने ।
अर्को कोहि थिएन त्यो भवनको * सौन्दर्यमा दाँजिने ॥
हे राजन् ! मयले सभाभवन त्यो * तय्यार पार्‍यो जब ।
हेर्थे छक्क परी अलौकिक छटा * देखेर त्यस्को सब ॥१०॥
अर्पी धर्म-कुमारका चरणमा * सानन्द आफ्नू कृति ।
जाँदो भो मय वीर फर्कि घरमा * आनन्द मान्दै अति ॥

लागे बस्न त्यहाँ युधिष्ठिर गई * ती चार भाई सित ।
सिंहासन् बिचमा बसेपछि भए * श्रीइन्द्रझैं शोभित ॥११॥
ज्ञानी, सिद्ध, मुनि, महर्षि, द्विज औ * सत्पात्र योगी जन ।
डाकी पाण्डव वीरले दिन-दिनै * गर्थे सदा पूजन ॥
इच्छा अर्जुनको बुझीकन बसी * सानन्द केही दिन ।
पाल्नुभो हरि द्वारिकापुरि महाँ * तिन्को बुझाई मन ॥१२॥

नारदजी द्वारा सभाहरूको वर्णन :—

ज्ञानी नारदजी सबैतिर डुली * फर्कैर कोही दिन ।
आए पाण्डवको सभा भवनमा * ती भेट गर्नाकन ॥
देखी नारदलाई धर्म-सुतले * त्यागेर सिंहासन ।
पाँचै भाइ मिलेर वेद विधिले * गर्दा भए पूजन ॥१३॥
मेरो वंश पवित्र पारिदिनुभो * आई यहाँ यहाँ हे मुनि !
ऐले पाल्नुभयो कतातिर डुली * भन्नोस् दयालु बनी ॥
डुल्नू हुन्छ मुने ! चतुर्दश भुवन् * निर्बाध जाहाँ तहीं ।
अर्काको पनि यो सभा-भवन झैं * देख्नू भयो की कहीं ॥१४॥
बोले नारद भूपते ! गइ ठुलो * देखें सभा इन्द्रको ।
घेरा मात्र हजार योजन जती * जस्को छ पर्खालको ॥
बस्छन् सिद्ध-मुनि, महर्षि, नृपती * घेरा लगाई जहाँ ।
गर्छन् गान ति सिद्ध-चारण मिली * जस्को सुकीर्ति त्यहाँ ॥१५
डुल्छन् सुन्दर अप्सरागण जहाँ * गाना बजाना गरी ।
ज्ञानी ब्राह्मण वेदपाठ स्तुतिले * गर्छन् सदा चाकरी ॥
वस्त्राभूषणले सुसज्जित सबै * -का माझमा इन्द्रको ।
शोभायुक्त सभा अलौकिक छ त्यो * हे भूपते ! स्वर्गको ॥१६

डुल्दै श्री यमराजको पनि सभा * देखें गई सुन्दर ।
घेरेको छ हजार योजन जती * पर्खाल चारैतिर ॥
जस्मा रोग र भोक, प्यासहरूको * लाग्दैन केही डर ।
गर्छन् गान सुअप्सरा गण तथा * गन्धर्व विद्याधर ॥१७॥
राजा सोमक, सिद्ध,मत्स्य र शिवी* नाभाग, पूरू, गय ।
मान्धाता र ययाति औ ध्रुव, निमी* दुष्यन्त, श्री सृञ्जय ॥
यस्तै धेर अरू पनी नरपते ! * देखें बसेका त्यहाँ ।
सेवामा रत सिद्ध पितृहरू छन् * सारा बसेका जहाँ ॥१८॥
देखेथें यमराजको नगिचमा * तिम्रा पिताजी कन ।
शोभामा यमकै समान अरुको * मैले कतै देखिनँ ॥
राजन् ! हेर्छु भनी सभा वरुणको * डुल्दै गएको थिएँ ।
अग्लो खूब फराकिलो चहकिलो * तिन्को सभामा पुगें॥१९॥
राम्रा वृक्ष, तलाउ, पक्षि-जलको * शोभा छ ठूलो जहाँ ॥
बाली, रावण औ बली नृपहरू * देखें बसेका त्यहाँ ॥
सारा नाग, नदी र पर्वत तथा * गन्धर्व विद्याधर ।
देखें चाकरिमा थिए वरुणका * सम्पूर्ण चारैतिर ॥२०॥
गर्थे माझमहाँ बसी वरुणजी * आनन्दले शासन ।
देख्ता दिव्य सभा प्रसन्न हुनगो * हे भूप ! मेरो मन ॥
हेर्छु श्रेष्ठ कुबेरको पनि सभा * भन्दै पुगें क्वै दिन ।
बस्थे श्री शिव, पार्वती वरिपरि * राखेर आफ्ना गण॥२१॥
सारा पर्वत, यक्ष, राक्षस तथा * गन्धर्व विद्याधर ।
शोभायुक्त कुबेरको हुकुममा * देखें सबै तत्पर ॥
इच्छाचारि सभा यिनै नयनले * देख्ता म खुशी भएँ ।
पाई दर्शन शम्भुको म कुटिमा * फर्कर जाँदै थिएँ ॥२२॥

भेटी भास्करलाइ बीच पथमै * ढोगी दिएँ सादर ।
सोधें 'फिर्नुभयो कहाँ गई' भनी * तिन्को गरी आदर ॥
आएँ ब्रह्म - सभा पुगीकन मुने ! * आज्ञा भयो सूर्यले ।
हेर्छु सोहि सभा गएर म पनी * बिन्ती गरें प्रेमले ॥२३॥
आज्ञा भो रविले सहर्ष विधिको * पैल्है तपस्या गर।
देख्नेछौ पछि हे मुने ! सहजमा * ब्राह्मी-सभा सुन्दर ॥
आज्ञाले विधिको हिमालय गई * थालें तपस्या जब ।
कयौं दिनमा रविले पुगीकन भने * जाऊँ मुने, लौ अब॥२४॥
हेर्छु ब्रह्म - सभा भनीकन पुगें * श्री सूर्यका साथमा ।
त्यस्को हे नरपाल ! छैन उपमा * अर्को कुनै स्थानमा ।
झल्केको मणिज्योतिले दस दिशा * पारी सबै उज्ज्वल ।
बोल्ने पक्षिहरू सरोवर भरी * पानी छ झन् निर्मल।२५।
ज्ञानी अत्रि, वाशिष्ट, गौतम भृगू * प्रह्लाद औ कर्दम ।
दुर्वासा, क्रतु, अङ्गिरा ऋषि मुनी * बस्छन् त्यहाँ उत्तम ॥
सारा पितृ र यक्ष, वायु, ग्रह नौ * गन्धर्व औ देवता ।
चारैतर्फ बसालि आफु बिचमा * बस्छन् सबैका पिता ।२६।
पुण्यात्मा र सुमूर्ति धारण गरी * वेदादि गर्छन् स्तुति ।
देखेथें नृपते ! उपस्थित त्यहाँ * प्राणी गएका जति ॥
साऱ्है दुर्लभ त्यो सभासरि अरू * देख्दीनँ ब्रह्माण्डमा ।
तिम्रो झैं अरू कोही देखिनँ सभा * राम्रो भयो पृथ्विमा ॥२७॥
यस्तै नारदले सभा भवनको * धेरै गरे वर्णन ।
सोधेथे बिचमा युधिष्ठिरजिले * तिन्लाई रोकी कन ॥
पाए उत्तम लोक के गरि मुने ? * राजा हरिश्चन्द्रले ।
के समचार यहाँ पठाउनुभयो * हाम्रा पिता पाण्डुले॥२८॥

तिन्को बात सुनेर नारदजिले * भन्दा भए प्रेमले ।
पाए त्यो पद 'राजसूय मख'-ले * राजा हरिश्चन्द्रले ॥
छन् मेरा सुत पाँच वीर अहिले * सम्पूर्ण राजा जिती ।
ल्याई सम्पति राजसूय ति गरुन् * आनन्द मान्दै अति ॥२९॥
बस्नेछु म त्रिशंकुका सुत सरी * भोगेर ठूलो सुख ।
भन्थे पाण्डुजिले मलाइ मनमा * मानेर सा-हैं दुख ॥
यो सम्चार सुनाइ नारद मुनी * सानन्द फर्की गए ।
पाँचै भाइ मिलेर त्यै विषयमा * सल्लाह गर्दा भए ॥३०॥

श्रीकृष्ण-युधिष्ठिर संवाद, जरासन्ध वध :—

मन्त्री बन्धु सखा छिमेकी पुरका * डाकी सबै सज्जन ।
बोले धर्मकुमार हे सुजन हो ! * संकोच त्यागी भन ॥
गर्छु लौ मख राजसूय सबले * सल्लाह दिन्छौ भने ।
'हो यो योग्य कुरा' भने सकलले * कीर्ती ठुलो फैलिने ॥३१॥
गर्नै पर्छ भनेर सम्मति दिए * मन्त्रीहरूले जब ।
होला पूर्ण कसो गरी मख भनी * चिन्तित् थिए पाण्डव ॥
राम्रो चित्त बुझेन धर्म-सुतको * तत्काल डाकी चर ।
बोले-कृष्णजिका परी चरणमा * ल्याऊ यहाँ सादर॥३२॥
हावाको गतिले गएर चरले * सम्पूर्ण बिन्ती गर्‍यो ।
चाँडै नै रथमा चढेर पुरमा * श्री कृष्ण पाल्नूभयो ॥
पाँचै भाई मिलेर पूजन गरे * आनन्द मानी जब ।
सोधे धर्मकुमाले कर दुवै * जोडेर हे माधव !॥३३॥
गर्नै सुन्दर राजसूय मखको * इच्छा भयो मन् महाँ ।
आज्ञा पाउँ हजूरको त सहजै * यो हुन्छ पूरा यहाँ ॥

इच्छापूर्ण गराइ वक्सनुहवस् * सर्वज्ञ मेरो अब ।
सल्लाहा बलियो दिने हजुर भैं * क्वै छैन हे माधव ! ॥३४॥
विन्ती धर्म-कुमारको सुनिसकी * आज्ञा भयो कृष्णले ।
पृथ्वीका सब भूपतीहरु जिती * आफ्नो ठुलो शक्तिले ॥
ल्याइ सम्पति राजसूय मखको * दीक्षा लिनोस् भूपति !
राजा एक बली छ त्यो मगधको * उद्दण्ड औ दुर्मति ॥३५॥
भागी द्वारवती गएँ म डरले * भन्ने विचारी लिनोस् ।
त्यस्लाइ नजिती भनूँ म कसरी * त्यो यज्ञ गर्नुहवस् ॥
शम्भूलाइ बली म दिन्छु नृपको * भन्ने लिई दुर्मति ।
राखेको छ थुनेर भूपतिहरू * पृथ्वीभरीका जिती ॥३६॥
मानू पर्छ कुनै सुयुक्ति गरि त्यो * दुष्टात्मलाई अनि ।
पूरा हुन्छ हजूरको मख कुनै * पर्दैन बाधा पनि ॥
वार्ताले हरिको युधिष्ठिर भए * अत्यन्त चिन्तातुर ।
दाजूको बुझि भाव भीम विरले * भन्दा भए सादर ॥३७॥
चिन्ता त्यागिदिनोस् गई मगधको * माछु म राजा कन ।
छन् मेरा सँगमा सहायक स्वयं * रक्षार्थ कृष्णार्जुन ॥
सुन्नूभो हरिले वृकोदरजिले * सेखी गरेको जब ।
वैरीको बल क्यै नजानि सहसा * हो योग्य बोल्नू कब ! ॥३८
गर्छन् चाकरी भूपती पृथिविका * सारा जरासन्धको ।
जस्को हेर्न समर्थ छैन मुखमा * त्यस्लाइ मार्ने छ को !
बोले धर्मकुमार बात हरिको * आश्चर्य लाग्दो सुनी ।
इच्छा भङ्ग भयो म जान्छु वनमा * हे कृष्ण, योगी बनी ॥३९॥
दाजूको बुझि भाव पार्थ विरले * विन्ति गरे सादर ।
हामीछौं अहिले वृथा हुनुपर्‍यो * के हेत चिन्तातुर ॥

मान्छौं मगधेन्द्रलाइ सहजै * हामीहरूले गई ।
बोल्ले अर्जुनको कुरा सुनि हरी * हाँस्तै दयालू भई ॥४०॥
नीतीपूर्वकका कुरा जति भने * श्री पार्थले यो घरी ।
गर्नूपर्दछ सोहि माफिक गई * आफ्नो कुरा राम्ररी ॥
यस्तो बात गरी युधिष्ठिरजिको * राम्रो बुझाई मन ।
त्याहाँबाट बिदा भईकन हिंडे * श्रीभीम, कृष्णार्जुन॥४१॥
बाधा जो पथमा परे सकल ती * थिच्दै र मिच्दै गए ।
पारी स्नातक विप्रको स्वरूप ती * सानन्द पुग्दा भए ॥
पुग्दा तीन जना ठुलो नगरमा * उत्पात धेरै भयो ।
डाकी श्री मगधेन्द्रले द्विजहरू * शान्ति गराई लियो ॥४२
राजाका नजिकै अबाध गतिले * पुग्दा भएथे जब ।
आँटे पूजन गर्न ती अतिथिको * आनन्द मान्दै तब ॥
आज्ञा भो हरिले दुबै यि अहिले * छन् विप्र मौन-ब्रती ।
रात्रीमा जब बोल्दछन् अनि पुजा * गर्नूहवस् भूपति ! ॥४३॥
यो आज्ञा नृपले सुनी अतिथिको * राखे व्यवस्था गरी ।
रात्रीमा तिनि गर्छु पूजन भनी * लाग्दा भए राम्ररी ॥
देखी रूप छटा अलौकिक त्यहाँ * आश्चर्य मानीकन ।
सोधेथे मगधेन्द्रले तिमीहरू * को हौ नढाँटी भन॥४४॥
भन्छौ ब्राह्मण हुँ, म चिह्न तनमा * देख्दैछु भूपालको ।
योद्धा क्षत्रियकै छ स्पष्ट करमा * ठेला धनू बाणको ॥
मुख्य द्वार त्यजेर भाँचि बलियो * पर्खाल आयौ किन ?
जस्तो सुन्छु कुरा म आचरणमा * त्यस्तो सफा देख्दिन॥४५
शेखी युक्त कुरा सुनेर नृपको * आज्ञा भयो कृष्णले ।
सोझै पस्नु हुँदैन शत्रु घरमा * राजन् ! यही नीतिले ॥

भाँची चैत्यकको ठुलो शिखर त्यो * फोरी नगारा पनि ।
आयौंहामि,म कृष्ण हूँ चिन तिमी * वैरी पुरानो भनी ॥४६॥
हौनन् ब्राह्मण यी युधिष्ठिरजिका * हुन् भाइ भीमार्जुन ।
धेरै भूपहरू थुनेर घरमा * राखी रहेछौ किन ?
छाडी देउ तुरुन्त भूपतिहरू * निर्दोष छन् ती सब ।
मान्दैनौ तिमी यो कुरा यदि भने * लौ लड्न आऊ अब॥४७
नीतीयुक्त कुरा सुनेर हरिको * शेखी गरी बेसरी ।
बोले श्री मगधेन्द्र भूपतिहरू * छाड्दीनँ मैले डरी ।
लड्ने मन् छ त द्वन्दयुद्ध गरिल्यौ* आनन्द मानी कन ।
एकैपल्ट तिनै जना कि दुइ वा * एकेक लड्छौ भन ॥४८॥
आज्ञाले हरिको खडा हुन गए * श्री भीम योद्धा जब ।
मत्ता हात्ति सरी जरासुत पनी * आए अगाडी तब ॥



जरासन्ध-वध

लागे लड्न दुवै समान बलका * योद्धा हुनाले गरी ।
गर्थे मुष्टि प्रहार वज्र सरिको * आवाजले बेसरी ॥४९॥

केल्ले कम्मरमा समाति बलले * तानेर आफ्तिर ।
पच्छार्थे जब भूमिमा घरि-घरी * भै क्रोधले आतुर ॥
निद्रा, भोक त्यजी विते दिन जसै * लड्दै ति सत्ताइस ।
थाके भीम भनी दिए प्रभुजिले * शक्ति तथा साहस ॥५०॥
सिन्का एक चिरेर फ्याँकिदिनुभो * संकेतमा कृष्णले ।
त्यो संकेत बुझेर भीम विरले * पक्री ठुलो वेगले ॥
केही बेर घुमाउँदै रिस गरी * आकाशमा बेसरी ।
पच्छारी कन भूमिमा पयरले * यौटा थिचे राम्ररी ॥५१॥
अर्को पाउ समाइ क्याँक दुइटा * पारे जरासन्धको ।
मुर्दा देह भई ढल्यो जमिनमा * तत्काल त्यो दुष्टको ॥
राजा मुक्त गरे गएर पहिले * जो-जो थुनामा थिए ।
डाकि श्री सहदेवलाइ हरिले * त्यो राज्य सुम्पीदिए॥५२
पूजा श्री हरिको गरे सकलले * उद्धार - कर्त्ता भनी ।
जान्छौं साथमहाँ सबै हजुरको * सानन्द हामी पनि ॥
इच्छा ती सबको बुझेर हरिले * स्वीकार गर्नू भयो ।
यो संवाद सुनी युधिष्ठिरजिको * सम्पूर्ण चिन्ता गयो ॥५३
सोध्नूभो हरिलाइ धर्म-सुतले * के गर्नुपर्ला अब ।
जे गर्दा शुभ हुन्छ पाउँ सजिलो * शिक्षा उही माधव ! ॥
आज्ञा भो हरिले सबै नृप जिती * ल्याउन् ठुलो सम्पति ।
चारै भाइ पठाउनोस् हजुरले * तत्काल हे भूपति ! ॥५४॥
डाके भाइहरू युधिष्ठिरजिले * आज्ञा हरीको सुनी ।
बोले भूप सबै जिती पृथिविका * सम्पत्ति ल्याओ भनी ॥
दाजूको सुनि यो हुकूम् अघिसरे * जान्छौं भनी अर्जुन ।
जित्नू उत्तरमा गएर तिमिले * सम्पूर्ण राजाकन ॥५५॥

आऊ भीम जितेर पूर्वतिरका * राजाहरू छन् जति ।
जाऊ हे सहदेव ! दक्षिण तिमी * ल्याऊ जिती सम्पति ॥
राजा पश्चिमतर्फका नकुलले * पारेर आऊ वश ।
ल्याऊ सम्पति, वेसरी समरमा * देखाउनू साहस ॥५६॥
दाज्यूको सुनि यो हुकूम् हुन गए * चारै जना तत्पर ।
बोकी शस्त्र हिंडे ति दिग्विजयका * खातिर चारै तिर ॥
केही कालमहाँ ति भूपतिहरू * चारै दिशाका जिती ।
आए भाइहरू लिएर सँगमा * धेरै थरी सम्पति ॥५७॥



पाण्डवहरूको दिग्विजय

राजसूय-यज्ञ र शिशुपाल-वध :—

आए कृष्ण असंख्य सम्पति लिई * फेरी त्यहाँ क्वै दिन ।
राखी आसनमा मिलीकन गरे * आनन्दले पूजन ॥
बोले धर्म-कुमार-भाइहरूले * ल्याए प्रशस्तै धन ।
मौका उत्तम राजसूय मखको * ऐल्हे छ, दीक्षा लिन ॥५८॥
यस्तो विन्ति सुनीसकेर हरिले * लौ हुन्छ भन्नूभयो ।
आफ्ना बन्धु समस्त भूपतिकहाँ * तत्काल निम्ता गरी ॥

आज्ञा धौम्यजिको लिईकन गरे * सामग्रि जम्मा गरी ।
राखे उत्तम स्थानमा थरि-थरी * वेदीहरू राम्ररी ॥५९॥
आज्ञाले हरिको युधिष्ठिरजिले * दीक्षा लिए यज्ञको ।
चारै वर्ण स्वयं उपस्थित भए * भेटी लिई रत्नको
आई व्यास स्वयं सहर्ष मखको * आचार्य बन्नूभयो ।
छानी उत्तम विप्र कर्म सबमा * आनन्दलेबाँडियो ।६०॥



श्री धर्मराज द्वारा भीष्मजीको स्वागत

आए श्री धृतराष्ट्र, कर्ण, शकुनी * से भाइ दुर्योधन ।
द्रोणाचार्य र भीष्म औ विदुरजी * बाह्लीक दुःशासन ॥
राजा शल्य र शाल्व औ कृप-गुरु * भूरिश्रवा पौण्ड्रक ।
छोरा ली शिशुपाल औ द्रुपदजी * सम्पूर्ण भूपालक ॥६१॥
सारा यादव वीर देशभरिका * साना-ठुला भूपति ।
आए यज्ञ महाँ लिएर सँगमा * भेटी दिने सम्पति ॥
दानी कर्ण भनेर श्रेष्ठ ढुकुटी * तिनलाई सुम्पी दिए ।
पाऊ ब्राह्मणको पखाल्दछु भनी * श्रीकृष्ण-राजी भए ॥६२॥

राखी उत्तम खान-पानहरूको * मालीक दुःशासन ।
जस्को योग्य छ काम जुन् उहि दिए* प्रत्येक छानी कन ॥
थाले उत्तम यज्ञ वेद विधिका * ज्ञाता सबै विप्रले ।
शोभा दिव्य थियो चतुर्दिक त्यहाँ * हेर्थे बसी प्रेमले ॥६३॥
बोले ब्राह्मण गर्नुहोस् नरपते ! * लौ अग्र-पूजा अब ।
सोधे भीष्मजिलाइ धर्म-सुतले * कर्तव्य आफ्नू तब ।
यस्तो प्रश्न सुनेर नारद तथा * श्री भीष्मजीले भने ।
अर्को छैन समस्त लोक भरिमा * श्रीकृष्णमा दाँजिने ॥६४॥



श्रीकृष्णको अग्रपूजा

ज्ञानी ब्रह्मस्वरूप श्रेष्ठ हरिको * गर्नू हवस् पूजन ।
थाले पूजन भीष्मको सुनि कुरा * शंका नमानी कन ॥
देखेथे शिशुपालले, खुशि भई * पूजा गरेको जब ।
लागे भन्न रिसाई धर्म-सुत औ * श्री भीष्मलाई तब ॥६५॥
बूढो भैकन भीष्मको मति पनी * बिग्रेछ राम्रौ गरी ।
मन्थे पूजन 'गोपको' गर भनी * के हेतुले यो घरी ॥

ज्ञानी भीष्म स्वयं युधिष्ठिरजिको * बिग्रेछ ऐल्हे मति ।
गर्छन् पूजन नीचको कसरि लौ * त्यागी सबै भूपती॥६६॥
यस्तै वाद-विवाद बेसरि गरी * ती जान लागे घर ।
सम्झाए तिनिलाइ धर्म-सुतले * राम्रो गरी आदर ॥
गर्दैनन् हरिको विरोध अरुले * बोल्छौ तिमी नै किन ?
आफ्नू मान घटाउँछौ किन वृथा * दुर्वाच्य बोलीकन । ६७॥
यस्तो श्रीशिशुपालले सुनिलिए * आक्षेप तिन्को जब ।
राता नेत्र गराई तीक्ष्ण स्वरले * बोले रिशाई तब ॥
तेरो माधव ! चिह्न छैन तनमा * छत्रादि भूपालको ।
पूजा थाप्न भइस् तयार कसरी * यस्तो ठूलो यज्ञको ॥६८॥
यस्तै क्षुद्र कुरा भनेर हरिको * निन्दा गरेको सुनी ।
आए भीम गदा लिएर करमा * यो दुष्ट मार्छु भनी ॥
रोके भीष्म उठी समाइ करमा * तत्काल श्री भीमको ।
लागे जन्मकथा सुनाउन सबै * तिन्लाइ त्यो दुष्टको॥६९॥
आँखा तीन र चार हात, गदहा * बोल्ने झै रोदन ।
गर्दै श्री दमघोषको कुल महाँ * पैदा भयो दुर्जन ॥
त्यस्तो शब्द सुनी डराइ नृपले * त्यस्लाइ फ्याँक्छु भने ॥
'छोरो हुन्छ बली नरेन्द्र, पछि' यो* आकाशवाणी भयो॥७०॥
जस्ले काखमहाँ लिंदा नयन औ * बाहु दुई खस्तछ ।
त्यस्को कारण मृत्युको नरपते ! * त्यो व्यक्ति नै बन्दछ ॥
जन्मे बालक रे ! अलौकिक भनी * सम्वाद फैल्यो जब ।
आए हेर्न भनी अनेक थरिका * मानीस राजा सब॥७१॥
राखिन् काखमहाँ लगेर सबका * रानी सशंकित बनी ।
पाल्नूभो बलराम कृष्ण शिशुको * हेरौं तमाशा भनी ॥

रानीले शिशुपाललाई हरिका * राखिन् लगी काखमा ।
तेस्रो नेत्र भयो विलीन र दुवै * बाहू खसे भूमिमा ॥७२॥



शिशुपालको जन्मकथा

देखी बालकको दशा मन महाँ * अत्यन्त चिन्ता परी ।
बोलिन् कृष्णजिकी फुपू तिमी दया* गर्नू सदा हे हरि ! ॥
आज्ञा भो हरिले फुपू, हजुरले * पर्दैन मान्नू डर ।
माग्नूहोस् वरदान दिन्छु मनको * सन्तोषको खातिर ॥७२॥
यस्को दोष भए पनी म कहिले * मार्दीनँ भन्ने वर ।
देऊ हुन्छ अनी मलाइ मनमा * विश्वास दामोदर ! ॥
आज्ञा भो हरिले म दोष शिशुको * माफी दिनेछु सय ।
चिन्ता त्याग्नुहवस् फुपू ! हजुरले * पर्दैन मान्नू भय ॥७४॥
बाबू भीम ! परेर कारण यही * बाँची रहेको छ यो ।
देख्दैछु विधिको विधान अहिले * यो दुष्ट मर्ने भयो ॥
यो वार्ता शिशुपालले पनि सुने * श्री भीष्म औ भीमको ।
थाले बोल्न अनेक दुर्वचन ती * निन्दा गरी कृष्णको॥७५॥

आज्ञा भो हरिले फुपू कन दिएँ * मैले अघी जुन् वर ।
सोही कारणले अभै तक बढी * बोली रहीछस् तर ॥
बाँच्तैनस् अब आयु शेष हुन गो * लौ मर्न हो तत्पर ।
यो आज्ञा हरिको सुन्यो तर पनी * मान्दै नमानी डर ॥७६॥
डाकी वीर सखा छिमेकि पुरका * आफ्ना सबै सैनिक ।
आयो खड्ग तथा लिएर करमा * शस्त्रास्त्र संहारक ।
त्यो देखी हरिले सुदर्शन लिए * क्रोधित भई हातमा ।
काटे त्यो शिशुपालको शिर, दुई * टुक्रा खस्यो भूमिमा॥७७
त्यस्को ज्योति मिल्यो गएर हरिमा * दुष्टै थियो तापनि ।
त्यो देखीकन पुष्पवृष्टि हुनगो * हे कृष्ण ! जै-जै भनी ॥
त्यस्का सैनिक औ सहायक जती * सम्पूर्ण भाग्दा भए ॥
पूरा शान्ति भएर यज्ञ अघिझैं * निर्विघ्न गर्दै गए ॥७८॥
गाई, वस्त्र सुवर्ण, भूमि र मणी * रत्नादि बाँड़ी कन ।
पारे तुष्ट सबै ऋषी-मुनिहरू * आचार्य औ ब्राह्मण ॥
पाँचै भाइ मिलेर स्नान अवभृत् * गर्दा भएथे जब ।
यस्तो यज्ञ भएन काहिं कहिल्यै * भन्थे गएका सब ॥७९॥
कीर्ती वृद्धि भएर त्यो बखतमा * खूशी भए पाण्डव ।
देखी यज्ञ समाप्ति भूपतिहरू * फर्की गएथे सब ॥
केही काल पछि बिदा भइ गए * द्वारावती श्री हरी ।
इन्द्रप्रस्थ भरी अनेक थरिका * उल्का गिरे बेसरी ॥८०॥
यो देखीकन श्री युष्ठिरजिले * अत्यन्त चिन्ता गरी ।
डाकी व्यासजिका परी चरणमा * सोधी लिएर राम्ररी ॥
देखिन्छन् अहिले अनेक थरिका * के हेतु उल्का यहाँ ।
यस्को हुन्छ भविष्य के भनि ठूलो * चिन्तापर्‍यो मन्‌महाँ ॥८१

बोले व्यास छ तेऱ्ह वर्ष तक यो * उत्पातको दुष्फल ।
मर्नेछन् सब वीर क्षत्रिय लड़ी * देख्छु म यस्को फल ॥
त्यस्को कारण बन्दछौ तिमि स्वयं * थाहैं नपाई कन ।
राखी आपुसमा मिलाप अहिले * गर्दै रह शासन ॥८२॥
देख्दैछु विधिको विधान बलियो * टर्दैन त्यो युक्तिले ।
पैल्हे कष्ट परे पनी पछि तिमी * बस्छौ ठुलो सौख्यले ॥
एती बात भनी हिंडी पनि गए * श्री कृष्ण द्वैपायन ।
सम्झी सोही कुरा युधिष्ठिरजिले * गर्दै रहे चिन्तन ॥८३।
चारै भाई नगीच डाकि मुनिको * उक्ति सुनाए सब ।
मैले बाँच्नु वृथा छ कारण बनी * यो देह त्यागछु अब ॥
बोले अर्जुन—बुद्धिमा भ्रम हुने * त्याग्नू हवस् मोह यो ।
नीतीपूर्वक राज्य शासन गरी * बस्नू भए भै गयो ॥८४॥
बोले धर्म-कुमार भाइहरु हो ! * यौटा प्रतिज्ञा गर ।
गर्दैनौं झगड़ा मिली रहनमा * हुन्छौं सदा तत्पर ॥
चारै भाइ मिली भने हजुरले * जे भन्नु होला सब ।
गर्छौं पालन त्यो हुकुम् मिलि सधैं * राम्रो नराम्रो सब ॥८५॥
यस्तै बात गरी युधिष्ठिरजिको * क्यै शान्त पारे मन ।
आएथे जति इष्ट-मित्र मखमा * फर्के खुशी भैकन ॥
दुःखी-दीन भए धनाढ्य मखमा * पाएर धेरै धन ।
कीर्ती वृद्धि गरेर धर्म-सुतले * गर्दै रहे शासन ॥८६॥

दुर्योधन मान-भङ्ग

वैशम्पायनले भने नरपते ! * सानन्द कोही दिन ।
हेर्छु दिव्य सभा भनी कन गए * फेरी ति दुर्योधन ॥

पानीको भ्रमले अनेक स्थलमा * लुगा उचाल्थे तिनी ।
पानीमा सहसा गईकन लड़े * त्यो भूमिनै होभनी॥८७॥
तिन्को दुर्गति देखि भीम विरले * हाँसी दिए बेसरी ।
त्यस्को शब्द सुनी भए जति सबै * हाँस्ता भए सुन्दरी ।
अन्धाका सुत अन्ध नै हुन गए * झैं ठान्दछु यो घरी ।
भन्दै खिल्लि उडाइ द्रौपदि पनी * हाँस्ती भइन् बेसरी ॥८८॥
रोके धर्म-कुमारले अघिसरी * यस्तो नगर्नू भनी ।
श्री दुर्योधन फर्किए मनमनै * अत्यन्त लज्जित बनी ॥
आएथे घरमा फिरेर जब ती * विक्षिप्त जस्ता भई ।
तिन्को दुर्गतिदेखि ती शकुनिले * सोधे नगीचै गई ॥८९॥
चिन्ता पर्न गयो वृथा हजुरमा * के हेतुले यो घरी ।
मामालाइ भने सुयोधनजिले * विस्तार बिन्ती गरी ॥
देखी वैभव कीर्ति धर्म-सुतको * आत्तिन्छ मेरो मन ।
मार्दा त्यो शिशुपाललाई अरु क्वै * बोले ? तिमि नै भन॥९०
हेर्नू उन्नति शत्रुको कसरि लौ * मैले घरैमा बसी ।
योभन्दा म त ठान्छु उत्तम बरू * जानू खरानी घसी ॥
यस्ता बात सुनेर फेरि शकुनी * भन्छन् बुझाई कन ।
तिम्रा बान्धव हुन् ति पाण्डवहरू * को द्रोह गर्छौकिन!॥९१॥
सक्छौ गर्न तिमी पनी मख ठुलो * सम्पूर्ण राजा जिती ।
गर्नान् पाण्डवले पनी खुशि भई * मद्दत् सकेको जति ॥
सक्तैनौ तिमी जित्न पाण्डवहरू * -लाई लड़ाई गरी ।
तिन्को मद्दत गर्न खातिर स्वयं * तैयार छन् श्रीहरी ॥९२॥
मान्दैनौ तिमी यो कुरा यदि भने * सल्लाह दिन्छु सुन ।
त्यस्ले पाण्डव वीरको सब जिती * पारी दिनू निर्धन ॥

जूवामा छलको विधान जति हो * मैले सबै जान्दछु ।
शत्रूको धन हर्न, पार्न वशमा * युक्ती ठुलो मान्दछु ॥९३
खेल्नै पर्छ भने त धर्म-सुतले * स्वीकार गर्छन् बरू ।
जान्दैनन् छल खेलका तर तिनी * युक्ती र नीतिहरू ॥
भन्नू पर्छ गई पितासँग सबै * राम्रो बुझाई कन ।
यो सल्लाह गरेपछी नृपकहाँ * पौंचेर दुर्योधन ॥९४॥
ठूलो वैभव पाण्डुका तनयको * देखे सुकीर्ति जति ।
गर्दै वर्णन त्यो सभा-भवनमा * आफ्नू भयो दुर्गति ॥
सम्झाए धृतराष्ट्रलाइ मनको * सन्ताप सारा जब ।
बोले भूपति पुत्रका सुनि कुरा * क्यै बेर सोची तब ॥९५॥
हे बाबू ! जति भन्दछन् विदुरले * हाम्रो चिताई हित ।
सोही माफिक गर्दछु सब कुरा * तिन्लाइ सोधी म त ॥
जूवा खेल्न हुँदैन कारण यही * होला पछी नाशको ।
देखी सम्पति द्रोह गर्नुछ वृथा * आफ्ना ति सद्बन्धुको॥९६
नीतीपूर्वकका कुरा अरू पनी * तिन्ले पिताको सुने ।
सान्है खिन्न भई सुयोधनजिले * फेरी बुझाई भने ॥
मेरो छैन हजूरलाई मनमा * माया दया क्यै पनि ।
भन्दैनन् कहिले पनी विदुरले * हो यूतराम्रो भनी ॥९६॥
अर्काको चलि बुद्धिमा हित भयो * कस्को, कहाँ, कुन् दिन !
गर्छु यत्न अवश्य पाण्डुसुतको * सम्पत्ति खोसी लिन ॥
येती बात भनेर दुःखित भई * फर्के ति दुर्योधन ।
देखी चाल कुपुत्रको नरपती * लागे निकै आत्तिन॥९८॥

विदुर-धृतराष्ट्र संवाद, द्यूत-भवन निर्माण, पाण्डव आगमनः–

डाकी त्यहाँ विदुरजीकन भूपतीले ।
इच्छा भने सब सुयोधनको क्रमैले ॥
बिन्ती गरे विदुरले बुझि भाव तिन्को ।
देखिन्छ स्पष्ट अब नाश हुने कुलैको ॥९९॥

काट्नू पर्छ अवश्य अङ्ग बलले * बिग्रन्छ जुन् त्यसकन ।
त्याग्नै पर्छ कुपुत्रलाइ कुलको * जाने पछी दुश्मन ॥
जूवा खेल्न हुँदैन योग्य जनले * आज्ञा छ यो नीतिको ।
सम्झाए यहि रीतिले विदुरले * रक्षार्थ यो देशको ॥१००॥

मानेनन् धृतराष्ट्रले हित हुने * शिक्षा थियो तापनि ।
जूवा खेल्न बनाउनू भवन त्यो * ठूलो र राम्रो भनी ॥
आज्ञा श्री धृतराष्ट्रको विदुरजी - * लाई सुनाए जब ।
पारे द्यूत सभा तयार सहसा * आश्चर्य लाग्ने तब ॥१॥

इन्द्रप्रस्थ गए चढेर रथमा * वायू गतीले तिनी ।
देखी पाण्डवले सुआदर गरे * आफ्ना हितैषी भनी ॥
हाम्रो के हित गर्नलाइ अहिले * पाल्नू भएको यहाँ ?
आज्ञा गर्नुहवस् अरू पनि कुनै * इच्छा भए मन्महाँ ॥२॥

लागे भन्न बुझाउँदै विदुरले * * विस्तार गर्छु सुन ।
आउन् हेर्न सभा तयार हुनगो * हाम्रो पनी सुन्दर ॥
जूवा खेल्नु बसेर बान्धवहरू * सारा मिली सादर ॥३॥

सोध्नु सञ्च बिसञ्च आपुसमहाँ * सन्तोषका खातिर ।
आए डाक्न त्यहाँ गएर खुशिले * हेर्नू जुवाको घर ॥
सोधे धर्म-कुमारले विदुरको * विस्तार सारा सुनी ।
जूवा खेल्न तयार को अरु त्यहाँ * छन् द्यत जान्ने गुणी ॥४॥

लागे भन्न बुझाउँदै विदुरजी * मैले सकेको जति ।
सम्झाएँ धृतराष्ट्रलाइ नगरौं * यस्तो भनी दुर्मति ॥
मानेनन् तिनिले परेर सुतको * जिद्दी र माया महाँ ।
जे भन्छौ तिमिले गएर म उही * भन्नेछु राजाकहाँ ॥५॥
बोले धर्म कुमार—छैन मनमा * इच्छा जुवाको तर ।
जो होला पछि, दैवको अघि सबै * न्यूह्राउँदैछन् शिर ॥
भन्नू जान्नँ कसोरि क्षत्रिय भई * डाके पछी सादर ।
मारा ज्ञान थियो विधान विधिको * नाघिन्न भन्ने तर ॥६॥
पाँचै भाइ र द्रौपदी सँग मिली * प्रस्थान गर्दा भए ।
हावा भैं गरि हस्तिनापुरमहाँ * तत्काल पौंची गए ॥
त्याएथे पथमै गई नृपहरू * गर्दै ठुलो आदर ।
पैहे श्री धृतराष्ट्रलाइ सबले * ढोगे गई सादर ॥७॥
ढोगेथे पदमा सुयोधनजिले * हुन् पूज्य मेरा भनी ।
भेटे द्रौपदिलाइ रानिहरुले * आनन्द मान्दै अनि ॥
राखे पाण्डवलाइ त्यैं भवनमा * सम्मानका साथमा ।
आए मञ्च विसञ्च सोधन शकुनी * ती भूपका पासमा ॥८॥
बोले धर्म-कुमारजी ! हजुरको * होला सवारी भनी ।
पर्खेका सब खेल्दछौं भनि जुवा * राजा र हामी पनि ॥
पाल्नूभो अव गर्नु पर्दछ लहड् * आनन्दका खातिर ।
तिनको भाव बुझेर धर्म-सुतले * आज्ञा गरे सादर ॥९॥
मामा ! यो धरिमा व्यसन्, सकलमा * जानेर जूवा कन ।
भन्छन् बीज हुनेछ क्रोध-छलको * त्यस्लाई ज्ञानी जन ॥
भन्नूभो कसरी मलाइ अहिले * लौ खेल जूवा भनी ।
इच्छा छैन मलाइ, यो विषयमा * जान्दीनँ केही पनि॥१०॥

गर्छौं जुन् धनले अनेक थरिका * सत्कर्म हामी त्यहाँ ।
गर्दैछौ धन खोस्न सोहि छलका * वार्ता वृथामा यहाँ ॥
मान्दैनन् कहिले पनी असल क्यै * यो द्यूत क्रीड़ा कन ।
हे मामा ! तिमि नित्य तत्पर रहू * यो वृत्ति त्यागीदिन॥११॥
नीतीपूर्वकका युधिष्ठिरजिले * वार्ता गरेथे जब ।
लागे बोल्न तुरुन्त धूर्त शकुनी * आनन्द मान्दै तब ॥
आज्ञा भो अहिले जती हजुरले * त्यो सत्य होला तर ।
जूवा खेल्नु लडाइँ गर्नु नृपको * कर्तव्य हो सुन्दर ॥१२॥
मान्नुहुन्छ भने हजूर मनमा * छल्छन् कि भन्ने डर ।
जूवा हेर्नुहवस् बसी कन परे * गर्दीनँ खेल्ने कर ॥



कौरव-पाण्डव द्यूत-क्रीडा

बोल्ले धर्मकुमार क्षत्रिय म हूँ * डाकेर आएँ जब ।
त्यागी धर्म हराइ भन्नु यसरी * खेल्दीनँ मैले अब ॥१३॥

एती बात भनी दुवै थरि वसी * थर्की फिंजाई दिए ।
बाजी थापि प्रशस्त सम्पतिहरू * ती खेल्न लाग्दा भए ॥
आई श्री धृतराष्ट्र, भीष्म, कृपजी * श्री द्रोण, कर्णादिक ।
जूवा हेर्न भनी बसे वरिपरी * राखेर संरक्षक ॥१४॥
थापे धर्मकुमारले मणि जडित् * माला फुकाली कन ।
मेरो जीत भयो भनी शकुनिले * तानी लिए त्यै क्षण ॥
थापे रत्नहरू प्रशस्त तिनले * फेरी रिसाई जब ।
'मेरै जीत भयो' भने कपटको * पाशा हुनाले सब ॥१५॥
देखे खूब अनीति त्यो विदुरले * अत्यन्त चिन्ता परी ।
सम्झाए धृतराष्ट्रलाइ कुलको * रक्षार्थ राम्रो गरी ॥
पैल्हे नै परिणाम हे नरपते ! * बिन्ती गरें तैपति ।
मान्दै मान्नुभएन त्यो हजुरले * निर्बुद्धि जस्तो बनी ॥१६॥
बिग्रेको अझ केहि छैन खुशिले * यो द्यूत रोक्नू हवस् ।
जानी दूषित अङ्ग यो सुत पनी * तत्काल त्यागी दिनुस् ॥
जाऊन् यी शकुनी पनी अब उठी * सानन्द आफ्नू घर ।
गर्दछन् छल छद्म यी किन वृथा * मान्दै नमानी डर ॥१७॥
गर्नेछन् जब क्रोध पाण्डवहरू * देखी अनीति यहाँ ।
टिक्ने छैन कुनै पनी अधिसरी * तिन्का अगाडी महाँ ॥
जूवामा छलले जितेर धन यो * पर्दैन खोसी लिन ।
मीठो बोलि गरे तयार रहनन् * सम्पत्ति सुम्पी दिन॥१८॥
धेरै यै रितले भने बिदुरले * नीती बुझाई कन ।
लागे भन्न रिसाई झट्ट बिचमा * तम्सेर दुर्योधन ॥
गर्दैछौ अरिपक्षको किन तिमी * बर्ता प्रशंसा यहाँ ।
ठान्छौ पाण्डव मात्र आफ्नु तिमिले* के हेतुले मनमहाँ ॥१९॥

हामीलाइ कुसाख ठानि यसरी * इज्जत् उतार्छौ किन !
गर्छौ, खाइ लगाइ हामीहरुकै * के हेतु निन्दा भन ॥
सल्लाहा म त केहि माग्दिनँ तिमी * ज्ञानी भए तापनि ।
बोल्दैछौ किन यो सभा बिचमहाँ * आफै मपाईं बनी ॥२०॥
जो आफ्ना घरमा बसी हित हुने * गर्छन् कुरा शत्रुको ।
यस्तालाइ त राख्न हुन्न घरमा * आज्ञा छ यो नीतिको ॥
सोही कारणले तिमी विदुरजी * इच्छा छ जाने जहाँ ।
जाऊ त्याग गरेर हामिहरूको * माया छ जो मन्महाँ॥२१
धेरै नै अपमान पूर्वक कुरा * तिन्ले गरेको सुनी ।
सम्झाए हितको कुरा विदुरले * यस्तो नगर्नू भनी ॥
मानेनन् जब श्री सुयोधन अनी * बोल्दै नबोली कन ।
लागेथे छल हेर्न त्यो शकुनिको * सार्‍है दुखाई मन ॥२२॥
हारेथे छलमा परेर खलको * त्यो राज्य औ वैभव !
थापे द्रौपदिका कुमार रिसले * ती पाँच भाई जब ॥
मेरै जीत भयो भनी शकुनिले * अत्यन्त हेलाँ गरी ।
बोले धर्म-कुमारको हृदयमा * बिझ्ने गरी बेसरी ॥२३॥
हार्नू भो सब सम्पती हजुरको * क्यै छैन बाँकी अब ।
के थापीकन खेल्नुहुन्छ अहिले * जूवा महाँ वैभव ॥
बोले धर्म-कुमार दुष्ट शकुने ! * यत्ती छ मेरो धन ॥
सक्नेछौ अनुमान गर्न कसरी * यो खेलमा लौभन ॥२४॥
हाम्रो वंश डुबाउने कलहको * यो बीज हो जान्दछु ।
दैवाधीन भएर तत्पर भएँ * यो खेलमा मान्दछु ॥
छैनन् व्यक्ति स्वतन्त्र स्वामि सबका* छन् एक नारायण ।
हे मामा ! तिमि व्यर्थमा अघिसरी *यस्मा बन्यौ कारण॥२५॥

लामा बाहु विशाल लोचन तथा * जो वीरमा श्रेष्ठ छन् ।
शेखी इज्जत शत्रुको समरमा * तत्काल जो हर्दछन् ॥
जूवामा तिनिलाइ थाप्न अनुचित्* हो जान्दछु तापनि ।
खेल्छु लौ सहदेवलाइ अहिले * थापी जुवाडी बनी ॥२६।
मेरो जीत भयो भनी शकुनिले * पाशा लडाई दिए ।
थाप्नूहोस् अब जे छ हे नरपते ! * हाँसेर भन्दा भए ।
बोले धर्म-कुमार जो छ भवमा * ज्ञानी तथा पण्डित ।
थाप्नू ठान्दिनँ योग्य श्री नकुलजी* लाई जुवामा म त ॥२७॥
यस्ता भाइ सुयोग्यलाइ अहिले * थाप्छु म बाजी महाँ ।
फ्याँके 'हुन्छ' भनेर ती शकुनिले * पाशा उचाली त्यहाँ ॥
मैले भाइ दुवै जितें नरपते ! * इच्छा छ के थाप्नको ।
बाजी राख्नुहवस् प्रसन्न मनले * हो खेल यो द्यूतको ॥२८॥
यस्ता बात सुनी युधिष्ठिर भए * अत्यन्त क्रोधातुर ।
इङ्गा झैं भइ तार्दथे समरमा * जुन् वीर भै तत्पर ॥
त्यस्ता अर्जुनलाइ राख्न अनुचित्* हो जान्दछु तापनि ।
जूवा खेल्दछु बाजि थापि तिनिको * ठूलो जुवाडे बनी ॥२९॥
पैल्हे झैं सहजै जिते शकुनिले * ती पार्थलाई जब ।
राता नेत्र गराइ धर्म-सुतले * भन्दा भए लौ अब ॥
मामा ! कैन समान वीर भवमा * जस्को गदा युद्धमा ।
मार्थे इन्द्र समान शत्रु सहजै * जुन् वीर संग्राममा ॥३०॥
हेर्दैछन् अहिले रिसाइ कन ती * आँखा घुमाई यहाँ ।
जूवा खेल्दछु भीमलाइ शकुने ! * राखेर बाजी महाँ ॥
पैल्हे झैं छलले जिते सहजमा * ती भीमलाई पनि ।
थापें धर्म-कुमारले शरीर नै * आफ्नू म खेल्छु भनी॥३१

तिन्को देह जिती सके शकुनिले * हाँसेर बिझ्ने गरी ।
राजन् ! गर्नुभयो अधर्म किन यो * सर्वज्ञले यो घरी ॥
पत्नी शेष छँदै त थापिनु स्वयं * मान्दीनँ राम्रो कुरा ।
खेल्नोस् द्रौपदि बाजि राखि मनको * पुग्नेछ इच्छा पुरा ३२॥
लागे भन्न रिसाइ धर्म-सुतले * यो द्यूत क्रीड़ा गरी ।
मामा ! नाश्न तयार छौ कुल दुवै * हाम्रो तिमी यो घरी ॥
जस्को छैन कुनै पनी पृथिवीमा * सौन्दर्यमा दाँजिने ।
छैनन् योग्य प्रिया ति द्रौपदि कसै* यो द्यूतमा राखिने ॥३३॥
जूवा खेल्छु तथापि दुष्ट शकुने ! * राखेर बाजी महाँ ।
पैल्हे झैं छलले जिते सहजमा * पाञ्चालिलाई त्यहाँ ॥



द्यूतमा पाण्डव पराजय

हाँसेथे शकुनी ठुलो विजयको * उल्लासमा बेसरी ।
श्री दुर्योधनले भने विदुरजी * -लाई नराम्रो गरी ॥३४॥

ल्याऊ द्रौपदिलाइ झट्ट तिमिले * डाकी सभामा अब ।
मेरा दास भए भनेर बुझिल्यौ * पाँचै जना पाण्डव ॥
त्यो दुर्योधनको कुरा विदुरले * यस्तो सुनेथे जब ।
बोले, मूर्ख ! म देख्दछु मरणको * वेला छ तेरो अब ॥३५॥
बोल्छस् पाण्डवलाइ छेड गरि जो * दुर्वाच्य तैंले यहाँ ।
त्यस्ले वंश विनाश पार्छ कुरुको * संग्राम भूमि महाँ ॥
दासी द्रौपदिजी कसो गरि भइन् * हे दुष्ट ! दुर्योधन ।
हारेथे धन राज्य धर्म-सुतले * भाई र आफ्नू तन ॥३६॥
आफु हारिइ द्यूतमा हुन गए * ती दास तेरा जब ।
हारे द्रौपदिलाइ कुन् नियमले * तैंले बता लौ अब ॥
गर्दैछस् छल छद्म दुष्ट ! कुलको * संहारका खातिर ।
धेरै यै रितका भने हित हुने * नीती बुझाई तर ॥३७॥
के मान्थ्यो सहसा थियो विजयमा* उन्मत्त दुर्योधन ।
उस्तै मित्र पनी थिए ति शकुनी * बोल्ने नसोची कन ॥
उल्टो गालि गऱ्यो अनेक रितले * पितृव्यलाई अनि ।
कृष्णालाइ लिएर आ गइ स्वयं * हे प्रातकामी ! भनी॥३८॥

द्रौपदी चीरहरण :—

स्वामीको सुनि यो हुकुम् विवश भै* दर्बारमा त्यो गयो ।
खोपीभित्र पुगेर द्रौपदि कहाँ * त्यो बात भन्दो भयो ॥
देवी ! द्यूतमहाँ युधिष्ठिरजिले * सर्वस्व हारी कन ।
हार्नू भो सहजै हजुर्कन पनी * जूवामहाँ यै क्षण ॥३९॥
जित्नूभो अहिले सुयोधनजिले * तिन्का घरैमा गई ।
गर्नू पर्दछ काम लौ हजुरले * दासी समान्की भई ॥

सोधिन् द्रौपदिले सुनीसकि कुरा * त्यस्ले भनेको सब ।
जूवा खेल्न थिएन क्यैं पनि अरू * ती भूपको वैभव ! ॥४०
पत्नी बाजि गरेर क्वै पुरुषले * खेल्दैन जूवा कहीं ।
हारे धर्म-कुमारले कसरि यो * पत्याउँ मैले यहीं ॥
यस्ता बात सुनेर द्रौपदिजिको * बिन्ती गर्‍यो दूतले ।
हारे वैभव राज्य भाइ र स्वयं * आफु पनी रोषले ॥४१॥
त्यस्को बात सुनेर द्रौपदि भइन् * क्यैं बेर चिन्तातुर ।
लामो श्वास गरेर दूतसंग यो * सोधी लिइन् सादर ॥
पैल्हे आफ्नु शरीर धर्म-सुतले * हारेर जूवा महाँ ।
की हारे पहिले मलाइ तिमिले * सोधेर आऊ यहाँ ॥४२॥
जानेछु बुझि भाव धर्म-सुतको * सामू सभामा अनि ।
फर्क्यो उत्तर माग्न दूत सहसा * तिन्ले भनेको सुनी ॥
जो-जो प्रश्न गरिन् ति द्रौपदिजिले* प्रत्येक सोधी कियो ।
लज्जा, धर्म विचारि धर्म-सुतको * वाणी स्वयं रोकियो ॥४३
त्यो देखीकन श्री सुयोधन स्वयं * बोल्ले उतर्सी त्यहाँ ।
तैंले भन्नु गएर दूत अहिले * आउन् ति सामूमहाँ ॥
सोध्नेछिन् तिनि जे सभासदहरू * दिन्छन् यहीं उत्तर ।
येती बात सुनेर दूत मनमा * मानेर ठूलो डर ॥४४
सोध्यो भन्नुपर्‍यो गईकन त्यहाँ * के बात मैले अब ।
त्यस्को भाव बुझी सुयोधनजिले * हाँसेर बोल्ले तब ॥
हे दुःशासन ! भीमको डर वृथा * मान्दैछ यो दूतले ।
गाह्रो मानिरहेछ जान अहिले * हे भाइ ! त्यैं हेतुले ॥४५॥
जाऊ द्रौपदिलाइ ल्याउ तिमिले * डाकी सभामा अब ।
तिम्रा दास भएर गर्न अहिले * के सक्दछन् पाण्डव ॥

दाज्यूको सुनि यो कुरा उठि गयो * तत्काल दुःशासन ।
कृष्णाका नगिचै पुगीकन भन्यो * हाँसेर सोही क्षण ॥४६॥
श्री दुर्योधनले जिते अब तिमी * दासी भई सुन्दरी ।
लज्जा त्याग गरी छिटो हिंड सभा * -मा द्रौपदी यो धरी ॥
त्यस्को बात सुनी डराइ मनमा * ती भाग्न लागिन् जब ।
लामा केश समाइ झट्ट खलले * तान्यो रिसाई तब ॥४७॥
लागिन् भन्न रुँदै नछो शरिरमा * हे दुष्ट दुःशासन !
ऐल्हे छु म रजस्वला छ तनमा * योटै लुगा दुर्जन !
जानू लौ कसरी म मान्यजन छन् * सारा बसेका त्यहाँ ॥
मानन् पाण्डवले तँलाइ यसरी * देखे भने छिन्महाँ ॥४८॥
विन्ती यै रितले गरिन् तर यसै * के मान्दथ्यो त्यो खल ।
थाल्यो केश धरी लछार्न रिसले * देखाउँदै झन् बल ॥
तानी यै रितले सभा बिच लग्यो * दुर्वाच्य बोल्दै जब ।
लागिन् भन्न रुँदै सभासदहरू * आज्ञा हवस् लौ अब॥४९
पैल्हे हार्नुभयो मलाई कि स्वयं * नै हारिनूभो यहाँ ।
पाऊँ उत्तर ठीक निर्णय गरी * यस्को सभा बीचमा ॥
यस्तो प्रश्न सुने त्यहाँ सकलले * ती द्रौपदीको तर ।
कोही बोल्न सकेन लज्जित भई * निहुर्‍यो सबैको शिर ॥५०
केही बेर पछी विनम्र स्वरले * श्री भीष्मजीले भने ।
सूक्ष्मै रूप छ धर्मको कसरि हो * त्यस्लाइ जानी लिने ॥
त्यागछन् भाइ र राज्य सम्पति सबै * किञ्चित् नमानी कन ।
त्यागदैनन् तर धर्म, धर्म-सुतले * हे द्रौपदीजी ! सुन॥५१॥
हामीलाई जिते सुयोधनजिले * भन्छन् इ आफैं जब ।
तिम्रो प्रश्न सुनी विवेचन यहाँ * को गर्न सक्ला अब ॥

हुन्छन् स्त्री पतिका सदा वशमहाँ * हो यो कुरा नीतिको ।
मैले सक्तिनँ ठीक उत्तर यही * हो, भन्नसक्नेछ को॥५२॥
यस्तो बात सुनिन् सभा बिचमहाँ * श्री भीष्मजीको जब ।
लागिन् गर्न विलाप रोई बहुतै * ती द्रौपदीले तब ॥
पत्नीको बुझि कष्ट देखी फजिती * त्यो खप्न गाह्रो भई ।
दाजूलाई भने ति भीम विरले * तत्काल साम्ने गई ॥५३
पत्नी ता कुलटा भए, पति सबै * हुन्छन् जुवाड़े कहाँ ।
खेल्दैनन् तिनीले पनी गृहिणी नै * राखेर बाजी महाँ ॥
भाई राज्य र सम्पती हजुरले * हार्दा सहेकै थिएँ ।
कृष्णाको दुख देखी क्रोध मनको * खप्नै नसक्ने भएँ॥५४॥
पोल्नेछु दुइ बाहुली हजुरका * तत्काल मैले जब ।
बल्दो अग्नि समान क्रोध मनको * क्यै शान्त होला तब ॥
ल्याऊ हे सहदेव ! अग्नि तिमिले * लौ बाल चाँडो भने ।
यो आज्ञा रिसको ति भीम विरको * सारा सभाले सुने ॥५५॥
रोके अर्जुनले नगर्नु अपमान् * हुन् पूज्य दाज्यू यिनी ।
जुवा खेल्नुभयो युधिष्ठिरजिले * हो धर्म मेरो भनी ॥
दोषी गर्नु वृथा छ दाजुकन लौ * यो बातमा यस् घरी ।
हाँस्नेछन् सब शत्रु देखि झगरा * हाम्रो, नराम्रो गरी ॥५६॥
बस्नुपर्दछ शान्त भैकन यहाँ * रक्षा गरी धर्मको ।
बिन्ती अर्जुनको सुनेर मनमा * शान्ती भयो भीमको ॥
देखी पाण्डव वीरको फजिति औ * संकष्ट ठूलो त्यहाँ ।
कृष्णालाई लछार्दथ्यो घरि-घरी * पक्रेर चुल्ठो महाँ ॥५७॥
श्री दुर्योधनको विकर्ण भनि जो * सत्पात्र भाई थियो ।
त्यस्ले क्रोधित भै सभा बिचमहाँ * यो बात सोधी लियो ॥

प्राणी छन् सब दैवका अधिनमा * भन्ने गरी निश्चय ।
हे प्यारी ! मनमा नमान तिमिले * आपत्तिको क्यै भय ॥१००
पत्नीका सँगमा कुरा गरिसकी * तिन्को बुझाई मन ।
भेजे पाण्डवलाइ डाक्न नृपले * त्यो प्रातिकामी कन ॥
त्यस्ले धर्म-कुमारका हजुरमा * सम्चार सारा दियो ।
दैवाधीन भएर धर्म-सुतको * मन्लाई खैंची लियो ॥१॥
आए भाइहरू लिएर सँगमा * फर्केर फेरी तिनी ।
लागे भन्न अघी मरेर शकुनी * नीतिज्ञ बाठो बनी ॥
खेलेको धनले भएन पहिले * जूवा कुनै सार्थक ।
हाँसे व्यर्थ सबै सभा-भवनका * साना र ठूला तक ॥२॥
जूवा हामिहरू मिली नरपते ! * खेलौं प्रतिज्ञा गरी ।
जस्ले हार्दछ बाह्र वर्ष वनमा * जानेछ त्यो यै घरी ॥
तेह्रौं वर्ष गुप्त पुरमा * पर्नेछ काटनू दिन ।
त्याहाँवाट फिरेर राज्य खुशिले * सक्नेछ फिर्ता लिन ॥३॥
पैंहे यो प्रण राखि खूब तिनिले * जिद्दी गरेथे जब ।
दैवाधीन भएर धर्म-सुतले * मानी लिएथे तब ॥
चारै भाइ र भीष्म द्रोण सबले * रोके नखेल्नू भनी ।
मानेनन् तिनिले कुनै पनि कुरा * ज्ञानी भए तापनि॥४॥
जे होला गति दैवको छ बलियो * भन्ने गरी निश्चय ।
जूवा खेल्न भए तयार शकुनी- * का साथमा निर्भय ॥
पैंहे झैं छलले सहर्ष तिनिले * पाशा लडाई लिए !
मेरो जीत भयो भनेर थपरी * हाँस्तै बजाई दिए ॥५॥
त्यागी वस्त्र लगाइ चर्म मृगको * सम्झी प्रतिज्ञा सब ।
तत्कालै वन जान तत्पर भए * पाँचै जना पाण्डव ॥

देखी दुर्गति पाँच भाइहरूको * हाँसे सबै कौरव।
बोले कर्ण, सहास्य, धिक् पशुहरू * जाओ वनैमा अब ॥६॥



कौरव-सभामा द्रौपदी

बोले अर्जुन कर्णको सुनि कुरा * गर्दै प्रतिज्ञा त्यहाँ।
साटो फेर्छु तँलाइ मारि बुझिले * मैले लड़ाई महाँ॥
बोले श्री सहदेव–दुष्ट शकुनी * मिल्नेछ मौका जब।
मार्नेछु रणमा तँलाइ पछितो * पर्ला अवश्यै तब ॥७॥
लागेथे वन तर्फ पाण्डवहरू * यस्तो प्रतिज्ञा गरी।
कुन्तीलाइ लिई पुगे विदुरजी * भेटौं भनी त्यैं घरी॥
नीती पूर्वकका कुराहरू गरी * बोले–यि कुन्ती कन।
मैले नै लगि राख्दछु घरमहाँ * सानन्द केही दिन ॥८॥
कुन्तीले पनि द्रौपदीसित भनिन् * रोएर हे सुन्दरी !
गर्नू त्यो सहदेवको बखतमा * हेर्चाह राम्रो गरी॥

कुन्ती द्रौपदिले मिलेर दुखको * रोई गरे गन्थन ।
फर्काई घरमा लगे विदुरले * सम्झाइ कुन्तीकन ॥९॥
लागेथे वनतर्फ द्रौपदि सहित् * पाँचै जना पाण्डव ।
यो सुन्दा धृतराष्ट्र आत्तिन गए * खुशी भए कौरव ॥
सोधे डाक्न पठाइ श्री विदुरजी * -लाई डराई कन ।
के चेष्टा गरि वीर पाण्डव गए * वन्मा मलाई भन ॥१०॥
यस्तो श्री धृतराष्ट्रको विदुरले * आज्ञा सुनेथे जब ।
लागे भन्न बुझाइ दुःखित हुँदै * वन्मा गए पाण्डव ॥
ल्हगाले मुख ढाकि धर्म-सुतजी * आफू अगाड़ी थिए ।
हेर्दै सुन्दर पाखुरा घरि-घरि * श्री भीम जाँदा भए॥११॥
ढुङ्गाका टुकुरा छरी पथ भरी * लागे पछी अर्जुन ।
माटो एक मुठी दलेर मुखमा * योगी सरी भैकन ॥
चिन्नेछन् अरुले भनेर त्यसरी * आफ्नू बिगारी तन ।
जान्थे श्री सहदेव औ नकुलजी * साह्रै दुखाइ मन ॥१२॥
त्यो चेष्टा धृतराष्ट्रले जब सुने * अत्यन्त चिन्ता परी ।
सोधे फेरि वताउ ती किन गए * त्यस्तो तमाशा गरी ॥
त्यो आज्ञा धृतराष्ट्रको सुनिसकी * क्यै बेर सोची कन ।
लागे भन्न बुझाइ हे नरपते ! * सुन्नूहवस् कारण ॥१३॥
हेर्दा क्रोध गरेर धर्म-सुतले * संसार डढ्ला भनी ।
ल्हगाले मुख ढाकि ती वन गए * योगी सरीका बनी ॥
अर्को छैन कुनै म झैं पृथिविमा * योद्धा अहीले भनी ।
मानेछ्न् कुरुवंशका विर सबै * बन्धू भए तापनि ॥१४॥
सोही कारण भीम बाहु बलको * राखी भरोसा ठुलो ।
जाँदैछन् वनमा फिरेर कुलको * पार्छन् समरमा धुलो ॥

डङ्गाका टुकुरा छरेर जसरी * वन्‌मा गए अर्जुन ।
मार्नेछन् रणमा छरी शरहरू * त्यस्तै रिसाईकन ॥१५॥
हामीलाई कदापि चिह्न नसकुन् * यस्तो बखतमा भनी ।
माटो पोति गए ती भाइ वनमा * योगी सरीका बनी ॥
हिंड्थे धौम्य गुरु अगाडि सबका * श्रीसाम गायन् गरी ।
टुप्पाले कुशको ति दक्षिण दिशा * देखाउँथे राम्ररी ॥१६॥
मर्नेछन् जब वीर कौरवहरू * तिन्का गुरूले पनि ।
मैले झैं गरि साम-गान दुखमा * पर्ने छ गर्नू भनी ॥
वारंवार भनौं कती नरपते ! * अन्याय ठूलो भयो ।
पैदा पुत्र हुँदै भनें कुरुकुलै * संहार गर्नेछ यो ॥१७॥
जान्थे पाण्डव वीरका सँगमहाँ * जो पौरवासी जन ।
फर्काए सब लाई धर्म-सुतले * नीती बुझाई कन ॥
रुन्छन् ती घरमा बसी धुरु-धुरु * यो देश त्याग्छौं भनी ।
हे राजन् ! सकिएछ धर्म कुरुका * पुर्खाहरूको पनि ॥१८॥
आई नारदले भने उहि बखत् * गम्भीर वाणी गरी ।
चौधौं वर्ष हुनेछ नाश कुरुको * यो वंश संग्राम्‌ परी ॥
अन्तर्धान भए ति नारद मुनी * यो बात बोली जब ।
सम्झी आफ्नु अनीति घोर अधिको * झन् आत्तिए कौरव ॥१९॥
श्री दुर्योधनले गएर गुरुका * पक्रे दुवै पाउमा ।
बोले राज्य गरें समर्पण सबै * यो नाथका हातमा ॥
रक्षा गर्नुहवस् गुरो ! हजूरले * आत्तिन्छ मेरो मन ।
द्रोणाचार्यजिले भने नगर क्यै * सन्ताप दुर्योधन ! ॥२०॥
आयो वंश विनाशको समय लौ * भन्ने विचारी कन ।
गर्नेछौ तिमि तेह्र वर्ष तक यो * साम्राज्यको शासन ॥

जे सक्छौ गर दान धर्म मखको * तत्काल आयोजन ।
त्यस्ले हुन्छ अनिष्ट शान्त यसरी * आत्तिन्न तिम्रो मन ॥२१॥
गर्नेछु म सहाय सक्दछु जती * कल्याणका खातिर ।
चिन्ता त्याग गरेर भोग खुशिले * साम्राज्य यो सुन्दर ॥
श्री दुर्योधनको गयो अलिकती * सन्ताप यो अर्तिले ।
लागे गर्न ति राज्य शासन ठुलो * शक्ती र उत्साहले ॥२२॥
साराको चित्त जावस् लिन रस रसिलो प्रेमलाई बढाओस् ।
साराको भक्ति लागोस् हरितिर जड़ता दूर यस्ले गराओस् ॥
साराको धर्म जागोस् हृदय-कमलमा सत्यले स्थान पाओस् ।
साराको पाप भागोस् गति मति बढिया ज्ञानले बन्न आओस् ॥२३

महाभारत सभापर्व समाप्त ।



# महाभारत-वनपर्व प्रारम्भः

वनमा पाक्यपात्र पाउनु :—

जस्लाई गाउनाले सकल भय छुटी मोक्षको खुल्छ बाटो ।
जस्लाई पाउनाले भव-भ्रमणमहाँ पर्न आउन्न फाटो ॥
जस्लाई सम्झनाले हृदय-कमलमा बग्छ पीयूष आई ।
यस्ता आदी अनादी हरि सकल दिउन् दुःख बाधा हटाई ॥ १॥

येती कथा सुनिसकी कन भूपतीले ।
सोधे अरू शुभ कथाहरू शुद्ध मन्ले ।
छल्मा परी शकुनिको सब राज्य हारी ।
पाँचै जना वन गए दुख पाइ भारी ॥२॥

के-के गरे, दुख सहे मिलि पाँच भाई ।
को-को गए जन त्यहाँ हित गर्नलाई ॥
काटे कसोरी वनमा बसि बाह्र वर्ष ।
आज्ञा हवस् मुनि ! म सुन्छु सबै सहर्ष ॥ ३॥

वैशम्पायनले भने नरपते ! * सानन्द सुन्नोस् अब ।
बाटो उत्तरको समाइ वनमा * जान्थे सबै पाण्डव ॥
यो संवाद सुनेर ब्राह्मण तथा * जो पन्ध्र मन्त्री थिए ।
दुःखी भैकन साथ जान भनि ती * सम्पूर्ण पुग्दा भए ॥४॥

फर्काए सबलाई धर्मसुतले * नीती बुझाई कन ।
मानी मृत्यु समान कष्ट घरमा * फर्के सबै सज्जन ॥
जाँदा साँझ पऱ्यो पुगे तिनीहरू * गंगाजिको तीरमा ।
यौटा वृक्ष थियो ठलो त्यहिं गरे * विश्राम त्यो रातमा ॥५॥

प्रातःकाल उठेर फेरि वनमा * ती जान लागे जब ।
ज्ञानी शौनक, विप्र आदि तिनिका * लागे पछाड़ी सब ॥
देखी ती द्विजलाई धर्म-सुतले * विन्ती गरे सादर ।
मेरो दुःख बुझेर विप्रगण हो ! * फर्केर जानोस् घर ॥६॥



पाण्डवहरूको वन-गमन

बोले शौनक श्री युधिष्ठिरजिले * त्यस्तो भनेको सुनी ।
भन्नूभो किन यो कुरा हजूरले * केही नजान्ने बनी ॥
जो हुन्छन् सुखमा सुखी र दुखमा * दुःखी तिनै मूर्ख हुन् ।
ज्ञानीले सबलाइ आफु सरिका * सत्पात्र नै देख्दछन् ॥७॥
जस्ले सक्तछ मान मोह मद औ * मात्सर्य त्यागी दिन ।
हुन्छन् मुक्त गृहस्थिमा पनि तिनै * सद्धर्म थामी कन ॥
आसक्ती धनको कठोर मनले * रोकेर जो त्यागदछन् ।
भोगी सौख्य यहाँ परम्पद पछी * सानन्द ती पुग्दछन् ॥८॥

त्यागन् पर्दछ लोभ मोह, धन नै * हुन् कष्टका कारण।
गर्छन् वैभव त्याग खुशि मनले * यै हेतु ज्ञानी जन ॥
बस्नूपर्दछ बाह्र वर्ष वनमा * हामीहरू झैं अब।
इच्छा वैभवको छ जो मनमहाँ * त्यागी दिनूहोस् सब ॥९॥
बस्नेछौं फल-मूल खाइ सँगमा * सन्तोष मानी कन।
हाम्रो खातिरमा वृथा हजुरले * पर्दैन चिन्ता लिन ॥
ज्ञानी शौनकको युधिष्ठिरजिले * शिक्षा सुने तापनि।
चिन्ता पर्न गयो दिने कसरि हो * यिन्लाइ भोजन्भनी ॥१०



द्रौपदी र पाण्डवहरूको परस्पर वार्तालाप

भोगेच्छा भइ सम्पती म अहिले * माग्दीनँ केही, तर।
भोजन् ब्राह्मणलाई पर्छ सँगमा * मैले दिनू सादर ॥
भोको राख्नु हुँदैन विप्र अतिथी * लाई गृहस्थी भई।
त्यस्का खातिर ल्याउँ वैभव कहाँ * तत्काल मैले गई ॥११॥

बोले धौम्य गुरु युधिष्ठिरजिले * चिन्ता गरेको सुनी ।
गर्नू होस तप सूर्यको नरपते ! * पुग्नेछ इच्छा अनि ॥
आज्ञाले गुरुको सहर्ष रविको * तिन्ले तपस्या गरी ।
पाए दर्शन, सूर्यको चरणमा * ढोगी दिए राम्ररी । १२॥
तिन्को कष्ट बुझी तुरुन्त रविले * भन्नू भयो–भूपति !
तामाको शुभ पाक्य-पात्र सजिलो * दिन्छु म हे सद्मति !
गर्दीनन् जबसम्म हे नरपते ! * पाञ्चालिले भोजन ।
देला इच्छित वस्तु पात्र तबतक् * मात्रै छ यो कारण ॥१३॥
अन्तर्धान भएर सूर्य सहसा * जानू भएथ्यो जब ।
ढोगे धौम्यजिलाइ धर्म-सुतले * आनन्द मान्दै तब ॥
मिल्थ्यो भोजन पात्रमा अलिकती * मात्रै भए तापनि ।
पार्थे तृप्त अनेक विप्र अतिथी * लाई त्यसैले तिनी ॥१४॥
ख्वान्थे आफुपछी खिलाइ पहिले * नै चार भाइ कन ।
मागल्लाई खिलाइ द्रौपदि पछी * गर्थिन् स्वयं भोजन ॥
तिन्ले ख्वाइ सकेपछी चिज अरू * मिल्दैनथ्यो त्यो दिन ।
भोलिपल्ट पछाडिको दिनसरी * मिल्थ्यो सबै भोजन ॥१५
पाइ पात्र अलभ्य धर्म-सुतजी * अत्यन्त खुशी भए ।
त्यागी त्यो वनलाई 'काम्यक' ठूलो * अर्को वनैमा गए ॥
त्याहाँ कम्ति थिएन केहि चिजको * राम्रो बनाई कुटी ।
लागे बस्न स्वधर्म-पालन महाँ * केही नपारी त्रुटी ॥१६॥

रुष्ट भएर गएका विदुरलाई धृतराष्ट्रले डाकन पठाउनु—

हे राजन् ! धृतराष्ट्रले विदुरजी * -लाई भने सादर ।
राम्रो युक्ति बताउ हामिहरुको * कल्याणको खातिर ॥

लागे भन्न बुझाउँदै विदुरले * यो राज्य फिर्ता दिए ।
पैह्लेको दुख बिर्सि पाण्डवहरू * सानन्द मिल्ने थिए ॥१७
जे भन्ने हितका कुरा भनिसकें * के भन्नु फेरी अब
यो अन्याय ठुलो भयो नरपते ! * मर्छन् वृथा कौरव ॥
क्रोधित् भै धृतराष्ट्रले विदुरजी * -लाई झपार्दै भने !
भन्दैछौ किन बात पाण्डवहरू * को मात्र राम्रो हुने ॥१८
गर्दैछौ किन पक्षपात यसरी * के शत्रु हुन् कौरव ! ।
जाऊ जे मनमा छ त्यै गर कुनै * मान्दीनँ अर्ती अब ॥
एती बात भनी उठीकन गए * दर्बारमा भूपति ।
त्याहाँबाट उठी हिंडे विदुरजी * सन्ताप मान्दै अति॥१९॥
खोज्दै पाण्डवलाई भेट्न भनी ती* काम्यक् वनैमा भए ।
देखी धर्म-कुमारले विदुरजी * -लाई अँगाल्दा भए ॥
सोधे संच-विसंच, काम परि के * पाल्नू भएको भनी ।
मैले श्री धृतराष्ट्रलाइ हितको * शिक्षा दिएँ तापनि ॥२०॥
त्यागे भूपतिले मलाई र यहाँ * आएँ सुशिक्षा दिन ।
काटिन्छन् दिन धर्मपूर्वक बसे * पर्दैन क्यै आत्तिन ॥
बोले धर्मकुमार–हे विदुरजी ! * जे भन्नुहोला सब ।
गर्नेछु म अवश्य त्यै हजुरको * मानेर आज्ञा अब ॥२१॥
गर्थे ती सुख दुःखका बसि कुरा * आनन्द मान्दै त्यहाँ ।
पौंचे संजय डाक्न श्री विदुरजी * -लाई त्यंही वनमहाँ ।
त्यो आज्ञा धृतराष्ट्रको सुनिसकी * फर्केर आए घर ।
भेटी भूपतिले भने विदुरजी ! * माफी मलाई गर ॥२२॥
माफी ता अघि नै गरें नरपते ! * मान्दीनँ केही रिस ।
मैले ता दुई पक्षलाई खुशिले * दिन्छु सदा आशिष ॥

येंती बात भनेर फालि मनमा * शंका भएको जती ।
पैह्ले झैं गरि खूब आदर त्यहाँ * बस्ता भए भूपति ॥२३॥

पाण्डवलाइ मार्ने सल्लाह, व्यासजीको अर्ती, मैत्रेयको श्राप, किर्मिर वध :—

श्री दुर्योधन, वीर कर्ण शकुनी * दुष्टात्म दुःशासन ।
फर्कें रे घरमा भनी विदुरजी * लागे निकै आत्तिन ॥
सल्लाहा सबले गरे अब गई * काम्यक् वनैमा पनि ।
मारौं पाण्डवलाई हामिहरुले * आनन्द होला अनि ॥२४
यस्तै वात गरी चढेर रथमा * शस्त्रास्त्र राखीकन ।
सेना साथ लिई हिंडे नगरका * बाहिर हेर्दै वन ।
आए सूर्य समान त्यै बखतमा * श्री कृष्ण द्वैपायन ।
रोकें जानु हुँदैन फर्क घरमा * संतोष मानीकन २५॥
फर्के व्यासजिले भनेपछि सबै * तत्काल ती कौरव ।
शिक्षा श्रीधृतराष्ट्रजी कन दिए * श्री व्यासजीले तब ॥
जूवामा छल्ले ति पाण्डु-सुतको * राज्यादि सारा हरी ।
यो दुर्योधन मार्न तत्पर भयो * के हेतुले यो घरी ॥२६॥
फिर्नेछन् जब तेह्र वर्ष वनको * संकष्ट काटी तिनी ।
बीजारोपण वंश नाश हुनको * जान्नू यही हो भनी ॥
लागे भन्न डराई व्यास मुनिले * आज्ञा गरेको सुनी ।
मेरो वात सुनेन यो कपुतले * राम्रो कुरा हो भनी ॥२७॥
इच्छा ता मनमा थियो संग बसुन्* भन्ने असाध्यै, तर ।
व्यर्थै दुष्टमती लिईकन भयो * त्यो द्यूतमा तत्पर ॥
मेरो अर्ति नमानि काम मनको * गर्दैछ त्यो तैपनी ।
मैले त्याग्न सकीनँ नाथ ! सहसा * हो पुत्र आफ्नू भनी ॥२८

यो दुर्योधनलाई अर्ति दिनुहोस् * राम्रो हजुर्ले अब ।
बोले व्यास–सहर्ष त्याग मनको * दुर्नीति बाबू ! सब ॥
ख्याति प्राप्त छ इन्द्र औ सुरभिको * आख्यान संसारमा ।
ज्ञानी छौ तिमिलाइ ठान्दिनँ कसै * सानो कुनै बातमा ॥२९॥
जिद्दी त्याग गरी मिलीकन रहू * ती भाइका साथमा ।
राखी उच्च विचार नै दृढ रहू * हे बाबू ! सद्धर्ममा ॥
यस्ता व्यासजिका कुरा सुनिसकी * कल्याणका खातिर ।
श्री दुर्योधनले भने विनयले * पाऊ परी सादर ॥३०॥
ब्रह्मर्षे ! म त दास हूँ हजूरको * केवल् कृपाले गरी ।
हाम्रो जीवन मृत्यु हुन्छ सहजै * त्यो जान्दछु राम्ररी ॥
तैले पर्दछ गर्नु यो यति भनी * आज्ञा भएको जति ।
गर्छु काम त्यही म यो बखतमा * त्यागी सबै दुर्मति ॥३१॥
आज्ञा होस् गर यो भनी हजुरले * मानेर सोही कुरा ।
जिद्दी त्याग गरेर गर्छु खुशिले * आज्ञा भएको पुरा ॥
सम्झाएर यसोरि भन्नु प्रभुले * पर्दैनथ्यो क्यै पनि ।
बोले व्यास मुनी–सुयोधनजिले * बिन्ती गरेको सुनी ॥३२
हे बाबू ! जति छन् ऋषीश्वर तथा * ज्ञानी मुनी लोकमा ।
भन्दैनन् गर काम यो यति भनी * आज्ञा दिई व्यक्तिमा ॥
जे गर्दा हित हुन्छ, हुन्न हित जे * गर्दा सबै लोकको ।
दिन्छन् अर्ति त्यही प्रसन्न मनले * आज्ञा बुझी धर्मको ॥३३॥
मान्नेको हित हुन्छ, नाश सहजै * हुन्छन् नमान्ने जति ।
भन्दैनन् गर यो कसैकन पनी * मानेर दैवी - गति ॥
मैले भन्नु जती सबै भनिदिएँ * हे बाबु ! दुर्योधन ।
जे गर्दा हित ठान्दछौ गर उही * राम्रो विचारी कन ॥३४॥

बोले श्री धृतराष्ट्रजीकन यहाँ * मैत्रेयजी आउनन् ।
शिक्षा ती मुनिबाट योग्य-पथको * दुर्योधनै पाउनन् ॥
अन्तर्धान भए यती भनिसकी * श्री व्यास ज्ञानी जब ।
ठूलो तेज फिंजाउँदै रवि सरी * मैत्रेय आए तब ॥३५॥
राखे आसनमा तुरुन्त नृपले * पूजा गरी सादर ।
बोले—पानुभयो पवित्र अहिले * आएर मेरो घर ॥
लागे भन्न बुझाउँदै ति मुनिले * तत्काल हे भूपति ।
ऐले पाण्डवको छ घोर वनमा * साह्रैठुलो दुर्गति ॥३६॥
फिर्नेछन् तिनि तेह्र वर्ष वनको * संकष्ट काटी जब ।
साटो फेर्न हुनन् तयार रणमा * मार्नन् सबै कौरव ॥
श्री दुर्योधनतर्फ हेरि मुनिले * भन्नू भयो सादर ।
बाबू ! पाण्डवको वृथा अब तिमी * चिन्ता नगर्नै गर ॥३७॥
फिर्ता राज्य दिई मिलाप गरिल्यौ * कल्याणका खातिर ।
आफ्नै हुन् तिनि पाँच छन् सयतिमी * छौ मान पापको डर ॥
मारे किर्मिर वीरलाइ सहजै * जस्ले लडाइँ गरी ।
पारे खाण्डव भस्म देवगणको * सम्पूर्ण शेखी हरी ॥३८॥
त्यस्ताका सँगमा लडेर रणमा * को जित्न सक्ला भन ।
सक्तैनौ तिमि जित्न पाण्डवहरू * छन् वीर औ सज्जन ॥
के सुन्थे मुनिका कुरा हित हुने * दुष्टात्म दुर्योधन ।
कोटचाई नङले जमीनतिर नै * हेरेर न्यूरीकन ॥३९॥
ठोकी ताल उघारि जाँघ खुशिले * हाँस्तै उपेक्षा गरी ।
बोलेनन् जब क्यै सुयोधन अनी * बोल्ले मुनी बेसरी ॥
गर्दैछस् उपहास, भीम विरले * संग्राम भूमी महाँ ।
भाँच्नेछन् दुइ जाँघ खूब पछितो * पर्ला तँलाई तहाँ ॥४०॥

यस्तो श्राप सुनेर उग्र मुनिको * राजा डराई गए ।
अन्तर्धान भएर त्यै बखतमा * मैत्रेय जाँदा भए ॥
सोधे श्री धृतराष्ट्रले विदुरजी * -लाई त्यहाँ भीमले ।
मारे किर्मिर को थियो किन त्यहाँ* आएछ के हेतुले ॥४१॥
धेरै पल्ट अनेक विप्रहरूले * जस्तो भनेका थिए ।
सोही माफिकका कुरा विदुरले * तिन्लाइ भन्दा भए ॥
राजन् ! काम्यक नामको वनमहाँ * जाँदै थिए पाण्डव ।
लामा बाहु फिंजाइ किर्मिर ठुलो * आई पुग्यो दानव ॥४२॥
आफ्नू गर्जनले समस्त पृथिवी * थर्काउँदै बेसरी ।
बोल्यो-आज मिल्यो अहार सहजै* खाने भएँ राम्ररी ॥
को हौ यो वनमित्र काम परि के * आयौ मलाई भन ?
त्यस्को बात सुनी युधिष्ठिर निकै * लाग्दा भए आत्तिन॥४३॥
देखे पर्वत झैं विशाल बलियो * साम्ने खडा राक्षस ।
आए भीम लिएर वृक्ष, खलको * देखेर दुस्साहस ॥
हाने त्यै रुखले रिसाइ बलले * मार्ने इरादा गरी ।
तिन्को चोट खपेर वृक्ष लिइ झन * आयो अगाडी सरी ॥४४॥
पक्री त्यो रुख खोसि भीम विरले * फ्याँकी दिएथे जब ।
लाग्यो मुष्टि प्रहार गर्न रिसले * आगो भई दानव ॥
बाली सुग्रिव झैं परस्पर दुवै * क्यै बेर लड्दा भए ।
मार्छु दुष्ट भनेन अर्जुन जसै * तिन्का अगाडी गए॥४५॥
रोके पार्थ ! नबोल क्यै तिमि भनी* तिन्लाइ श्री भीमले ।
फन्का सात घुमाउँदै जमिनमा * फ्याँकी दिए वेगले ॥
ठुलो चोट परेर खप्न नसकी * त्यो दुष्ट मूर्च्छा पर्‍यो ।
मुड्की एक थपी दिएर सहजै * उठ्नै नसक्ता मर्‍यो॥४६॥

जस्तो ब्राह्मणले भने वनमहाँ * उस्तै सुनाई दिएँ ।
मुर्दा किर्मिरलाइ देखि म पनि * आश्चर्य मान्दो भएँ ॥
राजा श्री धृतराष्ट्र दुःखित भए * वृद्धि भयो श्वासको ।
चिन्ता पर्न गयो पराक्रम सुनी * त्यस्तो ठुलो भीमको ॥४७॥

राजा डराइ मनमा गरि तर्क धेर ।
बोल्दै नबोलि मुखले बसि केहि बेर ॥
सम्झी पराक्रम ति पाण्डवको अघोर ।
जाँदा भए महलमा उठि उत्निखेर ॥४८॥

श्रीकृष्ण र धृष्टद्युम्न आदि पाण्डवलाई भेट्न जानु :—

राजा अन्धक भोज वृष्णि-कुलका * जो जो थिए भूपति ।
माराले मुनि वीर पाण्डवहरू * -को दुःख औ दुर्गति ॥
धृष्टद्युम्न र धृष्टकेतु बलिया * श्री कृष्णलाई लिई ।
आए पाण्डवलाई भेट्न वनमा * सम्पूर्ण जम्बा भई ॥४९॥
देख्नुभो जब श्री युधिष्ठिरजिले * साम्ने खड़ा श्री हरि ।
राख्नुभो लगि स्वच्छ आसनमहाँ * पाऊ परी राम्ररी ॥
सेना, भूप खड़ा भए वरिपरी * जो जो गएका थिए ।
बस्ना श्री हरि माझमा सकलका * श्री सूर्य झैं देखिए ॥५०॥
आज्ञा भो हरिले युधिष्ठिरजिको * सन्ताप देखी कन ।
हामी छौं अहिले वृथा हजुरले * पर्दैन चिन्ता लिन ॥
फिर्ता राज्य दिलाउँछौं सहजमा * मारी सबै कौरव ।
आज्ञा बक्सनुहोस् बरू हजुरले * धन्दा नमानी अब ॥५१॥

नीति र धर्म हित बात सबै बुझाई ।
बोल्नू भयो मनमनै हरि क्यै रिसाई ॥

यस्तो सरोष हरिको सुनि बात ताहाँ ।
खुशी युधिष्ठिर भए परि पाउमाहाँ ॥५२॥
देखे अर्जुनले अनन्त प्रभुको * त्यो क्रोध मुद्रा जब ।
लागे गर्न स्तुती प्रसन्न हुनुहोस् * हे कृष्ण ! हे माधव ! ॥
धेरै नै अवतार धारण गरी * दुष्टात्म मानू भयो ।
रक्षा, सज्जन नीति धर्म सबको * गर्नू भएको थियो ॥५३॥
सद्धर्म रक्षक प्रभो ! मधुकैटभारि !
त्यागेर क्रोध अब शान्त हुनोस् मुरारि ! ॥
हाम्रो सहाय्य प्रभु बाहिक छैन अर्को ।
गर्नोस् दया अब नमानि झिंजो र झर्को॥५४॥
जस्तो सत्य कबोल धर्म-सुतले * गर्नू भएथ्यो त्यहाँ ।
बोल्नू हुन्न कदापि हामिहरूले * त्यस्तो प्रतिज्ञा महाँ ॥
काटौंला बसि तेह्र वर्ष वनमा * हामी हरूले जब ।
फिर्ता राज्य लिनू म ठान्दछु उचित* मारी सबै कौरव ॥५५॥
बिन्ती अर्जुनको सुनेर हरिले * आज्ञा भयो सादर ।
तिम्रो छु म सदैव तत्पर सखे ! * कल्याणका खातिर ॥
मेरा हौ तिमी हूँ अभिन्न म पनी * तिम्रो सखा अर्जुन ।
गर्दै छन् जति द्वेष हामी दुइमा * ती हुन् ठुला दुर्जन ॥५६॥
शंका क्यै मनमा नमान तिमिले * गर्छु सकेको जति ।
इच्छा पूर्ण गराउँला म, अरिको * पारी ठुलो दुर्गति ॥
पांचाली हरिका कुराहरू सबै * सानन्द सुन्दै थिइन् ।
जोरी हात दुवै विनीत स्वरले * रोएर बिन्ती गरिन् ॥५७॥
हे गोविन्द ! हजूर रक्षक छँदै * त्याई सभा बीचमा ।
नांगी हेर्न तयार कौरव भए * यी पाँचका सामुमा ॥

पापीका सँग धर्मपूर्वक चली * आयो वृथा आपत ।
यिन्को जो पुरुपार्थ हो सकल त्यो * धिक्कार भन्छु म त ॥५८॥
लाहाको घरभित्र राखि पहिल्यै * मार्ने इरादा लिए ।
जूवामा छलले जितेर वनमा * ऐह्ले लघारी दिए ॥
त्याएथे म रजस्वला कन गई * तान्दै सभामा जब ।
हेर्थे दीन बनेर बोल्न नसकी * पाँचै जना पाण्डव ॥५९॥
जो जो दुःख परे क्रमैसित भनिन् * ती द्रौपदीले सब ।
तिन्लाई दिइ सान्त्वना प्रण गरी * बोल्नू भयो माधव ॥
पांचाली ! तिमिले सह्यौ जसरि यो * संकष्ट रोई कन ।
रोलान् पत्नि बुहारि शत्रुहरुका * त्यस्तै दुखाई मन ॥६०॥
यो दासत्व छुटेर राज-महिषी * हुन्छयौ तिमी सुन्दरी ।
साँचो बात भनें भनी बुझि लिए * मैले प्रतिज्ञा गरी ॥
पांचालीसँग नीतिका गरि कुरा * सन्तोष पारी हरि ।
बोले धर्मकुमार तर्फ सहसा * हेरेर सोही घरी ॥६१॥
हे राजन् ! जब हस्तिनापुरमहाँ * जूवा भएको थियो ।
त्यो वेला म परे हुँदा फजिति त्यो * थाहै नपाई भयो ॥
थाहा पाउँदथें त आइ सहजै * त्यो द्यूतको दुर्गुण ।
गर्दै वर्णन रोक्दथें दुइ थरी * -लाई म सोही क्षण ॥६२॥
पाएँ द्वारवती पुगेपछि सबै * सम्चार मैले जब ।
आएँ भेट्न भनेर यादव पनी * मेरा सँगैमा सब ॥
अर्नी धर्म र नीतिको दिनुभयो * धेरै हरीले जब ।
सोधे फेरि त्यहाँ युधिष्ठिरजिले * शंका गरी माधव ! ॥६३॥
त्यागी द्वारवती कहाँ उस वखत् * पाल्नू भएको थियो ।
कस्नो काम गरेर सिद्ध कहिले * हे कृष्ण ! फिर्नु भयो ॥

यस्तो प्रश्न सुनी युधिष्ठिरजिको * आज्ञा भयो कृष्णले ।
हे राजन् ! जब इन्द्रप्रस्थ म थिएँ * त्यो शाल्वका फौजले॥६४
घेरेछन् गइ द्वारकापुरि सबै * शस्त्रास्त्र त्यागी कन ।
साह्रै दुःख दिएछ मारि खलले * निर्दोष धेरै जन ॥
लागेछन् गइ लड्न यादव तथा * प्रद्युम्न आफैं पनि ।
तिन्लाई लडि शाल्वले समरमा * पारेछ मूर्छा अनि ॥६५॥
मूर्छाबाट उठेर क्रोधित भई * प्रद्युम्नले युद्धमा ।
छाडेछन् शर धेर मार्दछु भनी * त्यो शाल्वको देहमा ॥
लागी ती शर तीक्ष्ण शाल्व रणमा * लोटेर मूर्छा परी ।
आँटेछन् अब मार्छु यस्कन भनी * प्रद्युम्नले त्यो घरी॥६६
छाडीद्यौ तिमि मार्नुपर्छ हरिले * यो दुष्टलाई भनी ।
ती प्रद्युम्नजिलाइ नारदजिले * रोके दयालु बनी ॥
मूर्छाबाट उठेर शाल्व डरले * भागेछ लज्जित भई ।
बस्तो भो खल त्यो विमान बिचमा * आकाश माथी गई ॥६७॥
मारी त्यो शिशुपाल यज्ञ सहजै * पूरा हजुर्को गरी ॥
फर्की द्वारवती पुगेपछि सुनें * सारा कुरा राम्ररी ॥
त्याहाँबाट रिसाइ शाल्वकन गैं * ऐल्हे म मार्छु भनी ।
लागें खोज्न सबै दिशा घुमि-घुमी * भेटीनँ काहीं पनि ६८
आँटेथें घर फिर्न सिन्धु तटमा * देखें लुकेको थियो ।
देखी सामु मलाइ लुप्त भइ झन् * माया फिंजाई लियो ॥
धेरै शस्त्रहरू मलाई खलले * हान्यो रिसाई कन ।
त्यो काहाँ छ भनी नजानि भ्रममा* पर्दो भएँ क्यै छिन ॥६९॥
मौका पाई अगाडि आइ शरले * छोपी दियो शाल्वले ।
काटें ती सब शस्त्र-अस्त्र खलका * आफ्ना तिखा वाणले ॥

यौटा दूत पुगी भन्यो उहि घरी * तिम्रा पिताजी कन ।
लाग्यो मार्न लगेर शाल्व विरले * ती कष्ट भोग्दैछन॥७०॥
केही शक्ति भए गएर अहिल्यै * तत्काल रक्षा गर ।
पितृ-स्नेह बढी भएँ म सहसा * अत्यन्त चिन्तातुर ॥
त्यागी शस्त्र बसें नबोलि रथमा * देखेर त्यस्तो स्थिति ।
हाहाकार गरेर सैनिक सबै * भागे डराई अति ॥७१॥
माया हो सब शाल्वको भनि बुझें * मैले विचारी जब ।
धेरै शस्त्र गरी प्रहार रणमा * मारें सबै दानव ॥
हुन्थ्यो सौभ विमान लुप्त कहिले * त्यो देखिइन्थ्यो पनि ।
यस्तै चाल गरेर सात दिन त्यो * लड्दै रहेथ्यो खुनी ॥७२॥
त्यो आठौं दिनमा सुदर्शन लिई * मन्त्रेर छाडी दिएँ ।
काटी गर्दन शाल्वको समरमा * सायुज्य मुक्ति दिएँ ॥
यस्तै कारणले उपस्थित त्यहाँ * पाइनँ मैले हुन ।
रोक्थें द्यूत त्यहाँ भए म सहजै * मथ्थ्यों कि दुर्योधन ॥७३॥
धेरै धर्म र नीतिका गरि कुरा * आशा भरोसा दिई ।
फिर्नू भो हरि द्वारिका नगरमा * भानीज वैन्ही लिई ॥
धृष्टद्युम्न लिएर भानिजहरू * मागी बिदा सादर ।
चिन्ता त्यागनुहवस् भनीकन गए * फर्केर आफ्नू घर ॥७४॥
जो-जो पाण्डवलाइ भेट्दछु भनी * स्नेही पुगेका थिए ।
तिन्लाई पनि श्री युधिष्ठिरजीले * सल्लाह फिर्ने दिए ॥
कृष्णा बाहिक पाण्डुका तनयका * रानी र छोरा जति ।
आफ्ना माइतमा र मावलि गए * सन्ताप मान्दै अति ॥७५

पाण्डवहरूको द्वैत वनमा प्रस्थान र मार्कण्डेय तथा बक मुनिको उपदेश—

वैशम्पायनले भने–नरपते ! * त्याहाँ बसी क्यै दिन ।
लागे पाण्डव जान द्वैत वनमा * त्यागेर काम्यक वन ॥
ज्ञानी श्रेष्ठ महर्षि उत्तम मुनी * विप्रादि जो - जो थिए ।
सारालाइ बिदा युधिष्ठिरजिले * सन्ताप मान्दै दिए ॥७६॥
मानी दुःख असाध्य ती सब जना * आँसू बगाई कन ।
फर्केथे सब आफ्नु आश्रम महाँ * साह्रै दुखाई मन ॥
त्यागी त्यो वनलाइ द्वैत वनमा * पुग्दा भए पाण्डव ।
योटा सुन्दर वृक्षका मनि बसे * सन्ताप मान्दै सब ॥७७॥
राम्रो पर्णकुटी सरस्वति नदी * -का तीरमा सुन्दर ।
पारे झट्ट तयार पाँच जनले * आफैं भई तत्पर ॥
लागे बस्न त्यहीं सहेर वनको * संकष्ट नाना थरी ।
मार्कण्डेय ऋषी उही वनमहाँ * डुल्दै पुगे त्यै घरी ॥७८॥
देखी ती मुनिलाई धर्म-सुतले * गर्नू भयो आदर ।
राखी आसनमाथि पूजन गरे * तिन्को बसी सुन्दर ॥
हाँसेथे मुनिले युधिष्ठिरजिले * आश्चर्य मानी कन ॥
सोधे पाउ समाइ झट्ट मुनिको * हाँस्नू भएको किन ॥७९॥
लागे भन्न बुझाउँदै ति मुनिले * त्यो हास्यको कारण ।
मैले हाँस्नु रुनू र दुःख सुख क्यै * मान्दीनँ कोही क्षण ॥
आज्ञा मानि पिताजिको वन गई * श्री रामजीले पनी ।
ठूलो कष्ट सही डुले वनवनै * योगी सरीका बनी ॥८०॥
लाएनन् मन क्यै अधर्मतिर झन् * रक्षा गरे धर्मको ।
पाए दर्शन ऋष्यमूक गिरिमा * मैले पनी रामको ॥

मेरो यो मनमा सहर्ष हुन गो * त्यै बातको सम्झना ।
त्यागी दुष्ट मती सदा गर तिमी * सद्धर्मको पालना ॥८१॥
काशीराज अलर्क भूपति ठुला * नाभाग जो जो भए ।
तिन्ले धर्म बुझेर लोभ धनको * सानन्द त्यागी दिए ॥
त्याग्नू पर्छ घमण्ड तुच्छ बलको * सम्पत्तिको भूपति !
इच्छापूर्ण हुनेछ त्याग मनमा * चिन्ता भए को जति ॥८२
शिक्षा नीति र धर्मको यति दिई * शान्ती गराए अनि ।
पर्की उत्तरतर्फको पथ हिंडे * आन्नद मान्दै मुनि ॥
बस्ता पाण्डव बीर द्वैत वनको * शोभा भयो सुन्दर ।
बस्थे पर्ण कुटी बनाइ द्विज औ * सत्पात्र चारै तिर ॥८३॥
हे राजन् ! बक नामका मुनि पनी * आए त्यहाँ क्वै दिन ।
गर्दै आदर श्री युद्धिष्ठिरजिले * राम्रो दिए आसन ॥
शिक्षा ती मुनिले दिए तिमी सदा * गर्नू भलो विप्रको ।
इच्छा पूर्ण हुनेछ रक्षक बने * हे भूपति ! धर्मको ॥८४॥
यस्तै अति दिई गए बक मुनी * आफ्नू कुटीमा फिरी ।
लागे पाण्डव बस्न द्वैत वनमा * आनन्दले राम्ररी ॥
चारै तर्फ बसेर शास्त्रहरूको * चर्चा त्यहाँ गर्दथे ।
जो चिन्ता मनमा थियो सकल त्यो* सत्संगले हर्दथे ॥ ८५ ॥

द्रौवदी र भीमलाई युद्धिष्ठिरको शिक्षा :—

राजन् ! पाण्डवले सही दुख बसे * सद्धर्म थामी कन ।
गर्थे ती सुख दुःखका बसि कुरा * सानन्द कोही दिन ॥
पैल्हेको सुख सम्झि राज-गृहको * कृष्णा भई दुःखित ।
लागिन् भन्न सरोष कष्ट मनको * सम्पूर्ण स्वामीसित ॥८६॥

भोगेर सौख्य अघि इन्द्र समान धेर ।
बस्नूपर्‍यो दुख ठूलो वनको सहेर ॥
साम्राज्यको सकल वैभव त्यो भुलेर ।
बस्नूपरेर मन रुन्छ भई अधीर ॥८७॥

मार्छन् क्षत्रिय वीर शत्रु रणमा * साह्रै भई क्रोधित ।
जस्लाई रिस हुन्छ शत्रु-वशमा * त्यै पर्छ भन्छु म त ॥
त्यो दुर्योधनले छलेर अहिले * गर्नू नगर्नू गर्‍यो ।
त्यागदा क्रोध हजूरले पनि वृथा * यो कष्ट भोग्नूपर्‍यो॥८८
भोग्दा कष्ट पनी हजूरकन ता * उठ्दैन कैल्हे रिस ।
जस्लाई रिस छैन छत्रिय भई * पाउन्न त्यस्ले यश ॥
पापी कौरवलाई मार्न अहिले * शक्ति छ हाम्रो तर ।
आज्ञा बक्सनुहुन्न नाथ, किन हो * संग्रामका खातिर ॥८९॥
स्वामी ! शक्ति छ भीमको शरिरमा* हज्जार हात्ती जति ।
हेर्नू हुन्छ हजूर क्रोध नगरी * सन्ताप तिन्को कति ॥
सक्छन् कौरव वीर मार्न रणमा * एक्लै पनी पार्थले ।
तिन्को कष्ट म हेर्न सक्तिनँ प्रभो !* आत्तिन्छु यै हेतुले ॥९०॥
भोग्ने हुन् सहदेव औ नकुल के * संकष्ट यो व्यर्थको ।
बोल्नू हुन्न सक्रोध धर्म बुझि क्यै * तत्काल संग्रामको ॥
बेलामा रिस हुन्न जुन् पुरुषमा * मानिन्न त्यो क्षत्रिय ।
त्यस्तै देख्छु हजुरलाई, अरिको * मानेर हो कि भय ॥९१॥
सोधेथे बलिले पितामह ! ठूलो * हो तेज की हो क्षमा ।
बाबू ! तेज क्षमा समान रूपले * हुन्छन् सबै व्यक्तिमा ॥
गर्नू पर्छ प्रयोग योग्य जनले * मौका विचारी कन ।
मौका चुक्न गए त निन्दित सदा * हुन्छन् ठूला सज्जन ॥९२

वेलामा गरि क्रोध शत्रु-वशमा * पारेर राखी लिनू ।
जाँची चूक क्षमा पनी सुजनले * मौका विचारी दिनू ॥
तिन्को चित्त बुझ्यो पितामहजिले * भन्दा बुझाई कन ।
लागे भन्न बुझाई धर्म-सुतले * ती द्रौपदीको मन ॥९३॥

हे मानिनी ! जति भन्यौ सब सत्य मान्छु ।
हे क्रोध शत्रु बलवान भनेर ठान्छु ॥
त्यागेर नीति जति छन् रिस मात्र गर्ने ।
ती हुन् कुकृत्य गरि रौरव नर्क पर्ने ॥९४॥

ठूलो भए रिस गरी बदनाम होला ।
निर्धो भए सहज पर्दछ छाड्नु चोला ॥
जो क्रोध रोकिकन बस्तछ शत्रु जानी ।
त्यस्को फिंजिन्छ यश कीर्ति र बुद्धिमानी ॥९५॥

भद्रे ! कौरब माथि क्रोध नगरी * यै हेतु छाडी दिएँ ।
गर्नन् धर्म बुझी दयामय दया * भन्ने विचारी लिएँ ॥
व्यर्थै क्रोध गरी अनीति पथमा * चल्दीनँ कैल्हे पनि ।
होला निश्चय सत्यको विजय यो * जानी लिए भामिनी ! ९६

बोल्छिन् द्रौपदी श्री युधिष्ठिरजिले * आज्ञा भएको सुनी ।
चल्नू हुन्छ हजूर धर्म-पथमा * राम्रो गरी, तैपनी ॥
भोग्नू हुन्छ अनेक कष्ट वनका * योगी सरीका बनी ।
उल्टो कौरव छन् प्रसन्न अहिले * दुष्कर्म गर्दा पनि ॥९७॥

हाम्रो छिद्र अनेक कष्ट दिन ती * खोजी रहेछन् खुनी ।
मैले मान्न सकीनँ रक्षक कुनै * शक्ती छ दैवी भनी ॥
पाउन्नन् सुख-शान्ति धर्मपथमा * चल्ने जती सज्जन ।
जो गर्छन् पुरुषार्थ बस्छ सुखमा * कस्तै हवस् दुर्जन ॥९८॥

त्यागन् हुन्छ बरु यि भाइहरूका * साथै मलाई पनि ।
त्यागनू हुन्न स्वधर्म जान्दछु सबै * साँचो कुरा हो भनी ॥
पाउन्नन् नगरेर यत्न जनले * सत्कर्मको क्यै फल ।
मान्छन् प्राक्तनमा रहेनछ, जसै * पुग्दैन त्यस्मा बल ॥९९॥
गर्दैनन् सुखका निमित्त जब जो * यत्नादि मौका महाँ ।
भन्छन् मूर्ख तिनैहरू कन सबै * मिल्नेछ शान्ती कहाँ ॥
यो वार्ता पति-पत्निको बसि त्यहाँ * श्री भीम सुन्दै थिए ।
मौका योग्य बुझी युधिष्ठिरजिमा * बिन्ती चढ़ाई लिए॥१००॥
भोग्दैछौं अति कष्ट हामीहरूले * यो नाथकै खातिर ।
लिन्थे कौरवले छली न त कहाँ * साम्राज्य त्यो सुन्दर
बस्छन् जो जन सत्यमा दृढ़ रही * साँचो प्रतिज्ञा गरी ।
त्यस्ताका सँग सत्य पालन गरी * बस्नू सदा राम्ररी ॥१॥
त्यागी सत्य अनीतिका पथ महाँ * जो चल्दछन् दुर्मति ।
त्यस्ताका सँग धर्मपूर्वक चली * सप्रन्न कैह्ले गति ॥
पापी कौरवले अनीति गरि यो * वन्मा लघारी दिए ।
हामीलाई अझै पनी बल पुगे * आएर मार्नै थिए ॥२॥
मानू पर्दछ शत्रुलाई बलले * हो धर्म यो भूपको ।
आज्ञा बक्सनुहोस् प्रसन्न मनले * तत्काल संग्रामको ॥
मारी कौरवलाई राज्य अघिको * फिर्ता लिनेछौं जिती ।
यस्मा पाप हजूरलाई पनि क्यै * लाग्दैन हे भूपती ॥३॥
रानी द्रौपदिको सभा बिच लगी * जस्तो फजीती गरे ।
त्यो सम्झी रिस क्यौं नगर्नु प्रभुले * आश्चर्य हो, हे हरे ॥
यस्ता बात सुनेर भीम विरको * क्यै बेर सोची कन ।
लागे भन्न त्यहाँ युधिष्ठिरजिले * तिन्को बुझाई मन ॥४॥

राम्रो विचार गरि गर्दछ काम जस्ले ।
आफ्नू सुकाम सब पार्दछ सिद्ध त्यस्ले ॥
छाडेर धर्म जनले जब पाप गर्छन् ।
त्यस्को मिलेर फल आपतमा ति पर्छन् ॥५॥
कार्यादि यो जगतदेखि छ भिन्न जान्नू ।
कर्ता भनेर उहि ईश्वरलाई मान्नू ॥
जस्तो मनुष्यहरू पाप र धर्म गर्छन् ।
त्यस्तै विचारिफल ईश्वरले दिने हुन् ॥६॥

भाई ! खूब गरी विचार मनमा * जुन् कर्म गर्छन् जन ।
तिन्को कार्य हुनेछ सिद्ध सहजै * बाधा नपारी कन ॥
बुझ्दै क्यै नबुझी बलावत सबै * केवल् सहासले गरी ।
जो लड्छन् बलवान शत्रुसंगमा * जान्छन् ति आफैं मरी॥६
गर्दैछौ बलको घमण्ड गरि जो * संग्राम गर्नै कुरा ।
गर्दैनौ मनमा विचार अरिको * शक्ती छ भन्ने पुरा ॥
भीष्म द्रोण र कर्ण वीर कृपका * साम्ने लडाई गरी ।
के सक्छौ तिमी टिक्नलाई र भन्यौ* लड्ने कुरा यो घरी ॥७॥
आफ्नू पूर्ण गरौं कबोल पहिले * हामी हरूले यहाँ ।
हाम्रो देखि नियम् ति शत्रुहरूको * चिन्ता परोस् मन्महाँ ॥
बाबू ! यो अवकाशमा बरु गरौं * यत्नादि क्यै सुन्दर ।
गर्नू पर्दछ बुद्धि तेज बलको * संग्रामका खातिर ॥८॥
सेना भूपति मित्र आदि जति छन्* हाम्रा हितैषी जन ।
तिन्लाई दिनुपर्छ झट्ट बरु क्यै * यत्नादिले सूचन ॥
राम्रो नीति र तर्कसम्मत कुरा * यस्ता सुनेथे जब ।
साँचो हो भनि भीमसेन सहसा * बोल्नै सकेनन् तब ॥९॥

अर्जुनको इन्द्रसँग भेट र शिवजीसित युद्ध :—

राजन् ! भीम तथा युधिष्ठिर बसी * गर्दै थिए गन्थन ।
आए तेज फिंजाइ सूर्य सरिका * श्री व्यास सोही क्षण ॥
राखे आदर साथ पाण्डु-सुतले * गर्दै ठुलो स्वागत ।
बोले व्यास बुझाई धर्म-सुतको * रक्षार्थ राम्रोसित ॥१०॥
तिम्रो जे मनमा छ त्यो बुझिसकें * मैले सबै योगले ।
यौटा मन्त्र म दिन्छु अर्जुन जपुन् * त्यस्लाई आनन्दले ॥
सक्नेछन् तिनी जान स्वर्ग पुरिमा * त्यै मन्त्रको शक्तिले ।
जित्नेछन् सब शत्रु, शस्त्रहरुको * शिक्षा दिनन् इन्द्रले॥११॥
मन्त्र ज्ञान दिएर व्यास मुनिजी * जानू भएथ्यो जब ।
डाकी अर्जुनलाई धर्म-सुतले * शिक्षा दिनू भो सब ॥
बाबू ! जाउ तिमी सहर्ष अहिले * श्री इन्द्रका पासमा ।
आऊ शस्त्र सबै सिकेर, रहनू * आनन्दले स्वर्गमा ॥१२॥
आफ्ना अस्त्रहरु लिएर द्विजका * पाउ परी राम्ररी ।
साराका सँगमा विदा भई हिंड़े * श्री पार्थ सोही घरी ॥
वायूको गतिले हिमालय तरी * पारी पुगे अर्जुन ।
लागे सुन्न ति इन्द्रकील गिरिमा * आकाशवाणी कन्न॥१३॥
बाबू अर्जुन ! पर्ख पर्ख, यहि हो * सीमा पनी स्वर्गको ।
लागे हेर्न उभेर, विप्र रुपमा * दर्शन् मिल्यो इन्द्रको ॥
बोले ब्राह्मण-सिद्धिको स्थलमहाँ * के काम शस्त्रास्त्रको ।
आयौ उत्तम लोकमा अब यहाँ * के काम संग्रामको ॥१४॥
बारंबार 'यि शस्त्र फाल' द्विजले * भन्दै रहेथे, तर ।
मानेनन् जब वीर अर्जुन अनी * तिन्ले भने सादर ॥

जान्छौ कुन् शुभ लोकमा भनतिमी * मेरा अगाडी महाँ।
यस्तो ब्राह्मणको कुरा सुनिसकी * श्रीपार्थ बोले त्यहाँ ॥१५॥
भोग्छन् आपद शत्रुका वश परी * दाजू र भाईहरू।
मैले वस्तु गएर स्वर्ग पुरिमा * मनूँ असल् हो बरू॥
जँहेसम्म म हुन्नँ विप्र ! विजयी * इन्द्रत्व पाए पनि।
मेरो चित्त प्रसन्न हुन्न कहिल्यै * बस्छु म दुःखी बनी ॥१६॥
आएँ जान भनेर यो बखतमा * श्रीइन्द्रका पासमा।
टारौंला भनि कष्ट, शस्त्रहरूको * शिक्षार्थ यो स्थानमा॥
बोले अर्जुनका कुरा सुनिसकी * हाँसेर ती ब्राह्मण।
मैं हूँ इन्द्र भनेर मान मनमा * विश्वास है अर्जुन ! ॥१७॥
पैहे पाप छुटाउ दर्शन गरी * श्री शम्भुको सादर।
शास्त्रास्त्रैहरूको दिनेछु म पछी * शिक्षा सबै सुन्दर॥
अन्तर्धान भएर स्वर्ग पुरिमा * श्रीइन्द्र जाँदा भए।
शम्भुको तप गर्न अर्जुन त्यहीं * सानन्द लागी गए॥१८॥
पापी राक्षस एक त्यै स्थलमहाँ * जो 'मूक' भन्ने थियो।
आई पार्थकहाँ बँदेल बनि त्यो * मार्ने इरादा लियो॥
पाल्नूभो महसा किरात रूपले * त्यै ठाउँमा श्रीशिव।
मार्नेमा शिवले बँदेलकन त्यो * देख्नू भएथ्यो जब ॥१९
हाने ती दुइ वीरले सँगसँगै * ताकेर आफ्ना शर।
लागी ती दुइ बाण राक्षस मऱ्यो * साह्रै कराई, तर॥
लागे गर्न विवाद आपुसमहाँ * ती वीर योद्धा दुई।
मेरो नै शरले लड्यो जमिनमा * त्यो मूक मुर्दा भई ॥२०
मेरो लक्ष्य थियो किरात ! तिमिले * के हेतु हान्यौ शर।
लागे भन्न किरात क्रोधित भई * आऊ लड़ाई गर॥

हाने अर्जुनले अनेक शरले * साह्रै रिसाई जब ।
तिन्का लीन भए सबै शरहरू * हाँसी रहेथे शिव ॥२१॥
देखी साहस वीरको समरमा *क्यै बेर सोची कन ।
हानी अग्नि-शिखा समान शरले * हेरी रहे अर्जुन ॥
वर्षा पत्थरको विलीन गिरिमा * सारा भए झैं गरी ।
फेरी बाण विलीन पारिदिनुभो * श्रीशम्भुले त्योघरी॥२२॥



अर्जुनले शिवजीसँग युद्ध गरेर पाशुपतास्त्र पाएको

आफ्ना ती शरजालको बिफलता * देख्दा भई क्रोधित ।
लागे गर्न ति मल्ल-युद्ध रिसले * तत्काल शम्भू सित ॥
आफ्नू छातिमहाँ थिचे शिवजीले * ती पार्थलाई जब ।
थाले आत्तिन ती थिचाइ बलियो, * खप्नै नसक्ता, तब ॥२३॥
मूर्छा पर्न गई ढले जमिनमा * क्यै बेरका खातिर ।
आयो चेत अनी चिन्हे शिव भनी * ढोगी दिए सादर ॥

आज्ञा भो शिवले प्रसन्न मनले * मागेर लेऊ वर ।
पाऊँ पाशुपतास्त्र दिव्य प्रभुको * इच्छा भए, हे हर ॥२४॥
बिन्ती अर्जुनको सुनेर शिवले * हाँसेर आज्ञा भयो ।
ज्ञाता छौ, तिमिले नछाड्नु कहिले* सामान्यमा शस्त्र यो ॥
सुम्पी अस्त्र प्रयोगको विधि पनी * सारा सिकाई कन ।
अन्तर्धान भए सदाशिव त्यहीं * तिन्को बुझाई मन ॥२५॥

राजन् ! त्यहाँ वरुण श्रीयम औ कुबेर ।
अग्न्यादि इन्द्र वसु यज्ञ सबै पुगेर ॥
खूशी भई कन ति अर्जुन वीरलाई ।
आफ्ना दिए सकल अस्त्रहरू सिकाई ॥२६॥
राजन् ! ति पार्थकन डाक्न गरी विचार ।
डाकेर सारथि भने नगरी अबेर ॥
छन् पुत्र अर्जुन हिमालयमा अहीले ।
जाऊ लिएर रथ ल्याउ छिटै तिमीले ॥२७॥
आए लिएर रथ सुन्दर मातलीले ।
श्रीपार्थलाई लिई स्वर्ग गए खुशीले ॥
तिन्को गरी अधिक आदर इन्द्रजीले ।
राखे जयन्त सरि स्नेह गरी खुशीले ॥२८॥

अर्जुनलाई उर्वशीको श्राप र धृतराष्ट्रको चिन्ता—

भोगी भोग अलभ्य स्वर्ग पुरको * श्री पार्थले क्यै दिन ।
जम्मा दिव्य सभामहाँ सुरहरू * हुन्थे खुशी भैकन ॥
जान्थे अर्जुन वीर नित्य सबले * गर्थे ठुलो स्वागत ।
गर्थे इन्द्र शची बसीकन कुरा * सानन्द छोरासित ॥२९॥

सामग्रीहरू भोगका थरि - थरी * तिन्ले दिएका थिए।
मन्मा कष्ट भए पनी नभनि क्यै * श्री पार्थ बस्ता भए॥
शिक्षा शस्त्र र अस्त्रको जति थियो * संगीत विद्या पनि।
सारा इन्द्रजिले सिकाइदिनुभो * हो पुत्र मेरो भनी॥३०॥
भोगी भोग प्रशस्त स्वर्ग पुरिमा * बस्ता पनी अर्जुन।
सम्झी कष्ट ति दाजु-भाइ सबको * थाल्थे दुखी भै रुन॥
डाकी क्वै दिन उर्वशीकन भने * श्री इन्द्रले सादर।
जाऊ चाकरि गर्न पार्थ विरको * आनन्दका खातिर॥३१
यो आज्ञा सुनि इन्द्रको खुशि हुँदै * ती उर्वशी सुन्दरी।
वस्त्राभूषणले सुसज्जित भई * पुग्दी भइन् त्यै घरी॥



स्वर्गमा उर्वशी र अर्जुनको वार्तालाप

लागिन् भन्न सहर्ष पार्थतिर नै * हेरेर ती सुन्दरी।
आएँ वीर ! म इन्द्रको हुकुमले * गर्नै भनी चाकरी॥३२॥

गर्नू होस् सुखभोग खूब खुशिले * मेरा रही साथमा ।
इच्छापूर्ण गराउनोस् मदनको * पीड़ा छ यो देहमा ॥
तिन्को वात सुनेर लज्जित हुँदै * भन्दा भए पार्थले ।
मेरा बन्धुहरु बसेर वनमा * दिन् काट्तछन् कष्टले ३३
मैले गर्नु बसेर भोग कसरी * ताएर यो स्वर्गमा ।
गर्छन् भोग सुरेन्द्रले पनि सदा * तिम्रा रही साथमा ॥
तिम्रो स्थान शची समान हुनगो * ये हेतु हे सुन्दरी ! ।
मैले गर्न हुँदैन भोग बुझिल्यै * साँचो कुरा यो घरी॥३४॥
हेर्दै चंचल नेत्रले घरि-घरी * चेष्टा गरी कालको ।
लागिन् भन्न बुझाइ फेरि तिनिले * बानी सुनी पार्थको ॥
यन्नी छैन म वीर ! क्वै पुरुषकी * सत्कर्म जो गर्दछन् ।
आइ स्वर्ग मलाई पाइ तिनिले * आनन्दले भोगदछन् ॥३५॥
सोही कारणले कुनै तरहको * शंका नमानी कन ।
पीड़ा हर्नुहवस् ठुलो मदनको * सानन्द हे अर्जुन ! ॥
लागे भन्न बुझाई पार्थ यसरी * तिन्ले भनेको सुनी ।
त्यस्तो कर्म कदापि गर्न म शुभे * सक्तीनँ पापी बनी ॥३६॥
गर्नें भोग तिमी सुरेन्द्र सँगमा * सानन्द हे सुन्दरी !
भन्छयौ भोगन मलाई के गरि, भयौ * मेरी त माता सरी ॥
यस्तो तर्क सुनेर क्रोधित भइन् * ती उर्वशी बेसरी ।
तिन्ले श्राप दिइन् नपुंसक तिती * हुन्छौ भनी त्यै घरी ॥३७
एती वात भनी गइन् घर महाँ * फर्केर आफ्ना तिनी ।
चिन्ता पर्न गएर अर्जुन बसे * अत्यन्त दुःखी बनी ॥
यो संवाद सुरेन्द्रका हजुरमा * सारा पुगेथ्यो जब ।
डाकी अर्जुनलाई सादर भने * वार्ता बुझाई सब ॥३८॥

हे बाबू ! तिमिले नपुंसक भई * पर्नै छ बस्नू, नर ।
लागला श्रप त एक वर्षतक नै * साहायका खातिर ॥
बस्नू पर्दछ गुप्त वास तिमिले * क्यै कालमा वर्ष दिन् ।
गर्ला मद्दत श्रापले, यति मुनी * तिन्को भयो खुशि मन् ३९
जाने इन्द्रजिले यि अर्जुन भए * षट्शास्त्र ज्ञाता अब ।
बोले—मार्न सहर्ष जाउ अहिल्यै * पोलोम नाम् दानव ॥
आज्ञाले गरि इन्द्रको रथ चढ़ी * तत्काल जाँदा भए ।
खोज्दै राक्षसलाइ सिन्धु तटमा * ती वीर पौंचीगए ॥४०॥
देखेथे जब दैत्यका नगरको * किल्ला र राम्रो घर ।
किल्ला भाँचि प्रशस्त राक्षस पनी * मारे चलाई शर ॥
देखेथ्यो जब त्यो निवात कवचै * आयो अगाडी सरी ।
छोप्यो अर्जुनलाई बाणहरूले * पानी परे झैं गरी ॥४१॥
काटी दानवका सबै शरहरू * आफ्ना तिखा बाणले ।
मारी अग्नि-शिखा समान शरले * ढाकी दिए पार्थले ॥
मारे सैनिक -दैत्यका जति थिए * एकेक छानी कन ।
माया युद्ध गरेर लुप्त हुन गो * तत्काल त्यो दुर्जन ॥४२॥
हानेथे जब वज्र अस्त्र खलको * माया हराई गयो ।
देखेथे जब स्पष्ट, दिव्य शरले * हाने र त्यो मारियो ॥
साथी दानवका भए जति सबै * निःशेष पारीकन ।
फर्के स्वर्ग सुरेन्द्रको हुन गयो * अत्यन्त खुशी मन ॥४३
मारी दैत्य समस्त देवगणको * सन्ताप तिन्ले हरे ।
सारा देव मिली जय-ध्वनि गरी * सत्कार ठूलो गरे ॥
भोगी सौख्य ति पाँच वर्षतक ता * स्वर्गै पुरीमा रहे ।
यो सारा धृतराष्ट्रका हजुरमा * लोमश् मुनीले कहे ॥४४

डाकी संजयलाई लोमशजिले * जे - जे भने त्यो भनी ।
बोले श्री धृतराष्ट्र यत्न भन क्यै * राम्रो दयालु बनी ॥
आफ्नू पूर्ण गरी कबोल पुरमा * फिर्नन् जसै पाण्डव ।
ठूलो युद्ध हुनेछ निश्चय, वृथा * मर्नन् सबै कौरव ॥४५॥

श्रीभीमको बल र शौर्य छ श्रेष्ठ जस्तो ।
देख्दीनँ आफुतिर क्वै पनि वीर त्यस्तो ॥
मारी निवात कवचादिक वीरलाई ।
पारे प्रसन्न जसरी सब देवलाई ॥४६॥
त्यस्तो पराक्रम र शौर्य हुने म वीर ।
देख्दीनँ आफुतिर क्वै पनि योग्य धीर ॥
संसारमा नकुल औ सहदेव जस्तो ।
गर्छन् पराक्रम म देख्दिनँ वीर त्यस्तो ॥४७॥
सुन्छू म धर्म-सुतको जब शील शौर्य ।
हुन्छू म चिन्तित असाध्य बनी अधैर्य ॥
जस्तो गर्‍यो अघि सुयोधनले अनीति ।
मारा सहे ति सबले बुझि धर्म नीति ॥४८॥

गर्छू तर्क बसेर जिल्छ कसरी * संग्राम दुर्योधन ।
रक्षा कौरवको हुने म अहिले * बाटो कुनै देख्दिनँ ॥
केही यत्न बनाउ संजय, तिमी * रक्षार्थ राम्रो अब ।
भाइ भाइ मिलुन् लडाइँ नगरी * बाँचुन् सबै कौरव ॥४९॥
सोधे यत्न गरेर तर्क यसरी * ती भूपतीले जब ।
बोले संजय—तर्क गर्नु त वृथा * ठान्छू हजुरले अब ॥
सम्झाए पहिल्यै स्वयं विदुरले * नीति बुझाई कन ।
शिक्षा मान्नुभएन हुन्छ अब के *व्यर्थै दुखाई मन ॥५०॥

जो पर्छन् सुख-दुःख ती सब सही * निःशंक बस्नू हवस् ।
यो संसार अनित्य जानि मनको * सन्ताप त्यागी दिनोस् ॥
येती बात भनेर संजय पनी * फर्केर जाँदा भए ।
जानी दैवगती उठी नरपती * दर्बारमा गै गए ॥५१॥

नलोपाख्यान—

राजन् ! युधिष्ठि र भीम बसी कुनै दिन् ।
गर्दै थिए सुख र दुःख विचारि गन्थन् ॥
जाँदा भए जब उठीकन वीर अर्जुन् ।
ठानेर दुर्बल स्वयंकन आत्तिए झन् ॥५२॥

दाजूलाइ भने रिसाइ मनमा * श्री भीमले बेसरी ।
हो यो धर्म, भएर भूप वनमा * डुल्नू भिखारी सरी ॥
फिर्नू हुन्छ गरेर पूर्ण प्रण यो * घर्मा हजुर्ले जब ।
जूवा खेलि हजूरलाई वनमा * फेरी लघार्छन् तब ॥५३॥
व्यर्थै जंगलभित्र हामि सबको * बित्ने भयो जीवन ।
आज्ञा बक्सनुहोस् म मार्दछु गई * एक्लै सबै दुर्जन ॥
आएनन् किन वीर अर्जुन पनी * शस्त्रास्त्र शिक्षा लिई ।
लागे गर्न अनेक तर्क सहसा * ती भीम दुःखी भई॥५४॥
सम्झाई कन श्री युधिष्ठिरजिले * सद्धर्मको पालन ।
गर्नू पर्छ भनेर अर्ति दिनुभो * तिन्को बुझाई मन ॥
पाएथे बृहदश्व नाम मुनिको * त्यै कष्टमा दर्शन ।
राखी आसनमा सहर्ष सबले * तिन्को गरे पूजन ॥५५॥
ढोगी पाउमहाँ, गरी दुख तथा * सन्तापको वर्णन ।
मेरो भाग्य ठुलो रहेछ मुनिको * पाएँ यहाँ दर्शन ॥

जूवामा खलले लिए छल गरी * साम्राज्य मेरो धन ।
दुःखी छैन म झैं अरू जन कुनै * भन्दैछ मेरो मन ॥५६॥
राजाको बृहदश्वले सुनि कुरा * हाँस्तै भने सादर ।
भन्दैछु इतिहास यै विषयको * साह्रै छ त्यो सुन्दर ॥
हे राजन् ! नल नामका नरपती * पैह्ले भएका थिए ।
जूवामा तिमिहेरु झैं छल परी * सर्वस्व हारी दिए ॥५७॥



राजा नलले जूआ हारेको

तिन्ले जंगलमा डुलीकन खपे * सन्ताप केही दिन ।
जूवा खेल्न सिकी जिते नृपतिले * त्यै द्यूत द्वारा धन ॥
त्यस्तै पूर्ण गरेर आफ्नु प्रण यो * फर्केर जाऊ घर ।
जूवा खेलि सहर्ष भूप नल झैं * साम्राज्य फिर्ता गर ॥५८॥
संक्षेपै सित यो कुरा ति मुनिले * पैह्ले सुनाई लिए ।
जुवाका जीत खेल छन् छलसहित-सारा सिकाई दिये ॥

फेरी प्रश्न गरे युधिष्ठिरजिले * पाऊ परी हे मुनि ! ।
सुन्छु श्री नलको चरित्र खुशिले * भन्नोस् दयालु बनी ॥५९
लागे भन्न चरित्र श्रेष्ठ नलको * विस्तारका साथमा ।
हे राजन् ! नल नामका नृप थिए * यौटा निषध् देशमा ॥
तिन्को कीर्ति सरी थिएन अरुको * सत्कीर्ति संसारमा ।
रैती राजि गराइ केही त्रुटि ती * पार्दैनथे राज्यमा ॥६०॥
देखे क्वै दिन हंस एक नृपले * डुल्दा बगैंचा महाँ ।
पक्रे झट्ट गएर हंसकन त्यो * बोल्यो डराई तहाँ ॥
हे राजन् ! दमयन्ति नाम दुहिता * छन् भूपती भीमकी ।
यो संसारभरी तिनी सरि अरू * छैनन् धनी रूपकी॥६१॥
छाड़ी बक्सनुहोस् विदर्भ नगरी * जान्छु म चाँडो गरी ।
तिन्मा प्रेम बढाउँला हजुरको * कीर्ति भनी राम्ररी ॥
पक्षीको सुनि बात मानिस सरी * आश्चर्य लागे पनि ।
छोड़े, हंस ! गएर भन्नु मनको * मेरो कुरा लौ भनी ॥६२॥
पौंच्यो हंस उड़ी विदर्भ नगरी * वायू गतीले गरी ।
सामुन्ने दमयन्तिको बसि भन्यो * तत्काल हे सुन्दरी ! ॥
जस्ती रूपवती सुशील तिमि छ्यौ* संसारमा यो घरी ।
त्यस्तै छन् गुण शीलका नल पनी * विख्यात राम्रो गरी ॥६३
गर्नेछ्यौ तिमिले विवाह खुशिले * ती भूपका साथमा ।
मिल्ला सौख्य ठुलो र कीर्ति बलियो* फैलिन्छ संसारमा ॥
बोली मानिस झैं सुनेर सहसा * आश्चर्य लागे पनि ।
लागिन् भन्न गरेर स्नेह खुशिले * त्यो हंसलाई तिनी ॥६४॥
जस्तो बात भनिस् मलाई अहिले * उस्तै चनाखो भई ।
मेरो बिन्ति सुनाउनू नृपतिमा * हे हंस ! तैंले गई ॥

त्यो सम्चार लिएर हंस नलका * साम्ने पुगेथ्यो जब ।
सम्झायो नृपलाइ वर्णन गरी * जेजे भनीथिन् सब ॥६५॥
चल्थ्यो सुन्दर हंस मार्फत कुरा * प्रेमी दुवैको त्यहाँ ! ।
पाई प्रेम बढाउने पथ दुवै * खूशी थिए मन्महाँ ॥
बस्थिन् श्रीदमयन्ति चिन्तित भई * सम्भेर राजा कन ।
मेरो हुन्छ विवाह के गरि भनी * साह्रै दुखाई मन ॥६६॥
त्यागी भोक र प्यास नींद दिनहुँ * सम्झेर राजा नल ।
फीका चन्द्र समानको मुख भयो * साह्रै भइन् दुर्बल ॥
यस्तो चाल सुपुत्रिको नृपतिले * देखे सुनेथे जब ।
छोरी योग्य भई स्वयंवर छिटै * गर्छु भनेथे तब ॥६७॥

दूतरूप नलको दमयन्तीसंग भेट—

हे राजन् ! नृप भीमले थरि-थरि * सामग्री जम्बा गरी ।
राम्रो हेरि तिथी स्वयंवर हुने * पक्का गरे त्यो घरी ॥
भेजी दूत निमन्त्रणा नृपहरू * -लाई पठाई दिए ।
आए हेर्न भनी स्वयंवर सबै * साना ठुला जो थिए ॥६८॥
यो सम्चार लिएर नारद मुनी * पुग्दा भए स्वर्गमा ।
वैदर्भी कन हेर्न दिक्पतिहरू * आए, परी मोहमा ॥
देखेथे जब कामदेव सरिका * अत्यन्त राम्रा नल ।
वर्नेछिन् यिनिलाइ निश्चय भनी * ती गर्न लागे छल ॥६९॥
अग्नी, धर्म र इन्द्र औ वरुणले * सल्लाह पक्का गरी ।
डाकी श्री नललाइ सादर भने * ती चारले त्यो घरी ॥
राजन् ! दूत बनेर हामिहरूको * साहाय गर्नू हवस् ।
हाम्रो ती दमयन्तिलाइ अहिले * सम्चार योटादिनोस् ॥७०॥

हामी चार विषे स्वयंवर महाँ * क्वै एकलाई बरुन् ।
भोगी सौख्य प्रशस्त स्वर्गपुरिको * आनन्द ठूलो गरुन् ॥
यस्ता बात सुनेर देवगणको * राजा सकस्मा परे ।
देवाज्ञा कन मान्नु पर्दछ भनी * तत्काल विन्ती गरे ॥७१॥
देख्छु रक्षक धेर छन् महलको * जान्दीनँ बाटो पनि ।
यस्को युक्ति मिले त जन्छु खुशिले * कर्तव्य मेरो भनी ॥
यस्ता बात सुनेर भूप नलको * हाँस्तै भने इन्द्रले ।
छेक्तैनन् तिमि जाउ यो महलको *बाटो कुनै व्यक्तिले ॥७२॥
पाई यो वरदान श्रीनल गए * अत्यन्त चिन्तित भई ।
खोपीमा दमयन्तिको ति उभिए * भित्री घरैमा गई ॥
सामुन्ने सहसा युवा पुरुष क्वै * देखिन् उभेका त्यहाँ ।
सोधिन् झट्ट उठेर साहस गरी * लज्जित हुँदै मन्महाँ॥७३
आयौ वीर ! यहाँ कसो गरि तिमी * को हौ मलाई भन ?
देखी रूप अलभ्य चंचल भयो * हे वीर ! मेरो मन ॥
बोले ती दमयन्तिको सुनी कुरा * हो नाम मेरो नल ।
आएँ दूत बनेर देवगणको * पाएर शक्ती बल ॥७४॥
अग्नी श्रीयम इन्द्र औ वरुण छन् * चारै जना बाहिर ।
स्वामी एक गराउ रोजि तिमिले * ती चारमा सुन्दरमा ॥
यस्तो बात सुनेर चिन्तित भई * सोचेर बोलिन् तिनी ।
मैले मानिसकें हजूरकन नै * मेरा पती हुन् भनी ७५॥
दासीलाइ क्षमा गरी हजुरले * जे हुन्छ आज्ञा अब ।
सोही माफिक चल्दछु र खुशिले * मान्नेछु शिक्षा सब ॥
लागे भन्न बुझाइ फेरि नलले * त्यागी सबै देवता ।
स्वामी मान्नु मलाई ठान्छु सुमुखी-तिम्री ठूलो मुर्खता ॥

द्यौताका सँगमा विरोध कसरी * गर्नें तिमी नै भन।
तिम्रा साथ विवाह गर्न सहसा * यै हेतुले सक्तिनँ॥
बोलिन् श्री दमयन्ति भूप नलको * पाई रुखो उत्तर।
बर्नैं छैन हजूर बाहिक कुनै * हुन् देवता या नर॥७७॥
पैह्ले नै समाचार हंससित जो * पाएँ यहाँ नाथका।
आफ्नू देह गरें समर्पण स्वयं * वशमा परी प्रेमको॥
पंक्ती बद्ध भई स्वयंवर महाँ * सारा बसेका घरी।
रोज्नेछु म पती हजूरकन नै * के पुग्छ चिन्ता गरी॥७८
त्याग्नू हुन्छ हजूरले यदि भने * साँचो कुरा भन्दछु।
सम्झी प्रेम हजूरको मन महाँ * हत्या गरी मर्दछु॥
यस्तो श्री दमयन्तिको सुनि कुरा * साह्रै दुखाई मन।
आई जे समचार हो, भनिदिए * सारा नढाँटीकन॥७९॥

दमयन्तीको स्वयंवर र कलिको क्रोध—

बेला भो जब त्यो स्वयंवर हुने * साना ठुला भूपति।
दर्जा माफिक स्थानमा गई बसे * आनन्द मान्दै अति॥
छोरीलाई लिएर भीम नृपती * आफैं सभामा गए।
राजाको कुल नाम वर्णन गरी * प्रत्येक भन्दा भए॥८०॥
अग्नी धर्म र इन्द्र औ वरुणले * झुक्क्याउँला की भनी।
योटै रूप गरी बसे नल सरी * चिह्नै नसक्ने बनी॥
माला ली दमयन्ति मन्द गतिले * साम्ने सबैका गइन्।
योटै रूप हुने नि पाँच नल झैं * देख्दा निकै आत्तिइन्॥८१
केही बेर पछी विनीत स्वरले * बिन्ती गरिन् सादर।
भ्रान्ती भो मनमा म छु शरणमा * हे देव ! रक्षा गर॥

मेरो सत्य रहेछ क्यै यदि भने * त्यौ सत्यका खातिर।
स्वामी चिन्न सकूँ म यो बखतमा * मान्दैछु ठूलो डर ॥८२॥
यस्तो विन्ति सुनी जनाइ करुणा * ती देवताले पनि।
आफ्नू रूप लिए पतीकन चिह्नुन् * चाँडो सतीले भनी॥
राजालाई चिह्निन् गयो भ्रम पनी * ती सुन्दरीको सब।
पैह्राइन् जयमाल भूप नलका * तिन्ले गलामा तब ॥८३॥
जैजैकार गरे सबै सुजनले * अत्यन्त हर्षित भई।
खूशी भै दमयन्तिजी बसी रहिन् * आफ्नू घरैमा गई॥
कन्यादान गरेर वेद विधिले * ती भूपतीले पनि।
छोरी श्रीनल भूपतीकन दिए * हो धर्म मेरो भनी॥८४॥
जोड़ी श्री दमयन्तिको र नलको * देखेर जो जो थिए।
राजा, देव र विप्र औ सुजनले * आशीष धेरै दिए॥
दासी दास र रत्न सम्पतिहरू * यो दाइजो हो भनी।
छोरीलाइ दिए विदर्भ-पतिले * हात्ती र घोडा पनि ८५॥
हे राजन्! नललाइ इन्द्र खुशि भै * यौटा दिएथे वर।
होला दर्शन यज्ञमा, शुभ गती * मिल्ला पछी सादर॥
इच्छामा जल पाउने वरुणले * यौटा दिनूभो वर।
दोस्रोमा बुझि योग्य दिव्य फुलको * माला दिए सुन्दर ॥८६॥
मीठो स्वाद हुनेछ भूप नलले * जस्तो पकाए पनि।
पाएथे वर धर्मबाट स्थिर भै * सद्धर्म थाम्छौ भनी॥
बोले अग्नि-म दिन्छु दर्शन तिमी * इच्छा गरौला जहाँ।
मेरो लोक मिलोस् भनी वर दिएँ * खूशी भई मन् महाँ॥८७॥
अन्तर्धान भई गए सकल ती * द्यौताहरू स्वर्गमा॥
वैदर्भी सँगमा विवाह कलिले * गर्नै भएको थियो।
थाहा पाई सबै कुरा पथ महाँ * त्यो क्रोधले रन्कियो ॥८८

लाग्यो खोज्न रिसाई दोष नलको * संकष्ट दिन्छु भनी ।
पर्खेंध्यो कलि बाह्र वर्षतक ता * पाएन केही पनी ॥
धोएनन् गरि मूत्र त्याग नलले * बिर्सेर कोही दिन ।
पाई छिद्र त्यहीं पसी शरिरमा * खुशी भयो दुर्जन ॥८९॥
पारी हीन मती प्रभाव नलमा * आफ्नू गराई लियो ।
फेरी द्वापरलाइ भन्न यि कुरा * तत्काल पुग्दो भयो ॥
साथी ! त्यो दमयन्तिले गरि बिहा * त्यागी सबै देवता ।
त्यस्को दिन्छु सजाय निश्चय तिमी* क्यै देउ साहायता ॥९०॥
पाशा उल्टिदिनू अवश्य नलले * हार्नन् सबै सम्पति ।
यो सल्लाह मिलाइ पुष्करकहाँ * पुग्दो भयो दुर्मति ॥
जुवा श्री नलका गएर सँगमा * लौ खेल हे पुष्कर !
तिम्रो जीत हुनेछ निश्चय पनी * विश्वास मेरो गर ॥९१॥
यस्ता बात सुनी सकेर कलिको * दाजू कहाँ ती गए ।
जुवा खेल्न गरेर जिद्दि बहुतै * तिन्ले उचाल्दा भए ॥
हो यो कर्म निषिद्ध भूप नलले * जान्दै थिए तापनि ।
तिन्को हाँक सुनेर क्षत्रिय भई * के खप्नसक्थे तिनी ॥९२॥
जुवा खेल्न बसे परस्पर दुवै * भाई रिसाई कन ।
पर्दा द्वापरको प्रभाव नलले * हारे प्रशस्तै धन ॥
हात्ती अश्व सुवर्ण रत्न र अरू * सम्पत्ति बाजी गरी ।
खेल्दा पुष्करले जिते सहजमा * राज्यादि सोही घरी ॥९३
जुवा ती दुइ भाइको चलिरह्यो * त्यो एक मैन्हा जति ।
बिन्ती श्री दमयन्तिले गइ गरिन् * सन्ताप मान्दै अति ॥
चाँडो खेल नरेन्द्र ! रोकिदिनुहोस् * हो यो नराम्रो कुरा ।
जुवाले त हजुरको सहजमा * साम्राज्य जाला पुरा ॥९४

सारा छन् पुरवासि बाहिर खड़ा * साना ठूला सज्जन ।
रोकी खेल्न गएर बाहिर स्वयं * लौ बक्सियोस् दर्शन ॥
पर्दामा कलिको प्रभाव बलियो * बिग्रेर तिन्को मति ।
मानेनन् नृपले कुनै पनि कुरा * फर्किन् दुखी भै सती ॥९५
हारेका नलले सबै धनहरू * देखे सुने तापनि ।
धेरैपल्ट गरिन् प्रयास कसरी * यो खेल रोकूँ भनी ॥
केही जोर चलेनथ्यो अनि बुझिन् * आपत्ति आयो अब ।
रक्षा यी शिशुको गरूँ म कसरी * भन्ने विचारिन् तब ॥९६॥
डाकिन् धाइ पठाइ त्यै बखतमा * वार्ष्णेय ज्ञानीकन ! ।
बोलिन् बालकलाई बन्धु गृहमा * लैजाउ हे सज्जन ! ॥
राजाको सब हाल भीम नृपती * -लाई सुनाई दिनू ।
स्वेच्छाले दिन क्यै त्यहीं कि त कतै * अन्तै बिताई लिनू ॥९७॥
यस्ता बात सुनेर सज्जनहरू * डाकेर जम्मा गरी ।
जूवा रोक्न गरे प्रयत्न नलको * वार्ष्णेयले बेसरी ॥
मानेनन् नृपले प्रभाव कलिको * ठूलो हुनाले कुरा ।
यिन्को हुन्छ अवश्य दुर्गति भनी * जाने तिनीले पुरा ॥९८॥
राखी बालक बालिका रथ महाँ * वायु गतीले गए ।
राजा भीमकहाँ पुगी शिशु दुवै * वार्ष्णेयले सुम्पिए ॥
जूवाको सब हाल भूप नलको * त्यो चाल बिन्ती गरी ।
फर्की श्री ऋतुपर्ण भूपति कहाँ * पौंचे अयोध्या पुरी ॥९९॥
लागे बिल्न बनेर सारथि त्यहाँ * वार्ष्णेयजीका दिन ।
जूवामा नलको ति पुष्करजिले * सारा जितेथे धन ॥
हाँस्तै पुष्करले भने धन सबै * हारी सक्यौ हे नल !
के राख्छौ भन ! शेष रत्नहरूमा * स्त्री रत्न छन् केवल ॥१००

तिन्कै वाजि गरेर खेल यसरी * ठट्टा गरेथे जब ।
लागी वाण समानको वचन त्यो * बोल्नै सकेनन् तव ॥
वस्त्राभूषण देहमा जति थिए * सारा फुकाली दिए ।
यौटा वस्त्र लगाइ जान वनमा * ती भूपती निस्किए ॥१॥
उर्दी पुष्करको थियो नगरमा * जो राख्छ रक्षा गरी ।
यी राजा नललाइ त्यस्कन स्वयं * मार्नेछु सोही घरी ॥
यस्तो उर्दि सुनेर पुष्करजिको * सारा प्रजा जो थिए ।
आफाफ्ना घरमा लुके तर ठुलो * सन्ताप मान्दा भए ॥२॥
आएनन् डरले कुनै पनि त्यहाँ * साम्ने यसै कारण ।
रानीले पनि एक वस्त्र पहिरिन् * त्यागेर आभूषण ॥
राजा-रानि दुवै हिंडे वन महाँ * अत्यन्त दुःखी थिए ।
राजन् द्वापर औ कली दुइ मिली * संकष्ट ज्यथैं दिए ॥३॥

नल-दमयन्तीको वन-गमन कलिको दुष्टताः—

रानी लिई नल हिंडे वन जानलाइ।
पानी र अन्न दिन तीन विते नखाई ॥
खप्तै क्षुधा अनि तृषा तटमा नदीको ।
पुग्दा रहेन बल शेष ति दम्पतीको ॥४॥
सम्झेर राज्य सुख वैभव त्यो अपार ।
थाले बसेर त्यहिं गर्न तिनी विचार ॥
जान्दीनँ पाप फलि कुन् जुनिको म कष्ट ।
भोग्दछु यो वखतमा भइ दैव रुष्ट ॥५॥

यस्तै तर्क गरेर धेर नलजी * क्यै काल बस्ता भए ।
पक्षी प्वाँख हुने सुवर्ण सरिका * धेरै त्यहाँ देखिए ॥

लागे गर्न विचार पक्षि सब यी * पक्रेर खान्छु अब ।
यिन्का सुन्दर प्वाँख बेचि पुरमा * मिल्नेछ क्यौँ वैभव ॥६॥
आफ्नू वस्त्र फुकालि झट्ट नलले * छोपे ति पक्षी कन ।
राजाको लिइ वस्त्र पक्षि नभमा * उड्दा भए त्यौं क्षण ॥
नाङ्गा भूपतिले अधोमुख गरी * देखी उभेका त्यहाँ ।
लागे भन्न चरा-भयौँ अब खुशी * हे भूपती ! मन्महाँ ॥७॥
हैनौं हामि चरा म हूँ कलि अघी * पाशा बनेको थिएँ ।
डाली पुष्करलाइ खेलि छलले * सर्वस्व तिम्रो लिएँ ॥
योटा वस्त्र लगाइ जान वनमा * देखें हिंडेको जब ।
मेरो चित्त बुझेन हे नरपते ! * त्यो वस्त्र खोसें अब ॥८॥
येती बात गरी गयो कलि पनी * लुगा लिई त्यौं घरी ।
पक्री आफ्नु कपाल भूपति बसे * अत्यन्त चिन्ता परी ॥
पानी अन्न नपाइ खान वनमा * साह्रै थिए दुःखित ।
देखी नग्न शरीर आफ्नु त्यसरी * झन् भै गए लज्जित ॥९॥
रानीलाई भने—शुभे ! हुन गएँ * यो कष्टले चिन्तित ।
माने एक कुरा म भन्छु अहिले * तिम्रो चिताई हित ॥
जस्ले क्रोध गरेर वैभव लियो * पारी क्षुधा पीडित ।
पानी अन्न र वस्त्र छैन तनको * रक्षार्थ हामीसित ॥१०॥
गर्ने हो अज्ञ के म भन्न अहिले * सक्तीनँ हे सुन्दरी !
गर्दैछु मनमा विचार कसरी * यो कष्ट जाला टरी ॥
बाटो जान्छ विदर्भ देशतिर यो * सोझै गए दक्षिण ।
हाम्रा रक्षक एक छन् यस घरी * सर्वज्ञ नारायण ॥११॥
धेरैपल्ट घुमाउँदै यहि कुरा * तिन्ले भनेको सुनी ।
लागिन् भन्न रुँदै मलीन मनले * सन्ताप मान्दै तिनी ॥

इच्छा के छ हजूरको, म पनि छु * उद्विग्न हे भूपति !
देख्दा नग्न शरीर हुन्छ मन झन् * सन्तप्त मेरो अति ॥१२॥
वारंवार विदर्भको पथ यहाँ * देखाउनू भो किन ?
गर्नू हुन्छ विचार नाथ ! मनमा * मैलाइ त्यागी दिन ! ॥
मैले जानु हजूरलाइ यसरी * छाडेर ऐह्ले कहाँ ?
भोग्नेछु रहि नाथकै सँग सबै * जे पर्छ आई जहाँ ॥१३॥
छैनन् औषध पत्नि झैं दुख ठुलो * आई परेका घरी ।
त्यागने जे छ विचार त्यागिनुहोस् * विश्वास मेरो गरी ॥
लागे भन्न बुझाइ फेरि नलले * शंका गरेकी किन ?
त्यागनेछु बरु देह यो तर तिमी- * लाई कबै त्याग्दिनँ ॥१४॥
नीतिपूर्वकका कुरा जति भन्यौ * हुन् सत्य सारा, तर ।
तिम्रो दुर्गतिले भएँ म अहिले * अत्यन्त चिन्तातुर ॥
बोलिन् श्री दमयन्ति बात पतिको * त्यस्तो सुनी सादर ।
त्याग्नू हुन्न हजूरले म पनि यो * विश्वास मान्छु, तर ॥१५
आत्तिन्छु म विदर्भको पथ वृथा * देखाउनू भो किन ?
छाडी जान हजूरलाइ म कतै * आँटे पनी सक्तिनँ ॥
ठान्नू हुन्छ मलाइ बान्धव कहाँ * हुन्छे सुखी यो भनी ।
साथै जाउँ बरु म जान्नँ यसरी * एक्लै त कैह्ले पनि ॥१६॥
हामीलाइ स्वयं विदर्भ-पतिले * राख्छन् गरी आदर ।
लागे भन्न बुझाइ फेरि नृपले * राम्रो भन्यौ यो, तर ॥
तिम्रा हुन् जसरी पिता नरपती * त्यस्तै ति मेरा पनि ।
मैले जानु हुँदैन तैपनि त्यहाँ * दुःखी दरिद्री बनी ॥१७॥
यस्तो तर्क गरेर केहि मनमा * शान्ती दिए भूपले ।
योटै वस्त्र लगाइ जंगल भरी * डुल्थे दुवै शोकले ॥

तिर्खा भोक बढी बसे गइ दुवै * क्वै धर्मशाला महाँ ।
भूमीमै सहसा निदाउन गए * लाग्दा थकाई त्यहाँ ॥१८
राजालाइ परेन नींद मनमा * चिन्ता हुनाले गरी ।
लागे गर्न अनेक तर्क कसरी * यो कष्ट जाला टरी ॥
यी रानी दमयन्तिलाई यसरी * त्यागेर जानू कहाँ ।
त्याग्नू पर्दछ देह नै बरु गई * मिल्नेछ मौका जहाँ॥१९॥
मैले त्यागिदिए स्वयं गइ बरू * बस्छिन् पिताका घर ।
त्याहाँ शान्ति हुन्नेछ निश्चय पनी * क्ये कालका खातिर
मेरा साथमहाँ डुलेर वनमा * आपत्ति पर्लान् कति ।
केही बेर पछी लिए नृपतिले * तिन्लाइ त्याग्ने मति ।२०
यौटै वस्त्र थियो र काट्दछु भनी * क्ये अस्त्र खोज्दा भए ।
डुल्दा नग्न शरीर त्यो स्थलमहाँ * ती प्रेत झैं देखिए ।
पाएथे तरवार एक कलिले * राखी दिएको थियो ।
काटें सुस्तरि नींद खुल्छ कि भनी * सन्ताप बेग्लै भयो ॥२१॥
आधा वस्त्र लगाइ चिन्तित हुँदै * त्यागेर रानी कन ।
निस्के बाहिर फेरि फर्कि त्यहिं नै * आए दुखाई मन ॥
लागे गर्न विचार सम्झि मनले * ती सुन्दरीका गुण ।
कस्तो प्रेम थियो ममाथि यसरी * त्याग्दा विना कारण॥२२॥
निद्राबाट उठेर पागल सरी * रोलिन् कराई कन ।
खोज्नेछन् यिनिले मलाइ वनमा * साह्रै दुखाई मन ॥
जस्को सूर्य र वायुले पनि कवै * पाउन्नथे दर्शन ।
त्यस्ती सुन्दरिलाइ यो जमिनमा * देख्छु सुतेकी छन ॥२३॥
वारंवार गएर क्ये पर त्यहाँ * फर्केर पुग्थे तिनी ।
रानीका मुखमा टुलु-टुलु बसी * हेरी रहन्थे पनि ॥

हे आदित्य, महेन्द्र धर्म, वसुहो * आएर रक्षा गर ।
त्यागी जान्छु म पत्निलाइ वनमा * क्यै कालका खातिर ॥२४॥
जिम्मा दिन्छु म देवता सकलमा * छिन् शुद्ध यी सुन्दरी ।
लागे जान उठेर फेरि नृपती * यस्तो पुकारा गरी ॥
भन्थ्यो जान हुँदैन छाडि यसरी * सद्बुद्धि एकातिर ।
तान्थ्यो धर्म तथा सुबुद्धि कलिले * पक्रेर अकोंतिर ॥२५॥
तानातान परी भएर विजयी * खूशी भएथ्यो कली ।
रानीलाइ त्यजी हिंडे नरपती * जानी विधाता बली ॥
फर्केनन् नृपती प्रभाव कलिको * ठूलो हुनाले गरी ।
लागे जंगल तर्फ दौड़न तिनी * अत्यन्त चिन्ता परी ॥२६

रानीको बिलाप र व्याध-नाशः–

राजा हिंडेपछि उठिन् दमयन्ति रानी ।
लागिन् सशंक भइ हेर्न सुनेत्र तानी ॥
खोजिन् यताउति डुलेर निकै डराई ।
लागिन् कराइकन डाकन ति भूपलाई ॥२७॥
स्वामी ! नरेन्द्र ! प्रियनाथ ! कता गएर ।
लुक्नू भयो मकन छल्न गरी विचारी ॥
त्यागेर राज्य सुख वैभव त्यो अपार ।
भोग्नु भयो दुःखहरू बुझि 'सत्य' सार ॥२८॥
त्यै सत्य खातिर गरी प्रण क्यै नढाँटी ।
जानू भयो अब कतातिर काटि घाँटी ॥
जानेर ता गरिनँ क्यै अपराध कैह्ले ।
दोषी भए पनि त माफ दिनोस् अहीले ॥२९॥

जस्ले गरेर वनको दुःख यो सहायो।
खोसेर वैभव वियोग पनी गरायो॥
त्यस्ले पनी खपि यसै गरि कष्ट धेर।
पर्नेछ डुल्न भनि श्राप म दिन्छु हेर॥३०॥

त्याग्नू भो जसरी मलाई वनमा * ऐल्हे विना कारण।
त्याग्दैनन् यसरी कुनै सुजनले * निर्दोष नारीकन॥
पाऊँ दर्शन नाथका चरणको * भन्दै पुकारा गरी।
रोई पागल झैं कराइ वनमा * खोज्दै हिंडिन् सुन्दरी॥३१
ठूलो जंगलमा अजिंगर कुनै * यौटा बसेको थियो।
पक्री ती दमयन्तिको चरणमा * निल्ने इरादा लियो॥
हे स्वामी ! प्रियनाथ ! हे नरपते !* आएर रक्षा गर।
मेरो स्नेह भुलेर आज हुनुभो * के हेतुले निष्ठुर॥३२॥
ठूलो शब्द गरी कराइ तिनिले * साहाय मागिन् जब।
डर्लाग्दो सुनि शब्द दानव सरी * आयो किराँती तब॥
त्यस्ले मारिदियो अजिंगर अनि * ल्याएर खाने कुरा।
देखाई कन स्नेह भोजन दिई * सन्तोष पाऱ्यो पुरा॥३३॥
देखी रूपवती प्रशस्त गुणकी * खानी तथा सुन्दरी।
धेरै यत्न गऱ्यो फकाउन भनी * माया गरी बेसरी॥
त्यस्को भाव बुझेर क्रोधित भई * रोकिन् कराई, तर।
लाग्यो पक्रन कामको वश परी * त्यो दुष्टले आखिर ३४॥
बोलिन्-सत्य रहेछ शेष यदि क्यै * मेरा भने, ईश्वर।
दिन्छु श्राप मरोस् डढीकन स्वयं * आगो बली, निष्ठुर॥
पाई श्राप सतीत्वले मरिगयो * त्यै ठाउँमा त्यो जली।
स्वामी खोज्न भनेर घोर वनमा * फेरी हिंडिन् ती डुली॥३५॥

अम्बा आँप प्रियाल बेल अमला * खर्जुर औ अर्जुन ।
हर्रो ङ्डुम्रि र ताल पीपल धऊ * पालाश औ जामुन ॥
सारा नै लटरम्म फूल फलले * शोभा थियो वृक्षको ।
सोधिन् वृक्ष लता सबैसित पता * तिन्ले रुँदै भूपको ॥३६॥
हात्ती बाघ तथा मृगी हरिण औ * गैंडा जरायो अनि ।
भालु सिंह मयूर दुम्सि कुखुरा * अर्ना तथा बाघिनी ॥
डलांग्दा वन-जन्तु देखि तिनिले * सोधिन् नमानी भय ।
देख्यौ कि नल भूपलाइ भन लौ * होला सबैको जय ॥३७॥
बोल्थे हंस चकोर सारस चरा * धोबी चरी खञ्जन ।
शोभा त्यो वनको थियो तर तिनी * रुन्थिन् दुखाई मन ॥
योटा उत्तम देखियो नदि त्यहीं * राम्रा कुटी आश्रम ।
देखिन्थे तपमा निमग्न मुनि औ * ज्ञानी त्यहाँ उत्तम ॥३८॥
पौंची आश्रममा प्रणाम तिनिले * सत्पात्रलाई गरिन् ।
आज्ञाले मुनिको सुआसनमहाँ * शंका नमानी बसिन् ॥
के इच्छा मनमा लिएर वनमा * आयौ तिमी सुन्दरी !
के हो नाम बताउ आफ्नु पतिको * औ वंशको राम्ररी ॥३९॥
यस्तो तो मुनिवृन्दका सुनि कुरा * विस्तार आफ्नू भनी ।
देखनूभो नल भूपलाई कि कतै * हे तत्वदर्शी मुनी ॥
यस्तो प्रश्न सुनेर फेरि मुनिले * आज्ञा गरे सुन्दरी ।
देख्दछौं तपको प्रभाव बलियो * हाम्रो हुनाले गरी ॥४०॥
होला भेट छिटै तिमीसित शुभे * निष्पाप भूपालको ।
आफ्नू राज्य लिनन् फिराइ रणमा * शेखी हरी शत्रुको
यस्तो अति दिएर आश्रम सहित * सम्पूर्ण ज्ञानी मुनि ।
अन्तर्धान भए ति सुन्दरि बसी * हेर्दै थिइन् तैपनी ॥४१॥

केही बेर भएर विस्मित तिनी * फेरी अघी झैं गरी।
लागिन् खोज्न डुलेर घोर वनमा * निर्भीक भै बेसरी॥
पानी अन्न नखाइ तीन दिन ता * घुम्दै बितेथ्यो जब।
देखिन् फौज ठुलो त्यहाँ वणिकको * जाँदै गरेको तब॥४२॥
पत्ता लाग्दछ की भनी पछि-पछी * त्यै फौजको ती हिंडिन्।
जाहाँ वास बसे सबै वणिक ती * क्यै दूरमा गै बसिन्॥
व्यापारी दलका कती सुजनले * को हौ ? भनी सोद्धथे।
देखी रूपवती सतीसित कती * ठट्टा पनी गर्दथे॥४३॥
व्यापारीहरूले विदर्भ पुरिमा * जान्छौं भनेको सुनी।
स्वामी खोज्न भनेर सोहि दलका * साथै हिंडिन् ती पनि॥
तेस्रो वासमहाँ सुते वणिक ती * विश्रामका खातिर।
थोटा वृक्ष मनी लुकीकन बसिन् * रानी पनी क्यै पर॥४४॥
आधारात बित्यो र दैवगतिले * थर्काउँदै जङ्गल।
आयो त्यै स्थलमा अनेक वनका * हात्ती हरूको दल॥
व्यापारीहरूले पनी सँग महाँ * हात्ती लगेका थिए।
लागी लड्न दुवै थरी, वणिक त्यो * देखी सबै आत्तिए॥४५॥
ढाली वृक्षहरू उपद्रव ठुलो * जन्तूहरूले गरे।
हात्तीले, रुखले किचेर दलका * मानीस धेरै मरे।
हाहाकार गरी कती वरि-परी * भागे डराई कन।
जो बाँचे सबले मिलीकन गरे * सल्लाह सोही क्षण॥४६॥
आयो घोर विपत्ति जङ्गल महाँ * कस्को परी के छल।
कस्का पाप उदाइ पूर्व जुनिको * भोग्नू पर्‍यो यो फल॥
भेटेथ्यौं वनभित्र हामिहरूले * नारी अती सुन्दरी।
हाम्रो नाश भयो अवश्य बुझियो * त्यै दानवीले गरी॥४७॥

पक्षी त्यस्कन भाइहो ! तर कतै * देखिन्न मायाविनी ।
लागे खोज्न यता-उती सब मिली * काहाँ गई त्यो भनी ॥
यो भाग दमयन्तिले पनि कुरा * सुन्दै थिइन् क्यै पर ।
मान्छिन् निश्चय दुष्टले अब भनी * भागिन् ति एकातिर ॥४८
मैले पाप गरीन यो जुनिमहाँ * जानेर केही पनि ।
कस्तो पाप रहेछ पूर्व जुनिको * मेरो नराम्रो भनी ॥
गर्दै तर्क अनेक पागल सरी * भागी रहेकी थिइन ।
चन्देरी नृपको ठुलो नगरमा *क्यै कालमा ती पुगिन्॥४९
माटो देह भरी र वस्त्र टुकुरा * मैलो र योटै थियो ।
डरलाग्दो दमयन्तिको शरिर झन् * डुल्दा त्यहाँ देखियो ॥
बोलाही भनि दुष्ट बालकहरू * व्यर्थै लखेटतै थिए ।
योटा सज्जनले पुगेर ति सबै * -लाई लघारी दिए ॥५०॥
डुल्दै फेरि पुगिन् सुबाहु नृपको * दर्बारनेरै जब ।
रानीले छतबाट दैवगतिले * तिन्लाइ देखिन् तब ॥
त्यस्तो कष्ट परे पनी शरिरको * सौन्दर्य उस्तै थियो ।
रानीको मन भित्र दैवगतिले * माया उमारी दियो ॥५१॥
धाईलाइ पठाइ डाकि नगिचै * सोधिन् दयालु बनी ।
को हौ लौ भन सुन्दरी ! किन वृथा * डुल्छयौ यसोरी भनी ॥
स्वामीको घरको पिता र जननी * -को नाम के हो भन ?
तिम्रो भेष र रूप देखि किन हो * शंकित छ मेरो मन ॥५२॥
रानीको सुनि बात शान्त मनले * क्यै बेर सोची कन ।
लागिन् गर्न बुझाइ भीम-दुहिता * सन्तापको वर्णन ॥
जुवामा पतिले भए जति सबै * सर्वस्व हारी कन
त्यागी जानुहुँदा म खोज्दछु डुली * तिन्लाइ यै कारण ॥५३॥

खप्दैछु पतिको वियोग यसरी * विक्षिप्त झैं यो घरी ।
रानी श्री दमयन्तिको महलमा * बस्थें गरी चाकरी ॥
रोई आफ्नू हवाल वर्णन गरी * सारा भनीथिन् जब ।
हेरिन् छक्क परेर वस्त्र तनको * सौन्दर्यलाई तब ॥५४॥
रानीका मनमा दया हुन गयो * संकष्ट तिन्को सुनी ।
लागिन् भन्न बुझाइ हेर तिमि झैं * छोरी छ मेरी पनि ॥
त्यस्को साथमहाँ यहीं बस शुभे ! * ठानेर आफ्नै घर ।
स्वामी खोज्न पठाइ दूत यहिंका * उद्योग गर्दै गर ॥५५॥
रानीको सुनि बात फेरि तिनिले * बिन्ती गरिन् सादर ।
आज्ञा बक्सनुभो सबै हजुरले * अत्यन्त राम्रो, तर ॥
गर्नें छैनँ कुरा कुनै पुरुषका * साथ्मा म कैल्हे पनि ।
जूठो खान्नँ, अरू म गर्दछु सबै * कर्तव्य मेरो भनी ॥५६॥
रानीले प्रणको कुरा सुनि भनिन् * हाँसेर हे सुन्दरी !
तिम्रो यो प्रण भङ्ग हुन्न कहिल्यै * भन्ने बुझे राम्ररी ॥
छोरी झैं गरि राखुँला महलमा * चिन्ता नलेऊ अब ।
राजी भै दमयन्तिजी त्यहिं बसिन् * क्यै शान्ति पाई तब ५७॥

नलद्वारा नागको रक्षा र कर्कोटकको आश्वासन—

रानीलाइ त्यजेर क्यै पर गए * दुःखी हुँदै श्री नल ।
खाँदै कत्ति नखाइ जङ्गल महाँ * डुल्दा भए दुर्बल ॥
राजा छक्क परे भयंकर त्यहाँ * देखेर दावानल ।
यौटा शब्द सुने बचानुहवस् * आई छिटो हे नल ॥५८॥
आँटें मर्न डढी म छू शरणमा * भन्ने पुकारा सुनी ।
आगोभित्र पसे तुरुन्त नृपती * रक्षा म गर्छु भनी ॥

देखी नाग त्यहाँ निकै पर लगी * त्यस्लाइ राखे जब।
राजालाइ डसी कुरूप सहसा * पारी दिएथ्यो तब ॥५९॥
देखी आफ्नु स्वरूप छक्क परि ती * हेर्दै थिए भूपति।
लाग्यो भन्न बुझाइ नाग मनमा * आनन्द मान्दै अति ॥
हो कर्टोटक नाग नारद मुनी * -को श्रापले बेसरी।
भोगें कष्ट, कृपा हुँदा हजुरको * त्यो श्राप गैगो टरी ॥६०
देखें व्याप्त कली शरीरभरिमा * मैले हजुर्को यहाँ।
भोग्ला यो विषबाट कष्ट कलिले * भन्ने बुझी मन्महाँ॥
मेरो यो विषले हुँदैन तनमा * क्यै कष्ट हे भूपति !
चिन्दैनन् अरुले कुनै तरहले * होवैन केही खति ॥६१॥
बस्छन् श्री ऋतुपर्ण शासन गरी * ऐहे अयोध्या महाँ।
बस्नू बाहुक नामले नरपते ! * मिल्नेछ शान्ती त्यहाँ॥
सिक्नेछन् तिनिले हजूरसितको * त्यो अश्व - विद्या जब।
देलान् भूपतिले सिकाइ खुशिले * त्यो द्यूतविद्या सब ॥६२॥
फिर्ता राज्य लिएर फेरि अघि भैं * गर्नू बसी शासन।
इच्छा पूर्ण हुनेछ केहि मनमा * पर्दैन चिन्ता लिन ॥
आफ्नू रूप लिने हुनेछ मनमा * इच्छा हजुर्को जब।
दिन्छु वस्त्र म एक ओढिलिनु त्यै * सम्झी मलाई तब ॥६३॥
होला दिव्य स्वरूप फेरि अघि झैं * त्यो वस्त्रले नाथको।
एती बात भनी झिकीकन दियो * टुक्रा सफा वस्त्रको ॥
गर्नन् ईश्वरले दया नरपते ! * मेरा भयौ रक्षक।
अन्तर्धान भयो यती भनिसकी * तत्काल कर्कोटक ॥६४॥
त्याहाँबाट हिंडी पुगे नल पनि * डुल्दै अयोध्यापुरी।
राजा श्री ऋतुपर्णका हजुरमा * बिन्ती गरे राम्ररी ॥

मेरो 'बाहुक' नाम हो म हयको * विद्या सबै जान्दछु ।
सारा शिल्प र पाक-शास्त्रहरूमा * हे भूपती ! विज्ञ छु ॥६५॥
गर्नेछु म हजूरका हुकुमको * आनन्दले पालन ।
यस्तो बात सुनी गरे नृपतिले * स्वीकार हाँसीकन ॥
तिम्रा साथ हुनन् सहायक दुवै * वार्ष्णेय औ जीवक ।
मेरो यो दरबारमा बस तिमी * सानन्द हे बाहुक ! ॥६६॥
आज्ञाले नृपको बसे नल त्यहीं * क्यै शान्ति मिल्ला भनी ।
शान्ती मिल्न सकेन रातभर झन् * बोली रहन्थे तिमी ॥
सोधे जीवकले, सखे ! भन तिमी * कस्को गरी सम्झना ।
गर्छौ रातभरी कुरा सुमुखिको * राखेर के कामना ॥६७॥
लागे श्री नल भन्न–जीवक ! कुनै * दुर्बुद्धि यौटा थियो ।
त्यस्ले आदर योग्य शुद्ध मनकी * स्त्रीलाई त्यागी दियो ॥
यस्तै गुप्त कुरा भनीकन गरे * आफ्नू सबै वर्णन ।
सुन्थे जीवकले कुरा नृपतिको * आश्चर्य मानीकन ॥६८॥

दमयन्ती पितृ-गृह गमन र नलको खोजी

हारी राज्य लिएर पत्नि वनमा * जानू भयो रे नल ।
यो संवाद सुनेर भीम नृपती * साह्रै भए विह्वल ॥
भेजे खोज्न भनेर दूत बहुतै * छोरी र ज्वाइँ कन ।
तिन्मा एक सुदेव नामक थिए * ज्ञानी कुनै ब्राह्मण ॥६९
चन्देरी नृपका पुगे महलमा * तो विप्र कोही दिन ।
गर्दा खोजि चिन्हे ति भीम-दुहिता * सैरन्ध्रि भन्ने कन ॥
यौटा वस्त्र छ देहमा अरु कुनै * देखिन्न आभूषण ।
जस्तो तेज थियो उही छ अहिले * क्यै क्षीण देख्छु तन॥७०॥

झीनू बादलभित्रका शशिसरी * यस्ती सुशीला कन ।
त्यागे भूपतिले वृथा किन भनी * आत्तिन्छ मेरो मन ॥
यस्तै तर्क गरेर धेर मनमा * पैह्ले गरी निश्चय ।
सोधे श्री दमयन्तिलाइ द्विजले * त्यागेर सारा भय ॥७१॥
मेरो नाम सुदेव ब्राह्मण भनी * विश्वास मान्नू हवस् ।
खोज्दैछन् अहिले पिता र जननी * दुःखी भई, जानुहोस् ॥
ठान्छु योग्य हजूरले अब गई * बस्नू पिताका घर ।
यस्ता बात सुदेवका सुनिसकी * सोधिन् गरी आदर ॥७२
ब्रह्मन् ! भन्नुहवस् पिता र जननी * मेरा दुवै बालक ।
सम्झन्छन् कि मलाइ कुण्डिनतरफ् * राजा प्रजा पालक ॥
यो संवाद हुँदा सुबाहु नृपकी * कन्या सँगैमा थिइन् ।
आमालाइ गएर त्यो सब कुरा * तिन्ले सुनाई दिइन् ॥७३॥

रानी गएर नगिचै दमयन्तिलाई ।
बोलिन् सहर्ष बसि प्रेम ठुलो जनाई ॥
छोरी ! वृथा बसिदिंदा भइ गुप्त याहाँ ।
क्यै दुःख भो कि भनि ठान्दछु चित्तमाहाँ ॥७४॥
नचिन्दामा केही अनुचित गरेकी यदि भए ।
गरे माफी, तिम्रा अब विपतिका ती दिन गए ॥
सुनी रानीको त्यो वचन दमयन्ती खुशि भइन् ।
क्षमा पाऊँ भन्दै चरण तल तिन्का परिगइन् ॥७५॥

हे आमा ! खुशिले म गुप्त रूपमा * याहाँ बसे तापनि ।
राख्थिन् आफु समान राज-दुहिता * मेरी सखी हुन् भनी ॥
यस्मा कत्ति नमानिवक्सनुहवस् * चिन्ता हजुर्ले अब ।
आज्ञा पाउँ वरु म पितृ-गृहमा * जान्छु खुशी छन् सब ॥७६

रानीले दमयन्तिको सुनि कुरा * अत्यन्त प्यारो गरी ।
इज्जतसाथ बिदा दिइन् घर शुभे ! * जाऊ भनी त्यै घरी ॥
त्याहाँबाट हिंडेर केहि दिनमा * पौंचिन् पिताको घर ।
आमा-बाबु तथा सबै सुजनले * तिन्को गरे आदर ॥७७॥

राजा नलको परिचय पाई दमयन्तीको फेरि स्वयंवर हुने चर्चा :—

हे राजन् ! दमयन्ति पितृ-गृहमा * सानन्द बस्ता पनि ।
साह्रै दीन मलीन खिन्न मनले * रोई रहन्थिन् तिनी ॥
देखी कष्ट सुपुत्रिको घरि-घरी * आमा गई सोद्धथिन् ।
आमालाई रुँदै भई विवश ती * सारा कुरा भन्दथिन्७८॥
स्वामीको जबसम्म दर्शन कतै * पाउन्नँ खोजी गरी ।
त्यागी अन्न र वस्त्र एक पहिरी * बस्छु तपस्वी सरी ॥
छोरीको सुनि दुःखका सब कुरा * राजा कहाँ ती गइन् ।
इच्छा ती दमयन्तिको जति थियो * सम्पूर्ण विन्ती गरिन्॥७९

डाकेर दूतहरू भूपतिले तुरुन्त ।
बोले सुपुत्रिसँग सोधि लिनू समस्त ॥
जे भन्दछिन् जसरि जानु भनेर जाहाँ ।
जानू लिएर समचार सहर्ष त्यहाँ ॥८०॥

आज्ञाले नृपका सबै चरहरू * आफ्नू तयारी गरी ।
पौंचे श्री दमयन्तिका हजुरमा * जम्मा भई त्यै घरी ॥
लागिन् भन्न बुझाइ दूतहरुहो ! * चारै दिशामा गई ।
जस्तो प्रश्न म भन्दछु उहि सबै * भन्नू चनाखो भई ॥८१॥
त्यस्को उत्तर दिन्छ जुन् पुरुषले * आई मलाई भन ।
मेरो प्रश्न बताउँछु अब सबै * हे दूतहो ! लौ सुन ॥

आफ्नू राज्यमहाँ कुनै दिन दुवै * राजा र रानी थिए ।
राजाले परि दैवका वशमहाँ * सर्वस्व हारी दिए ॥८२॥
जाँदा जंगलमा लुगा शरिरमा * एकेक तिन्को थियो ।
योटा वस्त्र नरेशका शरीरको * खोसी चराले लियो ॥
योटै वस्त्र लपेटि कोहि स्थलमा * दोटै सुतेका थिए ।
आधा वस्त्र चिरी सुटुक्क नृपले * स्त्रीलाइ त्यागीदिए ॥८३॥
निद्राबाट उठेर विह्वल हुँदै * रोइन् असाध्यै तर ।
स्वामीको गरि खोज ती डुलिरहिन्* क्यै काल चारैतिर ॥
गर्दै घोर विलाप पागल सरी * स्वामी कहाँ छौ भनी ।
तिन्कै आश गरी अझैतक पनी * छन् एकवस्त्रा तिनी ॥८४
जस्तो त्याग गरे उसै तरहले * छन् ती बसेकी, तर ।
आएनन् किन भन्दछिन् घरि-घरी * भूपाल हुन् निष्ठुर ॥
मेरो प्रश्न सुनाइ दूतहरूहो ! * आफ्नू पनी बुद्धिले ।
मेरो व्याकुलता र कष्ट मनको * भन्नू ठुलो युक्तिले ॥८५॥
गर्दा बात कहीं ति जान्न नसकुन्* हो प्रश्न मेरो भनी ।
गर्नू बुद्धि पुऱ्याइ बात सबले * मेरो, दयालु बनी ॥
गोई श्रीदमयन्तिले भनिसकिन् * संकेत आफ्नू जब ।
तिन्को व्याकुलता बुझेर मनको * ती दूत रोए सब ॥८६॥
माग दूत हिंडे दिशा दशमहाँ * सम्चार बोकी कन ।
जो - जो दूत गए तिनै बिच थिए * पर्णाद क्वै ब्राह्मण ॥
आई क्यै दिनमा फिरेर पुरमा * तिन्ले भने सादर ।
कल्याणी ! म पुगें कुनै दिन स्वयं* डुल्दै अयोध्यातिर ॥८७
राजा श्री ऋतुपर्णका हजुरमा * मन्तव्य बिन्ती गरें ।
दिन्छन् उत्तर की कुनै सुजनले * भन्ने विचार्दै रहें ॥

त्याहाँबाट पनी निराश मनले * फर्की सकेको थिएँ ।
रोक्ता बाहुक नाम सारथिजिले * शंका परी रोकिएँ ॥८८॥
एकान्तस्थलमा लगेर तिनले * दिक्दार मान्दै अति ।
जस्तो बात गरे म भन्दछु शुभे ! * त्याहाँ सुनेको जति ॥
जूवामा छलले कुनै पुरुषले * सर्वस्व हारी दियो ।
यौटा वस्त्र लगाइ घोर वनमा * स्त्रीका सँगैत्यो गयो॥८९
पक्षीले कपड़ा लिएर छलले * नाङ्गो गराई दियो ।
डुल्दा त्यो वनमा अनेक थरिको * संकष्ट भोग्दो भयो ॥
पत्नी माइतमा पुगे त बरु क्यै * होला सुशान्ती भनी ।
आधा वस्त्र चिरेर सोहि पहिरी * त्यागी दिएथ्यो,अनि ॥९०
स्त्रीमा रत्न कुलीनले थरि-थरी * आपत्ति पाए पनि ।
बोल्दैनन् कहिले कुवाच्य पतिको * होला कि निन्दा भनी ॥
त्यागेछन् पतिले भने पनि बरू * सन्तोष मानी कन ।
रक्षा सक्दछ गर्न जो बखतमा * त्यै हो ठुलो सजज्न ॥९१॥
यस्ता स्त्रीहरू मानवी नभइ हुन् * लक्ष्मी तथा पार्वती ।
नित्यै जो हित गर्दछन् सकलले * ठूला तिनै हुन् भनी ॥
धेरै यै रितका कुरा अरू पनी * रोएर गर्दा भए ।
आएँ फर्कि यता म बाहुक उता * फर्केर घरमा गए ॥९२
गर्दै वर्णन यो सबै भनिसके * पर्णादजीले जब ।
त्यो संवाद सुनेर सम्पति दिइन् * ती विप्रलाई तब ॥
त्याहाँबाट बिदा भईकन गए * सानन्द ती ब्राह्मण ।
स्वामीको दमयन्तिले बसि त्यहीं *.गर्दै रहिन् चिन्तन ॥९३॥

दमयन्तीको फेरि स्वयंवर हुने मिथ्या चर्चा र पुनर्मिलन :—

केही काल वित्यो यसै तरहले * गर्नै नसक्ता स्थिर ।
जान्थ्यो चित्त तथा विचार सहसा * लम्केर एकातिर ॥
आमालाइ भनी सुदेव द्विजको * गर्दै ठुलो आदर ।
लागिन् श्री दमयन्ति भन्न अहिले * हे विप्र ! रक्षा गर॥९४॥

वस्नू हुन्छ भएर गुप्त नलजी * ऐह्ले अयोध्या महाँ ।
विन्ती श्री ऋतुपर्णका हजुरमा * गर्नू पऱ्यो गै त्यहाँ ॥
खोजे श्री नललाइ खूब तर क्यै * लागेन पत्ता जब ।
लागिन् गर्न विवाह भीम दुहिता * शंका नमानी अब ॥९५॥

भोली साइत हो स्वयंवर हुने * आएँ म निम्ता लिई ।
जानू पर्छ हजूरले पनि त्यहाँ * अत्यन्त खूशी भई ॥
यो सम्चार बताउनू गइ त्यहाँ * विश्वास पर्ने गरी ।
आज्ञा पाइ सुदेव ब्राह्मण हिंडे * डुल्दै अयोध्या पुरी ॥९६॥

जस्तो श्रीदमयन्तिले अघि भनिन्* उस्तै गरी वर्णन ।
सम्झाए ऋतुपर्णलाई द्विजले * विश्वास पारी कन ॥
त्यो संवाद तुरुन्त फैलिन गयो * सारा अयोध्या भरी ।
लागे गर्न अनेक तर्क नलले * शंका परी त्यो घरी ॥९७

गर्नेछिन् कसरी स्वयंवर तिनी * निर्दोष साध्वी सछी ।
साँचो मान्नँ तयार छैन अहिले * मैले सुनेको जति ॥
स्त्रीमा चञ्चलता रहन्छ पतिको * माया नमिल्दा महाँ ।
के आश्चर्य छ प्रेम टुटाउन पनी * मेरा उपर्को त्यहाँ ॥९८॥

चाँडै खोज्न मलाइ यत्न सजिलो *पक्का गरिन् यो कि ता ।
साँचै हो र म गैन पो यदि भने * मर्छिन् अवश्यै ति ता ॥

गर्नु यो कसरी विवाह तिनिले * छोरा र छोरी भई ।
जे होला बुझिन्ये छ सो सब कुरा * भोली विदर्भ गई ॥९९॥
भैले नै रथ हाँक्नुपर्छ नृपले * भन्छन् अवश्यै पनि ।
वेला छैन प्रशस्त, नत्र कसरी * पुग्छन् अयोध्या तिनी ॥
ऐह्ले देखिदनँ सारथी अरु कुनै * अर्को यहाँ सद्गुणी ।
यस्तै तर्क गरी गए महलमा * बिस्तार बुझ्छु भनी १००
राजा श्री ऋतुपर्ण त्यो बखतमा * चिन्तित बसेका थिए ।
देखी बाहुकलाइ झट्ट नगिचै * डाकेर आज्ञा दिए ॥
जानू पर्छ विवाहमा समयमा * थोरै छ हाम्रो, तर ।
इच्छा पूर्ण हुने सुयुक्ति सजिलो * राम्रो र छाँटै गर ॥१॥
यो आज्ञा ऋतुपर्णको नलजिले * सारा सुनेथे जब ।
आफ्नू उत्सुकता लुकाइ सहजै * बिन्ती चढ़ाए तब ॥
राजन् ! छैन कुनै असम्भव कुरा * टाढ़ा छ सै योजन ।
स्वामीको रथ पुग्छ चार घड़िमा * पर्दैन चिन्ता लिन ॥२
यस्तो बाहुकको कुरा सुनि सकी * निश्चिन्त राजा भए ।
प्रातःकाल उठेर सज्जित भई * जान्छु भनी तम्सिए ॥
ल्याए बाहुकले तुरुन्त बढ़िया * छानेर घोड़ा त्यहाँ ।
पारी भट्ट तयार दिव्य रथमा * जोतीदिए छिन्महाँ ॥३॥
आई श्री ऋतुपर्ण सोहि रथमा * सानन्द बस्ता भए ।
बाठा बाहुकले सखा स्वरूपमा * वार्ष्णेयलाई लिए ॥
खैंची सारथिले लगाम बलले * घोडा हिंडाए जब ।
हावाको गति झैं हिंड्यो रथ स्वयं * हेरी रहेथे सब ॥४॥
देखी बाहुकको पराक्रम तथा * त्यो अश्व सञ्चालन ।
लाग्यो भन्न 'अवश्य भूप नलहुन्' * वार्ष्णेयजीको मन ॥

पक्का निश्चयमा ति पुग्न नसकी * गर्दै थिए चिन्तन ।
घोड़ाको अझ चाल दोब्बर भई * बढ्दै गयो झनझन ॥५॥
त्यै वेला नृपको खस्यो जमिनमा * राम्रो दुपट्टा जब ।
बोले–बाहुक ! झट्ट रोक रथ, त्यो * बार्ष्णेय ल्याओस् अब ॥
चाँडै नै नृपले भने तर पनी * जाँदा ठुलो वेगले ।
राजाको रथ चार कोस पर गो * चातुर्य औ शक्तिले ॥६॥
बोले बाहुक–भूपते ! छुटिसक्यो * त्यो वस्त्र धेरै पर ।
त्यस्को याद विचार छाड़ि रथमा * बस्नू हवस् सुस्थिर ॥
नाघी जंगल घोर पर्वत सबै * बढ्दै अगाड़ी गए ।
हाँकेको रथलाइ देखी नृपती * अत्यन्त खुशी भए ॥७॥
बोले भूपति—हुन्न बाहुक कहीं * सर्वज्ञ कोही पनि ।
मैले जान्दछु द्यूतको गणितको * यस्तो छ विद्या भनी ॥
सामुन्ने वट-वृक्षमा फुल तथा * जो पात छन् सो सुन ।
नौ कोटी सय पाँच छन् पृथिविमा * इच्छा भए लौ गन ॥८॥
यस्तो भूपतिको कुरा सुनिसकी * विश्वासको खातिर ।
लागे गन्न गएर रोकि रथ त्यो * तत्काल एकातिर ॥
मौका छैन भनेर रोक्न नृपले * उद्योग गर्दा पनि ।
मानेनन् वट वृक्षका फल तथा * प्रत्येक पत्ता गनी ॥९॥
जोरी हात दुवै भने नरपते ! * विश्वास मानें अब ।
स्वेच्छाले म सिकाउँछु हजुरमा * त्यो अश्व-विद्या सब ॥
पाउँ सिक्न म द्यूतको गणितको * विद्या र त्यस्को छल ।
येती बात भनी प्रसन्न मनले * पर्खी रहे श्रीनल ॥१०॥
केही बेर गरी विचार नृपले * स्वीकार गर्दा भए ।
साटा-साट गरेर आपुस महाँ * विद्या दुवैले लिए ॥

जानेथे जब द्यूतको छल, कली * भाग्यो डराई कन ।
त्यो जानी नलको पनी हुनगयो * अत्यन्त खूशी मन ॥११॥
फेरी त्यैं रथमा बसेर खुशिले * बढ्दै अगाडी गए ।
चाँडै नै ति विदर्भको नगरमा * सानन्द पुग्दा भए ॥
यो संवाद सुनी विदर्भ-पतिले * सत्कार राम्रो गरी ।
राखे श्री ऋतुपर्णलाइ घरमा * श्रद्धा गरी राम्ररी ॥१२॥
सोधे–पाल्नुभयो परेर अहिले * के काम हे भूपति !
सारा रैयत छन् प्रसन्न अथवा * त्यस्मा पऱ्यो क्यै खति॥
मेरो योग्य कुनै बताउनुहवस् * सेवा तथा चाकरी ।
राजाले ऋतुपर्णको सुनीसकी * सारा कुरा राम्ररी ॥१३॥
झूटो बात बुझी स्वयंवर हुने * केही नजान्ने बनी ।
लागे भन्न-थिएन काम अरू क्यै * आएँ म भेट्नै भनी ॥
राजी छन् अहिले प्रजा सुजनमा * क्यै छैन शंका कहीं
इच्छा दर्शनको थियो हजुरको * त्यै हेतु आएँ यहीं ॥१४॥
यो वार्ता नरपालको सुनिसकी * श्री भीम खूशी भए ।
राखी आदरले ठुलो महलमा * दर्बारमा फर्किए ॥
गर्दै तर्कहरू अनेक मनमा * चिन्ता र शंका परी ।
राजा श्री ऋतुपर्णजी बसिरहे * दर्बारमा त्यो घरी ॥१५॥
राजन् ! कर्कश शब्द घोर रथको * सुन्दा ठुलो गर्जन ।
लागिन् श्री दमयन्ति गर्न नलको * शंका तथा चिन्तन ॥
यस्तो शब्द गरेर हाँक्न सहसा * सक्तैन कोही रथ ।
आए चार घड़ीमहाँ यि कसरी * नाघेर लामू पथ ॥१६॥
देखिन्छन् ऋतुपर्ण मात्र नलजी * -लाई कतै देखिदन ।
को हो बाहुक सारथी र सँगमा * वार्ष्णेय आयो किन ॥

यस्तो तर्क गरिन् बसी मनमनै * अत्यन्त दुःखी बनी।
डाकिन् निश्चय गर्नलाइ नगिचै * आई सखी केशिनी ॥१७
जाऊ बुझ्न सखी ! ति बाहुक कहाँ * को हुन् र आए किन ?
शंका लाग्छ तथापि हुन् नल तिनै * भन्दैछ मेरो मन ॥
गर्नू बात गरी विचार तिमिले * केही नजान्ने बनी।
आज्ञाले दमयन्तिको उठि छिटै * जाँदी भई केशिनी ॥१८॥
बोली बाहुकको पुगेर नगिचै * हे सारथी ! स्वागत।
इच्छा श्री दमयन्तिको सुन तिमी * भन्छु म राम्रो सित ॥
कुन् बेला रथमा चढेर नृपले * प्रस्थान गर्नू भयो।
यहाँ आउनु यो विदर्भ पुरिमा * कुन् हेतु आई पर्‍यो ॥१९
बोले बाहुकजी—स्वयंवर हुने * निम्ता दिए विप्रले।
आएँ हेर्न भनी म सारथि बनी * आज्ञा दिंदा भूपले ॥
आजै नै चढि वेगवान रथमा * चारै घड़ीमा यहाँ।
आयौं हे सुमुखी ! नमान तिमिले * शंका कुनै मन्महाँ ॥२०॥
सोधी केशिनिले-भन्यौ जति कुरा * पर्णाद लाई सब।
स्वामी वस्त्र भनेर पक्षिहरूले * जान्यौ कसोरी तब ॥
राजा-रानि सिवाय कोहि अरूले * जान्दैनथे यो कुरा।
आफ्नू देउ चिह्नारि बाहुक तिमी * केही नढाटी पुरा ॥२१॥
त्यस्को उत्तरमा मुसुमुसु त्यहाँ * हाँसी रहे भूपति।
फेरी केहि नसोधि केशिनि पनी * फर्की खुशी भै अति ॥
त्यी सारा दमयन्तिका हजुरमा * सम्चार त्यस्ले भनी।
शंका झन् मनमा बढेर बहुतै * तत्काल बोलिन् तिनी ॥२२
जाऊ बुझ्न भनेर केशिनि त्यहाँ * बस्नू नदेख्ने गरी।
जे गर्छन् जसरी जहाँ जति कुरा * हेर्नू सखी ! राम्ररी ॥

माग्नेछन् तिनिले हुँदैन सहसा * आगो र पानी दिन।
कोठा एक दिनू नपस्न सकिने * सानो विचारीकन ॥२३॥
यो सल्लाह मिलाइ बाहुककहाँ * मानीस यौटा गयो।
आफ्नू भात पकाउनाकन स्वयं * लौ जाउँ भन्दो भयो॥
त्यस्को बात सुनेर बाहुक गए * लौ हुन्छ जाऊँ भनी॥
कोठा भित्र यसै नपस्न सकिने * सानू थियो तापनि ॥२४॥
सोझै भित्र पसे न्यूरि तिनी * ठाडो गराई शिर।
रित्तो गाग्रि गराइ पूर्ण जलले * पन्छाइ एकातिर॥
राख्तैमा लकड़ी चुह्लो बिच स्वयं * आगो तयारी भयो।
तिन्ले काम गरे जती सब त्यहाँ * आश्चर्य लाग्ने थियो॥२५
केही बेर लुकेर हेरिकन त्यो * हाँस्तै गई केशिनी।
त्यो सारा दमयन्तिका हजुरमा * त्यस्ले नढाँटी भनी॥
त्यो संवाद सुनेर झन् हुन गयो * विश्वास पक्का तर।
बोलिन्-काम छ एक शेष सखि,त्यो* गे फेरि पूरा गर ॥२६॥
तिन्को कार्य-कलाप हेर्नु तिमिले * अत्यन्त बाठी भई।
फेरी जाउ झिंजो नमानि सँगमा * छोरा र छोरी लिई॥
त्यो आज्ञा दमयन्तिको सुनिसकी* फेरी गई केशिनी।
देखी बालक-बालिका खुशि भए * अत्यन्त राजा पनी ॥२७॥
केटीलाइ भने सहर्ष नृपले * केही नजान्ने बनी।
मेरै बालक-बालिका सरि दुवै * राम्रा रहेछन् भनी॥
खाने चीज सबै तयार हुन गो * ती भूपतीको जब।
खवाऊ लौ यि दुवै शिशुकन भनी * तिन्ले दिए क्यै तब॥२८॥
त्यै वस्तूहरूबाट क्यै अलिकती * त्यस्ले लुकाई कन।
ल्याई श्री दमयन्तिका हजुरमा * सुम्पी खुशी भैकन॥

जस्तो जे जसरी भयो जति त्यहाँ * सारा सुनाई दिई ।
चाखिन् त्यो दमयन्तिले चिज लिई * अत्यन्त खूशी भई ॥२९
जानिन् निश्चय हुन् यिनै नल भनी * त्यो वस्तुको स्वादले ।
आमालाइ भनिन् गईकन सबै * सम्चार आनन्दले ॥
चारै तर्फ गरी विचार मनमा * विश्वास आयो जब ।
भोली निर्णय गर्दछु म यसको * भन्ने विचारि तब ॥३०॥
प्रातःकाल भयो र फेरि जननी * -लाई भनिन् सादर ।
राजा हुन् तिनि नै भनेर मनमा * पक्का छ मेरो तर ॥
गर्छु भेट गएर बाहुक कहाँ * कि डाक्छु आफ्नै घर ।
आज्ञा माग्छु हजूरको म जननी ! * यो कामका खातिर ॥३१॥
राजालाइ भनिन् गएर तिनिले * सारा बुझाई जब ।
राजाले पनि क्यै विचारि मनमा * आज्ञा दिएथे तब ॥
डाकिन् बाहुकलाई मानिस स्वयं * यौटा पठाई कन ।
आएथे दरबारमा नल पनी * शंकित् गराई मन ॥३२॥
देखादेख भयो दुवै हुन गए * शोकाग्निले व्याकुल ।
आँसूले गरि ढाकियो नजर क्यै * बोल्नै सकेनन् नल ॥
बोलिन् श्री दमयन्ति धैर्य मनमा * राखेर हे बाहुक !
देख्यौ कि तिमिले कुनै नल सरी * राजा प्रजा-पालक॥३३॥
जस्ले त्यागिदियो अघोर वनमा * निर्दोष पत्नी कन ।
त्यस्ता श्री नल झैं अरू पनी कुनै * छन् भूपती ? लौ भन ॥
लागे बाहुक भन्न–हेर सुमुखी * साध्वी सती छन् जति ।
गर्छिन् कि दमयन्ति झैं कहिं विहा * दोस्रो लिई दुर्मति ॥३४
गर्छिन् दूतहरू प्रचार अहिले * चारै दिशामा गई ।
आएँ हेर्न भनेर सारथि बनी * त्यै हेतु चिन्तित् भई ॥

पैह्ले देहमहाँ निवास कलिको * मेरो थियो भामिनी ।
जूवामा धन राज्य हार्नु वनमा * स्त्रीलाई त्याग्नू पनी ॥३५
व्यथैं कष्ट दिएर दुष्ट अहिले * छाडेर भाग्यो जब ।
सम्झेरै तिमिलाइ बुझ्न सुमुखी ! * दौडेर आएँ अब ॥
सुन्दा श्री ऋतुपर्णले सब कुरा * आश्चर्य मानी कन ।
आए हेर्न भनेर छक्क परि ती * साह्रै दुखाई मन ॥३६॥
यस्ता बात सुनी सकेर नृपको * रानी निकै आत्तिइन् ।
सारा बात बुझाइ आफ्नु मनको * तत्काल बिन्ती गरिन् ॥
स्वामी ! यो समचारले हजुरको * लाग्नेछ पत्ता भनी ।
मैले दूत पठाउने मन गरें * अत्यन्त दुःखी बनी ॥३७
ल्याएथे समचार जो द्विज गई * पक्का गरें त्यै सुनी ।
डाक्ने झट्ट हजुरलाई अरु क्यै * देखीनँ युक्ती पनी ॥
शंका केहि नमान्नुहोस् म अघिझैं * निर्दोष छू भूपति ।
साक्षी छन् रवि,वायु अग्नि यि तिनै* यो बातका सद्गति ॥३८॥
त्यागी देवहरू गरें वरण जो * मैले अघी नाथको ।
मेरो त्यै प्रण हो तथा शपथ हो * विश्वासका निम्तिको
यस्तो श्रीदमयन्तिले गरिसकिन् * रोएर बिन्ती जब ।
तिन्का सामु भयो ठुलो स्वर गरी* आकाशवाणी तब ॥३९॥
हे राजन् ! दमयन्तिले जति भनिन्* साँचो कुरा हो सब ।
तिन्लाई तिमिले सहर्ष गरिल्यौ * स्वीकार चाँडै अब ॥
देवाज्ञा जब त्यो सुने नृपतिले * विश्वास पक्का भयो ।
ठूलो हर्ष भई तुरुन्त मनको * सम्पूर्ण शंका गयो ॥४०
लागे भन्न बुझाइ कष्ट वनमा * ठूलो परेका घरी ।
पाएथ्यो तिमिबाट श्राप कलिले * त्यै हेतुले बेसरी ॥

मेरो देहमहाँ बसीकन भयो * झन् दग्ध पापी जब ।
छाडेथ्यो कलिले अनी हुन गएँ * पैल्हे सरीको अब ॥४१॥
शंका क्यै मनमा नमान दुखका * हाम्रा बिते ती दिन ।
यस्ता बातहरु गरी सुमुखिको * राम्रो बुझाई मन ॥
श्री कर्कोटकको लुगा नृपतिले * सम्भेर ओढ़ी लिए ।
कालो रूप हराइ त्यै बखतमा * पैह्ले सरीका भए ॥४२॥
ठूलो स्नेह बढ़ाइ स्त्री-पुरुषले * हर्षाश्रु-मोचन् गरे ।
सारा रात कुरा गरेर मनको * सन्ताप आफ्नू हरे ॥
प्रातःकाल महाँ सुसज्जित भए * वस्त्रादिले दम्पति ।
पौंचे भेट्‌न भनी सभा-भवनमा * आनन्द मान्दै अति ॥४३॥
राजा श्री ऋतुपर्ण भीम दुइले * तिन्लाई देखे जब ।
पैह्ले छक्क परे पनी पछि निकै * खूशी भएथे सब ॥
चारै तर्फ ठुलो भयो नगरमा * त्यो बातको उत्सव ।
लागे श्री ऋतुपर्ण भन्न नलजी* -लाई खुशीभै तब ॥४४॥
हे राजेन्द्र ! गरें अनादर अघी * मैले नचिन्दा जति ।
झन् यो सारथि कामले त मनमा* सन्ताप मान्छु अति ॥
माफी पाउँ सबै कसूर अहिले * अज्ञानको हो भनी
हाम्नै श्री नलले भने नृपतिले * बिन्ती गरेको सुनी ॥४५॥
हे राजेन्द्र ! हजूरका सँग बसी * अत्यन्त खूशी थिएँ ।
क्यै बातां अनुचित् भए पनि सबै * सानन्द माफी दिएँ ॥
धेरै नै सुख-दुःखका वसि कुरा * क्यै बेर त्याहाँ गरी ।
फर्के श्री ऋतुपर्णजी खुशि हुँदै * आफ्नू अयोध्यापुरी॥४६॥
केही काल त्यहाँ बसेर नलले * मागी बिदा सादर ।
धेरै सैन्य लिई हिंडे निषधको * त्यो राज्य सीमातिर ॥

बोल्ले पुष्करका पुगी नगरमा * ल्याएँ प्रशस्तै धन ।
जूवा खेल्न तयार छु म अहिल्ले * सर्वस्व थापी कन ॥४७॥
आफ्नू राज्य फिराउनेछ मनमा * इच्छा अझै पुष्कर !
आऊ नत्र तिमी तयार भई लौ * संग्रामका खातिर ॥
जस्ले जित्छ लिनेछ राज्य सँगमा * पत्नी सुशीला पनि ।
हाँस्तै पुष्करले भने ति नलले * फुर्ती गरेको सुनी ॥४८॥
छौ ऐह्ले दमयन्तिका सँग तिमी * सौभाग्यले जीवित ।
ल्याएछौ धन बेसरी खुशि भएँ * त्यो बात सुन्दा म त ॥
जूवा खेल्न म शत्रुका सँगमहाँ * मान्दीनँ तृप्ती कवै ।
जे भन्छौ तिमिले स्वयं प्रण गरी * स्वीकार गर्छु सबै ॥४९॥
जूवामा दमयन्तिलाई सहजै * जित्नेछु मैले जब ।
दासी झैं गरि राखुँला महलमा * पुग्नेछ इच्छा तब ॥
यस्तै पुष्करले अनेक थरिका * दुर्वाच्य बोल्ले पनि ।
बोलेनन् नल भूप उत्तर दिने * मिल्नेछ मौका भनी ॥५०॥
जूवामा दुइ भाइ तत्पर भए * सर्वस्व थापी जब ।
हारे पुष्करले जिते नलजिल्ले * साम्राज्य औ वैभव ॥
बोल्ले श्री नलजी दया हुन गई * हेरेर भाई तिर ।
पैह्ले त्यो कलिले गरेर हुनगो * जुन् कर्म हे पुष्कर ! ॥५१॥
तिम्रो माथि म क्रोध गर्दिनँ यहाँ * त्यो बात सम्झी कन ।
तिम्रो अंश जती म दिन्छु खुशिले * सम्पूर्ण फिर्ता धन ॥
दाजूको सुनि बात पुष्कर भए * अत्यन्त नै लज्जित ।
पैह्ले झैं दरबारमा नल भए * तत्काल सम्मानित ॥५२

जस्तो थियो अघि उसै गरि राज्यलाई ।
थाल्ले चलाउन सुकीर्ति ठुलो फिंजाई ॥

डाके तुरुन्त नृपले परिवारलाई ।
आए लिएर धन सम्पतिको बिदाई ॥५३॥
सारा प्रजा सुजनलाइ सुखी तुल्याई ।
भोगे सुराज्य सय वर्ष जती चलाई ॥
डाकेर ब्राह्मणहरू कन एक एक ।
गर्दा भए मख ठुलो नलले अनेक ॥५४॥
बोले सहर्ष मुनि श्री बृहदश्व ज्ञानी ।
बस्नू युधिष्ठिर तिमी दुःख क्यै नमानी ॥
फिर्ता गरे जसरि राज्य ति भूपतीले ।
त्यस्तै प्रयत्न अब गर्नु सदा तिमीले ॥५५॥
सद्धर्म नीति सब पालन नित्य गर्नू ।
हो पाप, भूप ! अपकार कवै नगर्नु ॥
तिम्रो हुनेछ नल झैं पछि राज्य फिर्ता ।
पर्दैन केहि अहिले लिन शोक सुर्ता ॥५६॥
शिक्षा सुनीतिहरूको बृहदश्वजीले ।
राजा युधिष्ठिरजिलाइ दिए खुशीले ॥
मागी बिदा घर गए बृहदश्व ज्ञानी ।
पाँचै जना त्यहीं बसे सुख शान्ति मानी॥५७।

नारदद्वारा तीर्थ-महिमा वर्णन :

चारै भाइ र द्रौपदी पनि बसी * गर्दै थिए गन्थन ।
आएनन् किन फर्कि अर्जुन भनी * आफ्नू दुखाई मन ॥
राजन् ! पाण्डव वीरको वनमहाँ * संकष्ट देखी कन ।
आए नारदजी त्यही बखतमा * तिन्लाइ शिक्षा दिन॥५८॥

राखी आसनमा सहर्ष मुनिको * पूजा विधीले गरे ।
पाऊ नारदको पखालि जल त्यै * आफ्नू कुटीमा छरे ॥
मेरो पाउनु भयो पवित्र कुटि यो * आई मुनीले यहाँ ।
केही हेतु भए बताउनुहवस् * गर्छु पुरा छिन्महाँ ॥५९
बोले नारद–दुष्ट कौरवहरू * -को दुष्टताले गरी ।
पायौ दुःख भनेर चिन्तित भएँ * त्यो बातले बेसरी ॥
जे इच्छा मनमा छ त्यो अब तिमी * मागेर लेऊ वर ।
त्यो आज्ञा मुनिको सुनीकन भने * राजेन्द्रले सादर ॥६०॥
हे सर्वज्ञ मुने ! दया हजुरको * देखेर हाम्रो प्रति ।
मेरा पूर्ण भए मनोरथ भनी * आनन्द मान्छु अति ॥
जो जो छन् शुभ तीर्थ क्षेत्र अहिले * विख्यात पृथ्वी भरी ।
इच्छा गर्दछु सुन्नलाइ सबको * माहात्म्य राम्रो गरी ॥६१
यस्तो नारदले युधिष्ठिरजिको * विन्ती सुनेथे जब ।
लागे भन्न बुझाइ तीर्थहरूको * माहात्म्य तिन्ले सब ॥
पैह्ले जुन् महिमा पुलस्त्य मुनिले * श्री भीष्मलाई भने ।
भन्छु त्यै महिमा म तीर्थहरूको * आनन्द मानी सुने ॥६२॥
जस्ले गर्दछ धर्म, ज्ञानहरूको * चर्चा नियम्मा रही ।
त्यस्लाई फल मिल्छ तीर्थहरूमा * पौंचेर मात्रै उही ॥
ठूला यज्ञ र दानले धनिकले * जे पाउने हुन् फल ।
जाँदा निर्धनले सुतीर्थहरूमा * मिल्नेछ सोही फल ॥६३
जस्तै मुख्य समस्त देवहरूमा * छन् कृष्ण योगेश्वर ।
त्यस्तै श्रेष्ठ ठहर्छ तीर्थहरूमा * साह्रै ठूलो पुष्कर ॥
जस्ले स्नान र दान पुष्कर पुगी * गर्नेछ आनन्दले ।
त्यस्का पाप अगम्यमा गमनको * काटिन्छ त्यै पुण्यले॥६४

जस्ले तर्पण नर्मदा नदि महाँ * गर्नेछ श्रद्धा गरी ।
अग्निष्टोम गरे सरी फल भई * भोग्नेछ स्वर्गै पुरी ॥
गर्ला स्नान सरस्वती र उदधी * दोभानमा जो गई ।
गाई दान गरे सरी फल मिली * बस्नेछ द्यौता भई ॥६५
जो कोशी र दृषद्वती यि दुइको * स्नान् गर्छ दोभानमा ।
त्यस्का पाप जती छुटेर खुशिले * बस्नेछ संसारमा ॥
गर्ला गोमति स्नान दान गइ जो * श्रद्धा तथा भक्तिले ।
बस्ला गैकन पितृको नगरमा * त्यो व्यक्ति आनन्दले॥६६॥
जस्ले गर्दछ स्नान ध्यान हरिको * नारायणी तीर्थमा ।
सारा पाप कटेर बस्छ पछि त्यो * श्री सूर्यको लोकमा ॥
गर्ला तर्पण श्राद्ध पितृहरुको * जस्ले गयामा गई ।
तर्लान् पितृहरू अवश्य उसका * सम्पूर्ण मुक्तै गई ॥६७॥
जस्ले दर्शन विश्वनाथ प्रभुको * गर्नेछ काशी महाँ ।
बस्ला पार्षद भै नगीच शिवको * सौख्यादि भोगी यहाँ ॥
गङ्गा औ यमुनाजिको छ बढिया * ठूलो जहाँ संगम ।
गर्ला स्नान र दान जो पुगि त्यहाँ * नाशिन्छ सारा तम ।६८॥
श्री नारायणको गएर बदरी * -मा गर्छ जो दर्शन ।
बस्ला पाप छुटेर पार्षद बनी * वैकुण्ठमा गैकन ॥
जो रामेश्वर सेतुबन्ध शिवको * गर्ला गई दर्शन ।
पागी निर्मल देह बस्छ शिवको * कैलाशमा गैकन ॥६९॥
ठूलो तीर्थ छ द्वारकापुरिमहाँ * विख्यात पिण्डारक ॥
त्यस्को दर्शनले हुनेछ हरिको * प्रख्यात त्यो सेवक ।
गर्ला दर्शन स्नान जुन् पुरुषले * पौंची जगन्नाथमा ।
बस्ला कल्पभरी गएर खुशिले * त्यो व्यक्ति गोलोकमा ॥७०॥

छन् धेरै अरु तीर्थ हे नरपते ! * गर्नै कती वर्णन ।
गर्नू पर्छ अवश्य मानिस भई * तीर्थादिको दर्शन ॥
येती अर्ति दिएर नारद मुनी * फर्की गएथे जब ।
सोधे धौम्यजिलाइ तीर्थहरुमा * जाने लिई मन्सुब ॥७१।

तीर्थादिको छ महिमा भनि बार-बार ।
गर्दै थिए सब मिलीकन ती विचार ॥
इच्छा युधिष्ठिरजिका गुरुले बुझेर ।
भन्दा भए परव पछी गरुला विचार ॥७२॥

लोमश ऋषिद्वारा इन्द्रको सम्चार प्राप्त हुनु—

आए लोमशजी युधिष्ठिरकहाँ * भेट्ने इरादा गरी ।
राखी आसनमा प्रसन्न मनले * तिन्को गरे चाकरी ॥
सोधे ती मुनिलाइ धर्म-सुतले * के हेतु पाल्नू भयो ।
मेरो यो झुपड़ी पवित्र पदले * कुल्ची दिंदा भैगयो ॥७३॥

यस्तो लोमशले युधिष्ठरजिको * बिन्ती सुनेथे जब ।
लागे भन्न बुझाइ स्वर्ग-पतिको * सम्चार सारा तब ॥
भन्थे इन्द्र मलाइ अर्जुन यहाँ * शस्त्रास्त्र शिक्षा लिन
मेरो काम पनी छ शेष अहिले *बस्छन् अरु क्यै दिन॥७४॥

तिनलाई अब जित्न कोहि जनले * सक्तैन आँटे पनि ।
एक्लैले गई मार्दछन् समरमा * सम्पूर्ण शत्रू तिनी ॥
मेरो कार्य पनी छ केहि अहिले * बाँकी रहेको यहाँ ।
मैले अर्जुनलाइ खातिर त्यही * राख्दैछु स्वर्गैमहाँ ॥७५॥

यै वेला तिनीहेरुले गरिलिनू * तीर्थादिको सेवन ।
ठूलो पुण्य हुनेछ, बिल्छ सहजै * संकष्ट औ दुर्दिन ॥

यो सम्चार सबै युधिष्ठिरजिले * श्री इन्द्रजीको सुनी ।
लागे लोमशलाई भन्न खुशिले * सुन्नूहवस् हे मुनि ! ॥७६
जाने तीर्थ भनी बसेर अहिले * सल्लाह गर्दै थियौं ।
आज्ञा पाइ सुरेन्द्रको सब जना * अत्यन्त खुशी भयौं ॥
हो यो तीर्थ यहाँ यती छ महिमा * भन्ने कुरा जान्दिनँ ।
पाए लान हजूरलाइ संगमा * आनन्द हुन्थ्यो मन ॥७७
हे सर्वज्ञ मुने ! बरू हजुर नै * ऐल्हे दयालू भई ।
सारा तीर्थहरू गराइ दिनुहोस् * हाम्रो सँगैमा गई ॥
हुन्थे तीर्थ पनी सबै सुफल ती * जो जो जहाँ गर्दथ्यौं ।
हामी माथि पनी दया हजुरको * साह्रै ठुलो मान्दथ्यौं ॥७८
बोले लोमश श्री युधिष्ठिरजिले * बिन्ती गरेका सुनी ।
भन्थे जानु हजूरले पनि सँगै * श्री पार्थजीले पनि ॥
मैले ता दुइपल्ट गै गरिसकें * तीर्थादिको दर्शन ।
तेस्रो पल्ट पनी हुने अब भयो * जान्छु खुशी भैकन ॥७९॥

पाण्डवरूको तीर्थ-यात्रा र अगस्त्यले वातापिलाई पचाउनू-

बस्थे साथमहाँ युधिष्ठिरजिका * ज्ञानी मुनी सज्जन ।
सारालाइ लिएर पाण्डव हिंडे * आनन्द मानी कन ॥
गर्नू तीर्थ भनेर शास्त्रहरूमा * पाइन्छ जो वर्णन ।
सारा पूर्ण गरी हिंडे नियमले * सानंन्द तीर्थाटन ॥८०॥
पैल्हे तीर्थ ठुलो भनीकन गए * श्री नैमिषारण्यमा ।
त्याहाँबाट प्रयाग संगम, गया * पौंचे ति क्यै कालमा ॥
धेरै दान र स्नान तर्पण गरी * फेरी हिंडथे जब ।
पौंचे आश्रममा अगस्त्य मुनिको * क्यै कालमा पाण्डव ॥८१

पैह्लेको इतिहास लोमश मुनी * गर्दा भए वर्णन ।
राजन् ! इल्वल नाम राक्षस थियो * यौटा ठूलो दुर्जन ॥



पाण्डवहरूको तीर्थयात्रा आरम्भ

त्यस्ले विप्र अनेक मारि छलले * जम्मा गरेथ्यो धन ।
पत्नीलाई प्रसन्न पार्न धन क्यै * माग्छु भनी क्वै दिन ॥८२
घर्मा इल्वलको अगस्त्यजि पुगे * राजाहरू लीकन ।
वातापी भनि भाइ एक खलको * उस्तै थियो दुर्जन ॥
मायाले गरि भाइलाइ पहिले * भेड़ो बनाई लियो ।
त्यस्कै मासु पकाइ सामु ऋषिका * ल्याएर राखीदियो॥८३॥
यस्तै चाल गरी अघी ऋषि-मुनी* मार्ने गरेको थियो ।
तिन्लाई पनि मार्नको सुर गरी * त्यै चाल पक्री लियो ॥
त्यो जाने मुनिले प्रभाव तपको * ठूलो हुनाले गरी ।
खाए मासु समस्त लोकहरूको * रक्षार्थ सोही घरी ॥८४॥

डाकेथ्यो पहिले समान खलले * 'वातापि ! आऊ' भनी ।
त्यस्को वात सुनी अगस्त्य मुनिले* हाँस्तै भने—हे खुनी ॥
निस्कन्थ्यो जसरी अघी ऋषि-मुनी * -को अङ्ग फोरी खल ।
वातापी अब ता पच्यो उदरमा * मेरो गई इल्वल ! ॥८५
ठूलो एक अपान-वायु मुनिले * छाड़ी दिएथे जब ।
गर्जें झें गरि प्राण मात्र खलको * निस्की गएथ्यो तब ॥
वातापीकन श्री अगस्त्य मुनिले * खाई पचाए जब ।
तिन्को शक्ति बुझेर इल्वल पनी * साह्रै डरायो तब ॥८६॥
मागेथे मुनिले जति उति थरी * ल्याई दियो वैभव ।
लाग्यो भन्न समाउँदै चरणमा * माफी दिनूहोस् अब ॥
माफी इल्वलल्लाई दीकन मुनी * सम्पूर्ण बोकी धन ।
फर्के आश्रममा अगस्त्यजि गए * आनन्द मानीकन॥८७॥
हे राजन् ! अघि रामले परशुराम् * - को तेज खैंची लिंदा ।
डुल्थे तीर्थहरू समस्त मनमा * सन्ताप मानी सदा ॥
आज्ञाले गरि पितृको ति द्विजले * आई कुनै कालमा ।
गर्दा स्नान र दान तेज अघि झें * पाए यही तीर्थमा ॥८८॥

पैह्ले यहीं मुनि अगस्त्यजिले रिसाई ।
तिन्पल्ट आचमन गरेर समुद्रलाई ॥
पारी दिए जलविहीन कथा पुरानू ।
हो यो म भन्छु तिमिले इतिहास सुन्नू ८९॥

गङ्गावतरण र समुद्र-शोषण

विस्तार यो जब युधिष्ठिरले सुनेथे ।
के हेतुले उदधिको जल त्यो पिएथे ॥

फेरी समुद्र भरियो कसरी र कैहें ।
आज्ञा हवस् गरि दया मुनि ! त्यो क्रमैले ॥९०॥

यस्तो प्रश्न सुनी युधिष्ठिरजिको * बोले मुनी सादर ।
यौटा दैत्य थियो ठूलो अघि कुनै * हे भूप ! वृत्रासुर ।
त्यस्ले तीन भुवन् जितेर वशमा * आफ्नू गराई लियो ।
सारा देवहरू जितेर रणमा * खेदी दिएको थियो ॥९१॥
दुःखी देव मिली कुनै समयमा * सल्लाह गर्दा भए ।
आफ्नू कष्ट निवारणार्थ सब ती * ब्रह्मा भएथ्यैं गए ॥
सारा दुःख भनी गरे स्तुति पनी * तिन्को प्रशस्तै जब ।
ब्रह्माले खुशि भै भने तिमिहरू * चिन्ता नलेओ अब ॥९२॥
माग्नू हाड़ गई दधीचि मुनिको * गर्नू मिली प्रार्थना ।
वाचा बन्धनमा परी वर दिनन् * पुग्ला मनोकामना ॥
ठूलो वज्र गरुन् तयार बलियो * त्यै हाड़को इन्द्रले ।
मार्नेछन् गइ वृत्रलाई सहजै * श्रीइन्द्र त्यै वज्रले ॥९३॥
ब्रह्माको सुनि त्यो हुकुम खुशि हुँदै * सम्पूर्ण यौता गए ।
पाऊमा परि ती दधीचि मुनिको * वाचा गराई लिए ॥
मागेथे जब हाड़ देवगणले * हाँसेर बोले मुनी ।
दिन्छु लोक-हितार्थ तुच्छ तनको * यो हाड़ मैले भनी ॥९४॥
आफ्नू प्राण दधीचिले त्यजिदिए * तत्काल त्यै स्थानमा ।
ठूलो वज्र बनाइ इन्द्र खुशि भै * आफ्नू लिए हातमा ॥
त्यस्का बाद भए तयार सब ती * संग्रामका खातिर ।
हाने वज्र सुरेन्द्रले मरि गयो * त्यो दुष्ट वृत्रासुर ॥९५॥
त्यस्को कालय नाम दानवहरू * -को फौज अर्को थियो ।
त्यो सारा जलमा पसी उदधिको * प्राणै बचाई लियो ॥

बस्थे गुप्त भएर ती दिनभरी * निस्केर रात्री महाँ ।
लागे मार्ग ऋषी मुनी द्विजहरू * बाँकी नराखी त्यहाँ ॥९६॥
पत्ता पाइ गरे ति देवहरूले * श्री विष्णुको सम्झना ।
सोधे दर्शन पाइ राक्षस सबै * मार्ने कुनै साधना ॥
आज्ञा भो हरिले अगस्त्य मुनिले * उद्धार गर्नन् भनी ।
लागे भन्न ति देवता गइ जहाँ * गर्थे तपस्या मुनी ॥९७॥
हे सर्वज्ञ मुनि ! लुकी उदधिमा * धेरै थरी दानव ।
मार्दैछन् मुनि विप्र छानि दिनमा * निस्केर तिन्ले सब ॥
पानी सागरको सबै हजुरले * शोषी दिए यो घरी ।
देखी दानवलाइ हामि सबले * मार्ने थियौं बेसरी ॥९८॥
यस्तो विन्ति सुनेर देवगणको * उद्धारका खातिर ।
तीनै अंजलिमा पिई उदधिको * पानी भए सुस्थिर ॥
सारा देवहरू मिली समरमा * मारी दिए दानव ।
पैहेको इतिहास लोमशजिले * भन्दा भए यो सब ॥९९॥
बाटो छेकिदिएर विन्ध्य गिरिले * श्री सूर्य औ चन्द्रको ।
रात्री मात्र हुने भयो दिन नभै * सम्पूर्ण संसारको ॥
हाहाकार परेर देव गणले * बिन्ती गरेको सुनी ।
न्यूराए गिरि श्री अगस्त्य मुनिले *हुन् शिष्य मेरा भनी॥४००

लागे बताउन मुनीश्वर फेरि ताहाँ ।
खाली समुद्र हुन गो जब लोकमाहाँ ॥
फेरी भयो जल कसो गरि पूर्ण त्याहाँ ।
भन्छु म त्यो सब कथा अब फेरि याहाँ ॥१॥

राजा एक थिए कुनै सगरजी * बस्ने अयोध्या महाँ ।
तिन्ले यज्ञ गरे उनान्सय सबै * निर्विघ्न पूरा त्यहाँ ॥

हुन्छ इन्द्र भनी सर्यौं हय पनी * छाडी दिए निर्भय ।
पक्रे इन्द्र गएर आफ्नु पदको * रक्षार्थ सोही हय ॥२॥
गर्थे भूमि मनी बसी कपिलजी * ठूलो तपस्या जहाँ ।
त्यो घोड़ा नृपको लगेर तिनिले * बाँधी दिएथे त्यहाँ ॥
छोरा साठि हजार ती सगरका * खोज्दै गएका थिए ।
तीनै लोक भरी डुले तर कतै * भेट्नै नसक्ने भए ॥३॥
पाएनन् जब त्यो कुनै तरहले * सन्ताप ठूलो परी ।
लागे खन्न समुद्र उत्तर दिशा * पाताल जाने गरी ॥
केही भूमि खनेपछी कपिलको * देखे कुटी सुन्दर ।
बाँधेको हयलाइ सोहि कुटिको * देखे पछाडी तिर ॥४॥
ठूलो शब्द गरेर खल्बल गरे * मार्नै इरादा गरी ।
जागे विघ्न परेर श्री कपिलजी * आगो भई बेसरी ॥
हेर्दैमा मुनिले डढे सगरका * सम्पूर्ण छोरा जब ।
नाती एक ति अंशुमान् भनि थिए* बाँकी बचेका तब ॥५॥
तिन्ले आश्रममा गई कपिलको * धेरै गरे चाकरी ।
खुशी भै मुनिले दिए वर स्वयं * तिन्लाइ मागे सरी ॥
ल्याए अश्व फिराइ यज्ञ तिनिले * पूरा गराई दिए ।
तिन्का पुत्र भए दिलीप नृपती * उस्तै प्रतापी थिए ॥६॥
तिन्का पुत्र भए भगीरथ पछी * विख्यात राजा थिए ।
आफ्नो कीर्ति ठुलो प्रजा सुजनमा* तिन्ले फिंजाई लिए ॥
तिन्ले यत्न गरे म पितृहरूको * उद्धार गर्छु भनी ।
गङ्गाको पहिले गई तप गरे * यौटा गिरीका मनी ॥७॥
पाएथे नृपले निकै दिन पछी * गङ्गाजिको दर्शन ।
गङ्गाले करुणा गरीकन भनिन् * के माग्दछौ लौ भन ॥

मेरा पितृ सबै तरुन् कपिलले * भस्मै गरेका जती ।
तिन्को भस्म बगाउँदा हजुरको * होला सुकीर्ति अति ॥८॥
गङ्गाले नृपको कुरा सुनि भनिन् * सानन्द हे भूपति !
मेरो वेग सम्हाल्नलाइ सहसा * पुग्नेछ कस्को गति ॥
यौटा छन् शिव नै समर्थ तिमिले * उन्कै तपस्या गर ।
इच्छा पूर्ण हुनेछ श्रीशिवजिले * मानेर देलान् वर ॥ ॥
यस्तो अर्ति दिई हराउनुभयो * तत्काल गंगा जब ॥
गर्दै ध्यान् शिवको हिमालय गई * थाले तपस्या तब ॥
धेरै काल गरे ठुलो तप त्यहाँ * खाँदै नखाई कन ।
केही काल पछी दिए शिवजिले * प्रत्यक्ष भै दर्शन ॥१०॥
जोरी बाहु भने भगीरथजिले * आफ्नू इरादा जब ।
गङ्गाको सब वेग थाम्छु शिवले * आज्ञा भएथ्यो तब ॥
जोरी हात भए भगीरथ खडा * सम्झेर गङ्गा कन ।
गङ्गा वेग ठुलो गरी पृथिवीमा * थाल्दी भइन् ओर्हन॥११
थाम्नूभो शिवले जटा मुकुटमा * तिन्लाई आफ्नू तब ।
धारा सूक्ष्म गरेर छाडिदिनुभो * पृथ्वी तलैमा तब ॥
लागे हिंड्न अघी भगीरथ पछी * गङ्गा बगिन् सुस्तरी ।
नाघी जङ्गल घोर पर्वतहरू * जादा भए बेसरी ॥१२
केही काल पछी पुगे कपिलजी * गर्थे तपस्या जहाँ ।
तिन्को भस्म लगिन् बगाइ सहजै * पौंचेर गङ्गा त्यहाँ ॥
आफ्ना साठि हजार पितृहरूको * उद्धार तिन्ले गरे ।
ठूलो सागरलाई त्यै बखतमा * गङ्गा जलैले भरे ॥१३

आख्यान यो सुनि सके जब भूपतीले ।
त्यो तीर्थको विधि गरे नृपले क्रमैले ।

सानन्द वर्ष दिन त्यै स्थलमा बसेर ।
फेरी हिंडे ति अरु तीर्थ ठुलौं भनेर ॥१४॥

शृङ्गी ऋषिको उपाख्यान

त्याहाँबाट अनेक तीर्थहरुमा * डुल्दै गए तो सब ।
गर्दै दर्शन हेमकूट गिरिको * जाँदा भए पाण्डव ॥
नन्दा कौशिकिमा नुहाइ सबले * गर्दा भए दर्शन ।
सोधे लोमशलाई देखि पथमा * अत्यन्त राम्रो वन ॥१५॥
लागे भन्न बुझाइ लोमश मुनी * त्यस्को पुरानू कथा ।
सुन्दैमा पनि जान्छ हे नरपते ! * यस्ले सबै दुर्व्यथा ॥
कोही एक थिए विभाण्डक भनी * ज्ञानी तपस्वी मुनि ।
प्रातःकालमहाँ उठीकन गए * ती स्नान गर्छु भनी ॥१६
देखेथे नदिको सुरम्य तटमा * क्वै अप्सरा सुन्दरी ।
तिन्को वीर्य पतन् भयो जलमहाँ * त्यै हेतुले नै गरी ॥
आई एक मृगी पिई जल सँगै * त्यो वीर्यलाई पनि ।
त्यस्ले मानिस रूपको सुत पछी * पैदा गराई अनि ॥१७॥
ऋष्यश्रृङ्ग भए ती सीङ शिरमा * यौटा हुनाले गरी ।
मेरो पुत्र भनी विभाण्डकजिले * पाले लगी राम्ररी ॥
देखेनन् तिनिले मनुष्य अरु क्वै * आफ्ना पिता बाहिक ।
तेजस्वी तिनि ब्रह्मचर्य व्रतको * ठूला थिए पालक ॥१८॥
त्यै वेला नृप लोमपाद भनिने * क्वै अङ्ग देशी थिए ।
तिन्ले ब्राह्मणलाई व्यर्थ कहिले * दोषी बनाई दिए ॥
त्यै हेतू अनिकाल देशभरिमा * साह्रै ठुलो फैलियो ।
राजालाई पनी हुनेछ कसरी * वर्षा भने झैं भयो ॥१९॥

मल्लाहा नृपले सबैसँग गरे * के गर्नु पर्ला भनी ।
योटा युक्ति सबै मिलीकन भने * ती भूपलाई अनि ॥
ऋष्यऋङ्ग मुनी कुनै तरहले * आई दिए राज्यमा ।
वर्षा हुन्छ अवश्य, छैन नृपते ! * सन्देह यो बातमा ॥२०॥
देखेको अझसम्म छैन तिनिले * मानीस वा सुन्दरी ।
वेश्यालाइ पठाउने हुन गयो * सल्लाह सोही घरी ॥
डाके भूपतिले तुरन्त पुरका * वेश्या अनेकौं थरी ।
बाठी सुन्दरिलाइ छानि नृपले * इच्छा भने राम्ररी ॥२१॥
आज्ञाले नृपको लिई थरि-थरी * सामग्रि जाँदी भई !
ऋष्यश्रृंगजिको सुआश्रममहाँ * तत्काल पौंची गई ॥
त्यस्को रूप थियो तपस्विनि सरी * अत्यन्त राम्रो पनि ।
लागी भन्न सहर्ष पक्कि करमा * हाँसेर त्यो हे मुनि !॥२२
सञ्चै ता हुनुहुन्छ ? आश्रममहाँ * निर्विघ्न बित्छन् दिन ?
केही कष्ट भए बताउनुहवस् * शंका नमानी कन ॥
मीठा बात सुनेर मोहित भए * त्यो रूप देख्तै मुनि ।
पाद्यार्घादि लिएर सादर उभे * गर्छु म स्वागत् भनी ॥२३
वेश्याले भनि हे मुने ! म गुरुको * आज्ञा विना लिन्नँ यो ।
इच्छा पूजनको भए त कुटिमै * जाऊँ अवेला भयो ॥
एनी बात भनी समाइ करमा * हेरेर तेर्सो गरी ।
नाची गाइ फकाउँदै सँग लगी * तिन्लाइ सोही घरी॥२४
केही दूर लगी बसालि रुखको * छाया भनी सादर ।
रक्सी औ फल-फूल दीकन भनी * मीठो छ खाँदै गर ॥
त्यो खाँदा मुनिलाइ खूब मनमा * आनन्द लाग्दै गयो ।
त्यस्को देथि कटाक्ष झन् पछि-पछी * लाग्ने इरादा भयो ॥२५॥

छल्दै ये रितले लगेर नृपको * साम्ने गरी हाजिर ।
राखेथे दरबारमा नृपतिले * गर्दै ठुलो आदर ॥
आएथे जब ती मुनी नगरमा * तत्काल वर्षा भयो ।
धेरै अन्न फली प्रजा सुजनको * सन्ताप सारा गयो ॥२६॥
छोरी एक थिइन् सुशील नृपकी * शान्ता अती सुन्दरी ।
सुम्पे ती मुनिलाइ वेद-विधिले * तिन्ले विवाहा गरी ॥
दाईजो नृपले दिए धन तथा * रत्नादि आभूषण ।
दासी दास र अश्व गो गज दिए * धेरै खुशी भैकन ॥२७॥
भोगी भोग अनेक क्यै दिन मुनी * त्याहाँ बसे तापनी ।
फर्के भोग त्यजेर फेरि कुटिमा * गर्छु तपस्या भनी ॥
ऋष्य-शृंगजिको सुआश्रम यही * हो श्रेष्ठ हे भूपती !
याहाँ स्नान र दान-धर्म खुशिले * गर्नोस् सकेको जती॥२८॥
आज्ञा लोमशको सुनेर सबले * स्नानादि गर्दा भए ।
डुल्दै तीर्थहरू अनेक शिवको * काशीपुरीमा गए ॥
गंगा स्नान र विश्वनाथ प्रभुको * त्याहाँ गरी दर्शन ।
बाँडे ब्राह्मणमा, दरिद्रहरुमा * तिन्ले प्रशस्तै धन ॥१९॥

च्यवन ऋषिको उपाख्यान—

त्याहाँबाट हिंडेर पाण्डव गए * धेरै थरी स्थानमा ।
गंगासागर श्रेष्ठ वैतरणिको * पुग्दा भए तीर्थमा ॥
त्याहाँ स्नान गरी महेन्द्र गिरिको * गर्दै गए दर्शन ।
आज्ञाले मुनिको बसे सब जना * त्यै तीर्दमा तीन् दिन ॥३०॥
बोले लोमशजी—युधिष्ठिर ! यही * हो स्थान राम्रो जहाँ ।
बस्छन् श्री जमदग्निका परशुराम् * छोरा प्रतापी यहाँ ॥

एक्काईस पटक सबै पृथिविको * मारी दिए क्षत्रिय ।
आज्ञाले पितुको अजम्मर भई * डुल्छन् सधैं निर्भय ॥३१॥
मारेथे अघि कार्तवीर्य कन गै * एक्लै लडाइँ गरी ।
यिन्को कीर्ति ठुलो छ लोकभरिमा * सत्कर्मको यो धरी ॥
आज्ञाले मुनिको गरे सकलले * त्यो तीर्थको दर्शन ।
गर्दै स्नान र दान फेरि ति हिंडे * सानन्द तीर्थाटन ॥३२॥
केही कालपछी प्रभास तटमा * डुल्दै पुगेथे जब ।
भेटे त्यै स्थलमा समस्त अघिका * जम्मा थिए यादव ॥
सोधे सञ्च-विसञ्च आपुसमहाँ * सानन्द प्रत्येकले ।
सुन्दा कष्ट ति पाण्डवादि विरदो * रोए सबै स्नेहले ॥३३॥



प्रभास क्षेत्रमा पाण्डव र यादवहरूको मिलाप

आफ्ना दुःख भने युधिष्ठिरजिले * श्री कृष्णलाई सब ।
यो सुन्दा बलरामका सँग भए * दुःखी स्वयं माधव ॥

केही काल त्यहाँ बसीकन गए * ती नर्मदा तीर्थमा ।
त्याहाँबाट हिंडी पयोष्णि नदिको * पुग्दा भए तीरमा ॥३४॥
राजा श्री गयको चरित्र मुनिले * सारा सुनाए त्यहाँ ।
बोल्ले लोमशजी–मुनी च्यवनले * गर्थे तपस्या यहाँ ॥
सोधे धर्म-कुमारले च्यनको * आख्यान विस्तारले ।
लागे लोमशजो सुनाउन सबै * तिन्को कथा प्रेमले ॥३५॥
बस्थे जंगमा अघी च्यवनजी * ठूलो तवस्या गरी ।
ढाकेथ्यो मुनिलाइ लागि धमिरा * सम्पूर्ण देहै भरी ॥
आए खेल्न शिकार त्यै बखतमा * शर्याति राजा त्यहाँ ।
छोरी पत्नि अनेक सैनिक लिई * डुल्थे त्यहीं वन्‌महाँ ॥३६
तिन्की पुत्रि पनी त्यही वनमहाँ * डुल्दै र हेर्दै थिइन् ।
आँखा मात्र टुल्ह च्यवनको * देखी नगीचै गइन् ॥
खेस्को एक लिई दुबै नयनमा * घोचेर फोरी दिइन् ।
लाग्यो बग्न रगत् डराइ मनमा * तत्काल भाग्दी भइन् ॥३७
गर्दा क्रोध ठुलो मुनी च्यवनले * ती भूपका सैनिक ।
साराको मल-मूत्र बन्द हुनगो * राजा र रानी तक ॥
सोधे भूपतिले सबैसित, भयो * उत्पात के हेतुले ? ।
छोरीको अपराध जानि मनमा * दुःखी भए शोकले ॥३८॥
माफी माग्न भनी गए मुनिकहाँ * छोरी सुकन्या लिई ।
मागेथे नृपकी सुता च्यवनले * सौन्दर्यमा लोभिई ॥
छोरी सुम्पिदिए सहर्ष नृपले * मानी मुनीको डर ।
लागिन् गर्न ति चाकरी र कुटिमा * राखे लगी सादर ॥३९॥
गर्दथिन् सुमुखी प्रसन्न मनले * तिन्को सदा चाकरी ।
आएथे सुर-वैद्य कोही दिनमा * भेट्‌ने इरादा गरी ॥

राखी आसनमा स्वयं अतिथिको * सेवा गरिन् सादर ।
त्यो देखी खुशि भै भने अब तिमी * मागेर लेऊ वर ॥४०॥
स्वामीका दुइ नेत्र, यौवन पनी * मागिन् तिनीले जब ।
तिन्ले 'हुन्छ' भनी सरोवरमहाँ * डाकी लखेथे तब ॥
निस्केथे जलमा नुहाइ जब ती * तीनै जना बाहिर ।
देखिन् एक समान रूप सबको * अत्यन्त नै सुन्दर ॥४१॥
हुन् मेरा पति यी भनेर तचिह्नी * चिन्तित सुकन्या भइन् ।
हाँस्तै श्रीसुर-वैद्यले भनिदिए * तिम्रा पती लौ यि हुन् ॥
पाए यौवनका सँगै नयन ती * बूढा मुनीले जब ।
भोगी भोग अनेक क्यै दिन बसे * आनन्द मानी तब ॥४२॥
शर्याती नृपले गरे मख ठुलो * यौटा कुनै कालमा ।
निम्ता पाइ गए मुनी च्यवनजी * सानन्द त्यो यज्ञमा ॥
देखी छक्क वरे त्यहाँ नरपती * छोरी र ज्वाइँ कन ।
छोरीले इतिहास त्यो भनिदिंदा * तिन्को खुशीभो मन ॥४३॥
पैह्ले ती सुर-वैद्यलाइ मखमा * मिल्दैनथ्यो भाग जो ।
सोही मज्ञमहाँ मुनी च्यवनले * तिन्को दिए भाग त्यो ॥
यस्तो हुन्न भनेर इन्द्र रिसले * त्यो छेक्न आए त्यहाँ ।
लागे हान्न रिसाइ वज्र मुनिको * ताकेर छातीमहाँ ॥४४॥
शखी देखी सुरेन्द्रको च्यवनले * हाँसेर हेलाँ गरी ।
बाहु वज्र समेत स्तम्भन गरी * रोकी दिए त्यो घरी ॥
त्यो देखीकन इन्द्र लज्जित भई * फर्केर जाँदा भए ।
शचीले मुनिको ति अश्विनि कुमार् * -ले भाग आफ्नू लिए ॥४५

उशीनरको उपाख्यान :

त्याहाँबाट पनी हिंडे तिनिहरू * सानन्द तीर्थाटन ।
गर्थें यज्ञ जहाँ ययाति नृपले * त्यो स्थानको दर्शन ॥
गर्दै फेरि गए जहाँ भरतले * यज्ञादि धेरै गरे ।
ठूला यज्ञ गरी जहाँ मरुतजी * संसार पारी तरे ॥४६॥
पौंचेथे जब ती जला उपजला * भन्ने ठुलो तीर्थमा ।
ठूलो यज्ञ गरे उशीनरजिले * हे भूप ! यै स्थानमा
आए इन्द्र लिएर अग्नि सँगमा * गर्छु पीक्षा भनी ।
अग्नी एक बने कपोत र स्वयं * ती बाज पक्षी बनी ॥४७॥
पक्षीको डरले कपोत नृपको * आई बस्यो काखमा ।
बोल्यो बाज पुगेर मानिससरी * तत्काल त्यै स्थानमा ॥
राजन् ! छाड्नुहवस् म खान्छु खुशिले* पक्षी परेवा कन ।
रोक्नु भोजनको पदार्थ अरुको * राम्रो कुरा मान्दिनँ ॥४८॥
बोले भूप—परेपछी शरणमा * मैले कसै त्याग्दिनँ ।
दोषारोपण गर्दछौ तिमि वृथा * के हेतुले लौ भन ?
बोले बाज स्वरूप इन्द्र–अहिले * अत्यन्त भोको म छु ।
मैले भोजन गर्न पाइनँ भने * पक्का यहीं मर्दछु ॥४९॥
सुत्केरी घरमा छ पत्नि सँगमा * छन् बाल-बच्चा पनि ।
मेरो मृत्यु भएपछी नरपते ! * मर्छन् ति दुःखी बनी ॥
बोक्नू एक कपोत खातिर वृथा * हत्या अनेकौं किन ।
धर्माधर्म गरी विचार मनमा * देऊ परेवा कन ॥५०॥
खोस्तैनन् अरुको कुनै समयमा * नीतिज्ञले भोजन ।
मेरो भक्ष्य दिएर धर्म पथको * गर्नू हवस् पालन ॥

बोले भूपति-गर्दछौं तिमि कुरा * हे पक्षि ! ज्ञानी सरी ।
माग्दछौं नर यो कपोल अहिले * पाऊँ भनी के गरी ! ॥५१
दिन्छु मासु बँदेलको र मृगको * खाऊ तिमी बेसरी ।
मैले त्याग्नु हुँदैन लौ शरणमा * आए पछी यो घरी ॥
बोले बाज-मलाइ मासु अरुको * चाहिन्न हे भूपति !
मेरो भोजन नै रचेर विधिले * राखे परेवा जति ॥५२॥
पक्षीको सुनि बात यो नरपती * भन्छन् बुझाई कन ।
मेरो आइ परेपछी शरणमा * यस्लाइ ता त्याग्दिनँ ॥
बोल्यो बाज-उसो भए दिनुहवस् * काटी परेवा जति ।
आफ्नै मासु मलाइ हे नरपते ! * खान्छु खुशी भै अति॥५३
यस्तो बात सुनी तुला उपरमा * राखी परेवा कन ।
काटी मासु सहर्ष देह भरिको * थाले स्वयं तौलन ॥
खुर्के मासु जती सबै तर पनी * भारी परेवा रह्यो ।
मेरो पुग्छ कसो गरी प्रण भनी * सन्ताप ठूलो भयो ॥५४
पक्का यो प्रण पूर्ण गर्दछु भनी * पैह्ले गरी निश्चय ।
आफैं भूप चढे तुला उपरमा * केही नमानी भय ॥
देखी अद्भुत कर्म ती नृपतिको * श्री इन्द्र खूशी भई ।
भन्छन् अग्नि र इन्द्र हूँ खुशि भयौं* तिम्रो परीक्षा लिई ॥५५॥
आशीर्वाद दिएर स्वर्ग पुरिमा * श्री इन्द्र फर्की गए ।
हो यो आश्रम ती उशीनरजिको * ठूला तपस्वी थिए ॥
ज्ञानी लोमशले भनेपछि गरे * त्यो तीर्थको दर्शन ।
भारद्वाज र रैभ्यको पनि कथा * सारा गरे वर्णन ॥५६॥
त्यस्को क्यै पर श्वेतकेतु मुनिको* देखे सफा आश्रम ।
बोले लोमशजी—नुहाउ सबले * यो तीर्थ हो उत्तम ॥

अष्टावक्र मुनी यहीं तप गरी * पैह्ले बसेका थिए ।
तिन्ले गै दरबारमा जनकको * शास्त्रार्थ गर्दा भए ॥५७॥
बन्दीलाइ त्यहाँ पराजित गरी * ल्याए पिताजी कन ।
आज्ञाले पितुको नुहाइ यहिं नै * सोझो भएथ्यो तन ॥
याहाँ स्नान र दान-धर्म गरि ती * अत्यन्त खुशी भए ।
गर्दै तीर्थ अरू हिमालय तिरै * जाने इरादा लिए ॥५८॥
पौंचेथे जब गन्धमादन महाँ * नाघ्दै अरू पर्वत ।
लागे लोमशजी बताउन कथा * सानन्द राजा सित ॥
देखिन्छन् लटरम्म फूल-फलले * वृक्षादि झन् सुन्दर ।
उस्तै छन् मुनिका सुआश्रम कुटी * राम्रा यि चारैतिर ॥५९॥
सामुन्ने छ सबै प्रणाम गर लौ * हो श्रेष्ठ गंगोत्तरी ।
गंगाको महिमा ठुलो छ म पनी * सक्तीनँ वर्णन् गरी ॥
शोभाले परिपूर्ण छन् बन गिरी * सारा दिशा यो घरी ।
देख्दैछौ हिउँको अगाडि छ ठुलो * जो श्वेत थुप्रो सरी ॥६०

धेरै मनुष्य, पशु, जन्तुहरू बढेर ।
पृथ्वी गइन् जब रसातलमा झरेर ॥
देखेर संकट बराह स्वरूप धारी ।
फर्के मुकुन्द नरकासुर वीर मारी ॥६१॥

पृथ्वीको हरिले गरे अघि यहाँ * उद्धार जुन् रूपले ।
सम्झी सोहि स्वरूप ध्यान गर लौ * यो स्थानमा भक्तिले ॥
आज्ञाले मुनिको गरे सकलले * वाराहको दर्शन ।
त्याहाँबाट पनी हिंडे तिनिहरू * नाघ्दै अनेकौं वन ॥६२
पुग्नेछौं अब गन्धमादन छिटै * भन्ने इरादा गरी ।
नाघ्दै पर्वत कन्दरा गिरि गुहा * जाँदा भए बेसरी ॥

आएथ्यो पथमै ठुलो स्वर गरी * पानी असीना हुरी ।
लागे ढल्न अनेक वृक्ष गिरि नै * थर्काउँदै त्यो घरी ॥६३॥
आँधी शान्त भएपछी तिनिहरू * फेरी हिंडेथे जब ।
लोटिन् मूर्छित भै परिश्रम परी * श्री द्रौपदीजी तब ।
देखी झट्ट त्यहाँ युधिष्ठिरजिले * राखेर काखा महाँ ।
नाना यत्न गरेर केहि क्षणमा * संज्ञा गराए त्यहाँ ॥६४॥
बाटी दुर्गम देखि भीम विरले * गर्दा भए सम्झना ।
हावाको गतिले घटोत्कच पुग्यो * तत्काल त्यै स्थानमा ॥
जोरी हात दुवै उभेर नगिचै * त्यस्ले भन्यो सादर ।
डाक्नूभो यसरी मलाइ अहिले * के कामका खातिर ॥६५॥
बोले भीम्-खुशी भए सुन ! तिमी * आई दिनाले गरी ।
बाटो दुर्गम देखि हिंड्न नसकी * दुःखी भयौं बेसरी ॥



पाण्डवहरूको बदरीकाश्रम यात्रा

बोकी हामिहरू सबै कन छिटो * बद्री पुऱ्याऊ अब ।
बोल्यो राक्षस त्यो कुरा सुनिसकी * स्वीकार गर्दै तब ॥६६

सक्थें बोक्न हजूरका सँग सबै * -लाई म एक्लै पनी ।
साथी छन् अहिले अनेक सँगमा * जान्छन् खुशीले तिनी ॥
यस्तो बात सुनी चढे सकल ती * प्रत्येकका काँधमा ॥
पक्षी झैं सब वीर राक्षस उडे * तत्काल आकाशमा ॥६७
त्याहाँबाट ति गन्धमादन पुगी * बस्ता भए क्यै दिन ।
पोंचाए अघि भैं उडेर सबले * श्री बद्रि - नारायण ॥
त्याहाँबाट फिरेर राक्षस गए * आनन्द मानी सब ।
सम्झी श्री हरिलाइ शुद्ध मनले * बस्ता भए पाण्डव ॥६८॥
गंगाको महिमा प्रशस्त मुनिले * गर्दा त्यहाँ वर्णन ।
सुन्थे नित्य बसेर, बद्रि गिरिको * गर्थें गई दर्शन ॥
पारे एक तयार आश्रम तथा * अत्यन्त राम्रा कुटी ।
गर्थें कर्म विशुद्ध धर्म-पथमा * केही नपारी त्रुटि ॥६९॥

दिव्य-कमल लिन जाँदा हनुमान र भीमसेनाको भेट :—

धेरै बिते दिन ति अर्जुन फर्किएनन् ।
गर्थें बसीकन यही, सब नित्य गन्थन् ॥
यौटा भयो पछि कुनै दिनमा उदेक ।
आयो स्वयं कमल-पुष्प उडेर एक ॥७०॥
कृष्णा उठीकन टिपिन् फुल त्यो टपक्क ।
देखी अलौकिक सुपुष्प परिन् ति छक्क ॥
पौंचेर भीम विरका नगिचै तिनीले ।
देखाउँदै कमल-पुष्प भनिन् खुशीले ॥७१॥
स्वामी ! प्रेम हजूरको हृदयमा * मेरो भए सुन्नुहोस् ।
यस्तै पुष्प अरू पनी गइ स्वयं * खोजेर ल्याई दिनोस् ॥

येती बात भनी सहर्ष दगुरी * ती द्रौपदीजी गइन् ।
गर्दै आदर धर्मराजकन त्यो * आनन्द मान्दै दिइन् ॥७२
प्यारीको हितका निमित्त मनमा * पैह्ले गरी निश्चय ।
आफ्ना शस्त्र लिएर भीम सहसा * निक्कै भई निर्भय ॥
आयो पुष्प अघी जतातिर उतै * श्री भीम जाँदा भए ।
बाटाका वन-जन्तु वृक्ष र लता * थिच्दै र मिच्दै गए॥७३॥
मत्ता हात्ति सरी हिंडे जब तिनी * थर्काउँदै जङ्गल ।
भागे जन्तु सबै परेर डरमा * गर्दै ठुलो खलबल ॥
नाघी त्यो वनलाइ फेरि कदली * -का वृक्षको जङ्गल ।
देखे एक ठुलो तलाउ त्यसमा * पानी थियो निर्मल ॥७४
केही बेर नुहाइ स्वच्छ जलमा * निस्के तिनी बाहिर ।
फेरी खोज्न भनेर पुष्प ति हिंडे * सानन्द एकातिर ॥
देखेथे पथ छेकि बानर ठुलो * तेसैं रहेको जब ।
ठोकी ताल गरेर गर्जन निकै * हेलाँ गरेथे तब ॥९५॥
लागे श्री हनुमान भन्न नगिचै * गर्जी रहेको सुनी ॥
को हौ वीर ! बताउ घोर वनमा * के काम आयौ ! अनि ।
इच्छा के मनमा छ पर्वत ठुलो * नाघेर जान्छौ कहाँ ?
मीठा छन् फल-फूल खाउ खुशिले * पाइन्छ धेरै यहाँ ॥७६॥
याहाँबाट अगाडि जान सहसा * सक्तैन क्वै मानिस ।
मान्छौ अर्ति भने त फर्क घरमा * त्यागेर दुस्साहस ॥
बोले भीम कुरा सुनेर कपिको * अत्यन्त हेलाँ गरी ॥
को हौ वीर, तिमी यहाँ किन सुत्यौ* छेकेर बाटो भरी ? ॥७७॥
योद्धा क्षत्रिय, भीमसेन बलमा * विख्यात वायू - सुत ।
कुन्ती हुन् जननी र पाण्डवमहाँ * हूँ भाइ दोस्रो म त ॥

बोले श्री हनुमान—हुन्न तिमिले * जानू अगाड़ी अब ।
फर्कें मात्र हुनेछ आफ्नु घरमा * कल्याण हे पाण्डव ॥७८॥
बोले भीम—नबोल व्यर्थ म कुनै * तिम्रा कुरा मान्दिनँ ।
मेरो प्राण गए पनी म मनको * इच्छा कसै त्याग्दिनँ ॥
बाटो देउ मलाइ, आफ्नु तिमिले * कल्याणका खातिर ।
बोले श्री हनुमान भीम विरको * शेखी सुनी सादर ॥७९॥
रोगी, वृद्ध, असक्त छु जड़सरी * उठ्नै नसक्ने यहाँ ।
नाघी जाउ मलाइ वीर मनमा * इच्छा छ जाने जहाँ ।
बोले भीम समस्त जीवहरूमा * छन् व्याप्त नारायण ।
जानी-जानि अधर्म गर्न मनले * आँटे पनी सक्तिनँ ॥८०॥
दाजू श्री हनुमानले जसरि त्यो * नाघे ठुलो सागर ।
त्यस्तै नाघ्न सुमेरु पर्वत पनी * शक्ती छ मेरो तर ॥
मैले धर्म विरुद्ध काम कहिले * गर्दीनँ हे बानर !
फेरी श्री हनुमानले सुति-सुती * भन्दा भए सादर ॥८१॥
शक्ती छैन म वृद्ध छु बरु स्वयं * सारेर यो पुच्छर ।
जाऊ वीर ! तिमी छ जे मनमहाँ * त्यै कामका खातिर ॥
यस्तो श्री हनुमानको सुनि कुरा * शेखी गरी भीमले ।
जाऊ श्री यमराजको नगरमा * भन्दै ठुलो शक्तिले ॥ ८२
पक्री पुच्छरमा निकै बल गरे * फ्याँक्ने इरादा गरी ।
कत्ती डेग चलेन पुच्छर अनी * लज्जित भई बेसरी ॥
सोधेथे नगिचै गएर कपिका * पक्री दुबै पाउमा ।
को हौ हे बलवान् ! तिमी किन बस्यौ* आएर यो स्थानमा ॥८३
गर्दैछु म प्रणाम देव अथवा * गन्धर्व, विद्याधर !
को हौ वानर ! पर्दछु चरणमा * माफी मलाई गर ॥

बोले श्री हनुमान भीम विरले * बिन्ती गरेको सुनी ।
मैं हूँ त्यो हनुमान वर्णन गऱ्यौ * जस्को तिमीले पनी ॥८४॥
तिम्रो दाजु तथा म वायु-सुत हूँ * माता उनै अञ्जनी ।
सीताको वरदानले अमर छु * मर्दीनँ कैह्ले पनी ॥
तिन्ले राम चरित्रको गरिदिए * संक्षेपले वर्णन ।
सुन्दा भीम भए प्रसन्न मनमा * श्रीरामको सद्गुण ॥८५॥
बोले भीम–हजूरको अधि ठुलो * नाघी लिंदा सागर ॥
जस्तो रूप थियो भयंकर उही * छ हेर्नमा तत्पर ।
बोले श्री हनुमान भाइ ! अघिको * त्यो काल भिन्नै थियो ।
ऐह्ले को युग-धर्मले गरि सबै * अर्कै तुल्याई दियो ॥८६॥
सात्तैनौ तिमि हेर्न रूप अघिको * यी चर्मका चक्षुले ।
जाऊ पुष्प लिई फिरेर घरमा * हे भाइ ! आनन्दले ॥
बोले भीम–हजूरको स्वरुपको * प्रत्यक्ष नै दर्शन
जैल्हेसम्म हुँदैन जान घरमा * मान्दैन मेरो मन ॥८७॥
भाईको बुझि प्रेम भाव बहुतै * जिद्दी गरेको सुनी ।
लागे श्री हनुमान बढ्न सहसा * विस्तारले तैपनी ॥
धेरै वृक्ष ढले, वरिपरि सबै * पृथ्वी पनी भासियो ।
तिन्को रूप बढी सुमेरु गिरि झैं * अग्लो ठुलो देखियो ॥८८॥
बोले भीम तुरुन्त–हे कपिपती ! * लाग्यो मलाई डर ।
मैले हेर्न सकीनँ रूप अघि झैं * सानू तुरुन्तै गर ॥
भाईको सुनि यो कुरा हुन गए * पैह्ले सरीका तिनी ।
त्यो देखीकन भीमझन् खुशि भए * हुन् दाजु मेरा भनी ॥८९॥
भाई-भाइ मिले परस्पर महाँ * आनन्द मानी कन ।
बोले भीम हजूरको खुशि भएँ * पाएर यो दर्शन ॥

सुन्छ दाजु ! म चार वर्ण युगको * धर्मादिको लक्षण ।
त्यो सुन्दा हनुमानले गरिदिए * संक्षेपमा वर्णन ॥९०॥
आफ्नू शक्ति अलीकती थपिदिए * कल्याणका खातिर ।
बोले भाइ ! तिमी प्रसन्न मनले * मागेर लेऊ वर ॥
गर्नेछु म सहायता समरमा * मौका परेका घरी ।
ऐल्हे जाउ लिएर पुष्प घरमा * फर्केर राम्रो गरी ॥९१॥
बोले भीम खुशी भएँ हजुर झैं * पाएर संरक्षक ।
शिक्षा मात्र भए पुग्यो मकन ता * हे शत्रु—संहारक ! ॥
यो सुन्दा हनुमान झन् मनमनै * अत्यन्त खुशी भए ।
शिक्षा पाप र धर्मको थरिथरी * तिन्लाई फेरी दिए ॥९२॥
अन्तर्धान भएपछी कपिपती * श्री भीम बढ्दै गए ।
नाघी जङ्गल त्यो कुबेर सरमा * सानन्द पुग्दा भए ॥
उस्तै पुष्प अनेक देखि खुशिले * टिप्ने इरादा लिए ।
आए यक्ष प्रशस्त शस्त्र सँगमा * तिन्ले लिएका थिए ॥९३॥
केही बेर पऱ्यो लड़ाइँ रिसले * आगो भई भीमले ।
मारे रक्षक यक्ष, बृक्ष बलियो * योटा लिई वेगले ॥
भागे यक्ष अनी सरोवर महाँ * श्री भीम पस्ता भए ।
पानी स्वच्छ पिई, नुहाइ सरमा * क्यै बेर शान्ति लिए ॥९४॥
लड्दा भीम त्यहाँ, भएछ कुटिमा * उत्पात धेरै ठुलो ।
पानी आइ, हुरी चलेर असिना * पर्दै उडेथ्यो धुलो ॥
लागे भन्न त्यहाँ युधिष्ठि ठुलो * उत्पात देखी कन ।
आँटचो के हुन यो अनर्थ कुटिमा * आत्तिन्छ मेरो मन ॥९५॥
छैनन् भीम यहाँ कतातिर गए * के गर्नका खातिर ।
हे भाईहरू हो ! मिलीकन सबै * तत्काल खोजी गर ॥

यस्तो वात मुनिन् युधिष्ठिरजिको * श्री द्रौपदीले जब ।
जाने कारण भीमको भनिदिइन् * तिन्ले डराई सब ॥९६॥
तिन्को वात मुनी युधिष्ठिर भए * झन् बेसरी चिन्तित ।
स्वामीको वुझि वेदना हुन गइन् * श्री द्रौपदी लज्जित ॥
पहेका जति वीर राक्षसहरू * तत्काल डाकी लिए ।
दाजू भाइ र द्रौपदी, ऋषि-मुनी * सम्पूर्ण चढ्दा भए ॥९७
भाइ भीमकहाँ घटोत्कच तिमी * चाँडो पुऱ्याऊ अब ।
आज्ञा भो जव श्री युधिष्ठिरजिको * उड्दा भए ती सब ॥
खोज्दै राक्षसले लगे सहजमै * श्री भीमको पासमा ।
देखे भीम खड़ा थिए कमलको * झुप्पा लिई हातमा ॥९८॥
आज्ञा गर्नुभयो युधिष्ठिरजिले * हे भीम ! व्यर्थै पनि ।
गर्छौ देव विरुद्ध काम यसरी * केही नजान्ने बनी ॥
हो यो साहसपूर्ण कार्य तपनी * ठान्दीनँ राम्रो म त ।
आऊ जाउँ छिटै फिरेर कुटिमा * हे भाइ ! हामीसित ॥९९
दाज्यूको मुनि यो कुरा अलिकती * श्री भीम लज्जित् भए ।
धेरै पुष्प लिएर राक्षस चढी * साथै कुटीमा गए ॥
सुम्पे दिव्य सरोज द्रौपदिजिको * इच्छा पुऱ्याऊँ भनी ।
भेटेथे हनुमानलाइ जसरी * सारा भने त्यो पनी ॥५००

जटासुर वध, आर्ष्टिषेण दर्शन, भीम-यक्ष युद्ध; कुवेर युधिष्ठिर संवादः—

पाई अलौकिक प्रशस्त सरोज त्याहाँ ।
श्री द्रौपदी खुशि भइन् धरि माथमाहाँ ॥
श्री भीमसेन हनुमान बली दुवैको ।
सुन्दी भइन् सब विवाद अघी भएको ॥१॥

बस्थे पाण्डव वीरका सँगमहाँ * ज्ञानी, मुनी, ब्राह्मण ।
श्री नारायण विष्णुको र नरको * गर्थे सदा दर्शन ॥
ज्ञानी ब्राह्मणको मुनी र ऋषिको * सत्पात्रको चाकरी ।
गर्थे देव समान ठानि मनको * इच्छा बुझी राम्ररी ॥२॥
मौका मिल्छ अनी म मार्दछु भनी* सम्पूर्ण यी पाण्डव ।
ज्ञानी विप्र बनी जटासुर ठुलो * बस्थ्यो त्यहीं दानव ॥
त्यस्को भेद नपाइ विप्र सरि नै * गर्थे सदा आदर ।
त्यो चाहीं मनमा दगा धरि सदा * बस्थ्यो भई तत्पर ॥३॥
योद्धा भीम शिकार खेल्न वनमा * एक्लै गएका थिए ।
तीनै भाइ र द्रौपदी कुटिमहाँ * क्यै कामले रोकिए ॥
लागे स्नान र ध्यानमा ऋषि-मुनी* त्याहाँ भएका जति ।
देखी आश्रम शून्य दानव गयो * आनन्द मान्दै अति ॥४॥
आफ्नू रूप लिई जटासुर पुग्यो * पाएर मौका त्यहाँ ।
चारै व्यक्ति र अस्त्र-शस्त्र सबको * च्यापेर काखी महाँ ॥
भाग्यो पर्वततर्फ घोर रबले * थर्काउँदै जंगल ।
लागे आत्तिन श्री युधिष्ठिर निकै * देखेर त्यस्को बल ॥५॥
थाहा पाइ पुगे तुरुन्त दगुरी * श्री भीम योद्धा त्यहाँ ।
आयो साहस चार व्यक्तिहरूमा * तिन्लाई देख्दै महाँ ॥
बोल्ले भीम—पखी-पखी खल त्यहीं * भागेर जान्छस् कहाँ ।
शङ्का ता पहिल्यै थियो छल गरिस्* मार्छु तँलाई यहाँ ॥६॥
बोल्यो दानव—भीमसेन, म पनी * पर्खी रहेको थिएँ ।
मारी आज तँलाइ मित्रहरूको * साटो म फेर्नै भएँ ॥
त्यस्को उक्ति सुनेर भीम विर झन्* आगो सरीका भए ।
आफ्नू श्रेष्ठ गदा लिएर करमा * मार्छु भनी झम्टिए ॥७॥

चारै व्यक्ति र अस्त्र-शस्त्र जिमिमा * फालेर त्यो दानव ।
तीखा वाणहरू लिए दगुऱ्यो * भन्दै म मार्छु अब ॥
लागे लड्न दुवै परस्पर महाँ * हानेर तीखा सर ।
हान्थे वृक्ष उखेलि खूब बलले * प्रत्येक अकीर्तिर ॥८॥
कुस्ता-कुस्ती गरी लडेपछि सबै * सस्त्रास्त्र फ्याँकी कन ।
धेरै वृक्ष ढले र जन्तु वनका * लागे सबै आत्तिन ॥
भूमिकम्प भयो दिशाहरू पनी * लागी गए हल्लन ।
ढाली वृक्ष-लता उखेलि ढुङ्गले * नाशै निकै त्यो वन ॥९॥
थाकेथ्यो जब त्यो जटासुर अनी * श्री भीमले केसरी ।
पच्छारीकन भूमिमा दलि-दली * मारे नराम्रो गरी ॥
चिच्यायो खल त्यो ठुलो स्वर गरी * मर्नै बखतमा अनि ।
मारे घाँटि थिचेर भीम विरले * लौ मुक्त हो जा भनी ॥१०॥
स्यावासी दिनुभो युधिष्ठिरजिले * श्री भीमलाई त्यहाँ ।
पाँचै व्यक्ति फिरे प्रसन्न मनले * आफ्नू सुआश्रम् महाँ ॥
पैहे झैं सब वीर पाण्डव त्यहाँ * फेरि बसे, क्वै दिन ।
आज्ञा गर्नुभयो युधिष्ठिजिले * मौका विचारीकन ॥११॥
भन्थे अर्जुनले छ पर्वत ठुलो * कैलाश भन्ने जहाँ ।
शिक्षा प्राप्त गरी सकेपछि स्वयं * भेट्नेछु आई त्यहाँ ॥
जानू पर्छ त्यहीं भनेर गुरुको * आज्ञा लिई सादर ।
चारै भाइ र द्रौपदी मिलि गरे * प्रस्थानको तर्खर ॥१२॥
जान्छन् पाण्डव रे, भनेर फिंजियो * संवाद चारै तिर ।
साथै जान भनी मुनि द्विज पनी * सारा भए तत्पर ॥
त्यागदा आश्रम त्यो सुरम्य मनमा * दुःखी भए तापनि ।
चारै भाइ र द्रौपदी अघि हिंडे * लागे पछाडि मुनि ॥१३॥

पौंचे श्री वृषपर्व नाम नृपती * गर्थे तपस्या जहाँ ।
देखी भूपतिले सुआदर गरे * आनन्द मानी त्यहाँ ॥
ज्ञानी, विप्र, मुनी ऋषीहरू सँगै * जो जो गएका थिए ।
सोधी भूपतिलाइ सोही कुटिमा * तिन्‌लाइ राखी दिए ॥१४॥
केही काल त्यहीं बसे नृपतिको * सत्सङ्गका खातिर ।
चारै भाइ गुरु र द्रौपदि हिंडे * मागी बिदा सादर ॥
पुग्दाक्यै पर आर्ष्टिषेण नृपको * देखे सफा आश्रम ।
बल्दा अग्निसमानका तिनी थिए * नाशेर सारा तम ॥१५॥
आज्ञाले ऋषिको सहर्ष कुटिमा * बस्ता थए क्यै दिन ।
चर्चा धर्म र नीतिको बसि सदा * गर्थे खुशी भैकन ॥
रोकेथे मुनिले त उत्तर दिशा * देखाउँदै ऊः त्यता ।
जानू हुन्न त्यहाँ मनुष्यहरूले * हुन्छन् सदा देवता ॥१६॥
जानी-जानी पनी कुनै दिन त्यतै * श्री भीम डुल्दै गई ।
लागे हेर्न उभेर श्रेष्ठ गिरिको * सौन्दर्यमा लोभिई ॥
ठोकी ताल फुके सुशंख बलले * घन्काउँदै जङ्गल ।
सारा यक्ष र जन्तुमा हुन गयो * त्यो शब्दले थल्बल ॥१७
शक्ती,शूल र खड्ग तोमर गदा * बोकी ठुबै हातमा ।
आए यक्ष अनेक क्रोधित भई * श्री भीमका पासमा ॥
तिन्को आपुसमा विवाद हुनगो * क्यै बेर त्यै स्थानमा ।
लागे लड्न रिसाई भीम सहसा * यक्षादिका साथमा ॥१८॥
सारा यक्ष मिलेर बाणहरूको * वर्षा गरे तापनी ।
काटे भीम रिसाई यक्षहरूको * शस्त्रास्त्र तुच्छै गनी ॥
लागे हान्न गदा घुमाइ बलले * ती यक्षलाई जब ।
मारीए कति वीर त्यै स्थलमहाँ * भागे बचेका सब ॥१९॥

सेनाध्यक्ष कुबेरका ति मतिमान् * भन्ने प्रतापी थिए ।
काम्दै थर्थर यक्षले तिनिकहाँ * सम्चार भन्दा भए ॥



भीमसेन द्वारा यक्षहरूको संहार र कुबेरसित वार्तालाप

आए श्री मणिमान यक्षहरूले * बिन्ती गरेको सुनी ।
को हो मानिस त्यो म हेर्दछु अनी * त्यस्लाइ मार्छु पनी ॥२०
पहिले नै दस बाणका सँग-सँगै * हाने गदा वेगले ।
तिन्का बाण गदा समेत बिचमै * काटी दिए भीमले ॥
शक्ती श्री मणिमानले अतिठुलो * ताकेर चाडी दिए ।
त्यो शक्ती गइ भीमका शरिरमा * लाग्दा निकै आत्तिए॥२१
केही धैर्य गरेर भीम विरले * हाने गदाले जब ।
तत्काले मणिमानजी मरिगए * भागे बचेका सब ॥
यो संवाद कुबेरका हजुरमा * बिन्ती चढाए गई ।
आए झट्ट कुबेर पुष्पक चढी * शस्त्रास्त्र सेना लिई ॥२२॥

मर्दा त्यो मणिमान शब्द अघि नै * ठूलो भएको थियो ।
त्यस्ले धर्म-कुमारलाई सहसा * निक्कै अत्याई दियो ॥
खोज्दै भाइ दुवै लिएर सँगमा * आए त्यही स्थानमा ।
लागे भन्न बुझाइ भीमकन ती * पक्री दुवै हातमा ॥२३॥
गर्छौं देव-विरुद्ध काम यसरी * हे भाइ ! व्यर्थै किन ?
निर्दोषीहरूलाई मारि अहिले * मेरो दुखायौ मन ॥
त्यो वेला पुगि सामु यक्षपतिले * आनन्द मानी कन ।
लागे भन्न, सुनेर धर्म-सुतको * सन्तापको कारण ॥२४॥
हे राजन् ! जति काम भीम विरले * आएर याहाँ गरे ।
पाएँ श्राप अगस्त्यबाट अघि जो * मैले, सबै त्यो हरे ॥
तस्मात् क्यै रिस छैन भीम विरको * यो कामले तैपनी ।
यस्तो काम नगर्नु फेरि कहिले * आफैं मपाइँ बनी ॥२५॥
माफी पाउँ भनी युधिष्ठिरजिले * तिन्को गरे आदर ।
त्याहाँबाट फिरी कुबेर खुशिले * जानू भएथ्यो घर ॥
हेर्दै जङ्गलको अलौकिक छटा * क्यै काल त्याहाँ बसी ।
लागे फर्कन पाँच पाण्डवहरू * मानेर साह्रै खुशी ॥२६॥

अर्जुनको स्वर्गबाट आगमन र द्वैतवन प्रस्थान :—

फर्के पाण्डव आर्ष्टिषेण ऋषिको * फेरी कुटीया महाँ ।
आएनन् किन वीर अर्जुन भनी * गर्थे कुरा ती त्यहाँ ॥
आए इन्द्र र पार्थ दिव्य रथमा * सानन्द त्यै स्थानमा ।
देखीयो रथ श्रेष्ठ एक सहसा * तत्काल आकाशमा ॥२७॥
दाजू-भाइ मिले परस्पर त्यहाँ * आनन्द मानी कन ।
लागे भन्न बुझाइ धर्म-सुतको * राम्रो बुझाई मन ॥

राजन् ! पार्थ समान वीर अब ता * क्वै छैन संसारमा ।
आफ्नू सत्य कबोल पूर्ण गरिल्यौ * आनन्दका साथमा ॥२८
मारी कौरवलाइ भोग्नु खुशिले * साम्राज्य निष्कण्टक ।
ठूलो कीर्ति हुनेछ लोक भरिमा * तिम्रो प्रजा-पालक ॥
धेरै आर्ति र सान्त्वना दिइसकी * श्री इन्द्र फर्की गए ।
दाजूका सँग स्वर्गका सब कुरा * श्रीपार्थ भन्दाभए ॥२९॥
त्यस्ता अद्भुत कर्म स्वर्ग-पुरिमा * तिन्ले गरेको सुनी ।
दाजू-भाइ र द्रौपदी गुरुजिले * आश्चर्य माने अनी ॥
सोधे अर्जुनलाइ धर्म-सुतले * सुन्छु म विस्तारले ।
जे-जे काम गर्‍यौ सुनाउ सब त्यो * हे भाइ ! आनन्दले ॥३०
मारे राक्षस धेर सिन्धु-तटका * एक्लै गए तापनी ।
पाए पाशुपतास्त्र श्रेष्ठ जसरी * श्री शम्भु देखी अनी ॥
पौलोमादि अनेक राक्षस जिते * पातालमा गैकन ।
शिक्षा प्राप्त गरे जसो गरि सबै * तिन्ले गरे वर्णन ॥३१॥
सोधे खूशि भई युधिष्ठिरजिले * हाँसेर हे अर्जुन ! ।
बाबूका सँग पाँच वर्ष रहि जो * सौख्यादि भोगीकन ॥
विद्या सिक्न नवीन स्वर्गपुरिमा * पायौ तिमीले जति ।
त्यस्को हेर्छु सबै प्रदर्शन गरी * देखाउ हे सद्मति ॥३२॥
दाजूको सुनि यो कुरा उहि घरी * शस्त्रास्त्र मन्त्रीकन ॥
लागे छाड्न र भूमि कम्पित भई * थाल्यो दिशा थर्कन ॥
धेरै वृक्ष ढले, गिर्‍यो शिखर नै * ठूला गिरीको जब ।
रोके नारदले पुगी त्रिभुवनै * नाशिन्छ भन्दै तब ॥३३॥
हेर्नू शस्त्र प्रयोग धर्मसुतले * संग्राम भूमि महाँ ।
ऐले छाड्न हुँदैन पार्थ तिमिले * शस्त्रास्त्र व्यर्थै यहाँ ॥

तीनै लोक विनाश पार्छ महजे * हे वीर ! दिव्यास्त्रले ।
येती अर्ति दिएर नारद गए * फर्केर आनन्दले ॥३४॥

अजिंगर रूप राजा नहुषको कथा—

येती कथा सुनिसकीकन भूपतिले ।
सोधे मुनीश्वरजिलाइ प्रसन्ताले ॥
त्याहाँ पछी कसरि पाण्डवले मिलेर ।
काटे कहाँ दिनहरू खपि कष्ट धेर ॥३५॥
सत्कर्म के कति गरे वनमा डुलेर ।
आज्ञा हवस् सब म सुन्छु खुशी भएर ॥
बिन्ती सुनेर नृपको मनमा रमाई ।
लागे मुनीश्वर बताउन भूपलाई ॥३६॥

केही काल बसे प्रसन्न मनले * त्यै स्थानमा पाण्डव ।
काटीए दस वर्षका दिनहरू * एघार लाग्यो अब ॥
त्याहाँबाट बिदा भई सकलको * आशीष अर्ति लिई ।
शोभायुक्त विशाखयूप वनमा * पौंचेर खुशी भई २७॥
डुल्दै फेरि पुगे ति द्वैतवनमा * नाघ्दै अनेकौं गिरी ।
पैह्ले झैं ति सरस्वती तट महाँ * बस्ता भए राम्ररी ॥
जान्थे भीम शिकार खेल्न वनमा * नाना थरी जन्तुको ।
देखेथे पथमा अजिंगर ठूलो * राजा सरी सर्पको ॥३८॥
देख्नासाथ ति भीमको शरिरमा * त्यो क्रोधले बेरियो ॥
गर्थे भीम जती-जती बल उतीं * झन् बेसरी मस्कियो ॥
शक्ति क्षीण भएर भीम विरको * लाग्दा भए आत्तिन ।
को हौ सर्प ! बताउ शक्ति यसरी * मेरो हरायो किन ? ॥३९॥

बोल्यो मानिस भैं अजिंगर पनी * वार्ता सुनी भीमको ।
मोको छ म न भूपती नहुष हुँ * हो भोग यो श्रापको ॥
लागें स्वस्न म स्वर्गबाट जिमिमा * देखें अगस्ती मुनी ।
मेरो दुर्गति देखि श्रेष्ठ मुनिले * बोले दयालु बनी ॥४०॥
हुन्छौ मुक्त छिटै नमान मनमा * चिन्ता कुनै भूपति !
त्याहाँबाट स्वमी अजिंगर भई * भोग्दैछु यो दुर्गति ।
गर्थे यै रितका परस्पर कुरा * श्री भीम औ भूपति ॥
गर्थे गन्थन श्री युधिष्ठिर उता * आनन्द मान्दै अति ॥४१॥
लागे आश्रममा अनेक थरिका * उल्काहरू देखिन
सोधे भीम कहाँ छ धर्म-सुतले * श्री द्रौपदीजी कन ॥
धेरै बेर भयो शिकार वनमा * खेल्छु भनी जानुभो ।
यस्तो उत्तरले युधिष्ठिरजिको * सन्ताप बढ्दै गयो ॥४२॥
भाई खोज्न भनेर धौम्य गुरुजी * -लाई लिई निस्किए ।
बाटोमा पद-चिह्न भीम विरको * पैल्याउँदै ती गए ॥
देखे धर्म-कुमारले पुगि त्यहाँ * श्री भीमको दुर्गति ।
लागे भन्न ति साथमा नहुषको * वार्ता भएको जति ॥४३॥
सोधे धर्म-कुमारले नगिच गै * हे सर्प ! को हौ भन ?
जे खान्छौ तिमिलाइ दिन्छु अहिल्यै * खोजेर ल्याई कन ॥
छाडीयौ अब भीमलाइ यसरी * पक्री रहेछौ किन ?
बोले सर्प स्वरूपका नहुषजी * तत्काल हाँसीकन ॥४४॥
पैलेको इतिहास वर्णन गरी * त्यो श्रापको कारण ।
मागी बात भनी सकेपछि भने * हे भूपतीजी ! सुन ॥
गर्छु प्रश्न म देउ उत्तर तिमीं * जाने बुझेको जति ।
छाड्नेछु अनि भीमलाइ नहिं ता * खान्छु खुशी भै अति॥४५

मेरो यो परिधीमहाँ तिमि स्वयं * आई दिनाले गरी ।
हुन्छौ भोजन भोलिको दिन तिमी * मेरा अगाड़ी परी ॥
बाँच्दैनन् कहिले कुनै जन पनी * हुन्छन् अहारा बरू ।
बाँचेको छु यसै गरेर बनमा * खाएर जन्तूहरू ॥४६॥
बोले धर्म-कुमार हे नहुषजी ! * दिन्छु सबै उत्तर ।
मेरो सामु सहर्ष प्रश्न जति हो * शंका नमानी गर ॥
जान्नू पर्दछ विप्र-जीवनमहाँ * जुन् तत्व राम्रो गरी ।
त्यस्को ज्ञान् तिमिमा छवैन म बुझी* दिन्छु जवाफ् राम्ररी॥४७
लागे बोल्न मनुष्य झैं नहुषले * कुन् योग्य हो ब्राह्मण ।
जान्नू पर्दछ तत्त्व कुन् द्विज भई * राजन् ! मलाई भन ?
यस्ता बात सुनी सकी नहुषको * क्यै बेर सोची कन ।
लागे भन्न सहर्ष धर्म-सुतले * तिन्को बुझाई मन ॥४८॥
दानी, सत्य, क्षमा, खुशी, तपसी * जस्मा छ यो सद्गुण ।
गर्दैनन् अपकार कोहि जनको * हुन् श्रेष्ठ ती ब्राह्मण ॥
जान्नू पर्दछ ब्रह्मतत्त्व यहि नै * हो श्रेष्ठ भन्छु म त ।
तिम्रो के छ विचार शास्त्रहरूको * हो वेदको सम्मत ॥४९॥
बोले सर्प स्वरूपका नहुषजी * हो यो कुरा सुन्दर !
ब्रह्मज्ञान त चार वर्णहरूका * निम्ति छ राम्रो तर ॥
सत्य ज्ञान दयादि सद्गुणहरू * जो छन् अनेकौं थरी ।
पाइन्छन् ति त नीचमा पनि सबै * ठान्यौ ठुलो के गरी ॥५०
संसारी सुख-दुःख भिन्न र ठुलो * हो ब्रह्म भन्छौ तर ।
देखिन्नन् सुख-दुःख भिन्न भवमा * तत्वादि क्यै सुन्दर ॥
मेरो चित्त बुझेन हे नरपते ! * राम्रो बुझाई भन ।
लागे भन्न बुझाइ धर्म-सुतले * शंका नमानी सुन ॥५१॥

छन् राम्रा गुण शूद्रमा र द्विजमा * छैनन् भने ती गुण ।
छैनन् शूद्र तिनी र विप्र पनि ती * छैनन् गुणी ब्राह्मण ॥
गर्दैछौ तिमि तत्त्वका विषयमा * जुन् तर्क ऐह्ले यहाँ ।
त्यस्तो क्यै सुख-दुःख छैन बुझिल्यौ* पक्का तिमी मन्‌महाँ॥५२
सोधे फेरि ति सर्पले नरपते ! * आचारले ब्राह्मण ।
चिन्नू पर्छ भने त जान कसरी * छुट्ट्याउने हो भन ?
बोले धर्म-कुमार हे नहुषजी ! * यो जात यस्को भनी ।
गाह्रो पर्दछ जान्नलाइ भवमा * हो सत्य यो तैपनी ॥५३
हुन्छन् बालक जन्मदा पृथिविमा * सम्पूर्ण शूद्रै सरी ।
गर्दा षोडश कर्म जात जनको * जानिन्छ राम्रो गरी ॥
हो यो निर्णय वेदको र मनुको * जातीयता खातिर ।
यस्मा संशय क्यै नमान मनमा * हो यो कुरा सुन्दर॥५४॥
देखिन्नन् गुण शील विप्रहरुमा * संस्कार गर्दा पनि ।
ठान्नू पर्दछ वर्ण-संकर यिनै * पक्का रहेछन् भनी ॥
गर्नू पर्छ दया र धर्म, गुणको * रक्षा सदा भूपति !
यस्को पालनले हुनेछ सहजै * मुक्ति तथा सद्गति॥५५
येरै यै रितका गरे ति दुइले * सानन्द प्रश्नोत्तर ।
त्यागी सर्प स्वरूप ती हुन गए * पैह्ले सरी सुन्दर ॥
पाए श्राप अगस्त्यबाट जसरी * त्यस्को गरी वर्णन ।
ढोगे पाउ समाइ श्री नहुषले * उद्धार-कर्ता कन ॥५६॥
आयो दिव्य विमान एक नृपको * खातिर त्यै स्थानमा ।
ढोगी पाण्डवलाइ भूपति गए * आनन्दले स्वर्गमा ॥
दाजूलाइ गरे प्रणाम पदमा * पक्रेर श्री भीमले ।
आशीर्वाद दिए युधिष्ठिरजिले *तिन्लाइ आनन्दले॥५७॥

काम्यक वनमा श्रीकृष्ण, नारद र मार्कण्डेय मुनिको आगमन —

केही काल बसेर द्वैत वनमा * सानन्द ती पाण्डव ।
आए काम्यक नामको वनमहाँ * हेर्दै र डुल्दै सब ॥
पाल्नूभो त्यहिं कृष्णजी सँगमहाँ * श्री सत्यभामा लिई ।
राखे आसनमाथि श्रेष्ठ कुशको * तिन्लाइ खुशी भई ५८॥
सोधी संच-विसंच आदि हरिले * सानन्द आज्ञा भयो ।
मार्छन् यादवले ति कौरव सबै * भन्ने सफा देखियो ॥
छोरा द्रौपदिका पनी कुशल छन् * द्वारावतीमा सब ।
गर्नैपर्छ लडाइँ जान्छु म पनी * भन्दै थिए यादव ॥५९॥
हे राजेन्द्र ! हजूरले अब वृथा * पर्दैन चिन्ता लिन ।
सक्छन् मार्न महर्ष शत्रु रणमा * एक्लै गई अर्जुन ॥
यो आज्ञा हरिको युधिष्ठिरजिले * सुन्दा भएथे खुशी ।
धेरै यै रितका कुरा तिनीहरू * गर्थे कुटीमा बसी ॥६०॥
मार्कण्डेय मुनी लिएर सँगमा * शिष्यादि आए त्यहाँ ।
आए भेट्न भनेर नारद मुनी * राखी दया मन्महाँ ॥
राखे आसनमा युधिष्ठिरजिले * सत्कार राम्रो गरी ।
मार्कण्डेयजिलाइ धर्म-सुतले * सोधे चरणमा परी ॥६१॥
पापात्मा पनि हे मुनि ! कुरुहरू * देख्छु सबै छन् सुखी ।
धर्मात्मा जनलाइ यो बखतमा * देख्छु म साह्रै दुखी ॥
धर्मैले सुख मिल्छ भन्नु जनले * हो व्यर्थको गन्थन ।
देख्दा दैवगती विचित्र सहसा * आत्तिन्छ मेरो मन॥६२॥
पृथ्वीमै अथवा मरेपछि पनी * राम्रो नराम्रो फल ।
भोग्नै पर्छ कि माफ हुन्छ अथवा * देखिन्छ त्यो झल्झल ॥

यस्को निर्णय मुन्नको मन भई * सोधी रहेछ मुनी !
लागे भन्न मुनी युधिष्ठिरजिले * बिन्ती गरेको सुनी ॥६३॥
हे राजन् ! जति कर्म गर्छ जनले * राम्रो नराम्रो यहाँ ।
भोग्नैपर्दछ पाप-पुण्य नहिं ता * निस्तार होला कहाँ ? ॥
ज्यू दैमा अथवा मरेपछि हवस् * पर्ने छ भोग्नू जब ।
कालैले गरि मिल्छ कर्म-फल त्यो * प्रत्यक्ष देख्छौं सब ॥६४॥
राम्रो काम ति कौरवादि विरले * पैह्ले गरेका थिए ।
सोही कर्म फलेर यो जुनिमहाँ * साम्राज्य भोगी लिए ॥
त्यस्तै नै तिमिहेरूको पनि कुनै * दुष्कर्मको यो फल ।
जानी दैवगती सही दुखहरू * भोग्छौ डुली जङ्गल ॥६५
प्यासोले जल पाउँदा जति खुशी * देखिन्छ हे भूपति !
त्यस्तै हो सुख भोग दुःख पछिको * दैवी विचित्रा गति ॥
ठान्दैछन् सुख-दुःख धीर जनले * हुन् एकनासे भनी ।
पर्दा चञ्चललाइ कष्ट मनमा * सन्ताप मान्छन् तिनी ६६
सन्तोषी नबनेर धेर सुखको * जो गर्छ खोजी अरू ।
राजा होस् तपनी हुँदैन सुख क्यै * झन् दुःख भोग्ला बरू ॥
ज्ञानीले सुख-दुःखको घर भनी * मान्छन् शरीरै कन ।
गर्छन् आत्म-विकाच, कष्ट कसरी * तिन्लाइ होला भन्न ॥६७
भोगैमा डुबि जो सुखी हुन भनी * इच्छा सदा गर्दछन् ।
भोगी भोग हुँदैन तृप्ति र पछी * गै नर्कमा पर्दछन् ॥
गर्दछौ शुभ धर्म पालन र पो * देखेर तिम्रो स्थिति ।
आए माधवजी प्रिया सँग लिई * आनन्द मान्दै अति ॥६८
जस्को दर्शन हुन्छ दुर्लभ सदा * इन्द्रादि लाई पनि ।
ठान्छौ माधव आइ भेटनु तिमिले * सानो कुरा हो भनी ? ॥

सम्झाए अमरत्व-प्राप्त मुनिले * तिन्लाइ राम्रो गरी ।
सोधे फेरि पनी युधिष्ठिरजिले * सानन्द पाऊ परी ॥६९॥
हे सर्वज्ञ मुने ! बताउनु हवस् * कुन् धर्म कस्ले गरी ।
पाएथे फल के ? र सत्पुरुषको * सुन्छु कथा राम्ररी ॥
मेरो चञ्चल चित्त भित्र स्थिरता * आउन्न के हेतुले ?
शान्ती प्राप्त गराउनोस् मनमहाँ * मेरो कुनै युक्तिले ॥७०॥

विप्र-महिमा—:

यस्तो प्रश्न सुनी युधिष्ठिरजिको * हाँसेर बोले मुनी ।
भन्छु हे नरपाल ! विप्र-महिमा * सन्तोष होला सुनी ॥
यौटा हैहय नामका नरपती * ठूला प्रतापी थिए ।
आफ्नू राज्य तथा प्रजा सुजनमा * कीर्ति फिंजाई लिए ॥७१॥
मार्छु जङ्गलका अनेक थरिका * ती हिंस्र जन्तु, भनी ।
राजा खेल्न गए शिकार वनमा * शस्त्रास्त्र-सज्जित बनी ॥
ओढेका मृगचर्म कश्यप ऋषी * गर्थे तपस्या बसी ।
तिन्लाई मृग ठानि हैहय उभे * क्यै दूर मान्दै खुशी ॥७२
टाढैबाट गरेर लक्ष्य शरले * हानी दिएथे जब ।
छाती कश्यपको बिदीर्ण सहजै * पारी दिएथ्यो तब ॥
पौंचे लिन्छु भनी शिकार नगिचै * दौडेर ती हैहय ।
ज्ञानी कश्यपलाइ लीन तपमा * देख्दा भए निर्भय ॥७३॥
लागे हेर्न उभेर ती नरपती * आश्चर्य मानी कन ।
थाले भन्न बुझाइ कश्यप मुनी * ती भूपतीको मन ॥
हेर्दैछौ तिमिले मलाइ यसरी * आश्चर्य मानी किन ?
थामी धर्म र सत्य निष्कपट भै * गर्छन् दया जो जन ॥७४

सक्छन् राख्न ति काललाइ वशमा * आफ्नू ठुलो शक्तिले ।
तस्मात् धर्म ठुलो बुझेर मनमा * गर्नू दया युक्तिले ॥
मैले पाप गरें भनेर मितिले * पर्दैन मान्नू डर ।
शंका त्याग गरी प्रसन्न मनले * फर्केर जाऊ घर ॥७५॥
ज्ञानी कश्यपको कुरा सुनिसकी * खुशी भए हैहय ।
तिन्को पूजन भक्तिपूर्वक गरी * फर्के घरै निर्भय ॥
मार्कण्डेयजिले भनें नरपते ! * आख्यान अर्को पनि ।
भन्छु सुन्नुहवस् प्रसन्न मनले * सन्तोष होला अनि ॥७६
पत्नीलाइ भने कुनै दिन महाँ * ज्ञानी मुनी अत्रिले ।
जान्छु लौ तप गर्न घोर वनमा * श्री कृष्णको भक्तिले ॥
स्वामीको सुनि बात यो सुमुखिले * विन्ती गरिन् सादर ।
केही सम्पति ल्याउनोस् हजुरले * सन्तानका कातिर ॥७७॥
पत्नीको सुनि यो कुरा मुनि गए * श्री वैण्य राजा कहाँ ।
हुन्थ्यो यज्ञ ठुलो थिए द्विजहरू * धेरै बसेका त्यहाँ ॥
लागे गर्न ति अत्रिले नृपतिका * सत्कीर्तिको वर्णन ।
राजन् ! श्रेष्ठ सुरेन्द्र हौ तिमिसरी * छैनन् कुनै सज्जन ॥७८
गर्दा यज्ञ र धर्म-कर्म भवमा * विख्यात छौ धार्मिक ।
तिम्रो कीर्ति सुनिन्छ लोकहरूले * भन्छन् प्रजा-पालन ॥
बोले गौतम–वैण्यको थरि थरी * तारीफ धेरै सुनी ।
गर्छौ वर्णन भूपको किन वृथा * हे अत्रि ! ज्ञानी बनी ॥७९॥
जस्तो तारिफ वैण्यको गरिदियौ * आई सभा बीचमा ।
पक्का केहि रहस्य गुप्त छ भनी * शंका छ यो बातमा ॥
बोले गौतमको कुरा सुनिसकी * अत्री निकै झोक्किई ।
भन्दा सत्य कुरा मलाइ तिमिले * के गर्दछौ झोक्किई ॥८०॥

जो छन् दुष्ट तिमी समान अरुको * तारीफ सुन्दा पनि ।
दिन्छन् दोष अवश्य, आफु गुणमा * मानू सुनेछु भनी ॥
लाग्यो बढ्न विवाद धेर दुइको * त्याहाँ अरू जो थिए ।
गर्दैछन् दरबारमा यि झगरा * के हेतु भन्दा भए ॥८१॥
लागे भन्न सनत्कुमार मुनिको * मध्यस्थता मान्दछौं ।
जे भन्छन् तिनिले प्रसन्न मनले * हामी दुवै गर्दछौं ॥
पौंचाए तिनिलाइ झट्ट सबले * साम्ने मुनीका जब ।
लागे भन्न सनत्कुमार मुनिले * जाने बुझेको सब ॥८२॥
राजा भै नझुकी कतैतिर पनी * इन्साफ जो गर्दछन् ॥
शक्तिले धनले प्रजा, सुजनको * सन्ताप जो हर्दछन् ॥
ती हुन् इन्द्र भनेर जान्नु सबले * हो बात यो नीतिको ।
त्यस्तै वैण्य हुँदा भयो कलहमा * यो जीत श्रीअत्रिको॥८३॥
राजाले ती सनत्कुमार मुनिको * यस्तो सुनी निर्णय ।
धेरै सम्पति अत्रिजीकन दिए * मानी तिनैको जय ॥
त्यो सम्पत्ति लगेर पुत्रहरूमा * बाँडी दिए अत्रिले ।
त्यागी त्यो घरबार घोर तपमा * लागे तिनी भक्तिले ॥८४॥
लागे भन्न मुनी युधिष्ठिर, तिमी * आख्यान अर्को सुन ।
ज्ञानी ताक्ष्र्य-सरस्वती भगवती * -को गर्दछु वर्णन ॥
यस्तै प्रश्न सरस्वतीसित गरे * श्री ताक्ष्र्यले क्वै दिन ।
जो छन् दान र पुण्य मुख्य सब ती * सुन्छु मलाई भन ॥८५॥
आज्ञा हुन्छ हजूरले जति कुरा * गर्छु सबै पालन ।
लागिन् भन्न सरस्वती भगवती * तिन्को बुझाई मन ॥
गर्छा जो जन दान ताक्ष्र्य ! खुशिले * गाई सवत्सा कन ।
बस्ला गौं जति वर्षसम्म गइ त्यो * गोलोकमा सज्जन ॥८६॥

गोरु दान गरेर वस्तछ ठुलो * श्री सूर्यको लोकमा ।
बस्ला दान दिएर वस्त्र जन त्यो * श्री चन्द्रका पासमा ॥
कन्या भूमि सुवर्ण दान विधिले * गर्नेछ जो सज्जन ।
जाला स्वर्ग र इन्द्रको नगिचमा * बस्नेछ धेरै दिन ॥८७॥
चारै वेद पढेर ब्रह्म चिन्हि जो * गर्ला तपस्या पनी ।
टिक्ला बन्धन तोडि कर्महरुको * त्यो ब्रह्मज्ञानी बनी ॥
जस्ले गर्दछ अग्निहोत्र विधिले * सानन्द संसारमा ।
भोगी सौख्य यहाँ मरेपछि पुग्यो * त्यो सत्यको लोकमा ॥८८॥
यस्तै अतिहरु अरु पनि निकै * श्री शारदाको सुनी ॥
ब्रह्मको गरि ध्यान ब्रह्मपदमा * जाँदा भए ती मुनी ।
यस्तै धर्म-प्रसंग, विप्र-महिमा * भन्दै गएथे मुनी ।
श्रद्धापूर्वक सुन्दथे शुभ कथा * श्रोताहरूले पनि ॥८९॥

वैवस्वत मनु र मत्स्यावतार वर्णन :—

मार्कण्डेय मुनी प्रसन्न मनले * भन्थे बुझाई कन ।
अर्को श्री मनुको कथा नरपते * आनन्द मानी सुन ॥
छोरा एक थिए सुशील रविका * सत्पात्र वैवस्वत ।
अर्को नाम पनी थियो ति मनुको * प्रख्यात सत्यव्रत ॥९०॥
योटा मत्स्य पुगी कुनै दिनमहाँ * तिन्लाइ भन्दो भयो ।
हे ज्ञानी, मनुजी ! असाध्य डरले * मेरो त सातो गयो ॥
खान्छन् ती बलवान मत्स्यहरुले * खोजेर साना कन ।
रक्षा गर्नुहवस् प्रभो ! हजुरले * आत्तिन्छ मेरो मन ॥९१
माछाको सुनि त्यो कुरा मनुजिले * स्वीकार गर्दा भए ।
गाग्राको जलमा सुरक्षित गरी * त्यो मत्स्य राखीदिए ॥

चाँडै नै बढि मत्स्य त्यो जलमहाँ * टिक्नै नसक्ने भयो ।
बोकी श्री मनुले सरोवर महाँ *त्यस्लाई राख्नू पर्‍यो ॥९२
केही कालमहाँ सरोवर पनी * सानू भएथ्यो जब ।
गङ्गाको जलमा लगेर मनुले * राखी दिएथे तब ॥
धेरै स्थूल भएर टिक्न नसकी * गङ्गाजलैमा पनि ।
राखेथे मनुले लगी उदधिमा * ठूलो दयालु बनी ॥९३॥
लागे भन्न पुगेपछी जलधिमा * हाँसेर ती मत्स्यले ॥
रक्षा गर्नु भयो ठुलो जतनले * मेरो सदा नाथले ॥
त्यस्को प्रत्युपकार गर्न अहिले * मौका छ राम्रो भनी ।
भन्छु हे मनुजी ! महाप्रलयको * आएछ वेला पनि ॥९४॥
योटा नाउ बनाइ खूब बलियो * सप्तर्षिका साथमा ।
बस्नू पर्छ हजूरले जतनले * डोरी लिई हातमा ॥
होला भेट पछी र पर्खनु पनी * यै स्थानमा नाथले ।
होला चिह्न हजुरलाइ सजिलो * मेरा दुवै सींगले ॥९५॥
पैह्ले ब्राह्मणले कहे जति सबै * बीजादि खोजी कन ।
राख्नू नाउमहाँ सुरक्षित पछी * चाहिन्छ हे सज्जन !
मेरो शक्तिविना सकिन्न कहिल्यै * त्यो सिन्धु पारी हुन ॥
यस्तो अर्ति दिई विलीन हुनगो * त्यो मत्स्य सोही क्षण॥९६
सारा बीज लिएर सात दिनमा * सप्तर्षिका साथमा ।
डुङ्गामाथि बसी रहे मनु त्यहीं * डोरी लिई हातमा ॥
राजन् ! आइपुग्यो महाप्रलयको * त्यो काल वेला जब ।
ढाक्यो भूमि समुद्रको जल बढी * बाँकी नराखी सब ॥९७॥
ठूलो वायु चल्यो ढले गिरि गुहा * वृक्षादि औ जङ्गल ।
ढाक्यो भूमि सबै दिशा उदधिको * उर्लेर बढ्दा जल ॥

डुङ्गामाथि बसी डुले मनु पनी * सप्तर्षिका साथमा ।
हुन्थ्यो नाउ डुबेसरी घरि-घरी * त्यो सिन्धुका छालमा ॥९८
केही काल वितेपछी ति मनुले * लागेर साह्रै डर ।
थालेथे स्तुति गर्न मत्स्य भगवान् * आएर रक्षा गर ॥
तिन्को विन्ति सुनी दयामय दया * लागेर सोही घरी ।
आए दिव्यप्रभा फिंजाइ नगिचै * ती मत्स्यरूपी हरि ॥९९
जस्को सोह्र हजार योजन बढ़ी * नै देखिइन्थ्यो तन ।
त्यस्ता श्री भगवानलाइ सबले * ढोगे खुशी भैकन ॥
डोरीले सिङमा तुरुन्त मनुले * बाँधी दिए बन्धन ।
उर्लेको जलमाथि नाउ सहजै * लागे तिनी खैंचन ॥६००
डुङ्गा तानिरहे निकै दिन तिनी * थाक्तै नथाकी कन ।
सप्तर्षि, मनुदेखि बाहिक अरू * देखिन्नथे क्वै जन ॥
डुल्दै उत्तरको हिमालय महाँ * डुङ्गा पुगेथ्यो जब ।
डुङ्गा थामि ति मत्स्यरूप हरिले * आज्ञा भयो लौ अब ॥१॥
हे सप्तर्षि ! मनू पनी तिमिहरू * मैले भनेको सुन ।
आठै व्यक्ति मिलेर सृष्टि क्रममा * आफ्नू लगाओ मन ॥
येती बात भनेर मत्स्य प्रभुजी * जानू भएथ्यो जब ।
थाले सृष्टि बढाउनाकन त्यहाँ * आठै जनाले तब ॥२॥
हो यो मत्स्य-पुराणको शुभ कथा * सौभाग्य दाता पनि ।
सुन्नू आफु सुनाउनू सुजनले * हो मुक्तिदाता भनी ॥
धेरै धर्म कथा यसै विषयका * भन्दै गए ती मुनी ।
ज्ञानी नारद, कृष्ण, पाण्डव सबै * खुशी भएथे सुनी ॥३॥

युग-धर्म र प्रलय वर्णन

सोधे धर्म-कुमारले बिचमहाँ * रोकेर सोही घरी ।
धेरै देख्नु भयो महाप्रलयको * त्यो दृश्य राम्रो गरी ॥
भन्थे विप्र तथा ऋषीश्वर मुनी * साँचो कुरा हो भनी ।
मौका आज मिल्यो सुनाउनु हवस् * प्रत्यक्ष द्रष्टा मुनी ॥४॥
लागे भन्न मुनी युधिष्ठिरजिले * बिन्ती गरेको सुनी ।
तिम्रा सामुमहाँ उपस्थित भई * जो छन् बसेका यिनी ॥
सर्वात्मा प्रभु कृष्ण हुन् सकलका * कर्ता र धर्ता अनि ।
सृष्टी पालन नाश गर्न सहजै * सक्छन् र गर्छन् पनि ॥५॥
गर्थे पालन धर्म सत्य युगमा * प्राणीहरू सादर ।
सोही कारणले थिए चरण ती * चारैवटा सुस्थिर ॥
थाले डुब्न अनेक स्वार्थहरूमा * मानीस सारा जब ।
पैह्लो पाउ त धर्मको टुटिगयो * लागेर त्रेता युग ॥६॥
त्यागी धर्म अधर्ममा रत भए * मानीस चारै तिर ।
दोस्रो पाउ त धर्मको टुटिगयो * लाग्यो जसै द्वापर ॥
लागेथ्यो जब त्यो कली हुन गए * विश्वासघाती जन ।
भाँच्चीयो अनि धर्मको चरण त्यो * तेस्रो त्यसै कारण ॥७॥
लागला घोर कली जसै नरपते * अन्याय गर्नन् सब ।
त्यागी सत्य अधर्ममा रत हुनन् * सम्पूर्ण प्राणी तब ॥
पाऊ टुट्तछ धर्मको अनिपछी * चौथो बचेको पनी ।
अर्काको धन दार खोस्न सजिलो * मान्नन् सदा दुर्गुणी ॥८॥
हे राजन् ! अवतारले थरि-थरी * उद्धार गर्ने हरि ।
आए कृष्ण भएर यो बखतमा * औतार धारण गरी ॥

कल्की रूप लिएर फेरि कलिमैं * मारेर पापी सब ।
गर्छन् धर्म प्रचार, सत्य युगको * प्रारम्भ यी माधव ॥९॥
चारैटा युगका मिलाइ दिनमान् * ती अंक जोरी लिंदा ।
यौटा कल्प हजार वर्ष जतिको * हो पूर्ण जम्मा हुँदा ॥
त्यस्तै ईश्वरको गरें तप ठुलो * नौ कल्प मैले पनि ।
जागेथें तपबाट हे नरपते ! * सन्तोष मानी अनि ॥१०
देखें कल्प अनेक यै शरिरले * देख्नेछु फेरी अरू ।
पाएँ दर्शन कृष्णको र अहिले * सन्तोष लाग्यो बरू ॥
मैले जन्म लिई महाप्रलयको * देखें अघी दृश्य जो ।
गर्छु वर्णन सुन्नुहोस् नरपते ! * आश्चर्य लाग्दो छ त्यो ११
त्यागे धर्म ति चार वर्णहरूले * लागी दुराचारमा ।
पत्नीले पतिलाइ छाडि, पति झन् * लागे अनाचारमा ॥
हो यो धर्म र पाप हो यति भनी * मानीसले बिर्सिए ।
आयु क्षीण भएर घोर कलिमा * प्राणी दुखी भै गए ॥१२॥
थोरै अन्न फल्यो, अवर्षण भई * सुक्खा पऱ्यो बेसरी ।
लागेथें तपमा कुलक्षणहरू * देखेर धेरै थरी ॥
पारे भूमि सखाप केहि दिनमा * श्री द्वादशादित्यले ।
सारा वस्तु डढेर भस्म हुन गो * ठूलो अनावृष्टिले ॥१३॥
हावा खूब चलेर केहि दिनमा * उत्पात बढ्दै गयो ।
वर्षा धेर भई जलामय भयो * पृथ्वी सबै ढाकियो ॥
पानी बाहिक त्यो महाप्रलयमा * केही कतै देखिनँ ।
लाग्यो त्रास तथापि सोहि जलमा * पौडी रहें क्यै दिन ॥१४॥
देख्येँ वट-वृक्ष एक जलमा * हे धर्मका रक्षक !
हाँगामा बरका थिए पलँगमा * यौटा त्यहीं बालक ॥

तान्दा श्वास गरेर दीर्घ, म गएँ * तिन्का जसै पेटमा ।
देखिन्छन् अहिले चराचर जती * सम्पूर्ण संसारमा ॥१५॥
देखेथें शिशुको रही उदरमा * त्यस्तै सबै स्थानमा ।
डुल्दा वर्ष हजारसम्म त सबै * देखें उही पेटमा ।
केही अन्त्य नपाइ आत्तिन गई * थालें स्तुति सादर ।
लामू श्वास गरेर फेरि शिशुले * फ्याँकी दिए बाहिर ॥१६॥
लागेथें स्तुति गर्न फेरि उभिई * हे ईश ! रक्षा गर ।
गर्दैछु पदमा प्रणाम, मनमा * लाग्दैछ ठूलो डर ॥
हाँस्तै बालकले भने-द्विज ! तिमी* मागेर लेऊ वर ।
इच्छा पूर्ण हुनेछ केहि मनमा * पर्दैन मान्नू डर ॥१७॥
ब्रह्मा विष्णु सुरेन्द्र अग्नि शिव औ * श्री सूर्य श्री चन्द्रमा ।
सृष्टि पालन नाश गर्दछु स्वयं * यिन्का रही साथमा ॥
द्यौता दानव यज्ञ राक्षस ठुला * ज्ञानी गुणी सज्जन ।
मेरो यो महिमा यथार्थ नबुझ्ने * जान्दैन हे ब्राह्मण ! ॥१८
वाणीरूप भएर प्राणिहरूमा * आत्मा बनी बस्तछु ।
मौकामा अवतार धारण पनी * हे विप्र ! मै गर्दछु ॥
चारै वेद पढेर शास्त्रहरूमा * जो हुन्छ पारंगत ।
पारी जीवन शुद्ध मुक्त भइ त्यो * मिल्नेछ आत्मासित ॥१९
मैले जो उपदेश, दर्शन दिएँ * कल्याणका खातिर ।
ज्ञानीलाई पनी छ दुर्लभ मुने ! * तेसै कहाँ मिल्छ र ?
हुन्छौ नित्य सुखी कुनै तरहको * पर्दैन मान्नू डर ।
जीवन्-मुक्त हुने तिमीकन दिए * मैले स्वयं लौ, वर ॥२०॥
अन्तर्धान भएर बालक गए * अर्ती मलाई दिई ।
लागें डुल्न म सृष्टिहीन जलमा * पैह्ले सरीकै भई ॥

केही काल वित्यो र फेरि विधिले * जागेर सृष्टि गरें।
जीवात्मा पहिले सरी क्रमसितै * जन्मे र फेरी मरे ॥२१॥
तस्मात् यी हरिका परी शरणमा * पक्रेर पाऊ महाँ।
गर्नू कर्म सबै समर्पण, भनी * जाऊँ म स्वामी! कहाँ?
गर्नेछन् तिमिहेरुको खुशि भई * कल्याण सारा यिनी।
लागे भन्न मुनी यसै विषयको * आख्यान अर्को पनि ॥२२

दीर्घायु बक ऋषि र वामदेव मुनिको आख्यान:—

इक्ष्वाकू कुलमा थिए शल भनी * यौटा ठूला भूपति।
जान्थे खेल्न शिकार वन्य-पशुको * आनन्द मान्दै अति॥
अत्यावश्यकले कुनै दिन पुगे * यौटा कुटीमा तिनी।
मागे अश्व ति वामदेव मुनिको * फर्काउनेछु भनी ॥२३॥
आफ्नू काम सकी लगेर घरमा * राख्दा भए त्यो हय।
फर्काउन्नँ म अश्व-श्रेष्ठ, मुनिको * भन्ने गरे निश्चय॥
पैल्हे शिष्य पठाइ भूपति कहाँ * रित्तै फिरेका थिए।
त्यो देखेर मुनी सशंकित भई * पर्खेर बस्ता भए ॥२४॥
त्याएनन् किन अश्व भूप शलले * भन्ने विचारी कन।
पौंचे कवै दिनमा स्वयं मुनि त्यहाँ * त्यो अश्व फिर्ता लिन॥
देऊ अश्व मलाइ काम सकियो * तिम्रो सबै भूपति!
सम्झी आफ्नू कबोल व्यर्थ किन हो* यस्तो लियौ दुर्मति ॥२५
बोले भूपति—अश्व दिन्नँ म मुने!* साटो लिनू होस् बरु।
जे मागे पनि दिन्छु राज्य भरिमा * छन् श्रेष्ठ वस्तुहरु॥
लागे भन्न ति वामदेव मुनिले * हो विप्रको यो धन।
फिर्ता गर्छु भनेर दिन्नँ अहिले * भन्छौ वृथामा किन? २६

निक्कै बेर विवाद आपुसमहाँ * गर्दै रहे ती दुई ।
मार्छन् राक्षसले तँलाइ अहिल्यै * आएर क्रोधित् भई ॥
यस्तो श्राप दिए रिसाइ मुनिले * ती भूपलाई जब ।
निस्की राक्षस चार झट्ट शलको * टुक्रा गरराए तब ॥२७॥
हाहाकार परेर पौरजनले * सल्लाह पक्का गरी ।
सुम्पेथे बलला़इ राज्य शलको * भाई भनी त्यै घरी ।
शक्ती ती मुनिको र वीर शलको * देखे पनी दुर्गति ॥
घोडा दिन्नँ भनेर भूप बलले * उस्तै लिए दुर्मति ॥२८॥
तिन्की पत्नि थिइन् सुशील गुणकी * खानी सती सुन्दरी ।
स्वामीलाइ बुझाइ अश्व मुनिको * सुम्पी दिइन् त्यै घरी ।
आशीर्वाद दिए सहर्ष मुनिले * यो राज्य होला स्थिर ।
गर्नू पालन धर्मको र द्विजको * गर्दै रहे आदर ॥२९॥
येती बात भनी गए मुनि लिई * त्यो वामसंज्ञक् हय ।
रैती राजि गराइ राज्य बलले * भोग्दा भए निर्भय ॥
मार्कण्डेय मुनी प्रसन्न मनले * भन्दा भए लौ सुन ॥
ज्ञानी छन् बक नामका नरपते ! * यौटा मुनी सज्जन ॥३०॥
पैह्लेको जब सिद्धियो अति ठुलो * संग्राम देवासुर ।
पृथ्वीमा धन-धान्य पूर्ण हुनगो * आनन्द चारैतिर ।
राजा इन्द्र अनेक स्थानहरूको * सौन्दर्य हेर्दै थिए ।
डुल्दै ती बक नामका मुनिकहाँ * सानन्द पुग्दा भए ॥३१॥
शोभा आश्रमको चतुर्दिक थियो * अत्यन्त नै सुन्दर ।
राखी आसनमा गरे ति मुनिले * सत्कार औ सादर ॥
सोधेथे बसि इन्द्रले मनमहाँ * शंका परी हे मुनि ! ।
दीर्घायु [illegible] वर्ष सहजै * लाखौं बिते तापनि ॥३२॥

आफ्नू जीवनको सुदीर्घ अनुभव् * पैह्ले बितेको सब ।
आज्ञ होस् सुख-दुख वर्णन गरी * सुन्ने छ इच्छा अब ॥
लागे भन्न बुझाउँदै बक मुनी * देवेन्द्र ! सुन्नू हवस् ।
आफ्नू आर्जन खानु-झैं सुख ठुलो * क्यै छैन जान्नू हवस् ॥३३
गर्दै धर्म र विप्रको अतिथिको * सत्पात्रको चाकरी ।
पाए भोजन एकपल्ट दिनमा * हुन्छन् खुशी राम्ररी ॥
हे देवेन्द्र ! अनेक वर्ष नमरी * जो बाँच्दछन् लोकमा ।
मर्दा बन्धु बिछोडको दुख ठुलो * भोग्छन् ति संसारमा ॥३४
नित्यै जीव र देह वस्त्रसरि हो * जो ठान्दछन् सज्जन ।
गर्छन् चिन्तन ब्रह्मको विषयमा * आसक्ति छाडी कन ॥
त्यस्ताले नटका समान सबको * देखेर चाला यहाँ ।
बाँच्नेछन् जतिसम्म श्रेष्ठ सुख ती * भोग्छन् बुझे मन्‌महाँ॥३५॥
हे देवेन्द्र ! यहीं उदाहरण लौ * दिन्छु म यौटा सुन ।
भेटेथे पथमा सुहोत्र र शिवी * राजा दुवै क्वै दिन ॥
आफाफ्ना रथ रोकि बीच पथमा * छाड्दीनँ बाटो भनी ।
लागे गर्न विवाद आपुसमहाँ * ज्ञानी भए तापनी ॥३६॥
आई नारदले विचार दुइको * सुन्दा भएथे जब ।
केही बेर ति घोरिएर सहसा * हाँसेर बोले तब ॥
जो छौ श्रेष्ठ उदार धेर दुइमा * त्यै भूपतीले रथ ।
गर्दै आदर मित्रको खुशि भई * छाडी दिनेछन् पथ ॥३७
येती बात भनेर नारद मुनी * जानू भएथ्यो जब ।
बाटो छाडि दिए सुहोत्र नृपले * राजा शिवीको तब ॥
दीर्घायू बकको कुरा सुनिसकी * श्री इन्द्र खुशी भए ।
पाई उत्तर त्यो यथार्थ रुपले * ती स्वर्गमा गै गए ॥३८॥

राजा शिवि र अष्टकको कथा :—

पैह्ले ब्राह्मणको महात्म्य यसरी * धेरै सुनाई कन ।
मार्कण्डेयजिले गरे नृपतिको * सत्कीर्तिको वर्णन ॥
यौटा भूप शिवी उशीनरजिका * छोरा प्रतापी थिए ।
तिन्ले धर्म गरी त्रिलोक वशमा * आफ्नू गराईलिए ॥३९॥
भाई अष्टकका प्रसिद्ध वसुमान् * तिन्का प्रतर्दन् पनि ।
ख्याति प्राप्त अझै पनी पृथिविमा * छन् आत्मज्ञानी तिनी ॥
राजा अष्टकले गरे मख ठुलो * डाकी सबै ब्राह्मण ।
पौंचे भेट्न भनेर नारद, शिवी * त्यै यज्ञमा क्वै दिन ॥४०
दोगी आपुसमा प्रणाम सबले * सानन्द गर्दा भए ।
ज्ञानी नारदलाइ अष्टकजिले * यो प्रश्न सोधी लिए ॥
भाई तीन, शिवी तथा हजुरले * छौं पाँच हामी यहाँ ।
जान्छौं स्वर्ग मरी कुनै दिन भनी* पक्का छ यो मन्महाँ ॥४१
पुण्यक्षीण भएर यो पृथिविमा * को खस्छ पैह्ले ? मुनी !
हाँस्तै नारदले भने—नृपतिले * बिन्ती गरेको सुनी ॥
हे राजन् ! गुणको बयान तिमि नै* आफ्नू सदा गर्दछौ ।
सोही कारण स्वर्गबाट पहिले * याहाँ तिमी झर्दछौ ॥४२॥
मागेथें वसुमानको रथ स्वयं * मैले परीक्षा गरी ।
धेरै पल्ट म दिन्छु क्यै दिनपछी * भन्दै छले बेसरी ॥
गिर्नेछन् वसुमानजी तिमि पछी * त्यै हेतुले भूपति !
ठूलो पुण्य भए पनी दुखहरू * भोग्नन् यिनीले अति॥४३
जान्थे क्वै दिनमा चढेर रथमा * राजा प्रतर्दन् जब ।
चारोटा हय चार विप्रहरूले * माग्दा दिएथे सब ॥

धेरै नै पछितो गरे मनमहाँ * दर्बारमा गैकन ।
गिर्नेछन् यिनि विप्र-निन्दक हुँदा * तिन्कापछी क्वै दिन॥४४॥
गिर्दैनन् कहिले पनी शिवि भने * बस्छन् सदा स्वर्गमा ।
यिन्को पुण्य-प्रताप वर्णन गरी * को सक्छ संसारमा ॥
ब्रह्माजी द्विजरूपमा शिवि कहाँ * पुग्नू भयो क्वै दिन ।
राखी आसनमा सहर्ष शिविले * गर्दा भए पूजन ॥४५॥
बोले विप्र—मलाइ भोजन स्वयं * देऊ तिमी भूपति !
सोधेथे शिविले तयार गरुँ के * खाने कुरा सद्मति !
लागे भन्न ति विप्र-रूप विधिले * गर्छु परीक्षा भनी ।
तिम्रो एक छ बृहद्गर्भ सुत जो * अत्यन्त प्यारो पनी ॥४६



राजा शिविको महिमा

मारी त्यस्कन दाह-कर्म गरिल्यौ * पैह्ले तिमीले अनि ।
खाने वस्तु तयार पार खुशिले * राम्रो र मीठो पनि ॥

डुल्दैछु म यहीं वरीपरि तिमी * पर्खें नखाई कन ।
येती बात भनी गए र द्विजको * आज्ञा गरे पालन ॥४७॥
खाने वस्तु गरी तयार नृपले * खोजी गरे विप्रको ।
यौटा मानिसले भन्यो पथमहाँ * संवाद आपत्तिको ॥
आगो लाइ दिँदै समस्त पुरमा * छन् दुष्ट ती ब्राह्मण ।
जानू हुन्छ वृथा हजूर यसरी * तिन्लाइ खोज्दै किन ॥४८
त्यस्को दुःख कुनै नमानि मनमा * तिन्लाइ खोजी कन ।
लागे भन्न शिवी–'तयार छ प्रभो* गर्नू हवस् भोजन ॥'
बोले विप्र–'म खान्नँ खाउ तिमिनै* त्यो वस्तु हे भूपति !'
राजा खान भए तयार मनमा * शंका नमानी रति ॥४९॥
त्यो देखी द्विजले समाइ करमा * भन्दा भए सादर ।
राजन् ! श्रेष्ठ भयौ तिमी रिस जिती * मागेर लेऊ वर ॥
ब्रह्मा हूँ द्विज रूपमा तिमिकहाँ * आएँ परीक्षा लिन ।
इच्छा पूर्ण हुनेछ धर्म-पथको * गर्नू सदा पालन ॥५०॥
येती बात भनेर पुत्र शिविको * पारी दिए जीवित ।
राजा खूशि भए असाध्य नगिचै * देखेर प्यारो सुत ॥
आशीर्वाद र धर्म-कर्महरुको * शिक्षा दिई बेसरी ।
पाल्नूभो निज धाममा खुशि हुँदै * ब्रह्मा पनी त्यै घरी ॥५१॥
यस्ता भूपतिको सकिन्न कहिल्यै * सत्कीर्तिको वर्णन ।
लाखौं वर्ष सहर्ष स्वर्ग पुरिमा * बस्छन् शिवी गैकन ॥
धेरै यै रितका कुराहरू गरी * पाँचै जना सज्जन ।
गर्दै आपुसमा प्रणाम घरमा * फर्कें खुशी भैकन ॥५२॥

इन्द्रद्युम्न र दीर्घजीवी प्राणीहरूको वर्णन —

फेरी सोध्नुभयो युधिष्ठिरजिले * हे ब्रह्मज्ञानी मुने !
कोही छन् कि हजूरदेखि पहिले * संसारमा जन्मने ॥
मार्कण्डेय मुनी प्रसन्न मनले * हाँसेर भन्दा भए ।
यौटा मानिस स्वर्गबाट जिमिमा * पैह्ले गिरेका थिए ॥५३॥
इन्द्रद्युम्न म हूँ मलाइ तिमिले * सोधे चिन्यौ कि भनी ।
मैले ता तिमिलाइ जान्दिनँ अघी * देखीनँ कैह्ले पनी ॥
मेरो उत्तर यो सुनेर तिनिले * हाँसेर फेरी भने ।
अर्को वृद्ध हजूरदेखि पहिले * छन् की कतै जन्मने ॥५४॥
मैले फेरि भनें हिमालय महाँ * पक्षी छ यौटा सुन ।
जन्मेको पहिले मदेखि छ बुढो * के हेतु सोध्यौ भन ॥
घोडा रूप भएर केहि नभनी * बोकी मलाई पनि ।
पक्षीका नगिचै पुगेर तिनिले * त्यो रूप त्यागे अनि ॥५५
पक्षीलाइ पनी मलाइ सरि नै * सोधे तिनीले त्यहाँ ।
लाग्यो त्यो पनि भन्न चिन्दिनँ अघी* देखें र मैले कहाँ ? ॥
जान्ने एक छ नाडिजंघ बकुलो * बूढो म भन्दा पनि ।
पक्षीलाइ लिई गयौं नरपते * भेटौं कछुवा भनी ५६॥
इन्द्रद्युम्न ठुलो सरोवर महाँ * ती तीन पुग्दा भए ।
पैह्ले झैं अकुपार नाम कछुवा- * लाई सुध्याई लिए ॥
बोल्यो त्यो कछुवा नगीच तटमा * आएर हाँसी कन ।
इन्द्रद्युम्न नरेन्द्रलाइ म भनूँ * के हेतुले चिन्दिनँ ? ॥५७॥
गाई दान गरी सरोवर बन्यो * तिन्का खुरैले यहाँ ।
देख्नू हुन्छ हजूरहेरु अहिले * सानन्द बस्छु जहाँ ॥

पानी कुण्ड भरी भयो नृपतिले * सङ्कल्प गर्दा यहाँ ।
यिन्को धर्म र कर्म वर्णन गरी * सक्नेछु मैले कहाँ ! ॥५८॥
जस्को धर्म फिंजिन्छ स्वर्ग पृथिवी * चौतर्फ जैहले तक ।
त्यस्ले भोग्दछ स्वर्गका सुखहरू * सानन्द त्याहाँ तक ॥
सत्कीर्ति नृपको सहर्षक कछुवा * गर्दै थियो वर्णन ।
आए देवहरू विमान सँगमा * यौटा ठूलो लीकन ॥५९॥
तिम्रो कीर्ति ठूलो छ स्वर्गपुरिमा * जाऊँ भने देवले ।
पौंचाए बकुलो जहाँ अघि थियो * त्यै स्थानमा भूपले ॥
याहाँ छाडि मलाइ स्वर्ग खुशिले * जाँदा भए भूपती ।
धेरै नै मुनिले भने शुभ कथा * आनन्द मान्दै अति ॥६०॥
फेरि सोध्नुभयो युधिष्ठिरजिले * माहात्म्य दानादिको ।
योग्यायोग्य र दान-पात्र, जपको * गायत्रिको विप्रको ॥
वाणी शुद्धि र चित्त-शुद्धि सबको * विस्तारले वर्णन ।
गर्नू भो मुनिले र पाण्डवहरू * सुन्थे खुशी भैकन ॥६१॥

मधुकैटभ-युद्ध र बृहदश्वको कथा :—

इक्ष्वाकू कुलमा भए नरपते ! * राजा प्रतापी जति ।
तिन्मा श्री बृहदश्व नामक भए * ठूला अयोध्यापति ॥
एक्काईस सहस्र पुत्र नृपका * पैदा भएका थिए ।
रैती राजि गराइ भूपति सबै * आफ्ना तुल्याई लिए ॥६२
ठूलो दानव धुन्धु नामक कुनै * यौटा प्रतापी थियो ।
तीनै लोक जितेर घोर तपले * सन्ताप त्यस्ले दियो ॥
ठूलो प्वाल गराइ धुन्धु, नदिको * माटो भनी बस्तथ्यो ।
फेर्दा सास धुवाँ समान नभमा * झन् बालुवा उड्दथ्यो ॥६३

पापी दानवको उपद्रव सदा * त्यो स्थानमा चल्दथ्यो ।
त्यो देखेर असाध्य विघ्न तपमा * उत्तंकको पर्दथ्यो ॥
छोरालाइ दिएर राज्य खुशिले * आफू तपस्वी बनी ।
जान्थे श्री बृहदश्व घोर वनमा * गर्छु तपस्या भनी ॥६४॥



दुर्योधनको उद्धार

रोके भूपतिलाई त्यै बखतमा * उत्तंकजीले गई ।
मार्नू पर्दछ धुन्धुलाई नृपले ! * शस्त्रास्त्र सज्जित भई ॥
तिन्को विन्ति सुनेर रोकिन गए * राजा नजाने भई ।
जान्छु दानव मार्दछु भनि हिंडे * सम्पूर्ण छोरा लिई ॥६५॥
लागे गर्न प्रहार अस्त्र सबले * त्यस्लाइ ताकी जब ।
लाग्यो अग्नि उकेल्न क्रोधित हुँदै * निस्केर त्यो दानव ॥
एक्काईस सहस्त्र पुत्र नृपको * त्यै अग्निको तेजले ।
सारा भस्म भए डढेर, नृपती * हेर्दै थिए रोषले ॥६६॥

मार्‍यो पुत्र भनेर मन्त्रित ठुलो * ब्रह्मास्त्र हाने जब ।
पापी धुन्धु मर्‍यो डढीकन अनी * शान्ती भएथ्यो सब ॥
यो आख्यान सुनी युधिष्ठिरजिले * तत्काल शंका गरी ।
सोधेथे मुनिलाइ धुन्धु सुत हो * कस्को भनी त्यो घरी॥६७
मार्कण्डेय मुनी प्रसन्न मनले * त्यो धुन्धुको वंशको ।
लागे भन्न र सुन्दथे सब मिली * आख्यान त्यो वीरको ॥
राजन् ! सिन्धु बढ़ी जलामय भयो* सम्पूर्ण पृथ्वी भरी ।
सुत्नूभो जब कृष्णजी प्रलयमा *श्रीशेष शय्या गरी ॥६८॥



महाप्रलयमा मत्स्यावतार

नाभीबाट ति विष्णुको कमलको * जुन् पुष्प पैदा भयो ।
ब्रह्माजी तप गर्न त्यै कमलमा * बस्नू भएको थियो ॥
त्यै वेला मधु वीर कैटभ दुई * विख्यात पृथ्वी भरी ।
जन्मे दैत्य पराक्रमी प्रभुजिको * इच्छा हुनाले गरी ॥६९॥

हल्लाए दुइ दैत्यले कमलको * त्यो नाल पक्री जब ।
ब्रह्माजी मनमा डराउनु भयो * देखी दुवै दानव ॥
जान्नूभो हरिले तुरुन्त मनले * ब्रह्माजिको त्यो भय ।
थाल्नूभो अनि लड्न दैत्यहरूका * साम्ने पुगी निर्भय ॥७०
लड्दा ती दुइ दैत्यका सँगमहाँ * धेरै शताब्दी बित्यो ।
हारेनन् जब ती दुवै र हरिले * हाँसेर आज्ञा भयो ॥
योद्धाहो ! म भएँ प्रसन्न रणमा * मागेर लेओ वर ।
यो आज्ञा हरिको सुनेर पहिले * हाँसे दुवै दुच्छर ॥७१॥
लागे भन्न घमण्डमा डुबि दुवै * हेलाँ गरी हे हरि !
के दिन्छौ वरदान जीत रणमा * हाम्रो भयो यो घरी ॥
मागी लेउ बरू सहर्ष तिमी नै * इच्छा भएको वर ।
दिन्छौं हामीहरू प्रसन्न मनले * वाचा गरी सादर ॥७२॥
शेखीयुक्त कुरा सुनेर दुइको * आज्ञा भयो विष्णुले ।
राम्रो बात भन्यौ म माग्छु वर लौ * हे वीर ! आनन्दले ॥
मैले मान सकूँ तिमीहरु दुवै * -लाई मलाई वर ।
देओ यै, बलवान दानवहरू * मार्छु म चाँडो मर ॥७३॥
मानें त्यो छलयुक्त बात हरिले * आज्ञा भएको सुनी ।
लागे भन्न डराइ चिन्तित हुँदै * क्यै बेर मन्मा गुनी ॥
वाचा हानें गयौं वृथा छल गरी * मार्छौ भन्यौ तापनि ।
पानी छैन जहाँ उसै स्थलमहाँ * पर्नेछ मार्नू पनि ॥७४॥
तिन्को बात सुनी जलामय सबै * देखेर पृथ्वी भरी ।
खोजौं भूमि कहाँ भनेर मनमा * सोचेर सोही घरी ॥
आफ्नू जाँघ बढाइ बक्सनुभयो * राखेर त्यै जाँघमा ।
काट्नूभो जब चक्रले मरि दुवै * जाँदा भए स्वर्गमा ॥७५॥

हे राजन् ! मधुकैटभादि विरको * त्यो धुन्धु छोरो थियो ।
गर्नाले तप धेर, घोर बलमा * आफ्नू पिता झैं भयो ॥
मारेथे अघि भूपले समरमा * त्यो धुन्धुलाई जब ।
राजा हुन् यिनि 'धुन्धुमार' भनि यो * फैल्यो सुकीर्ति तब ॥७६॥

धर्म-व्याधा र कौशिक सम्वाद

सृष्टि स्थिति प्रलय दर्शन बार-बार ।
गर्नू भयो हरि कृपा हुन गै अपार ॥
सुन्छु मुनीश्वर कुनै पहिले बितेको ।
आज्ञा हवस् शुभ चरित्र पतिव्रताको ७७॥

मार्कण्डेय मुनी युधिष्ठिरजिले * विन्ती गरेको मुनी ।
लागे भन्न सहर्ष धर्म सतिको * सुन्नू हवस् लौ भनी ॥
थामी सत्य स्वधर्म पालन गरी * नारी सदाचारिणी ।
सेवामा पतिको सदा रत हुने * जो छन् सुशीला गुणी ॥७८

तिन्का निम्ति हुँदैन दुर्लभ कुनै * कार्यादि संसारमा ।
भन्छु एक कथा यसै विषयको * विख्यात सम्पूर्णमा ॥
योटा कौशिक नामका द्विज थिए * सत्पात्र ज्ञानी गुणी ।
राजन् ! क्वै दिनमा बसी रुखमनी * गर्थे तपस्या तिनी ॥७९॥

विष्टा एक बकुल्लिले गरिदिई * ती विप्रको माथमा ।
हेर्दैमा द्विजले डढीकन मरी * पक्षी त्यही स्थानमा ।
तिन्लाई मनमा घमण्ड हुनगो * सिद्धी भयो लौ भनी ।
भिक्षा माग्न गए तिनी नगरमा * ठूलो तपस्वी बनी ॥८०॥

'भिक्षान्देहि' भने पुगेर तिनले * क्वै विप्रको द्वारमा ।
पत्नीचाहिं टहल् गरेर पतिको * बस्थिन् सदा गेहमा ॥

देखी द्वारविषे खडा मकन यो * बस्छे नटेरी भनी ॥
हेर्थें क्रोध गरेर पक्षि सरि नै * मर्छें कि मन्दै तिनी॥८१॥



धर्म व्याधा र ऋषिको संवाद

भिक्षा लेउ भनेर कौशिकजिका * साम्ने ति नारी गइन् ।
के हेर्छौं. म त पक्षी हैन रुखको * हाँसेर भन्दी भइन् ॥
नारीको सुनी बात कौशिक निकै * आश्चर्य मान्दा भए ।
जान्यौ के गरि यो कुरा भन भनी* तिन्लाइ सोधीलिए ॥८२॥
लागिन् भन्न सती सहर्ष पतिको * हो चाकरीको फल ।
मैले जान्दछु स्वामिको टहलको * माहात्म्यले केवल ॥
फुर्सत छैन बुझाउने सब कुरा * धेरै मलाइ यहाँ ।
बुझ्ने मन् छ भने तिमी जनकको * त्यो राजधानीमहाँ ॥८३॥
जाऊ भेट तिमी प्रसन्न मनले * छन् धर्म-व्याधा त्यहाँ ।
भिक्षा, अर्पि दिएर सुन्दरि पनी * फर्की गइन् घरमहाँ ॥

बेच्थ्यो मासु बसेर त्यो पसलमा * सानन्द सोही घरी ।
व्याधाका नगिचै ति कौशिक पुगे * पत्तो लगाई वरी ॥८४॥
देखी तिन्कन धर्म-व्याध खुशिले * भन्दो भयो—ब्राह्मण !
भेट्ने मन्सुबले, मलाइ, सतिले * आयौ पठाई कन ॥
येती बात भनी लगेर घरमा * राख्यो दिई आसन ।
बोल्यो—सोध्नुहवस् मलाई मनको * इच्छा बुझाईकन ॥८५॥
बोले छक्क परेर कौशिक, कुरा * त्यस्ले भनेको सुनी ।
गर्छौ पालन धर्मको कसरि यो * व्यापार हो निर्घिनी ॥
तिम्रो योग्य भएन काम अरु क्यै* सोची विचारी गर ।
बेच्छौ मासु तिमी वृथा पसलमा * के कामका खातिर ॥८६॥
लागे व्याध बुझाइ भन्न द्विजले * शंका गरेको सुनी ।
हो यो कर्म असाध्य निन्दित भनी* जाने बुझे तापनी ॥
मैले त्याग्न सकीनँ वृत्ति कुलमा * आफ्नू चलेको भनी ।
मासू बेच्छु तथापि गर्दिनँ स्वयं * हत्या म कैल्हे पनी॥८७॥
दोटा वृत्ति छ श्रेष्ठ लोकभरिमा * प्रत्येक व्यक्तीकन ।
खेती उत्तम हो र मध्यम भयो * व्यापारको आर्जन ॥
खेतीमा पनि मर्दछन् पृथिविका * जीवादि नाना थरी ।
हत्या क्यै नगरेर बाँच्नु कसरी * जानुन् उनै श्रीहरि ॥८८॥
मासु बेचि सधैंभरी पसलमा * नाफा जती गर्दछु ।
दुःखीका र दरिद्रका दुखहरू * त्यै द्रव्यले टार्दछु ॥
केही अंश त देव-पितृहरूको * सत्कार्यमा त्यै धन ।
खाँचो पर्छ र खर्च टार्दछु सदा * शंका नमानीकन ॥८९॥
हो यो निन्दित और कुकर्म तपनी* कर्तव्य यस्को भनी ।
निन्दा गर्नु वृथा म ठान्दिनँ उचित्* यस्मा हजुर्ले पनि ॥

ढाक्छन् इज्जन दोष वस्त्र सरि भै * जो व्यक्ति संसारमा ।
त्यागी मोह घमण्ड लोभ र दया * जो गर्दछन् लोकमा॥९०
आफ्ना बान्धवको र मान्य जनको* सम्मान जो गर्दछन् ।
ब्रह्मन् ! श्रेष्ठ र शिष्ट व्यक्ति सबले* तिन्लाइ नै भन्दछन् ॥
सोधे कौशिकले र शिष्ट जनमा * देखिन्छ जो लक्षण ।
लागे भन्न ति धर्म-व्याध खुशिले * शिष्टादिको सद्गुण ॥९१
साँचो बोल्नु र क्रोध त्याग्नु गुरुको * गर्नू सदा चाकरी ।
गर्नू दान विशिष्टका गुणहरू * जान्नू हवस् राम्ररी ॥
वेद्को सार छ सत्यमा दृढ हुनू * त्यो सत्यको संयम ।
त्यस्को सार छ त्यागमा मन दिनू * हो शिष्टको लक्षण॥९२॥
गर्छन् जो उपकार शिष्ट जनले * आनन्द मान्दै अति ।
त्यस्को अंग छ न्याय पालन गरी * बस्ने त्यजी दुर्मति ॥
न्यायी धार्मिक हुन्छ, वेद मत हो * अन्याय गर्ने जति ।
जान्छन् नर्क मरेपछी जन तिनै * धेरै बताऊँ कति ॥९३॥
घोड़ा इन्द्रिय सारथी मन तथा * हो देहरूपी रथ ।
गर्नें जीव विहार हो रथि सरी * खोजेर नाना पथ ।
जो छन् शिष्ट ति सारथी मन स्वयं* रोकेर राखी कन ।
घोड़ा इन्द्रिय छाड्दछन् समरमा * सानन्द न्यायी जन ॥९४
त्यागी सौख्यहरू सबै विषयका * छन् न्यायमा जो स्थिर ।
नित्य श्रेष्ठ अखण्ड ब्रह्म सुखमा * बस्छन् तिनै सुन्दर ॥
घोड़ा इन्द्रिय सारथी मन सदा * मन्पर्दि जो छाड्दछन् ।
यो संसार समुद्रको भुमरिमा * पापी तिनै पर्दछन्॥९५॥
व्याधाको सुनि बात कौशिक भए * अत्यन्त आनन्दित ।
को हौ व्याध ! बताउ शूद्र तिमीता * कैनौ कि भन्छु म त ॥

यस्तो प्रश्न सुनी सकेर द्विजको * ती व्याध खूशी भई ।
लागे भन्न—थिएँ म पूर्वजुनिमा * क्षत्री, वनैमा गई ॥९६॥
खेल्थें नित्य शिकार सोहि वनमा * वस्थे तपस्वी मुनी ।
हानेथें शरले गएँ नगिचमा * त्यो लक्ष्य लिन्छु भनी ॥
गर्थे छट्पट कष्टले मुनि त्यहाँ * देखेर तिन्को स्थिति ।
मैले विन्ति गरें भएर मृगको * भ्रान्ती भयो यो गति ॥९७
पाऊँ यो अपराध माफ, यसरी * मैले नजान्दा भयो ।
मेरो बात सुनेर नेत्र मुनिको * आगो सरो देखियो ॥
बोले श्राप दिई मरेपछि कहीं * व्याधा भई जन्मलास् ।
मेरो अशिषले तँ पूर्वजुनिको * सारा कुरा सम्झलास्॥९८
व्याधा भैकन जन्मिएँ म अहिले * त्यै हेतु हे ब्राह्मण !
माताको र पिताजिको टहल नै * गर्छुँ खुशी भैकन ॥
सोही कारणले छ पूर्वजुनिको * सारा कुरा सम्झना ॥
बस्छु थामि गृहस्थ-धर्म मनमा * राख्दीनँ क्यै कामना ॥९९॥
माताको र पिताजिको हजुरले * आज्ञा नमानी कन ।
लाग्नूभो तपतर्फ फेरि हुनगो * दुःखी वृथामा मन ॥
गर्नोस् चाकरि बेसरी घर गई * माता-पिताको अब ।
सिद्धि मिल्छ अवश्य ब्रह्मपदको * खुल्नेछ बाटो सब ॥७००॥
व्याधाको सुनि यो कुरा द्विज गए * फर्केर आफ्नू घर ।
आज्ञा मानि सबै पिता-जननिको * सेवा सरे सादर ॥
पत्नीको पति झैं, सुपुत्रहरुको * माता-तिताका सरी ।
छैनन् पूज्य कुनै पनी पृथिविमा * सोचेर यो राम्ररी ॥१॥
बस्छन् जो घरमा गृहस्थ भइ ती * हुन् श्रेष्ठ हे भूपती ।
मर्नैपर्छ अवश्य जन्मन गई * राखेर यस्तो मति ।

चल्नू पर्दछ न्यायको पथ महाँ * अन्याय त्यागी जन ।
नारीको नरको स्वधर्म यही हो * कर्तव्य हे राजन ! ॥२॥

स्वामी कार्तिकको उत्पत्ति र अग्निवंशको वर्णन

यो विस्तार सुनेर धर्म-सुतले * सोधी लिए हे मुनी !
अग्निको शुभ वंश-वृद्धि कसरी * पैह्ले भएथ्यो भनी ॥
मार्कण्डेय मुनी युधिष्ठिरजिले * बिन्ती गरेको सुनी ।
लागे भन्न ति अग्निको कुल सबै * यस्तो छ यो-यो भनी ३॥
अग्नीका सुत अंगिरा मुनि अघी * ठूला तपस्वी थिए ।
तिन्को तेज बढेर अग्नि सहसा * निस्तेज झैं देखिए ॥
आफ्नू दुर्गति अंगिरासित भने * श्री अग्निले सादर ।
मेरो काम बनेर अग्नि तिमि नै * सम्पूर्ण गर्ने गर ॥४॥
अग्नीको सुनी बात खिन्न मनले * श्री अङ्गिराले भने ।
मेरो तेज बढी वृथा हजुरले * के हेतु चिन्तित हुने ॥
पैह्ले पुत्र भनी मलाई खुशिले * स्वीकार गर्नोस् बरू ।
त्यागी बक्सनुहोस् हजूर मनका * सम्पूर्ण चिन्ताहरू ॥५॥
मेरो तेज सबै म दिन्छु खुशिले * स्वीकार गर्नोस् अब ।
आफ्नू काम पनी स्वयं हजुरले * गर्नोस् अघी झैं सब ॥
बिन्ती यै रितका गरे अरू वनि * श्री अङ्गिराले जब ।
थामे काम ति अग्निले खुशि भई * पैह्ले सरीकै सब ॥६॥
छोरी आठ र सात पुत्र मुनिका * क्यै कालमा जन्मिए ।
जेठा पुत्र बृहस्पती नरपते ! * श्री अङ्गिराका भए ॥
छोरा हुन् छ जना बृहस्पतिजीका * जन्मे ति तारा तिर ।
बढ्दैगो शुभ अग्निवंश यसरी * फैलेर चारैतिर ॥७॥

छोरी आठ असाध्य सुन्दरिहरू * जो अंगिराका थिए ।
आफ्नू वंश बढाइ लोकभरिमा * विख्यात भै फैलिए ॥
गर्छन् भोजन हव्य-कव्यहरुको * दिन्छन् जहाँ आहुति ।
यिन्को वंश ठुलो छ वर्णन गरौं * हे भूप ! मैले कती ॥८॥
पत्नी सात थिए ति सप्तऋषिका * अत्यन्त नै सुन्दरी ।
अग्नी मोह भएर आफ्नु वशमा * पार्नै इरादा गरी ॥
धेरै यत्न गरे तथापि नसकी * सन्ताप मानी कन ।
स्वेच्छाले तप गर्न घोर वनमा * अग्नी गए क्वै दिन ॥९॥
स्वाहा मोहित अग्निको स्वरुपा * पैह्ले भएकी थिइन् ।
सुन्दा त्यो समचार—दक्ष-दुहिता * अत्यन्त खुशी भइन् ॥
पौंचिन् अग्निकहाँ ति सप्तऋषिका * प्रत्येक पत्नी बनी ।
अग्निका सँगमा समागम गरिन् * छु काम-पीडित् भनी ॥१०
सातौंपल्ट अरुन्धती दृढ मती * पक्का हुनाले सती ।
स्वाहाले सकिनन् स्वरूप तिनि झैं * पार्नै लिईं दुर्मति ॥
अग्नीले छल त्यो बुझे नगिचमा * स्वाहा पुगीथिन् जब ।
स्वाहालाइ भने—कुकर्म यसरी * कैह्ले नगर्नू अब ॥११॥
अग्नीलाइ छली छपल्ट तिनिले * जो वीर्य पैह्ले लिइन् ।
यौटा अमृत कुण्डमा लगि सबै * तत्काल फाली दिइन् ॥
पर्दा अमृत कुण्डमा मथिन गो * त्यो वीर्य आफै जब ।
स्वामी कार्तिक जन्मिए रवि सरी * फैलाउँदै गौरव ॥१२॥
लामा बाह्र भुजा र षट्मुख हुने * पैदा भए बालक ।
यो सुन्दा मनमा डराउन गए * श्री वृत्र - संहारक ॥
हानेथे शिशुलाइ वज्र रिसले * मार्छु भनी इन्द्रले ।
तिन्ले वज्र निली दिए उदरमा * पक्रे र आनन्दले ॥१३॥

स्वामी कार्तिकजी बढी दिन-दिनै * सानन्द ठूला भए ।
ठूलो शंख फुकेर पर्वतहरू * धेरै ढलाई दिए ॥
तीनै लोक प्रचण्ड अग्नि शरले * पारी दिए व्याकुल ।
लाग्यो डढ्न जसै चतुर्दिक पर्‍यो * साह्रै ठूलो खल्बल ॥१४॥
भूमी पारी विदीर्ण घोर स्वले * चारै दिशा हल्चल ।
आए इन्द्र डराउँदै नगिचमा * देखेर तिन्को बल ॥
बाबू ! रोक छिटै उपद्रव ठुलो * देखिन्छ चारैतिर ।
जाऊ इन्द्र वनेर स्वर्ग पुरिमा * रक्षा सबैको गर ॥१५॥
स्वामी कार्तिकले ति स्वर्गपतिको * बिन्ती सुनी सादर ।
लागे भन्न-नमान केहि मनमा * हे इन्द्र ! मेरो डर ॥
वार्ता कार्तिकको सुने अभयको * श्री इन्द्रजीले जब ।
लागे भन्न सहर्ष फौज भरिका * सेनापती हौ अब ॥१६॥
तिन्लाई अभिषेक दीकन गए * श्री इन्द्रजी स्वर्गमा ।
स्वामी कार्तिकको सुकीर्ति फिंजियो* सम्पूर्ण संसारमा ॥
केशी दानवबाट खोसि पहिले * कन्या लगेका थिए ।
सोही कार्तिकलाइ पत्निरूपमा * देवेन्द्रले सुम्पिए ॥१७॥
राजन् ! माहिष नामको अति बली* यौटा थियो दानव ।
त्यस्ले लोक भरी उपद्रवहरू * थाल्यो अनेकौं तब ॥
भागे देव डराइ इन्द्र पदमा * त्यै दुष्ट बस्तो भयो ।
हुन्छु ईश्वर जित्तछु शिव भनी * कैलाश खोल्दै गयो ॥१८॥
देखी दुर्गति दुष्टता महिषको * उत्पात धेरै थरी ।
स्वामी कार्तिकले गएर सहजै * मार्दा गयो त्यो मरी ॥
पाल्नूभो शिवजी प्रसन्न मनले * तत्काल त्यै स्थानमा ।
स्वामी कार्तिक नाम हुन्छ यसको * विख्यात संसारमा ॥१९॥

मेरै रूप अखण्ड अग्नि पनि हुन् * हे देव ! त्यै कारण ।
हो मेरै सुत वीर कार्तिक भनी * जानुन् सबै सज्जन ॥
यो आज्ञा शिवको सुनी सुरहरू * अत्यन्त खुशी भए ।
आशीर्वाद दिएर शम्भु खुशिले * कैलाश फर्की गए ॥२०॥
स्वामी कार्तिकले अरू पनि सबै * मारी दिंदा दानव ।
तिन्को सादर गर्दथे स्तुति पनी * द्यौता हरूले तब ॥
स्वाहा भेट्न भनेर कार्तिक कहाँ * जाँदी भइन् क्वै दिन ।
तिन्को जन्मकथा प्रसन्न मनले * सारा गरिन् वर्णन ॥२१॥
अग्नीले जसरी मलाइ सँगमा * राख्नन् खुशी भैकन ।
गर्नू पर्दछ यत्न सोहि तिमिले * सोचेर हे सज्जन !
पाई पुत्र तिमी समान म सहूँ * संकष्ट व्यर्थै किन ।
आमाको सुनि बात कार्तिकजिले * भन्दा भए त्यै क्षण ॥२२॥
हे आमा ! अबदेखि होम जनले * गर्नन् जती कुण्डमा ।
'स्वाहा' नाम लिएर आहुति दिनन् * सम्पूर्णले लोकमा ॥
सुन्दा नाम हजूरको घरि - घरी * अग्नी हुनन् लज्जित ।
सोही कारणले भई विवश ती * बस्नन् हजुरै सित ॥२३॥
चिन्ता केहि नमानिबक्सनुहवस् * मैले दिएँ यो वर ।
इच्छा पूर्ण अवश्य हुन्छ मनमा * पर्दैन मान्नू डर ॥
आमालाइ प्रसन्न पारि, शिवको * गर्दै रही चाकरी ।
ठूलो कीर्ति फिंजाइ कार्तिक रहे * कैलाशमा राम्ररी ॥२४॥
शंभूका गणमा स्वयं हुन गए * यी मुख्य सेनापति ।
आफ्नू पुत्र समान स्नेह मनमा * गर्थिन् सदा पार्वती ॥
यिन्को नाम तथा चरित्रहरूको * जो गर्दछन् सम्झना ।
बाधा क्वै ग्रहको हुँदैन मनको * पुग्ला सबै कामना ॥२५॥

द्रौपदी-सत्यभामा संवाद

वैशम्पायनले भने नरपते ! * जम्मा भाई पाण्डव ।
गर्थे आपुसमा कुरा बसि त्यहीं * पुग्नू भयो माधव ॥
चर्चा धर्म तथा पुराण हरुको * सत्कर्मको गर्दथे ।
पाँचै भाइ तथा मुनी द्विज ऋषी * आनन्दमा पर्दथे ॥२६॥
पांचालीमित कृष्णकी सुमहिषी * श्री सत्यभामा पनि ।
एकान्त स्थलमा बसीकन कुरा * सानन्द गर्थिन् तिनी ॥
हे कृष्णा ! सब इन्द्र तुल्य बलिया* छन् पाँच तिम्रा पति ।
राजी छन् तिमिदेखि पाँच कसरी * के हेतु हो हे सती ॥२७॥
यस्मा के छ रहस्य मन्त्र अथवा * हो तन्त्रको यो बल ।
जे हो कारण त्यो बताउ मनमा * केही नराखी छल ॥
सिक्छु मन्त्र र सिद्ध गर्छु बरु क्यै * झर्को नमानी कन ।
स्वामीलाइ म राख्दथें वशमहाँ * आफ्नू तिमी झैं सुन ॥२८
तिन्को वात सुनेर द्रौपदि निकै * आश्चर्य मानी कन ।
लागिन् भन्न सहर्ष उत्तम कुरा * तिन्को बुझाई मन ।
हे भामा, तिमिले भन्यौ जति कुरा* ऐह्ले मलाई यहाँ ।
यस्तो कर्म कुलीन नारि कसरी * गर्छन् र सक्छन् कहाँ॥२९
पत्नी श्री हरिकी भएर तिमिले * ठट्टा गरेको सुनी ।
माहूँ छक्क परें, भनिन् कसरि यो * निर्धक्क यिन्ले भनी ॥
स्त्रीले मन्त्र टुना गरेर वशमा * पार्नें कुरा क्यै गरी ।
पाए सुन्न भने अवश्य पतिले * त्यागी दिनन् सुन्दरी ॥३०
गर्दा मन्त्र टुना कदापि वशमा * हुन्नन् पती यो कुरा ।
गाँठो पारिलिनू सखी ! मनमहाँ * विश्वास मानी पुरा ॥

मेरा पाँच पती मदेखि खुशि छन् * जुन् हेतुले त्यो पनी।
भन्छु सत्य कुरा नढाँटि मनमा * सन्तोष होला सुनी ॥३१
स्वामीको प्रिय वा छ अप्रिय भने * कस्तै भए तापनी।
मैले ठान्छु सदा प्रियाप्रिय त्यही * कर्तव्य आफ्नू भनी॥
स्वामी बाहिकको कुनै पुरुषमा * जाँदैन मेरो मन।
सेवा गर्दछु प्रेमले म पतिको * सन्तोष मानीकन ॥३२॥
त्यागी क्रोध घमण्ड आदि मनको * सौता भए तापनी।
गर्छु आदर, गर्दछन् प्रिय पती * यिन्लाइ प्यारो भनी॥
आज्ञामा पतिको सदा रुजु रही * गर्नै हुँदा चाकरी।
सेवाले पति पाँचलाइ वशमा * राख्छु म हे सुन्दरी!॥३३॥
मैले झैं पतिको सदा जतनले * जो गर्दछन् चाकरी।
बस्नेछन् पतिकी बनी प्रियतमा * सान्द ती सुन्दरी॥
यस्तो बात सुनेर कृष्ण-महिषी * भन्दी भइन् हे सती!
तिम्रो अर्ति सुनेर आज मनमा * आनन्द लाग्यो अति॥३४
रानीका सँगमा बसी हरि त्यहाँ * सानन्द केही दिन।
पाँचै पाण्डवलाइ अर्ति दिनुभो * तिन्को बुझाई मन॥
फर्के क्यै दिनमा चढेर रथमा * श्री कृष्ण द्वारावती।
मार्कण्डेय मुनी बिदा हुनुभयो * आनन्द मान्दै अति ॥३५

चित्रसेन गन्धर्व द्वारा दुर्योधनको दुर्गतिः—

वैशम्पायनले भने नरपते! * त्यस्का पछी क्वै दिन।
बस्थे दुःख सहेर पाण्डवहरू * सन्ताप मानी कन॥
यौटा ब्राह्मणबाट द्वैत वनमा * तिन्ले डुलेको कुरा।
सुन्दामा धृतराष्ट्र भूपति पनी * दुःखी भएथे पुरा ॥३६॥

त्यो सम्चार सुनी सुयोधन भने * अत्यन्त खुशी भए ।
हेर्छु कष्ट भनेर पाण्डव कहाँ * जाने इरादा लिए ॥
सल्लाहा गरि वीर कर्ण, शकुनी * मामा र दुःशासन ।
आज्ञा श्री धृतराष्ट्रको पनि लिए * बिन्ती चढ़ाईकन ॥३७॥
आफ्नू गोरवको प्रदर्शन गर्छु * गर्छु म त्याहाँ भनी ।
श्री दुर्योधनले लिईकन हिंडे * सेना र रानी पनी ॥
यौटा श्रेष्ठ तलाउको वरिपरी * डेरा गरी सुन्दर ।
बस्ने पाण्डव वीरकै नगिचमा * गर्दा भए तर्खर ॥३८॥
गर्थे आइ विहार सोहि शरमा * गन्धर्व श्री चित्रसेन् ।
श्री दुर्योधनको पनी हुन गयो * त्यै स्थानमा बस्न मन् ॥
अन्तै जाउ तिमी म बस्तछु यहाँ * तिन्ले भनेथे जब ।
लागे भन्न ति चित्रसेन रिसले * रन्केर हे कौरव ! ॥३९॥
फर्की जा घरमा ससैन्य अहिल्यै * इच्छा भए बाँच्नको ।
तिन्को बात सुनी सुयोधन पनी * इच्छा गरी लड्नको ॥
आफ्ना सैन्यभरी दिए हुकुम लौ * गन्धर्व मारु भनी ।
लागे लड्न गएर क्रोधित भई * सम्पूर्ण सेना पनी ॥४०॥

गन्धर्वलाइ रणमा सब तर्फ घेरी ।
मारे प्रशस्त सब सैनिकले नटेरी ॥
देखेर त्यो स्थिति स्वयं गइ चित्रसेन ।
पारी दिए सकल सैनिक छिन्न-भिन्न ॥४१॥
शस्त्रास्त्र सज्जित बनीकन खूब धीर ।
आई पुगे समरमा अनि कर्ण वीर ॥
गन्धर्वलाइ पहिले त निकै लतारे ।
श्री चित्रसेन विरले सहजै लघारे ॥४२॥

भागे जसै समरबाट ति कर्ण वीर ।
सेना भए सकल कौरवका अधीर ॥
दुर्योधनादि सब भाइ अघी सरेर ।
वर्षा गरे सलह झैं गरि बाण घेर ॥४३॥
गन्धर्वका सकल सैनिक छानि मारे ।
शेखी घमण्ड अरिको रण - मध्य झारे ॥
देखेर त्यो स्थिति स्वयं नगिचै गएर ।
से भाइ कौरवहरू वशमा गरेर ॥४४॥
पाता कसेर सबलाई लडाइ हाले ।
रानीहरू कन पनी सब बाँध्न थाले ॥
रानी र कोहि अरु मानिस एकसाथ ।
बाँधी दिए सकल पारि मिलाइ साथ ॥४५॥
शेखी इज्जत कौरवादि विरको * बाँधेर पैह्ले हरी ।
हेर्थे गै मुखना नगीच सबको * हाँसेर ठट्टा गरी ॥
श्री दुर्योधनलाइ बन्धन महाँ * पारेर गन्धर्वले ।
आँटे इन्द्रकहाँ पुऱ्याउँछु भनी * लैजान आनन्दले ॥४६॥
लागे गर्न पुकार उच्च स्वरले * चिच्याइ दुर्योधन ।
रक्षा गर्नुहवस् युधिष्ठिर स्वयं * दौडेर आई कन ॥
योद्धा अर्जुन भीमसेन संगमा * शस्त्रास्त्र आफ्ना लिई ।
रक्षा गर्न भनेर आउ अहिल्यै * मेरो दयालु भई ॥४७॥
श्री दुर्योधनले बचाउन भनी * बिन्ती गरेको सुनी ।
डाकी भाइहरू युधिष्ठिरजिले * अत्यन्त दुःखी बनी ॥
लागे भन्न गई छुटाउनुपऱ्यो * छन् कष्टमा कौरव ।
यस्ले हुन्छ अवश्य लोकभरिमा * हाम्रो ठुलो गौरव ॥४८॥

दाजूको सुनि यो कुरा रिस गरी * श्री भीम भन्दा भए।
पापी कौरवले सहर्ष पहिले * दुष्कर्म गर्दै गए॥
सोही पाप फलेर यो बखतमा * पक्रेर गन्धर्वले।
आँटे लान भनेर चिन्तित हुनू * ठान्छु वृथा नाथले ॥४९॥
ठूलो यत्न गरेर हामिहरूले * जुन् काम गर्नू थियो।
सोही काम उठेर दैव सहजै * पूरा स्वयं गर्दियो॥
हेरौं कष्ट भनेर हामिहरुको * आए यहाँ कौरव।
पाए चोट ठुलो गरे असल यो * अन्धर्व आई सब ॥५०॥
पापीलाइ छुटाउने हजुरले * पर्दैन चिन्ता लिन।
रक्षा गर्न भनेर दुष्ट जनको * आज्ञा भएको किन ?
खाँचो छैन हजूरलाइ यसमा * तिन्ले भनेथे जब।
आज्ञा गर्नुभयो युधिष्ठिरजिले * फेरी बुझाई तब ॥५१॥
छौं पाँचै जन मात्र आपुसमहाँ * हे भाइ ! हामी तर।
भाई हामि सबै त एक सय पाँच् * छौं अन्यका खातिर॥
शेखी इज्जत जो लिए यि कुरुको* हाम्रै अगाडी महाँ।
हाम्रा निम्ति हुनेछ दुःख अरु के * यो देखि बर्ता यहाँ ॥५२॥
गर्छौं आपुसको कचिङ्गल स्वयं * हामी हरू निर्णय।
चारै भाइ गई छुटाउ पहिले * बन्धूहरूको भय॥
गर्छौं क्रोध वृथा ति कौरवहरू * संकष्टमा छन् भनी।
रक्षा सज्जन गर्दछन् बखतमा * पापी भए तापनी ॥५३॥
शिक्षा यै रितको युधिष्ठिरजिले * धेरै दिनू भो जब।
आफ्नो शस्त्र लिएर तत्पर भए * चारै जना पाण्डव॥
रोकेथे पथ चित्रसेन विरको * साम्ने पुगी अर्जुन।
योद्धा भीम गदा लिईकन ठुलो * गर्दा भए गर्जन ॥५४॥

तिन्को गर्जनले तुरुन्त रणमा * गन्धर्व फिर्दा भए।
एक्लै भीम लडेर सैनिहरू * छानेर मार्दै गए॥
हुन्थ्यो अर्जुन-चित्रसेन दुइको * संग्राम अर्को तिर।
पार्थै घायल ती परस्पर दुवै * हानेर तीखा शर॥५५॥



सर्परूप नहुषले भीमलाई पक्रेको

केही बेर लडेर टिक्न नसकी * गन्धर्वका सैनिक।
थाले भाग्न, थिएन त्यो बखतमा * तिन्को कुनै रक्षक॥
लड्थे अर्जुन चित्रसेन रणको * देखाउँदै कौशल।
गर्जन्थे दुइ वीर घोर रवले * थर्काउँदै त्यो स्थल॥५६॥
गर्थे आपुसमा प्रहार रिसले * शस्त्रास्त्र नाना थरी।
पारे घायल चित्रसेन विरको * शेखी हरी बेसरी॥
पारी बन्धनमा युधिष्ठिरजिको * साम्ने गरे हाजिर।
लागे काम्न ति चित्रसेन मनमा * लागेर साह्रै डर॥५७॥

यस्तो फेरि नगर्नु वीर ! कहिले * आँटेर दुस्साहस ।
फर्की जाउ तिमी सहर्ष घरमा * आनन्द मानी बस ॥
येती बात सुनेर स्वर्ग पुरिमा * गन्धर्व राजा गए ।
सारा कौरवको युधिष्ठिरजिले * बन्धन् फुकाई दिए ॥५८॥
यो संवाद सुनेर इन्द्र मनमा * अत्यन्त खुशी भए ।
जो गन्धर्व मरे, सुधा छरि सबै * -लाई बचाई दिए ॥
श्री दुर्योधनलाइ धर्म-सुतले * आज्ञा भयो सादर ।
बाबू कौरवहो ! विषाद नगरी * सानन्द जाओ घर ॥५९॥
रैती राजि गराउनू समरमा * देखाउनू साहस ।
गर्नू शासन धर्मपूर्वक सदा * फैलाइ आफ्नू यश ॥
यस्तो फेरि नगर्नु दुर्मति लिई * हे वीर ! दुस्सासन ।
जाऊ सादर हस्तिनापुर महाँ * आनन्द मानी बस ॥६०॥

दुर्योधनको पश्चात्ताप—

वाणी रुद्ध भएर बोल्न नसकी * रोएर दुर्योधन ।
पत्नी भाई सबै लिएर सँगमा * फर्कें दुखाई मन ॥
यौटा सुन्दर स्थानमा पुगि बसे * विश्रामका खातिर ।
बोले कर्ण पुगेर सोहि स्थलमा * गर्दै ठुलो आदर ॥६१॥
लागी चोट प्रशस्त देहभरिमा * मेरो त सातो गयो ।
भागें प्राण बचाइ, भेट पनि यो * सौभाग्यले नै भयो ॥
पाएँ भेट न हजूरलाइ यसरी * आनन्दका साथमा ।
हाम्रो जीत भएछ के गरि सुनौं * गन्धर्वको युद्धमा ॥६२॥
यस्तो वात सुनेर कर्ण विरको * दिक्दार मानीकन ।
रक्षा पाण्डवले गरे जसरि त्यो * सारा गरी वर्णन ॥

हाम्रा निम्ति लडेर पाण्डु-सुतले * उद्धार गर्दा त्यहाँ ।
साह्रै लज्जित छु म कर्ण ! अहिले * त्यो तापले मन्महाँ ६३॥
ती गन्धर्व बरू मलाइ रणमा * मार्थे त राम्रो थियो ।
तिन्ले मुक्ति दिलाउँदा त सहजै * इज्जत् र शेखी गयो ॥
पानी अन्न त्यजी म मर्दछु बरू * फर्कन्नँ त्यो राज्यमा ।
पर्नू हुन्छ पिता पनी सुनि कुरा * अत्यन्त सन्तापमा ॥६४॥
दिन्छु राज्य सहर्ष जाउ घरमा * हे भाइ ! दुःशासन ।
रैती राजि गराइ गर्नु तिमिले * साम्राज्यको शासन ॥
यस्तो बात भनेर भाइकन ती * बोल्नै सकेनन् जब ।
ती दुःशासनले भने कर दुवै * जोरेर दाजू ! अब ॥६५
मैले गर्दिनँ राज्य यो हजुरले * सुम्पी दिए तापनी ।
हाम्रो पालन गर्नुपर्दछ सदा * राजा हजूरै बनी ॥
यस्तो बात सुनेर भाइ दुइको * श्री कर्णले सादर ।
लागे भन्न हजुरले हुनु वृथा * ठान्ठु म चिन्तातुर ॥६६
ठान्नू पर्छ हजूरले मनमहाँ * ती पाँच हुन् रैयत ।
गर्छन् रैयतले सदा जतनले * राजाहरूको हित ॥
सोही पाण्डवले गरे किन हुनू * यो बातमा चिन्तित ।
चिन्ता त्याग गरेर जाउँ घरमा * फर्केर भन्छु म त ॥६७॥
लागे भन्न बुकाइ वीर शकुनी * हे भूप ! दुर्योधन !
चिन्ता त्याग गरेर धैर्य मनमा * गर्नू हवस् धारण ॥
रक्षा पाण्डवले गरे भनि वृथा * दुःखी भएको किन ?
त्यस्को प्रत्युपकारमा बरु दिनोस् * फिर्ता जितेको धन ॥६८॥
सम्झाए सय भाइले र अरुले * आएर बिन्ती गरी ।
मानेनन् दृढ नै सुयोधन रहे * चिन्ता गरी बेसरी ॥

पानी अन्न त्यजेर मर्दछु भनी * बाँधेर पद्मासन ।
सारालाइ विदा दिईकन बसे * ती वीर दुर्योधन ॥६९॥
हे राजन् ! समचार त्यो जब सुने * पातालका दैत्यले ।
खाई हार ति देवतासँग अघी * बस्थे गइ धैर्यले ॥
तिन्ले यज्ञ गरेर एक बलियो * कृत्या पठाईकन ।
कृत्याका सँग रातमे पुगि गए * पाताल दुर्योधन ॥७०॥
राखे सहर्ष दिइ आसन सामुमाहाँ ।
सम्झाउने मन गरीकन झट्ट त्याहाँ ॥
जोरेर हात सब दैत्य अघी सरेर ।
थाले बुझाउन सुयोधनलाइ धेर ॥७१॥
राजन् ! पाप हुँदैन घोर अरु क्यै * यो आत्महत्या सरी ।
जानोस् यो हठ त्यागि वीर ! घरमा * के हुन्छ चिन्ता गरी ॥
जस्को देह छ वज्र झैं, नृपहरु * छन् श्रेष्ठ जस्कातिर ।
त्यस्ता वीर भई वृथा हजुरले * के हेतु मान्ने डर ? ॥७२॥
द्रोणाचार्य र भीष्मको मन पनी * फर्काइ स्वामीतिर ।
मार्नेछन् दानव दैत्यले समरमा * ठूला अनेकौं विर ॥
चिन्ता गर्नु वृथा छ, जुन् वखतमा * संग्राम होला ठुलो ।
मेरा दानव वीरले अरि जती * पारी दिनेछन् धुलो ॥७३॥
देह त्यजेपछि त मिल्छ कहाँ सुयोग ।
गर्नु हवस् घर गई सुख राज्य भोग ॥
जन्म्यो मरेर नरकासुर कर्ण वीर ।
जान्नू हजुरले छ असाध्य धीर ॥७४॥
मार्नेछ पार्थकन निश्चय साथ भन्छ ।
संग्राममा विजय हुन्छ भनेर ठान्छ ॥

अर्ति दिएर सब स्वप्न समान त्याहाँ ।
राखे लगेर अघि झैंउहि ठाउँ माहाँ ॥७५॥

कर्णको चिग्विजय सुन्दा युधिष्ठिरको चिन्ता

प्रातःकाल उठी मतो गरि सबै * जम्मा भई कौरव ।
सम्झाए कुरुराजका वरिपरी * घेरेर धेरै जब ॥
रात्रीको सब बात सम्झि मनमा * क्ये धैर्य राखी क्न ।
जिद्दी त्याग गरी फिरेर पुरमा * आए ति दुर्योधन ॥७६॥
लागे भन्न गरेर छेड़ यि कुरा * तिन्लाई श्री भीष्मले ।
बाबू ! हुन्छ अनेक ताप मनमा * उत्पन्न दुष्कर्मले ॥
मैले ता पहिल्यै भनें वन महाँ * पर्दैन जानू भनी ।
मानेनौ तिमिले कुरा हित हुने * राम्रो थियो तापनी ॥७७
जस्का साथ लडेर कर्ण रणमा * हारेर भाग्दा भए ।
त्यस्लाई जिति पार्थले वशमहाँ * आफ्नू गराई लिए ॥
गर्दैछौ तिमि कर्णको भर सदा * अत्यन्त ठूलो तर ।
धूलो झैं पनि पार्थका चरणको * यो छैन, हो दुच्छर॥७८॥
मेरो अर्ति लियौ भने अझ पनी * साम्राज्य होला स्थिर ।
फिर्ता राज्य दिएर पाण्डु सुतको * सानन्द सन्धी गर ।
निन्दा यै रितको गरे अरु पनी * श्री भीष्मले बेसरी ।
श्री दुर्योधन भन्न केहि नसकी * जाँदा भए त्यै घरी ॥७९॥
तिन्को लागि पछाडि कर्ण शकुनी * मामा र दुशासन ।
संझाए अघि झैं गई महलमा * सन्तोष पार्ना क्न ॥
लागे भन्न बसेर कर्ण नगिचै * धेरै दिई सान्त्वना ।
गर्दैनन् अब भीष्मले हजुरको * राम्रो हुने कामना ॥८०॥

मैले वात सहूँ कती घरी-घरी * निन्दा गरेको अब ।
सामर्थी भई सुन्दछ्छ हजूरका * निम्ती म निन्दा सब ॥
राजा पाण्डवले जिते अघि जती * चारै जनालै मिली ।
ती राजा सबलाइ जित्तछु स्वयं * चौतर्फ एक्लै डुली ॥८१॥
पैह्ले भूपहरू जितेर वशमा * पाछ्रि हजुर्को अनि ।
माछ्रुँ अर्जुनलाइ निश्चय छ यो * हो शत्रु ठूलो भनी ॥
यस्मा संशय छैन हे नरपते * विश्वास मान्नू हवस् ।
देखी अद्भुत कर्म भीष्म पछितो * गर्नन् भनी मान्नुहोस्॥८२
धेरै यै रिनको प्रलाप सरिको * वार्ता सुनी कर्णको ।
श्री दुर्योधनको प्रसन्न मन भो * आँसू बग्यो हर्षको ॥
बोले—कर्ण तिमी समान अरुले * गर्दैन मेरो हित ।
जाऊ गर्न भनेर दिग्विजय लौ * सानन्द सेनासित ॥८३॥
चारै तर्फ गएर भूपति जिती * फर्की जसै आउला ।
स्यावासी तिमिले उसै वखतमा * बाबू ! ठुलो पाउला ॥
श्री दुर्योधनले प्रसन्न मनले * आज्ञा गरेको सुनी ।
यात्रा मंगलको गरीकन हिंडे * शस्त्रास्त्रसज्जित बनी ॥८४
आफ्ना फौज लिई पुगे द्रुपदको * पैह्ले ठुलो राज्यमा ।
तिन्लाई जिति फेरि उत्तर दिशा * लागे ति क्यै कालमा ॥
अङ्ग-वङ्ग कलिङ्ग शुण्डिक तथा * साना ठुला देशका ।
राजा वीर पराक्रमी सब जिते * तिन्ले गई पूर्वका ॥८५॥
रुक्मीलाइ जितेर कर्ण विरले * यात्र गरे पश्चिम ।
पारे आफ्नु गएर वृष्णि कुलका * राजाहरू उत्तम ॥
सागालाइ जितेर कर्ण खुशिले * जाँदा भए दक्षिण ।
पाँची केरल देशका वश गरे * सम्पूर्ण राजागण ॥८६॥

चारै तर्फ डुलेर भूपतिहरू * प्रत्येक लाई जिती ।
फर्कै कर्ण भनेर स्वागत गरे * आनन्द मान्दै अति ॥
ल्याएथे धन जो कर - स्वरुपमा * तिन्ले असूली कन ।
श्री दुर्योधनका लगी चरणमा * गर्दा भए अर्पण ॥८७॥
गर्दै आदर कर्णको कुरुपती * अत्यन्त खुशी थिए ।
यौटा उत्तम विष्णु-याग धन त्यै * पाएर गर्दा भए ॥
ठान्थे पाण्डव झैं भएँ अब भनी *त्यै हेतु दुर्योधन ।
त्यो सम्चार सुनी युधिष्ठिरजिको * चिन्तित् भएथ्यो मन ॥८८
सुन्दा श्रेष्ठ प्रभाव कर्ण विरको * मान्दै थिए ती डर ।
आए व्यास मुनी र पाण्डुसुतले * राखे गरी आदर ॥
देखी चिन्तित श्री युधिष्ठिर तथा * नातीहरू व्यासले ।
लागे भन्न बुझाउँदै हुन गयो * सन्ताप के हेतुले ॥८९
हे बाबू ! सुख दुःख यो पृथिविमा * भोग्छन् सबैले तर ।
ठान्नू पर्छ समान केहि दुखको * मान्दै नमानी डर ॥
सोही कारण धैर्य नै सुजनले * गर्छन् सदा धारण ।
चिन्ता त्याग गरी तिमी पनि रहू * सम्झेर नारायण ॥९०॥
भन्छू एक कथा म यै विषयको * ज्ञानी थिए मुद्‌ल ।
दुर्वासा मुनिले गई तिनि कहाँ * गर्नू भएथ्यो छल ॥
ज्ञानी मुद्‌गलको थिएन घरमा * खाने कुरा क्यै पनी ।
दुर्वासा पुगि भन्दथे घरी-घरी * ल्याऊ म खान्छु भनी॥९१
तिन्को जे घरमा थियो गरिदिए * आनन्दले अर्पण ।
धेरैपल्ट यसै गरेर मुनिको * संतोष देखी कन ॥
जाऊ मुद्‌गलजी यसै शरिरले * आनन्दले स्वर्गमा ।
भन्नासाथ विमान स्वर्ग पुरिको * आयो त्यहीस्थानमा॥९२

ज्ञानी मुद्‌गलको र श्रेष्ठ रथ त्यो * ली आउने दूतको ।
वार्तालाप भएर श्रेष्ठ सुखको * त्यस्का पछी दुःखको ॥
मानेनन् मुनि स्वर्ग जान र बसे * त्यै उञ्छ-वृत्ति गरी ।
गर्थे पालन धर्मको अतिथिको * सत्कार ती राम्ररी ॥९३॥
त्यस्तै पालन धर्मको गरि तिमी * क्यै दिन् तपस्या गर ।
त्यस्ले शान्ति हुनेछ ताप मनको * जानेछ सारा डर ॥
थाम्नू धर्म रहेर सत्य पथमा * बस्नू सदा निर्भय ।
त्यस्कै दिव्य प्रभावले समरमा * मिल्नेछ पक्का जय ॥९४॥
गर्नेछौ सुख भोग निश्चय पछी * त्यै धर्मको शक्तिले ।
शिक्षा धर्म र सत्यको दिनु भयो * यस्तै अरू व्यासले ॥
त्यस्ले पाण्डव वीरको जति थियो * सम्पूर्ण चिन्ता गयो ।
अन्तर्धान भई उसै बखतमा * श्रीव्यास पाल्नू भयो॥९५

सागको महिमा :—

दुर्वासा कुरुराजको महलमा * बस्थे भई पाहुना ।
तिन्को चाकरि गर्दथे कुरुपती * राखेर क्यै कामना ॥
दुर्वासा मुनिले भने खुशि भई * मागेर लेऊ वर ।
सल्लाहा गरि वीर कर्ण शकुनी * -का साथमा सादर ॥९६॥
लागे भन्न गई परी चरणमा * तत्काल दुर्योधन ।
डुल्दै छन् वनमा युधिष्ठिरहरू * सद्धर्म थामी कन ॥
दुःखीजो द्विजको तथा अतिथिको * सत्पात्रको चाकरी ।
गर्दै भोजन बाँड्दछन् दिन-दिनै * अत्यन्त श्रद्धा गरी॥९७
आफ्नै बान्धव हुन् ति पाण्डवहरू* मेरा त्यसै कारण ।
तिन्का निम्ति म माग्दछु हजुरको * पाऊ समाई कन ॥

खवाई पाण्डव वीरलाइ पहिले * श्री द्रौपदीले पनि ।
बस्छिन् खाइसकेर शान्त मनले * सम्पूर्ण धन्दा छिनी ॥९८
आफ्ना शिष्य लिई त्यसै बखतमा * गछौं भनी भोजन ।
तिन्को आश्रममा स्वयं पुगिदिनोस् * सर्वज्ञ ! कोही दिन ॥
श्री दुर्योधनको कुरा सुनिसकी * गर्नेछु त्यस्तै भनी ।
आफ्ना शिष्य लिई प्रशस्त सँगमा* जाँदा भए ती मुनी ॥९९
दुर्वासा ऋषिलाइ धर्म-सुतले * देख्नू भएथ्यो जब ।
पूजा आसनमा बसालि खुशिले * गर्नू भएथ्यो तब ॥
संध्या स्नान सकेर आइ यहिं नै * गछौं बसी भोजन ।
सामग्री अहिल्यै तयार गर लौ * शंका नमानीकन ॥८००॥
येती बात भनेर शिष्य लिइ ती * क्रोधी मुनी गै गए ।
पांचालीकन गैं युधिष्ठिरजिले * सम्चार भन्दा भए ॥
सामग्री कुटिमा थिएन मनमा * श्री द्रौपदी आत्तिइन् ।
आफ्ना रक्षक कृष्णलाइ मनले * बिन्ती गरी संझिइन् ॥१॥
तिन्को बिन्ति सुनी उसै बखतमा * श्री कृष्ण पाल्नू भयो ।
पाई दर्शन नाथको, सुमुखिको * सम्पूर्ण चिन्ता गयो ॥
भोको छु म असाध्य देउ घरमा * केही भए भोजन ।
यो आज्ञा हरिको सुनीकन भनिन् * हे नन्दका नन्दन ! ॥२॥
यौटा मात्र छ पाक्य-पात्र पतिको * त्यै हो कमाई ठूलो ।
आजै लाइ त पात्रले पनि प्रभो ! * गर्दैन केही भलो ॥
मैले खाइसकें र छैन अब क्यै * खाने कुरा सिद्धियो ।
दुर्वासा ऋषि गछुँ भोजन भनी * आए विपत्ती छ यो ॥३॥
रक्षा गर्नुहवस् भनेर तिनिले * बिन्ती गरीथिन् जब ।
तिन्को विन्ति सुनी प्रसन्नमनले * भन्दा भए माधव ।

सत्ता धर्म-कुमारको पृथिविमा * ठूलो हुनाले गरी।
होला पात्रमहाँ अवश्य पनि क्यै * हेर्छू स्वयं राम्ररी ॥४॥



सागको महिमा

यो आज्ञा हरिको सुनेर कुटिमा * तत्काल कृष्णा गइन्।
ल्याई पात्र भएर लज्जित स्वयं * श्री कृष्णलाई दिइन् ॥
हेर्नू भो हरिले लिएर करमा * त्यो पात्र लाई अनि।
यौटा साग त भित्रपट्टि सुमुखी ! * देखिन्छ यस्मा भनी॥५॥
खानूभो लिइ साग झट्ट हरिले * त्यो एक त्यान्द्रो जब।
दुर्वासा मुनिको र शिष्यहरुको * तृप्ती भएथ्यो तब ॥
लाग्यो गर्न डकार भेट भरियो * मेरो त भन्दै कति।
थाले छेर्न कती नदी तट त्यजी * भागे दगुर्दै कति ॥६॥
जान्नौं खान भनी डराइ मनमा * भागे सबै ती जब।
भागी पाण्डव वीरका सँग बिदा * पाल्नू भयो माधव ॥

भेजेथे सहदेवलाइ नदिमा * डाकेर ल्याऊ भनी ।
भेटेनन् तिनिले र गैकन भने * छैनन् कतै ती मुनी ॥७॥
दुर्वासा मुनिको असाध्य मनमा * मान्थे सबैले डर ।
तिन्को त्यो डर दूर पारि दिनुभो * आएर दामोदर ॥
यो आख्यान सहर्ष जुन् पुरुषले * गर्ला सदा सम्झना ।
त्यस्को जीवनमा यहाँ, पछि उहाँ * पुग्ला सबै कामना ॥८॥

राजा जयद्रथको दुर्गति :—

खेल्थे नित्य शिकार घोर वनमा * पाँचै जना पाण्डव ।
छाडी द्रौपदिलाई एक दिन ती * जाँदा भएथे सब ॥
बाटो सोहि गरि जयद्रथ पनी * सेना लिई साथमा ।
जान्थे गर्न विवाह शाल्व नगरी * पुग्दा त्यही स्थानमा॥९॥
केही बेर बसे जयद्रथ त्यहीं * विश्रामका खातिर ।
देखे द्रौपदिको स्वरूप तिनिले * साम्ने खड़ा सुन्दर ॥
ढोका आश्रमको समाई उभिई * हेर्दै थिइन् सुन्दरी ।
तिन्को रूपछटा अलौकिक थियो * लक्ष्मीसरी त्यो घरी ॥१०
साह्रै मोह भएर एकटकले * कयै बेर हेरी कन ।
राजा कोटिकलाई सिन्धुपतिले * भन्दा भए त्यै क्षण ॥
को हुन् ती यति सुन्दरी बुझ गई * तिन्लाई पाए बरू ।
गर्नें छैन विवाह जाउँ घरमा * फर्केर हामीहरू ॥११॥
यो आज्ञा सुनि श्री जयद्रथजिको * हाँसेर ती कोटिक ।
लागे भन्न पुगेर द्रौपदि कहाँ * देखी विना रक्षक ॥
हे देवी ! युवराज हुँ सुरथको * छोरो बुझे सादर ।
सामुन्ने ति त्रिगर्तका नरपती * हुन् वीर क्षेमङ्कर ॥१२॥

हेदैं छन् तिमितर्फ मोहित भई * ज्युन् वीर हे सुन्दरी !
राजा हुन् तिनि नै जयद्रथ भनी * जानी लिए राम्ररी ॥
आफ्नो देश पनी बताउ सुमुखी * को हुन् पती औ पिता ।
बस्नू कष्ट सहेर व्यर्थ वनमा * ठान्दीनँ राम्रो म ता ॥१३
यस्तो प्रश्न ति कोटिकाख्य विरको* तिन्ले सुनीथिन् जब ।
खेल्दैछन् वनमा शिकार अहिले * मेरा पति पाण्डव ॥
केही बेर तिमीहरू पख यहीं * आएर मेरा पति ।
गर्नन् स्वागत खूब बान्धव भनी * आनन्द मान्दै अति ॥१४
येती बात भनेर द्रौपदि गइन् * भित्री कुटीमा जब ।
त्यो संवाद गई जयद्रथ कहाँ * तिन्ले सुनाए सब ॥
जानेथे जब द्रौपदी कुटिमहाँ * [illegible] रहीछन् भनी ।
लागे भन्न गई जयद्रथ स्वयम् * तिन्लाई हे भामिनी !॥१५
दुःखछन् कष्ट खपेर पाण्डवहरू * श्री हीन भै निर्धन ।
त्यस्ताका संगमा बसेर तिमिले * सन्ताप भोग्नू किन ?
सेवा गर्नु वृथा छ घोर वनमा * पाँचै जना मूर्खको ।
मेरी पत्नि बनेर भोग खुशिले * साम्राज्य सौवीरको॥१६॥
यस्तो बात सुनेर झङ्ङ उभिई * त्यो देखि केही पर ।
लागिन् द्रौपदि भन्न क्रोधित भई * दुष्टात्म ! हे दुच्छर !
डाक्छस् घोर विपत्ति आफ्नु यसरी* हे मूर्ख ! आफैं किन ?
मार्छन् पाण्डव वीर आइ अहिल्यै * शेखी उतारीकन ॥१७॥
आफू स्याल भएर सिंहकन लौ * आँटिस् तँ जिस्क्याउन ।
इच्छा बाँच्न भए तुरुन्त घरमा * फर्कर जा दुर्जन ॥
हप्काइन् यसरी ठुलो स्वर गरी * श्री द्रौपदीले तर ।
त्यसको ख्याल नराखि सिन्धुपतिले* झम्टेर पक्रे कर ॥१८॥

घिस्याई बलले लगेर रथमा * तिन्लाइ राखे जब ।
हाँके त्यो रथलाई ठानि मनमा * पुग्नेछ इच्छा अब ॥
डाकिन् द्रौपदिले रुँदै धुरुधुरू * हे धौम्य ज्ञानी ! भनी ।
पर्खी दुष्ट ! भनेर धौम्य दगुरे * तिन्को पुकारा सुनी ॥१९
आए आश्रममा शिकार वनमा * खेली सकी पाण्डव ।
धाईले समाचार रोइकन त्यो * बिन्ती चढाइ सब ॥
आफ्ना शस्त्र लिएर पाण्डवहरू * चाँडै समाऊ भनी ।
दौडेथे रथमा चढेर रिसले *कालाग्नि जस्ता बनी॥२०॥
केही दूर पुगेर सिन्धुपतिका * सेना अड्याई दिए ।
लागे लड्न फिरेर सैनिक तथा * योद्धाहरू जो थिए ॥
मारे अर्जुन-भीमले शर-गदा * हानेर सेना जति ।
हेर्थे चार दिशा जयद्रथ कता * भाग्यो भनी दुर्मति॥२१॥
पाँचै भाइ मिली जिते सकल ती * सेना र सेनापति ।
छाडे द्रौपदिलाई सिन्धुपतिले * देखेर त्यस्तो स्थिति ॥
मार्छन् पाण्डवले भनेर डरले * भागी रहेका थिए ।
त्यो देखीकन भीमले नगिच गै * जुल्फी समाई लिए ॥२२॥
आँटे मार्न घिसारि त्यै समरमा * तिन्ले पछारी कन ।
लागे भन्न पुगी युधिष्ठिरजिको * आज्ञा स्वयं अर्जुन ॥
दाज्यू ! यस्कन दुःशलापति तथा * हो ज्वाइँ आफ्नू भनी ।
बैन्ही राँडि हुनेछ प्राण नलिनोस् * पापी भए तापनि ॥२३॥
छाड्ने द्रौपदिको र धर्मसुतको * इच्छा हुनाले गरी ।
ऐले मार्नु हुँदैन मर्छ पछि यो * मौका मिलेका घरी ।
भाईको सुनि बात खड्ग करमा * तीखो लिई भीमले ।
टुप्पी पाँच गरी त्यहीं मुडिदिए * पाता कसी क्रोधले ॥२४॥

ल्याई धर्म-कुमारका हजुरमा * तिन्नले पुऱ्याए जब ।
हे भाई ! सुन यो मरेसरि भयो * लौ मुक्ति देओ अब ॥
दाज्यूको सुनि यो हुकुम् मन बुझी * श्री द्रौपदीको पनी ।
बन्धन काटिदिए जयद्रथजिको * हुन् बन्धु आफ्नै भनी।२५
यस्तो काम गनर्नु फेरि कहिले * राखेर दुस्साहस ।
आफ्ना सैन्य लिई प्रसन्न मनले * जाऊ घरैमा बस ॥
यो आज्ञा सुनि श्री युधिष्ठिरजिको * ढोगेर पाऊ महाँ ।
मानी लाज ठुलो जयद्रथ गिरे * क्यै दूर आए त्यहाँ ॥२६
रानी द्रौपदि पाँच पाण्डवहरू * फर्की कुटीमा गए ।
पैह्लेकै सरि फेरि सोहि बनमा * सानन्द बस्ता भए ॥
मानी दुःख ठुलो जयद्रथ हिंडे * गर्छू तपस्या भनी ।
गङ्गाद्वार पुगी गरे तप ठुलो * तिन्ले तपस्वी बनी ॥२७॥
तिन्को त्यो तपले प्रसन्न हुनुभो * श्री शंभु क्यै कालमा ।
आज्ञा गर्नु भयो स्वयं प्रकट भै * ती भूपको सामुमा ॥
हे राजन् ! मनमा छ जे अब त्यही* मागेर लेऊ बर ।
यो आज्ञा शिवको सुनेर तिनिले * बिन्ती गरे सादर ॥२८॥
मार्नें पाण्डव बीरलाई दिनुहोस * शक्ती मलाई शिव !
तिन्को विन्ति सुनी स्वयं शिव पनि * चिन्तित हुनुभो तब ॥
आज्ञा भो सुन हे जयद्रथ ! तिमी * साक्षात नारायण ।
जस्का रक्षक कृष्ण छन् नर बनी * जन्मे यहाँ अर्जुन ॥२९॥
सृष्टी पालन-नाश गर्न सहजे * सक्छन् र गर्छन् पनी ।
आए जन्मन अंश ली पृथिविमा *हुन् विष्णु साक्षात् तिनी ॥
त्यस्ता अर्जुनलाइ मार्न कसरी * को सक्छ ब्रह्माण्डमा ।
तस्मात् यो वर दिन्नँ त्याग मनको* संताप यो बातमा ॥३०॥

सक्नेछौ तिमि रोक्न एकदिन नै * सेना तथा पाण्डव ।
छाडी अर्जुन भाइ चार रणमा * संतोष माने अब ॥
अन्तर्धान भए तुरुन्त शिवजी * तिन्‌लाई अर्ती दिई ।
फर्के राज्यमहाँ जयद्रथ पनी * अत्यन्त दुःखी भई ॥ ३१

श्री रामचन्द्रको महिमा—:

धेरै दुःखहरू सहेर वनमा * बस्तै थिए पाण्डव ।
चर्चा धर्म र ज्ञानको पनि सदा * गर्थे खुशी भै सब ॥
मार्कण्डेय मुनी कुनै दिन त्यहाँ * आए सुशिक्षा दिन ।
राखी आसनमा सहर्ष मुनिको * गर्दा भए पूजन ॥३२॥
सोधी वक्सनुभो युधिष्ठिरजिले * पाउ परी हे मुनि !
मैले देखितनँ लौ विपत्ति सहने * आफूसरी क्वै पनि ॥
पत्नी पाण्डवकी, तथा द्रुपदकी * छोरी, वधू पाण्डुकी ।
बस्छिन् दुःख सहेर घोर वनमा * कुन् पापले द्रौपदी ॥३३॥
यस्ता कष्ट सहे अरू सुजनले * कैहे कहाँ हे मुनि !
आज्ञा गर्नुहवस् प्रसन्न मनले * मिल्नेछ शान्ति सुनी ॥
रानी पाण्डवकी भएर बहुतै * दुःखी यी छन् द्रौपदी ।
एकान्त स्थलमा बसेर मनमा * होलिन् कती यी रुँदी ॥३४
छैनन् क्वै पनि मन्दभाग्य भवमा * हाम्री प्रिया झैं अरू ।
मैं हूँ कारण एक ठान्दछु सदा * मनूँ निको हो बरू ॥
साहै दिक्क भई युधिष्ठिरजिले * बिन्ती गरेको सुनी ।
लागे भन्न बुझाइ श्रेष्ठ अघिको * आख्यान ज्ञानी मुनि॥३५
हे राजन ! रघुवंशमा हुन गए * श्रीराम जो भूपति ।
त्यस्तो कीर्ति हुने भएन अझतक् * राजा कुनै सद्गति ॥

श्री रामायणमा छ यो शुभ कथा * विस्तारले वर्णन ।
फेरी मान्नु वृथा छ त्यो समयको * हो चाल हे सज्जन !॥३६
बाबू हुन् दशरथ् ति राघवजिका * ती चक्रवर्ती थिए ।
श्री नारायण चार भाइ नृपका * छोरा भई जन्मिए ॥
जस्ले शङ्करको धनू सहजमा * भाँचेर टुक्रा गरे ।
सीताजी सँगमा बिहा, परशुराम् * को शेखी जस्ले हरे ॥३७
कैकेयी र पिताजिका हुकुमले * आनन्द मानी कन ।
पाल्नूभो वन रामका सँग गए * सीता तथा लक्ष्मण ॥
ज्ञानी सज्जनको बसेर वनमा * सानन्द रक्षा गरे ।
पक्षी, राक्षस, कोल-भिल्ल शबरी * श्रीराम देखी तरे ॥३८॥
मारे चौध सहस्र राक्षसहरू * एक्लै लडाई गरी ।
सीता रावणले हरीकन लग्यो * आएर लङ्कापुरी ॥
लक्ष्मी झैं गुणशील रूप भवमा * प्रख्यात जस्को थियो ।
त्यस्ती जानकिले पनी वनमहाँ * संकष्ट भोग्नुपऱ्यो ॥३९॥
सृष्टी, पालन, नाश गर्न सहजै * सक्थे र गर्थे पनि ।
लीलाले कपिको सहाय लिनुभो * मानीस जस्ता बनी ॥
त्यस्तो भूप भएन कोहि भवमा * श्री, कीर्ति, ठूलो हुने ।
शक्ति छैन कुनै पनि नृपतिको * श्रीराममा दाँजिने ॥४०॥
बाँधी सेतु ससैन्य नाघि उदधि * लंकापुरीमा गई ।
मारे रावण-कुम्भकर्ण सहजै * श्री राम क्रोधित् भई ॥
सीतालाइ सहर्ष ल्याउनु भयो * अग्नी परीक्षा गरी ।
फर्के पुष्पकमा चढी सकलका * स्वामी अयोध्यापुरी॥४१

देखेर राम कन शोक गयो सबैको ।
आँधी चले सरि भयो पुरिमा खुशीको ॥

श्रीरामको हुन गयो अभिषेक त्याहाँ ।
सत्कीर्ति फैलिन गयो सब लोक माहाँ ॥४२॥

त्यस्ती प्राण समानकी प्रियतमा * सीता सुशीला कन ।
धोबीको सुनि बात राम प्रभुले * त्यागी पठाए वन ॥
तिन्‌लाई जति कष्ट आपत परे * त्यो सम्झँदामा पनि ।
मान्दैछन् अझसम्म दुःख दुनियाँ * पापी विधाता भनी ॥४३

यस्तो शील थियो भनी नरपते ! * सीताजिको सद्‌गुण ।
हे राजेन्द्र ! सकिन्न गर्न सब त्यो * आँटे पनि वर्णन ॥
स्वामी राम छँदाछँदै दुख सहिन् * तिन्‌ले जति वन्‌महाँ ।
पाञ्चालीकन के छ कष्ट अहिले * सीताजिका झैं यहाँ ॥४४

जस्का भाइ सुशील वीर र सखा * छन् कृष्णका अर्जुन ।
ऐल्हे दुःख पर्‍यो भनी मन वृथा * सन्ताप मान्छौ किन ॥
शक्ती भीम समान छैन अरुको * हज्जार हात्ती जति ।
त्यस्ता भाइ छँदाछँदै तिमि सदा * दुःखी रहन्छौ कति ॥४५॥

उस्तै श्री सहदेव औ नकुल छन् * दुर्धर्ष योद्धा दुई ।
सक्छन् जित्न सुरेन्द्रलाइ रणमा * मौका परेमा परेमा गई ।
यस्ता वीर पराक्रमी हजुरका * छन् चार भाई जब ॥
गर्नू हुन्छ सहायता खुशि भई * जस्को सदा माधव ॥४६॥

त्यस्ता धीर गुणी भई हजुरले * चिन्ता गरेको यहाँ ।
देख्दा छक्क म पर्दछु घरि-घरी * हे भूपति ! मन् महाँ ॥
तिम्रा बान्धब छन् सहायक सबै * श्रीरामले वानर ।
आफ्ना मित्र बनाइ राक्षसहरू * मारे ठूला दुर्धर ॥४७॥

तिम्रो कष्ट पनी छ केहि दिनको * संतोष मानी बस ।
गर्नू पालन धर्मको मनमहाँ * राखी ठूलो साहस ॥

जित्नेछौ सब शत्रुलाइ रणमा * मौका परेका घरी ।
भोगौला पछि राज्य यो पृथिविको* संपूर्ण राम्रो गरी ॥४८॥
मान्छन् दुःख र सुक्खलाइ सम नै* ज्ञानी तथा सज्जन ।
रुन्छन् दुःख पऱ्यो भने सुख हुँदा * हाँस्छन् नजान्ने जन ॥
दैवाधीन रहेछ दुःख सुख यो * भन्ने विचारी कन ।
थाम्नू पर्छ स्वधर्म, रक्षक उनै * हुन् नन्दका नन्दन ॥४९॥
शिक्षा-अर्ति दिए सबै तरहको * ज्ञानी मुनीले जब ।
शान्ति-प्राप्त भएर केहि मनमा * खूशी भए पाण्डव ॥
सोधे फेरि पनी युधिष्ठिरजिले * बिन्ती गरी सादर ।
चिन्ता छैन मलाइ भाइहरूको *त्यो राज्यको खातिर ॥५०
पाञ्चालीकन जो छ कष्ट अहिले * देखेर त्यो हे मुनि !
मान्छु दुःख असाध्य, गर्न तर क्यै * शक्तीनँ आँटे पनि ॥
यस्तै कोहि पवित्रता अरु भए * आख्यान तिन्को पनि ।
आज्ञा गर्नु भए प्रसन्न मनले * सुन्ने थिएँ हे मुनि !॥५१
बिन्ती धर्म कुमारको सुनिसकी * आनन्द मानी कन ।
मार्कण्डेयजिले भने नरपते ! * आख्यान राम्रो सुन ॥
राजा एक सुशील अश्वपति जो * ज्ञानी थिए धार्मिक ।
तिन्को सन्तति क्वै थिएन घरको * साम्राज्यको रक्षक ॥५२
सावित्री जगदम्बिका जननिको * तिन्ले गरे पूजन ।
धेरै काल बितेपछि नृपतिले * पाए स्वयं दर्शन ॥
देवीको वरदानले गुणवती * यौटी सुपुत्री भइन् ।
सावित्री भनि नाम राखि शशि झैं * कल्याणि बढ्दै गइन् ॥५३
सावित्री कन देखि यौवनवती * आज्ञा दिए भूपले ।
स्वामी रोज गएर योग्य तिमी नै * पुत्री स्वयं यत्नले ॥

जान्थिन् डुल्न भनेर जङ्गलमहाँ * सावित्री कोही दिन ।
देखी सुन्दर सत्यवान कन नै * रोज्दी भइन् मन्मन॥५४
फर्किन् ती घरमा र नारदमुनी * आएर राजाकन ।
लागे भन्न बुझाई अश्वपतिको * सामू दुखाई मन ॥
रोजिन् जङ्गलमा गई नरपते ! * जस्लाइ यिन्ले पति ।
मर्नेछन् ति अवश्य वर्ष दिनमा * हो सत्य यो भूपति ! ॥५५
सावित्रीतिर फर्ति अश्वपतिले * सोधे बुझाई अब ।
हे छोरी ! तिमिले कुरा सुनिसक्यौ* ज्ञानी मुनीको सब ॥
जे इच्छा मनमा छ स्पष्ट रितले * मेरा अगाडी भन ।
लागिन् नारदलाई भन्न सुमुखी * नीती बुझाई कन ॥५६॥
एकै पल्ट दिइन्छ संपति सबै * बाँडेर सत्पुत्रमा ।
एकै पल्ट दिइन्छ दान मुनिजी ! * कन्या पनी लोकमा ॥
एकै पल्ट 'तँलाइ दिन्छु म' भनी * दाता सबै भन्दछन् ।
त्याग्दैनन् कहिले पनी वचन ती * दानी र जो श्रेष्ठ छन् ॥५७
त्यस्तै हे मुनि ! सत्यवान्कन बरें * स्वामी भनी सादर ।
नारीलाई पतिव्रता हुनु सरी * ठान्दीनँ क्यै सुन्दर ॥
गर्छन् पालन धर्मको जनहरू * कल्याणका खातिर ।
मैले त्याग्नु कसोरि धर्म अहिले * मानेर ठूलो डर ॥५८॥
दीर्घायु अथवा ति वर्ष दिनमै * मर्नै भए तापनि ।
आफ्नू निश्चय त्याग्नसक्तिनँ कसै* त्यो पाप हो हे मुनि ! ॥
दैवाधीन रहेछ जे हुनु छ त्यो * टर्दैन केही गरी ।
तिन्कै साथ विवाह गर्दिनु हवस् * आनन्दले राम्ररी ॥५९॥
छोरीको सुनि बात नारदजिको * सल्लाह मानी कन ।
कन्यादान गरेर शास्त्र विधिले * सुम्पे दुखाई मन ॥

खोसेथे धन, राज्य शत्रुहरूले * अन्धा द्युमत्सेनको ।
बस्थे कष्ट सहेर, ठानि मनमा * हो खेल यो भाग्यको॥६०



यमराज-सावित्री संवाद

यो सम्बन्ध भएर शान्त हुनगो * ती भूपतीको मन ।
गर्थे स्नेह असाध्य दम्पति दुवै * छोरा-बुहारी कन ॥
राजाकी दुहिता भनेर मनमा * शेखी नमानी रती ।
सावित्री पनि गर्दथिन् टहल झन् * आनन्द मान्दै अति ॥६१
चारोटा दिनमात्र वर्ष दिनमा * बाँकी रहेथ्यो जब ।
सावित्री यमको कठोर व्रतमा * लागिन् दुखी भै तब ॥
खाँदै कत्ति नखाइ तीन दिन ती * आराधनामै रहिन् ।
सांग्ये त्यो व्रतको चतुर्थ दिनमा * विप्रादिद्वारा गरिन् ॥६२॥
ज्ञानी विप्र मुनी उपस्थित त्यहाँ * जो जो भएका थिए ।
सावित्री सधवा रहे तिमी भनी * आशिष् सबैले दिए ॥

स्वामीको दिन आज हो मरणको * त्यो सम्झनाले गरी ।
सारालाइ गराइ भोजन स्वयं * भोकै रहिन् सुन्दरी ॥६३
जान्छु ल्याउन यज्ञ निम्ति समिधा* भन्ने विचारी कन ।
लागे जान ति सत्यवान वनमा * ली बञ्चरो त्यै क्षण ॥
सम्झी नारदका कुरा मनमनै * सावित्रि दुःखी थिइन् ।
स्वामी जान हिंडे भनेर वनमा * झन् बेसरी आत्तिइन् ॥६४
जान्छु आज सँगै भनेर म पनी * तिन्ले भनेको सुनी ।
लागे भन्न ति सत्यवान व्रतले * छौ क्षीण हे भामिनी !
सक्तिनौ तिमि हिंड्न घोर वनमा * धेरै थरी कष्ट छन् ।
साह्रै दुर्बल छयौ प्रिये ! व्रत गरी* जाने नल्यौ व्यर्थ मन्॥६५
यो आज्ञा पतिको सुनीकन भनिन् * सावित्रिले सादर ।
जान्छु आज अवश्य हेर्छु वनको * सौंदर्य चारै तिर ॥
मेरो छैन शरीर क्षीण व्रतले * ऐह्ले त्यसै कारण ।
स्वामी आज नरोकिबक्सनुहवस् * आत्तिन्छ मेरो मन॥६६॥
तिन्को स्नेह बुझेर जिद्दि गरि झन्* जान्छु भनेको सुनी ।
लागे भन्न ति सत्यवान खुशिले * हाँसेर हे भामिनी !
मागी आउ बिदा गईकन पिता * माता कहाँ हे सती !
लैजानेछु सहर्ष जङ्गल महाँ * शंका नमाने रती ॥५७॥
चाँडै आश्रममा पुगेर सुमुखी * आइन् बिदा लीकन ।
लागे ती वनतर्फ दम्पति दुवै * गर्दै कुरा गन्थन ॥
सम्झी नारदका कुरा मनमनै * ती आत्तिए तापनि ।
गर्थिन् बात खुसी भएर पतिले * गर्छन् कि शंका भनी॥६८

डुलि डुलि वनको त्यो श्रेष्ठ सौंदर्य हेर्दै ।
फल फुल-बिरुवाको नामको खोजि गर्दै ॥

मनमन मुनिको त्यो वाक्य सम्झेर डर्दै ।
पतिसँग तिनि छाया झैं हिंडिन् चित्त धर्दै ॥६९॥

जम्मा पारि सकेर फूल-फलले * भाँडो भरीयो जब ।
लागे ती समिधा बनाउन भनी * ली बञ्चरो झट् तब ॥
आएथ्यो पसिना परीश्रम परी * लाग्यो शिरै चर्कन ।
बोले ती सुमुखी ! भएँ म अहिले * अस्वस्थजस्तो किन ?॥७०
लाग्यो दुख्न कपाल शक्ति उभिने * मेरो हराई गयो ॥
पल्टन्छु तिमि आउ झट्ट नगिचै * विश्राम गर्नू पर्‍यो ॥
यो आज्ञा पतिको सुनीकन सती * देखी नराम्रो स्थिति ।
काखामा शिर राखि सादर बसिन् * सन्ताप मान्दै अति॥७१॥
पीड़ा तीव्र हुँदै गयो मरणको * चेष्टा सबै देखियो ।
कालो एक ठूलो कुनै पुरुषको * मूर्ति खड़ा भै दियो ॥
देखी रूप निकै भयंकर त्यहाँ * सोधिन् ति सावित्रिले ।
को हौ हे बलवान् ! खडा हुनगयौ* आएर कुन् हेतुले ॥७२॥
तिन्को प्रश्न सुनी सकेर यमले * आज्ञा भयो हे सती ! ।
जानीलेउ मलाइ हूँ 'यम' भनी * मानीस मर्छन् जति ॥
लैजान्छु सबको म प्राण बुझिल्यौ * यी सत्यवान्को पनि ।
वेला आइपुग्यो र जीव लिनको * खातीर आएँ भनी ॥७३॥
लैजान्छु अब प्राण खैंचि यमले * आज्ञा भएथ्यो जब ।
लागिन् सोध्न भएर नम्र सुमुखी * जोरेर बाहू तब ॥
सुन्थें हे यमराज ! प्राण जनको * गै ल्याउँछन् दूतले ।
पाल्नूभो अहिले स्वयं हजुर नै * हे नाथ ! कुन् हेतुले॥७४
बोले श्री यमराज धार्मिक गुणी * हुन् श्रेष्ठ यी सत्यवान् ।
आएँ कारण त्यै परेर म स्वयं * यिन्को लिनालाइ ज्यान्॥

येती बात भनेर पाश करको * फ्यॉंकेर सोही घरी ।
खैंचे प्राण ति सत्यवान् हुनगए * निर्जीव राम्रै गरी ॥७५॥
बाँधी सूक्ष्म स्वरूप श्री यम हिंडे * पर्की दिशा दक्षिण ।
स्वामीको शिरलाइ राखि जिमिमा * सावित्रि सोही क्षण ॥
लागिन् हिंड्न पछी-पछी यमसँगै * छाडेर स्वामीकन ।
लागे भन्न खड़ा भएर यमले * तिन्लाइ सोही क्षण ॥७६॥
सावित्री ! पतिको रहेर सँगमा * राम्रो गऱ्यौ चाकरी ।
अन्त्येष्टि गर, जाउ आश्रममहाँ * संतोषले राम्ररी ॥
सक्तैनन् यमलोक जान सुमुखी * यो देहले क्वै पनि ।
गर्नू याद-विचार सासु ससुरा * हुन् पूज्य मेरा भनी॥७७
सावित्री यमका कुरा सुनिसकी * बोल्दी भइन् सादर ।
जान्छन् धर्म बुझी पतीसँग सती * यो नीति हो सुन्दर ॥
मैले जो पति-भक्ति सत्य-व्रतको * गर्छु सदा पालन ।
सोही कारणले अबाधगतिले * हिंड्छु म हे सज्जन॥७८॥
थाम्नू पर्छ स्वधर्म श्रेष्ठ जनले * राम्रो कुरा हो तर ।
स्वामी त्याग्न समर्थ छैन मनमा * लाग्दोछ ठूलो डर ॥
नीतिपूर्वकका कुरा अरु पनी * तिन्ले भनेको सुनी ।
लागे श्री यमराज भन्न सहसा * साह्रै दयालु बनी ॥७९॥
हे देवी ! म खुशी भएँ सुनिसकी * तिम्रा कुरा सुन्दर ।
स्वामी छाडि अरू छ जे मनमहाँ * मागेर लेउ वर ॥
यो आज्ञा यमको सुनेर सतिले * बिन्ती गरिन् हे प्रभो !
अन्धा छन् ससुरा खुलुन् नयनले * तिन्का दुवै हे विभो ॥८०
बोले श्री यमराजजी वर दिएँ * मागे जति हे सती !
फर्कन्नन् जन क्वै मरेपछि यहाँ * यै हो सबैको गति ॥

थाकेकी पनि हौलि फर्क कुटिमा * सन्तोष मानी अब ।
यो आज्ञा यमको सुनेर सतिले * बिन्ती चढ़ाइन् तब ॥८१॥
स्वामीका सँग हिंड्न थाक्तिनँ कवै * पर्दैन केही श्रम ।
पत्नीका गति एकमात्र पति हुन् * भन्छन् सबै हे यम ! ॥
केही बेर पनी कुनै सुजनको * सत्संग होला जहाँ ।
ठान्छन् मित्र समान जान्छ कसरी * त्यो भेट व्यर्थै कहाँ ॥८२
सोही कारणले गरेर रहनू * सत्संग मौकामहाँ ।
भन्ने खूब गरी विचार म पछी * लागेर आएँ यहाँ ।
तिन्को बात सुनेर ठिङ्ग उभिई * क्यै बेर पर्खीकन ।
लागे श्री यमराज भन्न खुशिले * तिन्को बुझाई मन॥८३॥
छाड़ी जीवन एकमात्र पतिको * इच्छा छ जे मन् महाँ ।
हे देवी ! वर माग दान खुशिले * दिन्छु म दोस्रो यहाँ ॥
यो आज्ञा यमराजको सुनी सकी * तत्काल बोलिन् सती ।
राज्य-भ्रष्ट भएर दुःख ससुरा * भोगी रहेछन् जति ॥८५॥
फिर्ता राज्य हवस् गरून् तिनि सदा* सद्धर्मको पालन ।
यो बिन्ती यमले सुनी वर दिई * बोले खुशी भैकन ॥
गर्नन् राज्य सँगै बसेर ससुरा * हे देवि ! तिम्रा जहाँ ।
बस्नू गै तिमिले पनी सुखहरू * भोगेर सारा त्यहाँ ॥८५॥
सावित्री यमराजको सुनि कुरा * बोलिन् पुकारा गरी ।
स्वामी त्यागि बसौं गएर कसरी * त्यो राज्यमा यो घरी ॥
वाणीले, मन कर्मले सुजनले * संकष्ट पाए पनी ।
गर्दैनन् अरुको खराब कहिल्यै * दुष्कर्म हो यो भनी ॥८६
गर्नू न्याय नगर्नू द्वेष अरुको * सत्पात्रमा दान् दिनू ।
ज्ञानी मानिस ठान्दछन् सकल यै * हो धर्म थामी लिनू ॥

पापी मूर्ख भएर धर्म - पथको * बाटो त्यजे तापनी ।
गर्छन् पालन धर्मको सुजनले * कल्याण होला भनी ॥८७॥
आज्ञा भो यमले सुनीकन कुरा * तिन्को गरी आदर ।
स्वामी बाहिक मागिलेउ सुमुखी * तेस्रो म दिन्छु वर ॥
लागिन् भन्न सती पिताकन प्रभो * छैनन् कुनै सन्तति ।
छोरा हुन् तिनिलाई एक सय लौ * राम्रा तथा सद्मति॥८८

सावित्रिको सुनि कुरा यमराज बोले ।
मागे जती वर दिएँ सुमुखी ! खुशीले ॥
पायौ वृथा दुख निकै पर साथ आई ।
जाऊ फिरेर घरमा बस शान्ति पाई ॥८९।

जान्नन् देह लिएर यो यमपुरी * साध्वी, कुनै मानिस ।
थाम्नू पर्दछ लोकको स्थिति वृथा * गर्छ्यौ तिमी साहस ॥
यो आज्ञा यमराजको सुनि भनिन् * फेरी ति सावित्रिले ।
बस्नू हुन्छ हजूर नै यमपुरी * भन्छन् त्यही हेतुले ॥९०
मैले पाइसकें यहीं हजुरको * प्रत्यक्षमा दर्शन ।
जाने त्यो पुरीमा रहेन अब क्यै * बाँकी त्यसै कारण ।
गर्नू हुन्छ हजूर लोकहित औ * सद्धर्मको पालन ।
जस्को नाम छ 'धर्मराज' भवमा * विख्यात त्यै कारण॥९१॥
ठूलो जो भर मान्दछन् सुजनको * संसारमा लोकले ।
मान्दैछु भर श्रेष्ठ झन् हजूरको * मैले त्यसै हेतुले ॥
नीतीपूर्वकका कुरा अरु पनी * बिन्ती गरीथिन् जब ।
साह्रै चित्त बुझेर फेरि यमले * भन्दा भए यो तब ॥९२॥
स्वामीको तिमि देह छाडि अरु क्यै* मागेर लेऊ वर ।
यो आज्ञा यमराजको सुनि भनिन् * सावित्रिले सादर ॥

मेरा हुन् सय पुत्र देव ! सब ती * विख्यात संसारमा ।
दोषी क्वै नभनुन् कुचाल गरि यो * भन्ने पनी लोकमा ॥९३



सावित्रीले यमराजसित वरदान पाएकी

हेर्दै श्री यमको मुहार उभिइन् * येती भनी ती जब ।
बोले श्री यमराज ख्याल नगरी * पुग्नेछ इच्छा सब ॥
यो चौथो वरदानले मन भयो * क्यै शान्त सावित्रिकी ।
लागिन् भन्न खुशी भई हजुर झैं * हे देव ! दानी छ को ? ९४
ठान्छन् श्रेष्ठ स्वधर्म सत्पुरुषले * संकष्ट आए पनि ।
गर्छन् रक्षण धर्मको यतनले * कर्तव्य हो यो भनी ॥
मान्दैनन् पछितो र दुःख अथवा * शंका न केही डर ।
गर्दैनन् तिनि लोभ केहि मनमा * संपत्तिका खातिर ॥९५॥
इच्छा प्रत्युपकारको मनमहाँ * केही नराखी कन ।
गर्छन् लौ उपकार मात्र अरुको * ज्ञानी तथा सज्जन ॥

त्यस्ता सज्जनको हुँदैन कहित्यै * आशीष मिथ्या वर ।
बस्छन् लोकहरू टिकेर भवमा * मानेर तिन्को भर ॥९६॥
त्यस्तै सज्जनमा गरेर गणना * ऐह्ले हजुर्को पनि ।
माफी पाउँ दयानिधे ! शरणमा * पर्छु म दुःखी बनी ॥
तिन्को विन्ति सुनेर फेरि यमले * भन्दा भए हे सति !
तिम्रो जानि विचार धर्म पथको * आनन्द लाग्यो अति॥९७
जे इच्छा मनमा छ माग्न अब त्यै* मागेर लेऊ वर ।
यो आज्ञा यमको सुनेर सुमुखी * भन्दी भइन् सादर ॥
स्वामीको अब पाउँ जीवन अनी * पो पुत्र होलान् सय ।
मिथ्या हुन्न हजूरको वर भनो * होला अनी निश्चय॥९८
स्वामी बाहिक माग्नको मनमहाँ * क्यै छैन इच्छा अरु ।
स्वामी हीन भएर बाँच्नु छ भने * मर्नू छ राम्रो बरु ॥
यस्तो विन्ति सुनेर फेरि यमले * आज्ञा भयो हे सति !
इच्छा पूर्ण हुनेछ लौ वर दिएँ * संपूर्ण मागे जति ॥९९॥
राजन् ! सूक्ष्म शरीरलाई यमले * तिन्को फुकाई दिए ।
आशीर्वाद दिइ स्वयं यमपुरी * फर्केर जाँदा एभ ॥
आई सूक्ष्म शरीर फेरि तनमा * तिन्को पसेथ्यो जब ।
ब्यूँझेथे अनि सत्यवान गहिरो * निद्रा खुलेझैं तब ॥९००
सावित्री पुगि झट्ट राखि अघिझैं * काखमा पतीको शिर ।
लागिन् हेर्न टुल्ल-टुल्ल मुखमहाँ * हाँसेर स्वामीतिर ॥
सावित्रीतिर सत्यवान् चकित भै * क्यै बेर हेरी कन ।
लागे सोध्न 'उठाइनौ अघि'प्रिये * बेला छँदैमा किन ॥१॥
निद्रा खूब परेछ एक सपना * देखें नराम्रो यहाँ ।
यौटा दिव्य स्वरूपका पुरुष क्वै * आए अगाडी महाँ ॥

देख्दैमा तिनलाइ व्याकुल भएँ * पीड़ा बढी बेसरी ।
थाहा पाइनँ अन्धकार हुनगो * त्याहाँ पछी सुन्दरी ॥२॥
स्वामी ! मुत्तुभयो निकै बितिसक्यो* रात्री पनी यो घरी ।
जाउँ आश्रममा सुनाउँछु कुरा * भोली सबै राम्ररी ॥
येती बात भनेर पुष्प समिधा * राखेर त्यै स्थानमा ।
पक्री हात दुवै परस्पर हिंडे * बिस्तार त्यो रातमा॥३॥
अन्धा नेत्र खुले उसै बखतमा * राजा द्युमत्सेनको ।
खोजी गर्न हिंडे वरीपरि तिनी * चिन्ता परी पुत्रको ॥
बस्थे आश्रमका नगीच कुटिमा * ज्ञानी तपस्वी जति ।
सोधे ती सबलाई भूपति गई * सन्ताप मान्दै अति ॥४॥
योटा ब्राह्मणले भने कुशल छन् * छोरा बुहारी पनि ।
मेरो भन्छ विचारले नरपते ! * ती आउँदैछन् भनी ।
आपस्तम्भ र धौम्य गौतम तथा * श्री दाल्भ्य विप्रादिले ।
बोले जीवित छन् विलम्ब हुनगो * तिन्लाइ क्यै हेतुले ॥५॥
भन्छौं हामि सबै प्रभाव तपको * ठूलो हुनाले गरी ।
चिन्ता क्यै मनमा नमान नृपते * ती आउँछन् राम्ररी ॥
आश्वासन् सबले दिए तर पनी * खोज्दै थिए भूपति ।
आफ्नू आश्रममा पुगे खुशि हुँदै * श्रीसत्यवान् दम्पति ॥६॥
आँखा भूपतिको खुल्यो सुत-वधू * आई पुगे लौ भनी ।
आए हेर्न भनी छिमेकि कुटिमा * ज्ञानी, तपस्वी मुनी ॥
सोधे जो वनमा विलम्ब हुनको * तिन्ले सबै कारण ।
पाएकी वरदानको सुमुखिले * सारा गरिन् वर्णन ॥७॥
सावित्री सति धन्य हुन् भनि ठूलो* तारीफ तिन्को गरे ।
आशीर्वाद दिई सहर्ष, कुटिमा * आफ्नू सबै ती फिरे ॥

राजाका बलवान शत्रुहरूले * सम्चार पाए जब ।
राजाको जति राज्य छाडिकन ती * भागे डराई सब ॥८॥
रैतीले नृपलाई आदर गरी * राखे लगी राज्यमा ।
कोही श्रेष्ठ सती भएन नृपते ! * सावित्री झैं लोकमा ॥
पाएको यमबाट जो वर थियो * प्रत्येक पूरा भयो ।
सावित्री अनि सत्यवान दुइको * कीर्ति ठुलो फैलियो ॥९॥
यो आख्यान सुनी युधिष्ठिर निकै * आश्चर्य मान्दा भए ।
मार्कण्डेय मुनी सहर्ष कुटिमा * मागी बिदा गै गए ॥
जस्ले यो इतिहास भन्छ अथवा * सुन्ला खुशी भैकन ।
भोगी सौख्य यहाँ, परंपद पछी * पुग्नेछ त्यो सज्जन ॥१०

कर्ण द्वारा कवच-कुण्डल दान—

आफैं बनेर द्विज निश्चय सांथ जान्छु ।
त्यो कर्णको कवच कुण्डल भीख माग्छु ॥
यस्तो विचार जब इन्द्रजिले गरेथे ।
तिन्को विचार सहजै रवि बुझेथे ॥११॥

स्वप्नामा पुगि कर्णका नगिचमा * यौटा बनी ब्राह्मण ।
लागे भन्न बुझाई बात हितको * श्री सूर्यनारायण ॥
बाबू कुण्डल कानका, कवच यो * तिम्रो छ जो देहमा ।
माग्नेछन् बुझ इन्द्र ब्राह्मण बनी * आई कुनै कालमा ॥१२॥
तिम्रो जन्म हुँदा यि भूषण दुवै * रक्षार्थ ठानी हित ।
पैहाएँ तिमिलाइ आफ्नु तनको * खोलेर राम्रोसित ॥
रक्षा हुन्छ सदा लगाइरहँदा * हे बाबु ! यो भूषण ।
सक्तैनन् अरूले टुटाउन पनी * यस्लाई त्यै कारण ॥१३॥

ठानी पाण्डवको भलो र कुभलो * तिम्रो चिताई कन ।
मागी सादर इन्द्रले छल गरी * लिन्छन् दुवै भूषण ॥
दानी कर्ण भनी सुकीर्ति छ ठुलो * विख्यात संसारमा ।
गर्दैनौ तिमिले निराश कहिल्यै * जो आउँछन् सामुमा ॥१४
हुन्छौ निश्चय नै अवध्य तनमा * पैह्रेर यो भूषण ।
सक्तैनन् तिमिलाइ जित्न रणमा * भन्छु त्यसै कारण ॥
आफ्नू जीवन राख्नको मन भए * मागे पनी इन्द्रले ।
तिम्रो भूषण यो कदापि नदिनू * छल्नू कुनै युक्तिले ॥१५॥
यौटा हेतु अरू छ गुप्त यसमा * मौका जसै आउला ।
त्यो सारा म बताउनेछु सहजै * थाहा तिमी पाउला ॥
स्वप्नामै जब कर्णले हित हुने * आज्ञा सुने सूर्यको ।
लागे सोध्न तुरुन्त विप्र रूपका * श्री सूर्यलाई ति यो ॥१६॥
को हौ, विप्र ! बताउ यो हित-कुरा * मेरो गरेको किन ? ।
इच्छा भो गहना मलाई तिमिले * के हेतु पैह्राउन ॥
अर्को गुप्त रहस्य के छ यसमा * राखी दया त्यो भन ।
यो बिन्ती सुनि कर्णको खुशि भई * श्री सूर्यनारायण ॥१७।
बोले सादर कुन्तिभोज नृपती * ठूलो प्रतापी थिए ।
दुर्वासा ऋषि भूपको महलमै * बस्छु म भन्दै गए ॥
राखेथे ऋषिलाइ आदर गरी * ती भूपतीले तर ।
दिन्छन् श्राप रिसाई निश्चय भनी * मान्थे असाध्यै डर ॥१८॥
कुन्ती सुन्दरि शूरसेन नृपकी * साटो लिएका थिए ।
राजाले तिनिलाइ डाकि नजिकै * यो बात भन्दा भए ॥
हे कुन्ती ! गृहशिल्पकोनिधि तिमी * बाठी हुनाले गरी ।
दुर्वासा यहिं बस्तछन् र तिमिले * गर्नू पऱ्यो चाकरी ॥१९॥

योो आज्ञा सुनि कुन्तिभोज नृपको * बोलिन् पृथा सुन्दरी ।
सेवा ती ऋषिको प्रसन्न मनले * गर्नेछु राम्रो गरी ॥
क्रोधी छन् बहुतै भनेर मनमा * पर्दैन मान्नू डर ।
गर्नू चाकरि श्रेष्ठ हो सुजनको * कल्याणका खातिर ॥२०॥
कुन्तीको सुनी यो कुरा नरपती * अत्यन्त खूशी भए ।
छोरीलाइ बुझाउँदै टहलको * भारा सबै सुम्पिए ॥
लागिन् गर्न रुजू रहीकन सदा * सेवा मुनीको तिनी ।
सेवा जत्ति गरे पनि गुन भने * बुझ्दैनथे ती मुनी ॥२१॥
फर्कन्छु अहिले भनेर कहिले * निस्केर ती हिड्दथे ।
आधा रात बिताई चार दिनमा * फर्की त्यहाँ आउँथे ॥
कुन्ती चाकरि गर्दथिन् रुजु रही * जैह्ले ति आए पनी ।
झर्कन्थे तर ती वृथा रिस गरी * हेर्दीन यस्ले भनी २२॥
गर्थिन् चाकरि तैपनी रिस त्यजी * ती सुन्दरी सादर ।
चाहिन्थ्यो जति वस्तु जुन् बखतमा* पार्थिन् सदा हाजिर ॥
कुन्तीको गुण-शीलले, टहलले * गम्भीरताले पनि ।
केही कालपछी स्वयं खुशि भई * बोले रिसाहा मुनि ॥२३॥
हे कुन्ती ! अहिले गर्‍यौ टहल जो * मेरो तिमीले यहाँ ।
दिन्छु एक म सिद्धमन्त्र सुमुखी * खूशी भई मन्महाँ ॥
डाक्नेछौ तिमि मन्त्र यो जप गरी* जुन् देवलाई जब ।
देलान् एक सुपुत्र आइ तिनिले * पुग्नेछ इच्छा सब ॥२४॥
येती बात भनेर मन्त्र र अरू * शिक्षा प्रशस्तै दिए ।
अन्तर्धान भएर आश्रम महाँ * क्रोधी मुनी फर्किए ॥
हेर्छु लौ अब मन्त्रको बल भनी * श्री कुन्तिले क्वै दिन ।
डाकिन् मन्त्र जपी मलाइ र गयो * मेरो गती रोकिन ॥२५॥

बाबू, कर्ण मलाई जान तिमिले * हूँ सूर्यनारायण ।
मन्त्राधीन भई गएँ विवश भै * कुन्तीकहाँ त्यै क्षण ॥
देखी सामु भनिन् मलाई मनमा * मानेर शंका डर ।
डाकें जाँच्न भनेर मन्त्र बलको * विश्वासका खातिर ॥२६॥
कन्यै छु गरुँ गर्भ भारण भने * के भन्दछन् लोकले ।
लाग्ला पाप तथा अनेक अपवाद्* हे देव ! यै हेतुले ॥
व्यर्थै दुःख दिएँ हजूरकन लौ * डाकेर मैले यहाँ ।
माफी बक्सनुहेस् अबोध छ भनी * राखी दया मन्महाँ ॥२७॥
कुन्तीले यसरी मलाई बहुतै * बिन्ती गरेको सुनी ।
सम्झाएँ तिनिलाई योग्य रितले * तत्काल मैले पनी ॥
मैले फिर्नु पऱ्यो अनादर भई * ऐह्ले भने हे सति ! ।
ठान्नन् तुच्छ मलाई देवहरुले * होला ठुलो दुर्गति ॥२८॥
सोही कारणले हुँदैन यसरी * फर्केर जानू अब ।
होला पुत्र अवश्य वीर मनको * पुग्नेछ इच्छा सब ॥
इच्छा पूर्ण गराउ सादर तिमी * पर्दैन मान्नू डर ।
कन्या नै रहुली सधैं जगतमा * विख्यात दिन्छु वर ॥२९॥
सम्झाएँ यसरी सबै तरहले * नीती बुझाई जब ।
राम्रो चित्त बुझी सकेपछि गरिन् * स्वीकार तिन्ले सब ॥
गर्भाधान गरेर भूषण दुवै * पैह्राई राम्रो गरी ।
आएँथें म फिरी प्रसन्न मनले * आकाशमा त्यै घरी ॥३०॥
मैन्हा पूर्ण भएर जन्म हुनगो * हे कर्ण ! तिम्रो जब ।
मातृ-स्नेह जनाइ धेर पहिले * रोइन् लुकेरै तब ॥
लाग्दा लाज असाध्य बन्धु जनको* मानेर शाह्रै डर ।
राखिन् बाकसमा तिमीकन भई * दुःखी र चिन्तातुर ॥३१॥

बिन्ती गरिन् मतिर हेरि रुँदै तिनीले ।
रक्षा स्वयं गरिलिनोस् सुतको हजुर्ले ॥
गङ्गाजिको जलमहाँ लगि त्यो बगाइन् ।
गर्दै विलाप घरमा तिनि फर्कि आइन् ॥३२॥



कर्णको वृत्तामा

लाग्यो बाकस बग्न घोर जलमा * गङ्गाजिको त्यो जब ।
मैले तेज फिंजाई आफ्नु शिशुको * रक्षा गरेथें तब ॥
यौटा सारथि स्नान गर्दछु भनी * गंगा किनार्मा थियो ।
त्यस्ले बाकस देखि सुन्दर त्यहाँ * बोकी घरैमा लग्यो ॥३३॥
देखेथ्यो तिमिलाइ बाकस ठुलो * फोरेर हेर्‍यो जब ।
पत्नीलाइ दिई भन्यो खुशि भई * पुग्नेछ इच्छा अब ॥
राधाले पनि दैवले सुत दियो * भन्दै गरी पाल्न ।
लाग्यौ बढ्न तिमी अधीरथकहाँ * यै हेतुले दिन्-दिन ॥३४॥

राजा श्री धृतराष्ट्रको रथ उही * हाँक्ने थिए सारथी ।
सोही कारण मित्रता कुरुहरू * -का साथ भो त्यो घरी ॥
निद्रामै जब यो कुरा सुनिसके * श्री सूर्यको कर्णले ।
लागे भन्न ति नीदमै कर दुवै * जोरी ठुलो भक्तिले ॥३५
मेरो वंश र जन्मको हजुरले * गर्नू भयो वर्णन ।
यौटा विन्ति म गर्दछु चरणमा * हे सूर्य नारायण ! ॥
दिन्छु दान भनेर सत्यव्रतको * संकल्प मेरो छ जो ।
मेरो मृत्यु भए पनी वरु हवस् * छाड्दीन संकल्प त्यो ॥३६
रक्षा सत्य कबोलको र हितको * युक्ती भए क्यै अरू ।
आज्ञा गर्नु हवस् प्रसन्न मनले * गर्छु म सोही बरू ॥
यो बिन्ती सुनि कर्णको खुशि भई * आज्ञा भयो सूर्यले ।
थाम्छु सत्य भन्यौ र गर्दछ सदा * रक्षा त्यही सत्यले ॥३७॥

काटेर यो कवच कुण्डल झिक्न हुन्न ।
सक्छौ भने सुरपती कन भन्नु दिन्नँ ॥
साटो भनेर लिनु शक्ति अमोघ मागी ।
आफ्नो दिनू कवच कुण्डल मोह त्यागी ॥३८॥
त्यो शक्तिले समरमा विजयी हुनेछौ ।
शक्ती र भूषणविना तिमि दीन हुन्छौ ॥
शिक्षा दिई अलप सूर्य जसै हुनूभो ।
ती कर्णको निंद पनी सहसा खुलीगो ॥३९॥

राखेथे मनमै कुरा सकल ती * ब्यूँझे पनी कर्णले ।
गर्थे दान सधैं बसेर शुचि भै * विप्रादिमा भक्तिले ॥
आए इन्द्र बनेर ब्राह्मण त्यहीं * भिक्षार्थ कोही दिन ।
धेरै ब्राह्मणलाइ दान पहिले * मागे जती दीकन ॥४०॥

देखेथे जब इन्द्रलाइ नगिचै * डाकी भने सादर ।
के इच्छा छ हजूरको कहनुहोस् * गर्छु म त्यो हाजिर ॥
गाई, वस्त्र, सुवर्ण, भूमि र अरू * इच्छा छ जे भन्नुहोस् ।
दिन्नन् की भनि क्यै हजूर मनमा * शङ्का नमान्नूहवस् ॥४१॥
बोले ब्राह्मण भेषका सुरपती * तिन्ले भनेको सुनी ।
दिन्छन् दान प्रशस्त जे छ जनत्यो * पर्दैन बाधा भनी ॥
इच्छा पूर्ण गराइदिन्छ जन त्यो * जो माग्छ जस्ले जति ।
दानी त्यस्कन भन्दछन् जनहरू * आनन्द मानी अति ॥४२
यौटा दुर्लभ वस्तु माग्दछु, अरू * चाहिन्न केही पनि ।
तिम्रो कुण्डल कानको, कवच यो * देऊ दयालू बनी ॥
बोले कर्ण चिन्हें सुरेन्द्र सुरका * मालीक राजा भनी ।
गर्छन् के छल स्वार्थ साधनमहाँ * के देवताले पनि ? ॥४३॥
पैह्नी भूषण यो सदैव विजयी * हुन्छु म संग्राममा ।
मेरो मृत्यु हुनेछ भूषणविना * यो दिन्न लौ दानमा ॥
आफ्नू शक्ति अमोघ जो छ दिनुहोस् * हे देव ! साटो अनि ।
दिन्छु भूषण यी सहर्ष अहिल्यै * काटेर मैले पनि ॥४४॥
बोले इन्द्र–अमोघ शक्ति खुसिले * हे कर्ण ! दिन्छु तर ।
तिम्रो साथ रहन्न शक्ति रणमा * मारेर यौटा विर
होला हाजिर मैकहाँ, अरू पनी * यौटा छ ठूलो डर ।
आफ्नू अस्त्र छँदै प्रहार नगरे * संहारका खातिर ॥४५॥
उल्टो नाश गराउला न त भने * फर्केर आफै तिर ।
यो आज्ञा सुरराजको सुनि भने * श्री कर्णले सादर ॥
आज्ञा गर्नु भए जती हजुरले * गर्छु सबै पालन ।
मौका पाइ म प्राण-संकट नभै * शक्ती कसै छाड्दिनँ ॥४६

येती बात भनेर भूषण दुवै * काटेर सुम्पी दिए ।
साटो शक्ति सुरेन्द्रको असल त्यो * मागेर तिन्ले लिए ॥
माग्ने भिक्षुक इन्द्रको पृथिविमा * दुर्नाम ठूलो भयो ।
दानी कर्ण भनी सुकीर्ति भवमा * तिन्को स्वयं फैलियो ॥४७

यस्तो काम गरेर पाण्डु-सुतको * कल्याणका खातिर ।
अन्तर्धान गई गए सुरपती * तत्काल स्वर्गै तिर ॥
यो सम्चार सुनेर दुःखित भए * अत्यन्त दुर्योधन ।
बाहू दक्षिण भाँचियो अब भनी * तिन्ले दुखाए मन ॥४८॥

यो संवाद पुग्यो र द्वैत वनमा * खूशी भए पाण्डव ।
बाह्रै वर्ष पनी वित्यो त्यहिं बसी * पाँचै जनाको अब ॥
चर्चा धर्म र कर्मको अतिथिको * विप्रादिको चाकरी ।
गर्दै पाण्डव बस्दथे वनमहाँ * दुःखी भई त्यो घरी ॥४९

यक्ष संवाद—

वैशम्पायनले भने नरपते ! * त्याहाँ पछी क्वै दिन ।
लैजाँदा हुँदि यज्ञपात्र यमले * दुःखी भई ब्राह्मण ॥
लागे भन्न गएर पाण्डव कहाँ * त्यस्लाई पक्री कन ।
मेरो ल्याइदिनोस् गएर अरणी * हे वीर ! खोजीकन ॥५०

विन्ती ब्राह्मणको सुनेर मृग त्यो * खोज्दै हिंडे पाण्डव ।
भेटेनन् मृगलाइ प्यास बहुतै * लाग्यो थकाई तब ॥
योटा वृक्षमनी बसे तिनीहरू * विश्रामका खातिर ।
हेर्दै भनुभयो युधिष्ठिरजिले * ती चार भाइतिर ॥५१॥

भीमा छैन विपत्तिको न त कुनै * देख्छु ठूलो कारण ।
व्यर्थैमा पनि धर्म-संकट ठूलो * यो आइलाग्यो किन ? ॥

पैह्ले नै जति पाप पुण्य गरियो * जानी-नजानी कन ।
सोही भाग्य बनेर दुःख-सुख यो * आयो यहाँ देखिन ॥५२॥
त्यै वेला सहदेवले उठि भने * हेरेर दाजू तिर ॥
जूवामा छलले जित्यो शकुनिले * सर्वस्व हाम्रो तर ॥
मैले मार्न सकीनँ त्यै बखतमा * त्यो दुष्टलाई त्यहाँ ।
सोही कारण धर्म-संकट पर्‍यो * यो हामिलाइ यहाँ ॥५३॥
बोले अर्जुन दिक्क मानि मनमा * क्यै रुक्ष वाणी गरी ।
त्यो राधासुत कर्णको अघि सहें * तीखा वचन् बेसरी ॥
पर्थ्यो मार्नु तुरुन्त मार्न नसकी * छाडी दिंदा त्यो घरी ।
व्यर्थैमा पनि धर्म-संकट पर्‍यो * त्यै हेतुले यो घरी ॥५४॥
दाजूको मुख हेरि क्रोधित हुँदै * भन्दा भए भीमले ।
ल्यायो द्रौपदिलाइ पक्रि करले * जुन् दुष्टले रोषले ॥
त्यो दुःशासन मार्नलाइ त्यहिं नै * मैले नसक्ता महाँ ।
सोही कारण धर्म-संकट भयो * यो हामिलाई यहाँ ॥५५॥
भाईका सुनि बात बाणसरिका * चिन्ता असाध्यै बढी ।
बोले धर्म-कुमार हे नकुलजी ! * यो वृक्ष माथी चढी ॥
देख्छौ कि नगिचै जलाशय कुनै * होला अवश्यै यहाँ ।
दाजूको सुनि यो हुकुम् रुख चढी * हेर्दा भए छिन्महाँ ॥५६
वर्ली त्यो रुखबाट श्री नकुलले * बिन्ती गरे सादर ।
त्याहाँ एक नगीचमै जल भरी * देखिन्छ ठूलो सर ॥
येती बात भनेर पात्र शरको * ठोक्रो उचाली लिए ।
चाँडै ल्याई पुर्‍याउँछु जल भनी * दौडेर जाँदा भए ॥५७
केही दूर पुगी जलाशय ठुलो * देखे सफा सुन्दर ।
पानी खान भनी सहर्ष तटमा * जाँदै थिए ती तर ॥

मेरो उत्तर, प्रश्नको नदिइ यो * पानी नछोऊ भनी ।
त्यै वेला अति स्पष्ट एक हुनगो * आकाशवाणी पनि ॥५८॥
त्यस्को क्यै मनमा विचार नगरी * पानी छुना साथमा ।
सारा चेत हराइ मूर्छित भई * लोटे त्यहीं भूमिमा ॥
आएनन् बहुतै अबेर हुनगो * फर्कन्न भाई किन ?
भन्दै श्री सहदेव, भीम क्रमले * खोज्दै गए अर्जुन ॥५९॥
चारै भाइ लडेर मूर्छित भए * मुर्दा सरीका त्यहाँ ।
आए खोज्न भनी युधिष्ठिर स्वयं * चिन्ता परी मन्महाँ ॥
देखे मूर्छित चेतना रहितका * ती चार भाई कन ।
लागे गर्न विचार चिन्तित हुँदै * त्यो मृत्युको कारण ॥६०॥
पानी खाइसकी विचार गरुँला * भन्ने चिताए जब ।
पैह्ले झैं अति स्पष्ट फेरि सुनियो * आकाशवाणी तब ॥
पानी स्पर्श गरेर धर्म-सुत यी * भाई मरे झैं गरी ।
मछौं व्यर्थ नछोउ यो जल तिमी * बाँच्ने भए यो घरी ॥६१॥
तिम्रा भाइहरू मरे सकल यो * आज्ञा नमानी कन ।
मर्नैछौ सहजै तिमी पनि वृथा * जिद्दी गरे यै क्षण ॥
देख्नुभो बकुलो युधिष्ठिरजिले * यो बात भन्ने त्यहाँ ।
लाग्नूभो अनि सोध्न बात उभिई * त्यस्का अगाडीमहाँ ॥६२॥
को हौ वीर, बताउ यक्ष अथवा * गन्धर्व विद्याधर ।
देख्तैमा तिमीलाई घोर वनमा * लाग्दैछ ठूलो डर ॥
यस्तो बात सुनी युधिष्ठिरजिको * बोल्यो बकुल्लो पनि ।
पक्षी हौन म यक्ष हूँ बुझ तिमी * यिन्लाई मार्ने भनी ॥६३॥
मैले सोद्धछु प्रश्न जो सकलको * देऊ तिमी उत्तर ।
पानी खाइ लिएर भाइहरू यी * फर्कैर जाऊ घर ॥

त्यस्को बात सुनी युधिष्ठिरजिले * 'के प्रश्न हो' भन्नुभो ।
त्यै प्रश्नोत्तर श्रेष्ठ लोकहितका * निम्ती यहाँ लेखियो ॥६४॥



यक्ष-युधिष्ठिर संवाद

प्रश्न–कस्ले सधैं उदय पार्दछ सूर्यलाई ।
तिन्का चतुर्दिक छ को भन त्यो मलाई ॥
कस्को मिलेर भर छन् नभमा अडेका ।
केमा प्रतिष्ठित भई रवि छन् बसेका ॥६५॥

उत्तर–चिद्‌ब्रह्मले उदय पार्दछ सूर्यलाई ।
छन् देवता वरिपरी सब जान भाई ॥
छन् सत्यले सगरमा स्थित सूर्य जान ।
हुन्छन् प्रतिष्ठित ति ईश्वरबाट मान ! ॥६६॥

प्रश्न–कस्लाइ श्रोत्रिय मनुष्य भनेर मान्नू ?
कस्लाइ भूप ! जन श्रेष्ठ भनेर ठान्नू ?

कुन् कामले जन हुनन् भन तेजवान ?
बन्छन् बुझाउ कसरी जन बुद्धिमान ? ॥६७॥
उत्तर–वेदज्ञ विप्रकन श्रोत्रिय श्रेष्ठ जान।
जो गर्दछन् तप तिनैकन योग्य मान ॥
राखेर धैर्य जन बन्दछ तेजवान।
सत्संगबाट जन बन्दछ बुद्धिमान ॥६८॥
प्रश्न–देवत्व के छ द्विजमा भन पूज्य पार्नें ?
के धर्म हो सुजनले पनि मुख्य ठान्ने ?
तिन्को मलाई भन मानिस भाव के हो ?
व्यर्थैं सदा दुख दिने भन दुष्ट को हो ? ॥६९॥
उत्तर–स्वाध्यायमा निपुण ब्राह्मण पूज्य हुन्छन्।
हो धर्म सत्पुरुषको तप गर्नु भन्छन् ॥
मर्नू र जन्मनु कहिन्छ मनुष्य-भाव।
निन्दा गरे जन कहिन्छ सदा खराब ॥७०॥
प्रश्न–सम्मानपूर्ण जनजीवन बुद्धिमान।
भोगेर बस्छ सुख इन्द्रियको तमाम ॥
फेरेर श्वास दिन-रात सबै समान।
बाँचे पनी मृतक झैं जन को छ जान ॥७१॥
उत्तर–आफ्ना कुटुम्बहरुको अनि देवताको।
आत्मा र पितृ अतिथी यति पाँच जन्को ॥
गर्दैन जो भरण-पोषण योग्य जानी।
बाँचे पनी मृतक झैं बुझ सोहि प्राणी ॥७२॥
प्रश्न–भारी छ को पृथिवीदेखि बढी बताऊ।
आकाशदेखि पनि उच्छ छ के जनाऊ।

को वायुदेखि बढि सक्छ दगुर्न भाई !
तृणदेखि के छ बढि लौ भन त्यो मलाई ॥७३॥
उत्तर–हो मातृ-गौरव बढी बुझ पृथ्विदेखी ।
चाँडो दगुर्छ मन बेसरि वायुदेखि ॥
आकाशदेखि पनि उच्च पिताजि ठान्छु
चिन्ता बढी छ तृणदेखि मनेर मान्छु ॥७४॥
प्रश्न–निद्रा परे पनि छ नेत्र नचिम्लने को ?
चेष्टा हुँदैन भन जन्म लिएर कस्को ?
संसारमा हृदयहीन छ को जनाऊ !
को बढ्छ वेगसित भूप ! छिटो बताऊ ॥७५॥
उत्तर–चिम्लन्न नेत्र निंदमा पनि मत्स्य जान ।
चेष्टा हुँदैन फुलमा भनि बात मान ॥
हे यक्षजी ! हृदय पत्थरको हुँदैन ।
तीखो गती नदिसरी अरु देखिंदैन ॥७६॥
प्रश्न–को मित्र हुन्छ जनको परदेश गर्दा ?
को हुन्छ मित्र भन रोग र कष्ट पर्दा ॥
को मित्र हुन्छ जन मृत्यु समीप पुग्दा ।
को हो सखा भन गृहस्थ भएर बस्ता ॥७७॥
उत्तर–हुन् मित्र श्रेष्ठ सँगमा परदेश गर्ने ।
हुन् वैद्य नै बुझ सखा सब रोग हर्ने ॥
हो मित्र दान जब धड्दछ मृत्यु आई ।
पत्नी र मित्र अति श्रेष्ठ गृहस्थलाई ॥७८॥
प्रश्न–के श्रेष्ठ हो कृषक खातिर हे नरेश !
कर्तव्य हुन्छ धनिको भन के विशेष ॥

कस्लाई मुख्य अतिथि भनि मान्नुपर्छ ?
के वस्तु अमृत भनीकन खानुपर्छ ॥७९॥
उत्तर–वर्सात नै कृषक खातिर श्रेष्ठ जान ।
दाता भएर धनिको बुझ बढ्छ मान ॥
हुन् पाहुना असल अग्नि भनेर जान्नू ।
गो-दुग्ध अमृत भनीकन नित्य मान्नू ॥८०॥
प्रश्न–कुन् हो सखा असल ईश्वरले दिएको ?
त्यस्को सखा स्वरुप श्रेष्ठ बताउ के हो ?
के दिन्छ जीवन सबै जनलाइ भाई ?
कुन् दानले भन सकिन्न ठूलो कमाइ ॥८१॥
उत्तर–आश छ मित्र बुझ ईश्वरले दिएको ।
पत्नी सखा स्वरुपकी विधिले रचेको ॥
वर्षा छ जीवन सुअन्न दिने हुनाले ।
विद्या कदापि सकिइन्न सधैं दिनाले ॥८२॥
प्रश्न–राम्रो छ के गुण ठूला जनलाइ याहाँ ।
कुन् श्रेष्ठ हो धन सबै धनहेरु माहाँ ॥
कुन् लाभमा सकल उत्तम लाभ मान्छौ ?
कुन् सौख्यमा सकल श्रेष्ठ भनेर ठान्छौ ॥८३॥
उत्तर–चातुर्य नै सकलमा गुण श्रेष्ठ मान ।
विद्या छ श्रेष्ठ सब संपतिमा प्रधान ॥
आरोग्य हो सकल लाभ विषे प्रसिद्ध ।
संतोष हो सुख सबै सुखमा छ सिद्ध ॥८४॥

प्रश्न–कुन् धर्मलाइ तिमि श्रेष्ठ भनेर मान्छौ ?
शिक्षा र अर्ति दिन कस्कन ठीक मान्छौ ?
के वस्तु राखि वशमा मन शोक जान्छ ?
कुन् मित्रता नटुटि नित्य वढी रहन्छ ॥८५॥

उत्तर–हो श्रेष्ठ धर्म सबमा उपकार गर्नू ।
अर्ती दिंदा असल पात्र कुपात्र हेर्नू ॥
रोकेर राख्नु मनलाइ र शोक हुन्न ।
मैत्री गरे सुजनको कहिल्यै खिइन्न ॥८६॥

प्रश्न–कुन् त्यागले जन सुपात्र ठुलो कहिन्छ ?
चिन्ता र शोक नहुने मन त्याज्य के छ ?
कुन् त्यागले जन सदैव धनी ठहर्छ ?
त्यागेर के चिज मनुष्य सुखी रहन्छ ? ॥८७॥

उत्तर–त्यागे घमण्ड सबको प्रिय पात्र बन्छ ।
त्यागेर क्रोध जन शोक रहित् रहन्छ ॥
जो त्याग्छ मोह जन त्यो धनवान् कहिन्छ ।
त्यागेर लोभ जन नित्य सुखी रहन्छ ॥८८॥

प्रश्न–के हेतु ब्राह्मणहरूकन दान दिन्छन् ?
के हेतु द्रव्य नट नर्तकलाई बाँड्छन् ?
के हेतु सम्पति दिई जन आफ्नू पाल्छन् ?
के हेतुले कर ति भूपतिलाइ दिन्छन् ॥८९॥

उत्तर–सद्धर्म निम्ति द्विजलाई दिइन्छ दान ।
सत्कीर्ति निम्ति नटलाइ दिइन्छ दान ॥

सम्पत्ति काम लिन सेवकलाइ दिन्छन् ।
मन्मा डराई कर भूपतिलाइ दिन्छन् ॥९०॥
प्रश्न-ज्ञानी कहिन्छ भन कुन् जन लोकमाहाँ ?
को गर्दछन् भन समान सुदृष्टि याहाँ ?
ख्याती छ उत्तम दया भनि नाम कस्‌को ?
भन्छन् सबै सरल छन् जनलाइ कस्तो ? ॥९१॥
उत्तर-ज्ञानी कहिन्छ उहि जो छ विनम्र त्यागी ।
जो हेर्छ पक्ष नगरी त्यहि हो विरागी ।
भन्छन् दया सकलको हित गर्नु भाई !
मान्छन् सबै सरलता समदृष्टि लाई ॥९२॥
प्रश्न-कुन् वस्तुले सकल विश्व छ ढाकिएको ?
कुन् हेतु तेज उसको छ नदेखिएको ?
त्यागिन्छ मित्र भन कारण के परेर ?
मिल्दैन जान किन स्वर्ग मरी सकेर ? ॥९३॥
उत्तर-अज्ञानले सकल विश्व छ ढाकिएको ।
बढ्दा तमोगुण-प्रकाश बुझिन्न त्यस्‌को ॥
त्याग्छन् सुमित्र परि लोभमहाँ मनुष्य ।
जाँदैन स्वर्ग जन मोह भए अवश्य ॥९४॥
प्रश्न-राजन् ! बताउ अब दुर्जय शत्रु कुन् हो ?
कैहे विनाश नहुने भन व्याधि के हो ?
कस्ता मनुष्यकन सज्जन श्रेष्ठ जान्नु ?
कुन् व्यक्तिलाइ भन दुर्जन ठानि त्याग्नु ॥९५॥

उत्तर–हो क्रोध शत्रु बलवान्, जनको अजेय ।
हो लोभ व्याधि जनको भनि जान यक्ष ॥
मानिन्छ सज्जन सधैं उपकार गर्नें ।
हो दुष्ट, दुर्मति छ जो अपकार गर्ने ॥९६॥
प्रश्न–भन अब नृपते ! छन् को सुखी लोकमाहाँ ।
कुन चिज बहुतै आश्चर्य लाग्ने छ यहाँ ॥
असल सुगम बाटो, 'बात' यस्को जवाफ ।
दिइ जल पिइ जाउ भूपते ! हर्ष साथ ॥९७॥
उत्तर–दिनको आठौं भागमा एक छाक ।
सागै सिस्नू खान्छ जो प्रेम साथ ॥
अर्काको रिन् छैन त्यो दूरदेश ।
भन्छू मैले हो सुखी त्यै विशेष ॥९८॥
देख्दैछन् जनहेरुले दिन-दिनै * प्राणी मरेका तर ।
मर्नैछू य पनी भनेर मनमा * मान्दैन कोही डर ॥
मेरो मृत्यु हुँदैन कल्प भरिमा * भन्ने विचार्छन् बरू ।
यो भन्दा बढि हुन्छ के भन तिमी* आश्चर्य ठूलो अरू ॥९९
भिन्नै छन् मत शास्त्रको र श्रुतिको * मानिन्छ भिन्नै गति ।
छन् भिन्नै ऋषिहेरुका मत पनी * मिल्दै नमिल्ने कति ॥
ठान्छन् तत्व छ धर्मको निहित क्यै * गूढार्थ झैं प्वाल्मा ।
जुन् बाटो लिइ पूर्व सज्जन हिंडे *हिंड्नू त्यही मार्गमा ॥१००
ठूलो मोहमयी कराहि त्यसमा * आगो गरी सूर्यको ।
पार्छन् काल स्वरूप ईश्वर स्वयं * पक्कू सबै जीवको ॥

थप्तेछन् दिन-रातरूप समिधा * त्यस्मा स्वयं ईश्वर ।
तिम्रा प्रश्न विचारका बुझि लिए * हे यक्ष, यो उत्तर ॥१॥
पाएँ उत्तर ठीक हे नरपते ! * मैले सुध्याए जति ।
तिम्रो बुद्धि विवेकदेखि मनमा * आनन्द लाग्यो अति ॥
चारै भाइमहाँ बचाउँछु कुनै * योटा त्यसै कारण ।
चाहन्छौ तिमि भाइ कुन् नरपते ! * सोचेर चाँडी भन ॥२॥
बोले धर्मकुमार यक्ष ! सबमा * बाठो र अग्लो छ जो ।
लामा हात र नेत्र चञ्चल हुने * प्यारो सबैको छ जो ॥
माद्रीको सुत वीर श्रीनकुलजी * स्नेही हुनाले गरी ।
तिन्लाई पहिले बचाई दिनुहोस् * हे यक्षजी ! यै घरी ॥३॥
राजन् ! भीम पराक्रमी र बलिया* विख्यात छन् लोकमा ।
उस्तै वीर ठूला धनञ्जय सरी * क्वै छैन संसारमा ॥
यस्ता भाईहरू सहोदर दुवै * छाडी प्रतापी कन ।
माग्छौ माद्रिकुमारको भन तिमी * के हेतुले जीवन ? ॥४॥
माद्री-कुन्ति दुवै समान जननी * ठान्छु म त्यै कारण ।
दोटै पुत्रवती सदा बनि रहुन् * भन्ने विचारी कन ॥
न्यायी भन्दछ लोकले मकन लौ * त्यै धर्म निम्ति पनि ।
माग्छु जीवन माद्रिका तनयको * देऊ दयालु बनी ॥५॥
बोले यक्ष—यथार्थ रूपसँग जो * मेरो दियौ उत्तर ।
त्याग्दैनौ तिमी धर्मको भर ठुलो * ऐश्वर्यका खातिर ॥
चारै भाइ जिलाउँछु नरपते ! * यै रेतुले सादर ।
जे इच्छा मनमा छ माग अहिले * दिन्छु म सोही वर ॥६॥

येती भनेर निजरूप प्रकट् गराए।
हूँ धर्मराज म भनेर स्वयं चिन्हाए॥
तिम्रो स्वभावकन जाँच्न भनेर आएँ।
पाएर उत्तर यथार्थ निकै रमाएँ॥७॥
पैह्ले गराइ कन जीवित चार भाइ।
आज्ञा दिए अनि युधिष्ठिर भूपलाई॥
बाबू! सहर्ष वरदान म दिन्छु माग।
शंका र दुःख मनको सब ताप त्याग॥८॥

यो आज्ञा सुनि श्री युधिष्ठिरजिले * बिन्ती गरे सादर।
पाऊँ ब्राह्मणको प्रभो म अरणी * त्यै हुन्छ ठूलो वर॥
यो बिन्ती सुनि यज्ञपात्र द्विजको * ल्याएर सुम्पी दिए।
छोरालाइ ति धर्मराज सहसा * हाँसेर भन्दा भए॥९॥
मैले नै मृगरूप धारि अरणीं * ल्याएँ गई विप्रको।
हाम्रो भेट भयो नमान मनमा * संताप क्यै बातको॥
हे बाबू! तिमि माग केहि खुशिले* दिन्छु म अर्को वर।
यो आज्ञा सुनि श्रीयुधिष्ठिरजिले * माग्नू भयो सादर॥१०॥
हामी गुप्त भएर वर्ष दिन गै * जाहाँ बसे तापनि।
हामीलाइ कदापि चिह्न नसकुन् * खोज्दा यिनै हुन् भनी॥
लागे भन्न ति धर्मराज खुशि भै * तिन्ले भनेको सुनी।
जे माग्यौ वरदान त्यो दिइसकें * कर्तव्य मेरो भनो॥११॥
जाओ बस्न तिमीहरू खुशि भई * इच्छा छ जुन् देशमा।
चिन्दैनन् अरुले यही शरिरले * डुल्दा पनि लोकमा॥

इच्छा माफिक रूप धारण पनि * छौ गर्न सक्ने सब ।
आशीर्वाद म दिन्छु संकट कुनै * पर्दैन अर्को अब ॥१२
अन्तर्धान् भइ धर्मराज सहमा * पाल्नू भयो धाममा ।
आफ्नू आश्रममा फिरे खुशि हुँदै * पाँचै जना साथमा ॥
यो सम्चार गई निवेदन गरे * श्री धौम्यलाई सब ।
आफ्ना डाकि सबै छिमेकि कुटिमा* भन्दा भए पाण्डव ॥१३॥
हामी पाउँ विदा, छ वर्ष दिन जो * बाँकी रहेको अब ।
बस्नू पर्दछ गुप्त भैकन कतै * रक्षार्थ हामी सब ॥
यस्तो विन्ती सुनी युधिष्ठिरजिको* भन्दा भए धौम्यले ।
राजन् ! दिक्क नमान क्यै, दिन सबै* बित्नेछ आनन्दले ॥१४।



गुरु धौम्यको उपदेश

मारे गुप्त रहेर शत्रु पहिले * धोताहरूले पनि ।
धेरै कष्ट सहे लुकेर रहँदा * मौका छ यस्तै भनी ॥

श्री नारायण गुप्त भैकन रहे * श्री इन्द्रको वज्रमा ।
पाउँदैछन् अङ्ग दग्ध शत्रु, रविले * गुप्तै रही भूमिमा ॥१५॥
मारे रावण रामले नृपतिका * छोरा बनी मानिस ।
जान्दैछौ तिमि यो, नत्याग मनको * हे भूपती ! साहस ॥
यो शिक्षा सुनि धौम्यको उठि भने * गर्जेर श्री भीमले ।
दाजू ! लड्न तयार छौं हजुरको * तत्काल आज्ञा मिले ॥१६॥
एक्लैले पनि दुष्ट कौरव सबै * मार्छन् गई अर्जुन ।
मार्नेछु म पनि अवश्य रणमा * छानेर वैरी कन ॥
उस्तै छन् सहदेव औ नकुलजी * योद्धा प्रतापी तर ।
लाचारी छ हजूरको हुकुम क्यै * पाइन्न त्यै खातिर ॥१७॥
तेजस्वी सुनि भीमको यति कुरा * संपूर्ण खुशी भए ।
आशीर्वाद दिई छिमेकि कुटिमा * फर्केर आफ्नू गए ॥
पाञ्चाली, गुरु धौम्य पाण्डव सबै * त्यागेर त्यो आश्रम ।
सल्लाहा गरुँ लौ भनीकन गए * क्यै दूर सोही क्षण ॥१८॥
ज्ञानी-सज्जनको, सुपात्र द्विजको * गर्दै रही चाकरी ।
जो सुन्ला वनपर्वको शुभ कथा * श्रद्धा र भक्ती धरी ॥
त्यस्का पूर्ण हुनन् मनोरथ सबै * संकष्ट जाला टरी ।
भोगी सौख्य यहाँ मरेपछि उहाँ * गर्नन् दया श्रीहरी ॥१९॥

इति वनपर्व समाप्त ।



# सनातन हिन्दू धर्मको सिद्धान्त

---

सत्मार्गको पालन गर्नेले मात्र जान्न सकिने

**कुनै सत्य वस्तु छ**

त्यस सत्यलाई जान्न सत्-मार्गमा चल्नु नै

# सनातन धर्म

हो।



अगस्तिले समुद्र-पान गरेको ( पृष्ठ २०३ को )

# महाभारत-विराटपर्व

## प्रारम्भः

पाण्डवहरूको विराटनगर प्रस्थान—

आठोटा बाहुलीमा नियमसित सदा * शंख - चक्रादि धर्दी ।
आकारैले विरोधी शठरिपु-कुलमा * भीति सञ्चार गर्दी ॥
दुर्गा देवी त्रिनेत्रा त्रिभुवन जननी * -बाट कल्याण धारा ।
वर्षोस् भन्दै झुकाई शिर पद युगमा * नित्य गर्छ पुकारा ॥१॥
श्री जन्मेजयले सुध्याउनु भयो * बिन्ती गरी हे मुनि !
मेरा पूर्वज पाँच पाण्डवहरू * अत्यन्त दुःखी बनी ॥
काटेथे डुलि बाह्र वर्ष वनमा * सन्तापका ती दिन ।
काटे गुप्त रहेर वर्ष दिन त्यो * कुन् चालले गैकन ? ॥२॥
बस्थिन् भूप विराटका महलमा * ब्रह्माण्डकी सुन्दरी ।
रानी द्रौपदि गुप्त भैकन, बनी * दासीसरी के गरी ? ॥
वैशम्पायनले भने नरपतै ! * पाई पिताको वर ।
सल्लाहा गरुँ लौ भनीकन गए * पाँचै जना क्यै पर ॥३॥
सोधी बक्सनुभो युधिष्ठिरजिले * सोचेर हे अर्जुन !
ठान्छौ बस्न तिमी सुयोग्य अहिले * कुन् देशमा लौ भन ॥
बोल्ते अर्जुन श्री युधिष्ठिरजिले * आज्ञा भएको सुनी ।
बस्ने योग्य अनेक देशहरू छन् * साना र ठूला पनि ॥४॥
पैहे जो यमराजले वर दिए * कल्याणका खातिर ।
हामी यै रूपले जहाँ पनि गई * बस्छौं नमानी डर ॥

चिन्दैनन् अरूले भनेर मनमा * पक्का भए तापनी ।
भन्छु नाम अनेक देशहरूको * छन् योग्य बस्ने भनी ॥५
चेदी, मत्स्य र शाल्व,मल्ल नगरी* सौराष्ट्र यौगन्ध र ।
कुन्ती भोज, दशार्ण शूर सबमा * पांचाल छन् सुन्दर ॥
आज्ञा हुन्छ गएर जुन् नगरमा * बस्ने भनी नाथको ।
बस्छौं हामीहरू बुझेर मनमा * हो खेल यो भाग्यको॥६
चिन्ता गर्नु वृथा छ लौ हजुरले * यस्मा कुनै बातको ।
आज्ञा गर्नु भयो युधिष्ठिजिले * बिन्ती सुनी भाइको ।
पायौं आशिष धर्मराज खुशि भै * कल्याणको जुन् वर ॥
मिथ्या हुन्न भनेर ठान्छु मनमा * विश्वास पक्का, तर ॥७॥
सल्लाहा पनि गर्नुपर्दछ बसी * राम्रो विचारी कन ।
ज्ञानी वृद्ध विराट छन् नरपती * सत्पात्र औ सज्जन ॥
काट्नू पर्छ बसी तिनै नृपकहाँ * संकष्टका यी दिन।
गर्नेछौ गई काम के तिमीहरू * चारै जना लौ भन ॥८॥
दाजूको सुनि बाय आदर गरी * भन्दा भए अर्जुन ।
देखी कष्ट हजूरको नरपते ! * आत्तिन्छ मेरो मन ॥
ज्ञानी सत्यप्रतिज्ञ धार्मिक गुणी * राजा प्रजा-पालक ।
ठान्छन् श्रेष्ठ हजूरलाइ जनले * सद्धर्मका रक्षक ॥९॥
जस्को श्रेष्ठ हुकुम् चल्यो पृथिवीमा * राजा भई बेसरी ।
ऐल्हे बस्नु त्यहाँ गरेर कसरी * ती भूपको चाकरी ॥
के गर्ने मनमा छ लौ हजुरको * राजा कहाँ गैकन ।
के गर्दा सुख हुन्छ नाथकन यै * गर्दै सधैं चिन्तन ॥१०॥
दैवाधीन भएर कष्ट सहनू * पर्ने भयो नाथले ।
छाती आज चिरिन्छ हामि सबको * यौटा यही बातले ॥

सक्छौं हामिहरू त गर्न सहजै * जे पर्छ जस्तो जहाँ ।
गर्नू हुन्छ हजुर काम गइ के * ऐहे ति राजाकहाँ ॥११
आज्ञा गर्नु भयो युधिष्ठिरजिले * बिन्ती सुनी पार्थको ।
हे भाई हरु हो ! नमान मनमा * चिन्ता कुनै बातको ॥
पासाका जति खेल छन् छलसहित्* मैले सबै जान्दछु ।
प्यारो मित्र थिएँ युधिष्ठिरजिको * पैहे त्यहाँ भन्दछु ॥१२

गर्छु विचारि बनि भूपतिको म काम ।
सोधे भने मसंग भन्दछु कङ्क नाम ॥
मेरा निमित्त तिमिहरु नमान सुर्ता ।
बस्ता तहाँ मकन मिल्छ सबै सुविस्ता ॥१३॥

जस्ले पर्वत गन्धमादन महाँ * एक्लै लडाइँ गरी ।
मारे यक्ष तथा हिडिम्ब बलियो * जस्बाट गैगो मरी ॥
जस्ले मार्न सके जटासुर ठुलो * योद्धा तथा राक्षस ।
ल्याए दिव्य सरोज, पाइ कपिको * आशीष औ साहस ॥१४॥
त्यस्ता भीम पराक्रमी र बलमा * विख्यात छौ लोकमा ।
गर्छौ काम गएर के भन तिमी * ती भूपको देशमा ॥
बोले भीम पकाउने विधिहरू * मैले सबै जान्दछु ।
भान्साको सब काम भूपतिकहाँ * पाउँ भनी माग्दछु ॥१५
भान्से काम दिई मलाई नृपले * राख्छन् खुशी भैकन ।
राजी पार्दछु भूपलाई म सधैं * ख्वाई मिठो भोजन ॥
इच्छा भूपतिले गरे यदि भने * तिन्को चिताई हित ।
कुश्ती खेल्छु गजेन्द्र खूब बलिया * साँढे पहल्मान्सित ॥१६॥
सोधे नाम म भन्छु वल्लभ तहाँ * बिश्वास पर्ने गरी ।
गर्नेछु म विराटको नरपते ! * आनन्दले चाकरी ॥

भान्साको गरि काम पाण्डवकहाँ * पैह्ले बसेको थिएँ ।
जाँदा ती वनवासतर्फ म यहाँ * बस्ने इरादा लिएँ ॥१७॥
सोध्नू भो अनि श्री युधिष्ठिरजिले* साह्रै दुखाई मन ।
सम्झेरै अझ कष्टका दिन अरू * थाल्छु म झन् आत्तिन ॥
मानिन्छन् जसरी सबै नदिमहाँ * ठूला भनी सागर ।
जस्तै सिंह गनिन्छ श्रेष्ठ पशुमा * सम्पूर्ण पृथ्वीभर ॥१८॥
पक्षीमा बुझ श्रेष्ठ छन् गरुड नै * श्री विष्णुका वाहन ।
त्यस्तै छन् धनुधारी वीरहरुमा * विख्यात यी अर्जुन ॥
पाए खाण्डव दाहमा विजयश्री * इन्द्रादि द्यौता जिती ।
वेन्ही वासुकिकी हरेर बलले * ल्याए उलूपी सती ॥१९॥
जस्को ख्याति ठुलो छ वीरहरुमा * विख्यात संसारमा ।
गर्छन् पार्थ गएर काम भन के * ती भूपका देशमा ॥
शक्तीमा बलमा महेन्द्र सरिका * छन् सूर्य झैं तेजमा ।
साक्षात् कृष्णसमान ठान्दछु मता * ठूला धनुर्धारिमा ॥२०॥
तेह्रौं सूर्यसरी छ तेज यिनको * श्री द्वादशादित्यमा ।
ताँदोको खत देख्छु प्रष्ट अहिले * यिन्का दुवै हातमा ॥
सक्नेछन् कसरी वृकोदर ! यिनी * त्यो चिन्ह छोपी लिन ।
गर्छन् के गई काम सोध तिमि नै * राजाकहाँ अर्जुन ॥२१॥
बोले अर्जुन श्री युधिष्ठिरजिले * आज्ञा भएको सुनी ।
पाएको छु सराप वर्ष दिन नै * बस्ने नपुंसक् बनी ॥
पूरा उर्वशिको सराप यसरी * होला भनी ठान्दछु ।
आफ्नू नाम बृहन्नला नृपतिले * सोधे भने भन्दछु ॥२२॥
ढाक्नेछु धनु-वाणका खत सफा * चूरा लगाई कन ।
नारी सुन्दर बन्दछु म तनमा * पैहेर आभूषण ॥

पैह्लेका नृपहेरुको सकलको * गर्छु मनोरञ्जन ।
नाची नर्तक रूपमा गरि त्यहाँ * सत् कीर्तिको वर्णन ॥२३॥
रानी छोरि बुहारिलाइ म त्यहाँ * दिन्छु सधैं तालिम ।
भित्री खोपिमहाँ नपुंसक बनी * राजाकहाँ बस्छु म ॥
बस्थें नाच सिकाइ पाण्डवकहाँ * ऐह्ले विपत्ती परी ।
आएँ बस्न हजूरका महलमा * गर्छु भनी चाकरी ॥२५॥
चिन्दैनन् अरुले मलाइ नृपते ! * देखेर त्यो रूपमा ।
मेरा निम्ति नमानि बक्सनुहवस् * चिन्ता कुनै बातमा ॥
बिन्ती अर्जुनको सुनी, नकुलजी* राजा कहाँ गैकन ।
गर्नेछौ तिमि काम के र मनको * इच्छा मलाई भन ॥२५॥
भाई छौ सुकुमार देह बहुतै * राम्रो हुनाले गरी ।
यस्तो कोमल देहले नृपतिको * गर्छौ तिमी चाकरी ॥
साह्रै स्नेह गरेर धर्मसुतले * आज्ञा भएको सुनी ।
बोल्ले नम्र भएर श्री नकुलजी * यो काम गर्छु भनी ॥२६
घोडाको सब काम अस्तबलको * जानी रहेको हुँदा ।
गर्नेछु गइ काम अश्वहरुको * मैले सदा सर्वदा ॥
सोधे नाम भने सहर्ष नृपले * भन्छु म हुँ ग्रन्थिक ।
गर्थें काम यही म पाण्डवकहाँ * मै अश्वको रक्षक ॥२७॥
आएँ दुःख परेर नै हजुरको * गर्छु भनी चाकरी ।
भन्नेछु यहि बात भूपतिकहाँ * बिन्ती गरी राम्ररी ॥
चिन्नेछन् अरुले मलाइ यसरी * बस्ता त्यहाँ के गरी ?
इच्छा जे मनमा थियो भनिसकें * मैले सबै यो घरी॥२८॥
बिन्ती धर्मकुमारले नकुलको * सुन्नू भएथ्यो जब ।
भन्नूभो सहदेवजी भन तिमी * आफ्नू इरादा अब ॥

बोले श्री सहदेव धर्मसुतले * आज्ञा भएको सुनी ।
गर्नेछु गइ काम गाइहरुको * मैले गोठालो बनी ॥२९॥
सोधे सादर तन्तिपाल भनि नाम् * भन्नेछु राजासित ।
गर्नेछु सब काम योग्य रितले * तिन्को चिताई हित ॥
पैह्ले राज्य छँदा स्वयं हजुरको * आज्ञा हुनाले गरी ।
गर्थें काम समस्त गाइहरुको * रक्षा गरी राम्ररी ॥३०॥
सोही कारण काममा निपुण छु * गाई तथा गोठको ।
यस्मा नाथ ! नमानिबक्सनुहवस * चिन्ता कुनै बातको ॥
सल्लाहा सुनि चार भाइहरुको * इच्छा बुझी राम्ररो ।
बस्नेछिन् कसरी त्यहाँ अब भनुन् * यी द्रौपदी सुन्दरी ३१॥
जस्लाई कहिल्यै परेन घरमा * बत्ती उकास्नू पनि ।
यस्ती पाण्डव वीरकी प्रियतमा * गर्छिन् त्यहाँ के यिनी ॥
बोलिन् द्रौपदि श्री युधिष्ठिरजिले * आज्ञा भएको सुनी ।
सुर्ता गर्नु बृथा छ नाथ, यसरी * के पुग्छ दुःखी बनी॥३२॥
रक्षा गर्न समर्थ छु शरिरको * आफ्नू म राम्रोसित ।
मेरा निम्ति यहाँ हुनू हजुरले * ठान्छु बृथा चिन्तित ॥
सैरन्ध्री भइ श्री विराट नृपकी * रानी सुदेष्णा कहाँ ।
बस्नेछु म गएर हे नरपते ! * पक्का गरें मन्महाँ ॥३३
वेणी बन्धनमा र कामहरुमा * साह्रै सिपालु हुँदा ।
राख्थिन् द्रौपदिले मलाई खुशिले * आफ्नू नगीचै सदा ॥
एक्लै दुःख परी गइन् सँगमहाँ * आफ्ना पतीका तिनी ।
आएँ कारण त्यै परेर म यहाँ * आधार मिल्ला भनी॥३४॥
बिन्ती यै रितले गरी जतनले * तिन्लाइ राजी गरी ।
रक्षा आफ्नु गरी ठुलो जतनले * गर्छु त्यहीं चाकरी ॥

काट्नूपर्छ गई तिनै नृप कहाँ * संकष्टका यी दिन ।
चिन्नन् कि अरूले भनेर मनमा * पर्दैन चिन्ता लिन ॥३५॥
रानी द्रौपदिको युधिष्ठिरजिले * बिन्ती सुने यो जब ।
लागे भन्न सहर्ष प्रेमसित यो * मीठा वचन्ले तब ॥
हे प्यारी ! तिमिले भन्यौ जतिकुरा* आनन्द लाग्यो सुनी ।
नारी हौ कुलकी र यो सब सह्यौ * आपत्ति हे भामिनी॥३६॥
हाम्रो कष्ट हटाउने सुख हुने * साम्राज्य त्यो पाइने ।
तिम्रो शील स्वभाव नै छ सुमुखी * आनन्द ठूलो दिने ॥
सक्छन् स्वप्न विपत्ति श्रेष्ठ कुलका* नारीहरूले सदा ।
सोही कारणले सतर्क रहनू * राजाकहाँ सर्वदा ॥३७॥
यस्तै अर्तिहरू अरू पनि दिई * श्री द्रौपदीजी कन ।
बोले धर्म-कुमार गर्नु अब लौ * ढीलो वृथामा किन ?
जाउन् लौ रथ मात्र लीकन छिटै * श्री इन्द्रसेन् द्वारका ।
जो छन् सेवक सेविकागण यहाँ * सम्पूर्ण पाञ्चालिका॥३८॥
जाउन् बस्न सहर्ष श्रीद्रुपदको * दर्बारमा यो घरी ।
रक्षा धौम्य गुरुजिले गरिदिनू * यज्ञाग्निको राम्ररि ॥
ऐह्ले पाण्डव छन् कहाँ भनि यहाँ * सोध्छन् अवश्यै पनि ।
योटै बात बुझाइ भन्नु सबले * केही नजान्ने बनी॥३९॥
हामीलाइ बिदा त द्वैतवनमा * पाँचै जनाले दिए ।
आधा रातमहाँ उठेर वनको * बाटो समाई गए ॥
सारा मानिसलाइ यै तरहले * शिक्षा सुअर्ती दिई ।
चाँडो जाउ भनी पठाउनु भयो * पाञ्चाल दुःखी भई ॥४०
सारालाइ बिदा दिएर गुरुको * पाऊ समाई भने ।
अर्ती आशिष बक्सियोस् हजुरले * कल्याण हाम्रो हुने ॥

दुःखी भैकन श्री युधिष्टिरजिले * बिन्ती गरेको सुनी ।
नीतिपूर्वक धौम्यले दिन भयो * शिक्षा दयाणु वनी ॥४१

धौम्यद्वारा राजसेवाको उपदेश

वैशम्पायनले भने नरपते ! * सुन्नू सवस् यो कथा ।
इच्छा पूर्ण हुनेछ जान्छ मनमो *सम्पूण यस्ले व्यथा ॥
हे राजन् ! ऋषि धौम्यले गरि दया * शिक्षा दिए नीतिको ।
ज्ञानी विप्र र शास्त्र, मित्र, रथको * संग्रामको, बन्धुको ॥४२॥
यस्तो आदर गर्नुपर्छ जनले * आज्ञा छ यो शास्त्रको ।
भन्ने ज्ञान छँदैछ पूर्ण तिमिमा * सत्संगको नीतिको ॥
सोध्यौ दस्तुर हो भनेर म पनि * भन्दैछु जाने जति ।
गर्नू हेर विचार खूब तिनिले * पाञ्चालिको भूपति ॥४३॥
तिनूको कोहि रहन्न भूपतिकहाँ * आधार - दाता पनि ।
गर्दै गर्नु विचार पार्थ ! तिमिले * कर्तव्य आफ्नू भनी ॥
बाठोलाइ पनि कठिन् छ नृपको * गर्नू बसी चाकरी ।
गर्नू हुन्न विचार मान-अपमान् * पर्दा अनेकौं थरी ॥४४॥
बस्ता गुप्त रहेर वर्ष दिन यो * बित्नेछ तिम्रो जब ।
गर्नेछौ सुख भोग फेरि सबले * पाई ठूलो वैभव ॥
पालेलाइ नसोधि वा नृपतिको * आज्ञा नपाई कन ।
सोझै भित्र नजानु, बस्नु परदा * राम्रो बुझी आसन ॥४५॥
बस्नू पर्छ गई कसैकन पनि * धक्का नलाग्ने गरी ।
राजाले नसुध्याइ केहि नदिनू * शिक्षा अगाडी सरी ॥
राजाको अनि राज्यको हित हुने * सोचेर राम्रो गरी ।
भन्नू सत्य कुरा मिठो वचनले * बोल्नै परेको घरी ॥४६॥

मर्यादा पनि राख्नुपर्छ नृपको * गर्नु प्रशंसा बरू ।
देखे उद्धत चाल क्रोधित छिटै * हुन्छन् ति राजाहरू ॥
आफ्ना भाइ र पुत्रको पनि कुनै * देखे कुचाला भने ।
गर्छन् यत्न तुरुन्त भूपतिहरू * तिन्लाई त्यागी दिने ॥४७॥
हात्तीमा, रथ, अश्वमा, पलँगमा * भूपालको स्थानमा ।
कैह्ले बस्नु हुँदैन श्रेष्ठ नृपको * साम्ने र दर्बारमा ।
बर्ता बात नबोल्नु भूप खुशि छन् * ऐह्ले मदेखी भनी ।
बोल्यो सत्य भने सदैव नृपको * बस्नेछ प्यारो बनी ॥४८॥
ठान्नू पर्दछ भूपलाइ मनमा * प्रत्यक्ष आगो सरी ।
डर्नुपर्छ अवश्य बोल्दछु भनी * मौका चुकेका घरी ॥
रक्सी, जाँड, जुवारी, चोर अथवा * वेश्या ठुलो दुर्जन ।
गर्दैनन् सहवास दुष्ट जनको * कैह्ले कुनै सज्जन ॥४९॥
घोडामा रथमा र वाहन महाँ * हात्ती र पाल्की चढी ।
राजाको नगिचै सशस्त्र कहिल्यै * जाँदै मजानू बढी ॥
रानी औं दरबारभित्र रहने * केटी सुसारेसित ।
धेरै मेल गरी नबोल्नु कहिले * होवैन त्यस्ले हित ॥५०॥
राजाको अलि दूर नै उभिइनू * बाँया तथा दाहिने ।
सामुन्ने गइ बस्तछन् नृपतिको * संमानमा दाँजिने ॥
खुट्टा हात घुँडा तथा मुख वृथा * हल्लाउँछन् जो बसी ।
हुन्नन् दुष्ट बुझी कुनै नरपती * ती व्यक्तिदेखी खुशी ॥५१॥
मौका पर्न गई प्रसंगवशले * हाँस्नै परे तापनि ।
हाँस्नू पर्छ, हुँदैन बस्न जनले * मूढो समानको बनी ॥
राम्रो, भूप र राजपुत्रहरूले * जे काम हो भन्दछन् ।
सोही काम ठुलो भनेर सहनी * गर्दा निको मान्दछन् ॥५२

लिन्छन् प्राण हरेर जुन् नृपतिले * क्रोधित् भएका घरी ।
दिन्छन् द्रव्यहरू तिनै खुशि हुँदा * साक्षात् विधातासरी ॥
अर्कालाइ हुकुम् दिंदा नृपतिले * क्यै कामका खातिर ।
मेरा निम्ति छ के हुकुम् भनि अघि* सर्नेछ जो सादर ॥५३॥
त्यस्तालाइ बुझी हितैषी नृपति * मान्छन् असाध्यै खुशी ।
राजाको प्रिय पात्र भैकन त्यही * आनन्द भोग्ला बसी ॥
हे राजन् ! अहिले भनें जति कुरा * सम्भेर राम्रो गरी ।
काट्नू पर्छ गएर वर्ष दिन यो * आपत्ति जाला टरी ॥५४

शिक्षा सुनी यति पुरोहित धौम्यजीको ।
बोले युधिष्ठिर–गयो सब ताप मन्को ॥
यस्तो मलाइ उपदेश दिने हितैको ।
माता तथा विदुर बाहिक को छ अर्को ? ॥५५॥
कल्याण ठानि दिनुभो जति अर्ति नाथ !
गर्छु प्रणाम पदमा झुकि भक्तिसाथ ॥
प्रस्थानको बखतमा जति गर्नु पर्ने ।
गर्नू हवस् सकल मङ्गल कष्ट हर्ने ॥५६॥
बिन्ती युधिष्ठिरजिको सुनि हर्ष मानी ।
गर्दा भए हवन राम्ररि धौम्य ज्ञानी ॥
शास्त्रादिको विधि र वेद ऋचा पढेर ।
लाई दिए तिलक होम गरी सकेर ॥५७॥
साम्राज्यको सुख र वैभव शीघ्र मिल्ने ।
संकष्टका दिन सबै खुशिसाथ बित्ने ॥
संग्रामको बखतमा सब शत्रु जित्ने ।
संसारको हित सदैव विचार गर्ने ॥५८॥

आशीर्वाद सहर्ष धौम्य ऋषिले * यस्तो दिएथे जब ।
अग्नीकुण्ड घुमी प्रदक्षिण गरे * पाँचै जनाले तब ॥
बाँकी आश्रममा थिए ऋषि-मुनी * ज्ञानी तपस्वी जति ।
तिनका साथ बिदा भईकन हिंडे * सन्ताप मान्दै अति ॥५९

पाँचै भाइ र द्रौपदी कुटि तजी * वनमा पसेथे जब ।
यज्ञाग्नी लिइ धौम्यजी पनि हिंडे * पाञ्चाल देशमा तब ॥
दुःखी भैकन इन्द्रसेन रथ लिई * द्वारावतीमा गए ।
सारा यादव वीरका सँग महाँ * सानन्द बस्ता भए॥६०॥

पाण्डवले आफ्ना शस्त्रास्त्र सुरक्षित राख्नु

वैशम्पायनले भने नरपते ! * पाँचै जना पाण्डव ।
जान्थे पैदल कष्टसाथ वनमा * सम्झेर श्री माधव ॥
आफ्ना शस्त्र लिई बढाइ बहुतै * दाह्री र जूँघा पनि ।
हिंड्थे श्री यमुनाजिको तिरतिरै * चाँडै पुगौंला भनी ॥६१॥

पारी दक्षिणमा दशार्णव तथा * पाञ्चाल बायाँ गरी ।
मार्दै ती वन - जन्तु उत्तर दिशा * जाँदा भए त्यै घरी ॥
ठूला वीर भए पनी तन महाँ * धूलो र माटो परी ।
देखिन्थे ति मलीन हीन शशि झैं * सम्पूर्ण बाटोभरी ॥६२॥

सोधे क्यै जनले भने पथमहाँ * इच्छा छ जाने कहाँ ।
आयौं जान विराटको नगरमा * भन्थे बुझाई त्यहाँ ॥
आफ्नू माझमहाँ सुरक्षित गरी * श्रीद्रौपदीजी कन ।
जान्थे निर्भय वीर पाण्डवहरू * नाघी अनेकौं वन ॥६३॥

हावा, घाम सहेर ताप वनमा * क्यै काल हिंड्दै गए ॥
देख्नामा सहसा नचिन्न सकिने * फुस्रा र धुस्रा भए ॥

जाँदा यै रितले छिचोलि वन त्यो * निस्के जसै बाहिर ।
लागो देखिन ग्रामका नगरका * साना र ठूला घर ॥६४॥
सोधिन् द्रौपदिले विरट नृपको * दर्बार होला पर ।
देख्छु सम्म जमीन खेतहरुमा * अन्नादि चारै तिर ॥
हामी रात बिताउँ आज यहिं नै * लाग्यो थकाइ अति ।
प्रातःकाल हिंडे पनी त सहजै * पौंचिन्छ हे भूपति ॥६५॥
बिन्ती द्रौपदिको युधिष्ठिरजिले * सुन्नू भएथ्यो जब ।
कृष्णालाइ त पार्थ वीर तिमिले * बोक्नू पऱ्यो लौ अब ॥
दाजूको सुनी यो हुकूम् मनमहाँ * शंका नमानी कन ।
पांचाली कन काँधमा धरि हिंडे * तत्काल श्री अर्जुन ॥६६॥
हिंड्छन् मत्त गजेन्द्र जङ्गलमहाँ * निर्धक्क जुन् चालले ।
सोही चालक गरेर अर्जुन पनि * हिंड्दा भए वेगले ॥
हिंड्दा यै रितले पुगे तिनिहरू * सानन्द केही पर ।
पौंचेथे अनि श्रीविराट नृपको * साम्राज्य सीमातिर ॥६७॥
निक्कै बेर बसे त्यहीं सब जना * विश्रामका खातिर ।
बोले धर्मकुमार मत्स्य पुरिको * आई पुगेछौं वर ॥
भाई हो ! सुन अस्त्र-शस्त्र सँगमा * हाम्रो छ ऐह्ले जति ।
राख्ने स्थान यहीं सुरक्षित कतै * खोज्नू पऱ्यो सन्मति! ॥६८
तिम्रो खूब ठुलो छ गांडीव धनू * विख्यात संसारमा ।
चिन्नेछन् जनले गए नगरमा * शस्त्रास्त्रका साथमा ॥
बस्नू पर्दछ बाह्र वर्ष वनमा * देखे भने शत्रुले ।
तस्मात् शस्त्रहरू लुकाइ यहिं नै * जाऊँ कुनै युक्तिले ॥६९॥
राजाका नगिचै नजानु कहिल्यै * शस्त्रास्त्र बोकी कन ।
भन्ने नीति बुझेर स्थान यहिं नै * लौ खोज हे अर्जुन ! ॥

बोले पार्थ सहर्ष धर्म-सुतले * आज्ञा भएको सुनी ।
देख्छु वृक्ष ठुलो म एक शमिको * त्यो टाकुराको मुनि ॥७०॥
राखौं शस्त्रहरू सुरक्षित गरी * हामीहरूको त्यहीं ।
योभन्दा अरु छैन स्थान जनले * देख्नै नसक्ने कहीं ॥
हाँगाले सब वृक्षको वरिपरी * ढाकी दिएको हुँदा ।
रक्षा हुन्छ अवश्य शस्त्रहरूको * त्यै वृक्षमा रखिंदा ॥७१॥
डर्लाग्दो छ मसान एक शमिको * त्यै वृक्षको क्यै वर ।
जावैनन् भनिठान्दछ्छ जन कुनै * त्यै हेतु मानी डर ॥
बिन्ती अर्जुनको युधिष्ठिरजिले * सुन्नू भएथ्यो जब ।
आज्ञा गर्नुभयो झिकेर यहिं नै * शस्त्रास्त्र राखौं सब ॥७२॥
रक्षा गर्न सके लिएर धनु जुन् * सारा कुरुक्षेत्रको ।
राखे धर्मकुमारले धनु झिकी * दिग्दार मानेर त्यो ॥
पैह्ले जुन् धनुले सुरासुर जिते * एक्लै लडाइँ गरी ।
भागे शत्रु ठुला पनी धनुषको * टंकार सुन्ना डरी ॥७३॥
पौलोमादि अनेक राक्षसहरू * संहार जस्ले गरे ।
ताँदो त्यै धनुको उतारि करले * श्रीपार्थजीले धरे ॥
पांचालादि प्रदेश दिग्विजयमा * जस्ले जितेथे गई ।
राखे सोहि धनू फुकाली जिमिमा * श्री भीम दुःखी भई ॥७४॥
जस्ले खाण्डव नामको वन ठुलो * पोली खरानी गरे ।
पाई मद्दत कृष्णको सुरपती * -को शेखि जस्ले हरे ॥
भाग्थे शत्रु सुनेर जुन् धनुषको * टंकार संग्राममा ।
जस्ले पश्चिमतर्फका रिपुहरू * एक्लै जिते यज्ञमा ॥७५॥
त्याई वैभव श्री युधिष्ठिरजिको * राखी दिए सामुमा ।
ताँदो त्यै धनुको झिकी नकुलले * राख्दा भए भूमिमा ॥

जस्ले दक्षिणतर्फका रिपु जिते * भारी लडाइँ गरी ।
ल्याएथे अघि यज्ञ खातिर ठूलो * संपत्ति जस्ले हरी ॥७६॥
त्यस्ता श्री सहदेवले धनुषको * ताँदो फुकाई कन ।
राखेथे अति कष्टले जमिनमा * साह्रै दुखाई मन ॥
राखी खड्ग गदा तिखा शरहरू * तर्वार औ तोमर ।
पाँचै भाइ भएर दुःखित बसे * विश्रामका खातिर ॥७७॥
भन्नू भयो अनि युधिष्ठिरले बुझाई ।
शस्त्रास्त्र बाँध बलियो सहदेव भाई ॥
राख्नू पऱ्यो नकुलले रुखमा चढेर ।
बाँध्नू सुरक्षित तथा बलियो गरेर ॥७८॥
दाजूको सुनि यो हुकुम् नकुलले * पोको लिई शस्त्रको ।
बाँधी खूब कसेर कोटर महाँ * राखी दिए वृक्षको ॥
पानी खूब परे पनि सहजमा * भिज्नै नसक्ने गरी ।
आफ्ना शस्त्रहरू ठुलो जतनले * राख्दा भए राम्ररी ॥७९॥
पोको वृक्षमहाँ कुनै तरहले * देख्यो कसैले भने ।
हेर्ला आइ, रहेछ के भनि ठूलो * शंका छ पैचानिने ॥
रक्षा हुन्छ कसो गरीकन भनी * क्यै बेर सोच्दै थिए ।
मुर्दा एक मसानबाट सहसा * ल्याएर बाँधीदिए ॥८०॥
गोठाला लकडी बटुल्न वनमा * डुल्नेहरूले पनि ।
सोद्धामा जननी मरिन् बुढि थिइन् * हे भाइ ! साह्रै तिनी ॥
पुर्खाले पनि वृक्षमा यसरि नै * झुण्ड्याइ दिन्थे भनी ।
झुण्ड्यायौं शवलाइ ल्याइ रुखमा * हामीहरूले पनि ॥८१॥
तिन्को चित्त बुझाइ यै तरहले * शस्त्रास्त्र रक्षा गरी ।
पाँचै भाइ विराटका नगरमा * पस्ता भए त्यै घरी ॥

गुप्ती नाम पनी उसै बखतमा * पाँचै जनाले धरे ।
डाक्नू नाम भनेर सोही सबले * मौका कुमौकापरे ॥८२

गर्नेर धर्मसुतको 'जय नाम पैह्ले ।
श्री भीमको 'अजय' नाम धरे क्रमैले ॥
श्रीपार्थको 'विजय' औ 'जयसेन्' नकुल्को ।
राखे 'जयद्बल' पछी सहदेवजीको ॥८३॥

भगवती स्तुति :—

गुप्ती नाम धरेर आपुसमहाँ * सल्लाह पक्का गरी ।
तेह्रौं वर्ष लुकी बिताउन हिंडे * पाँचै जना त्यो घरी ॥
शोभा दिव्य विराटका नगरको * हेरेर चारैतिर ।
केही बेरपछि पुगे तिनिहरू * दर्बारको क्यै वर ॥८४॥
वैशम्पायनले भने नरपते ! * रक्षार्थ पाई वर ।
राखी शस्त्रहरू सुरक्षित गरी * क्यै कालका खातिर ॥
लागे पस्न विराटका नगरमा * ती पाँच भाई जब ।
के गर्दा सुख साथ वर्ष दिन यो * काटिन्छ हाम्रो अब ॥८५
यो चिन्ता मनमा युधिष्ठिरजिको * बढ्दै गएथ्यो अति ।
सम्झेर मनले जगज्जननिको * गर्नू भयो यो स्तुति ॥
लीला गर्न भनी गएर ब्रजमा * चौधै भुवन्की धनी ।
रक्षा गर्न भनेर भक्त जनको * जन्मिन् दयालु बनी॥८६
जस्को दिव्य प्रभावले कुल भयो * श्री नन्दको उज्वल ।
फैलेको छ सुकीर्ति लोकभरिमा * जस्को सदा निर्मल ॥
मार्नू भो भयभीत कंसकन जो * सानै छँदा बालिका ।
आँट्यो मार्न भनी जसै गगनमा *जानू भयो कालिकाका॥८७

जो वैक्षी हरिकी भनीकन सदा * प्रख्यात छन् लोकमा ।
जस्का आयुध छन् अनेक थरिका * आठैवटा हातमा ॥



युधिष्ठिरले भगवतीको स्तुति गरेको

गर्छिन् नाश सदैव जो असुरको * कालस्वरूपी बनी ।
सम्झन्छु मनले तिनै जननिको * पाउँ सुरक्षा भनी ॥८८॥

उतार्नै दुष्टात्मा असुरजति भारी पृथिविको ।
दया पाऊँ भन्छु म पनि अब दुर्गे ! हजूरको ॥
सदा जो श्रद्धाले हजुरकन सम्झन्छ मनले ।
सुखी होला सारा दुःख फजिति जानेछ क्रमले ॥८९॥
कुनै निर्धी गाई यदि कहिं हिलामा गडिगए ।
उतार्छन् सज्जनले जसरी गरि रक्षा यतनले ॥
हजुरलें त्यस्तै नै गरिकन दया भक्तजनको ।
ठुलो यो संसारी दुख हरिदिनोस् ताप मनको ॥९०॥

चारोटा बाहुलीमा समर विजयका शस्त्र छन् विष्णुरूपा ।
बाँकीका चार बाहु अभय वर दिने ईश्वरी ! ब्रह्मरूपा ॥
ज्योती औ तेज साक्षात् शशिसरि मुखको कान्तिले पूर्ण सर्व ।
तिम्रो सौन्दर्य बालारुणसरि तनको दिव्यशोभा अपूर्व ॥९१॥
हीरा-मोती र पन्ना मणिजडित दुवै हातमा श्रेष्ठ बाला ।
टल्केको सूर्य जस्तै मुकुट, जघनमा लत्रिने केश काला ।
तिम्रो सौन्दर्य देख्दा रति, शशि र रमा मान्दछन् खूब लाज ।
दुर्गे ! उद्धार गर्नोस् विपति जलधिमा गाडिएको छु आज ॥९२॥
काली कृष्ण समान रूप भवमा * विख्यात तिम्रो हुँदा ।
जप्छन् लोकहरू प्रसन्न मनले * कृष्णा भनी सर्वदा ॥
दुर्गे ! उज्वल ब्रह्मचर्य व्रतको * गर्नै सदा पालन ।
जानी रक्षक, ब्रह्मचारिणि पनी * भन्छन् सबै सज्जन ॥९३
गर्दा नाश समस्त शत्रुहरुको * भन्छन् जया लोकले ।
रक्षा सेवकको गरेर विजया * भो नाम त्यै हेतुले ॥
दोटा बाहुलिमा ध्वजा सुरपती * -को झैं गरी धारण ।
घण्टा, शङ्ख, सरोज, पात्र र धनू* बाहूहरूमा छन ॥९४॥
शोभा नूपुरको तथा मुकुटको * देखिन्छ चारैतिर ।
आफ्ना सेवक भक्त खातिर दिने * इच्छा गरेको वर ॥
यस्नो हे जगदम्बिका ! हजुरको * पाऊँ भनी दर्शन ।
बारंबार प्रणाम गर्छु पदमा * पर्नेर न्यूहीकन ॥९५॥
रक्षार्थ लोकहरूमा करुणा गरेर ।
मार्नु भयो सहज माहिष उग्र वीर ॥
त्यस्नै समाधि अहिले करुणा जनाई ।
आशीष मङ्गल दिनुस् अब सामु आई ॥९६॥

मानिन्छ जो सकल पर्वतमा प्रधान ।
त्यो विन्ध्यपर्वतमहाँ छ निवास स्थान ॥
पूजा तथा तथा बलि विधान पुऱ्याइ गर्छन् ।
आशीष पाइ जनका दुख कष्ट टर्छन् ॥९७॥
खट्वाङ्ग खड्ग करमा अति तीक्ष्ण काली ।
मार्ने समस्त रिपु दानव खेलि-खेली ॥
दुर्गे जगज्जननि ! हे करुणानिधान ।
इच्छानुसार वरदान दिने प्रधान ॥९८॥
आपत्तिमा स्मरण पूजन भक्तिसाथ ।
जो गर्दछन् चरणमा धरि नित्य माथ ॥
ती भक्त माथि खुशिले करुणा जनाई ।
संकष्ट टारिदिनुहुन्छ सदैव धाई ॥९९॥
कीर्ति सिद्धि धृति प्रभा अरु दया * ज्योत्स्ना क्षमा संतति ।
श्री लज्जा शुभरात्रि सान्ध्य र रमा * निद्रा र कान्ती मति ॥
दुर्गे ! नाम अनेक छन् भुवनमा * विख्यात तिम्रो तर ।
इच्छा माफिक जप्तछन् जनहरू * कल्याणका खातिर ॥१००
पर्दा संकट राजदण्ड अथवा * दैवी विपत्ती हुँदा ।
तर्दा घोर नदी र जंगल महाँ * बाटो कतै बिसंदा ॥
ठूलो दैहिक ताप भौतिक कतै * आई परेका घरी ।
तिम्रो केवल नामको स्मरणले * जाला विपत्ती हरी ॥१॥
पानीमा यदि कोहि आत्तिन गए * डुब्ने स्थितिमा परी ।
पापी दुष्ट र चोरको पथमहाँ * फेला परेका घरी ॥
आधी-व्याधि सुपुत्रको र धनको * साम्राज्यको नाशमा ।
जस्ले गर्दछ सम्झना हजुरको * पर्दैन आपत्तिमा ॥२॥

राज्य भ्रष्ट भएर हे भगवती ! * ऐहले म छु दुःखित ।
चाँडो दर्शन बक्सियोस् हजुरले * मेरो चिताई हित ॥
हाम्रा निम्ति हजूर बाहिक कुनै * छैनन् अरु रक्षक ।
जान्दैनौं महिमा पनी सकल छौं * हामीहरू बालक ॥३॥
वारंवार गरे पुकार जननी * पाऊँ भनी दर्शन ।
मोती झैं दुइ नेत्रबाट जलका * धारा बगाई कन ॥
तिन्को यो स्तुतिले प्रसन्न हुनुभो * दुर्गा भवानी जब ।
साम्ने धर्मकुमारको प्रकट भै * दर्शन्न दिनूभो तब ॥४॥

चिन्ता युधिष्ठिर ! तिमी अब क्यै नमान ।
संग्राममा विजय हुन्छ भनेर जान ॥
मारी ससैन्य सब कौरव वीरलाई ॥
साम्राज्यको सुख र वैभव फेरि पाई ॥५॥
हुन्छौ सुखी तिमिहरू सब पाँच भाई ।
आशीष मंगल दिएँ तिनिहेरुलाई ॥
मेरो सदैव स्तुति कीर्तन गर्छ जस्ले ।
निष्पाप भै सुख र वैभव भोग्छ त्यस्ले ॥६॥

हे राजन् ! तिमिले प्रसन्न मनले * मेरो गऱ्यौ जो स्तुति ।
यस्को पाठ सदैव जो गरिलिनन् * आनन्द मानी अति ॥
तिन्लाई वरदान दिन्छु, कहिल्यै * होवैन केही दुख ।
मेरो पाइ कृपा प्रसाद भवको * भोग्नन् अनेकौं सुख ॥७
मुल्दा जङ्गलमा तथा जलधिमा * ठूलो विपत्ती हुँदा ।
सम्झन्छन् जन जो मलाई मनमा * भक्ती गरी सर्वदा ॥
तिन्को जीत सधैं हुनेछ रणमा * सौख्यादि भोगी यहाँ ।
त्यागी देह यहाँ मरेपछि गई * बस्छन् परग्गद् महाँ ॥८॥

बस्ता गुप्त भएर मत्स्यपतिको * दर्बारमा गैकन ।
सक्तैनन् तिमिहेरूलाइ अरूले * हे भूप ! जानी लिन ॥
रक्षाको वरदान पाण्डवहरू * -लाई दिई दिई राम्ररी ।
अन्तर्धान भई त्रिलोक जननी * पाल्नूभयो त्यै घरी॥९॥

पाण्डवहरू राजा विराटकहाँ जानु

हे राजन् ! जब श्री जगज्जननिको * पाए सुरक्षा वर ।
पाँचै पाण्डव जाह्नवी तटमहाँ * पुग्दा भए सादर ॥
गङ्गा स्नान र नित्य तर्पण गरी * आनन्द मानी त्यहाँ ।
सम्झे धर्मकुमारले निज पिता * -लाई बसी मन्महाँ ॥१०॥
पैह्ले नै वर धर्मराज प्रभुको * पाइसकेको हुँदा ।
इच्छा माफिकका सबै चिजहरू * त्यै ठाउँमा पाउँदा ॥
साह्रै खुशि भई युधिष्ठिरजिले * पैह्री लुगा ब्राह्मण ।
पासा रत्न समान सुन्दर सफा * थर्की लिई त्यै क्षण ॥११
हिंड्छन् मत गजेन्द्र गङ्गलमहाँ * निर्भीक जुन् चालले ।
पौंचे धर्मकुमार मत्स्यपतिको * सामू त्यही चालले ॥
कीर्ति वैभव औ पराक्रम थियो * विख्या संसारमा ।
जस्को आदर श्री महेन्द्र सरिको * हुन्थ्यो सदा लोकमा ॥१२
हुन्छन् अग्नि मलिन् खरानि तलमा * राखेर छोपी दिंदा ।
हुन्छन् तेज विहीन सूर्य जसरी * आकाशमा ढाकिंदा ॥
त्यस्तै कौरव वंशका तिलक भैं * राजा भए तापनि ।
जानी दैवगती युधिष्ठिर गए * अत्यन्त दुःखी बनी ॥१३
टाढैबाट पनी विराट नृपले * तिन्लाई देखे जब ।
शंका पर्न गई सभासदहरू * लाई सुध्याए तब ॥

देखेको पहिले थिएन अहिले * को हुन् र आए किन ?
देखिन्छन् द्विज झैं तथापि तनमा* छन् सूर्यका लक्षण ॥१४॥
हात्ती अश्व सिपाही औ रथ पनी * देखिन्न क्यै साथमा ।
देख्छु तेज प्रशस्त इन्द्रसरिको * यी विप्रका देहमा ॥
यिन्को लक्षणले बताउँछ स्वयं * हैनन् यिनी ब्राह्मण ।
आए विप्र बनी सभा बिचमहाँ * पर्दा कुनै कारण ॥१५॥
लामा बाहु विशाल नेत्र तनमा * छन् चिह्न भूपालका ।
पक्का निश्चय साथ भन्दछु हुनन् * सम्राट् कुनै देशका ॥
गर्थे तर्क विराटजी भूप मनमहाँ * यस्तै अनेकौं थरी ।
मत्ता हात्तिसरी हिंडीकन पुगे * राजाकहाँ त्यै घरी ॥१६॥
लागे भन्न उनी विनम्र स्वरले * राजन् ! म हूँ ब्राह्मण ।
आएँ दुःख परेर, नाश हुनगो * सर्वस्व त्यै कारण ॥
तिन्को बात सुनेर आदर गरी * डको नगीचै महाँ ।
लागे सोध्न विराट आउनुभयो * कुन् राज्यदेखी यहाँ ॥१७
के हो नाम र गोत्र आदि कुलको * गर्नू हवस् वर्णन ।
आफ्नू के छ विशेषता दुःख सही * बस्नू भएको किन ?
गर्दै स्नेह ठुलो विराट नृपले * आज्ञा भएथ्यो जब ॥
बोले धर्मकुमार हूँ म नृपते ! * वैयाघ्रगोत्री द्विज ॥१८॥
पैह्ले राज्य हुँ युधिष्ठिर कहाँ * बस्थें गरी चाकरी ।
डाक्थे कंक भनी मलाई उनले * आफ्नू सखा झैं गरी ॥
ऐह्ले दुःख परी गए वनमहाँ * दैवी विचित्रागति ।
पासा खेल्न त जान्दछु छलसहित * सम्पूर्ण हे भूपति ! ॥१९॥
पासा धर्मकुमारका संग महाँ * खेल्थें म पैह्ले पनी ।
आएको छु हजूरका शरणमा * क्यै काल बस्छु भनी ॥

तिन्को विन्ति सुनी विराट नृपले * भन्दा भए सादर ।
साह्रै खुशि भएँ, प्रसन्न मनले * मागेर लेऊ वर ॥२०॥
आज्ञा दिन्छु तिमी स्वयं गर वरु * यो देशको शासन ।
गर्छु आदर शीलको र गुणको * मैले सदा ब्राह्मण ॥
बोले धर्मकुमार हे नरपते ! * माग्छु म यौटा वर ।
खेल्नेछु म हजूरका सँग महाँ * जूवा खुशीले तर ॥२१॥
मेरो जीत हुँदा कचिंगल गरी * संपत्तिका खातिर ।
मेरो त्यो धन कोहि खोस्न नसकुन् * मानेर ठूलो डर ॥
गर्ने छैन विवाद नीच संगमा * कस्तै परे तापनी ।
यो स्वीकार हजूरले गरिदिए * बस्ने थिएँ लौ भनी ॥२२॥
लागे भन्न रिराट भप भूप खुशिभै* तत्काल हे ब्राह्मण !
तिम्रो बेअदबी गऱ्यो यदि भने * मारिन्छ त्यो दुर्जन ॥
देशैबाट निकालिदिन्छु यदि त्यो * व्यक्ति भए ब्राह्मण ।
मेरो उर्दि सबै सभासद पनी * शंका नमानी सुन ॥२३॥
गर्नू आदर कंकको सकलले * मेरो गरे झैँ गरी ।
मेरो झैं रथ वस्त्र आशन दिनू * खानेकुरा राम्ररी ॥
गर्नेन् काम सहर्ष राज्यभरिमा * आई परेको सब ।
मेरा मित्र भई सभा बिच बसी * यी न्याय गर्नेन् अब ॥२४॥
यस्तो स्नेह गरी विराट नृपले * आज्ञा भएको सुनी ।
लागे धर्मकुमार बस्न त्यहिं नै * प्यारो सखा झैं बनी ॥
बस्तामा त्यसरी सभा-भवनमा * तिन्ले विचारी बनी ।
पैचान् गर्न सकेन पाण्डु-कुलका * राजा यिनै हुन् भनी ॥२५॥
जो सक्थे बलवान शत्रु रणमा * संपूर्ण मारी दिन ।
त्यस्ता भीम पुगे दुवै करमहाँ * डाडु-पन्यू लीकन ॥

हिंड्छन् मस्त भएर सिंह जसरी * एक्लै ठुलो वन् महाँ ।
भान्से रूप भई खडा हुन पुगे * राजा विराट् छन् जहाँ ॥२६
देखेथे तिनिलाई मत्स्यपतिले * टाढै उभेका जब ।
आफ्ना श्रेष्ठ सबै सभासदहरू * -लाई सुध्याए तब ॥
त्यस्तै वज्र सरी कठोर तनको * शोभा फिंजाई त्यहाँ ?
जस्को तेज थियो दिवाकर सरी * टल्की रहेको उहाँ ॥२७॥
को हुन् यी बलवान सिंहसरिका * के भन्न आए यहाँ ?
हेर्दैछन् किन हो यतैतिर तिनी * इच्छा छ के मन्‌महाँ ॥
देखेको पहिले थिएन यिनि झैं * मानीस कैहे पनी ।
ठान्छु इन्द्र हुनन् भनेर अथवा * गन्धर्व नै हुन् यिनी ॥२८॥
मेरा सामु खडा हुने युवकको * जानेर इच्छा पुरा ।
आओ दूतहरू सुनी कन छिटै * तिन्‌ले भनेका कुरा ॥
राजाज्ञा चरले गईकन भने * श्री भीमलाई जब ।
सामुन्ने नृपको उभीकन भने * शंका नमानी तब ॥२९॥
मेरो 'वल्लभ' नाम हो नरपते ! * गर्छु भनी चाकरी ।
आएको छु हजूरको महलमा * भान्से बनी यो घरी ॥
गर्नेछु म तयार इच्छित स्वयं * धेरै थरी व्यंजन ।
इच्छापूर्ण हुनेछ लौ हजुरको * खाएर त्यो भोजन ॥३०॥
भान्से काम गरी युधिष्ठिकहाँ * पैह्ले बसेको थिएँ ।
ऐह्ले काम नपाउँदा हुँदि यहीं * बस्ने इरादा लिएँ ॥
मेरो एक विशेषता नरपते ! * अर्को छ यो देहमा ।
हात्तिलाइ पछार्न एक करले * सक्छु लड़ी भूमिमा ॥३१॥
योद्धा वीर पराक्रमी पहलवान् * यो देशमा छन् जति ।
सारालाइ पछार्दछु म सहजै * एक्लै लड़ी भूपती ॥

लड्नेछु म मृगेन्द्रका सँग पनी * मौका विचारी कन ।
हेर्दा खेलहरू निकै हजुरको * होला मनोरंजन ॥३२॥
लागे भन्न विराट भूप मनमा * शंका परे झैं गरी ।
भान्से हूँ तिमि भन्दछौ स्वरुप ता * देखिन्छ राजा सरी ॥
शक्तीमा बलमा पराक्रम तिमी * राजा हुने योग्य छौ ।
ऐह्ले कारण के परीकन तिमी * भान्से म हूँ भन्दछौ ॥३३॥
तिम्रो योग्य थियो बरु गरिदिनू * यो राज्यको शासन ।
भान्से हुन्छु भनेपछि हुन गई * लाचार त्यौ कारण ॥
भान्सामा अधिका भए जति सबै * मानीसका मालिक ।
आजै देखि भयौ प्रसन्न मनले * बस्नू बनी रक्षक ॥३४॥
राजाको सुनि यो हुकुम् मनमहाँ * दुःखी भए तापनि ।
लागे बस्न हुकुम् चलाई सबमा * श्री भीम भान्से बनी ।
बस्ता कष्ट सहेर मत्स्यपुरमा * श्री पाण्डुका पुत्रले ॥
कैह्ले चिह्न सकेन हे नरपते ! * तिन्लाई क्वै व्यक्तिले ॥३५

मुष्टि प्रहार गरि पर्वतलाइ चूर्ण ।
पार्नै थियो शरीमा बल शक्ति पूर्ण
त्यस्ता पराक्रमि भए पनि दैव लागी ।
बस्नू पऱ्यो सकल वैभव राज्य त्यागी ॥३६॥

हे राजन् ! यसरी नियुक्ति हुनगो * भान्सा महाँ भीमको ।
केही बेर बिताई द्रौपदि उठिन् * इच्छा गरी जानको ॥
काला कोमल केशलाइ बटुली * जूरो बनाई कन ।
मान्दै कष्ट ठुलो, गरेर तनमा * दासी सरी पैहन ॥३७॥
दुःखी दीन समान राज-पथमा * ती डुल्न लागिन् जब ॥
लागे हेर्न उभेर मानिसहरू * तिन्लाई मात्रै सब ॥

तिनको बादलभित्रका रविसरी * सौन्दर्यमा लोभिई ॥
लागे सोध्न अनेक व्यक्ति सहसा * तिन्का नगीचै गई ॥३८॥
को हौ हे सुमुखी ! वृथा पथमहाँ * निस्की डुलेकी किन ।
जे इच्छा मनमा छ त्यो पनि सबै * साँचो नढाँटी भन ॥
सोधे द्रौपदिलाइ लोकहरूले * घेरेर चारैतिर ।
लागिन् भन्न अलीकति मनमहाँ * मानेर शंका डर ॥३९॥
सैरन्ध्री भनि जान लोकहरू हो * गर्छु भनी ! चाकरी ।
डुल्दैछु पथमा कुनै सुजनले * राख्नन् भनी यो घरी ॥
शोभा हेर्न भनेर मूल-पथको * रानी सुदेष्णा पनी ।
उच्चा झ्यालमहाँ उभेर सहसा * हेरी रहिथिन् तिनी ४०॥
देख्दा दीन-मलीन-हीन तरुणी * श्री द्रौपदीजी कन ।
सोधिन् डाक्न पठाई झट्ट नजिकै * आफ्नू बसाली कन ॥
हे भद्रे ! यसरी डुल्यौ पथमहाँ * निस्केर एक्लै किन ।
को हौ हे सुमुखी ! नढाँटि मनको * इच्छा मलाई भन ॥४१॥
रानीले यसरी विनीत स्वरले * आज्ञा भएको सुनी ।
लागिन् भन्न बुझाइ भाव मनको * श्रीद्रौपदीले पनी ॥
सैरन्ध्री भनि जान्नुहोस् हजुरले * ऐल्है मलाई यहाँ ।
आएँ चाकरि गर्दछु भनि यसै * डुल्थें म बाटोमहाँ ॥४२॥
देखी रूपछटा अलौकिक तथा * दासी भनेको सुनी ।
केही बेर गरेर तर्क मनमा * बोलिन् सुदेष्णा अनि ॥
तिम्रो बातमहाँ गरूँ म कसरी * विश्वास हे भामिनी ! ।
दासी भन्न पनी म सक्तिनँ कसै *सौन्दर्यकी छयौ धनी ॥४३

सौन्दर्य पूर्ण शशिझैं मुखको छ कान्ति ।
लक्ष्मी भनेर मनमा गरिदिन्छ भ्रान्ति ॥

भद्रे ! बताउ तिमी साफ कुरा मलाई ।
बोल्यौ असत्य यसरी किन छल्नलाई ॥४४॥
तिम्रा सुन्दर पाउमा छ सुमुखी * गुल्फा दबेको अनि ।
हात्तीको सूँढ झैं सलक्क उरुकी * छन् जोरिएका पनि ॥
तिम्रा पुष्ट सफा पयोधर पनि * देखिन्छ हे सुन्दरी !
सैरन्ध्री म हुँ भन्दछ्यौ र कसरी * गछ्र्यौं तिमी चाकरी॥४५
पाउ, हात, सुनेत्र, नङ् अधर छन्* राता र राम्रा कति ! ।
नाभी, बुद्धि र शब्द छन् भ्रमर झैं* गंभीर तिम्रा अति ॥
छोटो सुन्दर शङ्ख झैं छ त्रिवली* रेखा हुनाले गरी ।
सानू कम्मर नासिका छ शुक झैं * शोभा दिने सुन्दरी ॥४६॥
लक्ष्मीकै सरि देख्दछु म त शुभे ! * सर्वाङ्गको लक्षण ।
सैरन्ध्री तिमीलाइ भन्नु कसरी * पत्यार मानी मन ॥
ठान्छु सुन्दर नेत्रका पलक नै * हेरी रहूँ झैं म त ।
को हौ वास्तवमा बताउ सुमुखी * निःशंक राम्रोसित ॥४७॥
देवी हौ कि त अप्सरा नगरकी * मालीक विद्याधरी ।
इन्द्राणी कि त वारुणी भन शुभे ! * हौ उर्वशी किन्नरी ॥
सावित्री विधिकी प्रिया, प्रियतमा * हौ चन्द्रकी रोहिणी ।
गन्धर्वी कि त यक्षिणी, वरुणकी * पत्नी तिमी वारुणी ॥४८॥
कन्या हौ तिमि देव, नाग अथवा * क्वै यक्षकी भामिनी ।
रम्भा हौ कि त अप्सराहरु महाँ * विख्यात हौ मालिनी ? ॥
रानीले गरि तर्क धेर यसरी * शङ्का गरेको सुनी ।
लागिन्,भन्न झुकी विनीत स्वरमा * श्री द्रौपदीले पनी ॥४९॥
गन्धर्वी पनि हैन, देवतनया * विद्याधरी, उर्वशी ।
रम्भा हैन तिलोत्तमा असुरकी * पत्नी न हुँ राक्षसी ॥

सैरन्ध्री भनि मान्नुहोस् हजुरले * विश्वास हे भामिनी !
राख्नू हुन्छ भने प्रसन्न मनले * बस्छु म दासी बनी॥५०॥
हे रानी ! अघि कृष्णकी प्रियतमा * श्री सत्यभामा पनि ।
मेरो काम रुचाइ खुब मनमा *आनन्द मान्थिन् तिनी ॥
रानी ! पाण्डव पाँचकी प्रियतमा * श्री द्रौपदी सुन्दरी ।
मेरो आदर गर्दथिन् खुशि भई * बस्थें गरी चाकरी ॥५१॥
माला उन्दछु पुष्पको, कबरिको * शृङ्गार जान्ने हुँदा ।
भन्थिन् सादर मालिनी र सखिझैं * राख्थिन् सँगैमा सदा ॥
दिन्थिन् द्रव्य लुगा इनाम तिनिले* राजी त्यसैमा थिएँ ।
आपत् तिन्कन भो र पो हजुरको* आएर आश्रा लिएँ ॥५२॥
बिन्ती द्रौपदिको सबै सुनिसकी * बोलिन् सुदेष्णा सती ।
राख्थें राख्न त साथमा गरुँ कसो * लाग्दैछ शङ्का अति ॥
तिम्रो सुन्दर पद्मझैं मुखमहाँ * हेर्ने जती मानिस ।
होलान् मोहित पुष्पमा भ्रमर झैं * सम्पूर्ण तिम्रो बश ॥५३॥
स्वास्नीमानिस सुन्दरी महलमा * दासीहरू छन् जति ।
हेर्दैछन् तिमिलाई मोहित भई * तस्वीर झैं हे सति ! ॥
स्त्रीको यो गति भो भने पुरुषको * होला शुभे के स्थिति ?
जो देख्नन् तिमिलाई दिन्नदिन यहाँ* के हुन्छ तिन्को गति ॥५४
मेरो झ्याल नगीचका रुखहरू * ऐह्ले खड़ा छन् जति ।
न्यूहेका सरि देख्दछु तिमितिरै * मोहित् भए झैं अति ॥
कल्याणी ! जड़को छ यो गति भने* संसारका मानिस ।
देख्दैमा तिमिलाइ मोहित भई * तिम्रो हुनेछन् वश ॥५५॥
देख्नेछन् जब श्री विराट नृपले * सौन्दर्य तिम्रो यहाँ ।
त्यागनेछन् नृपले मलाई सहजे * मोहित् भई मन् महाँ ॥

सोही कारणले मलाई मनमा * लाग्दैछ ठूलो डर ।
रानीको सुनि बात द्रौपदिजिले * फेरी भनिन् सादर ॥५६॥
पाँचोटा बलवान वीरहरू छन् * गन्धर्व मेरा पति ।
सक्तैनन् सहसा मलाई छुन क्वै * मानीस वा भूपति ॥
जो हेर्नेछ कुदृष्टिले मकन त्यो * कस्तै भए तापनी ।
चाँडै नै यमराजको नगरमा * जानेछ प्यारो बनी ॥५७॥
गर्छन् प्रेम असाध्य पाँच पतिले * गुप्तै भए तापनी ।
हेर्छन् गुप्त रही विपत्तिहरूमा * गर्छन् सुरक्षा तिनी ॥
सक्छु बस्न सतीत्वको जतनले * रक्षा गरी मै पनी ।
राख्नूहोस हजूरले शरणमा * आफ्नू, दयालु बनी ॥५८

जूठो तथा चरणको नगरेर स्पर्श ।
बस्ने थिएँ हजुरका संग मानि हर्ष ॥
बिन्ती सुनिन् यसरी द्रौपदिले गरेको ।
बोलिन् विराट महिषी नगरेर झर्को ॥५९॥

पर्नेछैन कदापि यो महलमा * पाऊ र जूठो छुन ।
तिम्रो शील स्वभाव सुन्दर भए * शंका नमानीकन ॥
आजै देखि तिमी प्रसन्न मनले * मेरी सखी भै बस ।
रानीको सुनी यो कुरा हुन गइन् * श्री द्रौपदीजी खुश ॥६०॥
भित्री कष्ट थियो असाध्य तपनी * मानी खुशी बाहिर ।
लागिन् बस्न विराटको महलमा * त्यागेर शंका डर ॥
पातिव्रत्य, स्वधर्म थामि यसरी * बस्ता दुखी झैं तिनी ।
राजन् ! चिह्न सकेन कोहि जनले* हुन् द्रौपदी यी भनी॥६१॥
वैशम्पायनले भने नरपते ! * क्ये बेर पर्खीकन ।
फेटा बाँधि अहीर झैं शरिरमा * लुगा र आभूषण ॥

पैह्री श्री सहदेव गोठ तिरको * बाटो समाई गए ।
राजाले तिनिलाइ देखि नगिचै * डाकेर भन्दा भए ॥६२॥
को हौ वीर बताउ नाम, यसरी * के काम आयौ यहाँ ?
कुन् हो देश, बताउ सत्य अहिले * इच्छा छ जाने कहाँ ?
बोले श्री सहदेव मत्स्यपतिले * आज्ञा भएको सुनी ।
मेरो नाम त 'तन्तिपाल' सबले * डाकेर भन्छन् अनि ॥६३
राजन् ! वैश्य म हूँ युधिष्ठिरकहाँ * गर्थें अघी चाकरी ।
गाई सुन्दर आठ लाख जतिको * बस्थें म रक्षा गरी ॥
काहाँ छन् अहिले ति पाण्डवहरू * जान्दीनँ क्यै यो घरी ।
आएको छु हजूरका शरणमा * ऐले विपत्ती परी ॥६४॥
बिन्ती श्री सहदेवको नृपतिले * यस्तो सुनेथे जब ।
सोधे फेरि निकै सशंकित भई * ती भूपतिले सब ॥
देख्दा रूप म ठान्दछु मनमहाँ * ह्वौ वीर हे सज्जन ।
भन्छौ गोप म हूँ पत्याउँ कसरी * मैले तिमी लौ भन ॥६५
क्षत्री, ब्राह्मण वा कुनै मुलुकका * ह्वौ श्रेष्ठ सेनापति ।
ह्वैनौ गोप अवश्य नै तिमि कुनै * ह्वौ देशका भूपति !
आज्ञा श्री सहदेवले नृपतिको * यस्तो सुनेथे जब ।
बोले फेरि बुझाइ नम्र स्वरले * आफ्नू इरादा सब ॥६६॥
राजन् ! गोप मलाई जानि लिनुहोस् * झूटो कुरा बोल्दिनँ ।
गोरु-गाइ म चिन्दछु सहजमा * राम्रा नराम्राकन ॥
तिन्को रोग विशेषता, गुणहरू * मैले सबै बुझ्दछु ।
राख्ने रंग मिलाइ गोठ पशुको * सारा कुरा जान्दछु ॥६७॥
मेरा यै गुणले युधिष्ठिर सदा * गर्थें ठुलो आदर ।
राजाले सहदेवको सुनि कुरा * आज्ञा दिए सादर ॥

मेरो गोठ र गोप आदि सबको * रक्षा तिमी नै गर ।
बन्नू मालिक गोपका र अरुको * पर्दैन मान्नू डर ॥६८॥
आज्ञाले नृपको सबै तरहले * रक्षा गरी गोठको ।
लागे श्री सहदेव बस्न त्यहिं नै * स्वामी बनी गोपको ॥
जस्को रूप तथा पराक्रम थियो * विख्यात संसारमा ।
ऐह्ले बस्नू पऱ्यो अहीर सरि नै * तिन्ले गई गोठमा ॥६९॥

राजन् ! त्यहाँपछि सफा पहिरेर सारी ।
पैह्री चुरा असल बेसरी ठाँट पारी ॥
पैह्रेर कुण्डल सफा कबरी लतारी ।
पौंचे धनञ्जय बनीकन 'क्लीब' नारी ॥७०॥

पृथ्वी कम्प गराउने गजसरी * पाऊ धरी सुस्तरी ॥
साम्नूमा नृपका खडा हुन पुगे * श्री पार्थ सोही घरी ॥
को हुन् सोध भनी सभासदहरू * -लाई सुध्याए जब ।
लागे हेर्न गरी मुखामुख स्वयम् * चिन्हे नसक्ता सब ॥७१॥
बोलेनन् जब क्वै सभासद त्यहाँ * धेरै थिए तापनी ।
डाके भूपतिले सशंक मनले * आऊ नगीचै भनी ॥
डाकेको नृपले सुनेर मनमा * श्रीपार्थ खूशी भए ।
बिस्तारै धरि पाइला नगिचमा * श्री भूपतिको गए ॥७२
हेरे छक्क परेर देह भरिको * क्यै बेर शोभा जब ।
लागे सोधन सहर्ष आफ्नु मनको * इच्छा बताऊ अब ॥
देखेको पहिले थिएन अहिले * के हेतु आयौ यहाँ ?
के हो नाम, बताउ ग्राम कसरी * आयौ र जान्छौ कहाँ॥७३॥
चूरा कंकण शंखको छ करमा * छन् कानमा कुण्डल ।
पैह्री हार सफा सभा गरिदियौ * सौन्दर्यले उज्ज्वल ॥

तिम्रो पैहन यो खुल्तेन तनमा * जस्तै सजाए पनि ।
पाल्कीमा, रथमा चढेर रहनू * पर्ने म जस्तै बनी ॥७४॥
भन्दैछौ तिमि नै नपुंसक म हूँ * लज्जा नमानी रती ।
मैले ता तिमिलाइ ठान्छु मनमा * क्वै देशका भूपती ॥
को हौ वीर ! बताउ सत्य यसरी * ढाँटी रहेछौ किन ?
दर्जा माफिक काम दिन्छु खुशिले * जे सत्य हो त्यो भन ॥७५॥
विन्ती अर्जुनले गरे विनयले * आज्ञा सुनी भूपको ।
लाग्यो लाज मलाई हे नरपते ! * वर्णन् सुनी रूपको ॥
के गर्नू यसरी नपुंसक भई * जन्मेपछि लोकमा ।
व्यर्थै हुन् गुण-शील-रूप गहना * सम्पूर्ण यो देहमा ॥७६॥
पैह्ले पाण्डव वीरका महलमा * छोरी बुहारी कन ।
बस्थें नाच र गानको थरि थरि * शिक्षा दिई दिन्-दिन ॥
आएँ काम नपाइ दुःखित भई * गर्छु यहीं चाकरी ।
पाए बस्छु हजूरकै शरणमा * सेवा गरी राम्ररी ॥७७॥

श्री उत्तराकन सिकाउँछु नाच-गान ।
जाने जतो सकल दिन्छु म श्रेष्ठ ज्ञान ।
केटीहरू कन पनी म सिकाउनेछु ।
सेवा गरी हजुरलाई रिझाउनेछु ॥७८॥

मेरो नाम 'बृहन्नला' हजुरले * जान्नू हवस् भूपति !
सेवा गर्न हुकुम् दिनोस् महलमा * शंका नमानी रती ॥
विन्ती अर्जुनको सुनेर नृपले * क्यै बेर सोची कन ।
लागे भन्न बृहन्नले ! अझ पनि * मान्दैन मेरो मन ॥७९॥
हैनौ क्लीव तिमी अवश्य पनि हौ * राजा कुनै देशका ।
भन्छौ नर्तक हुँ नपुंसक भनी * ढाँट्ने कुरा व्यर्थका ॥

येती बात भनेर मानिसहरू * द्वारा परीक्षा गरी ।
स्वास्नीमानिसले लगी महलमा * जाँच्ता भए राम्ररी ॥८०॥
राजालाइ यि हुन् नपुंसक भनी * पत्यार लाग्यो जब ।
गाना-नाच सिकाउने महलमा * आज्ञा दिएथे तब ॥
यो आज्ञा सुनि श्रीविराट नृपको * खूशी भए अर्जुन ।
बस्ता क्लीब भएर श्राप अधिको * लाग्यो स्वयं काटिन ॥८१
सिक्थे नाच ति उत्तरासँग सबै * केटी सुसारे पनी ।
शिक्षा अर्जुनले सदा जतनले * दिन्थे दयालु बनी ॥
गर्थे स्नेह सबै सखी सरहको * श्री पार्थका साथमा ।
बस्ता गुप्त भई गरेन अरुले * शंका कुनै बातमा ॥८२॥

शस्त्रास्त्र स्वर्ग-पतिका सँगमा सिकेका ।
प्रख्यात वीर पृथिवी भरीमा भएका ॥
लागेर दैव बनि क्लीब लुकेर बस्ता ।
पाइन्न क्वै सहनशील किरीटि जस्ता ॥८३॥

वैशम्पायनले भने नरपते ! * क्यै बेर पर्खी कन ।
साक्षात् सूर्य समानका नकुलजी * पुग्दा भए त्यै क्षण ॥
लागे हेर्न डुली विराट नृपको * ती अश्वशाला जब ।
देखी भूपतिले भने चरहरू * डाकेर आफ्ना सब ॥८४
जाओ बुझ्न, छडी लिएर करमा * हेर्दैछ घोडा किन ?
को हो बात सबै बुझीकन छिटै * आई मलाई भन ॥
राजाको सुनि यो हुकुम् चरहरू * दौडेर जाँदा भए ।
राजाज्ञा चरले भनी, नकुलजी * आई खडा भैगए ॥८५॥
लागे भन्न तिनी सदा हजुरको * कल्याण होस् भूपति !
मैले जान्दछु अश्वका विषयमा * हो जान्नुपर्ने जति ॥

धेरै भूपतिवाट यै विषयमा * राजन् ! छु सम्मानित ।
पाए सारथि रूपमा हजुरको * बस्थें म राम्रोसित ॥८६॥
विन्ती भूपतिले सुनी नकुलको * भै रूपमा मोहित ।
देखी तेज ठुलो दिवाकर सरी * सोधे भई शंकित ॥
राख्छु सारथिरूपमा अब तिमी * सानन्द याहाँ तर ।
आफ्नू नाम तथा पिता र कुलको * संपूर्ण वर्णन् गर ॥८७॥
तिम्रो के छ विशेषता र यसरी * के काम आयौ यहाँ ।
देखेको कहिले थिईनँ अहिले * फर्केर जान्छौ कहाँ ?
राजाको सुनि यो कुरा नकुलले * बिन्ती गरे सादर ।
हे राजन् ! म थिएँ युधिष्ठिरकहाँ * पैह्ले बसेको तर ॥८८॥
आपत्ती उनिहेरुलाई अहिले * आई परेको परेको हुँदा ।
आएँ बस्न दयालुता हजुरको * सुन्थें म पैह्ले सदा ॥
भन्थे 'ग्रन्थिक' पाँच पाण्डवहरू * डाक्ता मलाई त्यहाँ ।
बस्थें रक्षक रूपमा म तिनिको * त्यो अश्वशालामहाँ॥८९॥
घोड़ा जात कुजातका म सहजै * राम्रो गरी चिन्दछु ।
शालीहोत्र पढेर औषधि सबै * रोगादिको जान्दछु ॥
जस्तो सारथि छन् प्रसिद्ध सबमा * श्री मातली इन्द्रका ।
जस्तो विज्ञ पराक्रमी अरुणजी * छन् सारथी सूर्यका ॥९०
त्यम्नै सारथि रूपमा हजूरको * रक्षा गरी अश्वको ।
आज्ञा वक्सनुहोस् प्रसन्न मनले * सेवा गरी बस्नको ॥
विन्ती भूपतिले सुनी नकुलको * आज्ञा दिए सादर ।
राखें रक्षक रूपमा बसि तिमी * रक्षा सबैको गर ॥९१॥
मेरा छन् जति अश्व-रक्षकहरू * संपूर्णका मालिक ।
आजै देखि भयौ प्रसन्न मनले * बस्नू बनी रक्षक ॥

तिम्रो योग्य भएन काम भनि यो * देखेर नै जान्दछु ।
मैले झैं नृप भै चलाउनू हुकुम् * पर्ने थियो भन्दछु ॥९२॥
जो माग्यौ तिमिले प्रसन्न मनले * मैले दिएँ त्यै वर ।
आफ्नू काममहाँ कुनै तरहको * पर्दैन मान्नू डर ॥
यस्तो भूप विराटको नकुलले * पाएर आश्वासन ।
बस्ता गुप्त भई सकेन अरुले * तिन्‌लाई जानीलिन ॥९३॥

यस्ता किसिम्‌सित त्यहाँ लुकि पाँच भाई ।
अज्ञातवासभरिको दिन काट्‌न लाई ॥
थामी स्वधर्म दुख-कष्ट सही प्रशस्त ।
बस्थे ति गर्भ बिचको शिशु झैं दुरुस्त ॥९४॥

पाँच भाइको आपसमा प्रेम र जीमूत वध —

वैशम्पायनले भने नरपते ! * पाँचै जना पाण्डव ।
लागे बस्न विराटका महलमा * संकष्ट खप्तै सब ॥
पाएथे तृण-बिन्दुको भगवती * -को धर्मको आशिष ।
त्यस्को दिव्य प्रभावले मनमहाँ * तिन्‌को थियो साहस॥९५॥
जूवामा नृपको युधिष्ठिरजिले * सम्पत्ति जो जित्तथे ।
पाँचै भाइ महाँ बराबर गरी * आनन्दले बाँड्‌दथे ॥
राजालाई खुवाइ भोजन मिठो * जो पाउँथे खिल्लत ।
बाँड्‌थे भीम सबै बराबर लुकी * सम्पूर्ण राम्रोसित ॥९६॥
गाना नाच गरी रिझाई धन जो * श्री पार्थले पाउँथे ।
त्यो सारा लुकी श्रीयुधिष्ठिरजिको * पाऊ महाँ राख्तथे ॥
राखी प्रेम अनन्य आपसमहाँ * मौका विचारी कन ।
दिन्थे श्री सहदेवले दुध दही * नौनी लुकाईकन ॥९७॥

घोड़ालाइ सधाउँदा नकुलले * बक्सीस जो पाउँथे ।
दाजूलाइ लगेर अर्पण स्वयं * सम्पूर्ण त्यो गर्दथे ॥
पाञ्चाली पति पाँचका चरणमा * आफ्नू लगाई मति ।
बस्थिन् कष्ट सहेर गुप्त रितले * जानेर दैवी - गति ॥९८॥
वैशम्पायनले भने नरपते ! * बस्ता त्यहाँ पाण्डव ।
मैन्ना चार बितेपछि हुन गयो * यौटा ठुलो उत्सव ॥
मान्थे खूब रमाइलो सब, गरी * ब्रह्माजिको पूजन ।
आए हेर्न अनेक मानिसहरू * आनन्द मानीकन ॥९९॥
कुश्ती लड्न सिपालु मल्ल बलिया * आए अनेकौं त्यहाँ ।
गर्थे आदर भूपले सकलको * खूशी भई मन्महाँ ॥
आज्ञाले नृपको ति मल्लहरूको * क्यै बेर कुश्ती भयो ।
सारा मल्लमहाँ असाध्य बलियो * जीमूत भन्ने थियो ॥२००
त्यस्ले वीरहरू भए जति त्यहाँ * प्रत्येकलाई जित्यो ।
सक्छौ लड्न भने कुनै अघिसरी * लौ आउ भन्दो भयो ॥
त्यस्को शक्ति ठूलो बुझीकन त्यहाँ * आएन कोही जब ।
आज्ञा बक्सनुभो विराट नृपले * श्री भीमलाई तब ॥१॥
इच्छा ता मनमा थिएन तपनी * आज्ञा सुनी भूपको ।
सामुन्ने उभिए गएर नगिचै * श्री भीम जीमूतको ॥
लागे लड्न हुवै परस्पर छली * ठूलो अखाड़ा महाँ ।
थाले हेर्न उभेर दर्शकहरू * आनन्द मानी त्याहाँ ॥२॥
लड्छन् मत्त गजेन्द्र जङ्गलमहाँ * जुन् चालले बेसरी ।
सोही चाल गरी लड़े तिनिहरू * मार्ने इरादा धरी ॥
गर्जी बेसरी मुड्किले बल गरी * हान्थे दुवैले जब ।
हुन्थ्यो शब्द कठोर वज्र गिरिमा * ठूलो परे झैं तब ॥३॥

कुश्ती खेल्नमहाँ सिपालु ति दुवै * योद्धा हुनाले गरी ।
खोज्थे छिद्र गिराउने जमिनमा * बाहु धरी बेसरी ॥
हेर्दै क्रोध गरी पछित्तिर सरी * ताकेर छाती महाँ ।
पृथ्वी कम्प गराइ वज्र सरिको * मुड्की बजार्थे त्यहाँ ॥४
छिर्केलाइ गिराउने घरि-घरी * बाटो दुवै हेर्दथे ।
तानातान गरी घचेटि बलले * कैह्ले ति पच्छार्दथे ॥
कैह्ले कम्मरमा समाई सिरले * माछ्र्‌ भनी तान्दथे ।
सारा दर्शक मल्ल-युद्ध दुइको * आश्चर्यले हेर्दथे ॥५॥
माछ्र्‌ यस्कन लौ भनेर मनमा * पक्का गरी भीमले ।
पक्री कम्मरमा उचालि सहसा * बोके दुवै हातले ॥
केही बेर घुमाई फन्न रिसले * आकाशमा बेसरी ।
पच्छारे जिमिमा र चोट परि त्यो * जीमूत गैगो मरी । ६॥
ठूलो वीर थियो तथापि सहजै * देखे मरेको जब ।
लागे गर्न बढाइँ भीम विरको * आश्चर्य मानी सब ॥
डाकी वल्लभलाइ मत्स्यपतिले * तारीफ धेरै गरी ।
स्याबासी धन-रत्न खिल्लत दिए * खूशी भई बेसरी ॥७॥
धेरै मल्ल जिती प्रदर्शन गरी * यस्तै अनेकौं थरी ।
दिन्थे दौलत भीमलाई नृपले * मौका महाँ बेसरी ॥
राजाले कहिले बसी महलमा * रानीहरूले पनी ।
हेरी वल्लभको पराक्रम, खुशी * मानुन्‌ सबैले भनी ॥८॥
जोड़ी वल्लभको नपाई अरु क्वै * आफ्नू ठूलो राज्यमा ।
छोड्थे सिंह, गजेन्द्र लौ लड़ भनी * श्री भीमको सामुमा ॥
राजाको बुझि भाव वल्लभ पनी * लड्थे ति जन्तू सित ।
बस्थे काम गरी अलौकिक सदा * तिनूको चिताई हित ॥९॥

गाईको सहदेवले जतनले * रक्षा गरेका थिए ।
घोड़ालाइ सधाई श्री नकुलले * राजा रिझाई दिए ॥
जूवामा नृपलाइ धर्म-सुतले * राजी गरेका थिए ।
आफाफ्नू गरि काम पाण्डवहरू * सानन्द बस्ता भए ॥१०॥
देखी दुःख र काम पाँच पतिको * चिन्ता परी मन्महाँ ॥
पाञ्चाली अति कष्ट मानि मनमा * बस्थिन् सुदेष्णा कहाँ ॥
आँखाबाट बगाइ आँसु दिन-दिन् * मैन्हा बितेथ्यो दस ।
कस्तै कष्ट परे पनी ति मनको * त्याग्दिनथिन् साहस ॥११

कीचक द्रौपदी संवाद :

कृष्णा क्वै दिन बस्तथिन् टहलमा * रानी सुदेष्णा कहाँ ।
बैन्ही भेट्न भनेर कीचक स्वयम् * आयो कुनै दिन् त्यहाँ ॥
देखी सुन्दर रूप लक्षण हुने * श्री द्रौपदीजी कन ।
लाग्यो बल्न तुरुन्त कीचक त्यहीं * कामाग्निमा दन्दन ॥१२
त्याहाँबाट उठेर पागल सरी * पौंचेर बैन्ही कहाँ ।
लाग्यो भन्न समस्त लाज त्यजि त्यो * विक्षिप्त जस्तो त्यहाँ ॥
हे बैन्ही ! अति सुन्दरी महलमा * देख्छु म जो सुन्दरी ।
देखेको पहिले थिएन अहिले * आइन् यहाँ के गरी ॥१३
यिन्को दिव्य सुगन्ध पद्मसरिको * लाग्यो र हेर्दै महाँ ।
पाऱ्यो लड्डु मलाई मद्य बहुतै * खाए सरीको यहाँ ॥
यिन्को सुन्दर रूप गाडिन गयो * मेरो मनैमा अति ।
यिन्को प्राप्ति सिवाय छैन अरु क्यै * यो रोगको औषधि ॥१४॥
मेरो यो मनलाइ बेसरी मथी * वश्मा गराइन् तन ।
कस्की पत्नि यि हुन् मलाइ बहिनी * सोधेर चाँडो भन ॥

यस्ती सुन्दरिले बसी महलमा * गनूँ पऱ्यो चाकरी ।
जानी दैवगती विचित्र मनमा * आश्चर्य भो बेसरी ॥१५॥
जस्तो काम यि गर्दछिन् बसि यहाँ * दासी बनी यो घरी ।
यिन्का निम्ति भयो अयोग्य मनमा* लाग्यो दया बेसरी ॥
मेरी भै गृहस्वामिनी यिनि बसुन् * आनन्द भोगी कन ।
मैमाथी र अरु सबै उपरमा * यिन्ले गरुन् शासन ॥१६
मेरो सम्पतिले भरी महलको * राम्रो पलङ्मा बसुन् ।
रानी भैकन भित्र-बाहिर सबै * मेरो उज्यालो गरुन् ।
बैह्नीलाई यती भनेर मनमा * आफ्नू मिलाई कन ।
फेरी द्रौपदिका पुग्यो नगिचमा * तत्काल त्यो दुर्जन ॥१७
ठूलो बाघिनिका अघिल्तिर गई * सानू हुने स्यालले ।
लाग्यो बोल्न फकाउँदै गरि दया * घेरा दिंदा काल्ले ॥
के हो नाम बताउ सत्य सुमुखी ! * आफ्नू पिताको भन ।
काहाँबाट विराटको नगरमा * आई पुगेकी किन ? ॥१८॥

तिम्रो शरीर सुकुमार छ तेजपूर्ण ।
पारी दिने मुख छ श्री शशि-दर्प-चूर्ण ॥
आँखा छ उत्तम विशाल सरोज जस्ता ।
चुल्ठो छ कृष्ण दुइ नाग सजीव जस्ता ॥१९॥
वाणी सुकोमल छ कोकिल झैं दुरुस्त ।
तिम्रो छ अंग रति झैं कमलो समस्त ॥
तिम्रो समान शुभ लक्षण-युक्त नारी ।
देखीनँ विश्वभरिमा कहिले अगाड़ी ॥२०॥

कल्याणी तिमिलाई ठान्छु मनमा * मैले त लक्ष्मी भनी ।
गौरी हौ कि त शम्भुकी प्रियतमा * साक्षात अर्द्धाङ्गिनी ॥

पार्दैछयौ निज कान्तिले सहजमा * श्री चन्द्रमा लज्जित।
गर्नें नित्य विहार हौ रति तिमी * श्री कामदेवैसित ॥२१॥
लज्जा, कान्ति, मति क्षमा अरुदया* देवाङ्गना हौ कि त।
पार्दैछयौ निज कान्तिले शशि तथा* संसार नै लज्जित ॥
तिम्रो यो मुख-चन्द्रलाइ सुमुखी ! * देखे पछी मानिस।
सक्नेछैन कदापि थाम्न मन लौ * कन्दर्पको भै वश ॥२२॥

तिम्रा दुवै जघन छन् तट झैं नदीका।
देख्तैमहाँ वश भएँ म त श्रीमदन्का ॥
ठान्थें म यो विषयमा निजलाइ वीर।
पारी दियौ तर मलाई शुभे ! अधीर ॥२३॥
यो निर्दयी मदन अग्नि बनेर ऐहे।
पोल्दैछ यो हृदय भित्र बली क्रमैले ॥
संकल्प सुन्दर समागमको गरेर।
पर्खी रहेछु म शुभे ! खपि दाह घेर ॥२४॥
तिम्रा पयोधर सुपुष्ट भई खुलेको।
त्यसमाथि हार मणिको छ झुली रहेको।
देख्छु जसै म कुचका दुइ गोल घेरा।
खैंचन्छ आफुतिर नै मनलाई मेरा ॥२५॥
कन्दर्पले कठिन बाण गरी प्रहार।
पारी दियो हृदयको टुकुरा हजार ॥
चाँडै समागम स्वरूप मलम् लगाई।
आराम पार सुमुखी ! तिमि नै मलाई ॥२६॥
हे सुन्दरी ! जब मलाई रुचाउनेछयौ।
सम्पत्ति औ सुख ठुलो तिमी पाउनेछयौ॥

सौन्दर्यपूर्ण सुकुमार शरीर पाई।
दासी बनेर रहनू अति कष्ट पाई ॥२७॥



कीचक द्वारा भयभीत द्रौपदी

हे भामिनी ! उचित ठान्दिनँ काम मेल्ते।
मेरो गएर घरमा बसिद्यौ खुशीले ॥
दासी र दास घरमा अहिले जती छन्।
मैले समेत सब चाकर ती हुनेछन् ॥२८॥

यस्तै किच्चकले गऱ्यो प्रणयको * धेरै थरी प्रार्थना।
लागिन् भन्न बुझाई द्रौपदि, सुनी * त्यो दुष्टको याचना ॥
हे मन्त्री ! तिमिले भन्यौ जतिकुरा* आसक्त भै यो घरी।
सुन्दैमा पनि यो अयोग्य हुनगो * छुच्चो र नीचोसरी॥२९॥
दासी हूँ म त तुच्छ नीच सबको * गर्छु यहाँ चाकरी।
तिम्रो योग्य म हुन्नँ वीर ! कहिले* भन्ने बुझ राम्ररी ॥

गर्दैनन् कहिले कुनै सुजनले * दुष्कर्म जानीकन ।
गर्छन् प्रेम वरू स्वयं गृहिणीमा * सानन्द ज्ञानी जन॥३०॥
पाउन्नन् ति पर-स्त्रिमा रत हुने * कल्याण कैह्ले पनि ।
सोही कारण त्याग दुर्मति तिमी * हो पाप ठूलो भनी ॥
जानी-जानि कुकर्म गर्न यसरी * सछौं अगाडी किन ?
यस्ले हुन्छ अवश्य दुःख, पछितो * पक्का ठुलो सज्जन!॥३१
कृष्णाले यसरी सबै तरहले * नीति बताई कन ।
सम्झइन् तर कालको वश हुँदा * मानेन त्यो दुर्जन ॥
हो यो धर्म र पाप हो यति भनी * सम्पूर्ण जाने पनी ।
बोल्यो फेरि फकाउँदै मदनले * विक्षिप्त जस्तो बनी ॥३२

परस्त्री ताक्तामा कुयश, फजिती मिल्दछ यति ।
भनी जानी-जानीकन पनि नजान्ने लिइ मति ॥
बनी बौलाहा भैं नगरिकन क्यै ख्याल मनमा ।
पऱ्यो त्यो दुर्बुद्धि नजितिसकिने काल वशमा ॥३३॥

आफूमा अनुरक्त जानि तिमिले * जस्तो दियौ उत्तर ।
राखीनौ किन स्नेह केहि मनमा * यो दासका खातिर ॥
पश्चात्ताप हुनेछ त्याग यसरी * गर्दा मलाई यहाँ ।
तिम्रो दास र कामको वश भई * जाऊँ म ऐह्ले कहाँ ॥३४॥
स्वामी हूँ म विराटका महलको * औ राज्यको भामिनी !
छैनन् रूप र शक्तिमा म सरिका * संसारमा क्वै पनि ॥
छन् मेरा वशमा सबै जन भनी * विश्वास मानीकन ।
सुन्दीनौ तिमि प्रार्थना प्रणयको * मेरो वृथामा किन ? ॥३५॥
छन् मेरा घरमा सबै सुख दिने * सामग्रि हे सुन्दरी !
त्यागी ती सब वस्तु गर्नु तिमिले * खुल्दैन यो चाकरी ॥

गर्छु अर्पण राज्य वैभव सबै * हे भामिनी ! यै घरी ।
भोगी भोग तिमी सहर्ष रहनू * रानी सुदेष्णा सरी ॥३६॥
पापी कीचकले यसै तरहले * धरे लोभ्यायो जब ।
जानिन् आशक आफुमा खल भयो * भन्ने सतीले तब ॥
लागिन् भन्न रिसाइ–काल यसरी * डाक्छौ वृथामा किन ?
दासीमा अनुरक्त भै सुख ठुलो * के पाउनेछौ मन ? ॥३७

परस्त्री सैरन्ध्री मलिन बसना हीन रूपकी ।
म दुःखी तिम्रो के अनुरूप हुनेछु प्रणयकी ?
कदापी गर्दैनन् अनुचित कुरा योग्य जनले ।
गऱ्यौ जस्तो वार्ता मसँग भइ निर्भीक तिमिले ॥३८॥

पाँचोटा बलवान वीरहरू छन् * गन्धर्व मेरा पति ।
डुल्छन् गुप्त रही यहीं वरिपरी * मेरो सुरक्षार्थ ती ॥
त्यागी यो मनको कुभाव अहिल्यै * फर्केर जाऊ घर ।
मान्दैनौ मनमा वृथा किन तिमी * मर्छु कि भन्ने डर॥३९॥
सानू बालकले ठुलो उदधिमा * पौडेर तर्छु भनी ।
आँटे झैं तिमिले मलाई अहिले * दुर्वाच्य बोल्नू परी ॥
जान्ने छन् सब यो कुरा पतिहरू * ती पाँच मेरा जब ।
मार्नेछन् तिमिलाइ बन्धुसहितै * निर्वंश पारी सब ।४०॥
भन्छन् चन्द्र समाउँछु म जननी * जस्तो गरी बालक ।
त्यस्तै हो तिमिले मलाई यसरी * आँट्नू पनी कीचक ॥
आफ्नू जीवनको मलाई बुझिल्यौ * हो कालरात्री भनी ।
मार्नेछन् पति पाँचले सहजमा * कालाग्निजस्ता बनी॥४१॥
तिम्रो प्राण बचाउने कहिं पनी * होवैन क्वै रक्षक ।
सोही कारणले फिरेर घरमा * जाऊ छिटै कीचक ॥

धेरै यै रितका भनिन् हित कुरा * श्री द्रौपदीले तर ।
बैन्हीलाइ भन्यो गएर खलले * सैरन्ध्रिका खातिर ॥४२॥
हे बैन्ही ! जसरी र जुन् जतनले * मेरी हुनेछिन् तिनी ।
सोही गर्नुपर्‍यो उपाय तिमिले * चाँडो दयालु बनी ॥
सम्झाइन् तिनिले पनी जतनले * त्यो भाइलाई तर ।
अन्धो झैं भइ कालको वश परी * मानेन त्यो दुच्छर ॥४३॥
हे भाइ ! शुभ पर्वको दिन कुनै * सर्जाम जम्बा गरी ।
रक्सी पार्नु तयार खूब फलका * मीठा अनेकौं थरी ॥
त्यो बेला म पठाउनेछु घरमा * रक्सी लिना खातिर ।
दासीलाइ फकाउँदै जतनले * राजी तिमी नै गर ॥४४॥
बैन्हीको सुनि बात कीचक गयो * फर्कैर आफ्नू घर ।
बोल्यो सेवकलाइ खूब फलको * रक्सी तयारी गर ।
इच्छा माफिकको तयार हुनगो * मेवा मिठाई जब ।
बैन्हीलाइ गयो सुनाउन स्वयं * संवाद त्यसको सब॥४५॥
दासीलाइ पठाउनू अब भनी * फर्क्यो जसै त्यो घर ।
रानीले अनि द्रौपदीसित भनिन् * गर्दै ठुलो आदर ॥
सैरन्ध्री ! म असाध्य व्याकुल भएँ* बाधा गरी प्यासले ।
ल्याऊ अर्क गएर कीचककहाँ * जाऊ शुभे वेगले ॥४६॥
कृष्णाले सुनि यो हुकुम् विनयले * बोलिन् सुदेष्णा सित ।
पैह्लेको अपमान सम्झि मनमा * मान्दैछु भीती म त ॥
जाहिरै छ हजूरलाइ झगरा * पैह्ले भएको पनि ।
जानीजानि हुकुम् कसोरि दिनुभो *लौ अर्क ल्याऊ भनी ४७॥
बस्ता चाकरिमा अघी प्रण गरी * मैले भनेको जति ।
होला याद हजूरलाइ सब त्यो * बिन्ती चढाऊँ कति ॥

वेश्यारूप भई बसी महलमा * गर्छु भनी चाकरी ।
आएकी म कदापि होइन यहाँ * जानी लिनोस् राम्ररी॥४८
दासी दास म झैं अरू हजुरका * धेरै थरी छन् यहाँ ।
सक्छन् ल्याउन अर्क मागी सुमुखी* आज्ञा भए छिन्महाँ ॥
गर्ला कीचकले मलाइ अपमान् * अन्धो बनी कामले ।
आज्ञा जान मलाइ यो नदिनुहोस् * रानी यसै हेतुले ।४९॥
बिन्ती द्रौपदिको सुनेर सहसा * बोलिन् सुदेष्णा सती ।
सक्नेछैन कदापि गर्न अपमान् * मैले पठाए पछी ॥
येती बात भनेर पात्र सुनको * राखी दिइन् हातमा ।
निस्किन् द्रौपदि जानलाइ करले * शंका गरी चित्तमा ॥५०
रोई सूर्य तरफ् फिरी विनयले * भन्दी भइन् सादर ।
कीचक्को वशमा कदापि नपरुँ * हे देव ! रक्षा गर ॥
तिन्को विन्ति सुनेर श्री अरुणले * चाँडै दयालु बनी ।
योटा दैत्य पठाइ बक्सनुभयो * रक्षार्थ लौ जा भनी ॥५१॥
घुम्थ्यो दैत्य अदृश्य भै वरिपरी * रक्षा सतीको गरी ।
पापी कीचकका पुगिन् महलमा * काम्दै तिनी थर्-थरी ॥
देख्यो द्रौपदिलाइ सामु खलले * आई पुगेकी जब ।
लाग्यो भन्न सहर्ष स्वागत गरी * साम्ने खड़ा भै तब ॥५२॥
आयौ आज दया गरीकन स्वयं * हे सुन्दरी ! स्वागत ।
लाग्यो पुग्छ स्वयं मनोरथ भनी * विश्वास राम्रोसित ॥
लौ लेऊ गहना र वस्त्र बढिया * माला छ यो रत्नको ।
आऊ बैठकको बसौं पलंगमा * हे सुन्दरी ! दासको ॥५३॥
तिम्रा निंति तयार अर्क छ मिठो * खाऊँ सँगैमा बसी ।
पाए चाकरि गर्न दास सरि भै * मान्नेछु साह्रै खुशी ॥

बोलिन् द्रौपदि क्रोध-पूर्ण स्वरमा * दुर्बुद्धि हे कीचक !
मर्नेछौ यदि कामले तिमि, कुनै * हौंवैन संरक्षक ॥५४॥
त्यागी धर्म कुवाच्य बोल्नु यसरी * हो मृत्युको लक्षण ।
जानी-जानि अधर्म गर्न अहिले * सछौं अगाडी किन ?
रानीले लिइ अर्क आउनु भनिन् * प्यासी हुँदा बेसरी ।
देऊ अर्क लिएर जान्छु म छिटै * दर्बारमा यो घरी ॥५५॥
पापी कीचकले सुन्यो विनय यो * श्री द्रौपदीको जब ।
बोल्यो अर्क पुऱ्याउने अरु पनि * छन् दास-दासी सब ॥
येती बात भनेर दक्ष करमा * पक्रेर तान्दो भयो ।
झट्कारिन् बलले र हात खलको * तत्काल फुस्की गयो ॥५६
आँटिन् भाग्न तिनी र झट्ट दगुरी * पक्री लियो चादर ।
तानिन् क्रोध गरेर चादर अनी * पच्छारियो क्यै पर ॥
पापी कीचकबाट मुक्त यसरी * पारी दगुर्दै सती ।
पौंचिन् झट्ट सभामहाँ शरणको * निम्ती डराई अति ॥५७॥
भूमीबाट उठेर कीचक पनी * सोही सभामा गयो ।
खुल्ठोमा धरि एक लात सबको * साम्ने लगाई दियो ॥
हान्यो हात भनेर दैत्य रविको * हेरी रहेको थियो ।
पापी कीचकलाई वायु गतिले * त्यस्ले घुचेटी दियो ॥५८

धक्कयाउँदा राक्षसले रिसाई ।
सकेन आफूकन रोक्नलाई ॥
लड्यो गई कीचक धर्मराई ।
मूर्छा पऱ्यो बेसरी चोट खाई ॥५९॥

द्रौपदीले न्याय माग्नु :—

योद्धा भीम तथा युधिष्ठिर पनी * सोही सभामा थिए ।
प्यारी द्रौपदिको विपत्ति दुइले * प्रत्यक्ष देखी लिए ॥
राता नेत्र गराई भीम रिसले * आगो सरीका भए ।
माछु कीचकलाइ पक्रि अहिल्यै * भन्ने इरादा लिए ॥६०॥
यौटा वृक्ष थियो उतैतिर तिनी * हेर्दै थिए बेसरी ।
तिन्को भाव बुझी युधिष्ठिरजिले * रोके इशारा गरी ॥
हेर्छौ वल्लभ ! वृक्षतर्फ, लकड़ी * खाँचो भएको भए ।
भाँच्नू पर्दछ शुष्क वृक्ष बहुतै * मिल्नेछ खोज्नै गए ॥६१

जुन् वृक्षको असल शीतल मिल्छ छाया ।
त्यस्को त पातसँग पनी हुनुपर्छ माया ।
सम्झी समस्त अधिको उपकार त्यस्को ।
रक्षा सदा जतनले हुनुपर्छ उस्को ॥६२॥

येती बात भने युधिष्ठिरजिले * संकेत द्वारा जब ।
मोका जानि अयोग्य रोकि रिसले * बस्ता भए वल्लभ ॥
चिन्नेछन् अरुले भनेर मनमा * शंका भए तापनी ।
आई द्रौपदि द्वारभित्र उभिइन् * रोएर दुःखी बनी ॥६३॥
पापी कीचकलाई मत्स्यपतिले * केही भनेनन् जब ।
राजालाई भनिन् रिसाई बहुतै * श्री द्रौपदीले तब ॥
जस्का शत्रु डराउँछन् नरपते ! * टाढा बसे तापनि ।
निद्रा रातमहाँ र भोक दिनमा * लाग्दैन मार्नन् भनी ॥६४
त्यस्ताकी गृहिणी मलाई अहिले * आई यहाँ कीचक ।
हान्यो लात म माग्छु न्याय दिनुहोस्*राजन् ! प्रजा-रक्षक ॥

दानी सत्य प्रतिज्ञ, विप्रगणमा * श्रद्धा छ जस्को अति ।
लिन्नन् दान बनेर याचक कवै * जस्ले कहीं भूपति ॥६५॥
ऐह्ले कारण क्यै परी तिनीहरू * छैनन् अगाडी तर ।
तिन्की पत्नि म हूँ सभासद सबै * लौ न्याय मेरो गर ॥
मक्छन् गर्न विनाश यो जगतको * आँटे त जैह्ले पनि ।
बस्छन् मौन भएर यो बखतमा * हो धर्म मेरो भनी ॥६६॥
मागिन् न्याय, गरी विलाप यसरी * रोएर तिन्ले अति ।
लागे भन्न बुझाई मत्स्यपतिले * देखेर त्यो दुर्गति ॥
पैह्ले के हुनगो विवाद दुइको * जान्दै नजानी कन ।
मैले गर्नु निसाफ के गरि तिमी * मन्मा विचारी भन ॥६७।
पापी कीचकको सबै सुजनले * अन्याय जाने जब ।
राजाका सँगमा सभासद मिली * निन्दा गरेथे तब ॥
सैरन्ध्रीकन देखि रूप-गुणकी * खानी अती सुन्दरी ।
गर्थे आपसमा बयान् चकित भै * मानीस धेरै थरी ॥६८॥
स्वामीका मुखतर्फ हेरि रिसले * छेडी कलेजा महाँ ।
लागिन् भन्न तिख्याई द्रौपदि रुँदै* संकेत द्वारा त्यहाँ ॥
दुःखीलाइ दिने सदा अभय ती * दानी प्रतापी जन ।
भार्याको अपमान क्लीबसरि भै * हेरी रहेछन् किन ? ॥६९॥
पापी कीचकले सभा बिचमहाँ * लात्ती चलाई दिंदा ।
गर्दैनन् किन न्याय सज्जन, दुखी *-को आज इज्जत् लिंदा ॥
साम्नेमा सबका समाई खलले * मेरो लियो इज्जत ।
अन्यायी सब यी सभासद तथा * हुन् भूप भन्छू मत ॥७०॥
गर्छन् न्याय विचारपूर्वक सदा * जुन् भूपले लोकमा ।
तिन्को कीर्ति बढेर जान्छ दिनहूँ * बस्छन् गई स्वर्गमा ॥

त्यागी धर्म तथा विचार नगरी * अन्याय जो गर्दछन् ।
भोगी दुर्गति लोकमा पछि मरी * ती नर्कमा पर्दछन् ॥७१॥
देखे धर्मकुमारले विकलता * श्री द्रौपदीको जब ।
आयो क्रोध बढ़ेर, खूब पसिना * सारा निधार्मा तब ॥
यस्तै व्यङ्ग, रुँदै विलाप बहुतै * तिन्ले गरेको सुनी ।
लागे भन्न बुझाई धर्मसुतले * दुःखी भए तापनि ॥७२॥



द्रौपदीको विराटको सभामा फिराद

गर्छन् न्याय अवश्य मत्स्यपतिले * भन्ने बुझी मन्महाँ ।
सैरन्ध्री ! तिमिले छ योग्य अहिले * जानू सुदेष्णा कहाँ ॥
जो भार्या पतिको सहर्ष सँगमा * बस्छन् विपत्ति सही ।
गर्छन् भोग तिनै सबै सुखहरू * साथै पतीका रही ॥७३॥
हेर्दाहुन् सुमुखि ! विपत्ति सब यो * गन्धर्व तिम्रा पति ।
होला कारण क्यै र पो तिनिहरू * छन् मौन ऐहे सती ! ॥

मौकाको मनमा विचार नगरी * रोई नटीकै सरी ।
गछ्र्यौं विघ्न सभामहाँ नृपतिको * के हेतु हे सुन्दरी ॥७४॥
जाऊ वस्न शुभे ! तिमी महलमा * मौका परेको घरी ।
तिम्रो दुःख छुटाउनन् प्रकट भै * गन्धर्वले राम्ररी ॥
यस्तो अर्ति सुनी युधिष्ठिरजिको * दिग्दार मानी अति ।
बोल्निन् द्रौपदि, धर्म-भीरु पतिले * गर्दा भएँ यो गति ॥७५॥
जस्ले कष्ट दियो मलाई यसरी * त्यस्को पनी दुर्गति ।
पाऊँ देख्न छिटै,भनीकन हिंडिन्* रानी कहाँ ती सती ॥
धूलो देहभरी थियो, मनमहाँ * सन्ताप माने पनि ।
शोभायुक्त मुहार पूर्ण शशि झैं * सौन्दर्यकी थिन् धनी ॥७६
बद्दा क्रोध सुकेर ओठ मुख ती * रोई रहेकी थिइन् ।
रानीले तिनिलाइ देखि सहसा * आश्चर्य मान्दै भनिन् ॥
सैरन्ध्री ! यसरी मलीन मुखले * रोई रहेकी किन ?
केको दुःख पऱ्यो बुझाईकन त्यो * चाँडै मलाई भन ॥७७॥
रानीको सुनि बात द्रौपदि रुँदै * भन्दी भइन् कारण ।
जाहेरै छ हजूरमा सब कुरा * सोध्नू भएको किन ?
पापी कीचकको गई महलमा * ठूलो विपत्ती पऱ्यो ।
हानी लात सभामहाँ सकलको * साम्ने बिइज्जत गऱ्यो॥७८
रानीले सुनि त्यो विवाद बहुतै * दुःखी भए झैं गरिन् ।
कृष्णाको मन राख्न खातिर तहाँ* यो बात भन्दी भइन् ॥
सैरन्ध्री ! तिमिले नमान मनमा * चिन्ता कुनै बातको ।
मैले दिन्छु सजाय त्यस्कन स्वयम्* साम्ने लगी भूपको ॥७९॥
पाञ्चाली मनमा रिसाई बहुतै * बोलिन् सुदेष्णासित ।
पापी कीचकको बढ़ेर अभिमान् * जस्को लियो इज्जत ॥

मार्नेछन् तिनिले भनी हजुरले * विश्वास मान्नू हवस् ।
त्यस्का निंति क्रिया र कर्म पहिल्यै * गर्ने सबै गर्नुहोस् ॥८०॥
येती बात भनेर द्रौपदि गइन् * फर्केर कोठा कहाँ ।
लागिन् गर्न विचार स्नान गरि ती * जाऊँ म ऐह्ले महाँ ॥
कस्ले गर्छ सहायता र कसरी * मारिन्छ त्यो कीचक ।
सम्झिन् श्री हरिलाई जानि मनले * ब्रह्माण्डका रक्षक ॥८१॥
निद्रा, प्यास र भोक छैन मनमा * त्यो दुष्ट बाँचे तक ।
स्वामी भीम सिवाय छैन अहिले * मेरो कुनै रक्षक ॥
यस्तै तर्क गरी, उठेर निशिना * बाहीर निस्की गइन् ।
कोठामा पुगि भीमसेन विरको * क्यै बेर हेरी रहिन् ॥८२॥
देखिन् सिंह समान वीर बलियो * निद्रा परेका पति ।
ठूलो वृक्षमहाँ लता सरि भई * गै बेह्लिइन् ती सती ॥
पाछै जागृत सिंहलाई जसरी * वन्मा ठुली सिंहिनी ।
चेष्टा त्यै रितको गरिन् सुमुखिले * जागा गराऊँ भनी ॥८३॥

भीमसेन द्रौपदी संवाद :—

राजन् ! सादर भीमको गरिलिइन् * पक्रेर आलिङ्गन ।
वीणा झैं मधुरो मिठो स्वर गरी * बोलिन् दुखाई मन ॥
उठ्नूहोस् किन सुत्नुहुन्छ यसरी * हे नाथ ! मुर्दा सरी ।
पत्नीको सहँदा विपत्ति यसरी * जीवित् भनौं के गरी ?॥८४
बिन्ती द्रौपदिको सुनेर सहसा * श्री भीम जागा भए ।
भार्यालाइ नगीच देखि करमा * पक्रेर सोधी लिए ॥
रात्रीमा किन ? सुन्दरी ! तिमियहाँ * आयौ मलाई भन ।
तिम्रो चन्द्रसमानको मुख भयो * ऐह्ले अँध्यारो किन ?८५॥

बोल्छ्यौ दीन, अनाथ झैं र निशिमा* आपत्ति केको पऱ्यो ?
कस्ले श्री यमराजको नगरमा * जाने इरादा गऱ्यो ?
मैले जान्दछु गर्दछ्यौ मनमहाँ * मेरो तिमिले भर।
आयौ कारण के परेर अहिले * वर्णन् त्यसैको गर ॥८६॥



भीमसेन र द्रौपदीको वार्तालाप

आफ्नू काम बताइ झट्ट अहिले * थाहै नपाई कन।
कोठामा तिमि फर्कि जानु सुमुखी !* पर्दैन चिन्ता लिन ॥
तिम्रो के प्रिय कार्य गर्नु अहिले * मैले पऱ्यो भामिनी।
यो आज्ञा सुनि भीमको धुरु-धुरु * रोएर बोलिन् तिनी ॥८७
जुवा खेल्न सिपालु धर्म-सुत छन् * जुन् भामिनीका पति।
त्यस्ले दुःख नपाउनू पनि त हो * आश्चर्य हे सद्‌मति !
मेरो दुर्गति जे हुनू हजुरकै * सामू त्यहाँ भै गयो।
जानी-जानि यथार्थ बात अहिले * के हेतु सोध्नूभयो ? ॥८८

पापी कौरवको सभा भवनमा * दासी भनेको पनि ।
खप्तैछु अझसम्म कष्ट अधिको * हो धर्म मेरो भनी ॥
मेरो स्पर्श गरेर सिन्धुपतिले * जस्तो गऱ्यो दुर्गति ।
त्यस्को ताप अझै पनी छ मनमा * धेरै बताऊँ कति ॥८९॥
राजाकी दुहिता र खूब बलिया * छन् पाँच जस्का पति ।
त्यस्ले पैदल हिंड्नु जङ्गलमहाँ * संकष्ट भोग्दै अति ॥
काटी त्यो वनवासका दुखहरू * गर्छु यहाँ चाकरी ।
मेरो दुःख महाँ विचार नगरे * मर्नेछु हत्या गरी ॥९०॥
पैह्लेका सब कष्टले हृदयमा * पोली रहेकै थियो ।
पापी कीचकले सभाबिच महाँ * लात्ती चलाई दियी ॥
यस्तो कष्ट सहेर बाँच्नु त बरू * मर्नू निको ठान्दछु ।
हे स्वामी ! पुरुषार्थ पाँच पतिको * धिक्कार हो भन्दछु ॥९१
देखी बक्सनुभो स्वयं हजुरले * मेरो विपत्ती जब ।
जानी-जानि सुध्याइ बक्सनुभयो* बिर्सी सके झैं सब ॥
देख्दा कीचकको सधैं महलमा * विक्षिप्त जस्तो बनी ।
हेर्दां गर्दछ बैन्हिको मन लिई * 'हो पत्नि मेरी भनीं ९२॥
सुन्दा त्यो खलका कुवाच्य दिनहूँ * छाती छिया भैसक्यो ।
बाँच्यो कीचक दुष्ट क्यै दिन भने * मैले मरे भै गयो ॥
बिन्ती गर्दछु नाथलाइ, खलले * ठूलो बिजाइँ गऱ्यो ।
मेरो स्नेह भए अलीकति पनी * त्यस्लाई मार्नु पऱ्यो॥८३
जस्का निम्ति सह्यौं विपत्ति वनको * हामीहरूले अति ।
सोही धर्म-कुमारको म अहिले * देख्छु ठूलो दुर्गति ॥
जूवामा सब राज्य हारि वनमा * जाने प्रतिज्ञा गरी ।
सोही वृत्ति लिएर फेरि नृपको * गर्छन यहाँ चाकरी ॥९४

सम्पत्ती घरको प्रशस्त दिनहूँ * हारे पनी द्यूतमा।
कम्ती केहि थिएन श्रेष्ठ ढुकुटी * आफ्नै थियो हातमा॥
स्त्री भाई निज देह राज्य घरको * हारी सबै वैभव।
बस्छन् वृत्ति गरेर सोहि नृपको * मानेर आज्ञा अब॥८५॥
राखी भूपहरू सभा बिच महाँ * जो इन्द्र झैं बस्तथे।
जाँदा बाहिर वेगवान रथमा * प्रस्थान जो गर्दथे॥
त्यस्ता धर्म-कुमार दुर्व्यसनको * त्यो मूर्खताले गरी।
भोग्छन् दास बनी विराट नृपको * संकष्ट नाना थरी॥९६॥
लाखौं केटिहरू लिएर सुनका * भाँड़ा सफा हातमा।
जस्को पाइ हुकुम् सदा अतिथिको* बस्थे सुसम्मानमा॥
दिन्थे आश्रितलाई बक्सिस सधैं * जो व्यक्ति धेरै धन।
त्यस्ताको पनि देखि दुर्गति यहाँ * काटिन्छ मेरो मन॥९७
बूढो अन्ध र पंगु बालक दुखी * माग्ने दरिद्री कन।
इच्छा पूर्ण हुने गरेर दिनहुँ * जो बाँडिदिन्थे धन॥
त्यस्ता भूपतिलाइ दुर्व्यसन यो * लाग्यो जसै द्यूतको।
भोग्छन् कष्ट अनेक दाससरि भै * आशा गरी भूपको॥९८॥
डाक्दा भूपतिले सभाबिच यहाँ * हे कंक ! आऊ भनी।
तीखो लाग्दछ चोट यो हृदयमा * तिन्ले भनेको सुनी॥
दानी, लब्धप्रतिष्ठ श्रेष्ठ, भवमा * जो चक्रवर्ती थिए।
भोगे कष्ट अनेक, फेरि अहिले * त्यै द्यूत-वृत्ती लिए॥९९॥
राजा इन्द्र समान धर्म-सुतको * देख्दा विपत्ती यहाँ।
स्वामी बाहिक भन्न जाऊँ अहिले * कस्को अगाड़ी महाँ॥
मैले विन्ति गरें झिजो जति यहाँ * चिक्षिप्त जस्ती बनी।
माफी बक्सनुहोस् प्रसन्न मनले * हे नाथ ! दासी भनी॥३००

अर्को कष्ट ठुलो छ जो मनमहाँ * जाहेर त्यो गर्दछु ।
त्यस्को दोष मलाई बक्सनुभए * हत्या गरी मर्दछु ॥
वेला भोजनको भएर नृपती * आएर बस्छन् जब ।
यो मीठो बहुतै भएछ, नमिठो * यो वस्तु हे वल्लभ ! ॥१॥
भन्छन्, सुन्दछु त्यो कुरा हृदयमा* आगो सरी पोल्दछ ।
यस्तो कष्ट सहेर बाँच्नु त बरू * मर्नू निको लाग्दछ ॥
गर्नू हुन्छ हजूर मत्स्यपतिको * भान्से बनी चाकरी ।
त्यो देख्दा नहुने छ को पृथिविमा * दुःखी असाध्यै गरी ॥२॥
भान्से यो चिज थप्दछु यति अरू * देऊ भनेको सुनी ।
बाँच्नू चाहिं म ठान्दछु असल नै * हो प्राण त्याग्नू भनी ॥
राजाले परिवारका सँग बसी * गर्दा मनोरञ्जन ।
छाडछन् लड्न हजूरका सँग महाँ * सिंहादि जन्तूकन ॥३॥
हेर्छिन् झ्यालमहाँ बसेर महिषी * केटी सुसारेहरू ।
हाँस्छन् खूब खुशी भएर म भने * रुन्छु गरूँ के अरू ॥
देख्छिन् व्याकुल भै उभीकन रुने* रानी मलाई जब ।
भन्छिन् तीक्ष्ण चलाइ वाक्य-शरले* छेड्दै कलेजा तब ॥४॥
जैह्ले वल्लभ जन्तुका सँग महाँ * लडछन् खेलाँची गरी ॥
हुन्छिन् व्याकुल खूब देख्छु म सदा* सैरन्ध्रि सुर्ता परी ॥
आएका पनि हुन् दुवै महलमा * हाम्रो यि एकै दिन ।
कस्ले सक्छ विचार गर्न सहसा * कस्तो छ कस्को मन ॥५
राम्रा वल्लभ वीर छन् पुरुषमा * प्रत्यक्ष द्यौता सरी ।
नारीमा अति श्रेष्ठ औ गुणवती * सैरन्ध्रि छन् सुन्दरी ॥
राम्रो प्रेम रहेछ गुप्त अधिको * भन्ने ति शंका गरी ॥
भन्छिन् बात मलाई लक्ष्य गरि ती * ठट्ठा गरी बेसरी ॥६॥

हाँसो उडाइ यसरी कटु-वाक्य भन्दा।
हाँस्छन् उपस्थित सबै नरनारि सुन्दा॥
हुन्छु म दिक्क भइ क्रोधित खूब त्याहाँ।
लाचार हुन्छु पछि निस्कि म जाउँ काहाँ।७॥
जस्को पराक्रम प्रसिद्ध छ लोक माहाँ।
त्यस्ता हजूर भइ नीच समान याहाँ।
बस्नू पऱ्यो नरक तुल्य खपेर कष्ट।
हे नाथ! ठान्दछु भए किन दैव रुष्ट॥८॥
जो भोग्दछन् विपत धर्म-कुमार ऐले।
साम्ने छ त्यो हजुरको कति भन्नु मैले।
यो तापले विकल भैकन खूब रुन्छु।
बाँच्नू वृथा छ यसरी बरु देह त्यागछु॥९॥
जस्को कीर्ति थियो तिनै भुवनमा * ती शत्रु सन्तापक।
त्यस्ता पार्थ बनेर क्लीब अहिले * छन् नाचका शिक्षक॥
जस्ले दानव, दैत्य, रासक्ष जिते * एक्लै लडाइँ गरी।
नारी भै पहिरी चुरा करमहाँ * गर्छन् तिनी चाकरी॥१०॥
जस्को दिव्य थियो किरीट शिरमा * रत्नादिको शोभित।
चुल्ठो त्यै स्थलमा म देख्दछु जसै * हुन्छु स्वयं लज्जित।
भाग्थे शत्रुहरू सुनी धनुषको * टंकार संग्राममा॥
जस्का छन् धनु-वाणका अति कडा * ठेला दुवै हातमा॥११॥
त्यस्ता वीर भएर नीच सरि यो * संकष्ट भोग्नू पनि।
जानी दैवगती विचित्र अहिले * रुन्छु म दुःखी बनी॥
जस्को छैन कुनै पनी समरमा * जोडी उनै पार्थको।
देख्दा कष्ट हुँदैन ताप मनमा * हे नाथ! कुन् व्यक्तिको॥१२

हे स्वामी ! रथको कठोर स्वरले * भूमी कँपाई कन ।
जो हिंड्थे अरिलाइ पारि वशमा * योद्धा तिनै अर्जुन ॥
कन्याका संग नाच-गान तिनले * देख्छु गरेको जब ।
रात्रीमा निद हुन्न भोक दिनमा * लाग्दैन स्वामी तब ॥१३
भोग्दैछौं दुख घोर हामिहरूले * आएर राजा कहाँ ।
सासूलाइ हुनेछ कष्ट बहुतै * यो बात सुन्दा महाँ ॥
जस्ले खाण्डव दाहमा गरिदिए * सन्तुष्ट अग्नी कन ।
सक्तैनन् अघि सर्न वीर रणमा * जस्का तिनै अर्जुन ॥१४
नाची गाइ रिझाउँछन् महलका * ती राजकन्या कन ।
देख्छु दुर्गति बीरको म दिनहूँ * आत्तिन्छ साह्रै मन ॥
जस्को ऐन्द्र र ब्रह्म, वारुण तथा * अग्न्यास्त्र छन् देहमा ।
पौलोमादि अनेक राक्षस जिते * जस्ले गई स्वर्गमा ॥१५॥
छोपेको अति तीक्ष्ण अग्निसरिका * दुर्धर्ष श्री अर्जुन ।
बस्छन् भूप विराटको महलमा * सद्धर्म थामी कन ॥
गाई गोठ महाँ प्रसिद्ध बलियो * आबद्ध साँढे सरी ।
नारीका बिच देख्दछु र मनमा * रुन्छु बसी बेसरी ॥१६॥
गर्नू वर्णन कष्टको घरि-घरी * हे नाथ ! मैले कति ?
देख्दैछु सहदेवको म दिनहूँ * प्रत्यक्ष त्यो दुर्गति ॥
मैले जान्दछु लौ अधर्म तिनले * कैल्है गरेनन् भनी ।
भोग्दैछन् तर दास भैकन यहाँ * संकष्ट धेरै तिनी ॥१७॥
साँढे झैं बलवान श्रेष्ठ यसरी * बस्ता गोठालो बनी ।
कोठामा बसि रुन्छु खप्न नसकी * पापी विधाता भनी ॥
गोठालाहरुका बनेर अगुवा * आएर राजा कहाँ ।
गर्छन् आदरले प्रणाम नृपको * सामु खड़ा भै त्यहाँ॥१८

तिनूको भेष तथा ठूलो विवशता * प्रत्यक्ष देख्छु जब ।
राख्नू जीवन यो सही दुखहरू * धिक्कार ठान्छु अब ॥
कुन्तीले वन जानको बखतमा * आज्ञा भएको थियो ।
पाञ्चाली सहदेव वीर सबको * अत्यन्त प्यारो छ यो॥१९॥
लज्जाशील ! विनीत, धार्मिक तथा* संकोच मान्ने हुँदा ।
गर्नू याद विचार खूब तिमिले * यस्को सदा सर्वदा ॥
रातो वस्त्र तथा लगाइ पगरी * गोपाल झैं माथमा ।
त्यस्ता श्री सहदेव गोप सँगमा * सुत्छन् सदा भूमिमा॥२०॥
जस्को धर्मकुमार, भीम सरिका * दाजू छँदै अर्जुन ।
देख्छु घोर विपत्ति यो म दिनहूँ * आत्तिन्छ मेरो मन ॥
मेरो सम्बल एकमात्र छ रुनू * के गर्न सक्छु अरू ।
यस्तो कष्ट सहेर बाँच्नु छ वृथा * मर्नू निको हो बरू ॥२१॥
दाज्यूका अति भक्त श्री नकुलको* देख्छु म झन् दुर्गति ।
गर्छन् काम सईसको विवश भै * उल्टो छ दैवीगति ॥
राजाका नगिचै विनम्र स्वरले * मानेर साह्रै भय ।
बोल्छन् हे नरपाल ! श्रेष्ठ सबमा * मानिन्छ यो नै हय ॥२२॥
तिनूको हीन दशा र नीचसरिको * त्यो काम देख्छु जब ।
हे स्वामी ! म त यो युधिष्ठिरजिको* हो दोष भन्छु सब ।
योभन्दा पनि झन् ठुलो छ मनमा * सन्ताप सुन्नू हवस् ।
यस्मा ख्याल नराखिबक्सनुभए * मर्नेछु जानी लिनोस् ॥२३
ठान्नू हुन्छ हजूरले कि मनमा * मैले अगाड़ी पनि ।
भोगथें कष्टहरू अनेक थरिका * यस्तै म दासी बनी ॥
जस्का छन् बलवान श्रेष्ठ सबमा * पाँचै पती जीवित ।
त्यस्तालाइ विपत्ति पर्नु यसरी * आश्चर्य मान्छु म त॥२४॥

स्वामी धर्मकुमारले व्यसन यो * व्यर्थैं जुवाको लिंदा ।
भोग्छौं आज विपत्ति हामिहरू क्यै * बोल्नै नसक्ने हुँदा ॥
सैरन्ध्री बनि हिंड्दछु पछि-पछि * रानी सुदेष्णासित ।
गर्नू पर्दछ काम नीचहरू झैं * तिनको चिताई हित ॥२५॥

सम्झन्छु श्रेष्ठ अघिको सुख-शान्ति मैले ।
कस्तो थियो शरिर हेर्नुहवस् पहीले ॥
मेरो सबै सुख छ ज्ञान हजूरलाई ।
बिन्ती गरौं कति छ कष्ट यहाँ मलाई ॥२६॥
घुम्छन् विपत्तिहरू चक्र समान नित्य ।
संसारका सुख र दुःख बुझी अनित्य ॥
राखेर धर्म मनमा म सही रहेछु ।
त्यै हेतुले नमरि देह धरी रहेछु ॥२७॥

गर्छन् दान अनेक सज्जन सदा * सम्पत्ति दानी बनी ।
हुन्छन् ती परि कालको वशमहाँ * माग्ने भिखारी पनि ॥
अर्कालाइ प्रहार शस्त्रहरू जो * गर्छन् कुमौका महाँ ।
मर्छन् ती पनि कालको वश परी * त्यै व्यक्तिद्वारा त्यहाँ॥२८॥
दैवाधीन समस्त लोकहरु छन् * जानिन्न त्यसको गति ।
कस्ले सक्तछ नाघ्न क्रूर विधिको * बन्धन् छ साह्रो अति ॥
सोही कारण धर्मको विषयमा * विश्वास पक्का हुँदा ।
गर्छु आदर शास्त्रका वचनको * त्यै हेतु मैले सदा ॥२९॥
पैह्लेको सुख शान्ति पाँच पतिको * फर्कन्छ फेरी भनी ।
स्वर्छु कालगती बुझी जतिसुकै * आपत्ति आए पनि ॥
धेरै विन्ति गरें हजूर सँग जो * मैले यहाँ गन्थन ।
यस्मा जो छ यथार्थ कारण सबै * गर्छु यहाँ वर्णन ॥३०॥

भार्या पाण्डव पाँच वीरहरुकी * छोरी म पाञ्चालकी ।
दासी दास थिए प्रशस्त, म थिएँ * मालीक साम्राज्यकी ॥
साह्रै हीन भएर मत्स्य-पतिको * गनूं पऱ्यो चाकरी ।
यस्मा गर्नुहवस् विचार मनमा * सोचेर राम्रो गरी ॥३१॥
मैले वस्नुपऱ्यो विपत्ति अहिले * जस्ता प्रकार्को सही ।
सक्छन् स्त्री अरु बाँच्न को पृथिविमा * यस्तो स्थितिमा रही ।
जस्का छन् सुत श्रेष्ठ बान्धव तथा * सासू-ससूरा पति ।
मैले भैं अपमान् सहेर रहने * पाइनन्न नारी सती ॥३२॥
स्वामी ! पाण्डव वंशको र कुरुको * पाञ्चाल वंशी पनी ।
साराको अपमान ठान्छु यसरी * बस्ता म दासी बनी ॥
यस्ता कष्ट मलाई पर्दछ भनी * सम्भावना के थियो ।
पैह्ले पाप गरीछु के र विधिले * यस्तो विपत्ती दियो॥३३॥
मैले पाप गरीछु केहि विधिको * पैह्ले कुनै कालमा ॥
सोही पाप फली विपत्ति अहिले * भोग्दैछु यो जन्ममा ॥
मैले कष्ट अनेक जंगल महाँ * भोग्दै डुले तापनि ।
यस्तो दुर्बलता थिएन तनमा * हे नाथ ! कैह्ले पनि॥३४॥
इन्द्रप्रस्थमहाँ थिए अघि जती * शान्ती - सुविस्ताहरू ।
जाहीरै छ हजूरलाई अहिले * बिन्ती गरौं के अरू ?
चिन्ता घोर परी शरीर यसरी * बिस्तार गल्दै गयो ।
हाम्रो नीच समानको स्थिति यहाँ * दुर्दैवले नै भयो ॥३५॥
यस्ता वीर पराक्रमी हजुर भैं * पाँचै जना भाइले ।
भोग्नू कष्ट पऱ्यो अभागिनि हुँदा * मेरो कुनै पापले ॥
देखें इन्द्र समान पाँच बलमा * दुर्धर्ष आफ्ना पति ।
मेरो यो मनमा भएन कहिले * होला भनी दुर्गति ॥३६॥

उल्टो दैवगती भएर अहिले * पापीहरू छन् सुखी ।
बस्ने धर्म बुझेर हामिहरू छौं * हे नाथ ! साह्रै दुखी ॥
हे स्वामी ! पहिले सबै पृथिविको * साम्राज्य मेरो थियो ।
उल्टो दैव भएर मत्स्यपतिको * दासी गराई दियो ॥३७॥
मैले गर्नुपर्ने काम घरमा * आएन त्यस्तो स्थिति ।
घोट्ता चन्दन हातमा परिसके * ठेला कति हो कति ?
मान्दैनन् बुकुवा पिँधेर अरूले * राम्रो दिए तापनि ।
मैले पर्छ तयार गर्नु दिनहूँ * रानी रिझाऊँ भनी ॥३८॥
ठेला हेर्नु हवस् भनी कर दुवै * सारिन् अगाड़ी जब ।
रोए भीम असाध्य दुःखित भई * छामेर ठेला सब ॥
सासूको करमा परीनँ घरमा * स्वामी म केहे पनि ।
रानीको डर मान्दछु म नृपको * हुन् अन्नदाता भनी ॥३९
यस्तो घोर सही विपत्ति अहिले * रोएर काट्छु दिन ।
आफ्नू धर्म बचाउँ के गरि भनी * आत्तिन्छ साह्रै मन ॥
छातीमा शिर राखि बेसरि रुँदै * तिन्ले भनेको सुनी ।
रोए भीम पनि दुवै करमहाँ * पक्रेर दुःखी बनी ॥४०॥
लामू बाहुलिले मुसारी शिरमा * निःश्वास छाडी कन ।
लागे भन्न बुझाई आदर गरी * श्री द्रौपदीको मन ॥
देख्छु कोमल बाहुमा म सुमुखी * ठेला परेको जब ।
आफ्नू शक्ति र पार्थका धनुषको * धिक्कार ठान्छु सब ॥४१॥
हे प्यारी ! नृपको सभा-भवनमै * त्यस्लाइ मार्ने थिएँ ।
खुल्ला भेद भनी युधिष्ठिरजिको * संकेतमा रोकिएँ ॥
हात्ती भाँच्तछ बाँसका रुखहरू * कुल्चेर जुन् चालले ।
पापी कीचकलाइ त्यै किसिमले * मार्ने थिएँ रोषले ॥४२॥

हानेको तिमिलाइ लात खलले * प्रत्यक्ष देखें जब ।
आँटें मार्न रिसाई मत्स्य-पतिका * मानीस मैले सब ॥
दाजूले गरि वक्र दृष्टि सहसा * हेरेर रोक्नू भयो ।
सोही कारणले बचेर नमरी * त्यो दुष्ट भागी गयो ॥४३॥
जूवामा धन-राज्य हामिहरुको * खोसी लिएकै दिन ।
दुर्योधन् शकुनी र कर्ण सबमा * दुष्टात्म दुःशासन ॥
मैले मार्न सकीनँ कौरवहरू * सम्पूर्ण साम्ने हुँदा ।
आगो झैं गरि पोल्छ भित्र मनमा* ऐह्ले पनि सम्झँदा ४४॥
मैले बस्नुपर्‍यो सहेर सब त्यो * जुन् धर्मका खातिर ।
यागी क्रोध तिमी पनि गर प्रिये* त्यै धर्मको आदर ॥
जस्तो बात भन्यौ मलाई तिमिले * ऐह्ले बिलौना गरी ।
दाज्यूले सब यो सुने यदि भने * चिन्ता परी बेसरी ॥४५॥
त्यागनन् प्राण भनेर जान सुमुखी* देखेर तिन्को गति ।
मछौं हामिहरू नखप्न सकि त्यो * सन्तापलाई सति !
कल्याणी जती छन् सती पृथिवीमा * सद्धर्म थामीकन ।
स्वामीका संग बस्तछन् दुख-तथा * आपत्ति भोगीकन ॥४६॥
हे भद्रे ! भृगुपुत्र श्री च्यवनजी * बस्थे तपस्या गरी ।
लागेको धमिरा थियो शरीरमै * देखिन्नथ्यो त्यो घरी ॥
राजाकी दुहिता तिनै च्यवनकी * पत्नी सुकन्या भिइन् ।
तिन्ले धर्म बुझी प्रसन्न मनले * सेवा पतिको गरिन् ॥४७॥
पत्नी श्रेष्ठ अगस्त्यकी र नृपकी * छोरी थिइन् सुन्दरी ।
नामी धर्म सतीत्वको ति पतिको* गर्थिन् सदा चाकरी ॥
पत्नी श्री रघुनाथकी प्रियतमा * सीता सतीले पनि ।
बस्नू राक्षसको पर्‍यो घर महाँ * अत्यन्त दुःखी बनी ॥४८॥

पत्नीको यहि हेतु सज्जनहरू * गर्छन् सुरक्षा सदा ।
गर्नू हुन्न विचार केहि किन हो * हे नाथ ! मैले रुँदा ।
मार्छन् क्षत्रिय वीर शत्रु रणमा * हो धर्म मेरो भनी ।
पापी कीचकलाइ मारिदिनुहोस् * त्यै धर्म निम्ति पनी ॥६१॥
मेरा निम्ति लडी जटासुर ठूलो * मार्नू भयो दानव ।
हर्नू भो जसरी ति सिन्धुपतिको * शेखी र इज्जत सब ॥
यस्तै कीचकको सबान्धव छिटै * प्राणान्त पारी कन ।
मेरो कष्ट हटाइबक्सनुहवस् * तत्काल मेरो धन ! ॥६२॥
सामुन्ने नृप, कंकको हजुरको * जस्ले लियो इज्जत ।
मर्नेछु म अवश्य त्यो रहिरहे * भोली पनी जीवित ॥
बाँचे कीचकले मलाइ अपमान् * गर्नेछ फेरी पनि ।
पाए मर्दछु नाथका चरणमा * हो धर्म मेरो भनी ॥६३॥
आँखाबाट बगाई अश्रु मुखमा * अत्यन्त दुःखी हुँदै ।
बिन्ती द्रौपदिले गरिन् घरि-घरी * पाऊ समाई रुँदै ॥
पत्नीको सुनि यो विलाप मनमा * श्री भीम दुःखी भए ।
आँसू द्रौपदिको पुछेर, तनमा * तिन्ले मुसारी दिए ॥६४॥
लागे भन्न बुझाई स्नेह गरि ती * धेरै दिंदै सान्त्वना ।
चिन्ता त्याग प्रिये ! पुऱ्याउँछु सबै * तिम्रो मनोकामना ॥
मार्छु बन्धुसमेत कीचक स्वयं * मैले लडाईं गरी ।
योटा काम अह्राउँछु गर बरू * तत्काल हे सुन्दरी ॥६५॥
डाक्नू कीचकलाइ आज तिमिले * त्यो नृत्यशाला महाँ ।
मार्नेछु खललाई त्यै बखतमा * उम्केर जाला कहाँ ॥
गर्नू गुप्त कुरा लुकेर अस्ले * जान्दै नजान्ने गरी ।
मार्नेछु म बसेर नाच घरमा * घाँटी थिची बेसरी ॥६६॥

भन्नू आउ तिमी र मानिस अरू * कोही नहुन् साथमा ।
मौकामिल्दछभेट्नको असल त्यो * भोली त्यहीं रातमा ॥
वाणी नम्र गरेर क्रोध त्यजि यो * संकेत भोली दिनू ।
पापीलाई अवश्य नाच-घरमा * झुक्क्याईडाकीलिनू ॥६७॥

जाऊ प्रिये ! महलमा अब शोक त्यागी ।
विश्वास मान तिमि मर्दछ त्यो अभागी ॥
आज्ञा सुनेर पतिको अति हर्ष मानी ।
कृष्णा गइन् महलमा अरूले नजानी ॥६८॥

कीचक वधः—

हे राजन् ! पति-पत्निले जब गरे * सल्लाह त्यो रातमा ।
प्रातःकाल उठेर कीचक पुग्यो * तत्काल दर्बारमा ॥
देख्यो द्रौपदिलाइ खुशि मनले * पर्खी रहेकी त्यहाँ ।
लाग्यो भन्न गरेर गर्व बहुतै * तिन्को अगाड़ीमहाँ ॥६९॥

आएँ हे सुमुखी ! म फेरि अहिले * अत्यन्त आशा गरी ।
इच्छा पूर्ण गराउ आज मनको * राजी भई सुन्दरी !
व्यर्थै गर्न गयौ फिराद तिमिले * देख्यौ हिजोको स्थिति ।
मेरो क्रोध महाँ परेर हुनगो * साह्रै नराम्रो गति ॥७०॥

कस्ले छेक्नसक्यो ? मलाई, सबले * हेरी रहेकै थिए ।
देखी क्रोध ठूलो सभासदहरू * बोल्नै नसक्ने भए ॥
सैरन्ध्री सुन, नाम मात्र नृपती * -लाई गरी स्थापन ।
गर्दैछु म सहर्ष बाहु - बलले * यो राज्यको शासन ॥७१॥

हुन्छु दास पुऱ्याउ आश मनको * मेरो छिटै भामिनी !
बस्नेछौ खुशिले बनेर सहजै * यो राज्यकी स्वामिनी ॥

इच्छा - माफिकको दिनेछु बहुतै * रत्नादिका भूषण ।
तिम्रो चल्छ हुकुम् प्रशस्त घरमा * छन् दास-दासीगण ॥७२॥
धेरै नम्र बनी विनीत स्वरले * त्यस्ले फकायो जब ।
त्यस्को चित्तबुझाउने गरि भनिन् * श्री द्रौपदीले तब ॥
तिम्रो बातमहाँ विचार मनमा * मैले गरें बेसरी ।
देखें शौर्य तथा पराक्रम हिजो * हे वीर ! राम्रो गरी ॥७३॥
मेरो चित्त बुझ्यो प्रसन्न मनले * स्वीकार गर्छु तर ।
योद्धा, वीर हुँदा म मान्दछु सदा * गन्धर्वको नै डर ।
हाम्रो भेट हुनेछ आज, तर लौ * यौटा प्रतिज्ञा गर ।
एक्लै आउ लुकेर नाचघरमा * लौ अर्धरात्रीतिर ॥७४॥



कीचक वध

बस्नेछु म पुगेर झट्ट पहिले * क्यै बेरमा आउनू ।
देख्नेछन् अरुले भनेर तिमीले * पर्ला चनाखो हुनू ॥

हाम्रो भेट हुने उपाय सजिलो * यै मात्र यौटा हुँदा ।
बाँच्नेछौं अपवादबाट जनको * हामी सदासर्वदा ॥७५॥
पापी कीचकले सुन्यो सब कुरा * श्री द्रौपदीको त्यहाँ ।
लाग्यो भन्न सहर्ष काम-शरले * पीडा दिई मन्‌महाँ ॥
कल्याणी ! जसरी भन्यौ म त्यसरी * हुन्छु त्यहाँ हाजिर ।
गन्धर्वादिकको पनी अब शुभे ! * मान्दीनँ मैले डर ॥७६॥

एक्लै म आउँछु खुशीसित भेट्न रात्मा ।
झूटो नपानु तिमिले बरु आज बात्मा ॥
वेला भयो मरणको भनि क्यै नजानी ।
यस्ता कुरा गरि गयो खल हर्ष मानी ॥७७॥

पापी कीचकले गएर घरमा * शृङ्गार गर्दो भयो ।
पैह्री भूषण वस्त्र, कालकन त्यो * पर्खी रहेको थियो ।
गर्छन् खूब ढिलो दिवाकर, छिटै * अस्ताउँदैनन् किन ।
गर्थ्यो तर्क बसी असाध्य किन हो * लाग्दैछ लामू दिन॥७८॥
इच्छामाफिक सुन्दरी अब मिली * भन्ने ठूलो हर्षमा ।
आयो काल भनी बुझेन खलले * सैरन्ध्रिको रूपमा ॥
पाञ्चालीसितको समागम बसी * गर्दो छँदो चिन्तन ।
चाँडै अस्त भए दिवाकर भनी * खूशी भयो दुर्जन ॥७९॥
त्यो सल्लाह गरेर द्रौपदि पनी * अत्यन्त खूशी भइन् ।
स्वामी भीमकहाँ गएर सब त्यो * संवाद बिन्ती गरिन् ॥
डाकें कीचकलाइ नाच घरमा * त्यो रातमा आउला ।
बाँच्यो आज भने सतर्क भइ त्यो * पापी कतै उम्कला ॥८०॥
मेरो कष्ट हटाइ-बक्सनुहवस् * मारेर त्यो कीचक ।
रक्षा हुन्छ अवश्य धर्म-कुलको * हे शत्रु संहारक ! ॥

मेरो निम्ति दया अलीकति भए * त्यस्लाई मारी दिनोस् ।
यस्मा पाप पनी कुनै तरहको * लाग्दैन जान्नूहवस् ॥८१॥
बिन्ती द्रौपदिको सुनेर मनमा * अत्यन्त खूशी भई ।
बोल्ले भीम—म मार्छु नाचघरमा * त्यस्लाइ एक्लै गई ॥
ठूलो हर्ष अघी हिडिम्ब-वधमा * जस्तो भएको थियो ।
सुन्दा यो समचार आज सुमुखी ! * आनन्द त्यस्तै भयो॥८२॥
आफ्नू धर्म र दाजु-भाइ सबको * साक्षी गरी भन्दछु ।
पापीलाइ अवश्य नाचघरमा * ऐह्ले गई मार्दछु ॥
राजा इन्द्र भए प्रसन्न जसरी * मारेर वृत्रासुर ।
त्यस्तै कीचकलाइ मार्छु कुलको * कल्याणका खातिर ॥८३॥
त्यस्को पक्ष लिएर मत्स्यपतिका * मानीस वा बान्धव ।
जो-जो आउँछ मार्दछु समरमा * बाँकी नराखी सब ॥
पैह्ले मार्छु गएर दुष्ट शकुनी * औ कर्ण, दुःशासन ।
लिन्छु राज्य सहर्ष यो पृथिविको * मारेर दुर्योधन ॥८४॥
दाज्यू मान्नुभएन क्यै गरि भने * मेरो कुरा सुन्दरी !
बस्नू हुन्छ यहीं विराट नृपको * गर्दै रही चाकरी ॥
कृष्णाले जब यी कुरा सुनिसकिन्* दुर्धर्ष श्री भीमको ।
लागिन् भन्न बुझाइ नम्रस्वरले * शान्ती गरी क्रोधको॥८५॥
धेरै कष्ट सहेर धर्म-सुतले * रक्षा गरे सत्यको ।
मेरा निम्ति विनाश गर्नु यसरी * पर्दैन त्यो धर्मको ॥
प्यारो सत्य र धर्मको जतनले * रक्षा गरी राम्ररी ।
मार्नू पर्दछ दुष्टलाइ अरुले * जान्नै नसक्ने गरी ॥८६॥
बिन्ती द्रौपदीको सुनेर सहसा * हाँस्तै भने भीमले ।
जे गर्दा तिमिमान्दछ्यौ खुशि त्यही* नै गर्दछु प्रेमले ॥

मार्नेछु म गएर गुप्त रितले * त्यस्‌लाइ हे भामिनी !
तिम्रो त्यो अपमानको म बदला * लिन्छु सबै मानिनी ॥८७॥
कृष्णालाई कुरा बुझाई यसरी * राजी गराई लिए ।
पापी कीचक मार्न नाच-घरमा * मौका विचारी गए ॥
जस्तै सिंह लुकेर बस्छ मृगको * बाटो बथानी कन ॥
त्यस्तै भीम बसे लुकी पलँगमा * बेला छँदै गैकन ॥८८॥
पाञ्चालीसितको समागम हुने * गर्दै ठुलो कल्पना ।
आयो खूब डटेर कीचक त्यहाँ * पुग्ला भनी कामना ॥
रात्री घोर भएर नाच-घरमा * साह्रै अँध्यारो थियो ।
बत्तीको पुतली समान भइ त्यो * छाम्दै अगाडी गयो ॥८९॥
सैरन्ध्री भनि ठानि देहभरिमा * पैह्ले मुसारी कन ।
लाग्यो भन्न जनाइ प्रेम बहुतै * हाँसेर त्यो दुर्जन ॥
आएको छु यहाँ मलाइ तिमिले * डाकेर हे सुन्दरी !
गर्छु अर्पण देह-गेहभरिका * संपत्ति नाना थरी ॥९०॥

दानी र वीर गुण शीलविषे प्रधान ।
हे सुन्दरी ! मकन श्रेष्ठ भनेर जान ॥
दासी र दास हितचिन्तक बन्धु जो छन् ।
मेरो स्वरूपकन देखि बयान गर्छन् ॥९१॥

आफ्नू वर्णन बेसरी थरि-थरी * विक्षिप्त जस्तै गरी ।
पक्री बेसरि अङ्कमाल खलल्ले * गर्दो भयो त्यो घरी ॥
सम्झी द्रौपदिको विपत्ति अधिको * श्रीभीम क्रोधित् भए ।
सुन्दा कीचकको प्रलाप रिसले * रन्केर बोल्दा भए ॥९२॥
तिम्रो श्रेष्ठ स्वरूप यो मदन झैं * राम्रो हुनाले गरी ।
गर्दैछौ त्यहि हेतु वर्णन स्वयम् * आफ्नू तिमी बेसरी ॥

पैह्रेको गहना र वस्त्रहरूको * यो रूपको स्वागत ।
इच्छा पूर्ण गराइ नाच-घरमै * गर्छु म राम्रोसित ॥९३॥
पैहे व्यङ्ग कुरा गरेर यसरी * ती सिंह झैं उफ्रिए ।
त्यस्का सामु खड़ा भएर रिसले * यो बात भन्दा भए ॥
मारी मत्त गजेन्द्रलाइ जसरी * घिच्याउँछन् सिंहले ।
त्यस्तै गर्छु तँलाइ यो बखतमा * ल्यायो महाकालले॥९४॥
हेर्नैछिन् निज भाइको मरण ती * रानी सुदेष्णा पनि ।
सैरन्ध्री कन हर्ष हुन्छ बहुतै * पापी मऱ्यो लौ भनी ॥
येती बात भनेर झट्ट खलको * जुल्फी समाई लिए ।
तान्दै बेसरी क्रोधले वरिपरि * तिन्-चार फन्का दिए॥९५॥
झट्कारीकन मुक्त कीचक भयो * श्री भीम देखी जब ।
लाग्यो तान्न रिसाइ कम्मरमहाँ * पक्रेर जोर्लैं तब ॥
दोई खातिर लड्दछन् गज दुवै * जुन् चालले वनमहाँ ।
त्यस्तै युद्ध भयो समान बलका * योद्धा हुनाले त्यहाँ॥९६॥
बाली सुग्रिवको लडाइँ पहिले * जस्तो भएको थियो ।
त्यस्तै ती दुइ वीरको पनि त्यहाँ * संग्राम ठूलो भयो ॥
पक्री कम्मरमा रिसाई कहिले * मार्छु भनी तान्दथे ।
मुड्की खूब बटारि वेगसित ती * छातीमहाँ हान्दथे ॥९७॥
टोकी दाँत तथा चिथोरी नङले * ती पार्दथे घायल ।
छिर्कें लाइ पछार्दथे जमिनमा * देखाइ आफ्नू बल ॥
साँढे झैं बलवान वीर दुइको * संग्राम ठूलो भयो ।
गर्दा क्रूर प्रहार नाच-घर नै * त्यो शब्दले थर्कियो ॥९८॥
शक्ती औं बलपूर्ण कीचक पनि * योद्धा प्रतापी थियो ।
पक्री कम्मर भीमको जमिनमा * त्यसले गिराई दियो ॥

फुस्की भीम तुरुन्त विद्युत सरी * साम्ने खड़ा भैगए ।
मुड्की एक बटारि वज्रसरिको * त्यस्लाई हान्दा भए ॥९९॥
यस्तै लड़ाइँ गरि एक मुहूर्तसम्म ॥
पक्रे अँगालि कन भीम रिसाई टम्म ॥
त्यो दुष्टको बल अलीकति क्षीण जानी ।
थिच्दै गए बल गरीकन तानि-तानी ॥१००॥
त्यो कष्टले अधिक कीचक छट्पटायो ।
प्राणान्तको बखत भो भनि झन् करायो ॥
त्यो दुष्टलाइ अब मार्नुपऱ्यो भनेर ।
थाले घिसार्न तिनी जुल्फिविषे धरेर ॥१॥
छातीमाथि बसी घुँड़ा दुइ धसी * घाँटी थिची बेसरी ।
मारे कीचकवीरलाइ सहजै * श्रीभीमले त्यो घरी ॥
तिन्को क्रोध गएन कीचक मरी * मुर्दा भए तापनी ।
हाने मुड्कि दलेर खूब जिमिमा * हो दुष्ट पापी भनी ॥२॥
श्री शम्भुले अघि गयासुर वीरलाई ।
पारे कुरूप जसरी बहुतै रिसाई ॥
भाँचेर त्यै तरहले सब अङ्गलाई ।
कोची दिए उदरमा खलको रमाई ॥३॥
ल्याए द्रौपदिलाइ त्यै बखतमा * डाकेर श्री भीमले ।
देखाए अनि मांस-पिण्ड खलको * लत्याउँदै रोषले ॥
पाञ्चाली ! तिमि हेर यो अधर्मको * कस्तो भयो दुर्गति ।
देला जो तिमिलाइ कष्ट सुमुखी ! * पार्नेछु यस्तै गति ॥४॥
चिन्हा चिह्न पनी हुने कठिन त्यो * हेरेर मुर्दा तन ।
माहौ खुशि भयो, गयो खल भनी * श्री द्रौपदीको मन ॥

कृष्णालाई त्यहाँ सबै तरहले * सन्तोष शान्ती दिए।
निस्की त्यो स्थलबाट पाक-गृहमा * श्री भीम जाँदा भए ॥५॥

उप-कीचक वध—

हे राजन् ! समचार भन्दछु भनी * श्री द्रौपदीजी गइन् ।
मुर्दा कीचकको शरीर सबले * लौ हेर्न जाओ भनिन् ॥
गर्थ्यो नित्य मलाई आइ अपमान् * त्यस्ले विना कारण ।
मारेछन् खललाइ हेर जनहो ! * गन्धर्व आईकन ॥६॥
त्यस्को मृत्यु सुनेर नाचघरमा * मानीस जम्मा भए ।
भाई कीचकका भए जति सबै * दौड़ेर त्याहाँ गए ॥
देखेथे जब मांस-पिण्ड सरिको * त्यो देहलाई त्यहाँ ।
रोए खूब गरी विलाप सबले * दुःखी भई मन्महाँ ॥७॥
ल्याए बाहिर देह त्यो सब मिली * संस्कारका खातिर ।
हाँस्तै द्रौपदि आडमा त्यहिं थिइन् * सानन्द एकातिर ॥
लागे भन्न सबै मिलेर यहि हो * यो मृत्युको कारणी ।
यस्लाई लगि पोल्नुपर्दछ सँगै * जान्छे सती यो पनि॥८॥
दाज्यूको हित गर्नु हामिहरुको * कर्तव्य हो लौ भनी ।
आज्ञा माग्न विराटका हजुरमा * पौंचे ति दुःखी बनी ॥
राजालाई भने रुँदै सकलले * त्यो मृत्युको कारण।
मन्त्रीको सुनि मृत्यु दुःखित भए * सम्झेर उसको गुन ॥९॥
गर्नेछन् उपकीचकादिहरुले * यो राज्यको रक्षण ।
यिन्को चित्तबुझाउनू उचित हो * भन्ने विचारी कन ॥
आफ्नू धर्म र पापको, कुशलको * चिन्ता नमानी कन ।
बोले भूप लगेर पोल्नु सँगमा * त्यो दुष्ट दासीकन ॥१०॥

आज्ञा भूपतिको सुनी खलहरु * झन् वेगले तम्सिए ।
मुर्दाका सँग द्रौपदीकन लगी * तत्काम बाँधी दिए ॥
राखेको अघि गुप्त नाम सबको * सम्झेर सोही घरी ।
लागिन् गर्न पुकार द्रौपदि रुँदै * चिच्याउँदै बेसरी ॥११॥
हे स्वामी जय! हेजयन्त ! जयसेन् * आएर रक्षा गर ।
आँटे मार्न मलाई दुष्टहरूले * केही नमानी डर ॥
कृष्णाको सुनि शब्द भीम सहसा * के हो भनी आत्तिए ।
अर्को रूप बनाई नाघि सहजै * पर्खाल ती निस्किए ॥१२
त्याहाँबाट मसानको पथ धरी * वायू गतिले गए ।
बाँधेका खलले सतीकन त्यहाँ * प्रत्यक्ष देख्दा भए ॥
बोले भीम कराई उच्च स्वरले * आई पुगें सुन्दरी !
रक्षा गर्छु नमान केहि मनमा * भीती तिमी यो घरी ॥१३॥
येती बात भनी उखेलि रुख नै * बोकी लिए काँधमा ।
मार्छु दुष्टहरू भनेर उभिए * क्रोधित भई सामुमा ॥
देखे श्री यमराज झैं शरिरका * श्री भीमलाई जब ।
लागे गर्न मतो गरौं अब कसो * भन्दै ति पापी सब ॥१४॥
हामीलाइ अवश्य मार्न भनि यो * गन्धर्व आयो अब ।
सैरन्ध्रीकन छाड्नु पर्दछ भनी * बन्धन् फुकाए तब ॥
पाञ्चालीकन छाडि झट्ट डरले * भाग्नू पर्‍यो लौ भनी ।
लागे भाग्न बचाई प्राण पुरको * बाटो कुबाटो पनी ॥१५॥
देखेथे जब भीमले खलहरू * भागी रहेका त्यहाँ ।
मारे ती सबलाई पक्रि रुखले * क्रोधित भइ मन्महाँ ॥
एक् सयमा बढी पाँच कीचक थिए * सारा त्यहीं मारिए ।
तिन्को मृत्यु भई वृकोदर पनी * क्यै शान्त झैं देखिए ॥१६

देखे द्रौपदिलाई दुःखित तथा * रोई रहेकी त्यहाँ ।
लागे भन्न पुगेर भीम सहसा * तिन्का अगाड़ी महाँ ।
तिम्रा शत्रु सबै मरेपछि वृथा * रोई रहेकी किन ।
हे प्यारी ! तिमि जाउ लौ महलमा* सानन्द फर्कीकन ॥१७॥
जो गर्ला अपमान केहि सुमुखी ! * तिम्रो दुखाई मन ।
मार्नेछु यहि चाल्ले जसरि यी * मारा मरे दुर्जन ॥
कृष्णालाइ दिएर धैर्य यसरी * राजी गराए जब ।
फर्के भीम सहर्ष पाक-गृहमा * आनन्द मानी तब १८॥
पाञ्चाली अति दिक्क नदिमा * स्नानादि गर्दी भइन् ।
स्वामीको गुन सम्झँदै नगरको * बाटो समाई फिरिन् ॥
देँख्दा मृत्यु ति सूत-पुत्रहरूको * गन्धर्व द्वारा त्यहाँ ।
बिन्ती गर्न पुगे प्रशस्त पुरका * मानीस राजाकहाँ ॥१९॥
राजन् ! प्राण ति सूत-पुत्रहरूको * गन्धर्व द्वारा गयो ।
हाम्रो यो पुरमा पनी अब ठुलो * आपत्ति पर्ने भयो ॥
छैनन् कोहि पनी तिनै भुवनमा * सैरन्ध्रि भैं सुन्दरी ।
हुन्छन् चञ्चल काम-पीडित भई * देख्नेहरू यो घरी ॥२०॥
तिन्को रूप अवश्य मानिसहरू * मौका परे हेर्दछन् ।
त्यो जानेपछि सूत-पुत्रहरू भैं * गन्धर्वले मार्दछन् ॥
होला नाश अवश्य यो नगरको * सैरिन्ध्रको कारण ।
गर्नोस् यत्न समस्त लोक-पुरको * कल्याण सोचीकन ॥२१॥
लागे भन्न विराट पौरजनले * बिन्ती गरेको सुनी ।
गर्नू दाह-क्रिया उचित् किसिमले* ती स्वर्ग जाउन् भनी
देखी दुर्गति सूत-पुत्रहरूको * सम्झेर शक्ति गुण ।
दुःखी भूप भई गए महलमा * केही नबोलीकन ॥२२॥

गनीलाइ भने सुनाउनु प्रिये * आज्ञा छ मेरो भनी ।
दासीलाइ छिटै बिदा गरिदिए * सानन्द जाउन् तिनी ॥
फर्कन्थिन् पुरतर्फ द्रौपदि पनी * देखेर बाटो महाँ ।
लागे भाग्न डराइ मानिसहरू * चारै दिशामा त्यहाँ ॥२३॥
जम्का भेट भएर भाग्न नसकी * पर्थे अगाडी जति ।
चिम्लन्थे दुइ नेत्र अन्धसरि भै * होला भनी दुर्गति ॥
कोही बोल्न सकेन पौर - जनमा * तिन्को अगाडी परी ।
केही बेरपछी पुगिन् महलमा * त्यै चाल्ले सुन्दरी ॥२४
वायुका सुत भीमलाई सहसा * देखिन् खड़ा द्वारमा ।
लागिन् भन्न गरी प्रणाम मनले * तिन्का दुवै पाउमा ॥
मेरो कष्ट गरे निवारण जउन् * दुर्धर्ष गन्धर्वले ।
तिन्लाई म प्रणाम गर्दछु सदा * आनन्दले प्रेमले ॥२५॥
येती बात भनेर नाच-घरको * पुग्दी भइन् द्वारमा ।
सोधे द्रौपदिलाइ देखि सहसा * श्री पार्थले सामुमा ॥
सैरन्ध्री ! मिमि मुक्त के गरि भयौ * पापी मरे के गरी ?
को आयो हित गर्न वीर भन त्यो * सुन्छु म हे सुन्दरी ॥२६॥
यस्तो अर्जुनको कुरा सुनिसकी * दिक्दार मानी कन ।
बोलिन् द्रौपदि त्यो कुरा किन वृथा* सोधी रहेछौ भन ।
सक्तीनौ तिमी टार्न आपतहरू * सैरन्ध्रिका छन् जति ।
आफ्नू कष्ट उ भोग्दछे सब शुभे !* जानेर दैवीगति ॥२७॥
मेरो खिल्लि उडाउने मुनि कुरा * इच्छा गरेकी किन ?
बुझ्नु बात सबै नपुंसक भई * खाँचो पन्यो के भन ॥
आफ्नू काम तिमी प्रसन्न मनले * जो गर्नु पर्ने गर ।
छाडिन् द्रौपदिले यसै किसिमका * बिझ्ने गरी वाक्शर ॥२८॥

बोल्ले अर्जुन त्यो कुरा सुनिसकी * दुःखी भई बेसरी ।
सक्तीनौ तिमी बुझ्न कष्ट मनको * मेरो सबै सुन्दरी !
बस्थ्यौं हामिहरू अघी पनि शुभे !* साथै गरी चाकरी ।
तिम्रो कष्ट सुनी म ताप मनमा * मान्दीनथें के गरी ? ॥२९॥
सक्छु गर्न म के नपुंसक भई * कल्याण तिम्रो भन ।
मेरो कष्ट महाँ विचार नगरी * छेड़ी रहीछौ किन ?
यस्ता अर्जुनका कुरा सुनिसकी * खुशी भई मन् महाँ ।
त्याहाँबाट हिंडेर द्रौपदि पुगिन् * रानी सुदेष्णाकहाँ ॥३०॥
रानीले तिनिलाई देखि नजिकै * भन्दी भइन् सुन्दरी !
आजै जाउ विदा दिएँ नृपतिको * आज्ञा हुनाले गरी ॥
तिम्रो सुन्दर रूप जुन् पुरुषले * देख्नेछ जैह्ले जहाँ ।
मर्ला त्यो भइ काम पीडित वृथा * गन्धर्वद्वारा यहाँ ॥३१॥
सोही कारण भूपले मनमहाँ * मानेर ठूलो डर ।
आज्ञा बक्सनुभो, सबै भनिदिएँ * इच्छा भएको गर ॥
लागिन् द्रौपदि भन्न नम्र स्वरले * रानी सुदेष्णासित ।
तेह्रोटा दिन मात्र बस्न दिनुहोस् * सोचेर मेरो हित ॥३२॥
यस्को बाद शुभे ! म बस्तिनँ यहाँ* राख्छु भने तापनि ।
लैजानन् पतिले मलाइ सँगमा * आएर हे भामिनि ! ॥
राजाले उपकार जो गरिदिए * गन्धर्वको यो घरी ।
गर्नन् प्रत्युपकार निश्चय कुनै * मौकामहाँ बेसरी ॥३३॥
यौटा कारणले बसेर म पनी * गर्छु यहाँ चाकरी ।
गर्दैछु अनुरोध तेह्र दिनको * त्यै हेतुले यो घरी ॥
कृष्णाको सुनि यो कुरा सकसमा * रानी सुदेष्णा परिन् ।
केही बेर गरेर तर्क मनमा * बोल्दै नबोली बसिन् ॥३४॥

ऐह्ले निस्क भनौं भने डर ठूलो * लाग्दैछ गन्धर्वको ।
गर्नन् क्रोध गरी विनाश सहजै * हाम्रो र यो राज्यको ॥
यस्तो तर्क गरी भनिन् बस शुभे ! * आनन्द मानी, तर ।
रक्षा भूपतिको र हामि सबको * गन्धर्वद्वारा गर ॥३५॥

कौरवद्वारा पाण्डवहरूको खोजी र चर्चा

राजन् ! बन्धुसमेत कीचक मऱ्यो * आश्चर्य लाग्ने गरी ।
सोही कारणले विराट मनमा * दुःखी भए बेसरी ॥
गर्थे आपुसमा कुरा जनहरू * भेला भएका घरी ।
यो संवाद पुग्यो सबै तिर, सधैं * चर्चा हुनाले गरी ॥३६॥
ऐह्ले पाण्डव छन् कहाँ र कसरी * कस्तो स्थितिमा भनी ।
श्री दुर्योधनका थिए चरहरू * धेरै गएका अनि ॥
खोजे जङ्गल औ पहाड पुरमा * साना ठूला ग्राममा ।
पत्ता केहि नपाइ ती चरहरू * आई पुगे रातमा ॥३७॥
द्रौणी, द्रोण र कर्ण भीष्म, शकुनी * भाई तथा बान्धव ।
गोलाकार तथा सुरक्षित गरी * राखेर सेना सब ॥
आफू माझमहाँ सभाबिच बसरी * श्री इन्द्र झैं शासन ।
गर्थे नीति पुऱ्याई योग्य रितले * भूपाल दुर्योधन ॥३८॥
त्यस्तो दिव्य सभामहाँ चरहरू * आएर सोही घरी ।
जोरी बाहु दुवै विनीत स्वरले * बिन्ती गरे राम्ररी ॥
हे राजेन्द्र ! हजूरका हुकुमले * गै देश देशान्तर ।
खोज्यौं यत्न गरी सबै गिरि गुहा * ग्रामादि चारैतिर ॥३९॥
पृथ्वीमा जति राज्य छन् सब डुल्यौं * यौटा नछाड़ी कन ।
हाम्रो शक्ति पुगेन पाण्डुसुतको * पत्तो लगाई लिन ॥

देख्यौं क्यै दिन इन्द्रसेन रथमा * जान्थे बसी द्वारका ।
रित्ता ती रथमा थिए फगत ती * नातीहरू पाण्डुका ॥४०॥
पत्ता लाग्छ भनी तिनीहरुसँगै * हामी लखेट्तै गयौं ।
युक्ती केहि नदेखि भेट हुनको * हामीहरू फर्कियौं ॥
यस्तै यत्न गरी सबै तरहले * खोजी सकेथ्यौं जब ।
पत्ता केहि नपाउँदा त मनमा * ठान्यौं, 'मरे पाण्डव'॥४१
आज्ञा हुन्छ हजूरको अब यसो * गर्नू सबैले भनी ।
सोही माफिक गर्दछौं जतनले * सन्धान फेरी पनि ॥
अर्को एक कुरा छ मुख्य अहिले * हे नाथ ! सुन्नूहवस् ।
योग्यायोग्य गरी विचार सबको * सल्लाह माग्नूहवस् ॥४२
मंत्री एक सुयोग्य मत्स्य-पतिको * सालो थियो कीचक ।
ठूलो वीर तथा पराक्रमि थियो * त्यो राज्यको रक्षक ॥
त्यसले देश जित्यो त्रिगर्ततिरका * ठूलो लड़ाइँ गरी ।
स्त्रीको कारण त्यो सबान्धव गयो * गन्धर्वद्वारा मरी ॥४३॥
यो बिन्ती चरको सुनेर मनमा * शोची विचारी कन ।
लागे भन्न बुझाउँदै चरहरू * -लाई ति दुर्योधन ॥
जाओ फेरि तिमीहरू दश दिशा * खोज्नू चनाखोसित ।
पत्तो पाण्डवको चलाउनु छिटै * मेरो चिताई हित ॥४४॥
श्री दुर्योधनको कुरा सुनिसकी * बिन्ती गरे कर्णले ।
राजन् ! दूतहरू पठाउनुहवस् * खोजुन् गई यत्नले ॥
धर्मस्थान तथा मुनी र ऋषिको * हेरुन् कुटीमा गई ।
खोजुन् रूप छिपाई योग्य चरले * साह्रै चनाखो भई ॥४५॥
यो बिन्ती सुनि कर्णको अघि सरी * दुष्टात्म दुःशासन ।
दाज्यूलाइ भन्यो ठूलो भर दिई * नीती बुझाई कन ॥

जान्ने दूत अरु पठाउँ सबको * सल्लाह मिल्दो भए।
सल्लाहा म त ठान्छु योग्य अहिले* श्रीकर्णले जो दिए ॥४६॥
बस्छन् सिन्धु तरेर पाण्डवहरू * मानेर हाम्रो डर ।
की ना रूप छिपाउँदै डुलि-डुली * हिंड्छन् ति देशान्तर ॥
हे राजन् ! म त ठान्दछु मरिसके * पाँचै जना पाण्डव ।
चिन्ता त्याग गरी प्रसन्न मनले * यो राज्य गर्नोस् अब॥४७
त्यो दुःशासनको कुरा सुनिसकी * श्री द्रोण आचार्यले ।
योग्यायोग्य गरी विचार मनमा * आज्ञा भयो युक्तिले ॥
राजन् ! पाण्डव छन् गुणी र बलिया * दुर्धर्ष औ धार्मिक ।
त्यागी धीर तथा जितेन्द्रिय सधैं * छन् शत्रुसंहारक ४८॥
त्यस्ता व्यक्ति मरे भनेर कसरी * पत्याउनू लौ भन ?
गर्छन् व्यर्थ विवाद मानिसहरू * यो मूर्ख जस्तै किन ?
ज्ञानी सत्यप्रतिज्ञ धर्म-सुत छन् * ठूला तपस्वी पनी ।
गर्छन् आदर चार भाइहरुले * हुन् मान्य हाम्रा भनी॥४९
जस्का इन्द्रसमान श्रेष्ठ बलिया * छन् चार भाईहरू ।
पर्दैनन् तिनिलाइ कष्ट कहिले * सानन्द होलान् बरू ॥
पर्खेका ति हुनन् बरू उदयको * बेला कतै यत्नले ।
बाठा दूतहरू चतुर्दिक गई * खोजुन् बरू युक्तिले॥५०॥
बस्ने पाण्डवको सदा सँग महाँ * देखेर चिन्हे पनि ।
खोजी गर्न छिटै पठाउनुपऱ्यो * पत्ता लगाउन् भनी ॥
ज्ञानी धार्मिक छन् युधिष्ठिर तथा * छन् चार भाई गुणी ।
राजन् ! पाण्डवलाइ चिन्ह सहसा * को सक्छ देखे पनि ॥५१
बेला सिद्धिसक्यो कुनै तरहले * लागेन पत्ता भने ।
देख्दैछु म त पूर्व लक्षण सफा * ठूलो लड़ाईं हुने ॥

सोही कारणले विलम्ब नगरी * चाँडो पठाई चर।
पत्ता पाण्डवको लगाउन छिटै * केही सुयुक्ति गर ॥५२॥
नीतीयुक्त कुरा सुने सकलले * श्री द्रोण आचार्यको।
लागे भन्न सबै सभासदहरू * यो बात हो नीतिको॥
ज्ञानी कौरव वंशका तिलक झैं * विख्यात संसारमा।
सारा वेद र धर्म तत्वहरूका * ज्ञाता तिनै लोकमा ॥५३॥
भन्छन् सत्य-प्रतिज्ञ जस्कन सदा * संसारका व्यक्तिले।
बोल्ले सादर धर्मसम्मत कुरा * निष्पक्ष श्री भीष्मले॥
मेरो बात सबै सभासदहरू * सुन्नु हवस् ध्यानले।
नीतीपूर्वकका कुराहरु जति * आज्ञा भयो द्रोणले ॥५४॥
सारा कौरव वीरको र अरुको * कल्याणका खातिर।
साँचो बात भनी समर्थन तथा * गर्छु ठूलो आदर॥
होलान् धर्म-कुमार जुन् मुलुकमा * त्यो देशका भूपति!
ज्ञानी-धार्मिक औ प्रजा सुजनको * होलान् हितैषी अति ॥५५
तिन्को राज्य भरी सबै तरहले * सम्पन्न होलान् तर।
फैलेको हुनुपर्छ शान्ति सुख औ * सन्तोष चारैतिर॥
बोल्ने सत्य सदा र नीति पथमा * चल्नेहरू छन् जहाँ।
चारै भाइ तथा युधिष्ठिर पनी * होलान् अवश्यै त्यहाँ॥५६
बोल्ने सत्य सदा उदार नियमी * मानीस जुन् ठाउँमा।
पढ्ने वेद र धर्म-शास्त्रहरूको * चर्चा छ जुन् देशमा॥
छैनन् दुष्ट कुनै पनी सब सुखी * छन् लोक धेरै जहाँ।
पक्का धर्म-कुमार छन् त्यहिं भनी * जानी लिनू मन्महाँ॥५७
केह्ले हुन्छ भनी सदा उदयको * बाटो बथानी कन।
बस्ताहुन् अहिले जहाँ जतनले * ती पाण्डुका नन्दन॥

होला त्यो धन-धान्य पूर्ण पृथिवी* मानीस होलान् सुखी ।
इच्छा माफिक मेघले जल दिई * होवैन कोही दुखी ॥५८॥
चारै वर्ण स्वधर्ममा रत हुनन् * होवैन पापी त्यहाँ ।
हे राजन् ! सुन दान-शील बलिया* छन् पाँच भाई जहाँ ॥
पापी दुष्ट तथा अधर्मि जन क्वै * होवैन त्यो स्थानमा ।
नारी शीलवती हुनन् गुणवती * प्रत्येक त्यो देशमा ॥५९॥
लज्जा, धर्म, क्षमा सुकीर्ति र दया* उत्कृष्टशाली बल ।
शक्ति तेज र सत्य धर्म गुणले * जो छन् सदा उज्ज्वल ॥
गर्छन् जो शुभ कार्य लोकहितका * निम्ती सधैं प्रेमले ।
त्यस्ताको पहिचान गर्न सहसा * सक्नेछ, कुन् व्यक्तिले॥६०
मेरो अति महाँ प्रसन्न मनले * विश्वास मान्छौं भने ।
हे दुर्योधन ! भन्दछु सुन कुरा * कल्याण तिम्रो हुने ॥
देखिन्छन् उपरोक्त लक्षणहरू * जुन् देशमा यी सब ।
पक्का भन्दछु वीर धार्मिक सबै * होलान् त्यहहीं पाण्डव॥६१
तेह्रौं वर्ष पनी पुरा हुन महाँ * बाँकी छ थोरै दिन ।
जे इच्छा मनमा छ त्यो गर छिटै* सोची विचारी कन ॥
निस्कन्छन् प्रणपूर्ण पारिकन ती *दुर्धर्ष योद्धा जब ।
होला दुर्गति, यी सहायकहरू * भाग्नन् डराई सब ॥६२॥

आज्ञा भयो यति कुरा जब भीष्मजीले ।
त्यस्को समर्थन गरे सबले क्रमैले ॥
राजा सुयोधनजिको हित जानि फेरि ।
आज्ञा भयो कृपजिले नगरेर देरी ॥६३॥
श्रीभीष्मले जति बुझाउनुभो अहीले ।
गर्छु समर्थन सुनीति भनेर मैले ॥

माने भने हित यि कौरवको हुनेछ ।
त्यागे भने पछि ठूलो पछितो हुनेछ ॥६४॥
जस्तो जहाँ जसरि दूत पठाई हुन्छ ।
पत्तो ति पाण्डु-सुतको अब जान्नुपर्छ ॥
हेलाँ नगर्नु रिपु क्षुद्र छ यो भनेर ।
मौका पर्‍यो यदि भने दुख दिन्छ धेर ॥६५॥
श्री इन्द्र झैं सकल पाण्डवलाइ मान ।
मौका परे समर हुन्छ भनेर जान ॥
आबद्ध छन् प्रण गरी कन ती अहीले ।
वेला छँदै गर सुयत्न कुनै तिमीले ॥६६॥
निस्कन्छन् जब वीर पाण्डवहरू * पूरा प्रतिज्ञा गरी ।
आफ्ना शस्त्र लिएर तत्पर हुनन् * संग्राममा त्यो घरी ॥
तेह्रौं वर्ष पनी बित्यो अब त झन् * बाँकी छ केही दिन ।
गर्दैनौ तिमि यत्न योग्य रितले * वेला छँदैमा किन ?॥६७
सेना तयार कति छन् सब जान्नुपर्छ ।
छन् शत्रु-मित्र कति त्यो पनि बुझ्नुपर्छ ॥
शक्ती ठहर्छ यदि क्यै गरि हीन तिम्रो ।
होला अवश्य हित संधि गरेर राम्रो ॥६८॥
छन् वीर आफुतिरका जति श्रेष्ठ ऐले ।
तिनको छ के मत विचार तिमी पहीले ॥
संग्राम निम्ति अहिले कति छन् तयार ।
गर्छन् विरोध कतिले गर त्यो विचार ॥६९॥
आफ्नू र शत्रुतिरको बल बुझ्नुपर्छ ।
त्यसका पछी समरमा अघि सर्नुपर्छ ॥

छन् साम दाम अरु दण्ड विभेद नीति ।
मौका बुझी गर प्रयोग नमानि भीति ॥७०॥

गर्नु पर्दछ संधि यो बखतमा * पुग्दैन हाम्रो गति ।
आए लड्न भने ति पाण्डवहरू * होला ठुलो दुर्गति ॥
हे राजन् ! मनमा विचार गरिल्यौ * मैले भनेको जति ।
मिल्दा पाण्डु-कुमारका संगमहाँ * होवैन तिम्रो खति ॥७१॥

जुन् कामले सुख पछीतक मिल्छ राजन् !
जुन् कामलाइ जनले अति श्रेष्ठ मान्छन् ॥
त्यो काम खातिर विचार गरे पहीले ।
होवैन दुःख भनि जान तिमी कहीले ॥७२

सुशर्मले विराटका गाई हरण गर्नु—

श्री दुर्योधनले भने सुनिसकी * आज्ञा कृपाचार्यको ।
भन्छु एक कुरा म यो बखतमा * नीती तथा शास्त्रको ॥
राजा शल्य र भीमसेन, हरिका * दाजू तथा कीचक ।
चारोटा बलवान छैं अरु कुनै * जन्मेन ऐहले तक ॥७३॥
चौथो कीचक हो ति चारहरुमा * भन्थे ठुला मानिस ।
तिन्का साथ लड़ाइ गर्न अरुको * पुग्दैनथ्यो साहस ॥
बाहु युद्धमहाँ थिए तिनिहरू * विख्यात संसारमा ।
जोडी कोहि थिएन वीर अहिले * तिन्को तिनै लोकमा॥७४
मैले खूब गरें विचार मनमा * शंका बढेरै गयो ।
पक्का कीचकको त्यहाँ मरण यो * श्री भीमद्वारा भयो ॥
तिन्ले द्रौपदिका निमित्त सहजे * गन्धर्वको रूपमा ।
मारे कीचकलाइ दुर्गति गरी * एक्लै लड़ी रातमा ॥७५॥

जस्तो लक्षण भीष्मले हित हुने * गर्नू भयो वर्णन ।
छन् सारा ति विराटका नगरमा * भन्दैछ मेरो मन ॥
सोही कारणले म भन्दछु छिटै * त्यो देशमा गैकन ।
ल्याउँ हामिहरू हरेर नृपको * शेखी तथा गोधन ॥७६॥
चिन्नेछौं सहजै ति पाण्डवहरू * त्याहाँ रहेछन् भने ।
देख्छु लाभ ठूलो दुवै तरहले * हामीहरूको हुने ॥
यस्मा के छ विचार मान्य जनको* शिक्षा मलाई दिनोस् ।
के गर्दा हित हुन्छ हामिहरूको * सोचेर भन्नूहवस् ॥७७॥
श्री दुर्योधनको कुरा सुनिसकी * राजा सुशर्मा त्यहाँ ।
लागे भन्न कुरा सुयोधनजिको * इच्छा बुझी मन् महाँ ॥
पाई कीचकको सहाय नृपले * व्यर्थै लड़ाई गरी ।
दिन्थे दुःख असाध्य राज्यभरिको * सर्वस्व मेरो हरी ॥७८॥
मर्दा कीचक दक्ष बाहु नृपको * भाँची गए झैं भयो ।
हे राजन् ! यदि हेतु मत्यपतिको * सम्पूर्ण शेखी गयो ॥
द्रोणी, द्रोण र भीष्म, कर्ण, कृपजी* छन् मान्य जो कौरव ।
सल्लाहा सबको मिले त अहिले * मौका छ राम्रो अब ॥७९
धावा मत्स्यपुरीमहाँ अब छिटै * हामीहरूले गरौं ।
राजालाई जितेर राज्यभरिको * सम्पत्ति, गाई हरौं ॥
राजाका सब सैन्यलाइ बलले * आफ्ना वशैमा गरी ।
इच्छा माफिक संधिपत्र गरूँला * हामीहरू त्यो घरी ॥८०
जालु दुःख त्रिगर्तको यति गरे * फेरिन्छ साटो पनी ।
यस्मा कौरवको पनी हित हुने * मौका छ राम्रो भनी ॥
येती बात भनी भए चुप जसै * राजा सुशर्मा त्यहाँ ।
बोले कर्ण सहर्ष सम्मति दिई * तिन्ले भनेको महाँ ॥८१

हे राजन् ! सब यी सभासदहरू * सल्लाह मान्छन् भने ।
गर्दा युद्ध यहाँ प्रसस्त धनको * देखिन्छ वृद्धि हुने ॥
दुःखी पाण्डवको वृथा हजुरले * के मिल्छ खोजी गरी ।
ठूलो जङ्गलमा कतै तिनिहरू * ठान्छु गएहुन् मरी ॥८२
मान्नूहुन्छ भने लड़ौं बरु गई * हामीहरू ये घरी ।
श्री दुर्योधन, कर्णको सुनि कुरा * खूशी भए बेसरी ॥
भाईलाइ भने तयार गर लौ * सेना तिमीले सब ।
धावा दक्षिणबाट गर्न अहिल्यै *जाउन् सुशर्मा अब ॥८३॥
भोली दक्षिणबाट हामिहरूले * सम्पूर्ण सेना लिई ।
तिन्का गाइहरू हरेर सहजै * ल्याऊँ सबैले भई ॥
श्री दुर्योधनले प्रसन्न मनले * आज्ञा दिए यो जब ।
धावा गर्न हिंडे त्यसै दिन छिटो * राजा सुशर्मा तब ॥८४
गाई दक्षिणतर्फ मत्स्य-पतिका * जो राखिएका थिए ।
पौंची त्यै दिनमा त्रिगर्तपतिले * सम्पूर्ण लूटी लिए ॥
भोलीपल्ट पुगेर कौरवहरू * चौतर्फ घेरा दिए ।
गाई उत्तरका ति मत्स्यपतिका * सम्पूर्ण हर्दा भए ॥८५॥
मर्दा कीचक वीर मत्स्यपतिले * सन्ताप माने पनि ।
मान्थे ती भर खूब पाण्डुसुतको * मेरा हितैषी भनी ॥
तेह्रौं वर्ष गरेर पूर्ण खुशिले * बस्थे त्यहाँ पाण्डव ।
आई सोहि बखत् त्रिगर्तपतिले * गाई हरेथे सब ॥८६॥
यो संचार लिई पुगे नृपकहाँ * दुःखी गोठाला जब ।
लागे भन्न रिसाई मत्स्यपतिले * गर्छु लड़ाईं अब ॥
जाउन् वीरहरू छिटै समरमा * सेना तथा नायक ।
शेखी झार्दछु त्यो त्रिगर्तपतिको * आफैं बनी रक्षक ॥८७॥

सुशर्माभाई जितेर गाईहरू फिराउनु :—

आज्ञाले नृपको भए सकल ती * तैयार सेना जति ।
भाइ भूपतिका शतानिक थिए * योद्धा प्रतापी अति ॥
कान्छा श्री मदिराक्षलाई नृपले * डाकेर सोही घरी ।
लागे भन्न तिमीहरू दुइ जना * अत्यन्त चाँडो गरी ॥८८
जानू पर्छ लड़ाइँमा मसँग लौ * आफ्नू तयारी गर ।
बाँडी सैन्यहरू पठाउनुभयो * तत्काल चारै तिर ॥
तन्तीपाल र वीर ग्रन्थिक तथा * यी कङ्क औ वल्लभ ।
हे भाई ! सुन चार वीरहरु छन् * हाम्रा हितैषी अब॥८९॥
चारोटा हय श्रेष्ठ देउ अहिल्यै * यी चारलाई पनि ।
जानेछन् रणमा सशस्त्र खुशिले * मेरा सँगैमा यिनी ॥
यस्तो श्री मदिराक्षले नृपतिको * आज्ञा सुनेथे जब ।
बाँडेथे रथ शस्त्र अस्त्र बलिया * चारै जनामा सब ॥९०॥
आफ्नू देहभरी ठूलो कवचले * रक्षार्थ राम्रो कसे ।
पैह्री वस्त्र लिएर शस्त्र रथमा * यी चार चार भाई बसे ॥
राखी शस्त्र समस्त दिव्य रथमा * बस्ता भए भूपति ।
जान्छु लड्न भनी ससैनिक हिंडे * आनन्द मानी अति ॥९१

सेना हजार दस भै गजमा सवार ।
हिंड्थे अगाडितिर लड्न भई तयार ॥
योद्धा रथी सकल आठ हजार वीर ।
हिंड्थे असंख्य सब पैदल वीर धीर ॥९२॥

निस्के बाहिर भूपती समरको * शोभा फिंजाई जब ।
पृथ्वी कम्प गराइ सैनिकहरु * लागे पछाडी सब ॥

भेट्टाए सबले लखेटि दिनको * तेस्रो प्रहर्मा त्यहाँ ।
फर्के शब्द सुनी त्रिगर्ततिरका * सेनाहरु छिन्महाँ ॥९३॥
थाले लड्न त्यहीं दुवै तरफका * योद्धा रिसाई कन ।
लागे गर्न कती प्रहार बलले * थाले कती गर्जन ॥
केही बेर त धर्म-युद्ध हुनगो * पैह्ले लड़ाईं महाँ ।
थाले गिर्न कती दुवै तरफका * सेना मरेका त्यहाँ ॥९४॥
योद्धा पैदल पैदलै सँग भिड़े * मार्ने इरादा गरी ।
त्यस्तै वीर रथी रथीसँग महाँ * लड्दा भए बेसरी ॥
पैह्लेको युगमा भयो जसरि त्यो * संग्राम देवासुर ।
त्यस्तै युद्ध भयो यहाँ पनि ठूलो * फैलेर चारैतिर ॥९५॥
लड्दा सैनिकले दुवै तरफका * संग्राम भूमी भरी ।
ढाक्यो अम्बर औ समस्त पृथिवी * धूलो उड़ी बेसरी ॥
मारिन्थे कति वीर, कातर जती * भाग्थे डराई कति ।
योद्धाचाहिं गिराउँथे समरमा * सेना सकेको जति ॥९६॥
शक्ती, तोमर पाश खड्ग र गदा * शस्त्रास्त्र नाना थरी ।
गर्थे आपसमा प्रहार रिसले * पानी परे झैं गरी ॥
राम्रा कुण्डल औ किरीटहरूले * शोभित भएका शिर ।
पाकेका फल झैं गिरे जमिनमा * फैलेर चारैतिर ॥९७॥
बाहू औ शिरले विहीन गिंड़ छन् * पल्टी रहेका कति ।
देखिन्थे कछुआ र सर्प सरिका * मुर्दा गिरेका जति ॥
मर्दा वीरहरु त्यहाँ रगतको * खोलो बगे झैं भयो ।
धूलो शान्त भई हिलो समरमा * झन् बेसरी देखियो ॥९८
ठूलो युद्ध भयो तथापि बलिया * योद्धा दुवै तर्फका ।
फर्कन्नन् डरले घुसीकन बरु * शेखी हरे शत्रुका ॥

केही बेरपछी रिसारिस परी * संग्राम झन् मच्चियो ।
मर्यादा भइ छिन्न-भिन्न सबको * उत्साह बढ्दै गयो ॥९९
मारे वीरहरू शतानिकजिले * गै व्यूहमा शत्रुको ।
हानी बाण हरे विराट नृपले * शेखी सुशर्माजिको ॥
त्यो देखी उनले पनी रिस गरी * हानी अनेकौं शर ।
घाऊ पादिदिएर विराट नृपको * सारा शरीरै भर ॥५००॥
त्यस्का बाद रिसाइ भूपति दुवै * सन्धान धेरै थरी ।
लागे गर्न प्रहार शस्त्रहरूको * जित्ने इरादा गरी ॥
शक्ती, तोमर, खड्ग, पाश र गदा * अग्न्यास्त्र औ मुद्गर ।
लाग्यो बग्न रगत् शरीरभरिमा * लागेर तीखा शर ॥१॥

संग्राम घोर यसरी गरि केहि बेर ।
थामे लडाईं बढि रात र अन्धकार ॥
क्यै बेरमा गगनमा जब चन्द्र आए ।
योद्धाहरू पनि उठीकन जम्जमाए ॥२॥
सेना दुवै तरफको डटि काट मार ।
भन्दै कराइकन बेसरि बार-बार ॥
भाग्नै नपाइकन शत्रु समाउ झट्ट ।
टुप्पी समाई बलले गिंडिदेउ चट्ट ॥३॥
गर्थे प्रलाप यसरी कति वीर त्याहाँ ।
जान्थे मरीकन कती यमराज काहाँ ॥
बढ्दै त्रिगर्त-पतिले शर हानि तीक्ष्ण ।
पारे विराट नृपको रथलाइ चूर्ण ॥४॥
एकेक लीकन गदा दुइ श्रेष्ठ वीर ।
सामू खडा हुन गए डरी उत्निखेर ॥

राजा दुवै समरमा बलमा समान।
शस्त्रास्त्रमा पनि भएर समान ज्ञान॥५॥
गर्थे रिसाई जब खूब गदा प्रहार।
हुन्थे सुशब्द अति वज्र समान घोर॥
लागे पनी अधिक चोट शरीर माहाँ।
हट्तैनथे, डटिरहे दुइ वीर त्याहाँ॥६॥
योद्धा त्रिगर्त-पतिले हय चार मारी।
राजा विराटकन घायल झट्ट पारी॥
पाता कसेर बलले रथमा बसाले।
हाम्रो भयो विजय लौ भनि जान थाले॥७॥

लागे जान फिरी त्रिगर्त-पतिका * सेना लड़ाइँ जिती।
देखी बन्धनमा विराट नृपको * त्यस्तो ठूलो दुर्गति॥
थाले भाग्न समस्त सैनिकहरू * आफ्ना डराई जब।
लागे धर्म-कुमार भन्न सहसा * श्री भीमलाई तब॥८॥
हे भाई, कति नून हामिहरूले * खायौं यिनै भूपको।
सम्झी त्यै गुन, गर्नु यत्न अहिले * रक्षार्थ, कर्तव्य हो॥
बन्धन-मुक्त गराउ झट्ट तिमीले * रोकी सुशर्मा कन।
देखी दुर्गति यो फिरेर कसरी * जाने तिमी नै भन॥९॥
आज्ञा धर्मकुमारको सुनिसके * श्री भीमले यो जब।
जोरी हात दुवै रिसाई बहुतै * बिन्ती चढाए तब॥
देख्छु वृक्ष ठूलो उखेलि रूख त्यो * लीएर हातमा अब।
माछु वीरहरू त्रिगर्त-पतिका * बाँकी नराखी सब॥१०॥
येती बात भनी उखेल्न रूख त्यो * आँटे जसै भीमले।
रोकी बक्सनुभो युधिष्ठिरजिले * तत्काल सङ्केतले॥

ऐह्ले गर्न कुरा अलौकिक वृथा * आँटी रहेछौ किन ।
लड्नूपर्छ यहाँ बनीकन बरू * मानीस साधारण ॥११॥
जाऊ झट्ट तिमी विराट नृपको * उद्धार चाँडो गर ।
दाजूको सुनि यो हुकुम् धनु लिई * संग्रामका खातिर ॥
दौड़ाए रथलाइ क्रोधित हुँदै * राजा सुशर्मातिर ।
बोले हे खल ! भाग्दछस् किन वृथा * मेरो नमानी डर ॥१२॥
येती बात भनी प्रहार शरको * पानी परे भैं गरे ।
सेनानायक औ त्रिगर्त-पतिको * तत्काल सातो हरे ॥
देखेथे जब भीमसेन यम भैं * आए लखट्तै भनी ।
लागे लड्न फिरेर सैनिक तथा * राजा सुशर्मा पनि ॥१३
ओह्लें भीम गदा लिएर करमा * त्यागेर आफ्नू रथ ।
लागे श्रेष्ठ गदा बजार्न रिसले * रोकी सबैको पथ ॥
त्यो देखीकन ती त्रिगर्त-पतिका * सेना निकै आत्तिए ।
भागेका सब ती विराट नृपका * सेनाहरू फर्किए ॥१४॥
थाले लड्न रिसाइ फेरि सबको * उत्साह बढ्दै गयो ।
पैह्लें झैं रण त्यो भयंकर भई * झन् बेसरी मच्चियो ॥
एक्लै भीम खड़ा भएर रिसले * हानेर तीखा शर ।
हज्जारौं बलिया ति वीरहरूको * काटी गिराए शिर ॥१५॥
आफ्ना वीर निकै त्रिगर्त-पतिले * देखे मरेका जब ।
तीखा बाण चलाइ वीरहरूको * रक्षा गरेथे तब ॥
एक्लै भीम परे भनीकन बुझी * मद्दत् दिना खातिर ।
तीनै भाइ पुगेर वीरहरूको * काटी गिराए शिर ॥१६॥
एक्लै धर्म-कुमारले रथिहरू * मारे हजारौं जति ।
मारे नौ सयलाइ श्री नकुलले * बाँकी नराखी रति ॥

भेजे श्री सहदेवले यम कहाँ * योद्धहारू तिन् सय ।
अर्को आउँछ को भनी समरमा * पर्खी रहे निर्भय ॥१७॥
केही बेरपछी युधिष्ठिर पुगे * खोज्दै सुशर्मा कहाँ ।
हाने क्रोध गरेर नौ शर तिखा * ताकेर छाती महाँ ॥
त्यस्को उत्तरमा त्रिगर्त-पतिले * देखाई आफ्नू बल ।
हानी धर्म-कुमारलाइ शरले * पारी दिए घायल ॥१८॥
दाज्यूको जब श्री वृकोदरजिले * संकष्ट देखे त्यहाँ ।
आफ्नू झट्ट बढाउँदै रथ पुगी * राजा सुशर्मा कहाँ ॥
पैल्हे क्रोध गरेर चार शरले * घोड़ा गिराई दिए ।
अर्को नौ शरले गराइ विरथी * शेखी उतारी लिए ॥१९॥
तिन्ले रोक्न नपाइ फेरि रिसले * हाने गदाले जब ।
मूर्च्छा पर्न गई ढले जमिनमा * राजा सुशर्मा तब ॥
मौका पाइ छिटै विराट नृपको * काटी सबै बन्धन ।
झट्टै एक गदा लिई समरमा * लाग्दा भए उफ्रन ॥२०॥
लागे लड्न विराटजी तरुण झैं * बूढा भए तापनी ।
थाले मार्न रिसाउँदै गरुड़ झैं * योद्धा अनेकौं तिनी ॥
ठूलो शब्द सुनी त्रिगर्त-पतिको * मूर्छा खुलेथ्यो जब ।
आफ्ना सैनिकको विनाश बहुतै * देखे भएको सब ॥२१॥
देख्दा पराक्रम वृकोदरले गरेको ।
ठाने वृथा सकल गाइहरू हरेको ॥
सेना सबै मरिसके भनि दिक्क मानी ।
संग्राममा विजय हुन्न भनेर जानी ॥२२॥
बाँच्ने युक्ति नदेखि, भाग्नु तिनले* मानेर श्रेयस्कर ।
थाले भाग्न अवश्य बाँचदछु भनी * लागेर मर्नै डर ॥

भागेका त्यसरी वृकोदरजिले * देखी सुशर्मा कन ।
दौडाए रथलाइ वायु गतिले * चाँडो पुगी पक्रन ॥२३॥
पर्खी हे खल भाग्दछस् समरमा * छाडेर सेनाहरू ।
शोभा दिन्न तँलाइ भाग्नु यसरी * मनूं निको हो बरु ॥
भन्दै ती रथबाट ओर्हि बलले * जुल्फी समाई लिए ।
तान्दै भूमिमहाँ लछारि रिसले * सास्ती प्रशस्तै दिए ॥२४॥
पक्रेको मृगलाइ जङ्गल महाँ * जुन् चालले सिंहले ।
तान्छन् चाल गरेर सोहि बलले * घिच्याउँदै भीमले ॥
पोंचाए रणभूमिमा रथमहाँ * पाता कसी बेसरी ।
हेर्दै दर्शकतर्फ क्रोधित हुँदै * भन्दा भए त्यो घरी ॥२५॥
यस्ले कष्ट दियो विराटकन जो * ठूलो घमण्डी बनी ।
मैले मार्नु थियो यहीं, विवश छु * मागीनँ आज्ञा भनी ॥
येती बात भनी चढेर रथमा * ल्याई सुशर्मा कन ।
सुम्पे धर्म-कुमारलाइ, सबको * खूशी भएथ्यो मन २६॥
पारें हाजिर नाथका चरणमा * ल्याएर यो दुर्जन ।
जस्तो हुन्छ हुकुम् म गर्दछु त्यही * शंका नमानी कन ।
भाईको सुनि यो कुरा विनयको * लागी दया मन्महाँ ।
आज्ञा गर्नुभयो युधिष्ठिरजिले * श्री भीमलाई त्यहाँ॥२७॥
हे भाइ, सुन यो नराधम ठूलो * हो मूर्ख पापी तर ।
छाड़ी देउ दया गरीकन छिटै * फर्केर जाओस् घर ॥
दाजूको सुनि यो हुकुम् रिस गरी * हेर्दै सुशर्मा कन ।
बोले भीम—तँलाइ बाँच्न मनमा * इच्छा भए दुर्जन ॥२८॥
भन्नू दास म हूँ विराट नृपको * पर्ला सभामा पनी ।
दिन्छौं जीवन शत्रुलाइ यसरी * हो धर्म हाम्रो भनी ॥

भाईको सुनि बात, धर्म-सुतले * हाँसेर आज्ञा भयो ।
यस्को जीवन-दान भीम खुशिले * मैले दिएँ भैं गयो ॥२९॥
छाड़ीदेउ विराटको हुन गयो * यो दास राम्रै अब ।
दाजूको सुनि बात बन्धनहरू * तिन्को फुकाए तब ॥
लागे भन्न बुझाइ धर्मसुतले * राजा सुशर्मा कन ।
जाऊ मुक्ति दिएँ फुकाइकन यो * दासत्वको बन्धन ॥३०॥
आफ्नू राज्यमहाँ प्रसन्न मनले * फर्केर जाऊ बस ।
व्यर्थै दुर्जन झैं नगर्नु कहिले * यस्तो ठूलो साहस ॥
आफ्नो दुर्गति देखि दुःखित हुँदै * राजा सुशर्मा पनि ।
मागे माफ विराटका सँग महाँ * जानीनँ मैले भनी ॥३१॥
बारंबार गरी प्रणाम मनमा * मानेर ठूलो डर ।
फर्के प्राण बचाइ लज्जित हुँदै * राजा सुशर्मा घर ॥
मार्ने शत्रुहरू र जीवन दिने * ती चार भाई कन ।
लागे भन्न विराट गद्गद हुँदै * ढोगेर हे सज्जन ॥३२॥
मेरो प्राण बचाउने तिमिहरू * हौ प्राणदाता सब ।
गर्छु अर्पण राज्य यो गर तिमी * चारै जनाले अब ॥
दासी दास सुरत्न वैभवहरू * दर्बारमा छन् जति ।
गर्छु अर्पण भोग गर्नु सबले * शंका नमानी रति ॥३३॥
पाएँ देख्न जहानको मुख बचें * तिम्रै कृपाले गरी ।
राजाको सुनि बात पाण्डु-सुतले * भन्दा भए त्यो घरी ॥
हाम्रो जीत भयो भनी नरपते ! * हामीहरू छौं खुशी ।
झन् बर्ता छ प्रसन्नता मनमहाँ * साथै हजुर्को बसी ॥३४॥
लागे भन्न विराट गद्गद हुँदै * हे वीर, योद्धाहरू ।
दिन्छु राज्य म कंकलाइ अभिषेक् * गर्छु यहीं नै बरू ॥

ज्ञानी विप्र तथा प्रजा सुजनको * गर्दै रही पालन ।
गर्नैछन् यिनले सदा यतनले * यो राज्यको शासन ॥३५॥
राजाको बुझि प्रेम धर्म-सुतले * बिन्ती गरे सादर ।
राजन् ! छु मप्रसन्न, मङ्गल गरुन् * तिम्रो सदा ईश्वर ॥
हाम्रो जीत भयो भनेर पुरमा * चाँडै पठाऊँ चर ।
गर्नन् उत्सव लोकले हजुरको * कल्याणका खातिर ॥३६॥

बिन्ती युधिष्ठिरजिको सुनि भूपतीले ।
तत्काल दूतकन डाकि भने खुशीले ॥
भन्नू जित्यौं समर, बेर नगर्नु व्यर्थ ।
आउन् सजी नगर बाहिर स्वागतार्थ ॥३७॥

कौरवद्वारा गौहरण र बृहन्नलालाई उत्तरले सारथी बनाउनु

रातारात गरेर मत्स्य - पुरमा * त्यो दूत पुग्दो भयो ।
प्रातःकाल हुँदा ठूलो विजयको * सम्चार फैली गयो ॥
सारा कौरवले विराट नृपका * गाई हरे त्यो दिन ।
आयो रक्षक गोठको दुखि हुँदै * सम्चार बोकीकन ॥३८॥
त्यो वेला रणमा थिए सब जना * राजा सुशर्मा तिर ।
योद्धा कोहि थिएन एक नृपका * छोरा थिए उत्तर ॥
बोल्यो रक्षक गोठको कर दुवै * जोरेर दुःखी भई ।
गाई कौरवले हरे हजुरले * फर्काउनुहोस् गई ॥३९॥
छैनन् कोहि हजूरबाहिक यहाँ * योद्धा प्रतापी अरू ।
चाँडै युद्ध गरेर ल्याउनुपर्‍यो * सम्पूर्ण गाईहरू ॥
हुन्थो भूपतिले सभाबिच हुकुम् * गर्दै प्रशंसा अति ।
पार्ने उज्ज्वल वंशलाइ बलियो * छोरो छ यो सद्मति॥४०॥

आज्ञा सत्य गराउने नृपतिको * मौका छ यो सुन्दर ।
जानूपर्छ चढेर दिव्य रथमा * संग्राममा खातिर ॥
जस्ले पाण्डु-कुमारमा हुन गए * विख्यात श्री अर्जुन ।
त्यस्ले गर्नुपऱ्यो पराक्रम ठुलो * संग्राममा गैकन ॥४१॥
मार्छन् दानवलाइ इन्द्र जसरी * क्रोधित हुँदा वज्रले ।
त्यस्ले मार्न समस्त कौरवहरू * पर्ने भयो रोषले ॥
बस्छन् राज्यमहाँ प्रजा सुजनले * आशा हजुर्को गरी ।
मौकामा गरि वीरता हजुरले * देखाउनोस् राम्ररी ॥४२॥
तिन्को जोश बढाउँदै विनयले * बिन्ती गऱ्यो गोपले ।
बोले राजकुमार स्त्रीहरू सबै * -का माझमा जोशले ॥
मेरो सारथि मारियो र पहिले * संग्राम भूमिमहाँ ।
आफै सारथि खोज्न यो बखतमा * हे गोप,जाऊँ कहाँ ?॥४३॥
पाए एक सुयोग्य सारथि छिटै * संग्राममा गैकन ।
मारी कौरव वीरलाइ सहजै * फर्काउँथें गोधन ॥
मेरो शौर्य तथा पराक्रम ठूलो * देखेर दुर्योधन ।
गर्ला खूब विचार त्यो मनमनै * आए भनी अर्जुन ॥४४
पापी कौरवको मलाई डर क्यै * लाग्दैन मन्मा तर ।
लड्छन् पार्थ भनेर मान्छु मनमा * तिन्को बरू क्यै डर ॥
स्वास्नीमानिसमा बसेर मनको * लड्डू उडाए सरी ।
आफ्नू वर्णन आफूले थरि-थरी * गर्दा भए त्यो घरी ॥४५॥
शेखी राजकुमारले अति गरे * आफैं मपाइँ बनी ।
एक्लै कौरव वीरकासँग गई * लड्छु भनेको सुनी ॥
भन्छिन् द्रौपदिलाई डाकि नजिकै * एकान्तमा पार्थले ।
प्यारी ! राजकुमारलाइ तिमिले * भन्नू कुनै युक्तिले ॥४६॥

ऐह्ले एक बृहन्नला निपुण छन् * यो सारथी काममा ।
स्वामीको सुनि बात द्रौपदि गइन् * फर्केर त्यै स्थानमा ॥
भन्छिन् राजकुमारलाइ घरमै * छन् सारथी यो घरी ।
भन्नोस् झट्ट बृहन्नलाकन गई * यो बात राम्रो गरी ॥४७
तिन्ले खाण्डव दाहमा रथ अघी * हाँकी दिंदा पार्थको ।
एक्लै युद्ध गरी जिते सुरहरू * शेखी हरे इन्द्रको ।
शंका केहि नमानि सारथि गरी * तिन्लाइ लैजानुहोस् ॥
मारी कौरव-वीर गोधन लिई * चाँडो यहाँ आउनोस्॥४८
यस्ता द्रौपदिका कुरा सुनिसकी * अत्यन्त खुशी भई ।
बोले यो रथ हाँक भन्नु कसरी * तिन्लाइ मैले गई ॥
त्यस्तो व्यक्ति भए भनौं म कसरी* 'हो क्लीब' हे सुन्दरी ॥
यस्को यत्न भए कुनै तरहले * गर्नू पऱ्यो यो घरी ॥४९
हाँस्तै द्रौपदिले भनिन् हजुरकी * बैह्नी गई उत्तरा ।
जे भन्छिन् यिनि मान्दछन्खुशिभई* तिन्ले भनेका कुरा ।
यस्तो द्रौपदिको कुरा सुनिसकी * डाकेर बैह्नीकन ।
बोले झट्ट बृहन्नलाकन कुरा * मैले भनेको भन ॥५०॥
आई कौरव सैन्यले नगरका * सम्पूर्ण गाई हऱ्यो ।
मेरो यो रथ हाँक्नलाइ तिनिले * स्वीकार गर्नुपऱ्यो ॥
सुन्दैछु अघिदेखि हाँक्न रथ ती * राम्रो गरी जान्दछन् ।
हार्दैनन् कहिल्यै प्रसन्न मनले * तिम्रो कुरा मान्दछन्॥५१
दाजूका सुनि बात आदर गरी * श्री उत्तरा सुन्दरी ।
राजी पाछुँ बृहन्नलाकन भनी * जाँदी भइन् त्यै घरी ॥
घाँटीमा छ जड़ाउ-हार बढ़िया * छन् कानमा कुण्डल ।
बज्ने नूपुर पाउमा र तनमा * वस्त्रादि छन् उज्ज्वल॥५२

मत्ता हात्ति र राजहंस सरिको * गम्भीर चाला गरी ।
विद्युत् झैं सहसा ति नाचघरमा * पस्ती भइन् सुन्दरी ॥
देखीं अर्जुनले अनिन्द्य रति झैं * राम्री ति कन्याकन ।
सोधे, देख्छु म खिन्न चित्त यसरी* के हेतु आयौ भन ॥५३॥
हे भद्रे ! अहिले मलीन किन भो * यो चन्द्रमा झैं मुख ।
जो हो कारण त्यो बताउ सुमुखी * आई परे के दुख ॥
सोधेको गरि स्नेह, आदर सुनी * श्री पार्थको यो कुरा ।
लागिन् भन्न बुझाई दाजुसँगको * संवाद श्री उत्तरा ॥५४॥

आएर हेर सँगिनी ! कुरुवीर याहाँ ।
गाई हरीकन लगे पसि गोठमाहाँ ॥
संचार लीकन यहाँ जब दूत आयो ।
पायौं चुटाइ भनि दाजुकहाँ सुनायो ॥५५॥

लड्छु कौरव वीरका सँग भनी * इच्छा गरे तापनी ।
दुःखी छन् अहिले ति सारथि नभै* लड्ने कसोरी भनी ॥
पैल्हे सारथि काम खूब तिमिले * गर्थ्यौ भनी सुन्दछु ।
दाजूको रथ हाँक्न यो समरमा * जाऊ तिमी भन्दछु॥५६॥
मान्दीनौ तिमि बात यो यदि भने * भन्छु म साँचो कुरा ।
पर्ला सुन्नु छिटै मरीसकि सखी * हत्या गरी उत्तरा ॥
तिन्का बात सुनीसकीकन भने * हाँसेर श्री पार्थले ।
जे भन्छयौ तिमिले म मान्दछु सबै * तिम्रो कुरा स्नेहले ॥५७
येती बात भनीसकी सँग-सँगै * श्री उत्तरा अर्जुन ।
आए राजकुमारका हजुरमा * शंका नमानीकन ॥
देखी साम्‌ु बृहन्नलाकन निकै * आफ्नू गरी वर्णन ।
लागे राजकुमार भन्न अरुको * ख्यालै नराखीकन ॥५८

मेरो गो-धनको विनाश अहिले * ठूलो हुने देखियो ।
एक्लै कौरव वीरका सँगमहाँ * संग्राम पर्नै भयो ॥
तिम्रो दिव्य प्रभाव केहि अहिले * भन्दा सुनेको थिएँ ।
ऐह्ले सारथिरूपमा समरमा * प्रत्यक्ष देख्ने भएँ ॥५९॥
जस्तो सारथि काम योग्य रितले * पैह्ले गऱ्यौ पार्थको ।
त्यस्तै गर्नुपऱ्यो सहाय तिमिले * मौका छ यो आजको ॥
यस्तो राजकुमारको सुनि कुरा * बोल्दा भए अर्जुन ।
मैले हाँक्न हजुरको रथ कसै * आँटै पनी सक्तिनँ ॥६०॥
पेशा नाच र गानको गरि लिएँ * हूँ क्लीब औ नर्तक ।
सक्नेछु कसरी गरीनँ कहिले * यो काम ऐह्लेतक ॥
बोले राजकुमार फेरि यसरी * तिन्ले भनेको सुनी ।
बस्नू त्यो रणबाट फर्कि तिमिले * सानन्द नाच्ने बनी ॥६१
भन्दै येति कुरा दिए कवच लौ * चाँडै लगाऊ भनी ।
हेर्थे अर्जुन हातमा कवच त्यो * पक्री नजान्ने बनी ॥
थाले नक्कल पार्न अर्जुन त्यहाँ * नारीहरू जो थिए ।
जान्दैनन् कि भनेर मन्दस्वरले* हाँसेर हेर्दा भए ॥६२॥
देखे उत्तरले विलम्ब यसरी * व्यर्थै भएको जब ।
अफैं बाँधिदिए लिई कवच त्यो * हाँसी रहेथे सब ॥
एकै साथ चढे दुवै रथमहाँ * प्रस्थानका खातिर ।
आए हेर्न भनेर त्यो बखतमा * सम्पूर्ण नारी-नर ॥६३॥
लागे जान भनेर मङ्गल हुने * कार्यादि जो जो थिए ।
कन्या, ब्राह्मणले परिक्रम गरी * त्यो पूर्ण गर्दा भए ॥
लागे अर्जुनलाइ भन्न सबले * श्री उत्तराले पनी ।
पक्का हुन्छ बृहन्नला, विजय लौ* हामीहरूको भनी ॥६४॥

राम्रा कौरव वीरका ति पगरी * खोसी यहाँ ल्याउनू ॥
गर्नन् ईश्वरले सहाय रणमा * जाओ अरू के भनूँ ॥
बोले अर्जुन—जीत भो समरमा * हाम्रो भने सुन्दरी ।
मैले ल्याइदिनेछु बेस पगरी * खोसेर धेरै थरी ॥६५॥
त्याहाँबाट बिदा भएपछि हिंड्यो * वायू गतीले रथ ।
सोझो दुर्गम ग्रामको नगरको * नाघ्दै अनेकौं पथ ॥
जाँदा शीघ्र मसानको अलि वरै * पुग्दा भए ती जब ।
देखे सिन्धु समान सैनिक लिई * जाँदै थिए कौरव ॥६६॥
द्रौणी, द्रोण र भीष्म, कर्ण, कृपजी * औ वीर दुर्योधन ।
गाई, सैनिक वीरको जतनले * गर्थे डुली रक्षण ॥
हिंड्दा सैनिकले उड़ीकन धुलो * आकाश ढाक्ने थियो ।
देख्दै राजकुमारको बल तथा * बुद्धि हराई गयो ॥६७॥
लागे भन्न–बृहन्नला, पख यहीं * मैले भनेको सुन ।
देख्दै कौरव वीरलाइ डरले * आत्तिन्छ मेरो मन ॥
मेरो साहस छैन लड्न पहिले * रोमाञ्च भो देहमा ।
सेना छन् सब यो अनन्त कसरी * लड्ने गई सामुमा ॥६८॥
द्यौताले पनि जित्नलाइ त कठिन् * पर्लो भनी ठान्दछु ।
मैले लड्न अघी सरे त सहजै * मार्छन् भनी जान्दछु ॥
एक्लै छु कसरी लडूँ म अहिले * यी श्रेष्ठ योद्धासित ।
फर्काऊ रथलाइ झट्ट तिमिले * मेरो चिताई हित ॥६९॥
यस्तो राजकुमारको सुनि कुरा * हाँसेर श्री अर्जुन ।
लागे भन्न बुझाउँदै डर वृथा * मानी रहेछौ किन ॥
ऐल्हे कौरवले बताउ तिमि नै * कुन् काम यस्तो गरे ।
जुन् देख्ता तिमिलाई भीति मनमा * रोमाञ्च भो हे हरे ! ॥७०॥

स्वास्नीमानिसका बसेर सँगमा * शेखी गरी बेसरी ।
जान्छु लड्न भनेर आइ कसरी * जान्छौ फिरी यो घरी ।
लड्नू पर्दछ हर्षले विजयको * मन्मा गरी निश्चय ।
गर्दैछौ किन हर्ष वृद्धि अरिको * मानेर व्यर्थै भय ॥७१॥
गर्दा हुन् घरमा बयान बहुतै * सम्पूर्ण नारी-नर ।
जान्लौ नलडेर फर्कि कसरी * मानेर ठूलो डर ॥
सोध्नेछन् दरबारमा जनहरू * के भन्नु मैले त्यहाँ ।
सारा गौ नफिराइ फिर्दिन बरू * मर्छु लडाई महाँ ॥७२॥
गर्छु युद्ध भनी मलाइ तिमिले * ल्याएणछि साथमा ।
लैजान्छ रथ यो बढाई अहिल्यै * ती वीरका माझमा ॥
येती बात भनेर हाँक्न रथ त्यो * आँटे जसै पार्थले ।
हाम्फालीकन राजपुत्र सहसा * भाग्दा भए वेगले ॥७३॥

नारी नपुंसक र क्षुद्र भनेर ठानी ।
हुन् वीर अर्जुन भनीकन क्यै नजानी ॥
त्यागी त्यहीं धनुषबाण र दर्पलाई ।
भागेर उत्तर हिंडे बहुतै डराई ॥७४॥

उत्तरकुमारलाई अर्जुनले फर्काउनु र कौरवको शंका—:

भागेथे जब राजपुत्र घरको * बाटो समाईकन ।
लागे अर्जुन भन्न-पर्ख यसरी * भागी रहेछौ किन ॥
भाग्नू क्षत्रिय धर्म हैन रणमा * देखेर वैरीहरू ।
सामुन्ने सबका लडेर खुशिले * मर्नू निको हो बरू ॥७५॥
भन्दै यै रितले धनञ्जय पनी * त्यागेर त्यो स्यन्दन ।
सारी लाल लतारि दीर्घ कबरी * कुद्दा भए पक्रन ॥

देख्तैमा तिनिलाइ सैनिकहरू * ठट्टा गरे झैं गरी ।
लागे हाँस्न स्वरूप चिह्न नसकी * हाः हाः गरी बेसरी ॥७६॥



भागेका उत्तर कुमारलाई अर्जुनले फर्काएका

भन्थे छक्क परेर कोहि मनमा * सोची विचारीकन ।
हो यो वीर कुनै, नपुंसकसरी * देखिन्छ लौ पैह्रन ॥
आयो लड्न भनी, विचार गर लौ* यस्मा छ क्यै कारण ।
पक्का भन्छु भनी नपुंसक स्वयं * आए यहाँ अर्जुन ॥७७॥
जस्तो स्थान छ देवलोकभरिमा * प्रख्यात श्री इन्द्रको ?
त्यस्तै स्थान छ मर्त्यमण्डलभरी * विख्यात श्री पार्थको ॥
छैनन् भूप गए ससैनिक तिनी * राजा सुशर्मातिर ।
एक्लै बालक बस्तथ्यो नगरको * रक्षा गरी उत्तर ॥७८॥
आयो लड्न भनी विचार नगरी * हाम्रो अगाडीमहाँ ।
भाग्यो देखि अपार सैनिकहरू * के टिक्न सक्थ्यो यहाँ ॥

जाँदैछन् दगुरेर पार्थ अहिले * त्यस्लाइ फर्काउन ।
पक्का अर्जुन हुन् र कारण यही * हो भन्छ मेरो मन ॥७९
अर्कौ सैनिकले भन्यो म त सफा * देख्छु यहाँ जुन् स्थिति ।
योद्धा अर्जुन हुन् भने समरमा * पाछन् ठुलो दुर्गति ॥
योद्धा पार्थ भए, नपुंसक बनी * कुन् हेतु आए यहाँ ।
त्यस्तै तर्क-वितर्क सैनिकहरू * गर्थे अनेकौं त्यहाँ ॥८०॥
त्यागी स्यन्दन पार्थ वीर दगुरी * तिन्लाइ खेद्दै थिए ।
पौंची राजकुमारको नगिचमा * जुल्फी समाई लिए ।
त्यो देखीकन राजपुत्र डरले * पैह्ले निकै आत्तिए ।
केही बेर पछी विनम्र स्वरले * यो बात भन्दा भए ॥८१॥
ल्याऊ झट्ट बृहन्नला ! रथ यहीं * फर्केर जाऊँ घर ।
मेरो प्राण बचाउ यो बखतमा * लाग्दैछ ठूलो डर ॥
हात्ती, रत्न, सुवर्ण, वस्त्र-रथ गो * यो कामका खातिर ।
जे माग्छौ तिमिले प्रसन्न मनले * गर्छु सबै हाजिर ॥८२॥
जुल्फी छाड बृहन्नला, अब तिमी* मैले भनेको सुन ।
मेरो प्राण बच्यो भने, घर गई * दिन्छु प्रशस्तै धन ॥
रोई ये रीतले विलाप बहुतै * गर्दै थिए उत्तर ।
राखे अर्जुनले लगेर रथमा * तिन्को समाई कर ॥८३॥
लागे भन्न सुन्याउँदै किन तिमी * मानी रहेछौ डर ।
सक्तैनौ मिति लड्न क्यै गरि भने* मैले भनेको गर ॥
हाँकी देउ तिमी सुयोग्य रितले * हे वीर ! यो स्यन्दन ।
एक्लै गर्छु लडाइँ हेर खुशिले * लौ सारथी भैकन ॥८४
के होला, कसरी भनेर मनमा * शंका नमान्नू अब ।
सम्झाए जब राजपुत्रकन क्यै * शान्ती भएथे तब ॥

पाँचाए रथ हाँकि झट्ट शमिको * त्यो वृक्षका क्यै वर ।
ओल्हेंथे रथबाट अर्जुन त्यहीं * शस्त्रास्त्रका खातिर ॥८५॥
द्रोणाचार्यजिले त्यसै बखतमा * आए भनी अर्जुन ।
भन्नूभो कुरु फौजका सँगमहाँ * वर्णन् गरी लक्षण ॥
कालो मेघ उठी, चलीकन हुरी * आकाश ढाक्ने गरी ।
उल्टो चाल गरेर स्याल सहसा * चिच्याउँछन् बेसरी ॥८६॥
तेजीला हतियार वीरहरुका * निस्तेज जस्ता भए ।
आँसू काढि अनेक अश्व रथका * रोएसरी देखिए ॥
हल्लन्छन् ध्वजदण्ड हेर रथका * केही नगर्दा पनि ।
देख्दैछु विपरीत लक्षणहरू * धेरै थरीका अनि ॥८७॥
ठान्छु नाश हुनेछ वीरहरुको * रोमाञ्चकारी भनी ।
आए पार्थ ठुला धनुर्धर स्वयं * नै 'क्लीब' नारी बनी ॥
यस्ता बात भनेर द्रोण गुरुजी * श्री भीष्मकाहाँ गई ।
भन्छन्–अर्जुन वीर हुन् समरमा * आए ति ईर्ष्या लिई ॥८८
देखिन्छन् जति यी कुलक्षणहरू * संग्राम ठूलो परी ।
लैजानन् भनि ठान्छु गोधन सबै * एक्लै, लडाइँ गरी ॥
एकै पल्ट समस्त दानव तथा * आए पनी देवता ।
ठान्छु जित्न सकिन्न संझि रणको * तिन्को ठुलो योग्यता ८९
पैह्ले स्वर्गपती सुरेन्द्रसँग जो * विद्या सिके पार्थले ।
आए आज विरोध राखि मनमा * युद्धार्थ त्यै हेतुले ।
सुन्छु युद्ध गरेर शम्भुकन, जो * सन्तुष्ट पारी लिए ।
आफ्नू पाशुपतास्त्र श्रेष्ठ शिवले * आनन्द मानी दिए॥९०॥
हेर्छु सैनिक हामितर्फ बलिया * योद्धाहरू छन् जति ।
जोड़ी अर्जुनको म देख्दिनँ कुनै * योटा पनी सद्मति ! ॥

द्रोणाचार्यजिको कुरा सुनिसकी * तत्काल दुर्योधन।
लागे भन्न हुनेछ बेस अब लौ * आए भने अर्जुन ॥९१॥
जानेछन् तिनी बाह्र वर्ष वनमा * पैह्लै गए झैं गरी।
माछौं हामि सबै मिली, अरु कुनै * योद्धा भए यो घरी॥
द्रौणी, द्रौण र कर्ण, भीष्म, कृपले * तिन्ले भनेको सुनी।
स्याबासी सबले दिए तिमि ठुलो * योद्धा रहेछौ भनी ॥९२

अर्जुनले शस्त्रास्त्र र आफ्नू समेत परिचय दिनू—

गर्दै थिए यसरि तर्क समस्त वीर।
भन्छन् बुझाइ शमिका पुगि वृक्षनेर॥
हे राजपुत्र ! हतियारहरू समस्त।
छन् श्रेष्ठ पाण्डु-सुतका यहिं नै दुरुस्त ॥९३॥

पोको यो रुखमा छ एक तिमिले * ल्याऊ उतारी अब।
लिन्छ अर्जुनको विशाल बलियो * ठुलो धनू गाण्डिव॥
ताँदो खैंचि लिंदा हुनेछ टुकुरा * तत्काल भाँची कन।
तिम्रो पत्रु धनू लिएर कसरी * गर्नै लडाइँ भन ॥९४॥
यस्तो अर्जुनको कुरा सुनिसकी * भन्दा भए उत्तर।
मुर्दा यो रुखमा छ लोकहरुले * सुन्थें भनेको तर॥
भन्छौ झिक्न तिमी विचार नगरी * के हेतुले त्यो शव !
गर्नै स्पर्श म राज-पुत्र भई त्यो * मुर्दा कसोरी अब ॥९५॥
नीचो काम बृहन्नला, किन तिमी * भन्छौ मलाई गर।
यस्तो उत्तरको कुरा सुनि भने * श्री पार्थले सादर॥
भन्थें राजकुमारलाइ कसरी * लौ छोउ मुर्दा भनी।
शंका क्यै मनमा नमान तिमिले * निर्बुद्धि जस्तै बनी ॥९६

यस्तो बात मुनी धनञ्जयजिको * पत्यार माने जब ।
पोको त्यो रुखमा चढेर तिनिले * ल्याए उतारी तब ॥
देहेको कपड़ा र बन्धनहरू * सारा फुकाई दिए ।
देख्दा सूर्यसमान शस्त्रहरु ती * के हुन् भनी झस्किए॥९७॥
गर्दै स्पर्श समस्त शस्त्रहरुको * आश्चर्य मानीकन ।
सोधे अर्जुनलाइ शस्त्रहरु हुन् * कुन् वीरका लौ भन ॥
आँखा खोल्न सकीनँ ठीकसँग लौ * यिन्को ठुलो तेजले ।
लिन्छन् युद्ध हुँदा बताउ तिमिले * कुन् शस्त्र कुन् वीरले९८
तिन्को प्रश्न सुनेर आदर गरी * भन्दा भए अर्जुन ।
गर्छु राजकुमारजी ! सुन सबै * शस्त्रास्त्रको वर्णन ॥
पैले जुन् धनुलाई वीर तिमिले * छोएर सोध्यौ यहाँ ।
यो हो अर्जुनको त गाण्डिव धनू * लिन्छन् लडाईमहाँ ॥९९
राखे खूब हजार वर्ष जति यो * ब्रह्माजिले साथमा ।
पाएथे अनि श्री प्रजापतिजिले * बक्सीसको रूपमा ॥
राखी पाँच सहस्र वर्ष तिनिले * श्री इन्द्रलाई दिए ।
तिन्ले राखि पचासि वर्ष धनु यो * श्रीसोमलाई दिए ॥६००॥
तिन्ले पांच सहस्र वर्ष सँगमा * राखे सुरक्षा गरी ।
मारुन् शत्रु भनेर श्री वरुणजी * -लाइ दिए त्यो घरी ॥
तिन्ले त्यो धनुलाई आदर गरी * सै वर्ष राखे अनि ।
सुम्पे अर्जुनलाइ शत्रु रणमा * सम्पूर्ण मारुन् भनी ॥१॥
पैंसट्ठी शुभ वर्षदेखि धनु यो * लिन्छन् सदा पार्थले ।
जीता, दानव, यज्ञ-राक्षस जिते * यस्कै ठुलो शक्तिले ॥
जस्को पीठमहाँ गजेन्द्र सुनको * देख्छौ तिमी चित्रित ।
चारैतर्फ अनेक पंछिहरूले * देखिन्छ जो शोभित ॥२॥

यै हो श्रेष्ठ सुपार्श्व नामक धनू * लिन्छन् सदा भीमले ।
ल्याए पूर्व दिशा जिती नृपहरू * सम्पत्ति यै अस्त्रले ॥
देखिन्छन् पुतलीहरू वरिपरी * रत्नादिका पीठमा ।
लिन्छन् त्यै धनुलाइ धर्म-सुतले * संग्राममा हातमा ॥३॥
यस्को दिव्य प्रभाव वर्णन गरी * सिद्धिन्न कैल्है पनि ।
जित्छन् शत्रुहरू सदा समरमा * यै अस्त्रद्वारा तिनी ॥
चित्रित छन् प्रतिमूर्ति जुन् धनुषमा * श्री सूर्य झैं सुन्दर ।
लिन्छन् श्रेष्ठ धनू त्यही नकुलले * संग्रामका खातिर ॥४॥
देख्छौ जुन् धनुमा तिमी सलह झैं * रत्नादिले चित्रित ।
हुन्छन् श्री सहदेवका कर दुवै * त्यै अस्त्रले शोभित ॥
तीखा सुन्दर बाण, पाश र गदा * तर्वारको, खड्गको ।
गर्थे वर्णन नाम रूप करमा * पक्रेर प्रत्येकको ॥५॥
हेर्थे राजकुमार विस्मित भई * कैल्हे किरीटी तिर ।
तेजीला हतियारतर्फ कहिले * हेर्थे ति सेनातिर ॥
केही बेर गरी विचार मनमा * भन्छन् किरीटीसित ।
छैनन् पाण्डवका समान अरुका * शस्त्रास्त्र भन्छु म त ॥६॥
यस्ता शस्त्र लिने ति वीर भवमा * विख्यात हुन् पाण्डव ।
बस्ताहुन् कसरी सही दुख ठुलो * कुन् देशमा ती सब ॥
बस्तीहुन् कसरी पतीसँग सती * श्री द्रौपदी यो घरी ।
तिन्को शील-स्वरूपको र गुणको * को सक्छ वर्णन् गरी ॥७॥
जूवामा धन राज्य हारि वनमा * सुन्थें गए पाण्डव ।
के गर्छन् अहिले सुनिन्न अघि झैं * सम्चार तिन्को अब ॥
यस्तो राजकुमारको सुनि कुरा * हाँसेर श्री अर्जुन ।
भन्छन् पार्थ मलाइ नै अब तिमी * साम्ने खड़ा छु चिन्ह ॥८॥

बस्ने नित्य गएर मत्स्य-पतिको * साम्ने विचारी बनी ।
जानी लेउ तिमी युधिष्ठिर तिनै * हुन् जेष्ठ भ्राता भनी ॥
बस्छन् जो दरबारमा नृपतिको * भान्से बनी वल्लभ ।
दाजू भीम भनेर जान तिमिले * हुन् माहिला पाण्डव ॥९॥
घोड़ाको बनि श्रेष्ठ रक्षक सदा * जो बस्छ दर्बारमा ।
माद्रीका सुत हुन् तिनै नकुलजी * विख्यात संसारमा ॥
हाम्रो त्यो दरबारका नगिचमा * बस्ने गोठालो बनी ।
चिन्छौ सहदेवलाइ सहजै * हुन् भाइ कांछाभनी १०॥
सैरन्ध्रीकन देख्दछौ तिमि सधैं * हुन् द्रौपदीजी सती ।
तिन्कै निम्ति मरेर कीचकहरू * त्यस्तो भयो दुर्गति ॥
सोधे उत्तरले कुरा सुनिसकी * श्री पार्थको सादर ।
तिम्रा हुन् दस नाम कुन् भन छिटै* विश्वासको खातिर ॥ ११॥
यस्तो उत्तरको कुरा सुनिसकी * भन्दा भए अर्जुन ।
मेरा ती दश नाम कारणसहित् * भन्छु तिमीले सुन ॥
सारा देश जितेर भूपतिहरू * ल्याएँ प्रशस्तै धन ।
मेरो नाम भयो धनञ्जय भनी * विख्यात त्यै कारण॥१२॥
जाँदा लड्न भनेर शत्रु नजिती * फर्कन्नँ कैह्ले पनी ।
सोही कारणले भयो विजय नाम् * हुन् शत्रुहन्ता भनी ॥
चारोटै हय श्वेत छन् रथमहाँ * मेरा त्यसै कारण ।
बाबू उत्तर ! श्वेतवाहन सबै * भन्छन् मलाई सुन ॥१३
पैह्ले युद्ध हुँदा किरीट दिनुभो * श्री इन्द्रले पैह्रन ।
मेरो नाम भयो किरीटि भवमा * विख्यात त्यै कारण ॥
मैले गर्दिनँ युद्धको समयमा * अन्याय कैह्ले पनि ।
मेरो नाम रह्यो विभत्स बुझिल्यौ * छु न्याय गर्ने भनी ॥१४

मैले वाण प्रहार गर्छु रणमा * बाहू दुवैले अनि ।
भन्छन् लोकहरू मलाइ खुशिले * हुन् सव्यसाची भनी ॥
फैलेको छ सुकीर्ति लोकभरिमा * मेरो त्यसै कारण ।
ज्ञानी सज्जनले र विज्ञ जनले * भन्छन् सदा अर्जुन ॥१५
सक्तैनन् अरिले मलाइ रणमा * हेलाँ गरी पक्रन ।
मेरो विष्णु भनेर नाम हुनगो * विख्यात त्यै कारण ॥
नक्षत्रादिकमा छ श्रेष्ठ सबमा * जो उत्तरा - फाल्गुनी ।
त्यस्मा जन्म भएर जान हुनगो * विख्यात त्यैफाल्गुनी ॥१६
बाबाले गरि स्नेह बालक छँदा * हे कृष्ण ! भन्नूभयो ।
मेरो सार्थक नाम 'कृष्ण' तनको * यो रङ्गले पार्दियो ॥
मेरा यी दश नाम कारणसहित् * वर्णन् गरें उत्तर !
शंका क्यै मनमा भए भन तिमी * पत्यारका खातिर ॥१७॥
यस्तो अर्जुनको कुरा मुनिमकी * त्यागेर सारा भय ।
गर्दछु म प्रणाम वीर ! पदमा * हो नाम ! भूमिंजय ॥
ठूलो भाग्य हुँदा स्वयं हजुरको * पाएँ यहाँ दर्शन ।
पत्त्याएँ अब वीर अर्जुन भनी * शंका नमानीकन ॥१८॥
मैले क्यै अवहेलना हजुरको * पैल्हे गरें तापनि ।
मेरो त्यो अपराध माफ दिनुहोस् * सारा दयालु बनी ।
सम्झी अद्भुत कर्म त्यै हजुरले * पैल्हे गरेका सब ।
शंका औ भयको निवारण भयो * क्यै छैन बाँकी अब॥१९॥
श्रद्धा बढ्न गयो प्रशस्त मनमा * मेरो हजुर्का प्रति ।
पाई रक्षक नाथलाइ अहिले * आनन्द लाग्यो अति ॥
गर्छु सारथि काम जो अघि भनें * मैले प्रतिज्ञा गरी ।
जानी दास हुकुम् भए हजुरले * गर्छु म त्यो राम्ररी ॥२०॥

बिन्ती राजकुमारले खुशि हुँदै * यस्तो गरेथे जब ।
भन्छन् अर्जुन शत्रुको भय वृथा * पर्दैन मान्नू अब ॥
मेरा शस्त्रहरू चिह्नाउँछु जती * बोकेर चाँडो गरी ।
लैजाऊ रथमाथि राख तिमीले * रक्षा गरी राम्ररी ॥२१॥
आज्ञा अर्जुनको सुनेर खुशिले * शस्त्रास्त्र सारा चिह्नी ।
राखे राजकुमारले रथमहाँ * कर्तव्य मेरो भनी ॥
बाँकीका हतियार पाण्डुसुतको * बाँधेर राम्रो गरी ।
राखे त्यै शमिको चढेर रुखमा * तिन्ले अघीकै सरी ॥२२॥
वहीं त्यो रुखबाट अर्जु कहाँ * आए जसै उत्तर ।
पक्री हात दुवै धनञ्जयजिले * भन्दा भए सादर ॥
वैरीको अब राज-पुत्र तिमिले * पर्दैन मान्नू डर ।
तिम्रो जीत हुनेछ यो समरमा * विश्वास पक्का गर ॥२३॥
आफूमाथि अपार स्नेह गरि यो * तिन्ले भनेको सुनी ।
लागे भन्न गरेर आदर ठूलो * श्री पार्थलाई तिनी ॥
पाएँ इन्द्र र कृष्ण झैं समरका * सर्वज्ञलाई जब ।
वैरीको भय क्यै रहेन मनमा * निःशेष भैगो सब ॥२४॥
बारंबार प्रणाम गर्छु पदमा * साहाय कर्ता कन ।
शंका एक रह्यो, निवारण छिटै * गर्नू हवस् अर्जुन ॥
आफ्नू दिव्य स्वरूप गुप्त यसरी * राख्नू भएको किन ।
व्यर्थै हीन भई नपुंसक बनी * बस्ने छ के कारण ॥२५॥
यस्तो राजकुमारको सुनि कुरा * क्यै बेर हाँसी कन ।
बोले पार्थ म भन्छु कारण सबै * त्यस्को खुशीले सुन ॥
बाबू उत्तर ! स्वर्गको म पहिले * ठूलो सभामा थिएँ ।
पाई उर्वशिको सराप अहिले * यो रूप मैले लिएँ ॥२६॥

मेरो यो व्रत वीर ! वर्ष दिनको * खातीर मात्रै थियो ।
बाँकी छैन नपुंसकत्व तनमा * वेला पुगी गै गयो ॥



उत्तर कुमार र अर्जुनको वार्तालाप

यस्तो अर्जुनको सुनीकन कुरा * भन्दा भए उत्तर ।
शंका नाश भयो र शत्रुहरुको * लाग्दैन केही डर ॥२७॥
मेरो माथि स्वयं अनुग्रह ठुलो * गर्नू भयो यो जब ।
सक्छु लड्न म देवतासँग पनी * शंका नमानी अब ॥
गर्नू हुन्छ हुकुम् प्रसन्न मनले * जुन् कामका खातिर ।
गर्नेछु सब त्यो सुयोग्य रितले * मैले रही तत्पर ॥२८॥
जस्तो सारथि इन्द्रका र हरिका * छन् मालती, दारुक ।
त्यस्तै नै रथ हाँकन सक्छु म पनि * हे शत्रु—संहारक ! ॥
चढ्नूहोस् रथमा विलम्ब नगरी * जाऊँ लडाई महाँ ।
म्रानूँ पर्दछ वैरीलाइ सहजै * उम्केर जालान् कहाँ॥२९

यस्तो राजकुमारको सुनि कुरा * आनन्द मानी कन।
जान्छु लड्न भनेर तत्पर भए * तत्काल श्री अर्जुन ॥
चूरा बाहुलिका फुकालि तनका * स्त्रीका सबै भूषण।
बाँधे बन्धन केशलाइ बटुली * फेरो बनाईकन ॥३०॥
गर्छु ध्यान भनेर अस्त्रहरुको * फर्केर प्राचीतिर।
राखी आसन वस्त्रको रथमहाँ * बस्ता भए सुस्थिर ॥
आई शस्त्रहरु समस्त उभिए * तिन्का अगाड़ी जब।
भन्छन् डाक्नुभयो र हाजिर भयौं * प्रत्यक्ष हामी सब ॥३१॥
हामीलाइ हुकुम् दिनोस्, हजुरले * हुन् दास मेरा भनी।
बोले अर्जुन शस्त्र-अस्त्रहरुले * बिन्ती गरेकी सुनी ॥



शंख ध्वनि सुनेर डराएका उत्तर कुमारलाई पार्थको आश्वासन

मेरो यो मनमा निवास सबले * गर्नू हवस् यो घरी।
अन्तर्धान भई बसे मनमहाँ * शस्त्रास्त्र पैह्ले सरी ॥३२

पक्री गाण्डिव नामको धनुषमा * ताँदो चढाए अनि ।
ठूलो वज्र परेसरी हुन गयो * टङ्कार गर्दा ध्वनि ॥
भूमी कम्प भयो चलीकन हुरी * आकाश ढाकी दियो ।
कालो मेघ उठी दिशाहरु पनि * सारा अँध्यारो भयो॥३३
केही बेर पछी चढेर रथमा * प्रस्थानका खातिर ।
बोले राजकुमार शंकित हुँदै * फर्की किरीटीतिर ॥
एक्लै नै हुनुहुन्छ वीरहरु छन् * घेरै खड़ा कौरव ।
जित्नू हुन्छ हजूरले कसरि लौ * छन् धीर योद्धा सब ॥३४
मेरो चित्त बुझाइ बक्सनुहवस् * लाग्दैछ ठूलो भय ।
हाँस्तै अर्जुनले भने बस तिमी * निर्धक्क भै निर्भय ॥
तिम्रो हुन्छ भनेर मान मनमा * यो युद्ध गर्दा जय ।
मिथ्या बात म बोल्न सक्तिनँ भनी* मान्नू तिमी निश्चय॥३५
पैह्ले युद्ध ठूलो भयो मसँग जो * गन्धर्वका साथमा ।
कोही साथ थिएन गाण्डिव धनू * मात्रै थियो हाथमा ॥
ठूलो खाण्डवदाहमा मसँग को * साथी थियो लौ भन ।
सारा देवहरु जितें समरमा * शंका नमानीकन ॥३६॥
जानी कण्टकरूप स्वर्ग-पतिको * आज्ञा हुनाले गरी ।
पौलोमादि अनेक दानवहरू * मारें, गए ती मरी ॥
पैह्ले द्रौपदिको स्वयंवरमहाँ * आए जती भूपति ।
आए लड्न भनी मतो गरि सबै * घेरा दिई दुर्मति ॥३७॥
मेरो मद्दत गर्न त्यो बखतमा * साथी थिए को भन ?
क्षत्री वार भएर व्यर्थ यसरी * आत्ती-रहेछौ किन ? ॥
हाम्रो जीत हुनेछ निश्चय भनी * विश्वास पक्का गर ।
व्यर्थै कौरव वीरको मनमहाँ * मानीरहेछौ डर ॥३८॥

यस्तै अर्जुनले दिए जब त्यहाँ * उत्साह, आश्वासन ।
शान्ति राजकुमारलाइ हुनगो * छाड़े वृथा आत्तिन ॥
सम्झे श्री हनुमानलाइ मनले * ध्यानस्थ भै पार्थले ।
आई श्री हनुमान् ध्वजाउपरमा * बस्ता भए वेगले ॥३९॥
सानू उत्तरको ध्वजाकन लगी * राखे सुरक्षा गरी ।
पैह्ले त्यो शमिको प्रदक्षिण गरे * श्रद्धा गरी राम्ररी ॥
हाँके उत्तरले बढ्यो रथ पनी * केही अगाड़ी, अनि ।
पैह्लोपल्ट गरे धनञ्जयजिले * तत्काल शङ्खध्वनि ॥४०

थर्काउने मुटु र जङ्गल भूमिलाई ।
पाएर सुन्न ध्वनि उत्तर वीरलाई ॥
लाग्यो अचम्म नसकी ध्वनि खप्नलाई ।
मूर्छित् भए सरि गिरे रथमै डराई ॥४१॥

कौरवहरूको विवाद :—

देखे राजकुमारको स्थिति त्यहाँ * त्यस्तो नराम्रो जब ।
केही बेर परेर छक्क सहसा * हेरी रहेथे तब ॥
यौटा हात बढाई रास हयको * पक्री लिए पार्थले ।
पक्रे राजकुमारलाइ सहसा * अर्को खुला हातले ॥४२॥
गर्दै स्नेह दिएर धैर्य बहुतै * सोधे बुझाई कन ।
झस्क्यौ कारण के परेर यसरी * मूर्छा परे भैं मन ॥
क्षत्री वीर भएर शत्रुहरूको * आएपछी माझमा ।
झस्कन्छौ यसरी वृथा मन अरू * शंका छ के बातमा ॥४३
पैह्ले युद्ध हुँदा कहीं त धनुको * टंकार शङ्खध्वनि ।
पाएका हुनुपर्छ सुन्न तिमिले * हे वीर ! पैह्ले पनि ॥

जन्मी क्षत्रिय वंशमा डर सदा * मान्नू वृथा ठान्दछु ।
यस्तो भैकन बाँच्नू चाहिं त बरू * मर्नू निको मान्दछु ॥४४॥
योद्धा अर्जुनको कुरा सुनिसकी * भन्दा भए उत्तर ।
सुन्दा वज्रसमानको ध्वनि ठूलो * लाग्यो मलाई डर ॥
सुन्थें युद्ध हुँदा अघी समरका * बाजाहरू तापनि ।
यस्तो ता कहिले सुनीनँ धनुको * टंकार, शङ्खध्वनि ॥४५
देख्छु श्रेष्ठ ध्वजामहाँ म कपिको * यो रूप औ गर्जन ।
सुन्छु घर्घर शब्द घोर रथको * आत्तिन्छ मेरो मन ॥
भूमिकम्प गराउने सब दिशा * फैलेर ढाकी दिने ।
यस्तो शब्द अघी सुनीनँ मुटु नै * फुट्ला कि झैं हल्लने ॥४६
यस्तो उत्तरको कुरा सुनिसकी * फेरी भने पार्थले ।
गर्छु शङ्खध्वनी तिमी स्थिर भई * सुन्दै रहू धैर्यले ॥
येती बात भनी गरे धनुषको * टंकार शंख - ध्वनि ।
पक्री उत्तरका दुवै करहरू * उत्साह दिन्थे तिनी ॥४७
बारंबार बजाई शंख यसरी * बढ्दै अगाडी गए ।
मामुन्ने कुरु वीरको अलि वरै * घोडा अड्याई दिए ॥
आँल्याई रथतर्फ त्यै बखतमा * श्री द्रोण आचार्यले ।
आज्ञा गर्नुभयो धनञ्जय स्वयं * आए ठूलो वेगले ॥४८॥
जस्तो शब्द सुनिन्छ घोर रथको * यो मेघ झैं गर्जन ।
पृथ्वी कम्प हुँदा बुझिन्छ सहजै * आए भनी अर्जुन ॥
हे राजन ! हतियार वीरहरूका * निस्तेज झैं देख्दछु ।
उल्कापात हुँदा ठूलो अशुभको * हो सूचना भन्दछु ॥४९॥
आँसू देख्दछु अश्वका नयनमा * प्रत्यक्ष सन्तप्त छन् ।
बस्नू गिद्धहरू ध्वजा उपरमा * यी स्याल चिच्याउँछन् ॥

देख्दा लक्षण यी हुनेछ बुझियो * संग्राम संहारक ।
हे दुर्योधन ! मर्दछन् समरमा * तिम्रा सबै सैनिक ॥५०॥
ठूला वीरहरू र सैनिकहरू * उत्साहले हीन छन् ।
केही सैनिक ता लडाइँ नगरी * भाग्नै पनी सक्तछन्
चाँडो व्यूह बनाउ एक, घरमा * गाई पठाऊ सब ।
यस्को यत्न छिटो गरी गर तिमी * पाइन्न मौका अब ॥५१
द्रोणाचार्यजिको कुरा सुनि गए * तत्काल दुर्योधन ।
द्रौणी, भीष्म र कर्ण श्री कृपकहाँ * भन्छन् बुझाई कन ॥
जूवामा अघि पाँच भाइहरूको * हामीहरूको पनि ।
बस्नेछौं गइ बाह्र वर्ष वनमा * जो हार्छ त्यस्ले अनि॥५२
तेह्रौं वर्ष रहेर गुप्त पुरमा * बस्ने प्रतिज्ञा थियो ।
त्यस्का केहि अझै पनी दिनहरू * छन् शेष कि सिद्धियो ॥
बाँकीका दिनभित्र अर्जुन भनी * जान्यौं भने क्यै गरी ।
जानेछन् सब बाह्र वर्ष वनमा * पाँचै जना यो घरी ॥५३॥
यस्को ठीक हिसाब गर्न अरूले * सक्तैन कोही पनि ।
सक्नू हुन्छ स्वयं पितामहजिले * सम्वत् र मैन्हा गनी ॥
आफ्ना मान्य भनेर चार जनमा * यो प्रश्न राखीकन ।
लागे भन्न समस्त सैनिहरू- * लाई ति दुर्योधन ॥५४॥
हे योद्धाहरूहो ! नमान मनमा * शंका र केही डर ।
आओस् वीर कुनै पनी, सब रहू * संग्राममा तत्पर ॥
जस्तो कष्ट दिए यि मत्स्य-पतिले * पोंची सुशर्मा कहाँ ।
तिन्को गर्न भनी सहाय अहिले* आई रहेछौं यहाँ ॥५५
यस्मा पाण्डवको कुनै तरहको * देख्दीनँ हानी म त ।
आए लड्न भनेर अर्जुन वृथा * के हेतु हामीसित ॥ ॥

आउन् कृष्ण, कुबेर, इन्द्र यम वा* दिक्पाल वा पाण्डव ।
कोटी वीर भए पनि म खुशिले * संग्राम गर्छु अब ॥५६॥
यो संग्राम त्यजेर वीर अहिले * भागेर जाने जति ।
सारालाइ समाइ मार्दछु स्वयं * बाँकी नराखी रति ॥
मैले जानिसकें विचार अहिले * श्री द्रोण आचार्यको ।
गर्छन् मङ्गल कामना यिनि सदा * ती पाण्डुका पुत्रको॥५७॥
बर्ता स्नेह छ पार्थतर्फ गुरुको * पाँचै जनामा पनि ।
गर्छन् अर्जुनको सबै तरहले * तारीफ बर्ता यिनी ॥
हाम्रो तेज घटाउने र रिपुको * उत्साह बढ्ने गरी ।
गर्छन् खूब बढाइँ शत्रुहरुको * हाम्रा गुरु यो घरी ॥५८॥
यिन्को बातमहाँ नमान्नु सहसा * विश्वास कैह्ले पनि ।
हामी तर्फ भए पनी हित सदा * ठान्छन् उनैको यिनी ॥
यिन्को बात महाँ विचार नगरी* त्यागेर शंका, डर ।
गर्नू पर्छ तयार व्यूह बलियो * संग्रामका खातिर ॥५९॥
श्री दुर्योधनको कुरा सुनिसकी * भन्दा भए कर्णले ।
गर्दैनन् हितका कुरा बखतमा * हाम्रा गुरु द्रोणले ॥
यिन्लाई पछि राखि हामिहरुले * सल्लाह केही गरे ।
हाम्रो जीत हुनेछ निश्चय, न ता * आपत्ति पर्ला भरे ॥६०॥
व्यर्थै अर्जुनको प्रशस्ति अहिले * यी भाट झैं गाउँछन् ।
हाम्रा सैनिक वीरलाइ यसरी * श्री द्रोण तर्साउँछन् ॥
गर्दा आपुसमा बसीकन कहीं * सद्धर्मका गन्थन ।
जे भन्छन् यिनले सुहाउँछ पनी * सुन्छन् सबै सज्जन॥६१
ठूलो यज्ञ र दान धर्म अथवा * श्राद्धादि गर्दा पनि ।
जे भन्छन् सब मान्नुपर्छ जनले * हुन् विप्र बूढा भनी ॥

गर्नू पर्दछ युद्ध के गरि भनी * के जान्दछन् लौ यिनी ।
बोल्छन् विप्र भएर धर्म नबुझी * आफैं मपाई बनी ॥६२॥
हेरुन् आज यहाँ पराक्रम ठुलो * मैंले गरेको सब ।
आउन् मत्स्यपती कि अर्जुन स्वयं* राख्दीनँ बाँकी अब ॥
राम्रा प्वाँख हुने तथा सलह झैं * हानेर तीखा शर ।
गर्छु अर्जुन वीरको समरमा * आए भने आदर ॥६३॥
योद्धा, पार्थ सबै धनुर्धर महाँ * विख्यात हुन् तैपनि ।
मैंले आज गिराउनेछु रणमा * हुन् मुख्य वैरी भनी ॥
पैल्हे अर्जुनलाइ मार्न प्रण जो * मैंले गरेको थिएँ ।
आजै ईश्वरको कृपा हुन गई * त्यो पूर्ण पार्ने भएँ ॥६४॥
मार्नेछु जब पार्थलाइ रणमा * गिर्छन् जसै ती मरी ।
जो दुर्योधनको छ कष्ट मनमा * सम्पूर्ण जाला टरी ॥
जस्लाई डर लाग्छ ती घरमहाँ * फर्के म मान्छु खुशी ।
बस्ने वीरहरू पराक्रम ठुलो * हेरुन् अलग्गै बसी ॥६५
शेखीयुक्त प्रलाप यो किसिमको * तिनले गरेको सुनी ।
लागे भन्न रिसाउँदै कृपजिले * शेखी उतारौं भनी ॥
ऐल्हे कर्ण ! गरी घमण्ड यसरी * बोली रहेछौ किन ।
आफ्नू घोर विपत्तिको मनमहाँ * ख्यालै नराखीकन ॥६६॥
गर्छौ व्यर्थ प्रलाप मूर्खसरि यो * लज्जा नमानी रति ।
युक्ती ज्यान बचाउने गर न ता * होला ठुलो दुर्गति ॥
भन्दैमा रथकारले रथ ठुलो * पक्का र राम्रो छ यो ।
योग्यायोग्य स्वयं विचार नगरी * पत्याइ किन्ने छ को ? ॥६७
त्यस्तै हो तिमिले पनी जति कुरा * बोल्यौ घमण्डी बनी ।
कस्ले मान्दछ लौ नजाँचिकन यो* साँचो कुरा हो भनी ॥

शेखी गर्नु वृथा छ कर्ण ! तिमिले * लड्दा किरीटीसित ।
भाग्नेछौ डरले, म यो समरमा * देख्दीनँ हाम्रो हित ॥६८॥
एक्लै तुष्ट किरातरूप शिवजी * -लाई गरे पार्थले ।
एक्लै स्वर्ग गएर दानवहरू * मारे सबै पार्थले ॥
एक्लै शेखि हरी जयद्रथजिको * छाडी दिए पार्थले ।
एक्लै खाण्डव नामको वन ठुलो * पोली दिए पार्थले ॥६९॥
एक्लै यादव वीरका सँग लडी * ल्याए सुभद्रा हरी ।
एक्लै श्री हरिका अघिल्तिर डटे * लड्छु भनी त्यो घरी ॥
श्री दुर्योधनलाइ चित्ररथले * बाँधे भनेको सुनी ।
पारे बन्धन-मुक्त अर्जुन गई * हुन् बन्धु मेरा भनी ॥७०
एक्लै कर्ण ! तिमी गईकन कहीं * तिनूले गरे झैं गरी ।
देखायौ पुरुषार्थ कुन् ? भन स्वयं * वर्णन् गरी यो घरी ॥
फुर्तीसाथ भन्यौ म यो समरमा * मार्छु किरीटी कन ।
त्यस्को दिन्छु स्वयं उदाहरण लौ * मैले भनेको सुन ॥७१
औंला हालि फुकाल्नु दाँत मुखको * कालो कुनै सर्पको ।
त्यतै हो तिमिले सदर्प अहिले * गर्नू कुरा युद्धको ॥
पक्री मत्त गजेन्द्र अंकुश विना * त्यस्को चढी पीठमा ।
गर्दैछौ वश पार्नु झैं तिमि कुरा * यी वीरका सामुमा ॥७२
आफ्ना वस्त्र भिजाइ देहभरिका * चुर्लुम्म घ्यू तेलमा ।
बल्दो अग्निमहाँ पसेर बचुँला * भन्छौ तिमी युद्धमा ॥
बाँधी पत्थर घाँटिमा उदधि नै * पौडेर तर्छू भनी ।
आँट्ने मूर्ख तिमी समान भवमा * पाइन्न खोजे पनि ॥७३॥
जूवामा छलले जितेर सहजै * त्यो राज्य खोसी लियौ ।
त्यथैमा पनि तेह्र वर्ष तक जो * सन्ताप ठूलो दियौ ॥

राखी धर्म विचार पाण्डुसुतले * त्यो कष्ट खप्ता भए ।
पारी त्यो व्रतपूर्ण, फेर्दछु भनी * साटो यहाँ देखिए ॥७४॥
याहाँ अर्जुन छन् भनेर पहिल्यै * जाने बुझेको भए ।
गाई हर्नु हुँदैनथ्यो चुकिदिंदा * साम्ने खड़ा भै गए ॥
ठूलो भूल भएछ, व्यूह बलियो * पैह्ले तयारी गरौं ।
इज्जत् राख्न मिलेर षड्रथिहरू * तिन्को अगाडी परौं॥७५॥
लड्छन् दानव इन्द्रका सँगमहाँ * जुन् चालले स्वर्गमा ।
सोही चाल गरी लड़ौं मिलिजुली * ती वीरका साथमा ॥
सल्लाहा सबले सुने समरको * यस्तो कृपाचार्यको ।
छेडे झैं गुरु-पुत्रले पनि भने * शेखी सुनी कर्णको॥७६॥
गाई छन् तिमिले हरे जति सबै * हे कर्ण ! यै स्थानमा ।
पौंचाऊ तिमी हस्तिनापुर महाँ * यी वीरका साथमा ॥
सक्छौ लड्न तिमी किरीटिसित यो* पत्यार होला अनि ।
शोभा हुन्छ प्रलाप-युक्त तिमिले * शेखी गरेको पनि ॥७७॥
योद्धा अर्जुनको समान म पनी * छु वीर भन्छौ तर ।
गर्नू पर्छ कुनै पराक्रम ठुलो * विश्वासका खातिर ॥
आफ्नू धर्म नछाडि जुन् पुरुषले * संग्राममा जित्तछन् ।
हुन्छन् वीर तिनै र यो पृथिविको * साम्राज्यतीभोग्दछन्॥७८॥
पाएँ राज्य ठूलो भनी सहजमै * सन्तोष यो मान्दछ ।
त्यस्को दर्प बढेर हेर गुरुको * निन्दा गरी बोल्दछ ॥
जूवामा छलले ति पाण्डुसुतको * यो राज्य खोसी कन ।
त्यागी धर्म अनीतिको पथ लिई * चल्दैछ दुर्योधन ॥७९॥
जन्मी क्षत्रिय वंशमा जसरि यो * गर्दैछ निन्दा यहाँ ।
जस्तै मूर्ख भए पनि त गुरुको * को गर्छ निन्दा कहाँ ॥

लज्जा त्याग गरेर बोल्दछ वृथा * पापिष्ट दुर्योधन ।
देओस् उत्तर सोद्धछू जति कुरा * यस्ले नदाँटीकन ॥८०॥
नीतीपूर्वकले लड़ेर विजयी * यो दुष्ट कैह्ले भयो ।
यस्ले द्रौपदिलाइ कुन् समरमा * कैह्ले जितेको थियो ॥
तान्दै ल्याइ सभामहाँ दुख दियो* यस्ले सकेको जति ।
रोइन् दुःख परेर त्यो वखतमा * ती एकवस्त्रा सती ॥८१॥
यो दुर्योधनले लडेर कहिले * नीती पुऱ्याई कन ।
कैह्ले जित्न सक्यो ति पाण्डवहरू-* -लाई मलाई भन ॥
सम्झोस दुर्जनले कुकर्म पहिले * जस्तो गरेको थियो ।
सोही पाप फलेर भोग्नु अहिले * हे कर्ण ! पर्ने भयो ॥८२॥
बिर्सन्थे कसरी ति द्रौपदिजिको * संकष्ट ती पार्थले ।
गर्दैनन् कहिले क्षमा सुन यहाँ * आए ति ये हेतुले ॥
जूवाले कुरुवंशको सहजमै * संहार होला भनी ।
संझेकै हुनुपर्छ श्री विदुरले * पैह्ले भनेको पनि ॥८३॥
मौका छैन विवाद गर्न अहिले * भन्ने बुझे तापनि ।
गर्दैछौ तिमि बात व्यर्थ बक भैं * ज्ञानी र पण्डित् बनी ॥
द्यौता, मानिस, यक्ष, राक्षस तथा * गन्धर्व औ दानव ।
आई अर्जुन वीरका सँग लडुन् * जम्मा भई यी सब ॥८४॥
सारालाइ हटाउँछन् समरमा * टिक्तैन कोही पनि ।
हाँसो उठ्छ मलाई कर्ण ! तिमीले* शेखी गरेको सुनी ॥
योद्धाको छ बताउ पार्थसरिको * विख्यात हामीतिर ।
छैनन् क्वै उपयुक्त वीर तिनि झैं * सम्पूर्ण पृथ्वीभर ॥८५॥
विद्यामा बलमा पराक्रम तथा * सत्कर्ममा, नीतिमा ।
बर्ता छन् तिमिदेखि पार्थ बहुतै * हे कर्ण ! संग्राममा ॥

ख्याती प्राप्त ठूला धनुर्धरमहाँ * छन् इन्द्र जस्ता तिनी ।
सारा युद्धकलामहाँ निपुण छन् * श्रीकृष्णजस्ता भनी॥८६॥
गर्छन् तारिफ पार्थको सुजनले * देखेर तिनको गुण ।
निन्दा गर्न भनेर पाण्डुसुतको * ज्यू दैछ दुर्योधन ॥
माया गर्नु पिता भएर सुतको * नीती छ संसारको ।
गर्छन् पुत्र समान स्नेह गुरुले * आफ्नो गुणी शिष्यको८७
प्यारो शिष्य भनेर द्रोण गुरुले * माया गरे पार्थको ।
यस्मा के अनुचित् भयो भन सबै * यस्तो नगर्ने छ को ?
पासा फ्याँकि समस्त वैभव अघी * तिन्को जसोरी हर्‍यौ ।
साध्वी द्रौपदिको सभा बिचमहाँ * ल्याई बिइज्जत गर्‍यौ८८
यस्तौ साथमहाँ लिएर शकुनी * -लाई अगाडी सरी ।
यो दुर्योधन पार्थका सँग लडोस् * संग्राममा यो घरी ॥
त्रेता, द्वापर औ कली स्वरूपका * फ्याँकिन्न पासा अब ।
तीखा अग्निसमानका शरहरू * फ्याँक्नेछ त्यो गाण्डिव८९
पैह्लेका सब कष्ट-पीर मनका * बाँकी नराखी कन ।
गर्नेछन् रणमा विसर्जन तिखा * शस्त्रास्त्रले अर्जुन ॥
बाँच्ला क्वै यमराजका संग लडी* मौका परे युद्धमा ।
बाँच्ला कोहि बरू पसेर सहजै * बल्दो ठुलो अग्निमा ॥९०
बाँच्ला कोही लडेर मृत्युसँग हुन् * सारा कुरा सम्भव ।
बाँच्तैनन् तर पार्थका सँग लडी * भन्छन् सबै कौरव ।
यो दुर्योधन नै लडोस् शकुनिको * शिक्षा लिई यो घरी ।
हेरौं हामिहरू अलग्गा बसि यो * संग्राम राम्रो गरी ॥९१॥
जाउन् लड्न सहर्ष आज मनमा * इच्छा भएका जति ।
मेरो युद्ध हुँदैन पार्थसँग लौ * धेरै बताऊँ कति ॥

आए लड्न विराट भूपति भने * शंका नमानी रती ।
तिन्का साथमहाँ लड़ेर सहजै * पाछ्रँ ठूलो दुर्गति ॥९२॥

भीष्मपितामहले सबैलाई शान्त पार्नु—

अश्वत्थामा कर्णको त्यो विवाद ।
सुन्थे सारा व्यक्तिले मानि स्वाद ॥
त्यस्ले गर्दा पर्न जाला फसाद ।
भन्ने लाग्यो भीष्मलाई विषाद ॥९३॥

श्री दुर्योधनको गई नगिचमा * भन्दा भए भीष्मले ।
बाबू ! कर्ण र द्रोण-पुत्र कृपले * श्री द्रोण आचार्यले ॥
नीतीपूर्वका कुराहरु भने * तिम्रो चिताई हित ।
माफी माग तिमी परी चरणमा * आफ्ना गुरूजीसित ॥९४
लड्ने क्षत्रिय वीरको पृथिविमा * हो धर्म ठूलो भनी ।
बोले कर्ण बढ़ाइ रोष सबको * धेरै कुरा तैपनि ॥
भन्छु खूब गरी विचार मनमा * निर्दोष छन् लौ तिनी ।
माफी बक्सनुहोस् सबै सुजनले * ऐह्ले दयालु बनी ॥९५॥
आत्तिन्छन् सहसा विपत्ति नजिकै * देखे पछि सज्जन ।
गाह्रो पर्दछ धैर्य धारण गरी * बस्नु नआत्तीकन ॥
पाँचोटा बलवान शत्रुहरु छन् * जुन् वीरका सामुमा ।
त्यस्को दोष कुनै म देख्दिनँ पऱ्यो * त्यो शोकमा, मोहमा ॥९६
सोही कारणले तपाईहरूले * हो शिष्य प्यारो भनी ।
यो दुर्योधनलाइ माफ दिनुहोस् * ऐह्ले दयालु बनी ॥
मौका छैन विवादको, समरको * हामी तयारी गरौं ।
यो संग्राम जिती सुयोधनजिको * सन्ताप सारा हरौं ॥९७॥

आएको छ विपत्ति घोर अहिले * हाम्रो अगाड़ी सरी ।
गर्दा आपुसमा विरोध कसरी * जाला विपत्ती टरी ॥
विर्सी दोष तथा समस्त झगड़ा * पैह्ले भएको जति ।
लड्नूपर्छ मिली-जुली न त पछी * होला-ठूलो दुर्गति ॥९८॥
ठूलो नाश हुने, विपत्ति खनिने * संग्राममा हारिने ।
भन्छन् सज्जनले सदा कलह नै * हो प्राणलाई लिने ॥
सोही कारणले विरोध नगरौं * हामी कसैको पनि ।
रक्षा सैनिकको गरौं जतनले * आयो विपत्ती भनी ॥९९॥
यो दुर्योधनले अनीति पहिले * धेरै गरे तापनि ।
सारा बिर्सनुपर्छ लाभ अहिले * क्यै छैन त्यस्मा भनी ॥
चारै वेद, पुराण, शास्त्रहरुका * ज्ञाता धनुर्वेदका ।
छैनन् द्रोण गुरु तथा कृपजि झैं * सर्वज्ञ षड्शास्त्रका ॥७००॥
त्यस्ता योग्य तथा उदार गुरुको * निन्दा गरेका किन ?
माफी माग तिमी प्रसन्न मनले * दिन्छन् खुशी भैकन ॥
नीती पूर्वकको पितामहजिले * शिक्षा दिनूभो जब ।
बोले सादर द्रोण-पुत्र मनमा * आनन्द मानी तब ॥१॥
बाबाको बहुतै सुयोधनजिले * निन्दा गरेको सुनी ।
बोलेथें कटुवाक्य, चित्त नबुझी * मैले निकै तापनि ॥
त्यसको ईख मलाइ छैन मनमा * राजा सुयोधन् प्रति ।
मेरो चित्त बुझ्यो सुनेर अहिले * श्री भीष्मको सम्मति ॥२॥
भन्नू पर्दछ शत्रुको गुण भए * मौका परेका घरी ।
देखे दोष कुनै अवश्य गुरुको * भन्नू अगाड़ी सरी ॥
हो यो नीति भनी प्रसन्न मनले * श्री द्रोण आचार्यले ।
यी दुर्योधनलाइ अर्ति दिनुभो * त्यो शिष्यको स्नेहले ॥३॥

द्रौणीको सुनि यो कुरा मनमहाँ * संकोच माने पनि ।
श्री दुर्योधनले भने 'दिनुहवस् * माफी' दयालु बनी ॥
द्रौणी, द्रोणगुरु र कर्ण, कृपजी * हुन् मान्य मेरा सब ।
मेरो जुन् अपराध हो सकल त्यो * माफी दिनूहोस अब ॥४॥
यस्तो विन्ति सुनेर द्रोण गुरुजी * बोले खुशी भैकन ।
ईर्ष्या छैन मलाइ केहि मनमा * हे वीर ! दुर्योधन ॥
खुशी छू अहिले पितामहजिले * शिक्षा दिएको सुनी ।
तिम्रो बात सुनेर क्रोध मनमा * मान्दीनँ कत्ती पनि ॥५॥
सम्बोधन् गरि भीष्मजीसित भने * क्ये बेरमा द्रोणले ।
रक्षा गर्नुपर्‍यो सुयोधनजिको * संग्राममा युक्तिले ॥
दुर्योधन् कन पार्थले समरमा * देख्नै नसक्ने गरी ।
यौटा व्यूह तयार पार्नु अहिले * पर्नै भयो राम्ररी ॥६॥
पैह्लेको सब सम्झि कष्ट, रणमा * देखे भने पार्थले ।
मार्नेछन् कुरुराजलाइ सहजै * तिन्ले कुनै युक्तिले ॥
श्री दुर्योधनको सबै तरहले * पैह्ले सुरक्षा गरी ।
रक्षा हुन्छ समस्त वीरहरुको * जुन् कामले राम्ररी ॥७॥
सोही काम छिटै विचार नगरे * हाम्रा भएका जति ।
मार्छन् वीरहरू धनञ्जयजिले * पाछ्न् ठुलो दुर्गति ॥
सोधेथे अघि नै सुयोधनजिले * ती पाण्डुका पुत्रको ।
तेह्रौं वर्ष पनी बित्यो कि अहिले * बाँकी छ अज्ञातको ॥८॥
त्यस्को गर्नुहवस् हिसाब मनले * राम्रो गरी नाथले ।
द्रोणाचार्यजिको कुरा सुनिसकी * भन्दा भए भीष्मले ॥
मैह्ना पक्ष मुहूर्त औ ग्रह ऋतु * नक्षत्र संवत्सर ।
घुम्छन् नित्य र कालचक्र यसरी * चल्दैछ सधैंभर ॥९॥

यिन्को चालमहाँ घटी-बढ़ि हुँदा * तीसौं महीना महाँ ।
मैह्ला एक बढ़ेर सोहि मलमास् * भन्छन् सबले यहाँ ॥
टीकाको दिनमा असौज महीना * -मा द्यूत-क्रीड़ा गरे ।
यो वैशाखमहाँ धनञ्जय स्वयं * आएर देखा परे ॥१०॥
जोर्दा ती मलमासका दिनहरू * प्रत्येक राम्रो गरी ।
तेह्रौं वर्ष बितेर पाँच महिना * बतो भयो यो घरी ॥
ज्ञानी पाण्डव छन् विचार नगरी * आपत्तिको अर्जुन ।
गर्छ युद्ध भनेर यो वखतमा * सक्थे कहाँ देखिन ॥११॥
उस्मा धर्म-कुमार छन् अझ बढ़ी * ज्ञानी तथा सज्जन ।
जाने पूर्ण भयो भनेर अघिको * आफ्नू प्रतिज्ञा कन ।
गर्दैनन् कहिले अधर्म तिनिले * मनै परे तापनि ।
गर्छन् पालन धर्मको र व्रतको * कर्तव्य ठानी तिनी॥१२॥
पूरा शक्ति थियो र मार्न पनि ती * सक्थे पहीले तर ।
मारेनन् प्रणलाई सम्झि मनमा * सद्धर्मका खातिर ॥
तीनै लोक तथा सबै भुवनको * पाए पनी वैभव ।
चल्दैनन् कहिले अनीति पथमा * पाँचै जना पाण्डव ॥१३॥
लड्दामा दुइ पक्षले बुझ तिमी * योटा कुनै हार्दछ ।
जे गर्दा जित हुन्छ गर्नु त्यहि नै * बेला छँदै पर्दछ॥
राजा इन्द्र लडे पनी समरमा * हार्छन् किरीटीसित ।
यो संग्राम महाँ कुनै तरहले * देख्दीनँ हाम्रो हित ॥१४॥
सारा अंश दिएर पाण्डु - सुतको * सानन्द सन्धी गर ।
तिन्लाई म तयार पार्दछु स्वयं * यो सन्धिका खातिर ॥
ऐह्ले लड्न भनेर हेर नगिचै * आई पुगे अर्जुन ।
जे गर्दा हित ठान्दछौ गर त्यही * हे वीर दुर्योधन ! ॥१५॥

तिन्ले अर्ति सुने पितामहजिको * अत्यन्त राम्रो तर ।
भन्छन् दिन्न म अंश पाण्डुसुतको * मानेर ठूलो डर ॥
हाम्रो जीत हुनेछ जुन् तरहले * जो काम गर्दा यहाँ ।
गर्नू पर्दछ यत्न त्यै हजुरले * राखी दया मन्महाँ॥१६॥
इच्छा बुझ्नुभयो सुयोधनजिको * श्री भीष्मजीले जब ।
भन्नूभो पहिले विभाजन गरौं * सेनाहरूको अब ॥
केही सैन्य लिई विलम्ब नगरी * फर्केर जाऊ घर ।
चौथाई लिइ सैन्य गोधन हिंडुन् * तत्काल एकातिर ॥१७॥
बाँकी सैनिकको म व्यूह बलियो * तैयार पार्छु अनि ।
लड्नेछौं सबले मिलेर सहजै * जुन् वीर आए पनि ॥
आज्ञा भीष्मजिको सुनीकन हिंडे * तत्काल दुर्योधन ।
केही सैन्यहरू पठाउनुभयो * सुम्पी सबै गो-धन ॥१८॥
बाँकी सैनिकको अघिल्तिर डटे * श्री कर्ण लड्छु भनी ।
आफ्ना शस्त्र लिई पछिल्तिर बसे * श्री भीष्म योद्धा पनि ॥
द्रौणी-द्रोण दुवै दुवै बगलमा * सेनाहरूका बसे ।
गर्छौं युद्ध भनेर कम्मर छिटो * चारै जनाले कसे ।१९॥

दुर्योधनलाई रोकी गाईहरू फर्काउनु—

रक्षार्थ व्यूह जब पारिसके तयार ।
चारै दिशातिर डटे मिली चार वीर ॥
सेनाहरू पनि सशस्त्र भए प्रशस्त ।
बाजा बजे समरका क्रमले समस्त ॥२०॥

आए शंख फुकेर घोर रवले * थर्काइ भूमी पथ ।
गर्दै घर्घर शब्द टक्क अडियो * श्री पार्थको त्यो रथ ॥

देखे अर्जुनलाइ द्रोण गुरुले * आई पुगेका जब ।
लागे भन्न बुझाइ वीरहरु हो ! * श्री पार्थ आए अब ॥२१॥
गर्जन्छन् हनुमान वीर रथको * अग्लो ध्वजामा बसी ।
फुक्दैछन् तिनि शंख घोर रवले * लौ हेर घूँड़ा धसी ॥
मेरा यी दुइ पाउका नगिचमा * आए दुवै जो शर ।
गर्दैछन् शरले प्रणाम तिनिले * मेरो गरी आदर ॥२२॥
मेरा कान नजीकबाट दुइटा * जुन् बाण ऐह्ले गए ।
मेरा वृद्ध गुरू भनेर शरले * सल्लाह गर्दा भए ॥
धेरै काल बिती सकेपछि भयो * यो भेट हाम्रो यहाँ ।
तिन्को दिव्य स्वरूप देखि बहुतै * लाग्यो खुशी मन्महाँ ॥२३॥
यस्तै बात समस्त सैनिक महाँ * गर्दै थिए द्रोणले ।
हेर्थे वीर सबै फिरी रथ तिरै * अत्यन्त आश्चर्यले ॥
ठोक्रा, बाण, किरीट, शख, रथमा * ठूलो पताका हुने ।
गर्थे धारण श्रेष्ठ गाण्डिव धनू * औ तेजले टल्किने ॥२४॥
आएका रथमा चढेर बलियो * संग्रामका खातिर ।
आँखा खुल्न सकेन वीरहरुको * हेर्दा किरीटीतिर ॥
पौंची अर्जुनले निरीक्षण गरे * सेना तथा व्यूहको ।
देखे वीरहरू खडा सब थिए * रक्षा गरी सैन्यको ॥२५॥
भन्छन् अर्जुन राजपुत्र अहिले * देख्छु सबै छन् यहाँ ।
योटा त्यो कुरुवंश नायक यहाँ * देख्दीनँ भाग्यो कहाँ ।
द्रौणी, द्रोण र भीष्म, कर्ण कृपजी * छन् मान्य मेरा सब ॥
त्यो दुर्योधनको नतोड़ि अभिमान् * छाड्नेछु मैले कब ?॥२६॥
पक्का दक्षिणको समाइ पथ त्यो * भाग्यो लिई गोधन ।
जानू पर्छ बढाउँदै रथ छिटो * त्यस्लाइ पक्री लिन ॥

मेरा हुन् सब मान्य लड्नुछ वृथा * यिन्का सँगैमा यहाँ ।
पैह्ले गाइहरू फिराउँ खल त्यो * उम्केर जाला कहाँ ॥२७॥
यस्तो उत्तरले धनञ्जयजिको * आज्ञा सुनी हर्षले ।
हाँके दक्षिणतर्फ झट्ट रथ त्यो * साह्रै ठूलो वेगले ॥
हावा झैं गरि पार्थलाइ कुपले * देखे गएका जब ।
इच्छा अर्जुनको बुझीकन भने * लौ हेर योद्धा सब ॥२८॥
देखैनन् कुरुराजलाइ तिनिले * संग्राम भूमीमहाँ ।
जाँदैछन् तिनिलाइ पक्रन भनी * ऐह्ले लखेटतै त्यहाँ ॥
राजा इन्द्र र कृष्ण बाहिक अरू * को टिक्छ सामू परी ।
पाए भेट्न भने अवश्य तिनिले * मार्छन् लडाइँ गरी ॥२९॥
जाऊँ हामिहरू विलम्ब नगरी * सेना लिई यै घरी ।
रक्षा गर्नुपर्‍यो सुयोधनकहाँ * पौंची छिटो राम्ररी ॥
गर्थे बात यता, उतातिर पुगी * हावा सरी अर्जुन ।
हानी बाणहरू तिखा सल्रह झैं * छोपे रिसाईकन ॥३०॥
देखे सैनिकलाइ बाणहरूले * ढाकी दिएको जब ।
फर्काए रथ श्री सुयोधनजिले * भाग्नै नसक्ता, तब ॥
लागे गर्न रिसाइ पार्थ धनुको * टंकार, शंख ध्वनी ।
हुन्थ्यो घर्घर शब्द घोर रथको * पांग्रा घुमेको पनि ॥३१॥
त्यै वेला हनुमान वीर रथको * गर्जें ध्वजामा बसी ।
गर्जें जन्तुहरू थिए जति त्यहाँ * मानेर ठूलो खुशी ॥
लागे हेर्न विमूढ भैं सकल ती * सेना डराई जव ।
गाईले सुनि शब्द घोर डरले * बिच्केर भागे सब ॥३२॥
बाँ-बाँ शब्द गरेर पुच्छर पनी * ठाडो गराई कन ।
भाग्दै गोठमहाँ पुगे नृपतिका * संपूर्ण ती गो - धन ॥

गाईलाइ छुटाइ यो किसिमले * फर्केर श्री अर्जुन ।
श्री दुर्योधनको पुगे नगिचमा * साह्रै रिसाईकन ॥३३॥
त्यै वेला कुरुवीर औ कृप पनी * पौंचेर घेरा दिई ।
रोके अर्जुन वीरको रथ स्वयं * आफू अगाड़ी भई ॥
चारै तर्फ डटेर वीरहरुले * घेरा दिएथे जब ।
बोले राजकुमारको मुख महाँ * हेर्दै किरीटी तब ॥३४॥

अर्जुन-कौरव युद्धमा कर्णको पलायन—

त्यो दुर्योधनको सहायक हुँदा * व्यर्थै घमण्डी बनी ।
भन्थे कर्ण अघी सदा मसँग नै * गर्छु लडाइँ भनी ॥
सोही कारणले पुऱ्याउ रथ यो * तिन्का अगाडी महाँ ।
तिन्को शेखि सबै उताछु अहिले * भागेर जान्छन् कहाँ ॥३५
आज्ञा अर्जुनको सुनेर रथ त्यो * हाँकी ठुलो वेगले ।
कुल्चाईकन घेर सैनिकहरू * लड्दै गए रोषले ॥
भाई चार पुगी सुयोधनजिका * वर्षा गरी बाणको ।
बाटोमा उभिएर श्रेष्ठ रथ त्यो * ढाकी दिए पार्थको ॥३६॥
देखे साहस पार्थले समरमा * चारै जनाको जब ।
हाने क्रोध गरेर तीक्ष्ण शरले * भागे डराई सब ॥
आए लड्न विकर्ण वीरहरुको * देखेर त्यस्तो गति ।
हाने अर्जुनलाइ तीक्ष्ण शरले * तिन्ले सकेको जति ॥३७॥
तिन्का बाण सबै गराइ टुकुरा * काटी दिए पार्थले ।
चारोटा शरलाइ मन्त्रित गरी * छाडी दिए वेगले ॥
नाशी अश्व, ध्वजा गरेर विरथी * त्यै बाण द्वारा भई ।
भागे त्यो रणभूमिबाट डरले * ती प्राण मात्रै लिई ॥३८॥
'शत्रुत्ताप' प्रसिद्ध वीर सब यो * हेरी रहेका थिए ।
तिन्ले अर्जुनलाइ बाणहरूले * तत्काल ढाकी दिए ॥

तिनको बाण गराइ व्यर्थ सहजै * छाडेर आफ्नू शर ।
काटे अर्जुनले गराइ टुकुरा * तत्काल तिन्को शिर ॥३९
भाई एक थिए प्रसिद्ध बलिया * श्री शत्रुजित् कर्णका ।
आए लड्न भनी तिनै अघिसरी * संग्राममा पार्थका ॥
तिनूले बाणहरू प्रहार रिसले * धेरै गरेथे तर ।
योटै बाण चलाइ अर्जुनजिले * तिन्को गिराए शिर॥४०॥
भाई मर्न गयो भनेर रिसले * आगो सरीको भई ।
लागे गर्न प्रहार तीक्ष्ण शरले * श्री कर्ण साम्ने गई ॥
घाउ मत्स्य - कुमारको शरिरमा * पारी दिएथे जब ।
काटेथे शर कर्णका विजयले * टुक्रा गराई सब ॥४१॥
लागे लड्न त्यहाँ तिनै भुवनका * विख्यात योद्धा दुई ।
गर्थे आपुसमा प्रहार रिसले * मार्नै इरादा लिई ॥
छोपिन्थे शरजालमा जब दुवै * क्यै बेरका खातिर ।
निस्कन्थे पछि सूर्य-चन्द्रसरिका * काटेर सारा शर ॥४२॥
देख्दा साहस वीरको समरको * शस्त्रास्त्रको कौशल ।
साह्रै छक्क परेर सैनिकहरू * हेर्थे भई निश्चल ॥
गर्जेका कपिलाइ सात शरले * पारी सकी घायल ।
हानेथे शर पाँच मत्स्य - सुतको * ताकेर मर्म स्थल ॥४३॥
चारोटा हयलाइ चार शरले * पारी दिए घायल ।
लागे गर्जन कर्ण घोर रवले * देखाइ ठूलो बल ॥
राजन् ! घायल सिंह घोर वनमा * गर्जन्छ जुन् चालले ।
सोही चाल गरेर अर्जुन पनी * गर्जी ठुलो वेगले ॥४४॥
ताँदो बेसरी कानसम्म धनुको * तानेर राम्रो गरी ।
तीखा बाण अनेक 'भल्ल' कहिने * छाड़ी दिए त्यै घरी ॥

लागे ती शर कर्णका वदनमा * अत्यन्त पीडा दिई ।
भागे कर्ण डराइ स्वप्न नसकी * त्यो चोटले आत्तिई ॥४५॥
भागेका रणबाट कर्ण त्यसरी * देखे सबैले जब ।
आए लड्न भनेर पार्थतिर नै * दुर्योधनादी सब ॥
एकै पल्ट डटेर वीरहरुले * छेकेर चारैतिर ।
लागे गर्न प्रहार पार्थतिर ती * पानी परे झैं शर ॥४६॥
पारेथे शर जालमा रथ तथा * श्री पार्थलाई जब ।
लागे गर्जन बेसरी खुशि हुँदै * संग्राममा कौरव ॥
तिन्को साहस औ पराक्रम ठुलो * देखेर श्री अर्जुन ।
लागे गर्न प्रहार तीक्ष्ण शरले * साह्रै रिसाईकन ॥४७॥
तिन्को बाण चलाउने क्रम तथा * संग्रामको योग्यता ।
त्यस्तो स्फूर्ति ठुलो पराक्रम तथा * गम्भीरता धीरता ॥
देख्दा मत्स्य-कुमारको पनि सफा * त्यो अश्व-सञ्चालन ।
स्याबासी सब शत्रुले पनि दिए * आश्चर्य मानीकन ॥४८॥
पैह्ले कौरवतर्फका अतिरथी * साम्रू डटेका जति ।
सारालाइ छिटै असंख्य शरले * छोपे रिसाई अति ॥
लागे सैनिकलाइ मार्न रिसले * बाँकी नराखी रति ।
थाले भाग्न कती मरेर कतिले * पाए ठुलो सद्गति ॥४९॥
घोड़ाले रथले र वीरहरुको * शस्त्रास्त्रले देहले ।
खुट्टा हात, गजेन्द्र मत्त रणमा * गिर्दा ठुलो वेगले ॥
ढाक्यो भूमि सबै बगी रगतको * खोलो नदी झैं गरी ।
थेरै वीरहरू मरेर छरिए * संग्राम भूमीभरी ॥५०॥
आगोले जसरी महा - प्रलयमा * सम्पूर्ण भूमण्डल ।
पाछन्‌ दग्ध त्यसै गरी विजयले * देखाई आफ्नू बल ॥

पारे दग्ध समस्त शत्रुतिरका * सेना तथा नायक ।
हाहाकार पर्‍यो रहेन रणमा * तिन्को कुनै रक्षक ॥५१॥
गर्छन् सागरमा अनन्त जसरी * क्रीडा तथा मन्थन ।
लागे मार्न समस्त सैनिक घुमी * त्यस्तै गरी अर्जुन ॥
कोटेको रुख ढल्छ जङ्गलमहाँ * जुन् चालले सालको ।
सोही चाल गरी शरीर रणमा * ढल्दै गयो वीरको ॥५२॥
देखेथे भयभीत सैनिकहरू * धेरै मरेका त्यहाँ ।
छाडे सैनिकलाइ मार्न तिनिले * लागी दया मन्‌महाँ ।
हाने अर्जुनले त्रिहत्तर तिखा * आचार्यलाई शर ।
आठोटा शरले गरे गुरुजिका * सत्पुत्रको आदर ॥५३॥
त्यो दुःशासनलाइ बाह्र शरले * घाऊ गराई कन ।
साठी बाण चलाई आदर गरे * श्री भीष्मको त्यै क्षण ॥
राखी श्रेष्ठ 'क्षुरप्र' बाण धनुमा * अत्यन्त तीखा सय ।
हाने अर्जुनले सुयोधनजिको * सर्वाङ्गमा निर्भय ॥५४॥
लागी बाण तिखा भए सकल ती * योद्धाहरू घायल ।
थाले भाग्न समस्त सैनिकहरू * त्यागेर युद्धस्थल ॥
टल्कन्छन् जसरी नभस्थलमहाँ * श्री सूर्यनारायण ।
टल्की त्यै रितले रहे समरमा * श्री पाण्डुका नन्दन ॥५५॥

द्रोणाचार्य, कृपाचार्य र अश्वत्थामाको पलायन—

देखेर मत्स्य - सुतले रणको परिस्थिति ।
सेना र वीरहरूको पनि घोर दुर्गति ॥
सोधे धनञ्जय बताउनुहोस् अहीले ।
लैजानु यो रथ कतातिर पर्छ मैले ॥५६॥

कुन् योद्धासित लड्नको मनमहाँ * इच्छा छ भन्नूहवस् ।
हावा झैं रथ यो पुऱ्याउँछु त्यहीं * विश्वास मान्नूहवस् ॥
बिन्ती राजकुमारको सुनिसके * त्यस्ता प्रकार्को जब ।
बोले स्नेह गरेर हेरि मुखमा * श्री पार्थजीले तब ॥५७॥
जोतेको रथमा महापुरुषको * छन् चार राता हय ।
नीलो रङ्ग हुने ध्वजा छ रथमा * जुन् वीर छन् निर्भय ॥
सेना साथमहाँ लिएर, तनमा * पैह्रेर बाघम्बर ।
बस्ने हुन् गुरुजी यिनै कृपजिको * गर्छन् सबै आदर ॥५८॥
लैजाऊ रथ यो प्रदक्षिण गरी * तिन्कै अगाड़ी महाँ ।
आफ्नू युद्धकला प्रदर्शन सबै * गर्नेछु मैले त्यहाँ ॥
झण्डामा सुनको कमण्डलु सफा * देखिन्छ जुन् वीरको ।
मेरा मान्य तथा धनुर्धरमहाँ *ख्याती छ श्रीद्रोणको॥५९॥
आएका करमा परेर अहिले * संग्रामका खातिर ।
यिन्को आदरले प्रणाम खुसिले * हे वीर ! पैह्ले गर ॥
छाड्दैनन् जबसम्म बाण पहिले * तिन्ले रिसाई कन ।
मैले गर्न प्रहार यो समरमा * आँटे पनी सक्तिनँ ॥६०॥
अर्को जो रथ देख्दछौ तिमी सफा * आचार्यको क्यै पर ।
जस्को चिन्ह छ केतुमा धनुषको * छन् युद्धमा तत्पर ॥
द्रोणाचार्यजिका कुमार भवमा * विख्यात छन् ती अति ।
यिन्को आदर गर्नुपर्दछ सदा * मैले सकेको जति ॥६१॥
पैह्रेको बलियो छ वर्म सुनको * जुन् वीरले देहमा ।
सेना राखि वरीपरी रथमहाँ * देखिन्छ जो माझमा ॥
जस्को नाग छ केतुमा र सुनको * देख्छौ पताका पनि ।
हो दुर्योधन मुख्य शत्रु बुझिल्यौ * यो युद्धको कारणी ॥६२

हात्तीको ध्वजमा छ चिह्न, रथमा * जस्को पताका ठुलो ।
मैले भैं रणमा छ शत्रुहरुको * जो काट्न सक्ने ठुलो ॥
राधाको सुत कर्ण हो अघि पनी * देखी सकेका थियौं ।
यस्को श्रेष्ठ प्रहारको रस पनी * हे वीर ! चाखी सक्यौं ॥६३
ताराको शुभ चिन्ह पाँच थरिको * नीलो पताका महाँ ।
जस्को तेज छ सूर्य झैं वरिपरी * छन् वीर योद्धा जहाँ ॥
आफू माझमहाँ बसेर रथमा * गर्ने धनू धारण ।
हाम्रा मान्य बुढा पितामह यि हुन्* योद्धा असाधारण ॥६४
सारा कौरव वंशको र धनको * स्वामी भए तापनि ॥
श्री दुर्योधनको परेर वशमा * आए यि लड्छ भनी ॥
जानूपर्दछ अन्त्यमा रथ लिई * यिन्को अगाड़ी महाँ ।
मेरो ता हित गर्दछन् यिनि सदा * पर्नेछ मौका जहाँ ॥६५॥
हाम्रो युद्ध हुँदा सतर्क रहनू * पर्ला नआत्ती कन ।
गर्नू पर्दछ सावधान मनले * यी अश्व सञ्चालन ॥
राजन् ! कौरवतर्फका जति थिए * योद्धा डटेका त्यहाँ ।
सारालाइ चिन्हेर उत्तर खुशी * भन्दा भए मन्महाँ ॥६६
आज्ञा अर्जुनको लिएर रथ त्यो * हाँकेर हावा सरी ।
पौंचाई कृपको अघिल्तिर, वरै * रोकी दिए त्यै घरी ॥
देखे अर्जुनलाइ वीरहरुले * आई पुगेका जब ।
आए लड्न भनेर शत्रुतिरका * सेना र योद्धा सब ॥६७॥
हेरौं अर्जुनको तथा कृपजिको * ठूलो लडाइँ भनी ।
आए श्रेष्ठ विमानमा बसि त्यहाँ * इन्द्रादि द्यौता पनि ॥
आफ्नू नाम भनी गरे विजयले * विख्यात शंख ध्वनि ।
आफ्नू शंख फुके तुरुन्त कृपले * आवाज तिन्को सुनी ॥६८

ठूलो वज्र परे समान धनुको * टङ्कार पैह्ले गरी ।
हानेथे दस बाणले शरिरमा * ताकेर सोही घरी ॥
घाउ पारिदिए धनञ्जयजिको * तिन् बाणले देहमा ॥
दोगे चोट खपेर शुद्ध मनले * आचार्यका पाउमा ॥६९॥
नाँदो गाण्डिव नाम श्रेष्ठ धनुको * तानेर राम्रो गरी ।
छाडे बाण अनेक क्रोधित भई * श्रीपार्थले त्यो घरी ॥
घाऊ पारि दियो शरीरभरिमा * लागेर तीखा शर ।
हाने अग्नि शिखासमान शरले * ताकी किरीटीतिर ॥७०॥
काटी ती शरलाइ झट्ट बिचमै * टुक्रा हजारौं गरी ।
छाडे अर्जुनले पनी शरहरू * लाग्ने गरी बेसरी ॥
निक्कै बेर लडाइँ शिष्य-गुरुले * गर्दै थिए युद्धमा ।
हेर्थे युद्ध डुलेर देवहरुले * सानन्द आकाशमा ॥७१
बारंबार गरी प्रहार रिसले * योद्धा कृपाचार्यले ।
पारे घायल पार्थलाई रणमा * आफ्नो ठुलो शक्तिले ॥
टुक्रा पारिदिए हजार रथको * पैह्ले ठुलो वेगले ।
मारे सारथि अश्व औ धनु पनी * भाँची दिए पार्थले ॥७२॥
देखेथे जब आफुलाइ विरथी * पारी दिएको त्यहाँ ।
दौडे एक गदा लिएर गुरुजी * क्रोधित् भई मन्महाँ ॥
टुक्रा पारिदिए गदा कृपजिको * छाड्नै नपाई कन ।
त्यै माथी थपुवा अनेक शरले * हान्दै गए अर्जुन ॥७३॥
लागे लड्न सबै मिलेर, कृपको * देख्दा नराम्रो स्थिति ।
भागेथे कृपजी डराइ मनमा * लज्जा नमानी रती ॥
लागे मार्न समस्त सैनिकहरू * क्रोधित् भई पार्थले ।
रोके अर्जुनलाइ त्यै बखतमा * साम्ने गई द्रोणले ॥७४

बोले पार्थ—गुरो ! सहें वनमहाँ * संकष्ट घेरै थरी ।
बैरीको अपमान स्वप्न नसकी * आएँ अगाडी सरी ॥
मेरो कष्ट ठुलो बुझी विवशता * यो लड्न आयो भनी ।
राग द्वेष नमानि-बक्सनुहवस् * मेरोप्रती क्यै पनि ॥७५॥
यस्तो विन्ति सुनिसकी विनयको * श्री द्रोण आचार्यले ।
एक्काईस तिखा-तिखा शरहरू * छोड़े ठुलो वेगले ॥
देखे अर्जुनले उडी सलह झैं * आई रहेका शर ।
काटे ती शरको, हजार टुकुरा * पारी, रहे सुस्थिर ॥७६॥
आफ्ना ती शरहेरुको विफलता * देखेर आश्चर्यले ।
वर्षाए हतियार क्रोधित भई * साह्रै ठुलो वेगले ॥
काटे अर्जुनले सबै शरहरू * लाग्नै नपाई कन ।
घाऊ पारिदिए अनेक शरले * हानेर सोही क्षण ॥७७॥
कुन् वेला शर झिक्छन् र कहिले * छाड्छन् धनूका घरी ।
भन्ने जान्न कठिन् थियो ति दुइको* संग्राममा त्यो घरी ॥
हे राजन् ! गुरु-शिष्यका शरहरू * आकाश माथी गई ।
उड्थे आपुसमा समान रूपले * ती सर्पजस्ता भई ॥७८
जस्तै वज्र खसेर पर्वत महाँ * निस्कन्छ ठुलो ध्वनि ।
त्यस्तै शब्द गरी प्रहार रिसले * गर्थे ति आगो बनी ॥
जस्ले देव मनुष्य राक्षस जिते * एक्लै लडाइं गरी ।
त्यस्ता अर्जुन वीरका सँगमहाँ * श्री द्रोणले यो घरी ॥७९
लड्दैछन् जसरी अडेर त्यसरी * टिक्दैन कोही पनि ।
गर्थे तारिफ द्रोणको सब जना * हुन् वीर ठूला भनी ॥
त्यस्तै अर्जुनको पनी समरको * गम्भीरता धीरता ।
देखी वर्णन गर्दथे घरि-घरी * मानीस औ देवता ॥८०

वर्षा गरे विजयले शरको रिसाई।
लागे गएर शर ती गुरु द्रोणलाई ॥
धारा बग्यो रगतको शर गाडिएर।
घाऊ भयो शरिरमा बढि कष्ट धेर ॥८१॥
देखेर व्याकुल गुरूकन बार-बार।
फेरी थपे विजयले शर तीक्ष्ण चार ॥
घोड़ा र सारथि मरे रथ चूर्ण भैगो।
श्री द्रोणको समरको सब शक्ति गैगो ॥८२॥

देखी व्याकुल द्रोणलाइ रथमा * सेनाहरू आत्तिए।
हाहाकार परी कती समर नै * त्यागेर भाग्दा भए ॥
बाँकीका सबले मिलेर शरको * वर्षा गरी बेसरी।
रोके अर्जुनलाइ द्रोण गुरुको * रक्षा गरी त्यो घरी ॥८३
देखेथे रणभूमिको स्थिति तथा * श्री द्रोणको दुर्गति।
आए श्रेष्ठ धनू लिएर करमा * द्रौणी रिसाई अति ॥
ढाके अर्जुनलाइ बाणहरुले * पानी परे झैं गरी।
पाए औसर भाग्नको रण त्यजी * श्रीद्रोणले त्यो घरी ॥८४॥
भागे प्राण बचाई झट्ट गुरुजी * लज्जा नमानी रती।
बाबा झैं रणको प्रदर्शन गरे * द्रौणी रिसाई अति ॥
द्रौणीका सब बाणलाइ टुकुरा * पारी दिए पार्थले।
तीखा बाण गरी प्रहार तनमा * घाऊ गरे क्रोधले ॥८५॥
द्यौता दानवको लड़ाइँ पहिले * जस्तो भएको थियो।
द्रौणी अर्जुनको त्य सै सरहको * संग्राम ठूलो भयो ॥
गर्थे ती दुइले प्रहार शरले * आकाश ढाक्ने गरी।
हेर्थे छक्क परेर सैनिक तथा * योद्धाहरू त्यो घरी ॥८६॥

यौटा बाण चलाइ द्रोण-सुतले * काटे धनू पार्थको ।
स्याबासी सबले दिए कुशलता * देखेर संग्रामको ॥
ताँदो श्रेष्ठ चढाई फेरि धनुमा * गर्जेर श्री पार्थले ।
ढाके द्रोण-कुमारलाइ शरको * वर्षा गरी वेगले ॥८७॥

लागे सबै शरहरू गइ देहमाहाँ ।
धारा बाग्यो रगतको, भइ घाउ त्याहाँ ॥
श्री द्रोणपुत्र कन व्याकुलता बढेर ।
भाग्दा भए समरबाट ति उत्निखेर ॥८८॥

कर्णको दोस्रो पटक पलायन—

हे राजन् ! जब द्रोणपुत्र त्यसरी * भागे ड़राई कन ।
कोही वीर पनी टिकेन रणमा * एक्लै थिए अर्जुन ॥
राधाका सुत कर्णले समरको * देखेर त्यस्तो स्थिति ।
आए लड्न डटेर फेरि अघिको * बिर्सी ठुलो दुर्गति ॥८९

तिन्लाइ रथमा धनञ्जयजिले * देखे डटेका जब ।
भन्छन् खूब रिसाई-कर्ण ! रणमा * के गर्न आयौ अब ?
पापी कौरवको सभाबिच अघी * शेखी गरे भैं यहाँ ।
देखाऊ बलियो पराक्रम कुनै * संग्राम भूमिमहाँ ॥९०॥

सारी द्रौपदिको खिंचेर जसरी * इज्जत् सभामा लियौ ।
हामीलाइ पनी छलेर वनको * संकष्ट जस्तो दियौ ॥
झूटो सम्मतिले कुकर्म पहिले * धेरै गरेको हुँदा ।
सोही पाप फलेर कर्ण ! रणमा * हार्छौ तिमी सर्वदा ॥९१॥

हामी बन्धनमा थियौं प्रण गरी * रक्षार्थ सद्धर्मको ।
पारी त्यो प्रण पूर्ण हाजिर भएँ * इच्छा गरी युद्धको ॥

साटो फेर्दछु त्यो सबै म अहिले * तिम्रो गरी दुर्गति ।
हेर्नेछन् सबले पराक्रम ठुलो * मैले गरेको जति ॥९२॥
यस्तो अर्जुनको कुरा सुनिसकी * श्री कर्ण हाँसी कन ।
लागे भन्न-प्रलाप झैं समरमा * शेखी गर्छको किन ?
देखाऊ पहिले पराक्रम तिमी * ऐह्ले भनेको जति ।
शेखी गर्दछ जो स्वयं समरमा * के गर्छ त्यस्ले खति ?९३
तिम्रो गर्न सहायता समरमा * श्री इन्द्र आए पनि ।
लड्नेछु मनमा नमानि भय ती * हुन् श्रेष्ठ योद्धा भनी ॥
तिम्रो पूर्ण गराउँछु मसँग नै * लड्ने इरादा सब ।
देख्नेछन् सबले पराक्रम तथा * संग्राम हाम्रो अब ॥९४॥
धेरै यै रितको घमण्ड रणमा * तिन्ले गरेको सुनी ।
बोले पार्थ रिसाउँदै-किन वृथा * बोल्छौ घमण्डी बनी ॥
केही बेर अघी तिमी मनमहाँ * लज्जा नमानी कन ।
भाग्यौ यो रणभूमिबाट डरले * बाँच्यौ त्यसै कारण ॥९५
देख्दैछौ तिमि नै अकारण यहाँ * भाई मरेको पनि ।
शेखी तैपनि गर्दछौ घरि-घरी * योद्धा ठुलो हूँ भनी ॥
गर्दै यै रितका कुरा शर लिई * अत्यन्त तीखा सय ।
राधाका सुतलाई श्री विजयले * हान्दा भए निर्भय ॥९६
काटे ती सब बाण सूर्य-सुतले * लाग्नै नपाई कन ।
यौटा बाण गरे प्रहार करमा * ताकेर सोही क्षण ॥
पक्रेको धनु जो थियो विजयले * मुट्ठी बटारीकन ।
लागी त्यै शरले भएर खुकुलो * फुस्क्यो मुठीत्यै क्षण॥९७
काटेथे धनु कर्णको विजयले * छाडेर यौटा शर ।
छाडे शक्ति रिसाइ सूर्य-सुतले * ताकी किरीटीतिर ॥

त्यो शक्ति बिचमैं अनेक टुकुरा * पारी दिए पार्थले ।
चारोटा हयलाइ चार शरले * मारी दिए वेगले ॥९८॥
हाने मन्त्रित एक बाण रिसले * ताकेर मर्नै गरी ।
छातीमा शर गाडियो कवच नै * छेडेर सोही घरी ॥
शक्ती क्षीण भएर कर्ण रथमा * मूर्छा परे झैं भए ।
बाटो उत्तरको समाइ डरले * भागेर अन्तै गए ॥९९॥
भागेथे रणबाट कर्ण जसरी * त्यो प्राण मात्रै लिई ।
गर्जे अर्जुन बेसरी समरमा * उत्साह बढ्दै गई ॥
भन्छन् उत्तरलाइ झट्ट रथ यो * श्री भीष्मजी छन् जहाँ ।
हावाको गतिले पुऱ्याउनुपऱ्यो * तिनका अगाडीमहाँ ॥८००
आज्ञा अर्जुनको विराट-सुतले * यस्तो सुनेथे जब ।
लागे भन्न डराइ हाँक्न रथ यो * सक्तीनँ मैले अब ॥
सेना कौरवतर्फका जलधि झैं * उर्ली रहेछन् अति ।
देखेको पहिले थिएन कहिले * योद्धा यहाँका जति ॥१
ढाकेको छ दशै दिशा वरिपरी * आकाश दिव्यास्त्रले ।
मैले हेर्न सकीनँ स्पष्ट अहिले * आफ्ना दुवै नेत्रले ॥
शक्ति क्षीण भएर व्याकुल हुँदा * आत्तिन्छ मेरो मन ।
यी घोड़ा रथका सम्हाल्न रणमा * आँटे पनी सक्तिनँ ॥२॥
यस्तो मत्स्य-कुमारको सुनि कुरा * साह्रै डराए भनी ।
शिक्षा अर्जुनले दिए समरको * राम्रो, दयालु बनी ॥
जन्मी क्षत्रिय वंशमा समरमा * आएर हे उत्तर !
सारा शत्रु हँसाउँदै किन तिमी * मानी रहेछौ डर ॥३॥
पाँचाउ नडराइ झट्ट रथ यो * श्री भीष्मका सामुमा ।
गर्नेछु म प्रयोग, हेर्नु तिमिले * दिव्यास्त्र संग्राममा ॥

देख्नन् कौरव हातमा धनु लिई * घुम्ने मलाई जब ।
बायाँ हान्छ कि दाहिनेतिर भनी * आश्चर्य मान्नन् सब ॥४
पाएँ पाशुपतास्त्र शम्भुसितको * त्यो घोर संग्राममा ।
त्यस्तै वारुण अस्त्र श्री वरुणले * सुम्पे स्वयं स्वर्गमा ॥
आफाफ्ना हतियार देवहरूले * पैह्ले दिएका जति ।
गर्नेछु म प्रयोग यो समरमा * शंका नमानी रती ॥५॥
आजे कौरव रूप घोर वन यो * फाँडी दिएको पनि ।
देखौला, मनमा नमान डर क्यै * पर्नेछ मनू भनी ॥
त्यस्तै साहसका कुराहरू गरी * धेरै बुझाए जब ।
हाँके त्यो रथलाइ मत्स्य-सुतले * त्यागी कुशंका सब ॥६॥

अर्जुनले भीष्मपितामहलाई मूर्छित पार्नु :—

वैशम्पायनले भने—समरमा * आएर दुःशासन ।
माला राजकुमारको शरिरमा * हाने रिसाई कन ॥
ढाके अर्जुनलाई बाणहरूको * वर्षा गरी बेसरी ।
भाला बाणहरू सबै विजयले * काटी दिए त्यै घरी॥७॥
मारी सारथि अश्व एक शरले * पारी दिए घायल ।
भागे प्राण बचाई टिक्न नसकी * छाड़ेर युद्ध-स्थल ॥
आई दुःसह औ विविंशति ठुला * योद्धा विकर्णै पनि ।
लागे गर्न प्रहार बाणहरूले * पानी परे झैं तिनी ॥८॥
तीनोटा बलवानका शरहरू * काटेर सोही घरी ।
पारे घायल पार्थले समरमा * टिक्नै नसक्ने गरी ॥
भागे तीनजना त्यजी समर त्यो * रक्षा गरी प्राणको ।
रोकेन्ले रथलाइ वीरहरूले * सामू डटी पार्थको ॥९॥

एकै पल्ट गरे प्रहार सबले * तीखा अनेकौं शर ।
ढाके अर्जुन वीरलाइ रणमा * छेकेर चारैतिर ॥
घाऊ लागि शरीरमा रगतको * धारा बगेथ्यो जब ।
थाले गर्न प्रहार क्रोधित भई * श्री पार्थजीले तब ॥१०॥
काटी त्यो शरजाल स्वच्छ रविझैं * संग्राममा देखिए ।
आफ्ना प्वाँख हुने तिखा शरहरू * ताकेर छाड्दै गए ।
छाड़ेका शर ती चतुर्दिक घुमी * हावा सरी वेगले ।
हात्ती, अश्व मरेर सैनिकहरू * मूढा ढले झैं ढले ११॥
भेरी शङ्ख मृदङ्ग ढोल नगरा * बाजा बजे युद्धका ।
घाँटी, कम्मर, हात, पाउ रणमा * गिर्दै गए वीरका ॥
खोलो बग्न गयो ठुलो रगतको * संग्राम भूमी भरी ।
भागे वीरहरू बचे जति सबै * हाहा परी बेसरी ॥१२॥
देखी दुर्गति वीरको समरको * त्यस्तो नराम्रो स्थिति
रक्षा गर्न भनेर भीष्म रणमा * आए रिसाई अति ॥
आफ्नू शंख पुकेर आठ शरले * हाने ध्वजामा जब ।
घाऊ श्री हनुमानका शरिरमा * पारी दिएथे तब ॥१३
ढाकेथे रथ भीष्मको विजयले * सम्पूर्ण युद्धस्थल ।
काटी छत्र ध्वजा र सारथि पनी * पारी दिए घायल ॥
छाड़े भीष्मजिले अनेक बलिया * दिव्यास्त्र मन्त्री कन ।
लागे ती बलवान शस्त्र नभमा * श्री सूर्य झैं टल्कन ॥१४
छाडी मंत्रित दिव्य अस्त्र टुकुरा * पारी दिए पार्थले ।
गर्थे आपुसमा प्रहार ति दुवै * उत्साहले वेगले ॥
जस्तै स्वर्ग-पती र दानव - पती * पैह्ले लड़ेका थिए ।
त्यस्तै भीष्म तथा धनञ्जय दुवै * त्यो युद्धमा देखिए ॥१५॥

प्राजापत्य र ऐन्द्र रौद्र अथवा * कौबेर श्री वारुण ।
छाड्थे मन्त्रित दिव्य-अस्त्र रणमा * श्री भीष्म औ अर्जुन ॥
देखिन्थे दुइ वीर मात्र रवि झैं * संग्राम भूमी भरी ।
हेर्थे छक्क परेर सैनिकहरू * तस्बीर जस्ता भई ॥१६॥
दिन्थे सादर साधुवाद कतिले * भाग्थे डराई कति ।
मारिन्थे रणमा कती प्रलय झैं * हा हा परेथ्यो अति ॥
देख्दा भीष्मजिको पराक्रम ठुलो * संग्राम - भूमी महाँ ।
भन्थे कौरव साधुवाद यिनि झैं * योद्धा छ अर्को कहाँ ॥१७॥
योद्धा भीष्म र कृष्ण बाहिक अरू * श्री पार्थका सामुमा ।
लड्ने वीर ठुलो धनुर्धर कुनै * पाइन्न संसारमा ॥
गर्थे आपुसमा कुरा कुरुहरू * यस्ता प्रकारको यता ।
भन्छन् सादर चित्रसेन खुशिले * श्री इन्द्रलाई उता ॥१८॥
राजन् ! हेर्नुहवस् धनञ्जयजिको * दिव्यास्त्रको कौशल ।
ढाके बाण गरी प्रहार अहिले * सम्पूर्ण युद्धस्थल ॥
उड्छन् टम्म मिलेर बाण नभमा * पक्षी उड़े झैं गरी ।
लागे सिद्धिन वीर सैनिकहरू * त्यो बाणद्वारा मरी ॥१९॥
ख्याती प्राप्त दुवै समान बलका * योद्धा हुनाले गरी ।
गर्दैछन् रणमा प्रदर्शन ठुलो * शस्त्रास्त्रको यो घरी ॥
हुन्थे के गरि यी धनुर्धर दुवै * मानीस साधारण ।
देख्छु शक्ति ठुलो म देवगण झैं * योद्धा असाधारण ॥२०॥
यो वेला शर झिक्तछन् र यसरी * छाड्छन् दुवैले भनी ।
पक्का निश्चय गर्न कोहि रणमा * सक्तैन आँटे पनि ॥
छन् यी वीर दुवै समान बलका * योद्धा त्यसै कारण ।
छाड्छन् शस्त्रहरू बराबर दुवै * लाग्ने नपाईकन ॥२१॥

तिन्को बात सुनेर स्वर्ग-पतिले * आनन्द मानीकन ।
वर्षाए दुइ वीरमा कुसुमको * मालाऽक्षता चन्दन ॥
केही बेर लडी यसै तरहले * दिव्यास्त्रले बेसरी ।
रोकी त्यो शरको लड़ाइँ दुइले * थाल्दा भए त्यो घरी ॥२२॥
पैह्ले नौ शर श्री पितामहजिले * हाने रिसाई कन ।
लाग्यो बेसरि नै र घायल भए * त्यो बाणले अर्जुन ॥
यौटा बाण गरी प्रहार धनु नै * काटी दिए भीष्मको ।
उड्दै बाण अरू पनी दस गए * हावासरी पार्थको ॥२३॥
घाऊ पारिदिए पितामहजिको * ती बाणले देहमा ।
ठूलो चोट परेर ख्प्न नसकी * मूर्छा परे युद्धमा ॥
देख्यो सारथिले रथी रथमहाँ * मूर्छा परेको जब ।
रक्षा गर्न भनी लिईकन गयो * श्री भीष्मलाई तब ॥२४॥

श्री पार्थले समरमा पुरुषार्थ गर्दा ।
श्री भीष्म मूर्छित भईकन भाग्नुपर्दा ॥
योद्धाहरू कति डटीकन लड्न लागे ।
हाहा परीकन कती, डर मानि भागे ॥२५॥

अर्जुनले सबैलाई मूर्छा पार्नु र उत्तरले पगरीहरू ल्याउनु

मूर्छा भीष्म परेपछी समरमा * आएर दुर्योधन ।
रोके वेग ठूलो धनञ्जयजिको * सामू खड़ा भैकन ॥
छाड़ेथे शर 'भल्ल' नामक ठूलो * ताकी किरीटी तिर ।
घाऊ परिदियो निधारभरिमा * लागेर सोही शर ॥२६॥
धारा बग्न गयो जसै रगतको * आगो भई क्रोधले ।
हानेथे कुरुराजलाइ शरले * साह्रै ठूलो वेगले ॥

गर्थे आपुममा प्रहार यसरी * लड्दै थिए बेसरी ।
हात्तीमाथि चढी विकर्ण सहसा * आए अगाड़ी सरी ॥२७॥
लाग्यो गर्जन त्यो गजेन्द्र बलले * थर्काई युद्धस्थल ।
छाड़ेथे शर एक तीक्ष्ण गजको * ताकेर गण्डस्थल ॥
जस्तो वज्र परेर पर्वतहरू * गिर्छन् ठुलो वेगले ।
सोही चाल गरी गिऱ्यो गज पनी * श्री पार्थका बाणले ॥२८॥
हाम्फाली सहसा विकर्ण डरले * भागेर जाँदा भए ।
त्यो देखी सब वीरले समरमा * आएर घेरा दिए ॥
एकै पल्ट गरी प्रहार शरले * थाले सबै गर्जन ।
शेखी कौरव वीरको समरमा * देखेर श्री अर्जुन ॥२९॥
चारैतर्फ घुमी प्रहार रिसले * गर्दा भए बेसरी ।
लागी बाण छुरा समान तनमा * भागे सबै त्यो घरी ॥
श्री दुर्योधनले स्वयं समरको * देखी नरामो स्थिति ।
फर्काए मुहड़ा तुरुन्त रथको * तिन्ले डराई अति ॥३०॥
भागेका कुरुराजलाइ त्यसरी * देखेर श्री पार्थले ।
भन्छन्-पर्ख ! नभाग पीठ रणमा * देखाउँदै वेगले ॥
पुर्खाको शुभ कीर्तिलाइ यसरी * नाशी रहेछौ किन ?
जस्को राज्य लियौ ति धर्म-सुतको * भाई म हूँ अर्जुन ॥३१॥
मेरा साथ लडी पराजय कि वा * लेऊ तिमीले जय ।
हेर्छन् वीर अरू, लड़ौं समरमा * हामी दुवै निर्भय ॥
भाग्नू वीर भएर योग्य कसरी * ठान्यौ तिमीले मन ।
हे दुर्योधन, पार्श्वरक्षकहरू * तिम्रा कुनै देख्दिनँ॥३२॥
जाऊ प्राण बचाइ झट्ट घरमा * माफी दिएँ जीवन ।
आफ्नू वंश स्वयं कलंकित गऱ्यो * हे वीर दुर्योधन ! ॥

धेरै अर्जुनले तिरुयाइ यसरी * हेलाँ गरेको सुनी ।
फर्के लड्न भनेर खप्न नसकी * साह्रै रिसाई तिनी ॥३३॥
हान्दा अंकुशले गजेन्द्र जसरी * फर्कन्छ त्यस्तै गरी ।
फर्केका कुरु-राजलाइ सबले * देखेर सोही घरी ॥
द्रौणी, द्रोण, विविंशती र कृपजी * श्री कर्ण दुःशासन ।
रक्षा गर्न पुगे तुरुन्त शकुनी * श्री शान्तनू-नन्दन ॥३४॥
श्री दुर्योधनको वरिपरि डटे * ती श्रेष्ठ योद्‌धाहरू ।
रक्षा गर्न भनी थिए समरमा * सेना डटेका अरू ॥
एकै पल्ट गरे प्रहार सबले * शस्त्रास्त्र आफ्नो लिई ।
ढाके अर्जुनलाइ बाणहरुले * हानेर क्रोधित भई ॥३५॥

आफू समेत रणमा रथ ढाकिएको ।
देख्दा पराक्रम ति कौरवले गरेको ॥
क्रोधित भई विजयले डर क्यै नमानी ।
काटे ति शस्त्र सबका निज बाण हानी ॥३६॥

पैह्ले शंख फुकेर श्रेष्ठ धनुको * टंकार गर्दा त्यहाँ ।
पृथ्वी कम्प भई, ठुलो ध्वनि भयो * संग्राम भूमी महाँ ॥
छाडे पार्थ रिसाई मन्त्रित ठुलो * दिव्यास्त्र 'सम्मोहन' ।
त्यागी अस्त्र सबै गिरे समरमा * मूर्छा परी त्यै क्षण ॥३७॥
सम्झे अर्जुनले कुरा अघि भनिन् * श्री उत्तराले जति ।
आज्ञा उत्तरलाइ सादर दिए * आनन्द मानी अति ॥
जाई राजकुमार कौरवहरू * सम्पूर्ण छन् मूर्छित ।
ल्याऊ ती सबको झिकेर पगरी * अत्यन्त फुर्ती सित ॥३८॥
योटा भीष्मकहाँ नजानु तिमिले * चैतन्य नै छन् तिनी ।
बाँकीको गई वस्त्र ल्याउ सहजै * जान्दैन कोही पनि ॥

मारा कौरवको झिकेर पगरी * पोको गराई लिए ।
ल्याई त्यो रथमा सुरक्षित गरी * त्यो वस्त्र राखीदिए ॥३९॥

विजयी अर्जुनको विराटनगर प्रस्थान

हे राजन् ! कुरु वीरका ति पगरी * खोसेर ल्याई कन ।
फर्काई रथ व्यूहबाहिर छिटै * निस्की गए अर्जुन ॥



उत्तर कुमारले मूर्छित वीरहरुको पगरी लिएको

त्यो देखीकन श्री पितामहजिले * वर्षा गरी बाणको ।
पारे घायल पार्थलाइ रणमा * धारा बग्यो रक्तको ॥४०॥
आए लड्न भनेर फर्कि रिसले * श्री भीष्मलाई पनि ।
छाड़ी बाण अनेक देहभरिमा * घाऊ गराए अनि ॥
चारोटा हयलाइ चार शरले * मारी दिएथे जब ।
पाई होश तुरुन्त कौरवहरू * दौड़ेर आए सब ॥४१॥
केही बेर लड़ाइँ फेरि त्यहिं नै * चल्दो भयो बेसरी ।
छेके अर्जुनलाइ वीरहरुले * तत्काल पैहें सरी ॥
भन्छन् श्रीकुरुराज भीष्मसित यो * भागेर जाला कहाँ ।
पक्रौं हामिहरू मिलेर सबले * यो पार्थलाई यहाँ ॥४२॥

श्री दुर्योधनको कुरा सुकिसकी * श्री भीष्मजीले भने ।
पैह्ले बुद्धि कहाँ थियो र अहिले * गर्छौं कुरा पक्रने ॥
मारा वीरहरू अवी समरमा * मूर्छा परेका घरि ।
मारेनन् अघि नै बच्यौं सब जना * यिन्को दयाले गरी ॥४३॥
गर्दैनन कहिले अधर्म यिनिले * त्रैलोक्य पाए पनि ।
गर्दा पाल्न धर्मको रण जिती * फर्कैर जान्छन् यिनी ॥
जाऊ वीर तिमी फिरेर घरमा * सेना बचेका लिई ।
जान्छन् मत्स्यपुरी धनञ्जय जिती* संग्राम खुशी भई ।४४॥
शिक्षा भीष्मजिको सुने हित हुने * आफ्नू र दुर्योधन ।
बोलेनन् मुखले तथापि मनले * राजी भए फर्कन ॥
त्यै वेला रथबाट वलि नजिकै * आएर श्री अर्जुन ।
ढोगे भीष्म र द्रोणका चरणमा * आनन्द मानीकन ॥४५॥
द्रौणी औ कृपजी तथा अरु पनी * जो मान्य तिन्का थिए ।
तिन्को उत्तम बाणले चरणमा * हानेर ढोगी दिए ।
काटेथे कुरुराजको मुकुट नै * छाडेर यौटा शर ।
मागे कौरव वीरका सँग बिदा * जान्छु भनी सादर ॥४६॥
आई त्यो रथमा बसेपछि भने * हाँसेर हे उत्तर !
हाम्रो जीत भयो बढाउ रथ यो * फर्केर जाऊँ घर ॥
हाँकेथे रथलाइ मत्स्य-सुतले * आज्ञा सुनी पार्थको ।
श्री दुर्योधनजी ससैनिक फिरे * इच्छा पुगी युद्धको ॥४७॥
हेरे अद्भुत युद्ध औ विजयको * देख्दा ठुलो योग्यता ।
आशीर्वाद दिई गए घरमहाँ * फर्की सबै देवता ॥
भागेका रणबाट सैनिक कती * वन्मा लुकेका थिए ।
निस्की त्यो वनबाट श्री विजयका* सामू खडा भै गए ॥४८॥

लागे भन्न सबै डराइ मनमा * दुर्धर्ष हे अर्जुन !
आज्ञा गर्नुहवस् प्रसन्न मनले * गछौं सबै पालन ॥
हाम्रो प्राण बचाइबक्सनुहवस् * हे वीर ! रक्षा गरी ।
तिन्को बात सुनी सकी विजयले * भन्दा भए त्यै घरी ४९॥
दुःखी दीन दरिद्र दुर्बल बुढा * जो हार्दछन् सैनिक ।
मैले मार्दिनँ, पर्छ जो शरणमा * वा युद्धमा बालक ॥
मेरो क्यै तिमिहेरुले मन महाँ * पर्दैन मान्नू डर ।
दीएँ आज बिदा प्रसन्न मनले * जाओ खुशी मै घर ॥५०॥
आज्ञा अर्जुनको सुनेर सबले * आशीष धेरै दिई ।
आफाफ्ना घरमा गए तिनिहरू * अत्यन्त खुशी भई ॥
त्याहाँबाट हिंडेपछी खुशि भई * भन्दा भए अर्जुन ।
ऐले केहि नभन्नु उत्तर, तिमी * राजाकहाँ गैकन ॥५१॥
सल्लाहा गरुँला पछी म भनुँला * मौका परेका घरी ।
चिन्हेछन् जब वीर पाण्डव भनी * खूशी हुनन् बेसरी ॥
मैले नै कुरुवीरलाइ रणमा * ल्याएँ जिती गोधन ।
भन्नू भूपतिको गई हजुरमा * शंका नमानीकन ॥५२॥
भन्छन् उत्तर—काम जो हजुरले * गर्नू भयो यो घरी ।
मेरै हो पुरुषार्थ यो समरको * भन्नू त्यहाँ के गरी ॥
जैले भन्नु भनी हुकुम् हजुरको * होला म सोही दिन ।
भन्नेछु सबको अगाड़ि घरमै * छन् पाण्डुका नन्दन ॥५३॥
गर्थे राजकुमार बात यसरी * श्री पार्थको आदर ।
रोकेथे रथलाइ फेरि शमिको * त्यै वृक्षका मन्तिर ॥
छाड़ी त्यो रथको ध्वजा कपि-पती* जाँदा भए त्यै घरी ।
राखे शस्त्रहरू सबै विजयले * बाँधेर पक्का गरी ॥५४॥

पेह्री वस्त्र सबै नपुंसक सरी * आफू बनी सारथी ।
राखे राजकुमारलाइ रथमा * तिन्ले बनाई रथी ॥
ल्याई त्यो रथलाइ मत्स्य-पुरिको * बाहिर केही पर ।
भन्छन् अर्जुन वीर उत्तर ! बसौं * विश्रामका खातिर ॥५५॥
घोड़ालाइ पिलाउनू जल यहीं * मारौं थकाई अनि ।
हाँकौंला अपराह्नमा रथ छिटो * हामीहरूले पनि ॥
हाम्रो जीत भयो भनेर पुरमा * ग्वाला पठाऊँ बरू ।
यो संचार सुनेर स्वागत गरून् * आएर रैतीहरू ॥५६॥
इच्छा अर्जुनको बुझेर पुरमा * ग्वाला पठाई दिए ।
त्यो सम्चार लिएर मत्स्यपुरमा * ग्वाला दगुर्दै गए ॥
केही बेर अघी त्रिगर्तसितको * संग्राम ठूलो जिती ।
आएथे घरमा विराट नृपती * आनन्द मानी अति ॥५७॥
ल्याए गोधन भूपले नगरमा * आफ्नू फिराई जब ।
त्यो वेला पुरमा ठुलो विजयको * चल्दै थियो उत्सव ॥
सोधेथे घरमा नदेखि नृपले * काहाँ गए उत्तर ।
स्वास्नीमानिस जो थिए महलमा * तिन्ले भने सादर ॥५८॥
आई कौरव वीरले लगिदिए * संपूर्ण गाई हरि ।
त्यो सम्चार सुनेर उत्तर भए * क्रोधित निकै बेसरी ॥
आँटे जान तथापि सारथि कुनै * राम्रो नमिल्दा यहाँ ।
साथी एक बृहन्नला लिइ गए * संग्राम भूमीमहाँ ॥५९॥
यस्ता स्त्रीहरूको कुरा सुनिसकी * चिन्तित भई भूपति ।
मंत्री वीर तथा सहायकहरू * डाकेर सेनापति ॥
लागे भन्न—त्रिगर्तले समरमा * हारे भनेको सुनी ।
लड्छन् कौरवले त्रिगर्त-पतिको * हो हार हाम्रै भनी ॥६०॥

हाम्रा पैदल औ रथी, गजपती * सेनाहरू छन् जती ।
मारालाइ पठाउ झट्ट तिमिले * बाँकी नराखी रती ॥
रक्षा उत्तरको गरून् जतनले * संग्राम भूमी महाँ ।
बाँचेको पनी त्यो छ छैन अहिले * छन् श्रेष्ठ योद्धा त्यहाँ ॥६१॥
त्यस्को सारथि झन् नपुंसक हुँदा * के गर्न सक्ला भन ?
त्यस्ता षड्रथिको अगाडि रणमा * आत्तिन्छ मेरो मन ॥
तिन्को तर्क-वितर्क धर्म-सुतले * सारा सुनेथे जब ।
लागे भन्न बुझाइ ताप मनमा * पर्दैन मान्नू अब ॥६२॥
तिन्को साथमहाँ नपुंसक भए * श्री इन्द्र आए पनि ।
जित्छन् कौरव वीरलाइ सहजै * साहाय पाई तिनी ॥
यस्तै बात हुँदै थियो ति दुइको * आएर ग्वाला त्यहाँ ।
हाम्रो जीत भयो भनी कहिदिए * संग्राम भूमीमहाँ ॥६३॥
त्यो संवाद सुनी भने नृपतिले * हे श्रेष्ठ सेनापति !
योद्धा उत्तर औ नपुंसक दुवै * आए लडाईं जिती ॥
गर्दै स्वागत ल्याउनू र पुरमा * गर्नू ठुलो उत्सव ।
आज्ञा पालन भूपको गरिदिए * सेनापतीले सब ॥६४॥

युधिष्ठिरलाई विराटले पासाले हान्नु :—

हे राजन् ! सहसा उपस्थित भयो * मौका खुशीको जब ।
जुवा खेल्दछु कंकका सँगमहाँ * ल्याऊ त्रिपासा अब ॥
सेरन्ध्रीकन यो विराट नृपले * आज्ञा दिएको सुनी ।
लागे भन्न बुझाइ धर्म - सुतले * जूवा नखेल्नू भनी ॥६५॥
ठुलो हर्ष हुँदा विपत्ति खनिंदा * जूवा नखेल्नू भनी ।
भन्छन् विज्ञहरू र खेल्नु कसरी * मैले जुवाड़े बनी ॥

हे राजन् ! अघि पाँच पाण्डवहरू * श्री इन्द्र जस्ता थिए ।
जूवामा धन-राज्य, भाइ र प्रिया * सम्पूर्ण हारीदिए ॥६६॥
सोही कारण भन्दछु हजुरले * त्यस्को बुझी दुर्गुण ।
जूवा त्यागिदिनू सदा उचित हो * शंका नमानी कन ॥
धेरै यै रितले भने तर ठुलो * जिद्दी गरेथे जब ।
जूवा खेल्न बसे भई विवश ती * थर्की फिंजाई तब ॥६७॥
खेल्दामा पनि भूपती घरि-घरी * भन्थे खुशी भैकन ।
छोराले रणमा जितेर घरमा * ल्यायो सबै गो-धन ॥
व्यर्थै उत्तरको बढाइँ नृपले * धेरै गरेको सुनी ।
भन्छन् भूपतिलाइ धर्म - सुतले * केही नजान्ने बनी ॥६८॥
हे राजेन्द्र ! बृहन्नला सँगमहाँ * तिनूको हुनाले गरी ।
आए उत्तरजी भएर विजयी * संग्राममा यो घरी ॥
यस्ता बात सुनी विराट नृपले * भन्दा भए झोंक्किई ।
हे ब्रह्मन् ! किन गर्दछौ तिमि कुरा * अत्यन्त ठुलो भई ॥६९॥
पारी उत्तरलाइ 'क्लीब' अपमान् * मेरो गरेको किन ।
तिम्रो यो अपराध खप्न मनले * आँटे पनि सक्तिनँ ॥
माफी दिन्छु सखा बुझेर अहिले * हो दोष तिम्रो भनी ।
इच्छा बाँच्न भए नभन्नु तिमिले * आँटेर कैल्हे पनि ॥७०॥
बोल्ले धर्मकुमार फेरि नृपले * शेखी गरेको सुनी ।
जस्को सारथि 'क्लीब' छन् समरमा * ती हार्दथे के भनी ॥
योद्धा कौरवको म के गरुँ कुरा * श्री इन्द्र आए पनि ।
साथी 'क्लीब' भए अवश्य रणमा * जित्छन् खुशीले तिनी॥७१
यस्ता बात सुनी युधिष्ठिरजिको * क्रोधित् भई भूपले ।
पासा हातमहाँ लिएर सहसा * हानीदिए वेगले ॥

लाग्यो वेमरि नाकमा र हुन गो * घाऊ त्यही चोटले ।
नाथ्रो फुट्‌न गई वग्यो रगतको * धारा निकै वेगले ॥७२॥



राजा विराटले युधिष्ठिरलाई पासाले हानेको

थापे हातमहाँ युधिष्ठिरजिले * भैंमा नपर्नें गरी ।
आँट्यो खस्न जमीनमा रगत त्यो * भै अञ्जलीमा भरी ॥
हेरे धर्म - कुमारले मुखमहाँ * श्री द्रौपदीको जब ।
ल्याइन् पात्र बुझेर भाव पतिको * त्यो रक्त थापिन् सब ॥७३
ल्याए उत्तरलाइ त्यै वखतमा * मानीस धेरै गई ।
आए भेट्‌न भनी पितासँग तिनी * अत्यन्त खुशी भई ॥
त्यो सम्चार भन्यो गएर चरले * राजा कहाँ सादर ।
आज्ञा भूपतिले दिए अब छिटै * आउन् यहाँ उत्तर ॥७४॥
लाग्यो जान फिरेर दूत नृपको * आज्ञा सुनी सादर ।
भन्छन् त्यो चरलाइ धर्म-सुतले * डाकेर आफू तिर ॥

आउन् राजकुमार मत्रा अहिले * भूपालका सामुमा ।
रोकी राख्नु बृहन्नलाकन तिमी * क्यै बेर त्यै द्वारमा ॥७५
धोई साफ हुने सबै रगत यो * वेला विचारी कन ।
ल्याऊ भित्र बृहन्नलाकन तिमी * डाकेर हे सज्जन !
मेरो रक्त यहाँ कुनै तरहले * आएर देखे भने ।
सारा राज्य हुनेछ नाश नृपको * छन् व्यर्थमा मारिने ॥७६
यस्तो बात सुनी युधिष्ठिरजिको * बाहीर गैगो चर ।
रोक्यो अर्जुनलाइ विज्ञ चरले * आए त्यहाँ उत्तर ॥
पैहले उत्तरले पिताकन गई * ढोगे झुकाई शिर ।
जोरी हात गरे प्रणाम खुशिले * श्री कङ्कको आदर ॥७७
दुःखी भैकन द्रौपदी मनमनै * पानी लिई हातमा ।
धुन्थिन् रक्त बसेर धर्म-सुतको * धेरै थियो देहमा ॥
देखे उत्तरले युधिष्ठिरजिको * घाऊ ठूलो नाकमा ।
सोधे भूपतिलाइ रक्त अहिले * देख्छु म जो पात्रमा ॥७८
आई भित्र कुटेछ कुन् अधमले * यस्तो गऱ्यो दुष्टता ।
कस्ले रक्त बगाउने यि द्विजको * गर्दो भयो धृष्टता ॥
छोराको सुनि बात मत्स्यपतिले * भन्दा भए झोक्किई ।
यस्ले बात गऱ्यो बढी अनि कुटें * मैले त्रिपासा लिई ॥७९॥
राजाको सुनि यो कुरा मनमहाँ * लागी कुशंका डर ।
बोले उत्तर काम यो हुन गयो * साह्रै नजाती तर ॥
माफी माग्नुहवस् समूह कुल यो * ढल्नै नपाई कन ।
राजाको बुझि चित्त सादर भने * माफी दिनोस् ब्राह्मण॥८०
बोले धर्मकुमार माफ पहिल्यै * मैले दिएँ भूपति !
गिर्थ्यो रक्त जमीनमा यदि भने * हुन्थ्यो हजुरको खति ॥

मागि माफ भयो युधिष्ठिरजिको * त्यो रक्त धोई कन ।
मागी पैह्लि लतारि केश गज झैं * आए त्यहाँ अर्जुन ॥८१॥
गजाललाइ र कंकलाइ तिनिले * ढोगे झुकाई शिर ।
केही बेर पछी बसे नृपतिको * आज्ञा लिई क्यै पर ॥
छोरालाइ भने सहर्ष नृपले * पाई तिमी झैं सुत ।
आजै वंश भएछ उज्ज्वल भनी * विश्वास मान्छु म त ॥८२
एकै फल्ट हजार बाण धनुमा * राखेर जुन् कर्णले ।
मार्छन् जत्रु हजार क्रोधित हुँदा * संग्राममा वेगले ।
जाँदैनन् कहिले भई विफल ती * हज्जार तीखा शर ।
तिन्का साथ लड्यौ कसोरि तिमिले * हे वीर वर्णन् गर ॥८३॥
जोड़ी छैन कुनै धनुर्धरमहाँ * जुन् भीष्मको लोकमा ।
तिन्लाई कसरी जित्यौ भन तिमी * एक्लै थियौ युद्धमा ॥
सारा अन्धक वृष्णिको र कुरुको * विख्यात छन् जो गुरु ।
द्रोणाचार्य समान छैन भवमा * प्रख्यात योद्धा अरु ॥८४
तिन्को श्रेष्ठ प्रहारलाइ रणमा * रोकी लियौ के गरी ।
बाबू उत्तर ! त्यो बताउ अहिले * वर्णन् गरी राम्ररी ॥
द्रौणी औ कृपजी समान भवमा * पाइन्न योद्धा अरु ।
तिन्को तारिफ गर्दछन् समरका * विख्यात योद्धाहरु ॥८५॥
त्यस्ता ती दुइ वीरलाइ कसरी * ल्यायौ जिती गोधन ।
सुन्ने उत्सुकता बढ्यो मनमहाँ * हे वीर ! चाँडो भन ॥
जुन् दुर्योधनका तिखा शरहरु * पार्छन् धुलो पर्वत ।
तिम्रो युद्ध भएछ कुन् किसिमले * ती श्रेष्ठ योद्धासित ॥८६
सारा बात बताउ ! उत्तर तिमी * मेरा अगाड़ी महाँ ।
सार्है खुशि भएँ म गो-धन सबै * ल्यायौ फिराई यहाँ ॥

यस्तो प्रश्न सुनी विराट नृपको * क्यै लाज मानीकन ।
लागे उत्तर भन्न वर्णन गरी * साम्‍मू थिए अर्जुन ॥८७॥
बाबा ! कौरवलाइ ह्वैन रणमा * मैले जितेको पनि ।
देख्दैमा म त भाग्दथें डर गरी * विक्षिप्त जस्तो बनी ॥
आए देवकुमार एक सहसा * मेरा अगाड़ी जब ।
राखी त्यै रथमा लगे समरमा * थीए जहाँ कौरव ॥८८॥
एक्लै देवकुमारले शरहरू * छाडेर संग्राममा ।
शेखी कौरवको हरे अघि सरी * टीकेन क्वै युद्धमा ॥
भागेका कुरुराजलाइ तिनिले * देख्दा लडाईं महाँ ।
थाले भन्न गएर वीर ! यसरी * इच्छा छ जाने कहाँ॥८९
पुग्नेछौ तिमि हस्तिनापुर कुनै * युक्ती लगाई, तर ।
बाँच्तैनौ बरु फर्क साहस गरी * संग्राम भूमी तिर ॥
बाँचे भोग छँदैछ क्यै गरि मरे * बस्नू गई स्वर्गमा ।
ऐहे भागि कलङ्क लाउनु बृथा * ठान्छ ठुलो वंशमा ॥९०
फर्के देवकुमारको सुनि कुरा * तत्काल दुर्योधन ।
बर्साई हतियार खूब रणमा * थाल्दा भए गर्जन ॥
आएथे तब पार्श्व-रक्षकहरू * तिन्का भएका जति ।
तिन्को देवकुमारले समरमा * पारे ठुलो दुर्गति ॥९१॥
लागें काम्न डराउँदै म रणको * देख्दा नराम्रो स्थिति ।
दिन्थे धैर्य मलाइ देव-सुतले * धेरै कती हो कति ॥
मूर्च्छा कौरव वीरलाइ रणमा * पारी दिएथे जब ।
खोसेथें अनि उत्तरीय पगरी * योद्धाहरूको सब ॥९२॥
छोराको सुनि बात मत्स्य-पतिले * सोधे खुशी भैकन ।
बाबू ! देवकुमार छन् अब कहाँ * वा आउँदै छन् भन ॥

पाए देख्न यहाँ म देव-सुतको * गर्ने थिएँ पूजन ।
रक्षा गर्नुहवस् भनी विभव यो * गर्थें सबै अर्पण ॥९३॥
लागे राजकुमार भन्न नृपले * आज्ञा गरेको सुनी ।
त्यो संग्राममहाँ भएर विजयी * फर्क्यौं र हामी पनि ।
भेट्नेछु दिन तीनमा नगरमै * भन्ने प्रतिज्ञा गरी ।
अन्तर्धान भएर देव-सुत ती * जाँदा भए त्यै घरी ॥९४
गर्दा उत्तरले कुरा घरि घरी * संकेत् दिए तापनि ।
शंका भूपतिको परेन मनमा * यी पार्थ नै हुन् भनी ॥
ल्याएथे अघि उत्तरीय पगरी * राजहरूको जति ।
अर्जुनले लगि उत्तराकन दिए * आनन्द मानी अति ॥९५

राजा विराटका अगाडि पाण्डवहरू प्रकट हुनु :—

राजन् ! तीन बिते जसै दिनहरू * पाँचै जना पाण्डव ।
सल्लाहा सबले गरे प्रकट ह्वौं * हामीहरू लौ अब ॥
इच्छा राजकुमारको पनि बुझी * राम्रो र तेस्रो दिन ।
राजा झैं पहिरेर स्वच्छ कपड़ा * सम्पूर्ण आभूषण ॥९६॥
पाँचै भाइ हिंडेर मत्त गज झैं * दर्बारमा गैकन ।
राखे धर्म-कुमारलाई नृपले * बस्ने दिई आसन ॥
चारै भाइ बसे वरीपरि बसिन् * श्री द्रौपदी माझमा ।
केही बेरपछी विराट नृपती * आए त्यही स्थानमा ॥९७
बल्दो अग्निसमान पाण्डवहरू * देखे बसेका जब ।
हेरे छक्क परी महेन्द्रसरिका * शोभित थिए ती सब ॥
केही बेर गरी विचार मनमा * तिन्का अगाड़ी गई ।
लागे भन्न गरी अनादर बृथा * अत्यन्त क्रोधित् भई ॥९८

के इच्छा मनमा लिएर तनमा * पैह्री लुगा भूषण ।
यो राजोचित श्रेष्ठ आसनमहाँ * आई बसेको भन ॥
दुःखी विप्र भनी विचारि पदमा * राखें खुशीले तर ।
यो सिंहासनमा बस्यौ अलिकती * लज्जा नमानी डर ॥९९
शेखीयुक्त कुरा विराट नृपको * त्यस्तो सुनी अर्जुन ।
लागे भन्न बुझाई कारणहरू * सानन्द हाँसी कन ॥
यो सिंहासनको म के गरुँ कुरा * श्री इन्द्रले स्वर्गमा ।
जस्लाई दिइ अर्ध आसन स्वयं * बस्छन् खुशी साथमा१००
जो छन् ब्राह्मणभक्त, शास्त्रहरूका * ज्ञाता तथा धार्मिक ।
गर्नें पालन धर्मको र व्रतको * त्यागी, प्रजा - पालक ।
जस्को कीर्ति ठुलो छ लोकभरिमा * जो छन् सबैका प्रिय ।
अर्काको उपकार योग्य रितले * जो गर्दछन् निर्भय ॥१॥
डाक्नू हुन्छ हजुर कंक भनि जुन् * सर्वज्ञलाई यहाँ ।
ख्याती प्राप्त हुने युधिष्ठिर भनी * जानीलिनोस् मन्महाँ ॥
यिन्को सादर गर्दथे कुरुहरू * सेवा तथा चाकरी ।
लिन्थे भूपहरू जिती कर यिनै * संपूर्ण पृथ्वीभरी ॥२॥
बूढा, पङ्गु, अनाथ, अन्धहरूको * गर्थे यिनी पालन ।
यिन्का कीर्तिहरू सकिन्न कहिले * गर्दै गए वर्णन ॥
ढाक्छन् जुन् रितले सफा किरणले* श्री सूर्य - नारायण ।
ढाकेको छ त्यसै गरी सब दिशा * सत्कीर्ति फैलीकन ॥३॥
यिन्का सद्गुणको म वर्णन गरी * सिद्ध्याउनै सक्तिनँ ।
यो सिंहासनमाथि बस्न नहुने * यिन्ले, छ के कारण ॥
धेरै यै रितले युधिष्ठिरजिको * वर्णन् गरेको सुनी ।
सोधे अर्जुनलाइ धर्मसुत हुन् * भन्ने पत्याए अनि ॥४॥

यिन्का भाइहरू कतातिर गए * छन् द्रौपदीजी कहाँ ।
जुवामा सब राज्य हारि पहिले * सुन्थें गए वन्महाँ ॥
धेरै काल भयो सुनिन्न अघि भैं * सम्चार तिन्को अब ।
बोले अर्जुन भूपको सुनि कुरा * हेतू बताई सब ॥५॥
जो छन् वल्लभ नामका हजुरको * भान्से बनेका यहाँ ।
मार्छन् सिंह गजेन्द्रलाइ बलले * जुन् वीरले छिन्महाँ ॥
जोड़ी भेट्न सकिन्न जुन् पुरुषको* खोजी गरे तापनि ।
साम्ने छन् चिन्हिबक्सियोसहजुरले* हुन् भीम योद्धा यिनी ॥६
स्वामी गो-धनका र अश्वहरूका * छन् जो दुवै सज्जन ।
बस्ने धर्म-कुमारका वरिपरी * हुन् माद्रिका नन्दन ॥
जस्को शील-स्वभावको र गुणको * सौन्दर्यको वर्णन ।
गर्छन् मुख्य पतिव्रता भनी सबै * संसारका सज्जन ॥७॥
जस्का निम्ति समस्त कीचक मरे * योद्धा भए तापनि ।
सैरन्ध्रीकन जान्नुहोस् हजुरले * हुन् द्रौपदीजी भनी ॥
मेरो नाम पनी प्रसंगवशले * होला सुनेको कहीं ।
मै हूँ अर्जुन चिन्नुहोस् हजुरले * साम्ने खड़ा छु यहीं ॥८॥
जस्ता रित्सित गर्भवास शिशुले * गर्छन् त्यही चालले ।
हामी गुप्त भई बस्यौं हजुरको * दर्बारमा प्रेमले ॥
येती बात भनीसकीकन बसे * स्वस्थानमा अर्जुन ।
भन्छन् उत्तर पाँच भाइहरूको * सौन्दर्य, कीर्ति, गुण ॥९॥
जस्को वर्ण छ गौर शुद्ध सुन भैं * आँखामहाँ लालिमा ।
लामा नाक, विशाल वक्ष, बलमा * विख्यात संसारमा ॥
यो सिंहासनमा महेन्द्रसरिका * छन् जो बसेका यहाँ ।
जेठा पाण्डव हुन् युधिष्ठिर यिनै * विख्यात पृथ्वीमहाँ ॥१०॥

तिन्का दक्षिणतर्फ दिग्गजसरी * छन् वीर जो यो घरी ।
लामा बाहु, विशाल काँध बलमा * विख्यात पृथ्वीभरी ॥
जोड़ी जुन् बलवानको जगतमा * पाइन्न खोजे पनि ।
राम्रो चिन्नुहवस् पिता हजुरले * हुन् भीमयोद्धा भनी ॥११॥
जस्को वर्ण छ श्याम जोतरुण छन् * हे भूप ! बायाँ तिर ।
ख्याती प्राप्त छ जो धनुर्धर भनी * संग्रामको खातिर ॥
लामा बाहु विशाल, नेत्र सुन झैं * कान्ती हुने देहमा ।
योद्धा अर्जुन हुन् यिनै नरपते ! * विख्यात संसारमा ॥१२॥
जो छन् यी दुइ वीर धर्मसुतको * बायाँ र दायाँतिर ।
साक्षात् इन्द्र-उपेन्द्र झैं छ तनको * सौन्दर्य झन् सुन्दर ॥
योद्धा श्री सहदेव औ नकुल हुन् * यी माद्रिका नन्दन ।
गर्छन् रूप र शीलका यी दुइको * संसारले वर्णन ॥१३॥
खानी शील-स्वभावकी र गुणकी * छन् रूपकी जो धनी ।
गर्नै पालन धर्म, सत्य, व्रतको * कर्तव्य ठूलो भनी ॥
जस्को कान्ति छसूर्य भैंचहकिलो * शोभा छ लक्ष्मीसरी ।
सैरन्ध्रीकन जान्नुहोस् हजुरले * हुन् द्रौपदी सुन्दरी ॥१४॥
यौटा देवकुमारको अघि कुरा * मैले भनेथें जति ।
साम्ने छन् उहि देव-पुत्र अहिले * चिन्नूहवस् भूपति !
जित्ने कौरव बीरलाइ रणमा * हुन् वीर यी अर्जुन ।
यिन्ले धैर्य दिए मलाइ बहुतै * संग्राममा गैकन ॥१५॥
मेरो प्राण बचाउने समरमा * फर्काउने गो-धन ।
योद्धा अर्जुनको प्रसन्न मनले * हामी गरौं पूजन ॥
भीष्म द्रोण तथा सुयोधन ठूला* योद्धा अरू जो थिए ।
सारालाइ लडाइँमा विजयले * एक्लै भगाई दिए ॥१६॥

उत्तरा-अभिमन्यु विवाह

छोराको सुनि बात मत्स्य-पतिले * भन्दा भए उत्तर !
गर्ने पूजन पाण्डुका तनयको * मौका छ यो सुन्दर ॥
दिन्छु अर्जुनलाई आदर गरी * श्री उत्तरा सुन्दरी ।
के भन्छौ तिमिले बताउ अहिले * सल्लाह पक्का गरी ॥१७॥
राजाको सुनि बात हर्षित भई * भन्दा भए उत्तर ।
मेरो चित्त बुझ्यो पिता हजुरले * आज्ञा भयो सुन्दर ॥
बोले भूपति पाण्डुका तनयले * हाम्रो सुरक्षा गरे ।
योद्धा कौरवको त्रिगर्तहरुको * सम्पूर्ण शेखी हरे ॥१८॥
वैरीको वशमा परी म जसरी * आत्तीरहेको थिएँ ।
रक्षा पाण्डवले गरी समरमा * बाँचेर फिर्दो भएँ ॥
योद्धा कौरवलाइ अर्जुन गई * एक्लै लखेटी दिए ।
हाम्रो राज्य सुकीर्ति वैभव सबै * यिन्ले बढाई लिए ॥१९॥
छोराको संगमा कुरा यति गरी * फर्केर सोही घरी ।
पौंची धर्म-कुमारका हजुरमा * बिन्ती गरे राम्ररी ॥
राजन् ! भाग्य ठुलो हुँदा हजुरको * पायौं यहाँ दर्शन ।
गर्छु राज्य र संपती चरणमा * मैले स्वयं अर्पण ॥२०॥
काटी त्यो वनवासका दिन तथा * यो गुप्तवासै पनि ।
पार्नु भो प्रण पूर्ण हे नरपते ! * हो धर्म आफ्नू भनी ॥
छोरी अर्जुनलाइ दिन्छु अहिले * आज्ञा हजुर्ले दिए ।
हाम्रो प्रेम बढेर जान्छ यसरी * सम्बन्ध यो बाँधिए ॥२१॥
राजाको सुनि बात धर्म-सुतले * फर्केर भाई तिर ।
हेर्नू भो बुझि भाव श्री विजयले * बिन्ती गरे सादर ॥

छोरालाई दिनूभए हजुरले * श्री उत्तरा सुन्दरी ।
गर्नेछु म विवाह हामिहरुको * सम्बन्ध बढ्ने गरी ॥२२॥
इच्छा अर्जुनको बुझी नृपतिले * फेरी भने प्रेमले ।
गर्नू हुन्न हजूर मेरि दुहिता * स्वीकार के हेतुले ?
हाँस्तै अर्जुनले भने नरपति ! * श्री उत्तराले पनि ॥
गर्थिन् स्नेह गुरू भनेर म पनी * तिन्लाई शिष्या भनी॥२३
शिक्षा गान-बजानको दिइ बसें * क्यै काल साथै महाँ ।
मैले आज बिहे तिनीसित गरे * होला नराम्रो यहाँ ।
मान्दैछु अपवादको डर ठुलो * मैले त्यसै कारण ।
छोरालाइ दिनूहवस् हजुरले * शङ्का नमानीकन ॥२४
त्यस्को हो अभिमन्यु नाम नृपते ! * भानीज हो कृष्णको ।
इच्छा पूर्ण हुनेछ देखिकन लौ * सौन्दर्य त्यो वीरको ॥
त्यस्लाइ दिनुहोस् प्रसन्न मनले * श्री उत्तरा सुन्दरी ।
पाई पुत्रवधू सुयोग्य म पनी * हुन्छु खुशी बेसरी ॥२५॥
राजाले सुनि धर्मसम्मत कुरा * * भन्छन् प्रतिज्ञा गरो ।
मैले श्री अभिमन्युजीकन दिए * यी उत्तरा सुन्दरी ॥
राम्रो एक पुरी उपप्लव थियो * त्यै स्थानदेखी पर ।
त्याहाँ गैकन पाँच पाण्डव बसे * तैयार पारी घर ॥२६॥
भेजे पत्र दिएर धर्म-सुतले * द्वारावतीमा चर ।
डाके बन्धुहरू भए जति सबै * गर्दै ठुलो आदर ।
काशीराज र शैब्य औ द्रुपदजी * सेना लिई साथमा ।
आए अन्धक-वृष्णि-भोज कुलका* श्रीष्कृष्णका साथमा ॥२७

पाल्नूमो बलरामजी अरु स्वयं * आए त्यहाँ यादव ।
पाई दर्शन कृष्णको खुशि भए * पाँचै जना पाण्डव ॥



उत्तरा अभिमन्यु विवाह

छोरा द्रौपदिका ससैनिक त्यहा। * आए खुशी भै अति ।
ल्याए श्री अभिमन्युलाइ रथमा * आइन् सुभद्रा सती ॥२८
दासी-दास, सुरत्न वैभवहरू * जे चाहिइन्थ्यो जहाँ ।
सारा पूर्ण गराइ बक्सनुभयो * श्रीकृष्णले छिन्महाँ ॥
राम्रो लग्न गरी विचार सुनको * वेदी बनाई लिए ।
आफ्ना वैदिक विप्र प्रोहितकहाँ * निम्ता पठाई दिए ॥२९
ल्याए मण्डपमा वधू-वर दुवै * -लाई सजाई कन ।
राजाले कुलदेवको खुशि भई * गर्दा भए पूजन ॥
कन्यादान गरेर वेद विधिले * पूजा गरी राम्ररी ।
सुम्पे श्री अभिमन्युका करमहाँ * श्री उत्तरा सुन्दरी ॥३०॥

बाजा मङ्गलका बजे थरि थरी * गर्दै गए उत्सव ।
हेर्थे दर्शक, पाउमा परिपरी * घेरा लगाई सब ।
सुम्पे सात हजार अश्व बढिया * छोरी जुवाइँ कन ।
नाना रत्न, सुवर्ण भूषण दिए * -थे दाइजोमा धन ॥३१॥
सारा खुशि थिए प्रजा पुरभरी * चल्दो भयो उत्सव ।
यो सम्बन्ध हुँदा विराटसंग झन् * खुशी थिए पाण्डव ॥
जस्ले सुन्दछ पाण्डुका तनयको * संकष्टको यो कथा ।
त्यस्का कष्ट तथा विपत्ति, मनको* नाशिन्छ सारा व्यथा ॥३२

॥ महाभारत विराटपर्व समाप्त ॥



# महाभारत-उद्योगपर्व

## प्रारम्भः

पाण्डवको राज्य फर्काउने विषयमा मन्त्रणा—

हे राजन् ! जब गुप्तवास सकियो * ती पाण्डुका पुत्रको ।
योटा श्रेष्ठ सभा गरे खुशि भई * इच्छा बुझी कृष्णको ॥
त्यस्मा सृञ्जन, वृष्णि यादव तथा * पाञ्चालका भूपति ।
आई आसनमा बसे वरिपरी * आनन्द मान्दै अति ॥१
मौका योग्य बुझेर पाण्डु-सुतको * कल्याणका खातिर ।
लागे भन्न उठी जुरुक्क सबका * मालीक दामोदर ॥
हे राजाहरुहो ! यि पाण्डु-सुतको * सर्वस्व जुन् चालले ।
पापी कौरवले हरीकन लिए * त्यो द्यूतको खेलले ॥२॥
जाहेरै छ तपाईंलाइ वनको * सङ्कष्ट जस्तो दिए ।
आफ्नू त्यो प्रण पूर्ण पाण्डु-सुतले* सारा गराई लिए ॥
फिर्ता राज्य दिने कबोल पहिल्यै * तिन्को हुनाले गरी ।
त्यो सारा दिनुपर्दथ्यो स्वजन हुन् * भन्ने बुझी राम्ररी ॥३॥
त्यस्को ती कुरुहेरुले अझ पनी * ख्यालै नराख्ता अब ।
माग्छन् संमति के गरौं भनि यहाँ* पाँचै जना पाण्डव ॥
सल्लाहा सबले मिली दिनुहवस् * यिन्को चिताई हित
आज्ञा यो बलरामले सुनिसकी * श्रीकृष्णको त्यो मत ॥४।
जूवाको छल, भेद धर्म-सुतले * जान्दै नजानीकन
ठूलो चूक भयो गईकन त्यहाँ * खेल्नू र हार्नू धन ।

श्री दुर्योधनको प्रताप अहिले * छलो हुनाले गरी ।
तिन्का साथ विरोध गर्नु कसरी* भन्नूहवस् यो घरी ॥५॥
तस्मात् मेल हुने गरी सब कुरा * सम्झाइ यौटा चर ।
चाँडो पाण्डवले पठाउनुपर्‍यो * कल्याणका खातिर ।
यस्तै कौरवतर्फको हित हुने * वार्ता सुनी रामको ।
बोले सात्यकि झट्ट क्रोधित भई * सारा कुरा नीतिको ॥६॥
आज्ञा भो बलरामले जति कुरा * हे भूपहो ! यो घरी
राम्रो भन्न सकिन्न धर्म-सुतको * हेलाँ हुनाले गरी ॥
जूवा खेल्न भनेर खूब कुरुले * जिद्दी गरेथे जब ।
जानी क्षत्रिय-धर्म धर्म-सुतले * खेल्नै परेथ्यो तब ॥७
जूवामा छलले जितेर खलले * सर्वस्व खोसी लिए ।
आफ्नू त्यो प्रण पूर्ण पाण्डु-सुतले * पूरा गराई दिए ॥
पैह्लेको प्रण सम्झि राज्य खुशिले * फिर्ता दिनू पर्दथ्यो ।
पाए राज्य, विवाद पक्ष दुइको * आनन्दले टर्दथ्यो ॥८।
दिन्नन् कौरवले युधिष्ठिरजिको * त्यो राज्य फिर्ता भने ।
तिन्का लड़ेर आफ्नू जति हो * पर्नैछ खोसी लिने ॥
योद्धा सात्यकिले सभाबिच भने * उत्साह बृद्धी गरी ।
आफ्नू सम्मति भूपती द्रुपदले * भन्दा भए त्यै घरी ॥९॥
राजन् ! सात्यकिको समर्थन सबै * मैले पनी गर्दछु ।
राम्रो भन्न सकिन्न श्रीबलजिको * शिक्षा भनी ठान्दछु ॥
देख्दामा व्यवहार दुष्टहरुको * भन्दैछ मेरो मन ।
दिन्नन् कौरवले यि पाण्डु-सुतको * खोसीसकेको धन ॥१०॥
गर्छौं मेल भनी लड़ाइँ नगरी * मागौं भने वैभव ।
गर्नन् बात बढी घमण्ड मनमा * हेलाँ गरी कौरव ॥

तस्मात् लड्नू अवश्य पर्दछ भनी* आफ्ना पठाई चर ।
मागौं मद्दत भूपतीहरूकहाँ * संग्रामका खातिर ॥११॥
हाम्रा दूतहरू गएर पहिले * नै पुग्न पाए भने ।
निम्ता पाइ अगाड़ि भूपहरूले * छन् आइ मद्दत् दिने ।
आफ्नू शक्ति बढाउनाकन यही * चाँडो सुयुक्ति गरौं ॥
आऊ लड्न कि राज्य देउ खलहो* तिन्लाइ हामी भनौं ॥१२
हाम्रो राज्य दिए भने कसल हो * लड्नन् लड़ौंला पनि ।
पापी कौरवलाइ हामि सहजै * छाड़ी दिने के भनी ?
यो सल्लाह सुनीसके द्रुपदको * त्याहाँ सबैले जब ।
राम्रो नीति भनेर सम्मति दिए * सारा सभाले तब ॥१३॥
त्यस्को भार जती सबै द्रुपदको * जिम्मा लगाई कन ।
दाज्यूकासँग पाल्नुभो पुरमहाँ * श्री नन्दका नन्दन ॥
डाकी दूतहरू सबै द्रुपदले * आज्ञा दिए सादर ।
ज्ञानी धार्मिक श्री युधिष्ठिरजिको * कल्याणका खातिर ॥१४
फिर्ता राज्य दिलाउनाकन सबै * आउन् यहाँ भूपति ।
यस्तो उर्दि लिई गए चरहरू * आज्ञा भएको जति ॥
चारैतर्फ ति मित्र-राज्यहरूले * सम्चार पाए जब ।
आए सैन्य लिएर मद्दत गरौं * भन्दै ति राजा सब॥१५
यो संवाद सुनी सुयोधनजिले * आफ्ना पठाई चर ।
डाके भूपहरू अरू जति थिए * साहायका खातिर ॥
पाई कौरवको निमन्त्रण सबै * सेना लिई भूपति ।
आए मद्दत गर्न वीरहरूको * आनन्द मानी अति ॥१६

शल्य-युधिष्ठिर संवाद

पैह्ले पाण्डवको निमन्त्रण मिली * शस्त्रास्त्र सेना लिईं ।
आफ्ना भानिज पाण्डु-पुत्रहरूको * साहाय गर्नें भईं ॥
जान्थे शल्य विराटको नगरमा * सल्लाहका खातिर ।
पापी कौरवले मिलाउन भनी * तिन्को गरे आदर ॥१७॥
बाटोमा जति वास मद्रपतिको * पर्नें भएका थिए ।
ती सारा स्थलमा अगाडि कुरुका* मानिस पुग्दा भए ॥
तम्बू-पात र चाहिने चिजहरू * सारा तयारी गरी ।
सेवा गर्न भनेर चाकर पनी * राखी दिए बेसरी ॥१८॥
होला पाण्डवतर्फको सकल यो * राम्रो व्यवस्था भनी ।
हिंड्थे त्यै स्थलमा बसी दिन-दिनै* श्री शल्य राजा पनि ॥
यौटा वासमहाँ पुगेर बढिया * देखे व्यवस्था जब ।
डाकी मानिस एक शल्य नृपले * सोधे खुशी भै सब॥१९॥
जस्ले स्वागतको तयारि यसरी * मेरो गर्‍यो वासमा ।
त्यस्को पूर्ण गराउँछु म मनको * इच्छा खुशी साथमा ॥
यो आज्ञा नृप शल्यको सुनिसकी * मौका छँ राम्रो भनी ।
श्री दुर्योधनको गई हजुरमा * बिन्ती चढायो अनि ॥२०
पौंचे शल्यकहाँ प्रसन्न मनले * तत्काल दुर्योधन ।
मैंले स्वागत यो गरें हजुरको * भन्दा भए त्यै क्षण ॥
बोले छक्क परेर शल्य नृपती * तिन्ले भनेको सुनी ।
गर्नू भो किन व्यर्थ स्वागत ठुलो * मेरो दयालू बनी ॥२१॥
श्री दुर्योधनले भने विनयले * श्री शल्यलाई त्यहाँ ।
गर्नू पर्छ सहायता हजुरले * मेरो, लड़ाई महाँ ॥

मेरा यो सब सैन्यको हजुर नै * सेनापती बन्नुहोस् ।
जे आज्ञा अहिले भयो अब त्यही * मामा, पुरा गर्नुहोस् ॥२२
तिन्को बात सुनी ठूलो सकसमा * श्री मद्रराजा परे ।
सम्झी आफ्नु कबोल झट्ट मनमा * स्वीकार तिन्ले गरे ।
मेरा निम्ति त पाण्डुपुत्र र तिमी * हौ एकनासे सब ।
गर्नेछु म सहाय जाउ घरमा * शंका नमानी अब ॥२३॥
येती बात भनी ससैनिक बिदा * भानीजलाई दिई ।
राजा शल्य गए युधिष्ठिरकहाँ * क्यै खिन्न जस्ता भई ॥
भेटी सञ्च-बिसञ्च सोधि पहिले * क्यै बेर सोची कन ।
श्री दुर्योधनले जसो गरि छले * त्यस्को गरे वर्णन ॥२४॥
मामाको सुनि बात धर्म-सुतले * बिन्ती गरे सादर ।
हे मामा ! कुरुहेरुले छल गरी * आफ्नू तुल्याए तर ॥
यौटा काम हजुरले गरिदिनु- * पर्नेछ हाम्रो पनि ।
लड्नेछन् जब कर्ण-अर्जुन दुवै * सामू खड़ा भै अनि ॥२५॥
पर्ला हाँक्नु हजूर सारथि बनी * श्री कर्णको त्यो रथ ।
गर्नू तारिफ पार्थको र रिपुको * प्रत्यक्ष तेजो-वध ॥
यस्तो बात सुनी युधिष्ठिरजिको * भन्दा भए शल्यले ।
गर्नेछु म अवश्य काम रणमा * तिम्रो ठुलो युक्तिले ॥२६॥
हे राजन् ! इतिहास यै विषयको * यौटा म भन्छु सुन ।
पाएथे अघि कष्ट बाट जसरी * श्री इन्द्रले उम्कन ॥
तीनोटा शिर विश्वरूप कहिने * त्वष्टा कुलैमा थिए ।
तिन्ले तीन भुवन् गरी तप ठुलो * वशमा गराई लिए ॥२७॥
त्यो देख्दा मनमा डराई बहुतै * इन्द्रत्व लिन्छन् भनी ।
मारे वज्र गरी प्रहार रिसले * श्री इन्द्रजीले अनि ॥

त्वष्टा पुत्र मऱ्यो भनेर मनमा * चिंतित भएका थिए ।
छोरो होम गरेर 'वृत्र' तिनिले * पैदा गराई लिए ॥२८॥
त्यस्ले युद्ध गरेर देवगणमा * हा, हा ! गराई दियो ।
सिङ्‍गै इन्द्रजिलाइ हालि मुखमा * त्यस्ले सलक्कै निल्यो ॥
हाहाकार परी सबै सुरहरू * भागे डराई कन ।
त्यस्का पेटमहाँ बसे दुख सही * श्री इन्द्र केही दिन ॥२९॥
त्यस्ले हाइ गऱ्यो र एक दिन ती* बाहीर निस्की गए ।
योद्धा वृत्र र इन्द्रको अमरले * सन्धी गराई दिए ॥
त्यो वृत्रासुरलाइ सिन्धु-तटमा * देखेर कोही दिन ।
मारे, वज्र गरी प्रहार छलले * श्री इन्द्रले त्यस्कन ॥३०॥



श्री इन्द्रले वृत्रासुरलाई मारेको

धोका एक तपस्विको वध दुई * साह्रै ठुलो पापले ।
चिन्ता पर्न गई हिंडे सुरपती * त्यो पापको तापले ॥

लागेथे तपमा हिमालय पुगी * बाँधेर पद्मासन ।
हाहाकार पऱ्यो सुरेन्द्र नहुँदा * रित्तो भयो आसन ॥३१॥
सारा देवहरू मिली नहुषजी * -लाई बुझाई कन ।
राखे इन्द्र बनाइ स्वर्गपुरिमा * सुम्पेर इन्द्रासन ॥
तिन्ले चौध भुवन् गरी वशमहाँ * गर्दा भए शासन ।
गर्ने भोग सती शचीसँग पनी * तिन्ले गरेथे मन ॥३२॥
संझाए सब देवले नगर यो * हो पाप ठूलो भनी ।
मानेनन् तर त्यो कुरा नहुषले * क्रोधित भए झन् तिनी ॥
ल्याए बिन्तिगरी शचीकन त्यहाँ * तिन्ले भनिन् सादर ।
राजन्! क्यैदिनपर्खनोस्अनिस्वयं * हुन्छू यहाँ हाजिर ॥३३॥
आफ्नू सत्य बचाउनाकन शची * शिक्षा गुरूको लिई ।
लागिन् खोज्न सुरेन्द्रलाइ मनमा * चिन्ता र दुःखी भई ॥
भेटिन् क्यै दिन इन्द्रलाइ दहमा * गर्थे तपस्या बसी ।
बारंबार गरी प्रणाम पदमा * साह्है भइन् ती खुशी ॥३४॥
तिन्ले विन्ति गरिन् सबै नहुषको * इच्छा र आफ्नू स्थिति ।
लागे भन्न बुझाइ इन्द्र मनमा * सन्ताप मानी अति ॥
साध्वी ! भन्नु तिमी गई नहुषजी * -लाई म भन्छू जति ।
तिन्को हुन्छ परेर श्राप ऋषिको * साह्है ठूलो दुर्गति ॥३५॥
मेरो इन्द्रजिको हुँदा अघि बिहा * सप्तर्षि डोले थिए ।
बोकाईकन डोलि ती ऋषिहरू- * लाई त पाल्नू भए ॥
स्वामी मान्छु हजूरलाइ खुशिले * श्री इन्द्र जानीकन ।
तिम्रो बात सुनेर ती नहुषको * होला खुशी झन् मन ॥३६
डोली बोक्न हुकुम दिनन् ऋषिहरू* -लाई तिनिले जब ।
दिन्छन् श्राप अवश्य घोर ऋषिले * देख्दा अनीति सब ॥

त्याहाँबाट गई बृहस्पति कहाँ * बिन्ती चढाई दिनू ।
मेरो पाप हटाउने मख ठुलो * यौटा गराई लिनू ॥३७॥
हे प्यारी ! तिमिले गऱ्यौ यति भने* उद्धार मेरो भई ।
पैह्ले झैं गरि राज्य स्वर्गपुरिमा * बस्नेछु साथै गई ॥
स्वामीको सुनि बात सादर शची * आनन्द मान्दै फिरिन् ।
पत्तो पाइनँ इन्द्रको कहिं पनी * देवादिलाई भनिन् ॥३८॥
त्यो संवाद सुनेर श्री नहुषजी * आनन्द मान्दै गए ।
इन्द्राणीसित भेटि आदर गरी * यो बात भन्दा भए ॥
स्वामी मान मलाई योग्य पनि छु * त्रैलोक्यकी सुन्दरी ।
गर्दैछौ किन यो अनादर वृथा * मेरो तिमी यो घरी ॥३९
यस्तो बात सुनी सकी नहुषको * चिन्ता परे तापनि ।
हाँस्तै बिन्ति गरिन् तथापि डरले * कामीरहीथिन् तिनी ॥
शिक्षा इन्द्रजिले दिए जति सबै * पैह्ले भनिन् राम्ररी ।
डोले सप्तऋषी गरी हजुर लौ *पाल्नोस् भनिन् त्योघरी४०
तिनको बात सुनेर श्री नहुषजी * अत्यन्त खुशी भए ।
जस्तो बात भन्यौ त्यसै गरि छिटै * फर्कन्छु भन्दै गए ॥
सप्तर्षीकन डाकि श्री नहुषले * तत्काल आज्ञा दिए ।
डोलीमाथि बसेपछी ति ऋषिले * बोकेर हिंड्दा भए ॥४१॥
बारंबार छिटो पुऱ्याउन तिमी * भन्थे रिसाई कन ।
हिंड्थे शक्ति पुगे जती ऋषिहरू * क्रोधित हुँदै मनमन ॥
हानी लात भने त्यहाँ नहुषले * चाँडो पुऱ्याऊ जब ।
'गिर्लास् सर्प भएर' श्राप ऋषिले * चाँडै दिएथे तब ॥४२॥
त्यस्तो श्राप परेपछी नहुषजी * गिर्दा भए बेगले ।
कूवामा भइ सर्परूप नृपती * बस्ता भए कष्टले ॥

त्यहाँबाट शची बृहस्पति कहाँ * आनन्द मान्दै गइन् ।
आज्ञा इन्द्रजिको प्रसन्न मनले * सम्पूर्ण विन्ती गरिन् ॥४३



राजा नहुषको पतन :-

तिनको खातिर अश्वमेध गुरुले * ठूलो गराई दिए ।
आउन्, पाप पखालियो अब छिटै* श्री इन्द्र भन्दा भए ॥
धेरै पाप त इन्द्रले तप गरी * नाशी सकेकै थियो ।
बाँकीको पनि अश्वमेध गुरुले * गर्दा सबै नाशियो ॥४४॥
पाएथे समचार आउन भनी * आफ्ना गुरूको जब ।
आए स्वर्गमहाँ प्रसन्न मनले * श्री इन्द्र फर्की तब ॥
पैह्लै झैं गरि राज्य स्वर्गपुरिको * सानन्द गर्दा भए ।
राजन् ! यो इतिहास शल्य नृपले * सारा सुनाई दिए ॥४५॥
यो आख्यान सुनेर कार्य निज जो* मानीसले गर्दछन् ।
सिद्धी पाइ सुरेन्द्र भैं पछि ठुलो * आनन्दमा पर्दछन् ॥

यस्तै बात गरेर मद्रपतिले * मागी बिदा सादर ।
त्याहाँबाट हिंडी ससैनिक गए * फर्की सुयोधन्तिर ॥४६॥

राजा द्रुपदका पुरोहित दूत भएर हस्तिनापुर जानु :—

आए पाण्डव तर्फका नृपहरू * साहायका खातिर ।
ढाके मत्स्यपुरी तथा वरिपरी * सम्पूर्ण चारैतिर ॥
सेनाका पतिले सहित सब थिए * ती सात अक्षौहिणी ।
आफ्फ्ना लिइ शस्त्र-अस्त्र रिसले * गर्जीरहेथे तिनी ॥४७॥
त्यो देखीकन श्री युधिष्ठिरजिको * सन्ताप बढ्दै गयो ।
डाकी प्रोहित विप्र श्री द्रुपदका * तत्काल आज्ञा भयो ॥
हे ब्रह्मन् ! कुरुको र हामिहरुको * देख्दा सबै लक्षण ।
आँटयो क्षत्रिय वंश मासिन भनी * आत्तिन्छ मेरो मन ॥४८
हाम्रो वा सब लोकको हजुरले * कल्याणका खातिर ।
बिन्ती गर्दछु हस्तिनापुर महाँ * जानोस् नमानी डर ॥
भन्नू श्री धृतराष्ट्रजी कन जती * भन्छु म ऐहले यहाँ ।
बारंबार प्रणाम भन्नु पहिले * साष्टाङ्ग पाऊमहाँ ॥४९॥
हाम्रो जुन् रितको थियो प्रण अघि* त्यो द्यूतको खेलमा ।
सम्झी त्यो प्रणलाइ राज्य दिनु नै * पर्थ्यो खुशी साथमा ॥
स्वामी त्यागि परौं अरू शरणमा * कस्को गई भन्नुहोस् ।
हाम्रो राज्य फिराउने सुतहरू * लाई हुकुमबक्सियोस्॥५०
नीतीपूर्वकका कुरा अरु पनी * सारा बुझाई दिए ।
मागी झट्ट बिदा पुरोहित उठी * तत्काल जाँदा भए ॥
ज्ञानी ब्राह्मण हस्तिनापुर पुगी * भेजे जसै हाजिरी ।
डाके श्री धृतराष्ट्रले पनि सभा * -मा मान राम्रो गरी ॥५१

पैहे ब्राह्मणले सबै कुशलको * सम्चार बिन्ती गरी।
इच्छा धर्मकुमारको विनयले * सारा भने राम्ररी॥
फिर्ता राज्य तथा दिए धन सबै * ती पाण्डुका पुत्रको।
गर्दैनन् कहिले पनी उनीहरू * इच्छा वृथा युद्धको ५२॥
नीतीपूर्वकका कुरा अरू पनी * तिन्ले भनेको सुनी।
बोले श्री धृतराष्ट्र चिन्तित हुँदै * क्यै बेर मन्मा गुनी॥
ब्रह्मन् ! पाण्डवको सुनी कुशलको* संवाद खुशी भएँ।
साक्षात् भेट भएसमान मनमा * आनन्द मानी लिएँ॥५३
हे ब्रह्मन् ! जति भन्नुभो हजुरले * हो योग्य सारा तर।
गर्दैछु म प्रयत्न पक्ष दुइको * कल्याणका खातिर॥
यो दुर्योधनले प्रसन्न मनले * ती पाण्डुका पुत्रको।
पर्थ्यो राज्य दिनू, भनाइ तर यो * मान्दैन क्वैऽव्यक्तिको ५४
जूवामा धन राज्य पाण्डु-सुतले * संपूर्ण हारे जब।
त्यो दुर्योधन भन्छ फेरि किन त्यो * फर्काउने लौ अब॥
एक्लैले सबलाइ आफ्नु वशमा * पारी ,सक्यो तापनी।
गर्छ यत्न मिली दिए यिनिहरू * कल्याण होला भनी ५५
त्यस्को चित्त बुझाइ राज्य खुशिले* फिर्ता लिउन् पाण्डव।
यस्मा हामिहरू कसैकन पनी * दोषी नठानुन् अब॥
रूखो यो धृतराष्ट्रबाट द्विजले * पाए जसै उत्तर।
त्याहाँबाट बिदा भईकन गए * फर्कर आफ्नू घर॥५६॥

दुर्योधन र अर्जुनले भगवानसित सहायता माग्नु

त्याएथे गइ हस्तिनापुर महाँ * सम्चार जुन् विप्रले।
त्यो सुन्दा मनमा युधिष्ठिर भए * सन्तप्त झन् शोकले॥

आशा मेल हुने थियो जति अघी * संपूर्ण त्यो गै गयो ।
सारा मुख्य नरेशका संग सभा * तिन्को बसेको थियो ॥५७॥
मल्लाहा लिनुपर्छ कृष्णसित लौ * भन्ने भएथ्यो जब ।
अर्जुन् श्री हरिलाइ ल्याउन गए * द्वारावतीमा तब ॥
माग्छु लौ पहिले सहाय म गई * भन्ने विचारी कन ।
केही सैन्य लिएर द्वारवतिमा * पौंचे ति दुर्योधन ॥५८॥
खोपीमा सुकला थियो प्रभुजिको * आनन्दका साथमा ।
श्री दुर्योधन गै सिह्रानतिरको * बस्ता भए मेचमा ।
पाऊतर्फ खडा भए विनयले * श्री कृष्णको अर्जुन ।
केही बेर बसे त्यहाँ दुइजना * बोल्दै नबोलीकन ॥५९॥



दुर्योधन र अर्जुनले श्री कृष्णसित महायता मागेको:

देख्नू भो हरिले उठेर पहिले * श्री पार्थलाई त्यहाँ ।
श्री दुर्योधनलाइ देखिलिनुभो * तत्काल सामू महाँ ॥

गर्दै आदर ती दुवै सुजनको * सोध्नू भयो कृष्णले ।
पाल्नुभो अहिले बताउनुहवस् * हे वीर ! कुन् कामले ॥६०
यो आज्ञा हरिको सुनेर पहिले * बोले ति दुर्योधन ।
लड्नू पाण्डवका पऱ्यो सँगमहाँ * मैले त्यसै कारण ॥
आएँ माग्न भनेर मद्दत स्वयं * पैह्ले म हे माधव !
एकैनास हजूरका नजरमा * हामी तथा पाण्डव ॥६१
छौं, सम्बन्ध पनी समान मनले * ठान्छु त्यसै कारण ।
पाऊँ योग्य सहायता हजुरको * हे नन्दका नन्दन !
लागे अर्जुन भन्न धर्म-सुतको * आज्ञा हुनाले गरी ।
आएँ माग्न सहायता म पनि त्यै * युद्धार्थ नै हे हरि ! ॥६२
यो बिन्ती दुइ वीरको सुनिसकी * हेर्दै दुर्योधन् तिर ।
नीतीपूर्वक श्री जनार्दनजिले * आज्ञा भयो सादर ॥
देखें अर्जुनलाइ सामु पहिले * मैले उभेका यहाँ ।
कान्छा छन् ति तपाइँदेखि वयमा *जानी लिनोस् मन्महाँ॥६३
तिन्लाई पनि पर्छ मद्दत दिनू * मैले सकेको जति ।
गर्नू पर्छ तपाइँको पनि यहाँ * साहाय हे सद्मति !
हुन्छु त्यो रणमा निरस्त्र नृपते ! * एक्लै म एकातिर ।
मेरा सैनिक लड्दछन् समरमा * सम्पूर्ण अर्कोतिर ॥६४॥
पैह्ले पाल्नुभयो तपाइँ तपनी * कान्छा हुँदा अर्जुन ।
रोज्नेछन् उनिले सहर्ष पहिले * हे वीर ! दुर्योधन !
यो आज्ञा हरिको सुनेर मनमा * क्यै बेर सोची कन ।
रोजी श्री हरिलाइ गद्गद भए * श्रीपाण्डुका नन्दन ॥६५
लड्दैनन् हरि लड्छ फौज रणमा * राम्रो भयो यो भनी ।
मन्मा हर्षित श्री सुयोधन भए * बोल्दै नबोल्दै पनी ॥

यस्ता रीत्सित ती दुवै सुजनको * इच्छा पुऱ्याई कन ।
आफू पाण्डवतर्फ नै हुनुभयो * श्रीनन्दका नन्दन ॥६६॥
पाई फौज असंख्य वीरहरुको * नारायणी नामको ।
श्री दुर्योधन फर्किए नगरमा * आज्ञा लिई कृष्णको ॥
तिन्ले श्री बलरामजीसँग पनि * साहाय मागे तर ।
श्री दुर्योधनलाइ श्री बलजिले * आज्ञा भयो सादर ॥६७॥
मेरा निम्त समान छौ तिमि दुवै * हे वीर ! त्यै कारण ।
मैले दिन्नँ यहाँ कुनै तिर पनी * साहाय दुर्योधन ॥
नीती-धर्म पुऱ्याइ लडनु तिमिले * आज्ञा भएथ्यो जब ।
श्री दुर्योधन फर्किए घरमहाँ * दिग्दार मानी तब ॥६८॥
पाल्नूभो हरि पार्थका सँगमहाँ * रानीहरू लीकन ।
पुग्नूभो अनि ती युधिष्ठिरकहाँ * सानन्द नारायण ॥
पाई दर्शन श्री जनार्दनजिको * सम्मान ठूलो गरी ।
पूजा गर्नुभयो युधिष्ठिरजिले * तत्काल पाऊ परी ॥६९

नर-नारायणको प्रेम देखेर सञ्जय दंग पर्नु :—

हे राजन् ! त्यहि बीचमा कुरुहरू * संपूर्ण भेला भए ।
पारौं भेद भनेर पार्थ-हरिमा * तिन्ले इरादा लिए ॥
डाकी श्री धृतराष्ट्रलाइ सबले * तिन्को बुझाई मन ।
आफ्नू त्यै मतमा मिलाइ सहजै * राजी गराईकन ॥७०॥
डाकी सञ्जयलाइ आदर गरी * भन्दा भए त्यै घरी ।
भेट्नू श्री हरिलाइ गैकन त्यहाँ * एकान्त पर्नै गरी ॥
सोधी सञ्च बिसञ्च आदर गरी * सेवा जनाई लिनू ।
बिन्ती श्री धृतराष्ट्रको विनयले * सारा सुनाई दिनू ॥७१॥

आशा हे भगवन् ! सदा हजुरको * गर्छन् सबै कौरव ।
तिन्को नाश चिताउनू हजुरले * होवैन हे माधव !
जेठाकै घरमा रहन्छ सबको * साम्राज्यको शासन ।
दिन्नन् पाण्डवलाइ अंश कुरुले * बाँडेर त्यै कारण ॥७२॥
हामी झैं अरु वीर यो पृथिविमा * क्वै छैन अर्को भनी ।
हाम्रो राज्य लिने निहूँ घरि-घरी * गर्छन् वृथामा तिनी ॥
पैह्ले अर्जुनले हरी हजुरकी * बैन्ही सुभद्रा कन ।
ल्याए बल्जफती बिइज्जत गरी * तिन्ले विना कारण ॥७३॥
पाए राज भने घमण्ड बहुतै * बढ्नेछ तिन्को जब ।
देलान् दुःख सबै प्रजाकन वृथा * उन्मत्त भै पाण्डव ॥
सामुन्ने प्रभुकै अनीति बलले * तिन्ले गरे क्यै गरी !
धर्म-स्थापनमा हुनेछ प्रभुको * बाधा ठुलो हे हरि ! ॥७४॥
तस्मात् पाण्डु-कुमारलाइ वशमा * राख्नेछ मौका अब ।
गर्नू पर्दछ काम खूब मनमा * सोचेर हे माधव !
गर्दैनौं कहिल्यै अहित् हजुरको * हामी सबै कौरव ।
पर्छौं साथ हजुरका शरणमा * सेवा जगाई अब ॥७५॥
हाम्रो व्यर्थ गरी विरोध अहिले * तिन्का वशैमा परी ।
केही लाभ र स्वार्थको पनि कुरा * देखिन्न लौ यो घरी ॥
धेरै यै रितका कुरा अरु पनी * यो भन्नु यस्तो भनी ।
शिक्षा सञ्जयलाइ खूब कुरुले * धेरै दिएथे अनि ॥७६॥
ल्याई रत्न दिए हरीकन लगी * गर्नू भनी अर्पण ।
सारा कौरवले मिलीकन भने * फेरी बुझाई कन ॥
जे भन्छौं धृतराष्ट्रको खबर त्यो * आफ्नू मनैमा लिई ।
भन्नू धर्म-कुमारलाइ हरिका * साथै सभामा गई ॥७७॥

मैले राज्य फिराउने गरिसकें * युक्ती सकेको जति ।
मान्दैनन् कुरु वीर यो बखतमा * मेरो कुनै सम्मति ॥
दिन्नन् राज्य अवश्य कौरवहरू * राजी-खुशीले जब ।
लड्छौ राज्य लिना निमित्त तिमिले * भन्ने म सुन्छु अब ॥७८॥
जो योद्धाहरू छन् दुवै तरफका * दुर्जेय हे पाण्डव !
होला वंश विनाश हामी दुइको * यो युद्धले नै सब ॥
जस्को नाम अजात-शत्रु छ स्वयं * विख्यात ब्रह्माण्डमा ।
ज्ञानी, धार्मिक बुद्धिमान तिमि झैं * क्वै छैन संसारमा ॥७९॥
यस्ता योग्य तथा गुणी पुरुषले * ख्याले नराखी कन ।
पापी कौरव झैं वृथा समरको * इच्छा गरेको किन ।
धेरै यै रितका कुरा अरु पनी * जो भन्नुपर्नै थिए ।
ज्ञानी सञ्जयलाइ वीर कुरुले * सारा सुनाई दिए ॥८०॥
त्यहाँबाट बिदा भएर हरिको * मिल्ने भयो दर्शन ।
भन्दै सञ्जयजी हिंडे मनमनै * आनन्द मानी कन ॥
राखेथे हरिलाई पाण्डुसुतले * जुन मुख्य प्रासादमा ।
सोद्धै सञ्जयजी पुगे नरपते ! * सानन्द त्यै स्थानमा । ८१॥
खोपीमा हरिको सरासर गई * भेट्ने इरादा गरे ।
ढोकैबाट चलन् विचित्र रितको * देख्दा तिनी दङ् परे ॥
पाऊ काखमहाँ धनञ्जयजिको * राखेर श्रद्धा गरी ।
मिच्थिन् श्रीहरिकै अगाडि खुशिले * श्री रुक्मिणी सुन्दरी ॥८२
त्यस्तै अर्जुनकै अगाडि हरिको * पाऊ धरी काखमा ।
मिच्थिन् द्रौपदिजी कुरा गरि-गरी * आनन्दका साथमा ॥
देखे श्री हरिको तथा विजयको * त्यो प्रेम तिन्ले जब ।
बिर्से भेद गराउने जति कुरा * पैह्ले सुनेको सब ॥८३

सक्छन् त्यागन मनुष्यले बखतमा * साम्राज्य वा बैभव ।
भार्यालाइ पराइका संग महाँ * -को देख्न सक्छन् कब ॥
यस्तै तर्क गरी विभेद दुइमा * गाह्रो छ पार्नू भनी ।
राखे सञ्जयले कुरा मनमहाँ * भन्नू भनेको पनि ८४
केही बेर उभेर सोहि स्थलमा * राम्रो गरे निश्चय ।
पाएँ दर्शन हे प्रभो ! भनि परे * पाऊ महाँ सञ्जय ॥
देखी श्री हरिले उठाउनुभयो * गर्दै ठुलो आदर ।
पाल्नूभो सहि कष्ट यो बखतमा * कुन् कामका खातिर ॥८५
आज्ञा सञ्जयले सुनेर हरिको * आनन्द मानीकन ।
जोरी हात दुवै भने विनयले * न्यूह्रेर सोही क्षण ॥
आएँ श्री धृतराष्ट्रको चर भई * हे नाथ । ऐल्हे यहाँ ।
भन्छु यो समचार वर्णन गरी * सम्पूर्ण साम्नेमहाँ ॥८६॥
दिन्नन् पाण्डवलाइ राज्य खुशिले * मागेर ती कौरव ।
ज्ञानी पाण्डवलाइ योग्य रितले * सम्झाउनोस् माधव ॥
पापी कौरव झैं विचार नगरे * श्री पाण्डुका-पुत्रले ।
होला खूब ठुलो विनाश दुइको * हे नाथ ! यो युद्धले ॥८७
जस्का रक्षक भीष्म, द्रोण, कृपजी * छन् कर्ण योद्धा अनि ।
गाह्रो देख्दछु जित्नलाइ रणमा * द्यौताहरूले पनि ।
त्यस्तै अर्जुन भीम सात्यकिहरू * छन् काल जस्ता सब ।
यिन्को वंश विनाश हुन्छ सहजै * यो युद्धले माधव ! ॥८८

जुन् युद्धले सकल वंश विनाश पार्छ ।
त्यो युद्धमा अघि सरीकन लाभ के छ ॥
हार्नू तथा विजय पाउनू एकनास ।
ठान्छु, भएपछि दुवैतिरको विनाश ॥८९॥

होवैन हर्ष जति युद्ध र राज्य पाई ।
रोक्नूहवस् समर बात यही बुझाई ॥
भन्ने कुरा जति थिए धृतराष्ट्रजीका ।
बिन्ती गरे सकल सामुमहाँ हरीका ॥९०॥

तिन्को बात सुनेर फेरि हरिले * हाँसेर आज्ञा भयो ।
नीती, धर्म त्यजेर व्यर्थ अरुको * सर्वस्व हर्नै छ जो ॥
तिन्लाई रणमा जितेर वलले * जो सक्छ फिर्ता लिन ।
आफ्नू भाग जती सहर्ष नलिई * छाड्नेछ त्यस्ले किन ॥९१

यस्तै कुरा अरु पनी हरिले सुनाई ।
नीती र धर्म-पथ भन्नुभयो बुझाई ॥
क्यै बेरमा लिई ति सञ्जय, पार्थलाई ।
पाल्नू भयो हरि सभातिर भेट्नलाई ॥९२॥

सञ्जय र पाण्डवको वार्तालाप:—

पौंची दिव्य सभामहाँ हरि सँगै * भन्दा भए सञ्जय ।
गर्दैछु म प्रणाम पाण्डु-सुतको * मन्मा चिताई जय ॥
राजन् ! यो व्रत तेह्र वर्षभरिको * सानन्द पूरा गरी ।
देख्दा आज हजूरलाइ मनमा * खूशी भएँ बेसरी ॥९३॥

राजा श्री धृतराष्ट्रको चर भई * आई रहेछु यहाँ ।
सोध्नू सञ्च विसञ्चपाण्डु-सुतको * भन्नु भएथ्यो उहाँ ॥
कृष्णा पुत्रसमेत् अरू स्वजन जो * छन् बन्धु आफ्ना यहाँ ।
सारालाइ सुध्याइ बक्सनुभयो * खूशी भई मन्महाँ ॥९४॥

यस्तो सञ्जयको युधिष्ठिरजिले * बिन्ती सुनेथे जब ।
सोधे सञ्च-बिसञ्च, यो बखतमा * होलान् सुखी कौरव ॥

हाम्रो भाग्य खुलेछ, सम्झनुभयो * जेठा बुबाले अब ।
के आज्ञा गरिबक्सियो ? भनतिमी * मान्छु खुशीले सब ॥९५॥
हाम्रा निम्ति सुयोधनादि घरमा * कस्ता कुरा गर्दछन् ?
हाम्रो भाग दिने कवै तिनि कुरा * चल्दा त्यहाँ भन्दछन् ?
हाम्रा निम्ति त्यहाँ पितामह तथा * श्री द्रोण आचार्यले ।
श्री दुर्योधनलाइ संमति दिदा *के भन्दछन् ? प्रेमले॥९६॥
कुन्तीको मन हाल श्री विदुरको * कस्तो छ त्याहाँ स्थिति ।
साराको समचार सुन्न मनमा * लाग्दैछ इच्छा अति ॥
यस्तो प्रश्न सुने युधिष्ठिरजिले * आज्ञा भएको जब ।
जोरी हात दुवै प्रसन्न मनले * भन्दा भए संजय ॥९७॥
हे राजन् ! अहिले सुध्याउनुभयो * वार्ता हजुर्ले जति ।
सारा वीर सुनुन् म भन्दछु यहाँ * शंका नमानी रति ॥
छैनन् कष्टमहाँ गुणी विदुर औ * कुन्ती पनी यो घरी ।
गर्छन् चिन्तन ती सदा हजुरको * कल्याणको राम्ररी ॥९८॥
भीष्म, द्रोण पनी सदा कुरुहरू * -लाई मिलाई कन ।
खोज्छन् राज हजुरको जति सबै * फिर्ता दिलाई दिन ॥
मान्दैनन् तर ती सुयोधन भने * जिद्दी हुनाले गरी ।
लड्ने पर्दछ ती दुवै सुजनले * निच्का वशैमा परी॥९९॥
श्री दुर्योधन ठान्दछन् मनमहाँ * हो राज्य मेरो भनी ।
सोही कारणले लडीकन पनी * योथाम्न खोज्छन् तिनी ॥
मान्दैनन् तिनिले कुनै तरहले * यो राज्य फिर्ता दिन ।
लड्नु हुन्छ भने हजुर खुशिले *लड्छन् ति दुर्योधन ॥१००
छोराको हठले लडाइ अहिले * पर्ला भने भैं हुँदा ।
साहै नै धृतराष्ट्रजी मन महाँ * चिन्तित रहन्छन् सदा ॥

मेरो राज्य भनेर कौरवहरू * छाड्दै नछाड्ने भए ।
आफ्नू भाग नपाइ पाण्डवहरू * मान्दै नमान्ने भए ॥१॥
देख्दा लक्षण नाशको यि दुइको * साह्रै सकस्मा परी ।
दुःखी छन् धृतराष्ट्र, 'कारण म हूँ'* यस्को भनी यो घरी ॥
भीष्म, द्रोण र कर्ण आदि रणमा * सर्नन् अगाड़ी जब ।
सक्तैनन् अरु कोहि टिक्न सहजै * मर्नन् अवश्यै सब ॥२॥
त्यस्तै अर्जुन-भीम, माद्रिसुतको * पर्नेछ जो सामुमा ।
कस्तै वीर भए पनी समरमा * मर्नेछ त्यो व्यर्थमा ॥
मर्नेछन् जब वीर लोकभरिका * साना र ठूला सब ।
आफ्नू वंश विनाश हुन्छ रणमा * मर्दा सबै बान्धव ॥३॥
मारी बन्धुहरू भएर विजयी * साम्राज्य पाए पनि ।
टिक्नेछैन अवश्य राज्य अरुले * भोग्नेछ मेरो भनी ॥
श्री दुर्योधन औ हजूर हुनुभो * यो युद्धको कारण ।
कस्ले सक्दछ रोक्न युद्ध दुइमा * यौटा नन्यूरी कन ॥४॥
साह्रै मूर्ख भए सुयोधन ठूलो * जिद्दी हुनाले गरी ।
के गर्नें धृतराष्ट्र झन् सकसमा * पर्नू भयो यो घरी ॥
होला नाश भनी बुझिन्छ सहजै * जुन् युद्धको कारण ।
त्यस्तो गर्न लड़ाइँ को अघिसरी * तम्सिन्छ हे सज्जन ! ॥५॥
ज्ञानी, धार्मिक, औ गुणी हजुर झैं * खोजे पनी लोकमा ।
पाइन्नन् भनि गर्दछन् घर-घरै * चर्चा सबै देशमा ॥
होला नाश पछी यही समरले * भन्ने विचारी कन ।
रोक्नू पर्छ हजूरले समर यो * सन्तोष मानीकन ॥६॥
आएँ केवल सोध्नलाइ सबको * आनन्द औ मङ्गल ।
सोधी बक्सनुभो जती हजुरले * बिन्ती चढ़ाएँ सब ॥

जो भन्नू धृतराष्ट्रजी कन गई * पर्नेछ मैले उहाँ ।
आज्ञा गर्नुहवस् प्रसन्न मनले * शंका नमानी यहाँ ॥७॥
विन्ती सञ्जयको युधिष्ठिरजिले * सुन्नू भएथ्यो जब ।
भन्नूभो-तिमिले सुनाउनु गई * मैले भनेको सब ॥
जानी-जानि विपत्ति हामिहरुको * केही ननाले सरि ।
सोद्धैछन् धृतराष्ट्रले कुशलको * मात्रै कुरा के गरी ? ॥८॥
हो यो राज्य सबै पितामहजिको * छन् ती अभै जीवित ।
अर्काको हक हुन्न केही ति छँदै * हो शास्त्रको यो मत ॥
रक्षा गर्नुभयो सदा शिशु छँदा * हाम्रो स्वयं यत्नले ।
गर्नू हुन्छ विनाश खातिर वृथा * संग्राम कुन् हेतुले ॥९॥
तिन्को राजमहाँ थिएन हक क्यै * भन्ने कुरा जान्दछन् ।
'मेरो राज्य' सुयोधनादि अहिले * के हेतुले भन्दछन् ?
पाएथे अघि राज्य जो यि कुरुले * आधा लिनू लौ भनी ।
अर्काको बलले मिल्यो नियमले * मिल्दैनथ्यो त्यो पनि॥१०
भीष्म, द्रोण र कर्ण आदि भवका * विख्यात योद्धा सब ।
छन् जस्का वशमा ति हीन कसरी * ठान्छन् स्वयं कौरव ॥
जो सक्छन् यमलाइ बाँध्न सहजै * इच्छा गरेका घरी ।
अर्काको वशमा परें म अहिले * भन्छन् तिनी के गरी ॥११
हाम्रो भाग सबै लिने निहुँ गरी * लाजै नमानी कन ।
गर्दैछन् धृतराष्ट्र जाल यसरी * ऐल्हे वृथामा किन ?
आफ्नू धर्म बुझेर भाग जति हो * हाम्रो फिराई दिउन् ।
आपुस्को ननिको कचिङ्गल वृथा * जानेर छाड़ी दिउन् ॥१२
हाम्रो भाग लिनानिमित्त रणमा * सर्छन्न अगाड़ी तिनी ।
दिन्छन् दोष ति हामिलाइ कसरी * यी लड्न खोज्छन् भनी ॥

के होला रणमा भनेर अहिल्यै * मानी रहेछन् डर ।
पाए भाग लड़ाइँ गर्नु छ वृथा * के कामका खातिर ॥१३
हाम्रो भाग लिनानिमित्त यसरी * ती जाल गर्छन् किन ?
हामी क्षत्रिय वीरले कसरि यो * अन्याय खप्ने भन ?
आफ्नू भाग लिनानिमित्त बलले * लड्दैन जो युद्धमा ।
अंशै छाड्नु परेर दास बनि त्यो * पर्ला ठुलो कष्टमा ॥१४
मैले धर्म-विरुद्ध विश्वभरिको * सम्पत्ति पाए पनी ।
कैह्ले त्यागिदनँ धर्मको पथ बुझे * कर्तव्य आफ्नू भनी ॥
मेरा रक्षक विप्र-भक्त सबका * मालीक श्री कृष्णले ।
जो बक्सिन्छ हुकुम् म गर्दछु त्यही * श्रद्धा तथा भक्तिले ॥१५
हे राजन् ! हरिलाइ यो किसिमले * मध्यस्थ राखीकन ।
बस्नूभो अनि श्री युधिष्ठिर त्यहाँ * केही नबोली कन ॥
हेर्दै संजयतर्फ मन्द स्वरले * गम्भीर वाणी गरी ।
सम्झाइ दुइतर्फको हित कुरा * बोल्नू भयो श्रीहरि ॥१६॥
ज्ञानी, संजय ! यी दुवै तरफको * कल्याणका खातिर ।
ठान्छू मेल गरी बसुन् यिनिहरू * आनन्द मानी, तर ॥
मान्छन् मिल्न कहाँ सुयोधन बरू * श्री पाण्डुका पुत्रको ।
खोज्छन् भाग लिएर मालिक बनी * बस्ने ति साम्राज्यको॥१७
लाहाको घरलाइ पोल्नु, विषका * लड्डू लगी खुवाउनू ।
कृष्णालाइ लगी सभाबिच महाँ * चुल्ठो समाई लिनू ॥
जूवामा छलले जितेर वनमा * नांगै धपाई दिनू ।
पापी कौरवको अनीति कसरी * यी वीरले बिसनू ॥१८॥
सोही कारणले लड़ाइँ नहुँदै * आई यहाँ कौरव ।
सन्धी पाण्डव वीरका सँग गरुन् * फिर्ता दिई वैभव ॥

मान्दैनन् यदि वीर कौरव भने * काटी सबैको शिर ।
पहेको बदला लिएर मनको * सम्पूर्ण पोख्नन् फिर॥१९॥
लड्नेछन् बुझि धर्म आफ्नू हकका* खातीरमा पाण्डव ।
दिन्छन् दोष अनेक कौरवहरू * के हुन्छ त्यस्ले अब ॥
यिनको भाग जती सहर्ष नदिए * टर्दैन संग्राम यो ।
मान्दैनन् डर पाण्डु-पुत्रहरुले * आए पनी लड्न जो ॥२०
आई मेल गरुन् दिई हक सबै * इच्छा भए ती लड्नु ।
यस्मा पाण्डु-कुमारलाइ मनमा * दोषी नठानी रहुन् ।
भन्नू संजयजी ! गएर तिमिले * मैले भनेको जति ।
गर्नू यत्न मिलाउने पनि सके * फिर्ता दिई सम्पति ॥२१॥
ऐल्हे जाउ तिमी म आउँछु पछी * मौका मिलेका घरी ।
जो अन्याय गरे अघी ति कुरुले * भन्छु म राम्रो गरी ॥
आज्ञा श्री हरिबाट फर्कन भनी * पाई सकेथे जब ।
ढोगी सादर हस्तिनापुर महाँ * फिर्दा भए संजय ॥२२॥
रात्रीमा धृतराष्ट्रका भवनमा * भेट्ने इरादा गरी ।
पौंची संजयले भने कुशलको * सम्चार सोही घरी ॥
हे राजन् ! म त्यहाँ पुगेर पहिले * भेटें मुरारी कन ।
देखें ती दुइको मिलाप प्रभुका * साथै थिए अर्जुन ॥२३॥
गर्थिन् चाकरि द्रौपदी चरणमा * पक्रेर श्रीकृष्णको ।
गर्नी रुक्मिणि गर्दथिन् खुशि भई* सेवा त्यहाँ पार्थको ॥
जस्को जुन् सुमुखी प्रसन्न मनले* गर्थे बसी चाकरी ।
उन्के हुन् महिषी कि भैं मनमहाँ* लाग्थ्यो त्यहाँ त्यो घरी २४
तिनको श्रेष्ठ मिलाप देखि मनमा * लागेर लज्जा अति ।
पानें भेद कुरा गरीनँ प्रभुले * आज्ञा भएको जति ॥

बाँकीको जति बात हो हजुरको * बिन्ती चढाई दिएँ ।
त्यस्को उत्तर कृष्णबाट त्यहि नै * सम्पूर्ण सुन्दो भए ॥२५॥
सोधें सञ्च बिसञ्च-धर्म सुतको * ठूलो सभामा गई ।
सोधेथें अरुको पनी कुशल ता * क्यै दीन जस्तो भई ॥
सोध्नूभो जति जे युधिष्ठिरजिले * राजन् ! मलाई त्यहाँ ।
त्यस्को उत्तर नम्रतासित दिएँ * सब्का अगाड़ी महाँ ॥२६
ज्ञानी संजय शूर वीर भवमा * विख्यात सत्यव्रती ।
अर्काको उपकारमा रत भई * बस्ने सदा सद्मति ॥
सोच्ने मङ्गल शत्रुको पनि भलो * राम्रो हवस् लौ भनी ।
छैनन् धर्मकुमार झैं पृथिविमा * भूपाल कोही पनि ॥२७
त्यस्ताको कुभलो चिताउनु पनि * हो पाप ठूलो तर ।
मान्नुहुन्न, हजुरलाइ पछिको * लाग्दैन मनमा डर ॥
पापी दुष्ट मदान्ध व्यर्थ अरुको * छन् द्रोह गर्ने जति ।
मन्त्री छन् अहिले सुयोधनजिका * शिक्षा दिने दुर्मति ॥२८॥
त्यस्ता क्षुद्र कुपुत्रलाइ प्रभुले * त्याग्नै नसक्ता महाँ ।
होला वंश विनाश निश्चय छिटै * यो राज्य टिक्ला कहाँ ॥
आएँ खूब गरी धपेड़ि [अहिले * थाकी रहेंछु अति ।
भोली भन्छु सभा हुँदा अरु कुरा * बाँकी बचेको जति ॥२९॥
हे राजन् ! मनको कुतर्क जति हो * सम्पूर्ण त्यागी दिनोस् ।
रात्री धेर बित्यो म जान्छु घरमा * सानन्द सुत्नु हवस् ॥
यस्तो संजयको कुरा सुनिसकी * चिन्ता परे तापनि ।
भन्नूभो धृतराष्ट्रले दिइ बिदा * लौ जाउ ऐले भनी॥३०॥
चिन्ता धेर बढेर त्यै बखतमा * यौटा पठाई चर ।
डाके श्री धृतराष्ट्रले विदुरजी * -लाई त्यहाँ सादर ॥

आधा रातमहाँ उठी विदुरजी * आई पुगेथे जब ।
लागे भूपति भन्न—तर्क मनमा * चिन्ता उठेको सब ॥३१॥
हे भाई ! म निदाउने घरि-घरी * यत्नादि गर्छु जति ।
निद्राचाहिं बढेर तर्क मनमा * भाग्दैछ टाढा उति ॥
नीतीको उपदेश झट्ट तिमिले * देऊ मलाई अब ।
मेरो ताप, कुतर्क दुःख मनको * चाँड़ो हटाऊ सब ॥३२॥
यस्तो श्री धृतराष्ट्रले विनयले * आज्ञा भएको सुनी ।
सारा बात बुझाउने असल यो * मौका छ एहिले भनी ॥
केही बेर गरी विचार मनमा * आनन्द मानी कन ।
लागे भन्न बुझाउँदै विदुरजी * ती भूपतीको मन ॥३३॥

विदुरको नीतियुक्त उपदेश :—

निर्धो भै बलवान व्यक्तिसँग जो * व्यर्थै निहूँ खोज्दछ ।
आफ्नी रूपवती त्यजेर अरुकी * स्त्रीलाइ जो ताक्दछ ॥
गर्छन् यत्न बिगार गर्न अरुको * व्यर्थै पनी जो यहाँ ।
सक्तैनन् निशिमा निदाउन तिनै * चिंता बढी मन्महाँ ॥३४
निन्दामा नरिसाइ आदर हुँदा * मान्दैन जस्ले खुशी ।
आफ्नू वृत्ति बुझेर उत्तम सदा * जो गर्छ घर्मा बसी ॥
पर्दा कष्ट हुँदैन क्षोभ मनमा * जस्लाइ केहि पनि ।
त्यस्ता जन् कन भन्छन् सकलले * ज्ञानी यिनै हुन् भनी ॥३५

विद्या समस्त नपढीकन गर्व गर्ने ।
ठुलो मनोरथ दरिद्र भएर धर्ने ॥
केही उपाय नगरी धन पाउनाको ।
जो राख्छ आश मनमा बुझ मूर्ख त्यै हो ॥३६॥

आफ्नू वृत्ति त्यजेर नीच जनको * जो गर्दछन् चाकरी ।
जो चिन्दैन कुमित्र, मित्र गुणले * संसारमा राम्ररी ॥



विदुरले धृतराष्ट्रलाई नीतिको उपदेश दिएका

अर्काको शुभ काममा पनि सदा * छन् दोष देख्ने जति ।
त्यस्तालाई नलागि नींद निशिमा * हुन्छन् दुखी भूपति ॥३७
आफ्नू दोषहरू नदेखि अरूको * छन् दोष देख्ने जति ।
जस्को छैन प्रसङ्ग गर्दछ कुरा * जान्ने बनी जो अति ॥
अर्काको बिचमा नसोधिकन जो * काटी कुरा गर्दछ ।
त्यस्तो व्यक्ति नलागि नींद निशिमा * संतापमा पर्दछ ॥३८॥
अर्कोको घरमा नडाकिकन जो * जान्छन् अगाड़ी सरी ।
बर्ता बोल्दछ जो नसोधि ननिको * माने पनी बेसरी ॥
विश्वासी जनका चिन्ही गुणहरू * मान्दैन विश्वास जो ।
त्यस्तालाई गुणी र सज्जनहरू * भन्छन् यही मूढ़ हो॥३९॥
दिन्नन् दान धनी भए पनि सदा * राख्छन् लुकाई धन ।
सक्तैनन् दुख खप्न धैर्य गरि जो * आपत्तिमा निर्धन ॥

त्यस्तालाई शहर्ष पत्थर ठुलो * बाँधेर घाँटी सित ।
फ्याँक्नु हुन्छ लगेर बीच नदिमा * हो शास्त्रको यो मत ॥४०
डुङ्गा साधन मुख्य हुन्छ नदिमा * तर्नू परेका घरी ।
त्यस्तै साधन सत्य मात्र छ ठुलो * संसार तर्नै मरी ॥
गर्नोस् सत्य, क्षमा, दया, त्रिगुणको * आनन्दले पालन ।
गर्नू हुन्छ विचार यो अबुझ झैं * सतमा हजुर्ले किन ॥४१
जस्ले गर्दछ धैर्य धारण ठुलो * आपद् परेका घरी ।
चिन्ता जुन् जनलाइ हुन्छ अरुले* सर्वस्व लाँदा हरी ॥
मर्यादा सब थाम्छ शास्त्रहरुको * जुन् व्यक्तिले लोकमा ।
त्यस्तै व्यक्ति गुणी कहिन्छ र ठुलो * मानिन्छ संसारमा ॥४२॥
आफ्नू साथमहाँ कसैसँग कुरा * केही चलेका घरी ।
जस्ले बात नकाटि तन्मय भई * सुन्ला सबै राम्ररी ॥
देला बात बुझेर योग्य नचुकी * जुन् व्यक्तिले उत्तर ।
त्यस्तालाइ विचारवान् भनि सबै * गर्नै ठुलो आदर ॥४३॥
ठूलो शक्ति भए पनी बखतमा * जो गर्न सक्छन् क्षमा ।
हुन्छन् पूज्य तिनै सदा नरपते ! * संपूर्ण संसारमा ॥
जस्ले शान्ति-स्वरूप शस्त्र करमा * गर्छन् सदा धारण ।
सक्छन् जित्न समस्त शत्रु तिनिले* त्यो शस्त्रको कारण ॥४४
राजन् ! केवल धर्म मात्र छ ठुलो * कल्याण गर्ने सदा ।
शान्तीको छ उपाय सादर क्षमा * गर्नू सदा सर्वदा ॥
विद्याले जनलाइ मिल्छ मनमा * सन्तोष खोजे जति ।
हिंसा त्यागन सके सबै तरहले * हुन्छन् सुखी भूपति ॥४५॥
जस्ले दान दिँदैन योग्य जनमा * सम्पत्ति राखी कन ।
जस्ले त्यागछ विशुद्ध आचरण नै * ठानी, बनी निर्धन ॥

त्याग्ने धर्म गृहस्थ नै, यति भई * जो गर्छ निन्दा स्तुति ।
जान्छन् भोग्न यिनैहरू नरकमा * दुष्कर्म हे भूपति ॥४६॥
निन्दा,क्रोध र दर्प,शोक,अभिमान्* निर्लज्ज, उद्दण्डता ।
हर्दैनन् सब यी खराब गुणले * जुन् व्यक्तिको धीरता ॥
जो गर्छन् खुशिले क्षमा बखतमा * कर्तव्य ठूलो भनी ।
भन्छन् पण्डित लोकले, सुख सदा * भोग्छन् अनेकौं तिनी॥४७
योगी भैकन चाकरी गरी सदा * बस्नेछ जो नीचको ।
त्याग्ने धर्म गृहस्थ भैकन छ जो * शास्त्रादिको लोकको ॥
आफ्ना आश्रित व्यक्तिको जतनले* गर्दैन जो पालन ।
त्यस्ताको यश फैलिँदैन कहिल्यै * भन्छन् सबै दुर्जन ॥४८॥
शंका गर्दछ जो कुनै तरहको * सत्कार्य गर्दा पनि ।
आफ्नू गर्छ बढाइँ जो जगतमा * आफैं मपाइँ बनी ॥
चाँडो काम हुने भए पनि ढिलो * जानेर जो गर्दछन् ।
त्यस्तालाई अवश्य विज्ञ जनले * यो मूढ हो भन्दछन्॥४९॥
आफ्ना आश्रितको सुयोग्य रितले* जो गर्दछन् पालन ।
काम, क्रोध र लोभ जित्न सहजै * जो सक्तछन् सज्जन ॥
अर्काको उपकार गर्न जन जो * हुन्छन् सदा तत्पर ।
ती व्यक्तिकन बुद्धिमान् भनि सबै * गर्छन् ठूलो आदर ॥५०॥
अर्काको धन हर्नु पत्नी अरुकी * ताक्ने लुकी दुर्जन ।
तोड्ने मित्र गुणी, यि तीन जनका* हुन् नाशका लक्षण ॥
त्यस्तै क्रोध र लोभ-मोह भवमा * छन् तीन जो दुर्गुण ।
पर्छन् नर्कमहाँ यि दुर्व्यसनले * भन्छन् सदा सज्जन॥५१
जो गर्दैन सहर्ष उद्यम कुनै * कर्तव्य हो यो भनी ।
अर्काको सुख देखि डाह मनमा * जो गर्छ द्रोही बनी ॥

जो सन्तुष्ट हुँदैन वस्तु हकको * आफ्नू मिल्ले तापनि ।
अर्काको भरमा रहन्छ जन जो * त्यै हो दुखी निर्धनी ॥५२
उत्तम्-मध्यम औ अधम् जनहरू * हुन्छन् सदा लोकमा ।
गर्छन् काम तिनै स्वभाव गुणले * प्रेरेर संसारमा ॥
विद्याभ्यास र चाकरी, कृषि यहाँ * छन् तीन यी कर्म जो ।
आफैं लागि परी डटेर नगरे * हो व्यर्थ नै गर्नु त्यो ॥५३
जो वैरीसित बुद्धिपूर्वक कुरा * गर्नेछ मौका महाँ ।
जो गर्दैन लडाइँ शत्रु बलियो * जानी कुमौका महाँ ॥
निर्धाको अपमान गर्न सहसा * आँटदैन जुन् मानिस ।
भन्छन् त्यस्कन 'धीर' जो अघिसरी * गर्दैन दुस्साहस ॥५४॥
व्यर्थैमा परदेश जान्न जन जो * मिल्दैन पापी सित ।
चोर्ने छैन प्रवृत्ति जो सुजनको * गर्छन्न सकेको हित ॥
पाखण्डी मदिरा पिएर अरुको * चुक्ली नगर्ने जन ।
हुन्छन् लोकमहाँ सुखी र सबले * भन्छन् यि हुन् सज्जन५५
जो बोल्दैन नसोधि बात अरुको * साँचो भए तापनि ।
राजन् ! जस्कन क्रोध हुन्छ मनमा * निन्दा गरेको सुनी ।
जो गर्दैन विवाद दोष अरुको * देखी दयालु बनी ।
त्यस्को हुन्छ सुकीर्ति लोकभरिमा * भन्छन् सबैले गुणी ॥५६
आफ्ना आश्रितलाइ बाँड़ि लघु नै * जो गर्दछन् भोजन ।
माग्ने शत्रु भए पनी बखतमा * जो दिन्छ सित्तौं धन ॥
जो सुन्दैन बढ़ी परिश्रम गरें * मैले असाध्यै भनी ॥
त्यस्ताको मन ता अनर्थहरूले * ढाकिन्न कैल्है पनि ॥५७॥
चेलालाइ बुझाइ योग्य नदिने * शिक्षा गुरू भैकन ।
पत्नी भै पतिलाइ मन्परि कुरा * बोल्ने बनी दुर्जन ॥

राजा शोषणमा डुबीकन प्रजा * -को न्याय गर्दैन जो ।
यी तीनै जनलाइ त्यागि सबले *जान्छन् यही नीति हो॥५८
चाँडै हुन्छ प्रसन्न जो जगतमा * अल्छी छ जो मूर्ख छ ।
अर्कालाइ रिझाउने मन गरी * बर्ता कुरा बोल्दछ ॥
त्यस्ता मानिसको कुनै किसिमले* साथै बसे तापनि ।
लिन्नन सम्मति विज्ञले बखतमा * पर्नेछ धोका भनी ॥५९॥
जूवा खेल्नु, शिकार गर्नु र सदा * आसक्त स्त्रीमा हुनू ।
रक्सी खानु, कठोर दण्ड दिनु औ* ऐश्वर्य नाशी दिनू ॥
वाणी बोल्नु बिझाउने गरि सदा * छन् सात जो लक्षण ।
त्यागछन् भूपतिले यि दुर्गुण बुझी * सन्तापका कारण ॥६०॥
इच्छामाफिक सम्पती हुनु, प्रिया * पत्नी सुशीला हुनू ।
विद्या प्राप्त हुनू र वेग मनको * रोक्नू र ज्ञानी हुनू ॥
आज्ञा मान्न तयार पुत्र घरमा * जस्को छ यी षट् गुण ।
पृथ्वीकै सुख स्वर्गको सरि सदा * भोग्छन् तिनै सज्जन ॥६१
दण्डी, देव-मनुष्य, पितृ अतिथी * यिन्को गरी पूजन ।
गर्छन् प्राप्त सुकीर्ति लोकभरिमा * ज्ञानी तथा सज्जन ॥
साँचो बोल्नु र दान-धर्म र क्षमा * छन् चार जस्मा गुण ।
तिन्को आदर गर्दछन् सकलले * सन्तोष मानीकन ॥६२॥
आरोग्यै रहनू ऋणी नहुनु औ * सत्संग गर्नू सदा ।
आफ्नू वृत्ति बुझेर पालन गरी * बस्नू सदा सर्वदा ।
थामी धर्म रहेर निर्भय सदा * जो बस्छ आपत्तिमा ।
त्यस्तालाइ हुँदैन कष्ट मनको * यो लोकमा स्वर्गमा ॥६३
उत्तम् मध्यम औ अधम् किसिमका * छन् व्यक्ति संसारमा ।
गर्छन् कार्य विभिन्न बुद्धि बलले * औ शक्तिकै लोकमा ॥

विद्याभ्यास कृषी र चाकरी यिनै * छन् तीन कार्यादि जो ।
आफैं लागि परेर गर्न नसके * हो व्यर्थ नै गर्नु त्यो ॥६४
यस्ता नीतिहरू सबै विदुरले * भन्दै गएको सुनी ।
सोचे श्री धृतराष्ट्रले मनमहाँ * शंका छ यौटा भनी ॥
हे भाई ! सब नीतिका वचन यी * भन्छौ तिमीले तर ।
यो पापी मनमा टिकेन हुन गो * झन् चित्त यो अस्थिर॥६५
फिर्ता राज्य दिंदैन पाण्डु-सुतको * यो दुष्ट दुर्योधन ।
साह्रै तत्पर पाण्डुका तनय छन् * यो राज्य फिर्ता लिन ॥
भित्री बात सबै ति वीरहरूको * भाई ! तिमी बुझ्दछौ ।
मेरो हालत जो छ त्यो पनि तिमी * राम्रो गरी जान्दछौ ॥६६
मेरा पुत्र र पाण्डु-पुत्रहरूको * कल्याण सोचीकन ।
यो संग्राम नमच्चिँदै यदि भए * युक्ती मलाई भन ॥
देखी श्री धृतराष्ट्रको विकलता * जानी नराम्रो स्थिति ।
लागे भन्न बुझाउँदै विदुरजी * जाने सुनेको जति ॥६७॥
दिन्छन् अर्ति हितैषिले वखतमा * राम्रो नराम्रो सब ।
सोही कारणले दुबै तरफको * कल्याण शोची अब ॥
जे भन्छु सब सुन्नुहोस् हजुरले * त्यागेर चिन्ता जति ।
राख्नुभो मनमा भने सब कुरा * होला भलो भूपति ॥६७
राजन् ! कार्य असत् उपायरूले * छन् सिद्ध गर्ने जति ।
आफ्नू चित्त हटाउनोस् हजुरले * त्यसबाट हे भूपति ! ॥
राम्रो काम सतर्क भैकन सदा * जो गर्दछन् सज्जन ।
त्यसमा सिद्धि मिलेन क्यौं गरि भने * आत्तिन्छ तिनको मन॥६९
केही काम नथालिँदै सुजनले * सोची-विचारी कन ।
के होला परिणाम, निर्णय स्वयं * गर्नू बुझी कारण ॥

त्यस्मा सिद्धि हुँदैन व्यर्थ श्रम त्यो * जाने कुशंका भए।
शान्ती मिल्दछ धैर्यसाथ पहिल्यै * त्यो काम त्यागीदिए ॥७०॥
हो यो राज्य सबै युधिष्ठिरजिको * त्यो धूर्तताले लिई।
गर्छ युद्ध म भन्नु के उचित हो * आफैं अगुवा भई॥
यिन्ले युद्ध गरे पनी नरपते ! * साम्राज्यको लोभले।
यिन्कै जीत अवश्य हुन्छ रणमा * भन्ने छ कुन् व्यक्तिले ॥७१
सुम्पी पाण्डु-कुमारको हक सबै * दिन्छन् भने कौरव।
आफै हुन्छ समाप्त जो छ झगडा * ऐल्हे उठेको सब।
होला नाश भनेर जुन् समरको * शंका छ हे भूपति !
त्यस्ता पाण्डव वीरका संग लड़ी * होवैन के दुर्गति ॥७२॥
सोही कारणले लड़ाइँ नहुँदै * सोची हजुरैं सब।
गर्नोस् यत्न मिलापको, हक दिए * राजी हुनन् पाण्डव॥
बाटो यै सजिलो छ शेष कुरुको * कल्याण गर्ने अब।
मर्नैछन् न त बन्धु पाण्डु-सुतका * द्वारा सबै कौरव ॥७३॥
जस्ले लाभ र हानिको स्थिति स्वयं * जान्दैन राम्रो गरी।
जो जान्दैन प्रमाण वृद्धि-क्षयको * मौका परेका घरी॥
आफ्ना बान्धवलाइ दण्ड दिन जो * सक्तैन अन्यायमा।
त्यस्ले राज्य चलाइ बस्नु छ वृथा * राजा बनी लोकमा ॥७४॥
जस्तै सुन्दरता रहन्न अघि झैं * बूढो भएका घरी।
त्यस्तै राज्य विनाश हुन्छ नृपते * अन्यायले नै गरी॥
सोही कारणले दुवै तरफको * कल्याण शोची कन।
गर्नू पर्दछ न्याय पाण्डु-सुतको * फिर्ता दिलाई धन ॥७५
खानूपर्छ गुणी पदार्थ जनले * खाएर जो पच्दछ।
जे खाँदा पछि कष्ट हुन्छ जियमा * त्यो खान को मान्दछ ?॥

चारो खान गएर मत्स्य जसरी * बल्छी महाँ पर्दछन् ।
त्यस्तै कौरव भाग पाण्डु-सुतको * खोस्ता वृथा मर्दछन् ॥७६
जस्ले खुशि भएर क्यै दिन पनि * सक्तैन मौका महाँ ।
त्यस्ले क्रोध गरेर हानि पनि के * गर्ला कुमौका महाँ ॥
त्यस्तालाइ प्रजा कदापि मनले * मान्दैन राजा भनी ।
रोज्दैनन् सुमुखी नपुंसक पती * मूर्खै भए तापनि ॥७७॥
जो छोड्ला अधिकार भूपति भई * चुक्ली अरूको सुनी ।
त्यस्तै शोभित हुन्छ क्लीब जनले* शृङ्गार पारे पनि ।
वाणीले मन-कर्मले नयनले * सन्तान जस्तो गरी ।
रैती पालन गर्नुपर्छ नृपले * आफ्नू सुकीर्ति छरी ॥७८
जस्ले राख्छ कमान न्याय-पथको* आफ्नू दह्रो हातमा ।
मान्नेछन् सबले प्रसन्न मनले * त्यस्को हुकुम् लोकमा ॥
गर्ला रैयतको सदा जतनले * जुन् भूपले पालन ।
त्यस्को थाल्छ सुकीर्ति लोकभरिमा* हे भूपति ! फैलिन ॥७९
राजन् ! मित्र छ बुद्धि नामक ठुलो * त्यस्लाइ रोक्नु सदा ।
सोही बुद्धि हुनेछ शत्रु मनको * स्वच्छन्द छाड़ी दिंदा ॥
रोक्नूपर्दछ बुद्धिले वशमहाँ * त्यै हेतु आफ्नू मन ।
जे गर्दा हित हुन्छ बुद्धि-बलले * त्यै गर्दछन् सज्जन ॥८०
खोज्छन् थिच्न कुटुम्बलाइ,मन नै* आफ्नू नरोकेर जो ।
तिनको बन्धु-विरोधले नरपते ! * पर्ला विपत्ती ठुलो ॥
आफ्ना बन्धु सबै नपारि वशमा * लडछु म भन्ने जति ।
सप्रन्नन् कहिले मिली सफलता * होवैन राम्रो गति ॥८१॥
जस्ले यो मन रोक्छ, बन्धु वशमा * हुन्छन् त्यसैका सब ।
जस्का बान्धव छन् प्रशस्त रणमा * त्यो हार्न सक्ला कब ! ॥

आफ्नू शक्ति बढाइ यै किसिमले * मारेर वैरी जति ।
जस्ले राज्य चलाउला नरपते ! * होवैन त्यस्को खति ॥८२
राजन् ! इन्द्रियको परेर वशमा * बुझ्दैन रात्री-दिन ।
पर्दा इन्द्रियको विशाल सुखमा * रोक्नेछ जस्ले मन ॥
जस्ले त्यो सुखलाइ एक छिनको * जान्दैन हे भूपति !
ज्ञातीलाइ भनी नजाति पछितो * गर्नेछ त्यो दुर्गति ॥८३॥
पापीले मनलाइ राख्न वशमा * सक्तैन आँटे पनि ।
निन्दा सज्जनको गरीकन वृथा * दुर्वाच्य बोल्छन् तिनी ॥
सोही पाप फली कुनै समयमा * संकष्ट ती भोग्दछन् ।
आफ्नू पाप पखाल्न सज्जनहरू * दुर्वाच्य ती खप्तछन्॥८४॥
राजन् ! कौरवरूप जङ्गल ठूलो * ठान्नू हवस् मन्महाँ ।
योद्धा पाण्डु-कुमार व्याघ्रसरिका * डुल्छन् खुशीले त्यहाँ ॥
नास्ने जङ्गल यो समूल मनमा * इच्छा नगर्नुहवस् ।
सारा भाग हरेर व्याघ्रहरूको * द्रोही नबन्नूहवस् ॥८५॥
सक्तैनन् कहिं बस्न अन्त गइ ती * छाडेर त्यो जङ्गल ।
शोभा त्यो वनको छ श्रेष्ठ अहिले * ती जन्तुले केवल ॥
रक्षा गर्दछ व्याघ्रको वन सदा * फैलेर चारै तिर ।
त्यस्तै रक्षकरूप व्याघ्र वनमा * डुल्छन् नमानी डर ॥८६
सुन्नेलाइ बढेर चाख मनमा * उत्साह वृद्धी दिने ।
गाह्रो पर्दछ सत्य बोल्न, मन नै * सुन्दा उज्यालो हुने ॥
अर्कालाइ हियाइ बात ननिको * जो बोल्दछन् दुर्मति ।
तिन्को सिद्ध हुँदैन कार्य मनको * होला बरू क्यै खति॥८७॥
ठूलो चोट पनि पुरिन्छ शरको * हे भूप ! क्यै कालमा ।
लाग्छन् पात ठुलो हुने गरि सबै * काटे पनी वृक्षमा ॥

वाणीरूप गएर वाण मनमा * वञ्नन्छ जुन् व्यक्तिको ।
रात्रीमा निंद हुन्न, भोक दिनमा * सम्झन्छ त्यौं चोट त्यो ॥८८
राजन् ! मित्र-मिलाप, खूब धनको* प्राप्ती बखतमा हुनु ।
पत्नीका सँगमा समागम तथा * इच्छित कुरा पाउनु ॥
आलिङ्गन सुतको र बन्धुहरूको * देख्नू सदा उन्नति ।
मीठो बोल्नु समाजमा बनिरहोस् * सम्मान खोजे जति ॥८९
छन् यी हर्ष बढाउने नरपते ! * सारा कुरा लोकमा ।
हुन्छन् व्यक्ति सुखी यि आठ गुणले* संपूर्ण संसारमा ॥
राम्रो बुद्धि, कुलीनता र वशमा * राख्ने सदा इन्द्रिय ।
शास्त्रज्ञान तथा पराक्रमि सदा * बोल्ने मिठो निर्भय ॥९०
हे राजेन्द्र ! कृतज्ञता र खुशिले * जो दान दिन्छन् धन ।
तिन्को ख्याति बढेर जान्छ,तनमा* छन् आठ जस्का गुण ॥
विद्या, स्त्री, कृषि,नीच संगतितथा * गाई र सेवाकन ।
हेर्चाहा नगरे मुहुर्त भरिमै * नाशिन्छ यो षट् गुण ॥९१
राजन् ! श्रेष्ठ सुपात्र पाँच बलिया * छन् पाण्डुका नन्दन ।
सानैदेखि हजूरले जतनले * गर्नू भयो पालन ॥
तिन्को भाग सबै लिने हजुरले * गर्दै नगर्नोस् मन ।
होला नाश अवश्य बन्धुहरूको * संग्रामकै कारण ॥९२॥
राजन् सुन्नुहवस् यसै विषयको * भन्छु म यौटा कथा ।
त्यस्ले शान्ति हुनेछ ताप मनको * जानेछ सारा व्यथा ॥
कन्या रूपवती सुशील गुणकी * खानी थिइन् केशिनी ।
स्वामी रोज्न भनी स्वयंवरमहाँ * सानन्द निस्किन् तिनी॥९३
श्री प्रह्लादजिका विरोचन भनी * छोरा प्रतापी थिए ।
कन्या प्राप्त गरौं भनीकन त्यहीं * आएर बस्ता भए ॥

यौटा विप्र पनि सुशील गुणका * खानी सुधन्वा त्यहाँ ।
इच्छा केशिनिको तिनैसित बिहा * गर्ने थियो मन्‌महाँ ॥९४॥
सोधिन् तैपनि श्री विरोचनजिको * गर्छु परीक्षा भनी ।
ठान्छौ दैत्य र विप्रमा भन तिमी * कस्लाइ बर्ता गुणी ॥
लागे भन्न त्यहाँ विरोचनजिले * हाँसेर हे केशिनि !
हामी भैं अरु कोहि बुद्धि-बलमा * पाइन्न खोजे पनि ॥९५॥
त्यै वेला सहसा स्वयंवरमहाँ * आए सुधन्वा जब ।
तिन्‌को केशिनिले गरिन् खुशि भई* सम्मान ठूलो तब ॥
आऊ बस्न सँगै विरोचनजिले * तिन्लाइ भन्दा भए ।
यस्तो बात सुनेर उत्तर सफा * ती विप्रले यो दिए ९६॥
गर्छन् आदर विप्रको रहि खडा * तिम्रा पिताले जब ।
भन्छौ बस्न सँगै तिमी मकन लौ * के हेतुले दानव !
बोले दैत्य-कुमार निर्णय गरौं * यस्को प्रतिज्ञा गरी ।
जस्को जीत हुनेछ प्राप्त त्यहि नै * गर्नेछ यी सुन्दरी ॥९७॥
बोले ब्राह्मण–प्राणको दुइ जना * हामी प्रतिज्ञा गरौं ।
यस्‌को निर्णय गर्नलाइ भरमा * तिम्रै पिताको परौं ॥
यस्तो बात गरी सरोष ति दुवै * प्रह्लादकाहाँ गए ।
आफ्नू त्यो प्रणको कुरा पनि सबै * तत्काल भन्दा भए ॥९८॥
गर्छु पूजन विप्रको भनि त्यहाँ * इच्छा गरेको सुनी ।
पैह्ले निर्णयको कुरा गर भनी * बोले सुधन्वा गुणी ॥
इच्छा छैन मलाइ पूज्य हुनको * प्रह्लादजी ! यो घरी ।
देऊ उत्तर हामिलाइ पहिले * निष्पक्ष राम्रो गरी ॥९९॥
श्रीप्रह्लादजिले भने द्विजपते ! * यौटै छ छोरो पनि ।
आफैं आउनुभो हजूर घरमा * मेरो, दयालु बनी ॥

झूटो न्याय गरेर प्राण सुतको * राख्नू छ एकातिर ।
रक्षा गर्नुछ धर्मको र द्विजको * सम्मान अकौंतिर ॥२००॥
गाह्रो पर्न गयो मलाइ अहिले * यो न्याय गर्नाकन ।
कस्तो पाप मलाइ लाग्छ नगरे * यो न्याय हे ब्राह्मण !
बोले, विप्र बुझाइ दैत्यपतिले * बिन्ती गरेको सुनी ।
झूटो निर्णय गर्छ पञ्च बनि जो * ब्रह्मघ्न त्यै हो खुनी ॥१॥
हार्ने संपति द्यूतमा र घरमा * सौता हुने स्त्रीकन ।
जस्तो नींद हुँदैन रात्रिबिचमा * हुन्छन् दुखी दुर्जन ॥
त्यस्तै पञ्च बनेर न्याय नगरे * निष्पक्ष राम्रो गरी ।
भोग्नैपर्छ मरी ठुलो नरकमा * दुष्कर्म त्यो बेसरी ॥२
गाई, अश्व, असत्य भाषण तथा * स्त्री, भूमि, सम्पत्तिको ।
हे प्रह्लाद ! बनेर रक्षक स्वयं * अन्याय गर्ने छ जो ॥
त्यस्को वंश विनाश हुन्छ सहजै * जो पितृ छन् स्वर्गमा ।
तिन्को पुण्य भएर क्षीण सहजै * पर्छन् ठुलो नर्कमा ॥३॥
सोही कारणले कुनै तरहले * सद्धर्म जाने गरी ।
बोल्दैनन् कहिले असत्य जनले * जानन् बरू ती मरी ॥
ज्ञानी धार्मिक छौ तिमी पृथिविमा * विख्यात भन्ने सुनी ।
तिम्रो पुत्र लिएर, निर्णय यहाँ * आएँ म गर्छौ भनी ॥४॥
गाई, भूमि, सुवर्ण, रत्न र अरू * चाहिन्न क्यै वैभव ।
गर्नैपर्दछ योग्य न्याय तिमिले * निष्पक्ष राम्रो अब ॥
यस्तो बात सुनीसकेर द्विजको * प्रह्लादले सादर ।
लागे भन्न बुझाइ निर्णय गरी * फर्केर छोरातिर ॥५॥
गर्छौ जिद्दी वृथा विरोचन ! तिमी * मैले भनेको सुन ।
यिन्का बाबु मदेखि श्रेष्ठ र ठुला * छन् अङ्गिरा ब्राह्मण ॥

ठूला छन् तिमिदेखि सर्वगुणमा * ज्ञानी सुधन्वा पनी ।
माफी माग समाइ पाउ द्विजको * हारें प्रतिज्ञा भनी ॥६॥
छाड्नू, प्राण लिनू दुवै छ अहिले * यी विप्रका हातमा ।
जो गर्छन् यिनिले गरुन् पर तिमी * यिन्का दुवै पाउमा ॥
यस्तो बात सुने विरोचनजिले * आफ्ना पिताको जब ।
आँटें मर्न भनेर खूब मनमा * सन्ताप माने तब ॥७॥
त्यस्तो न्याय सुनेर दैत्यपतिको * भन्छन् सुधन्वा त्यहाँ ।
तिम्रो निर्णयले प्रसन्न म भएँ * प्रह्लादजी खुब् यहाँ ॥
यो संवाद गएर केशिनीकहाँ * आफैं यिनैले भनुन् ।
यिन्को मृत्यु समान हुन्छ त्यहिनै * आएर घर्मा बसुन् ॥८॥
मैले माफ दिनेछु केहि मनमा * शंका नमानुन् यिनी ।
हुन्छिन् प्राप्त मलाइ यो किसिमले * ती सुन्दरी केशिनी ॥
इच्छा ब्राह्मणको सबै बुझिसके * प्रह्लादजीले जब ।
छोरालाइ बुझाइ काम सहजै * पूरा गराए सब ॥९॥
यस्तो न्याय गरेर दैत्यपतिले * संकष्ट टारी दिए ।
पर्दै पालन धर्मको सहजमा * छोरो बचाई लिए ॥
हे राजेन्द्र ! हजूरले पनि भई * प्रह्लाद झैं सुस्थिर ।
गर्नोस् न्याय स्वयं दुवै तरफको * कल्याणका खातिर ॥१०
मान्छन् पाण्डवले हुकुम् हजुरको * मानेर ठूलो भर ।
तिन्को भाग फिराइ बक्सनुहवस् * आफैं भई तत्पर ॥
राजन् ! सुन्नुहवस् उदाहरण लौ * दिन्छु म यो बातमा ।
दत्तात्रेयजिलाइ साध्य गणले * सोधे कुनै कालमा ॥११
तिन्ले जुन् उपदेश त्यो बखतमा * बुद्धी पुऱ्याई दिए ।
त्यो संवाद सुनाउँछु हजुरको * सुन्ने इरादा भए ॥

बोले श्री धृतराष्ट्रजी विदुरले * बिन्ती गरेको सुनी ।
हे भाई ! हितका कुरा भन तिमी * छौ वंशमा सद्गुणी॥ १२॥
नीतीपूर्वका कुरा जति-जती * सुन्छु म तिम्रो यहाँ ।
उल्टो बुद्धि हुँदा अडिन्न स्थिर भै* मेरो दुखी मन्महाँ ॥
तिम्रो अर्ति सहर्ष सुन्नतिर नै * बढ्दो छ मेरो मन ।
शान्ती प्राप्त हुने उपाय छ भने * भाई ! मलाई भन ॥१३॥
यस्तो श्री धृतराष्ट्रको विदुरले * इच्छा बुझेथे जब ।
लागे भन्न बुझाइ साध्यगणले * अर्ति सुनेको सब ॥
प्राणीमात्र समान हुन् पृथिविका * भन्ने विचारीकन ।
जो गर्छन् सबको भलो नरपते ! * हुन् श्रेष्ठ ती सज्जन॥ १४
अर्काको कुभलो चिताउनु ठुलो * हो पाप संसारमा ।
अर्काको हितभन्दा ठुलो अरु कुरा * क्यै छैन ब्रह्माण्डमा ॥
मित्रद्रोह र नीच व्यक्तिहरुको * गर्दैन जो चाकरी ।
जस्ले सक्तछ क्रोध रोक्न अभिमान्*त्यागेर राम्रो गरी ॥१५॥
वाणी बोल्दछ नम्र भैकन सदा * जो व्यक्ति सानू बनी ।
त्यस्को आदर हुन्छ लोकभरिमा * ज्ञानी यिनै हुन् भनी ॥
अर्काको ननिको कुरा रिस त्यजी * जुन् व्यक्तिले खप्तछन् ।
तिन्को त्यै गुणले गरी पृथिविमा * मानी ठुलो बन्दछन् ॥१६॥
सक्छन् बस्न भने नबोलिकन नै * बस्नू छ राम्रो अति ।
बोल्नै पर्छ भने त सत्य जनले * बोल्नू नढाँटी रती ॥
वाणी सत्य र धर्मसम्मत तथा * सुन्दा नबिझ्ने भए ।
गर्छन् आदर लोकले अझ बढी * गम्भीर बन्दै गए ॥१७॥
जे-जे देखि हटाउँ चित्त म भनी * जुन् व्यक्तिले खोज्दछन् ।
तिन्ले त्यो चिजबाट चित्त सहजै * हे भूपती ! फेर्दछन् ॥

जस्ले सक्छ अधर्मबाट मन यो * आफ्नू फिराई लिन ।
त्यस्ले यी सुख-दुःख पाप भवका * पर्नेछ भोग्नू किन ! ॥१८
शिक्षा धर्म र नीति साध्यगणले * आत्रेयजीको सुनी ।
फर्के आश्रममा प्रसन्न मनले * ढोगेर जान्छौं भनी ॥
यो वार्ता धृतराष्ट्रले विदुरको * सारा सुनेथे जब ।
सोधे फेरि कुरा अशान्ति मनमा * बढ्दै गएको सब ॥१९
नीतीपूर्वकका कुरा विदुरजी ! * ऐहे सुनायौ जति ।
साँचा हुन्न ति सबै भनेर मनमा * जान्दैछु हे सद्मति !
के गर्नू ! तर पुत्र-प्रेम बलियो * मन्मा गडेको हुँदा ।
त्यो दुर्योधनको कुरा म खुशिले * मान्छू सदासर्वदा ॥२०॥
त्यस्को बात म काटनलाइ सहसा * आँटे पनी सक्तिनँ ।
चिन्ता बढ्न गई रहन्छु म सदा * दुःखी त्यसै कारण ॥
साह्रै वृद्ध भएँ म भोग अब के * गर्नेछु बाँकी कति ।
व्यर्थै ठान्छु विरोध गर्नु सुतकै * हो राज्य यो सम्पति ॥२१
मान्नु बालक छैन जान्दछ सबै * राम्रो नराम्रो अब ।
मान्दैनन् हितका कुरा अब भने * मर्छन् सबै कौरव ॥
ठूलो कुन् कुललाइ लोकहरूले * वा वेदले भन्छदन् ।
कस्तालाइ घृणा गरेर जनले * पापीमहाँ गन्दछन् ॥२२॥
हे भाई ! कुलको बताउ तिमिले * राम्रो गरी लक्षण ।
इच्छा बढ्न गयो म सुन्दछ यही * सन्तोष मानी कन ॥
यस्तो श्री धृतराष्ट्रको विदुरले * इच्छा बुझेथे जब ।
जानेको जति वंश लक्षणहरू * ती भन्न लागे सब ॥२३॥
राजन् चल्दछ होम-दान, तप औ * यज्ञादि जुन् वंशमा ।
ज्ञानी धार्मिक औ जितेन्द्रियहरू * छन् धेर जुन् अंशमा ॥

जस्ले गर्छ विवाह वेदहरुको * आचार मानी कन।
राजन् ! जान्नुहवस् कुलीन जनका* हुन् सात यी लक्षण ॥२४
छैनन् जुन् कुलमा खराब र झुटो * बोल्ने कुनै मानिस।
अर्काको धन खोस्न जुन् कुल कहीं * गर्दैन दुःसाहस ॥
श्रद्धापूर्वक धर्ममा रत हुनन् * जुन् वंशका बान्धव।
त्यस्को उन्नति हुन्छ सोहि कुल नै* हो श्रेष्ठ भन्छन् सब ॥२५
गर्छन् आदर वृद्धको, अतिथिको * जुन् वंशमा भूपति।
छन् जस्का पतिभक्तिमा रत हुने* नारी सुशीला सती ॥
शिक्षा बालक, बालिकाकन दिई * जुन् वंशमा पाल्दछन्।
सोही वंश उदार श्रेष्ठ सबले * संसारमा मान्दछन् ॥२६॥
गर्दैनन् तप-दान-धर्म, गुणको * जुन् वंशमा आदर।
हिंसा गर्न भनेर जुन् कुलमहाँ * हुन्छन् सबै तत्पर ॥
अर्काको धन, दार खोस्न झगड़ा * जुन् वंशमा गर्दछन्।
त्यै नीचो कुल हो, मरी नरकमा * पापी तिनै पर्दछन् ॥२७॥
ठुलो राज्य जमीन, ग्राम अथवा * संपत्ति होस् तापनि।
जस्को चाल कुचाल देख्तछ भने * को भन्छ ठूलो भनी ॥
जस्को छैन कुचाल संपति बरू * थोरै भए तापनि।
संतोषी र उदारको कुल सदा * मानिन्छ ठूलो भनी॥२८
सम्पत्ति नभए पनी घरमहाँ * संतोष मानी कन।
राम्रो आसनमा बसालि अतिथी * -लाई दिई भोजन ॥
गर्छन् आदर प्रेमपूर्वक मिठो * बोलेर जो सज्जन।
ती सक्छन् सबलाइ राख्न वशमा* राजी गराईकन ॥२९॥
जस्को हुन्छ कुचाल यो पृथिविको* राजा भए तापनि।
त्यो होला असमर्थ मानिसहरू * आफ्ना गराऊँ भनी ॥

त्यस्तै पाण्डवको लिई हक सबै * पापिष्ट दुर्योधन ।
गर्दैछन् जसरी कुचाल त्यसरी * गर्नेछ कुन् सज्जन ॥३०॥
राम्रा मित्रहरू सहाय नभई * क्यै कामना सिद्धिको ।
आशा गर्नु वृथा छ शक्ति सबले * भन्छन् त्यही श्रेष्ठ हो ॥
त्यस्तै पाण्डव बन्धु हुन् हजुरका * तिन्को विरोधी बनी ।
हाँस्नन् शत्रु जती सबै सफलता * मिल्दैन कैह्ले पनि ॥३१
हुन्छन् वृक्षहरू बली नजिकमै * प्रत्येकको आडले ।
हे राजेन्द्र ! उखेलिंदैन सहसा * चर्को ठुलो वायुले ॥
त्यस्तै पाण्डुकुमारका सँग मिली * ऐह्ले बसे कौरव ।
सक्तैनन् यिनिलाइ जित्न सहसा * द्यौता तथा दानव॥३२॥
आशा सम्पतिको गरेर अथवा * मानी कसैको डर ।
जस्ले गर्दछ मित्रता विपतिमा * मानिन्न तिन्को भर ॥
मैत्री गर्छ सदैव शुद्ध मनले * जो शान्तिका खातिर ।
गर्छन् मित्र भनेर सज्जनहरू * त्यै व्यक्तिको आदर ॥३३
क्रोधी, नास्तिक, भीरु, लम्पट तथा * पापी, कृतघ्नीसित ।
मैत्री गर्नु हुँदैन दुष्ट जनले * गर्दैन कैह्ले हित ॥
गर्नोस् प्रेम सहर्ष पाण्डुसुतको * जो भाग हो सो दिई ।
गर्नन् आदर ती सदा हजुरको * अत्यन्त सानू भई ॥३४॥
बोल्ले श्री धृतराष्ट्र, ती विदुरले * शिक्षा दिएको सुनी ।
हे भाई, तिमिले भने जति कुरा * हुन् सत्य ती तापनि ॥
त्यो दुर्योधनको कुरा म सहसा * सक्तीनँ काटी दिन ।
माया-मोह हटाउने यदि भए * युक्ती मलाई भन ॥३५
जो-जो गर्छु विचार भाइ, मनमा * कल्याण होला भनी ।
बढ्दै जान्छ अशान्ति झन् मनमहाँ* सन्ताप दाता बनी ॥

मर्छन् मानिस लोकमा थरिथरी * वेला नपुग्दै किन ?
ठान्दैछ्छ पुरुषार्थ व्यर्थ जनको * मैले त्यसै कारण ॥३६
माया मोह र दुःख-शोक भवका * छन् जो कड़ा बन्धन ।
तिन्को नाश हुने उपाय छ भने * भाई, मलाई भन ॥
यस्तो श्री धृतराष्ट्रको विदुरले * आज्ञा सुनेथे जब ।
लागे भन्न बुझाइ बात हितको * जाने सुनेको सब ॥३७॥
छोरालाइ गरेर स्नेह घरमा * मानीसले पाल्दछन् ।
सोही पुत्र मऱ्यो भने सब रुँदै * बाहीर ती फाल्दछन् ॥
पोल्छन् काठ समान बन्धुहरूले * राखी चितामा जब ।
त्यस्को हुन्छ शरीर भस्म, अरुले * नै भोग्दछन् वैभव ॥३८॥
जान्छन् पुण्य र पाप मात्र सँगमा * ती व्यक्तिको भूपति !
भोग्नूपर्दछ कर्म त्यै पुरुषले * आफ्नू गरेको जति ॥
सोही कारणले लगाउनु सदा * सत्कर्ममा नै मन ।
तोड़ी दिन्छ सुकर्मले बखतमा * मोहादिको बन्धन ॥३९॥
मैले ज्ञान बुझाइ भन्न श्रुतिको * बाधा हुनाले गरी ।
सुन्नूहोस् उपदेश ब्राह्मण गुणी * डाकी सबै राम्ररी ॥
ज्ञानी श्रेष्ठ सनत्सुजात ऋषि छन् * सत्पुत्र ब्रह्माजिका ।
दिन्छन् ती उपदेश योग्य रितले * ज्ञाता हुँदा वेदका ॥४०॥
यस्तो बात सुनेर श्री विदुरको * झन् चाख मानीकन ।
सोधे श्री धृतराष्ट्र ती ऋषिजिको * होला कहाँ दर्शन ?
जे सक्छौ उपदेश देउ तिमी नै * भाई ! मलाई यहाँ ।
जाऊँ खोज्न म रातका बिचमहाँ * ती विप्रलाई कहाँ ? ॥४१॥
यस्तो श्री धृतराष्ट्रको विदुरले * इच्छा बुझी राम्ररी ।
थाले झट्ट सनत्सुजात गुरुको * आराधना त्यै घरी ॥

तिन्को प्रेम बुझी ऋषीश्वर त्यहीं * आई दिए दर्शन ।
पाद्यार्घादि गरी भने विदुरले * पाऊ समाईकन ॥४२॥
शंका श्री धृतराष्ट्रजीकन गुरो ! * केही कुरामा भयो ।
त्यस्को नाश गरी दिए हजुरले * अज्ञान जाने थियो ॥
मैले ज्ञान बुझाइ भन्न नहुने * बाधा हुनाले गरी ।
ठूलो कष्ट दिएँ हजूरकन लौ * डाली यहाँ यो घरी ॥४३
काम-क्रोध र लाभ-हानि, प्रिय औ* छन् वस्तु जो अप्रिय ।
भोक-प्यास र मर्नु-जन्मनु तथा * आलस्य, चिन्ता, जय ॥
गिर्नू उन्नतिको पुगी शिखरमा * इत्यादि केही पनि ।
बाधा भूपतिलाइ गर्न नसकुन् *शिक्षा दिनोस् यै मुनि ॥४४
यस्तो विन्ति गरी बसे विदुरजी * त्यै ठाउँमा क्यै पर ।
सोधे श्री धृतराष्ट्रले ति ऋषिको * गर्दै ठूलो आदर ॥
मैले सुन्दछु मृत्यु छैन जनको * संसारमा हे मुनि !
माया मोह महाँ डुबेर दुनियाँ * देख्छु मरेको पनि ॥४५॥
सोही मृत्यु गरौं निवारण भनी * द्योता तथा दानव ।
गर्छन् पालन ब्रह्मचर्य व्रतको * साना र ठूला सब ॥
यस्मा के छ विचार लौ हजुरको * भन्नोस् बुझाईकन ।
थाले भन्न सनत्सुजात ऋषिले * तिन्को बुझाई मन ॥४६॥
हे राजन् ! ति दुवै कुरा हजुरका * हुन् सत्य नै तापनि ।
मैले ठान्छु प्रमाद व्यक्तिहरूको * हो प्राणहर्ता भनी ॥
गर्दा त्याग प्रमादको अमरले * पर्दैन मर्नू कबै ।
मर्छन् दानव त्यै प्रमाद बिचमा * चुर्लुम्म डुब्दा सबै ॥४७॥
हो यो निश्चय व्याघ्र झैं मरणले* गर्दैन लौ भक्षण ।
त्यस्को रूप कुनै पनी नयनले * देखिन्न त्यै कारण ॥

काम, क्रोध, प्रमाद, लोभहरूमा * राम्रो गरी गाड़िदा ।
जान्दैनन् भगवानलाइ जनले * हुन्छन् दुखी सर्वदा ॥४८॥
जस्ले चिन्दछ ब्रह्मलाइ जन त्यो * संसार पारी भयो ।
जो गर्दैन प्रत्यत्न मुक्तितिर त्यो * चौरासिमा गाड़ियो ॥
जस्ले रोक्दछ चित्तवृत्ति, मनको * आशक्ति त्यागी कन ।
गर्ला त्यो नडराइ मृत्यु पथको * सानन्द आलिङ्गन ॥४९॥
शुद्ध ब्रह्मस्वरूप उज्वल छ जो * देदीप्य ज्योतिर्मय ।
कीर्ति श्रेष्ठ छ सूर्य झैं जगतमा * मानिन्न जस्को क्षय ॥
त्यस्ता श्री भगवानका चरणमा * आफ्नू लगाई मन ।
साक्षात्कार गरी परंपद महाँ * पुग्छन् ति योगीजन ॥५०
ढाकेको छ दिशा समुद्र पृथिवी * जुन् ब्रह्मको तेजले ।
देखिन्छन् रवि-चन्द्र जुन् पुरुषको * आफ्नो ठुलो शक्तिले ॥
आफू भिन्न रहेर लोकहरूको * जो गर्छ संचालन ।
साक्षात्कार गरी तिनै पुरुषको * तर्छन् सुयोगी जन ॥५१
जस्को गर्न सकिन्न तौल, तुलना * आँटे पनी भूपति !
जसले निश्चय बुद्धिले र मनले * चिन्छन् सकेको जति ॥
छालाका दुइ नेत्रले नरपते ! * देखिन्न जुन् चिद्घन ।
तिनूको ध्यान गरी सदा हृदयले * हुन्छन् सुखी सज्जन ॥५२
जन्मन्छन् सब यी चराचरहरू * जस्का कृपाले गरी ।
चेष्टा ती सब गर्दछन् जगतमा * क्यै काल नाना थरी ॥
हुन्छन् लीन मरेर क्यै दिनपछी * ब्रह्मज्ञ जुन् ब्रह्ममा ।
साक्षातकार गरी तिनै पुरुषको * बस्छन् गुणी ध्यानमा ॥५३
जस्तै व्याप्त छ भित्र बाहिर सबै * हे भूप ! आकाशले ।
ढाकेको छ सबै त्यही किसिमले * आत्मा सधैं ब्रह्मले ॥

भुल्दा इन्द्रियको झुटो सुखमहाँ * चिन्दैन जो ईश्वर ।
मर्नू जन्मनुरूप कष्ट भवको * भोग्ने त्यही हो नर ॥५४॥
जस्ले चिन्दछ ब्रह्मलाइ मनले * गर्दै रही चिन्तन ।
सोही पुग्छ मरी परमपदमहाँ * तोड़ी सबै बन्धन ॥
जस्ले गर्दछ ब्रह्मचर्य व्रतको * आनन्दले पालन ।
आत्मालाइ चिन्हेर ब्रह्मपदको * गर्नेछ त्यो दर्शन ॥५५॥
जस्ले इन्द्रियका सबै सुखहरू * झूटो भनी ठान्दछन् ।
तिन्ले ईश्वरलाई योगबलले * हे भूपति ! चिन्दछन् ॥
फेर्छन वस्त्र नवीन, जीर्ण तनको * त्यागेर जस्तो गरी ।
त्यस्तै फेर्दछ जीवले शरिर यो * वेला पुगेका घरी ॥५६॥
अज्ञानी जन ठान्दछन् मरण हो * भन्ने त्यही जीवको ।
सोही कारण भोग्दछन् दुखहरू * दुर्बुद्धिले लोकको ।
आफ्नू बान्धव वा अरु जन कहीं * कोही मरे तापनि ।
ज्ञानी जान्दछ नित्यरूप कहिल्यै * मर्दैन आत्मा भनी ॥५७
राजन् ! मुख्य छ ब्रह्मचर्य व्रत नै * गर्नू सदा पालन ।
त्यस्ले देवहरू मिली अमरता * बस्छन् सुखी भैकन ॥
मर्छन् दानव ब्रह्मचर्य व्रत नै * त्याग्दा दुखी भैकन ।
त्यस्को गर्न सकिन्न योग्य रितले* आँटे पनी वर्णन ॥५८॥
आर्काको उपकारमा मन दिनू * गर्नू प्रजा पालन ।
गर्नू आदर प्रेमले अतिथिको * श्रद्धा बढ़ाई कन ॥
इच्छा पूर्ण हुने गरी बखतमा * बाँड्नू खुशीले धन ।
यस्ले सिद्ध हुनेछ कार्य, नृपका * हुन् श्रेष्ठ यी लक्षण॥५९॥
ब्रह्मज्ञान हुने र धर्म-पथको * शिक्षा दिई राम्ररी ।
अन्तर्धान भई ऋषीश्वर भए * मागी बिदा त्यै घरी ॥

त्यो रात्री नृपलाइ नींद निशिमा * लाग्दै नलागी कन ।
प्रातःकाल भई उदाउनु भयो * श्री सूर्यनारायण ॥६०॥

सञ्जयले पाण्डवहरूको समाचार सुनाएपछि कौरवको विवाद :—

भोलीपल्ट सभा भएपछि सबै * जम्मा भए कौरव ।
ल्याएको समचार सञ्जय पुगी * बिन्ती चढाए सब ॥
हे राजेन्द्र ! समस्त कौरवहरू * जम्मा भएका घरी ।
भन्नूभो जति बात धर्मसुतले * भन्छु म वर्णन् गरी ॥६१॥
राजा शान्तनुका कुमारहरूमा * श्री भीष्म जेठा भए ।
कान्छा भाइ दुवै जनाकन स्वयं * साम्राज्य तिन्ले दिए ॥
दोटै भाइ मरेपछी ति दुइका * छोराहरू जो थिए ।
तिन्मा पाण्डुजिलाइ लायक बुझी * साम्राज्य यो सुम्पिए ॥६२
सोही भीष्म छँदै कचिङ्गल झिकी * ऐह्ले विना कारण ।
मेरो राज्य भनी घमण्ड यसरी * गर्छन् वृथामा किन ॥
यो साम्राज्यमहाँ छुटचो हक अघी * तिन्को पिताकै जब ।
बाबूकै हक सिद्धिएपछी, अनी * यिन्को रहन्थ्यो कब ॥६३
हाम्रो राज्यमहाँ दया गरि ठुलो * आधा दिंदा भीष्मले ।
बन्छन् मालिक राज्यका कुरुहरू * मेरो भनी द्वेषले ॥
आधा राज्य स्वयं पितामहजिले * सुम्पी दिए तापनि ।
आधा राज्य दिउन् प्रसन्न मनले * हामीहरूको तिनी ॥६४
यस्ले मेल रहन्छ हामिहरूको * पैह्ले भएकै सरी ।
ठूलो नाश हुनेछ नत्र, हकको * तिम्ती लड़ाई परी ॥
हाम्रो भागसमेत् छलेर कुरुले * आफ्नू तुल्याई लिनू ।
हामीले निज-राज्य क्षत्रिय भई * के हेतु छाड़ीदिनू ॥६५॥

हामीलाइ अनीतिपूर्वक अघी * जस्तो बिइज्जत् गरे ।
जूवा खेल्न भनेर डाकि छलले * सम्पत्ति हाम्रो हरे ॥
जान्नूहुन्छ सबै जना गरु कति * त्यो बातको वर्णन ।
त्यस्को न्याय गरुन् उपस्थित त्यहाँ * होलान् जति सज्जन ॥६६
सामुन्ने धृतराष्ट्र, भीष्म दुइ छन् * मालीक ज्यू दै जब ।
त्यो दुर्योधनले म गर्दछु यसै * नै भन्न सक्ला कब ?
मान्ने ती दुइले दुवै तरफको * कल्याण सोचीकन ।
जे गर्दा हित हुन्छ त्यै गरिदिउन् * चाँडो लगाई मन ॥६७
यो संवाद समस्त सञ्जयजिले * पैह्ले गरी वर्णन ।
माद्रीका दुइ पुत्र, अर्जुन तथा * श्री भीमको गर्जन ॥
ज्ञानी सञ्जयले पराक्रम सहित् * सारा सुनाए जव ।
आज्ञा गर्नुभयो पितामहजिले * नीती बुझाई सब ॥६८॥
जो सम्चार भने यि सञ्जयजिले * ती पाण्डुका पुत्रको ।
जानून् कौरवका सभासद सबै * सारा कुरा सत्य हो ॥
सक्थे पाण्डवले लड़ेर अघि नै * यो राज्य खोसी लिन ।
काटे जङ्गलका सबै दुखहरू * सम्झी प्रतिज्ञाकन ॥६९॥
आफ्नू संझि कबोललाई कुरुले * पैह्ले गरेको अब ।
फिर्ता पाण्डु-कुमारको गरिदिउन् * जो भाग हो त्यो सब ॥
श्री दुर्योधनले प्रसन्न मनले * यो राज दिन्नन् भने ।
गर्छन् पाण्डव युद्ध, कौरवहरु * छन् व्यर्थमा मारिने ॥७०॥
जित्ने पाण्डवलाइ वीर रणमा * क्वै छैन हामीतिर ।
तिन्ले गर्नु लडाइँ योग्य पनि हो * साम्राज्यका खातिर ॥
गर्नू कौरवले लड़ाइँ अनुचित् * ठान्छु अनीती पनि ।
जिद्दी त्याग गरुन् सुयोधनजिले * कल्याण हाला अनि ॥७१

यस्तो बात त्यहाँ पितामहजिले * आज्ञा भएको सुनी ।
बोले कर्ण रिसाइ खूब मनमा * हेलाँ गरे यो भनी ॥
गर्नूहुन्छ सदा अनादर बृथा * हे भीष्म ! मेरो किन ?
मैले के अपराध वीर कुरुको * कैह्ले गरें लौ भन ॥७२॥
कस्तै श्रेष्ठ भए पनि यि कुरुका * हुन् शत्रु ती पाण्डव ।
तिन्को भाग दिएर मेल गरि के * कल्याण होला अब ? ॥
आफ्ना बान्धव हुन् तथापि खुशिले* साम्राज्य सुम्पी दिनू ।
श्री दुर्योधनले स्वयं अघिसरी * हो काल डाकी लिनू ॥७३
एक्लै युद्ध गरेर पाण्डवहरू * -लाई म मार्छु भनी ।
आँटेकै छु मलाइ मद्दत दिने * चाहिन्न कोही पनि ॥
श्री दुर्योधनले बृथा मनमहाँ * पर्दैन चिन्ता लिन ।
बारंबार मलाइ भीष्म यसरी *होच्याइ भन्छन् किन ॥७४
राधाका सुतको कुरा सुनिसकी * श्री द्रोण आचार्यले ।
शेखी तोड्न भनेर क्रोधित भई * बोल्दा भए रोषले ॥
बोल्छौ व्यर्थ बढी सभाबिच तिमी * हे कर्ण ! धेरै किन ।
एक्लै पूर्ण गर्‍यौ कहाँ कति कुरा * श्रीपार्थ भैं लौ भन !॥७५
यी दुर्योधनलाइ चित्ररथले * बाँधी लछार्दै थिए ।
भाग्यौ प्राण बचाइ अर्जुन गई * मुक्ती दिलाई दिए ॥
पैह्ले द्रौपदिको स्वयंवर हुँदा * लड्छु भनेका थियौ ।
पाई चोट ठुलो त्यहाँ पनि तिमी * भागेर बाँची गयौ ॥७६॥
तिम्रै सम्मतिले विराट नृपको * गाई हरेका घरी ।
एक्लै अर्जुनले जिते कुरुहरू * -लाई लड़ाई गरी ॥
भाग्यौ प्राण लिएर लड्न नसकी * भाई मराई कन ।
भन्छौ पाण्डवलाइ मार्दछु तिमी * त्यागेर लज्जा किन ?७७

जे जे काम गरे खराब कुरुले * तिम्रौं लिई सम्मति ।
जाहेरै छ सबै सभासदहरू * -लाई बताऊँ कति ?
श्री दुर्योधनले विचार नगरी * गर्छन् लड़ाइँ भने ।
होला हार अवश्य बान्धव सबै * छन् व्यर्थमा मरिने ॥७८
द्रोणाचार्यजिको कुरा सुनिसकी * देखी नराम्रो स्थिति ।
राधाका सुतलाइ श्री विदुरले * आफ्नू दिए सम्मति ॥
एक्लैले लड मर्नको मन भए * हे कर्ण ! संग्राममा ।
सारा कौरव वीर मार्न किन यो * खोज्छौ निहुँ व्यर्थमा ॥७९
पौलोमादि अनेक दानव जिते * जस्ले लड़ाइँ गरी ।
पोले खाण्डवलाइ देवगणको * सम्पूर्ण शेखी हरि ॥
त्यस्ता अर्जुनका लड़ेर सँगमा * कल्याण होला भनी ।
शेखी गर्नु वृथा छ, आश मनको* पुग्दैन कैल्है पनि ॥८०॥
शिक्षा यै रितको दिए विदुरले * श्री कर्णलाई जब ।
सारा सज्जनले समर्थन गरे * हो योग्य भन्दै सब ॥
संध्याकाल भयो विवाद कुरुको * सारा अपूरो रह्यो ।
पालै साथ उठी सबै सुजनको * घर्मा सवारी भयो ॥८१
पाल्नुभो धृतराष्ट्रजी महलमा * केही नबोली कन ।
श्री दुर्योधनलाइ डाकि निशिमै * भन्छन् दुखाई मन ॥
बाबू ! पाण्डवको सबै हक तथा * देऊ फिराई धन ।
तिन्का साथ गरी लड़ाइँ म भलो * हाम्रो हुने देख्दिनँ॥८२॥
यो शिक्षा, हितको कुरा अरु सुने * आफ्ना पिताको जब ।
श्री दुर्योधनले भने—नरपते ! * चिन्ता छ केको अब ॥
योद्धा कर्ण, विकर्ण, द्रोण, शकुनी* छन् भीष्म हाम्रातिर ।
लड्छन् पाण्डवले भनेर मनमा * के हेतु मान्ने डर ? ॥८३

छोराको धृतराष्ट्रले जब सुने * त्यो मूर्ख झैं उत्तर ।
लागे भन्न बुझाइ फेरि अघि झैं * क्यै शान्तिका खातिर ॥
मान्दैछौ जति वीरको समरमा * साहाय गर्ने भर ।
गर्छन् बात मिलापको, अघिसरी * को लड्न सक्नेछर ?८४
श्री दुर्योधन कालका वश परी * शिक्षा पिताको सुनी ।
भन्छन् मद्दत हे पिता ! म अरुको* मान्दीनँ कैल्है पनि ॥
भीष्म, द्रोण तथा अरू पनि सबै * योद्धाहरू छन् जति ।
इच्छा छैन भने लड़ाइँ नगरुन् * शंका नमानी रती ॥८५
राधाका सुत कर्णका सँग गई * एक्लै लड़ाइँ गरी ।
मार्छु पाण्डव वीरलाइ सहजै * संपूर्ण शेखी हरी ॥
भूमी पाण्डवलाइ दिन्नँ खुशिले * सीयो गड़ाए जति ।
तिन्का साथ मिलेर बस्न म कवै * सक्तीनँ हे भूपति ! ॥८६॥
मार्छन् पाण्डवले मलाइ कि भने * तिन्लाइ मार्छु भनी ।
त्याहाँबाट हिंड़े सुयोधन उठी * क्रोधित् र दुःखी बनी ॥
होला मेल भनेर आफ्नु मनमा * जो भूपतीको थियो ।
छोराको सुनि बात क्षीण भइ त्यो* सारा हराई गयो ॥८७॥

श्रीकृष्ण-दूतः—

डाकी बन्धु समस्त धर्मसुतले * ठूलो तयारी गरी ।
राखी श्री हरिलाई सादर गरे * यौटा सभा त्यो घरी ॥
मारी बान्धवलाइ राज्य कसरी * मैले लिने हे हरि !
बाँच्ने हो कसरी विपत्ति खनियो * सार्है नरास्रो गरी ॥८८
गाऊँ पाँच मलाई बस्न कुरुले * आजै खुशीले दिए ।
मेरा भाइहरू मिलेर त्यहिं नै * सानन्द बस्ने थिए ॥

दिन्नन् ग्राम मलाई बस्न कुरुले * राजी खुशीले भने ।
बाटो युद्धसिवाय देख्दिनँ अरू * आजीविका पाइने ॥८९॥
मर्छन् युद्ध भयो भने नजिकका * आफ्ना सबै बान्धव ।
केही युक्ति भए बताउनुहवस् * तत्काल हे माधव ! ॥
दुःखी भैकन श्री युधिष्ठिरजिले * बिन्ती गरेको सुनी ।
आज्ञा भो हरिले मिलाउन त्यहाँ * जान्छु म आफैं पनि ॥९०॥
गर्छु यत्न मिलापको गरि कुरा * मैले सकेको जति ।
माने बात भने कुनै तरहको * होवैन तिन्को खति ॥
मेरो अर्ति सबै सुयोधन अघी * मान्थे भनेको जति ।
मानेनन् अहिले कुरा यदि भने * होला ठुलो दुर्गति ॥९१॥
जाने दूत भएर निश्चय भयो * श्री कृष्णजीको जब ।
बोले भीम असाध्य दुःख मनमा * मानेर हे माधव ! ॥
हाम्रो मेल गराउनाकन त्यहाँ * जानोस् खुशीले तर ।
गर्दैनन् कुरु-वीरले हजुरको * वार्ता सुनी आदर ॥९२॥
गाऊँ पाँच दिलाइ मेल प्रभुले * हाम्रो गराई दिए ।
लिन्नौं वैभव राज्य, बान्धवहरू * सम्पूर्ण बाँच्ने थिए ॥
यस्तो साहस-हीन बात हरिले * सुन्नुभथ्यो जब ।
तिन्को साहस वृद्धि गर्न अघि भैं * आज्ञा भयो यो तब ॥९३॥
खोज्छौ मिल्न दबेर हीनसरि भैं * हे भीम योद्धा ! किन ?
लाग्यो की डर क्यै सुनी समरको * वार्ता मलाई भन ।
जस्ले मार्न भनी तयार विषका * लड्डू खुवाई कन ।
आँटेथ्यो सबलाइ जुन् पुरुषले * पोलेर मारी दिन ॥९४॥
जस्ले द्यूतमहाँ छली हक लियो * हे वीर ! तिम्रो धन ।
जस्ले वस्त्र धरी बिइज्जत गऱ्यो * श्री द्रौपदीजी कन ॥

त्यो दुर्योधनलाइ माफ कसरी * सक्छौ र दिन्छौ भन ।
विर्सेर्छौ बुझियो गरे जति सबै * त्यस्लाइ मार्ने प्रण ॥९५
यस्तो श्री हरिको कुरा सुनी भए * श्री भीम उत्तेजित ।
राता नेत्र गराइ क्रोधित हुँदै * बोले मुरारीसित ॥
मेरो शक्ति तथा पराक्रम सबै * जानेर राम्रोसित ।
विर्सेछौ प्रण' त्यो भनेर कसरी * आज्ञा भयो अच्युत ॥९६
गर्नु बान्धवको विनाश रणमा * हो पाप ठूलो भनी ।
इच्छा राखि मिलापको गरिदिएँ * प्रस्ताव मैले पनि ॥
आफैं गर्नु बढाइँ आफ्नु मुखले * हो मूर्खता हे हरि !
भन्नूभो अहिले मलाइ प्रभुले * अत्यन्त बिझ्ने गरी ॥९७
सोही कारणले म भन्दछु त्यहाँ * छन् शत्रु मेरा जति ।
एक्लै मार्न म सक्तछु समरमा * बाँकी नराखी रती ॥
जानेको छ मलाइ जुन् पुरुषले * छन् भीम यस्ता भनी ।
त्यस्ले 'कायर भीम हुन्' हजुर झैं* भन्दैन कैल्है पनि ॥९८॥
भीष्म, द्रोण र कर्ण, दुष्ट शकुनी * छन् जो अरू कौरव ।
सारालाइ म मार्न सक्छु रणमा * एक्लै डटी माधव !
ब्रह्मा, शम्भु,फणीन्द्र, इन्द्र, यमले* मद्दत् दिए तापनि ॥
पक्का भन्दछु दुष्ट कौरवहरू * सम्पूर्ण मर्छन् भनी ॥९९॥
देख्नूहुन्छ हजूरले समरमा * मेरो पराक्रम् जब ।
खुलां गर्नु त्यहाँ स्वयं हजुरले * मेरो प्रशंसा तब ॥
गर्थ्यो केवल ख्याल बन्धुहरूको * दुष्कर्मको यो घरी ।
मिल्ने आपुसमा कुराहरु गरें * मैले यहाँ हे हरि ॥२००
सक्नू हुन्छ भने दुवै तरफको * कल्याणका खातिर ।
हाम्रो मेल गराउनोस् हजुरले * आफैं भई तत्पर ॥

सुन्नूभो जब यो यथोचित कुरा * श्री भीमको कृष्णले ।
आज्ञा गर्नुभयो प्रसन्न म भएँ * यो श्रेष्ठ उत्साहले ॥१॥
तिम्रो साहस वृद्धि गर्न अघि जो * मैले सुशिक्षा दिएँ ।
त्यसको पाइ सुयोग्य उत्तरहरू * अत्यन्त खुशी भएँ ॥
दैवाधीन भएर कर्म गरने * मानिन्छ त्यो कायर ।
तिम्रो नै सब मान्दछन् समरमा * हे भीम ! ठूलो भर ॥२॥
गर्नू कर्म भनी सहर्ष हरिले * शिक्षा दिएको सुनी ।
लागे भन्न झुकी विनम्र स्वरमा * श्री पार्थजीले पनि ॥
हे दामोदर ! श्री युधिष्ठिरजिले * आज्ञा भयो जे जति ।
मैले गर्छु कुरा समर्थन त्यही * आनन्द मानी अति ॥३॥
मान्नेछैन हजूरको सुनि कुरा * कुन् व्यक्ति ब्रह्माण्डमा ।
कस्ले गर्छ विरोध भाइहरूको * कल्याणको बातमा ॥
हाम्रो मेल गराइबक्सनुहवस् * चाँडै सकेको जति ।
बस्छौं दास भई सदा हजुरकै * देख्दीनँ अर्को गति ॥४॥
तिन्को चित्त बुझाउँदै दिनुभयो * श्री कृष्णले उत्तर ।
बोले त्यै बिचमा उठी नकुलजी * हेर्दै मुरारी तिर ॥
मान्दैनन् कहिल्यै मिलापतिरको * प्रस्ताव दुर्योधन ।
गर्नू पर्छ लडाइँ निश्चय यही * भन्दैछ मेरो मन ॥५॥
मान्दैनन् कुरुवीर क्यै गरि भने * भन्नू हजुर्ले त्यहाँ ।
साटो फेर्न तयार पाण्डवहरू * छन् युद्धभूमि महाँ ॥
हाम्रा खूब अपार सैनिकहरू * जम्मा भएका सुनी ।
हे श्रीकृष्ण ! अवश्य मेल डरले * गर्लान् कि भन्छ तिनी॥६
बोले श्री सहदेवजी नकुलले * बिन्ती गरेको सुनी ।
हाम्रा दाजुहरू मिलापतिरको * गर्छन् कुरा के भनी ॥

सम्झन्छु सब कष्ट दुष्टहरूले * पैह्ले दिएका जति ।
गर्दा बात मिलापको म मनमा * सन्ताप मान्छु अति ॥७॥
त्यो पापी शकुनी, सुयोधन तथा * त्यो कर्ण, दुःशासन ।
यिन्को शोणितले भिजाइ पृथिवी * होला खुशी यो मन ॥
मिल्ने बात गरे पनी हजुरले * मान्दै नमानी कन ।
गर्नोस् यत्न लड़ाइँकै तरफको * हे नन्दका नन्दन ॥८॥
यस्तो श्री सहदेवको सुनि कुरा * श्री सात्यकीले भने ।
दिन्नन् कौरवले सहर्ष, हक हो * संग्रामले पाइने ॥
भन्नूभो सहदेवले जति कुरा * हामीहरूले पनि ।
गर्दैछौं खुशिले समर्थन यही * हो श्रेष्ठ बाटो भनी ॥९॥
यस्तो सात्यकिको कुरा सुनिसकी * श्री द्रौपदी सुन्दरी ।
सम्झी कौरवको अनीति मनमा * दुःखी भई बेसरी ॥
बाहू जोरी दुवै विनीत स्वरले * बिन्ती गरिन हे हरि !
मेरा यी पति चारको म कसरी * निन्दा गरूँ यो घरी ॥१०॥
जस्तो दीन बनी दिए मन स्वयं * सम्पूर्ण सुन्नुभयो ।
वार्ताले सहदेवको अलिकती * शान्ती मलाई दियो ॥
चुल्ठो पक्रि मलाइ सामु सबका * जस्ले लछार्दै लग्यो ।
'जाओ जङ्गलमा छिटै पशु' भनी * जस्ले लखेटी दियो ॥११
त्यस्तालाइ क्षमा गरेर खुशिले * मिल्ने कुरा गर्दछन् ।
स्वामीका सुनि बात नाथ ! मन यो* त्यै पीरले रुन्छ झन् ॥
पैह्ले पाण्डवलाइ दुष्ट कुरुले * सन्ताप जस्तो दिए ।
आफ्नू धर्म-कबोल सम्झि सब त्यो * संकष्ट खप्तै गए ॥१२॥
स्वामीको सब त्यो कबोल पनि ता* हे नाथ ! पूरा भयो ।
व्यर्थै कौरवदेखि पाण्डु-सुतले * दब्ने कुरा के रह्यो ! ॥

अत्याचार अरू ति दुष्ट कुरुको * मेरा पती नैं खपुन् ।
खप्तैनन् अरुको अनीति बलियो * मेरा यी जो पुत्र छन्॥ १३
योद्धा श्री अभिमन्युका सँगमहाँ * मेरा यी दाज्यू पनि ।
सक्छन् कौरवलाइ मार्न रणमा * हुन् शत्रु मेरा भनी ॥
न्यूही मिल्न भनेर पाण्डवहरू * जान्छन् भने हे हरि !
दिन्छन् कष्ट अनेक फेरि कुरुले * अत्यन्त हेलाँ गरी ॥ १४
तिन्को त्यो अपमान खप्नु त बरू * मर्नूं निको ठान्दछु ।
सोही कारण नाथलाइ म रुँदै * बिन्ती यहाँ गर्दछु ॥
मेरो केश खुला छ आज तक यो * गोविन्द ! हेर्नूं हवस् ।
मर्दैनन् जबसम्म कौरवहरू * बाँधिन्न जानी लिनोस् १५
पाई रक्षक नाथ झैं कति सहूँ * आपत्ति घेरै अब ।
गर्नोस् केहि प्रत्यत्न हामिहरुको * उद्धारको केशव ! ॥
देखाइन् हरिलाइ केश करले * पक्रेर आफ्नू जब ।
तिन्को चित्त बुझाउनाकन स्वयं * बोल्नूभयो माधव ॥ १६॥
चिन्ता व्यर्थ नमान कष्ट मनमा * हे द्रौपदी ! सुन्दरी !
गर्नेछैनँ मिलाप पाण्डु-सुतले * दब्नू परेका घरी ॥
गर्छन् मेल भने लिए जति सबै * संपत्ति फिर्ता गरुन् ।
इच्छा छैन भने सहर्ष रणका * निम्ती अगाड़ी सरुन् १७
फिर्ता राज्य लिनेछु पाण्डु-सुतको * संपूर्ण मैले कि त ।
मर्छन् कौरव वीर घोर रणमा * हो यो कुरा निश्चित ॥
कृष्णालाइ दिएर आँति यसरी * तिन्को बुझाई मन ।
पाल्नूभो बनि दूत पाण्डु-सुतको * श्री नन्दका नन्दन ॥ १८

पाल्नूभो जब हस्तिनापुरमहाँ * जान्छु भनी श्री हरि ।
भेटेथे पथमा मुनी र ऋषिले * आएर श्रद्धा गरी ॥
देखिन्थे हरिका सबै शुभ हुने * बाटो भरी लक्षण ।
उल्टो लक्षण हस्तिनापुरमहाँ * देखा परे त्यै क्षण ॥१९॥
भेट्नूभो पहिले पुगेर हरिले * सानन्द कुन्ती सित ।
सोधिन् सञ्च-बिसञ्च पुत्रहरुको * तिन्ले मुरारी सित ॥
मेरा ती बलवान पुत्रहरू के * गर्छन् दुखी झैं बसी ।
आफ्नू राज्य लटेर नै लिनसके * हुन्थ्यो मलाई खुशी ॥२०
पापी कौरवको सहेर रहनू * अन्याय नाना थरी ।
तिन्को त्यो पुरुषार्थलाइ म सधैं * धिक्कार भन्छु हरि ॥
कृष्णालाइ लछारि जुन् किसिमले * दुर्मत् सभामा लियो ।
खोसी राज्य र सम्पती वनमहाँ * जस्ले लघारी दियो ॥२१
त्यस्तालाइ क्षमा गरेर कसरी * मिल्ने कुरा गर्दछन् ।
पापी कौरवका रही अधिनमा * के गर्न ती सक्तछन् ॥
फिर्ला पाण्डु-कुमारका दिन भनी * आशा मलाई हुँदा ।
बाँचेकी छु हजुरलाइ मनले * सम्झी सदासर्वदा ॥२२॥
पाई रक्षक नाथलाइ दुख ती * भोगी रहेछन् किन ?
रक्षा गर्नुहवस् प्रभो ! हजुरले * राखी दयालु मन ॥
कुन्तीको सुनि बात आदर गरी * आज्ञा भयो कृष्णले ।
स्वप्नूपर्छ अनेक आपदहरू * मौकामहाँ श्रेष्ठले ॥२३॥
ऐले कष्ट पऱ्यो भनी हजुरले * के पुग्छ चिन्ता लिई ।
बस्नू योग्य ठहर्छ ताप मनको * सम्पूर्ण त्यागी दिई ॥

दिन्नन् राज्य फिराइ कौरवहरू * आफ्नू खुशीले भने ।
गर्छन् पाण्डवले प्रयत्न हक त्यो * संग्रामद्वारा लिने ॥२४॥
चिन्ता त्याग गरेर स्वस्थ मनले * बस्नूहवस् हे सति !
आएको छु म काम खातिर यही * गर्छु सकेको जति ॥
तिन्को चित्त बुझाउनाकन दिई * शिक्षा अनेकौं थरी ।
श्री दुर्योधनलाई भेट्दछु भनी * पाल्नूभयो श्री हरि ॥२५
देख्दै शादर कृष्णजीकन उठे * तत्काल दुर्योधन ।
वार्तालाप सकी भने विनयले * गर्नूहवस् भोजन ॥
आज्ञा भो हरिले प्रसन्न मनले * खान्थें म ऐल्हे तर ।
आएको छु भएर दूत म यहाँ * जुन कामका खातिर ॥२६
त्यस्को निर्णयको विचार नगरी * हे वीर दुर्योधन !
ऐल्हे गर्नु अयोग्य ठान्दछु यहाँ * मैले बसी भोजन ॥
भोली एक सभा गरी हजुरले * डाक्नोस् सबै सज्जन ।
सिद्धि मिल्दछ काममा अनि स्वयं* खानेछु म मागीकन ॥२७॥
बोलेनन् हरिको कुरा सुनि भए * क्यै खिन्न दुर्योधन ।
पाल्नूभो घरमा स्वयं विदुरको * श्रीकृष्ण सोही क्षण ॥
राखी आसनमा गरे विदुरले * खूशी भई स्वागत ।
खानूभो फल-मूल वर्णन गरी * अत्यन्त राम्रोसित ॥२८
पाऊमा हरिको परी विदुरले * बिन्ती गरे सादर ।
पाई दर्शन यो कृतार्थ म भएँ * हे कृष्ण ! दामोदर !
पाल्नूभो अहिले यहाँ हजुरको * दिन्छन् सुशिक्षा भनी ।
मान्दैनन् कुरुवीरले शुभ हुने * वार्ता कसैको पनि ॥२९॥
व्यर्थै पाल्नुभयो कुरा हजुरको * मान्दैन दुर्योधन ।
गर्ला की बरु क्यै अनादर भनी * आत्तिन्छ मेरो मन ॥

पापी कौरव कालका वशमहाँ * छन् यी परेका सब ।
यिन्लाई हितको बुझाउनु कुरा * ठान्छु वृथा हो अब ॥३०॥



श्रीकृष्णले विदुरको घरमा भोजन गरेको :

शङ्कायुक्त कुरा सुनी विदुरको * भन्नूभयो कृष्णले ।
हानी-लाभ मलाइ के छ कुरुको * सम्मान वा द्वेषले ॥
गर्छन् बात निहुँ झिकीकन कुनै * तिन्ले वृथामा भने ।
जो सर्छन् अघि ती मबाट सहजै * छन् युद्धमा मारिने ॥३१
बाँचुन् पाण्डवतर्फका र कुरुका * मानीस सारा भनी ।
गर्नू मेल हुने कुरा उचित हो * तत्काल मैले पनि ॥
मेरो अर्ति सुनी प्रसन्न मनले * माने दुवै पक्षले ।
मान्दैनन् कुरु वीरले यदि भने * छन् युद्धमा मारिने ॥३२

गर्दा कुरा विदुरका सँगमा बसेर ।
वेला विती भइसकेछ निकै अबेर ॥

सेवा गरे विदुरले खुशिले हरीको।
क्यै बेर खातिर भयो सुकला प्रभूको ॥३३॥

कौरव-सभामा कृष्णले सबैलाई सम्झाउनु—

प्रातः श्री धृतराष्ट्रका हुकुमले * सेना तयारी गरी।
आए डाक्न भनी सुयोधन स्वयं * आफैं अगाड़ी सरी॥
राखे सादर एक श्रेष्ठ रथमा * श्रीकृष्णलाई जब।
बाजा मंगलका बजे, जनहरू * लागे पछाड़ी सब ॥३४॥
योद्धा सात्यकि आदि वीर हरिका * साथै अरू जो थिए।
हात्तीमा, रथ, अश्वमा चढि सबै * तत्काल साथै गए॥
लावा पुष्प लिई अबीर पथमा * पानी परे झैं छरी।
जै जैकार गरे सहर्ष जनले * सम्पूर्ण बाटोभरी ॥३५॥
कौशी, झ्याल, अटालिमा थरिथरी* -का षोडशी सुन्दरी।
गर्थे दर्शन बाल-वृद्ध, शिशुले * श्रीकृष्णको त्यो घरी॥
पुग्नूभो हरि त्यो सभाबिच जसै * यो राजसी चालले।
ठूलो स्वागत झन् उठीकन गरे * सम्पूर्ण भूपालले ॥३६॥
तारा-मण्डलमा उदाइ शशिले * शोभा फिंजे झैं गरी।
शोभा सूर्य समान फैलिन गयो * पुग्दा त्यहाँ श्री हरी॥
राजा श्री धृतराष्ट्र ठिंग उभिए * त्यागेर सिंहासन।
गर्थे आदर भूपतीहरु सबै * सामू खड़ा भैकन ॥३७॥
सोधी सञ्च-बिसञ्च आदि सबको * राजी गराई मन।
बस्नूभो गइ श्रेष्ठ आसनमहाँ * श्री नन्दका नन्दन॥
मन्त्री वर्ग समेत भूपतिहरू * आनन्द मानी कन।
आफाफ्ना गइ दिव्य आसनमहाँ * बस्ता भए त्यै क्षण ॥३८

योद्धा कौरवको सभा-भवनको * हेरौं तमाशा भनी ।
आए नारद औ ऋषी परशुराम् * ज्ञानी तपस्वी मुनी ॥
तिन्को आदरसाथ वीर कुरुले * गर्दा भए पूजन ।
के भन्छन् हरिले भनी सब बसे * केही नबोलीकन ॥३९॥
सोही औसरमा सुनुन् सब जना * भन्ने इरादा गरी ।
भन्नूभो धृतराष्ट्रलाइ हरिले * शिक्षा दिई राम्ररी ॥
राजन् ! कौरवको र पाण्डु-सुतको * सारा अरूको पनि ।
आए मेल गराउनाकन यहाँ * कल्याण होला भनी ॥४०
शास्त्रज्ञान विशुद्ध आचरण औ * सद्धर्म कर्मादिमा ।
छैनन् कौरव झैं उदार कुलका * मानीस संसारमा ॥
यस्तो उत्तम वंशमा कुरुहरू * हे भूप ! जन्मीकन ।
गर्छन् दिन्दित काम, खोस्न हक यी * भाईहरूको किन ?॥४१॥
गर्दैछन् जति काम तुच्छ धनको * इच्छा गरी कौरव ।
रोक्नुहुन्न हजूरले पनि भने * संहार होला अब ॥
योद्धा पाण्डवलाइ शान्त गर्नुला * मैले सकेको जति ।
रोक्नूपर्छ हजूरले सुतहरू * -लाई स्वयं भूपति !॥४२॥
बाटो मेल हुने दुवै तरफको * राम्रो यही एक छ ।
गर्नूपर्छ प्रयत्न नै हजुरले * मौका अझै शेष छ ॥
तिन्ले आपुसमा मिलीकन गरे * यो राज्य संचालन ।
बस्नेछन् स्थिर रूपले, वश गरी * सम्पूर्ण राजाकन ॥४३॥
द्योता, दानव, यक्ष राक्षस तथा * गन्धर्व विद्याधर ।
यिनका साथ लडाइँ गर्न मनमा * मानी लिनेछन् डर ॥
सोही कारण पाण्डुका तनयको * जो भाग हो सो दिई ।
गर्नोस् यत्न छिटै स्वयं हजुरले * मिल्ने इरादा लिई ॥४४॥

आफ्नै पुत्र समान पाण्डु-सुतको * पैह्ले गरी पालन ।
ऐह्ले भाग लिने प्रयास, सुतकै * द्वारा गरेको किन ?
तिन्को द्रोह गरेर व्यर्थ कुरुले * युद्धै गरे तापनि ।
मैले देखिदनँ स्वार्थ सिद्ध कुरुको * होला पछी क्यै भनी ॥४५
मर्नन् पाण्डव वा स्वयं हजुरका * छोरा लड़ाइँ गरी ।
निन्दा दुष्ट भनेर लोकहरुले * गर्छन् पछी बेसरी ॥
जम्मा त्यो रणमा सबै हजुरका * होलान् स्वयं भूपति ।
तिन्को मृत्यु हुनेछ निश्चय त्यहाँ* बाँकी नराखी कति ॥४६॥
हे राजेन्द्र ! लडाइँ यो हजुरले * रोक्ने इरादा लिए ।
आफ्ना बन्धु अकालबाट नमरी * सम्पूर्ण बाँच्ने थिए ॥
यस्तो श्री धृतराष्ट्रलाइ पहिले * शिक्षा दिई कृष्णले ।
आज्ञा भो समचार पाण्डु-सुतको * सम्पूर्ण विस्तारले ॥४७॥
राजन् ! पाण्डवले विनीत स्वरमा * भन्नू भनेको जति ।
भन्छु बात सुनुन्, उपस्थित यहाँ * जो छन् सबै भूपति ॥
सेवा विन्ति गरी भने-शिशु छँदा * हाम्रो गरी पालन ।
हाम्रो भाग लिएर त्यागन अहिले * आँट्नूभएको किन॥४८॥
बस्छौं कष्ट खपी सदा हजुरको * आशा भरोसा गरी ।
केही गर्नुभयो दया यदि भने * जाला विपत्ती टरी ॥
हाम्रो कौरवले छलेर जसरी * खोसी लिए वैभव ।
जस्तो कष्ट दिए अनादर गरी * सम्झीरहेछौं सब ॥४९॥
तानी वस्त्र गरे बिइज्जत जति * श्री द्रौपदको त्यहाँ ।
बोलेथे अघि जो कुवाच्य कुरुले * त्यो भुल्न सक्छौं कहाँ ?
वनमा गैकन तेह्र वर्षतकका * जस्ता बितायौं दिन ।
सारा खप्नुपऱ्यो विपत्ति अधिको * संझेर आफ्नू प्रण ॥५०॥

हामीले जसरी भए पनि गऱ्यौं * पूरा प्रतिज्ञा सब।
सझन्नन् किन ती कबोल अघिको * आफ्नू स्वयं कौरव॥
हाम्रो राज्य दिलाउने हजुरको * आशा छ हे भूपति!
दिन्नन् राज भने फिराद प्रभुमै * गर्छौं सकेको जति॥५१॥
गर्नुपर्दछ न्याय भूपति भई * हो धर्म ठूलो भनी।
माग्छौं न्याय हजुरका सँगमहाँ * त्यै हेतु हामी पनी॥
आफ्ना बालक हुन् भनी हजुरले * सुम्पेर हाम्रो हक।
थामी धर्म र राज्यको, विभवको * बस्नोस् बनी मालिक॥५२
यो बिन्ती धृतराष्ट्रका हजुरमा * पैह्ले भनी कृष्णले।
आज्ञा गर्नुभयो सभासदतरफ् * हेरेर गोविन्दले॥
हे राजन्हरू हो! तपाईहरुको * आशा भरोसा गरी।
जो सम्चार दिए ति पाण्डु-सुतले * भन्छु सबै यो घरी॥५३॥
राजाका सँगमा सभासद भई * हुन्छन् बसेका जति।
तिन्को धर्म ठहर्छ न्याय-पथमा * चल्ने दिउन् सम्मति॥
माग्दा न्याय, भयो कुनै किसिमले* अन्याय कैह्लें भने।
जस्ले सम्मति दिन्छ, त्यो नरकमा* हो पापले गाडिने॥५४॥
सोही कारणले उपस्थित यहाँ * राजाहरू छन् जति।
योग्यायोग्य गरी विचार मनमा* आफ्नू दिउन् सम्मति॥
हामीलाइ दिए समस्त कुरुले * सन्ताप पैह्लु जति।
जान्नूहुन्छ सबै जना थरि-थरी * मैले बताऊँ कति?॥५५
पैह्ले यो समचार पाण्डु-सुतको * सारा सुनाईकन।
आज्ञा गर्नुभयो स्वयं प्रभुजिले * भुन्नोस् सबै सज्जन!
गर्छन् पाण्डवले सदा दृढ भई * सद्धर्मको पालन।
सोही कारण पापतर्फ कहिल्यै * लाग्दैन तिन्को मन॥५६

तिन्को शुद्ध विचारलाइ सबले * राम्रो गरी जान्दछन् ।
जानी-जानि विरोध खातिर यहाँ * के बोल्न को सक्तछन् ? ॥
जो छन् पाण्डवका र वीर कुरुका * द्रोही-हितैषी यहाँ ।
नीती धर्म विरुद्ध बोल्न सहसा *ती आँट्न सक्छन् कहाँ॥५७
यस्तो गर्नु हुँदैन, धर्म यसरी * नाशिन्छ जो भन्दछन् ।
श्री दुर्योधन काम गर्न त्यहि नै * चाँडो अघी सर्दछन् ॥
जे सल्लाह ठहर्छ पक्ष दुइको * कल्याणका खातिर ।
सोही श्री धृतराष्ट्रले गरिलिनू * आफैं भई तत्पर ॥५८॥
यै सल्लाह म दिन्छु श्रेष्ठ हितको * निम्ती दुवै पक्षको ।
माने भूपतिले हुनेछ सहजै * कल्याण संसारको ॥
दोषी पाण्डवलाइ भन्न सहसा * सक्तैन कोही पनि ।
पाए मिल्न खुशी भई सँगमहाँ * आएर बस्छन् तिनी ॥५९
मिल्नू-लड्नु दुवै छ वीर कुरुकै * इच्छा महाँ निर्भर ।
मैले भन्नु जती सबै भनिसकें * कल्याणका खातिर ॥
यो आज्ञा हरिको सुनी नृपहरू * अत्यन्त खूशी भए ।
शिक्षा हो हितको भनी मनमनै * जाने बुझेकै थिए ॥६०
श्री दुर्योधनको अघिल्तिर ठुलो * उद्दण्डताले गरी ।
सामू बोल्न सकेन भूपति त्यहाँ * कोही अगाड़ी सरी ॥
शिक्षा धर्म र नीतिको बखतमा * मान्दैन दुर्योधन ।
आफ्नू मान घटाउनाकन त्यहाँ * को बोल्दथे सज्जन ॥६१

गालव दम्भोद्भव र ययातिको उदाहण दिई परशुराम र ऋषिहरुले कौरवलाई अर्ति दिनु—

कोही बोल्न सकेन भूपतिहरू * त्याहाँ बसेका जब ।
लामा बाहु उठाउँदै परशुराम् * बोल्नूभएथ्यो तब ॥

राजन् ! दिन्छु ठुलो उदाहरण लौ * यस्को म सुन्नोस् अब ।
यौटा भूप थिए सबै तरहले * सम्पन्न 'दम्भोद्भव' ॥६२॥
तिन्ले युद्ध गरी त्रिलोक वशमा * पारी सकेका थिए ।
आफूलाइ अजेय ठानि मनमा * अत्यन्त खूशी भए ॥
श्री नारायणको सुआश्रममहाँ * पौंचेर कोही दिन ।
आऊ युद्ध गरौं भनी नृपतिले * भन्दा बुझाईकन ॥६३॥
गर्नू हुन्न लड़ाइँ व्यर्थ जनले * आज्ञा भयो तापनि ।
मानेनन् नृपले र लड्दछु भनी * आए अगाड़ी तिनी ॥
तिन्को भाव बुझी स्वरूप लिनुभो * मानीसको विष्णुले ।
टुक्रा हातमहाँ लिएर कुशको * छाड्नूभयो वेगले ॥६४॥
राजाका सब फौजको हुन गयो * संहार त्यै शक्तिले ।
जिद्दी गर्न हुँदैन विज्ञजनको * शिक्षा महाँ व्यक्तिले ॥
श्री दम्भोद्भव भूपती पनि मरे * त्यो दम्भको कारण ।
सोही हुन नररूप अर्जुन यिनै * हुन् कृष्ण नारायण ॥६५॥
यिन्का साथ लडी हुँदैन विजयी * कोही तिनै लोकमा ।
सोही कारणले मिलुन् कुरुहरू * तिन्का गई साथमा ॥
आफ्नू निर्मल वंशको नरपते * कल्याण सोची कन ।
बस्नोस् मेल गरेर पाण्डुतको * सुम्पेर सारा धन ॥६६॥
बोलेनन् जमदग्निका सुत यती * शिक्षा सुनाई जब ।
लागे भन्न प्रताप श्रेष्ठ हरिको * श्री कण्व ज्ञानी तब ॥
कन्या श्री गुणकेशि मातलिजिकी * यौटी स्वरूपा थिइन् ।
तिनले नाग-कुमार श्री सुमुखजी * लाई खुशीले वरिन् ॥६७॥
ज्वाइँ सारथिको भनीकन दिए * श्री इन्द्रजीले वर ।
मर्दैनौ कहिल्यै तथा गरुड़को * होवैन केही डर ॥

तिन्को शुद्ध विचारलाइ सबले * राम्रो गरी जान्दछन् ।
जानी-जानि विरोध खातिर यहाँ * के बोल्न को सक्तछन् ? ॥
जो छन् पाण्डवका र वीर कुरुका * द्रोही-हितैषी यहाँ ।
नीती धर्म विरुद्ध बोल्न सहसा *ती आँट्न सक्छन् कहाँ॥५७
यस्तो गर्नु हुँदैन, धर्म यसरी * नाशिन्छ जो भन्दछन् ।
श्री दुर्योधन काम गर्न त्यहि नै * चाँडो अघी सर्दछन् ॥
जे सल्लाह ठहर्छ पक्ष दुइको * कल्याणका खातिर ।
सोही श्री धृतराष्ट्रले गरिलिनू * आफैं भई तत्पर ॥५८॥
यै सल्लाह म दिन्छु श्रेष्ठ हितको * निम्ती दुवै पक्षको ।
माने भूपतिले हुनेछ सहजै * कल्याण संसारको ॥
दोषी पाण्डवलाइ भन्न सहसा * सक्तैन कोही पनि ।
पाए मिल्न खुशी भई सँगमहाँ * आएर बस्छन् तिनी ॥५९
मिल्नू-लड्नु दुवै छ वीर कुरुकै * इच्छा महाँ निर्भर ।
मैले भन्नु जती सबै भनिसकें * कल्याणका खातिर ॥
यो आज्ञा हरिको सुनी नृपहरू * अत्यन्त खुशी भए ।
शिक्षा हो हितको भनी मनमनै * जाने बुझेकै थिए ॥६०
श्री दुर्योधनको अघिल्तिर ठुलो * उद्दण्डताले गरी ।
साम्हू बोल्न सकेन भूपति त्यहाँ * कोही अगाड़ी सरी ॥
शिक्षा धर्म र नीतिको बखतमा * मान्दैन दुर्योधन ।
आफ्नू मान घटाउनाकन त्यहाँ * को बोल्दथे सज्जन ॥६१

गालव दम्भोद्भव र ययातिको उदाहरण दिई परशुराम र ऋषिहरुले कौरवलाई अर्ति दिनु—

कोही बोल्न सकेन भूपतिहरू * त्याहाँ बसेका जब ।
लामा बाहु उठाउँदै परशुराम् * बोल्नूभएथ्यो तब ॥

राजन् ! दिन्छु ठूलो उदाहरण लौ * यस्को म सुन्नोस् अब ।
यौटा भूप थिए सबै तरहले * सम्पन्न 'दम्भोद्भव' ॥६२॥
तिन्ले युद्ध गरी त्रिलोक वशमा * पारी सकेका थिए ।
आफूलाइ अजेय ठानि मनमा * अत्यन्त खूशी भए ॥
श्री नारायणको सुआश्रममहाँ * पौंचेर कोही दिन ।
आऊ युद्ध गरौं भनी नृपतिले * भन्दा बुझाईकन ॥६३॥
गर्नू हुन्न लड़ाइँ व्यर्थ जनले * आज्ञा भयो तापनि ।
मानेनन् नृपले र लड्दछु भनी * आए अगाड़ी तिनी ॥
तिन्को भाव बुझी स्वरूप लिनुभो * मानीसको विष्णुले ।
टुक्रा हातमहाँ लिएर कुशको * छाड्नूभयो वेगले ॥६४॥
राजाका सब फौजको हुन गयो * संहार त्यै शक्तिले ।
जिद्दी गर्न हुँदैन विज्ञजनको * शिक्षा महाँ व्यक्तिले ॥
श्री दम्भोद्भव भूपती पनि मरे * त्यो दम्भको कारण ।
सोही हुन नररूप अर्जुन यिनै * हुन् कृष्ण नारायण ॥६५॥
यिन्का साथ लडी हुँदैन विजयी * कोही तिनै लोकमा ।
सोही कारणले मिलुन् कुरुहरू * तिन्का गई साथमा ॥
आफ्नू निर्मल वंशको नरपते * कल्याण सोची कन ।
बस्नोस् मेल गरेर पाण्डुतको * सुम्पेर सारा धन ॥६६॥
बोलेनन् जमदग्निका सुत यती * शिक्षा सुनाई जब ।
लागे भन्न प्रताप श्रेष्ठ हरिको * श्री कण्व ज्ञानी तब ॥
कन्या श्री गुणकेशि मातलिजिको * यौटी स्वरूपा थिइन् ।
तिनले नाग-कुमार श्री सुमुखजी * लाई खुशीले वरिन् ॥६७॥
ज्वाइँ सारथिको भनीकन दिए * श्री इन्द्रजीले वर ।
मर्दैनौ कहिल्यै तथा गरुड़को * होवैन केही डर ॥

खोसे भक्ष्य भनेर श्री गरुड़जी * अत्यन्त क्रोधित् भए।
शेखी तोड्छु महेन्द्रको अब भनी * ती स्वर्गमा गैगए ॥६८॥
रक्षा गर्न भनेर स्वर्ग-पतिको * चौधै भुवन्का धनी।
पाल्नूभो हरि स्वर्गमा ति दुइको * हेरौं तमाशा भनी ॥
देखे श्री हरिलाइ सामु तपनी * क्रोधित् हुनाले गरी।
हेर्दै इन्द्रतरफ् भने गरुड़ले * शेखी गरी बेसरी ॥६९॥
मर्दैनौ कहिल्यै भनी सुमुखजी * -लाई दिनुभो वर।
मेरो भोजन खोस्नलाइ हुनुभो * के हेतुले आतुर ?
मान्नू हुन्छ हजूरले मनमहाँ * गोविन्दको जुन् भर।
तिन्लाइ पनि बोक्तछु म तिल झैं * मान्दीनँ केही डर ॥७०
शेखीयुक्त कुरा निकै गरुड़को * सुन्नूभएथ्यो जब।
तिन्को तोड्न भनी घमण्ड सहजै* बोल्नूभयो माधव ॥
गर्दैछौ अभिमान हे गरुड़जी ! * धेरै वृथामा किन ?
सक्छौ बोक्न तिमी, स्वयं भइदिंदा * मैंले हलुंगो सुन ॥७१॥
मेरो भार उचाल्न लोकभरिमा * सक्तैन कोही पनि।
यौटा हात उचाल हुन्छ बलको * तिम्रो परीक्षा अनि ॥
येती बात भनीसकी अलि गह्रौं * पारेर बाहू कन।
राख्नूभो जब पीठमा गरुड़को * लागे तिनी आत्तिन॥७२॥
केही बेर भई अचेतन तिनी * पल्टी रहेथे जब।
तिन्को चेत फिराइबक्सनुभयो * श्री विष्णुजीले तब ॥
माफी त्यो अपराधको गरुड़ले * मागे मुरारी सित।
माफी बक्सनुभो तुरुन्त हरिले * तिन्को चिताई हित ॥७३
सोही विष्णु भएर कृष्ण अहिले * पाल्नूभयो लोकमा।
तिन्का साथ गरी विरोध विजयी* को हुन्छ संसारमा ॥

यस्तो अति दिएर मौन हुनुभो * श्री कण्व ज्ञानी जब ।
श्री दुर्योधनलाइ नारदजिले * सम्झाउनुभो तब ॥७४॥
आफ्ना बान्धव औ हितेच्छु जनले* दिन्छन् सुशिक्षा जति ।
सोही माफिकको सुआचरणले * पाइन्छ राम्रो गति ॥
भन्छु एक कथा उदाहरणका * निम्ती म दुर्योधन !
यौटा गालव नामका ऋषि थिए * अत्यन्त नै सज्जन ॥७५
विश्वामित्रजिको परिश्रम गरी * तिन्ले गरे चाकरी ।
विद्या प्राप्त भयो समस्त गुरुको * ठूलो कृपाले गरी ॥
विश्वामित्रजिले बिदा दिनु भयो * तिन्लाइ 'जाऊ' भनी ।
'के ल्याऊँ गुरुदक्षिणा अब गुरो !' * भन्दा भए ती मुनी ॥७६
तिन्को चाकरिले प्रसन्न गुरुजी * पैह्ले भएकै थिए ।
हे बाबू ! गुरुदक्षिणा मकन क्यै * चाहिन्न भन्दा भए ॥
जिद्दी गालवले गरे घरि-घरी * 'मार्गनोस् गुरो क्यै' भनी !
तिन्को भाव बुझेर क्रोधित भई * मागे गुरुले पनि ॥७७॥
'ल्याऊ गालव ! श्यामकर्ण हयलौ* खोजेर आठै सय' ।
यो आज्ञा गुरुको सुनेर मनमा * तिन्लाई लाग्यो भय ॥
यौटा वृक्षमनी बसेर मनमा * गुन्दै थिए गालव ।
घोड़ा आठ्सय श्यामकर्ण कसरी * खोजेर ल्याऊँ अब ॥७८
कस्ले मद्दत दिन्छ पूर्ण कसरी * पारूँ म आफ्नो प्रण ।
प्राणै त्याग्नुपरे पनि त गुरुको * पर्नेछ तिन्ू ऋण ॥
विद्या वा धनले, कुनै तरहको * गर्नेछ जस्ले हित ।
त्यस्को प्रत्युपकार गर्नु जनले * हो योग्य, राम्रोसित ॥७९
पूरा गर्न समर्थ हुन्न जन जो * आफै प्रतिज्ञा गरी ।
भन्छन् त्यस्कन लोकले, नरकमा* यो दुष्ट पर्ला मरी ॥

बाँच्नुचाहिं मरे निको, हुन गयो * मेरो षनी यै स्थिति ।
पूरा त्यो प्रणलाइ पार्न नसके * होला ठुलो दुर्गति ॥८०॥
चिन्ताग्रस्त भएर तर्क यसरी * गर्दै थिए गालव ।
लागे भन्न त्यहीं पुगी गरुड़ले * नीती बुझाई सब ॥
ज्ञानी गालव ! जो विपत्ति जसरी * आई परे तापनि ।
जस्तो मिल्छ प्रयत्न गर्नु जनले * कर्तव्य मेरो भनी ॥८१॥
त्यागी उद्यम औ उपाय नगरी * सन्ताप जो गर्दछन् ।
त्यस्ता दुर्जनलाइ लोकहरूले * हो क्षुद्र यो भन्दछन् ॥
मेरो काँधमहाँ प्रसन्न मनले * सन्ताप त्यागी बस ।
जाऊँ झट्ट ययाति भूपतिकहाँ * तिन्को छ ठुलो यश ॥८२
ज्ञानी, धार्मिक छन् प्रशस्त धनका* मालीक ती भूपति ।
दिन्छन् दान स्वयं सुपात्रहरूले * आएर मागे जति ॥
शिक्षा यै रितको दिए गरुडले * नीती बुझाई जब ।
तिन्कै पीठमहाँ चढीकन पुगे * राजाकहाँ गालव ॥८३॥
राजालाइ भने विपत्ति तिनिले * आफ्नू बुझाई कन ।
लागे भन्न ययाति–विप्रहरूमा * बाँडें भएको धन ॥
मेरी एक सुपुत्रि मात्र घरमा * बाँकी छ ऐल्हे मुनी !
सुम्पीदिन्छु तपाईंलाई खुशिले * छन् रूपकी ती धनी ॥८४
जो देला हय श्यामकर्ण खुशिले * तत्काल आठै सय ।
बस्ने छन् महिषी बनेर त्यहिं नै * यी 'माधवी' निर्भय ॥
कन्यालाइ लिएर गालव मुनी * पैल्हे अयोध्या गए ।
आफ्नू आपदका कुराहरू सबै * हर्यश्वलाई कहे ॥८५॥
बिन्ती गालवको सुनी नृपतिले * भन्दा भए सादर ।
त्यस्ता अश्वहरू फगत् सय दुई * छन् अश्वशाला भए ॥

राजाको सुनि बात गालव ऋषी * बोल्ले विचारी कन ।
दिन्छौ अश्व भने दुवै सय तिमी * पुत्री छ यौटी सुन ॥८६॥
तिम्रो पुत्र हुँदैन एक जबतक् * रानी बनी बस्तछिन् ।
छोरो एक भए पछी नरपते ! * त्यागेर यी हिंड्दछिन् ॥
बाँकी अश्व दिनेछ जुन् पुरुषले * त्यस्लाइ मानी पति ।
बस्नेछन् गइ माधवी पनि त्यहीं* शंका नमानी रती ॥८७॥
यस्तो गालवको कुरा सुनिसकी * हर्यश्व भूपालले ।
राखे माधविलाइ स्त्री स्वरुपमा * सत्पुत्रको आशले ॥
केही काल बितेपछी नृपतिको * श्री इन्द्र जस्तै सुत ।
जन्म्यो श्री वसुमान नामक गुणी* गर्ने सबैको हित ॥८८॥
राखी अश्व त्यहीं, लिएर सँगमा * श्री माधवी सुन्दरी ।
केही कालपछी ति गालव पुगे * विख्यात काशीपुरी ॥
इच्छा गालवको बुझे जब सबै * राजा दिवोदासले ।
छन् मेरा पनि अश्व ता सय दुई * मात्रै भने प्रेमले ॥८९॥
यौटा पुत्र निमित्त गालवज्यिले * सुम्पे तिनै सुन्दरी ।
राखे भूपतिले प्रसन्न मनले * तिन्लाइ माया गरी ॥
यौटा पुत्र भए 'प्रतर्दन' गुणी * ती भूपतीका पनि ।
कन्यालाइ लिएर फेरि सँगमा * डुल्दै हिंडे ती मुनि ॥९०॥
केही कालपछी 'उशीनर' कहाँ * पौंचेर कन्या दिए ।
तिन्को माधवितर्फ एक बढिया * छोरा 'शिवी' जन्मिए ॥
तीनै ठाउँ मिलाइ अश्वहरु ती * पूरा भएनन् जब ।
बाँकी अश्व म पाउँ के गरि भनी * चिंतित् थिए गालव ॥९१
लागे भन्न बुझाइ श्री गरुडले * तिन्लाइ सोही घरी ।
केही दुःख नमान हे मुनि ! तिमी * जाला विपत्ती टरी ॥

यस्ता अश्वहरू त आठ सय नै * पैदा भइका थिए ।
त्यस्माका हयमेधमा सय दुई * घोडाहरू मारिए ॥९२॥
सोही कारणले लगी छ सय यी * घोड़ा गुरूजी कन ।
देऊ माधवि सुन्दरीकन पनी * तत्काल हे सज्जन !
यौटा पुत्र भएपछी सय दुई * बाँकी रहेका हय ।
पूरा हुन्छ कबोल, जान्छ मनको * तिम्रो सबै संशय ॥९३॥
यस्तो गालवले सुने गरुडले * शिक्षा दिएको जब ।
विश्वामित्रजिलाई त्यै किसिमले * राजी गराए तब ॥
तिन्को माधवितर्फ एक सुगुणी * छोरा भए अष्टक ।
कीर्ति अष्टकको छ लोकभरिमा * विख्यात ऐहे तक ॥९४॥
कन्या माधविलाइ गालवजिले * सुम्पी ययाती कन ।
आफू जंगलमा गएर हरिको * गर्दा भए चिन्तन ॥
त्यागी वैभव राज्यका सुखहरू * आफ्ना पिताको त्यहाँ ।
पौंची माधविले गरिन् तप ठुलो * श्री विष्णुको वन्महाँ॥९५
गर्ने मंगल कामना गुरुजिको * शिक्षा नमान्दा महाँ ।
व्यर्थै गालवले सहे दुखहरू * चिन्ता परी मन्महाँ ॥
त्यस्तै जिद्दि गरी सुयोधन पनी * गर्छन् लडाइँ भने ।
भोग्नन् कष्ट अनेक कौरवहरू * छन् व्यर्थमा मारिने ॥९६
ज्ञानी नारदले उदाहरण क्वै * यौटा दिई सादर ।
अर्को एक कथा सुनाउनुभयो * हेर्दै सुयोधन् तिर ।
हे दुर्योधन ! श्री ययाति नृपले * जिद्दी गरी व्यर्थमा ।
धेरै कष्टहरू खपे सुन तिमी * यो लोकमा स्वर्गमा ॥९७
आफ्नू पूर्ण गरेर जीवन मरे * राजा ययाती जब ।
गर्थे ती सुख भोग स्वर्गपुरिको * श्री इन्द्र जस्तै सब ॥

तिन्ले सज्जनको, मुनी र ऋषिको* निन्दा गरी व्यर्थमा ।
मान्ने छैन म भैं ठुलो जन अरू * कोही कुनै लोकमा ॥९८॥
तिन्को देखि घमण्ड देवगण जो * तिन्का हितैषी थिए ।
साराले नृपलाइ भेट्न नगई * तत्काल त्यागी दिए ॥
सोधे क्वै दिन भूपलाइ सहसा * को हुन् भनी इन्द्रले ।
बोल्नेनन् जन कोहि चिह्न नसकी * ती भूपको द्रोहले ९९
पुण्य क्षीण भएर स्वर्ग-पतिको * आज्ञा हुनाले गरी ।
फ्याँके भूपतिलाइ भूमि-तलमा * गिर्दा भए त्यै घरी ॥
छोरा माधविका बसीकन जहाँ * यज्ञादि गर्दै थिए ।
सोही स्थानमहाँ ययाति सहसा * आएर गिर्दा भए ॥४००
हेर्थे छक्क परेर चिह्न नसकी * ती चार भाई जब ।
सोही स्थानमहाँ उपस्थित भए * संयोगले गालव ॥
तिन्ले भूप भनी चिन्हेर अघिको * सम्झेर ठूलो गुन ।
आठौं भाग म दिन्छु आफ्नु तपको * शंका नमानीकन ॥१॥
फर्की स्वर्गमहाँ गएर अघि झैं * त्यो पुण्यको शक्तिले ।
गर्नोस् भोगहरू महेन्द्रसरिकै * हे भूप ! आनन्दले ॥
यस्तो गालवको ययाति नृपले * वार्ता सुनेथे जब ।
लागे भन्न भएर दिक्क मनको * इच्छा बुझाई सब ॥२॥
क्षत्री हूँ, द्विजको म लिन्नँ तपको * यो दान हे ब्राह्मण !
फिर्ता दिन्छु तपाईंलाइ खुशिले * राख्नोस साँची कन ॥
यस्तो गालवलाइ उत्तर दिए * ती भूपतीले जब ।
लागे भन्न सुपुत्र माधविजिका * ती चार भाई तब ॥३॥
हामी क्षत्रिय हौं सबै नरपते ! * छौं चार भाई यहाँ ।
हाम्रो पुण्य चतुर्थ भाग लिनुहोस् * खुशी भई मन्महाँ ॥

बस्नोस् स्वर्गमहाँ गएर अघि भैं * त्यै पुण्यको शक्तिले ।
यस्तो बात सुनी कुमारहरुको * भन्दा भए भूपले ॥४॥
थाप्ने दान कसोरि क्षत्रिय भई * हे बाबुहो ! लौ भन ।
लेओ पुण्य फिराई बस्तछु यहीं * दुष्कर्म भोगी कन ॥
कन्या माधविले त्यसै बखतमा * आएर बिन्ती गरिन् ।
मेरा पुत्रहरू तथा हजुरका * नाती यिनै चार हुन् ॥५॥
यिन्को पुण्य लिएर स्वर्गपुरिमा * फर्केर जानू हवस् ।
शंका त्याग गरी महेन्द्र सरिको * आनन्द भोगी लिनोस् ॥
यस्तो बात सुनी ययाति नृपती * तत्काल राजी भए ।
नातीको लिइ पुण्य स्वर्गपुरिमा * सानन्द फर्की गए ॥६॥
पुण्य क्षीण हुँदा असाध्य मनमा * दुःखी भई भूपले ।
ब्रह्मालाइ भने—विधे ! हुन गएँ * यस्तो म कुन् हेतुले ॥
भन्नूभो विधिले ययाति नृपले * बिन्ती गरेको सुनी ।
शेखी गर्न हुँदैन हे नरपते ! * सर्वज्ञ आफैं बनी ॥७॥
राजन् ! मध्यम, उच्च, नीच अथवा * जस्तो भए तापनि ।
ज्ञानी, सज्जनले अनादर कवै * गर्दैन ठूलो बनी ॥
त्यस्को ख्याल नराखि व्यर्थ तिमिले * शेखी गऱ्यो भूपति !
त्यसले पुण्य भएर नाश सहजै * तिम्रो भयो त्यो स्थिति॥८
ब्रह्माको सुनि यो कुरा नृपतिको * शेखी र शंका गयो ।
पैह्ले झैं गरि श्री ययाति नृपको * कीर्ति ठुलो फैलियो ॥
त्यस्तै त्याग गरी घमण्ड मनको * हे वीर दुर्योधन !
फिर्ता पाण्डवको स्वयं गरिदिनू * हो योग्य सारा धन ॥९॥

दुर्योधनको गर्जना सुनी धृतराष्ट्रले बुझाउनु :—

सम्झाए यसरी सबै तरहले * ज्ञानीहरूले तर ।
के गर्थे कुरुराजले हित हुने * ती अर्तिको आदर ॥
उल्टो ती ऋषिलाइ पाण्डुसुतका * हुन् पक्षपाती भनी ।
लागे भन्न सबै सभासदहरू * लाई सुनाई तिनी ॥१०॥
ज्ञानी-सज्जन यी ऋषीश्वर यहाँ * आई रहेछन् जति ।
सेवा पाण्डवले छँदा वन महाँ * तिन्को गरेछन् अति ॥
सोही कारणले सबै ऋषिहरू * यी भाट जस्तै भई ।
गर्दैछन् गुणगान पाण्डुसुतको * शिक्षा मलाई दिई ॥११॥
जस्को वस्त्र हरेर राज्य, पशु झैं * वन्मा लघारी दियौं ।
भार्यालाइ लछारि जुन् पुरुषको * शेखी र इज्जत् लियौं ॥
जस्को शक्ति पुगेन लड्न सहसा * त्यस्तो हुँदामा पनि ।
त्यस्तालाइ भनौं म वीर कसरी * भन्छन् सबैले भनी ॥१२
जेठाकै हक हुन्छ शास्त्र-मतले * साम्राज्यमा सर्वदा ।
बाँड्ने काम थिएन तापनि दियौं * आफ्ना ति भाई हुँदा ॥
जूवामा धन-राज्य धर्म-सुतले * हारे खुशीले जब ।
'त्यो फिर्ता दिनुपर्छ' सज्जनहरू * के हेतु भन्छन् अब ॥१३॥
बाबा श्री धृतराष्ट्र जीवित छँदै * यो राज्य बाँड्ने किन ?
तिन्कै वस्तु अधीनमा सकलले * हो योग्य जानीकन ॥
दोषी ठानि पिताजिलाइ, रणको * शेखी ति गर्छन् भने ।
आशा गर्नु वृथा छ पाण्डु-सुतले * यो राज्य फिर्ता लिने ॥१४
यस्तो बात भने, सबैकन गरी * प्रत्यक्ष सम्बोधन ।
आफ्नू आसनमा गईकन बसे * तत्काल दुर्योधन ॥

छोराको सुनि यो कुरा मनमहाँ * सन्ताप मानीकन ।
लागे श्री धृतराष्ट्र भन्न सुतको * कल्याण सोचीकन ॥१५
बाबू ! अर्ति दिनूभयो हित हुने * श्री कृष्णजीले जति ।
सोही माफिक चल्नुपर्दछ अनी * बिग्रन्न हाम्रो स्थिति ॥
हाम्रो पाण्डवले बिगार कहिले * गद गरेनन् जब ।
तिन्को गर्नु विरोध हामिहरूले * ठान्छु वृथा हो अब ॥१६॥
फिर्ता राज्य दिएर सन्धि तिमिले * हे बाबू ! चाँड़ै गर ।
भोग्नू राज्य बसी अकण्टक, अनी* होवैन केही डर ॥
फिर्ता राज्य दिने कबोल वनमा * जाँदा गरेकै थियौ ।
ऐल्हे दिन्नँ भनी कचिङ्गल तिमी * के हेतुले गर्दछौ ? ॥१७॥
ज्ञानी सज्जन नारदादि ऋषिले * शिक्षा दिएको पनि ।
व्यर्थैमा तिमिले अनादर गऱ्यौ * हुन् शत्रु-पक्षी भनी ॥
माफी माग तिमी सबै सुजनको * पाऊ समाई कन ।
गर्नेछन् अपराध माफ खुशिले * सम्पूर्ण यी सज्जन ॥१८॥
जेठाकै कुल राज्य गर्दछ भन्यौ * साँचो कुरा हो तर ।
मेरो नै हक हुन्नथ्यो बुझ तिमी * यो राज्यका खातिर ॥
अन्धो छु म भनेर राज्य सबले * श्री पाण्डुलाइ दिए ।
उन्को मृत्युपछी पितामहजिले * आफैं मलाई दिए ॥१९॥
सारा भाइमहाँ युधिष्ठिर गुणी * जेठा हुनाले गरी ।
तिन्लाई युवराजको पद दिएँ * मैले अगाड़ी सरी ॥
मेरो नै हक हुन्न ता भन स्वयं * तिम्रो भयो के गरी ?
तिम्रो राज्य भनेर भन्न सहसा * को सक्तछन् यो घरी ॥२०॥
इच्छा मात्र गरे तिनै भुवनको * जो सक्छ स्वामी हुन ।
त्यस्ता नारदले तिमीकन भने * दोषी सभामा किन ? ॥

छन् जो व्यापक प्राणिमात्र सबमा * श्री कृष्ण योगेश्वर ।
तिम्रो दोष सबै बताउनुभयो * कल्याणका खातिर ॥२१॥
आफ्नो दोष तिमी नमान तपनी * निर्दोष छैनौ सुन ।
भेटी पाण्डवलाइ सादर तिमी * तिनको फिराऊ धन ॥
ज्ञानी, सज्जनको, मुनी र ऋषिको * शिक्षा नमानी कन ।
गर्छौ युद्ध भने तिमी हठ गरी * हे बाबु दुर्योधन ! ॥ २॥
हाम्रा बान्धव औ अनेक नृपती * छन् जो डटेका यहाँ ।
तिनको नाश हुनेछ निश्चय छ त्यो * संग्राम भूमी महाँ ॥
आफ्नू दोष तिमि विचार गरिल्यौ * पैह्ले गरेको जति ।
गर्दा पाण्डवको विरोध पछितो * होला, नराम्रो स्थिति॥२३

धृतराष्ट्रको आग्रहले श्रीकृष्ण, भीष्म, द्रोण आदिले दुर्योधनलाई बुझाउनु—

यस्तो श्री धृतराष्ट्रले हित हुने * शिक्षा दिएको सुनी ।
आफ्नू स्थाननहाँ सुयोधन बसे * अत्यन्त क्रोधित् बनी ॥
तिनको क्रोधित भावलाइ सबले * देखेर जाने जब ।
लागे गर्न विचार बोल्न नसकी * त्याहाँ भएका सब ॥२४॥
के भन्छन् अब को भनी नृपतिले * क्यै बेर पर्खीकन ।
बोले चित्त दुखाइ हे हरि ! सबै * देख्नूभयो लक्षण ॥
यो दुर्योधनलाइ अति दिन के * बाँकी रह्यो लौ अब ।
शिक्षा, दुष्टमती लिई सुजनको * मान्दैन हे माधव ॥२५॥
सम्झाईकन भन्नुहोस् हजुरले * यस्लाई राम्रो गरी ।
मर्नेछन् न त व्यर्थ बान्धवहरू * ठूलो लड़ाईं परी ॥
यो विन्ती धृतराष्ट्रको सुनिसकी * कल्याणका खातिर ।
श्री दुर्योधनतर्फ हेरि हरिले * आज्ञा भयो सादर ॥२६॥

ज्ञाता छौ तिमी धर्म-शास्त्रहरूको * हे वीर दुर्योधन !
गर्दैछौ हठले अधर्म पथको * के हेतुले पालन ?
गर्दा पाण्डवको विरोध तिमिले * के मिल्छ सिद्धि भन !
गर्नू बन्धु विनाश बाहिक अरू *कल्याण क्यै देख्दिनँ २७
भाईका संगमा मिलाप खुशिले * गर्नूभए यो घरी ।
होला कीर्ति ठुलो तिनै भुवनमा * विख्यात राम्रो गरी ॥
यौटा मात्र तपाईंले हठ त्यजी * शान्ती गरे धारण ।
रक्षा हुन्छ विनाशबाट सबको * हे वीर दुर्योधन ! ॥२८
आज्ञा मानि पिताजिको वन गए * श्री राम जुन् चालले ।
जस्ता कष्टहरू खपे वनमहाँ *त्यो जान्दछन् लोकले ॥
मर्यादा सब धर्म - शास्त्रहरूको * जाने बुझे तापनि ।
मान्नू हुन्न पिताजिको कुन कुरा *हो योग्य शिक्षा भनी २९
गर्दैनन् शुभ काम जो, बखतमा * बुद्धी पुऱ्याई कन ।
शिक्षा सज्जनको र मान्य जनको * मान्दैन जो दुर्जन ॥
त्यस्तालाइ हितू र बन्धुहरूले * पापी भनी त्याग्दछन् ।
शान्ती औ सुखको अभाव भइ ती * आपत्तिमा गड्दछन् ३०
जस्ले सम्पत्ति लिन्छ नीच जनको * मानेर ठुलो भर ।
गर्ला' जो बलवान बन्धुहरूको * ईर्ष्या नमानी डर ॥
त्यस्ताको हित गर्न नीच जनले * सक्तैन आँटे पनि ।
त्याग्छन् दुर्जनलाइ विज्ञ जनले *हो यो कुकर्मी भनी॥ ३१॥
गर्नूहुन्छ विरोध पाण्डु सुतको * मानेर जस्को भर ।
तिन्माको छ प्रताप बुद्धि बलमा * ती भैं तपाईंतिर
जस्ले देव, मनुष्य, राक्षस जिते * एक्लै लडाइँ गरी ॥
तिन्का शौर्यहरु म वर्णन गरों * धेरै कती यो घरी॥ ३२॥

योद्धा छन् अहिले तपाईंतिर जो * विख्यात संग्राममा ॥
तिन्मा अर्जुनका अघिल्तिर डटी * टिक्नेछ को युद्धमा ॥
यस्ले जित्छ भनी अठोट मनमा * गर्नू भएको भए ।
डाके त्यस्कन यी सबै सुजनले * चिन्ने र देख्ने थिए ॥३३॥
त्यस्तो व्यक्ति कुनै सशक्त संगमा * छैनन् प्रतापी भने ।
व्यर्थै भाइ र बन्धुको वध गरी * देख्दीनँ सिद्धि हुने ॥
सिद्धी हुन्छ कुनै प्रयोजन भने * यो युद्धको कारण ।
मर्नेछन् कति वीर बान्धवहरू * तिन्का हितैषी जन ॥३४॥
आफ्ना बन्धु विनाशको दुख सही * सन्ताप मानी कन ।
देलान् दोष तपाईंलाइ दिनहूँ * हे वीर दुर्योधन !
होला कष्ट तपाईंको सकलले * निन्दा गरेको सुनी ।
निन्दाको पथलाइ त्यागिदिनुहोस् * हो यो कुबाटो भनी ३५॥
यस्तो अर्ति सुनीसकेर हरिको * साह्रै रिसाई कन ।
बोले हात उचालि ठिङ्ग उभिई * गर्जेर दुर्योधन ॥
हे योगेश्वर ! पाण्डुपुत्रहरूको * धेरै प्रशंसा गरी ॥
मेरो गर्नुभयो अनादर ठूलो * के हेतुले यो घरी ॥३६॥
जूवा खेल्न अघी सरे शकुनिले * तिन्को जिते वैभव ।
व्यर्थै दोष मलाइ केहि नदिनोस् * त्यो बातमा माधव !
मैले पाण्डवको कुनै हक कहीं * खोसीनँ केह्लै पनि ।
गर्छन् युद्ध भने म लड्छु खुशिले * कर्तव्य हो यो भनी ॥३७
मेरो राज्य लिने विचार गरि ती * गर्छन् लडाइँ भने ।
आफ्नू राज्य बचाउने हित कुरा * गर्दा म दोषी हुने ॥
गर्छन् युद्ध भने तिनीहरू निहुँ * खोजेर हे माधव !
कम्ती छन् कति बातमा र नलड़ी * बस्छन् सबै कौरव ! ॥३८

होला नाश ठुलो भनेर मनमा * तिम्रो दया क्यै भए ।
रोक्नू पाण्डवलाइ पर्छ रण यो * थामिन्छ शान्ति लिए ॥
दिन्छौ पाण्डवलाइ शक्ति तिमि नै * संग्रामका खातिर ।
दिन्छौ दोष मलाइ व्यर्थ रणको * देखाइ ठुलो डर ॥३९॥
गर्छौ वर्णन पाण्डुका तनयको * धेरै तिमीले तर ।
तिम्रा ती गुण गानको सुन यहाँ * को गर्दछन् आदर ?
योद्धा भीष्म र द्रोण,कर्ण जति छन्* मेरा हितैषी यता ।
को छन् वीर बताउ कृष्ण तिमि नै* यी भैं प्रतापी उता ॥४०
आउन् शक्ति भए लडुन् नत त्यजुन्* आशा ति यो राज्यको ।
घुर्की सुन्न तयार छैन म कुनै * ती पाण्डुका पुत्रको ।
शेखीयुक्त कुरा सुयोधनजिको * सुन्नूभएथ्यो जब ।
सम्बोधन् सब भूपतीकन गरी * बोल्नूभयो माधव ॥४१
जूवामा छलले जिती हक लिनू * दाजू तथा भाइको ।
ल्याई द्रौपदिलाइ तान्नु फरिया * भन्नेछ हो योग्य को ?
आफ्ना बान्धवलाइ दुर्वचनले * घोच्नू नराम्रो गरी ।
श्री दुर्योधनका सुनीति यहि हुन् * सुन्नोस् सबै राम्ररी ॥४२
धोका दीकन लाहका घरमहाँ * तिन्लाई राखी दिनू ।
आफ्नो दूत पठाइ घोर निशिमा * आगो लगाई दिनू ॥
पाशा कप्टि बनाइ फेरि छलले * सर्वस्व खोसी लिनू ।
व्यर्थै खोजि निहुँ झुटो प्रण गरी * वन्मा लघारी दिनू ॥४३
खवाई चीज विषालु घोर जलमा * तिन्लाइ फाली दिनू ।
साध्वी द्रौपदिको सभाबिच लगी * इज्जत् उतारी लिनू ॥
यो दुर्योधनका सुकर्महरू हुन् * गर्ने कती वर्णन ?
योभन्दा बढि क्यै अधर्म छ अरू* भन्नोस् सबै सज्जन ॥४४

दोषीलाइ दिलाइ दण्ड, हित जो * गर्दैन सत्पात्रको ।
त्यस्ले वीर भनी घमण्ड मनमा * राखी लिनू मात्र हो ॥
जानी-जानि कुपात्र व्यक्तिकन जो* उत्साह दिन्छन् जन ।
त्योभन्दा बढि हुन्छ, हे सुजनहो ! * दोषी त्यही दुर्जन ॥४५
सोही कारणले यि दुष्टहरूको * उत्साह वृद्धि गरी ।
रोक्नू पाण्डवलाइ पाप कसरी * मैले गरूँ यो घरी ॥
अर्कालाइ खसाल्न खन्छ जन जो* खाल्डो अगाड़ी सरी ।
त्योभन्दा अघिबाट पर्दछ स्वयं * आफैं त्यसैमा परी ॥४६॥
यी दुर्योधनले घमण्ड अहिले * धेरै गरे तापनि ।
साम्ने अर्जुनका डटेर रणमा * के टिक्न सक्छन् यिनी ॥
द्योता, दानव, यक्ष, राक्षस सँगै * आए पनी युद्धमा ।
एक्लै अर्जुनले जिती विजयको * लिन्छन् ध्वजा हातमा ४७
सुन्नोस् भूप ! तथा सभासद ! सबै * छन् जो यहाँ कौरव ।
आटे सक्तछु मार्नलाई म स्वयं * बाँकी नराखी सब ॥
आएँ दूत भएर धर्म-सुतको * आज्ञा हुनाले गरी ।
होला मेल भनेर पक्ष दुइको * आशा गरी यो घरी ॥४८
सोही कारणले म मार्न अहिले * सक्तीनँ आँटे पनि ।
गर्दैछन् किन व्यर्थ कौरवहरू * शेखी, घमण्डी बनी ॥
जो गर्छन् अभिमान धर्म-पथको * गर्छु भनी पालन ।
सोही धर्म निमित्त क्षत्रिय भई * बोल्दैन कोही किन ? ॥४९
मार्नै सैनिक देशका नरपती * छन् बन्धु आफ्ना जति ।
श्री दुर्योधन, झैं भएछ बुझियो * ज्ञानीहरूको मति ॥
यस्तो वक्र कुरा सुनेर हरिको * लज्जित् हुनाले गरी ।
बोले भीष्म र द्रोण औ विदुरजी * शिक्षा दिंदै बेसरी ॥५०॥

हे दुर्योधन ! नारदादि ऋषिले * भन्नूभयो जे जति ।
आज्ञा भो धृतराष्ट्रले र हरिले * राम्रो दिई सम्मति ॥
सारा सत्य कुरा बुझेर हितको * मान्छौ तिमीले भने ।
मिल्ने पाण्डवको र वीर कुरुको * मौका छ राम्रो हुने ॥५१
एक्लै खाण्डव दाहमा जिति लिए * जस्ले सबै देवता ।
देखाए शिवलाइ जुन् पुरुषले * संग्रामको योग्यता ॥
पाए पाशुपतास्त्र आशिष स्वयं * जुन् व्यक्तिले शम्भुको ।
त्यस्ता अर्जुनलाइ जित्न रणमा * शक्तिछकुन्व्यक्तिको?॥५२
कृष्णाको पहिले स्वयंवर हुँदा * योद्धा मिलेकै थियो ।
सारा शस्त्र गरी प्रहार रणमा * तिनको परीक्षा लियो ॥
जस्तो गाइहरू विराट नृपका * सारा हरेका थियो ।
हारी अर्जुनबाट गोधन सबै * फिर्ता दिई फर्कियो॥५३॥
शिक्षा सज्जनको नमानि हठले * गर्छौ लड़ाइँ भने ।
लाग्ला पाप अवश्य बान्धवहरू * छन् व्यर्थमा मारिने ॥
मान्दैनौ हितका कुरा यदि भने * होला पछी दुर्गति ।
दिन्नौं पाण्डु-कुमारका सँगमहाँ * संग्रामको संमति ॥५४॥
राम्रा यै रितका सबै सुजनले * शिक्षा दिएको सुनी ।
श्री दुर्योधन कर्णका सँग उठे * जान्छु म ऐहले भनी ॥
तिनका भाईहरू, कुमित्र सँगमा * जो जो बसेका थिए ।
देखी क्रोधित श्री सुयोधनजिका * लागी पछाड़ी गए ॥५५॥

कृष्णलाई पक्रन खोज्दा विराटरूप दर्शन :—

पारी भङ्ग सभा उठी कुरुहरू * सारा गएथे जब ।
सल्लाहा धृतराष्ट्रलाइ दिनुभो * श्री भीष्मजीले तब ॥

हे राजन् ! सबको अनादर गरी * क्रोधित् भई बेसरी ॥
छोराहेरु सबै गए हजुरका * त्यागी सभा यो घरी ॥५६
आफ्नू धर्म र अर्थको मनमहाँ * ख्यालै नराखी कन ।
हिंड्छन् कौरव कालको वश परी * उन्मत्त जस्तो किन ?
यिन्को दुर्मतिले विनाश सबको * आँट यो वृथामा हुन ।
गर्नोस् यत्न भए कुनै हित हुने * चाँडो विचारीकन ॥५७॥
शिक्षा श्री धृतराष्ट्रले सुनिसके * श्री भीष्मजीको जब ।
लागे भन्न डराउँदै विदुरजी * -लाई बुझाई तब ॥
गान्धारीकन ल्याउ भाइ तिमिले * डाकेर चाँडो गरी ।
सम्झाएर भनुन् कुपुत्रकन ती * राखी दया यो घरी ॥५८
आज्ञाले नृपको उठी विदुरजी * तत्काल जाँदा भए ।
गान्धारीकन जो थियो नृपतिको * आज्ञा सुनाई दिए ॥
त्यो आज्ञा पतिको सुनीकन गइन् * गान्धार-कन्या त्यहाँ ।
राजालाइ भनिन् पुगेर तिनिले * दुःखी भईमन्महाँ ॥५९॥
जानी-जानि कुचाल पुत्रहरुको * पैह्ले नरोकी दिंदा ।
गर्दैछन् अहिले अनीति खुशिले * माफी सदा बक्सिदा ॥
त्यो दुर्योधनलाइ हुन्छ अब के * मैले बुझाई कन ?
विग्रेको अझ छैन, हुन्छ बढिया * त्यागी दिए त्यस्कन॥६०॥
देखी वैभव पाण्डुका तनयको * त्यो दुष्ट दुर्योधन !
ईर्ष्या गर्छ सदा कुनै तरहले * सर्वस्व तिन्को लिन ॥
भाई बान्धव वा सुपुत्र र हितू * कोही भए तापनि ।
सुम्पन्नन् सहसा कुनै नृपतिले * यो राज्य गर्नू भनी॥६१॥
यो विन्ती पतिका गरेर सँगमा * डाकेर यौटा चर ।
त्यो दुर्योधनलाइ ल्याउन भनिन् * सम्झाउना खातिर ॥

आमाको सुनि त्यो हुकुम् कठिनले * आए ति दुर्योधन ।
लागिन् भन्न बुझाइ पुत्रकन ती * साह्रै दुखाई मन ॥६२॥
हे बाबू ! प्रण जो गरे अघि यहाँ * ती पाण्डुका पुत्रले ।
पारे त्यो प्रण पूर्ण संकट खपी * बुद्धी तथा युक्तिले ॥
पैह्ले जो तिमिले पनी प्रण गर्‍यौ * यो राज्य फिर्ता दिन ।
सम्झी आफ्नु कबोल राज्य खुशिले* दिन्नौ फिराई किन ? ६३
राजा श्री धृतराष्ट्र दैवगतिले * जन्मान्ध जन्मे जब ।
राखे भूप बनाइ पाण्डुकन नै * सुम्पी सबै वैभव ॥
सोही कारण राज्यमा हक ठुलो * तिन्को भए तापनि ।
आधा मिल्छ भने पनी बुझ तिमी * हो भाग्य ठूलो भनी ॥६४
जो आधा तिमिलाइ पाण्डवहरू * तैयार छन् सुम्पन ।
सक्थे कोहि अरू भए उनिहरू * संग्रामद्वारा लिन ॥
आधा राज्य दिएर पाण्डवहरू * तत्काल मिल्छन् भने ।
तिन्को वैभवको र धर्म-यशको * मौका छ वृद्धी हुने ॥६५
होला सत्य र धर्म जोतिर ठुलो * मिल्छन् उतै श्रीहरि ।
हुन्छन् कृष्ण जता,त्यता विजयको* के हुन्छ आशा गरी ॥
हुन्छन् पाण्डवतर्फ धार्मिक भनी * श्री कृष्ण योगेश्वर ।
दिन्नौं संमति हामिले अहितको * संग्रामका खातिर ॥६६॥
शिक्षा यै रितका दिएर जननी * सम्झाउँदैथिन् तर ।
श्री दुर्योधनजी गए नदिइ क्यै * त्यो बातको उत्तर ॥
तिन्का भाइ र कर्णका सँग त्यहाँ * जो जो बसेका थिए ।
त्यागी श्रेष्ठ सभा उठीकन सबै * तिन्कै पछाडी गए ॥६७
श्री दुर्योधनका गई नगिच्चमा * दुष्टात्म दुःशासन ।
लागे भन्न बुझाई बात हितको * क्यै बेर सोची कन ॥

हे राजन् ! धृतराष्ट्र भूप वशमा * श्री कृष्णजीको परे ।
द्रोणाचार्य र भीष्म औ विदुरले * सल्लाह अर्कै गरे ॥६८॥
मारा कौरवलाइ बन्धन महाँ * पारेर चाँडो गरी ।
जिम्मा पाण्डवको लगाउन भनी * तैयार छन् यो घरी ॥
श्री दुर्योधनले कुरा सुनिसके * यस्तो नराम्रो जब ।
आफ्ना भाइ र कर्णका सँग भने * आफ्नू इरादा सब ।६९॥
हे भाईहरु हो ! प्रधान हरि नै * हाम्रा विरोधी हुँदा ।
हाम्रो सिद्ध हुनेछ कार्य सहजै * यिन्लाइ पक्री लिंदा ॥
सुन्छन् पाण्डवले जसै हुन गए * श्री कृष्ण कैदी भनी ।
शक्ति क्षीण भएर लड्न नसकी * क्यै शान्त होलान्तिनी७०
आँटेको छ लडाइँ जो हुन यहाँ * हामी दुवै पक्षको ।
त्यो थामिन्छ स्वयं र वीरहरुको * होवैन संहार यो ॥
श्री दुर्योधनको कुरा सुनिसकी * उन्मत्त भैं कौरव ।
श्री योगेश्वरलाइ पक्रन भनी * दौड़े सभामा सब ॥७१॥
इच्छा कौरवको बुझेर हरिले * ठट्टा गरे झैं गरी ।
आफ्नू श्रेष्ठ विराटरूप लिनुभो * सातो सबैको हरी ॥
लाखौं नेत्र र हात-पाउ-मुखले * जो छन् स्वयं भूषित ।
जस्को तेज छ अग्नि झैं उदरमा * ब्रह्माण्डनै छन् स्थित॥७२
निल्दैछन् सब वीरलाइ सहजै * जस्ले खेलौंची गरी ।
लागे गर्जन ती तिनै भुवन यो * थर्काउँदै बेसरी ॥
आएथे जति वीर पक्रन भनी * श्री कृष्णलाई त्यहाँ ।
मूर्छा पर्न गएर हेर्न नसकी * लोटे ति पृथ्वीमहाँ ॥७३
आफ्नू मानिसरूप फेरि हरिले * गर्नू भयो धारण ।
आज्ञा भो धृतराष्ट्रलाइ हितको * वार्ता बुझाई कन ॥

सिद्धि प्राप्त हुनेछ धर्म-सुखका * बाटाहरू छन् जति ।
देखाई कुरुराजलाइ हितको * शिक्षा दिएँ भूपति ! ॥७४



श्रीकृष्णको विश्वरूप देखाई प्रस्थान

मेरो आज गरे अनादर यहाँ * जस्तो लिई दुर्मति ।
सारा ज्ञान भयो स्वयं हजुरमा * मैले बताऊँ कति ! ॥
झूठो स्वार्थमहाँ भुलेर दुनियाँ * गर्नै नसक्ने पनि ।
आँट्छन् काम ठुलो विचार नगरी * पूरा गरौंला भनी ॥७५॥
त्यस्तालाइ दिँदैन आप्त भइ जो * सल्लाह राम्रो हुने ।
त्यस्तै मानिस हुन् परी दुख सदा * संतापमा गाड़िने ॥
श्री दुर्योधनलाइ आप्त भनि जो * मैले सुशिक्षा दिएँ ।
गर्नू पर्दछ जो हितैषि जनले * त्यो पूर्ण पारी लिएँ ॥७६
मान्दैनन् हितका कुरा त कसरी * के सिद्धि गर्नन् यिनी ।
हाम्रो दोष रहेन केहि हितको * शिक्षा दिएनन् भनी ॥

योगी शिक्षा धृतराष्ट्रजीकन दिई * श्री कृष्ण योगश्वर ।
चढ्नूभो रथमा प्रसन्न मनले * प्रस्थानका खातिर ॥७७

विदुलोपाख्यान—

कुन्तीलाइ गई त्यसै बखतमा * भेट्नूभयो कृष्णले ।
भन्नूभो सब बात दुष्ट कुरुको * तिन्लाइ विस्तारले ॥
कुन्तीलाइ असाध्य ताप मनमा * लागी भनिन् हे हरि !
भन्नू गैकन धर्म-पुत्रकन यो * सम्चार राम्रो गरी ॥७८
गर्नू पर्छ लड़ाइँ क्षत्रिय भई * हेरेर आफ्नो स्थिति ।
माग्नू हुन्न कदापि राज्य द्विज झैं * हो 'वीर भोग्या क्षिति' ॥
सुम्पे राज्य कुबेरले पृथिविको * गर्नू भनी शासन ।
मानेनन् मुचुकुन्द नाम नृपले * बक्सीस जानीकन ॥७९॥
राज्य प्राप्त गरेर बाहु बलले * संग्राम द्वारा जिती ।
पारे तुष्ट कुबेरलाइ र भए * विख्यात ती भूपति ॥
राजा श्री मुचुकुन्द झैं समरको * चाँडै तयारी गरुन् ।
पापी कौरवबाट बाहुबलले * साम्राज्य खोसी लिउन्८०
जस्ले दिन्न सजाय भूपति भई * पापी र दोषीकन ।
त्यागी रैयतले ठूलो नरकमा * पर्छन् तिनै दुर्जन ॥
देख्तैमा अपराध दण्ड बलियो * जो दिन्छ राजा भई ।
गर्देनन् अपराध दण्ड भयले * त्यस्का प्रजा आत्तिई॥८१
स्वामी रैयतका र चार युगका * उत्पत्तिका कारण ।
हुन्छन् भूपति नै र शास्त्र-मत हो * भन्छन् सबै सज्जन ॥
राजा कारण हुन्छ काल-गतिको * हे कृष्ण ! सुन्नूहवस् ।
तिन्को हेतु हुँदैन काल कहिल्यै * यो बात जानी लिनोस्८२

राजा भैकन दण्ड, धर्महरुको * गर्दैन जो पालन ।
धेरै कष्टहरू परी नरकमा * भोग्नेछ त्यो दुर्जन ॥
जस्ले पालन गर्छ भूपति भई * सत् नीतिको धर्मको ।
चौथो भाग मिलेर पुण्य जनको * भोग्नेछ आनन्द त्यो ॥८३
भिक्षावृत्ति गरे पाण्डवहरू * सद्धर्म त्याग्छन् भने ।
तिन्का पितृ समस्त स्वर्गपुरिका* छन् नर्कमा गाड़िने ॥
देखाउन् पुरुषार्थ क्षत्रिय भई * न्यूही रहेछन् किन ?
मिल्ने बात सुनेर पुत्रहरूको * दुःखी छ मेरो मन ॥८४॥
यौटा सञ्जय नामका नरपती * निक्कै प्रतापी थिए ।
हारी सैन्धववाट घोर रणमा * दुःखी भई फर्किए ॥
तिन्लाई धन-वस्त्र सिन्धुपतिले * दिन्थे खटाई जति ।
कैदी झैं भइ गर्दथे गुजर ती *त्यै वस्तुले भूपति ॥८५॥
आमा सञ्जयकी सुशील विदुला * अत्यन्त बाठी थिइन् ।
देखी दुःखित पुत्रलाइ तिनिले * यो बात भन्दी भइन् ॥
हाम्रो सेवकले पनी हुकुमको * गर्दैन क्यै आदर ।
हामी सैन्धवको पऱ्यौं वश भनी * मान्दैन कोही डर ॥८६॥
अर्काको यसरी परी खटनमा * हे बाबु ! हामीहरू ।
बाँच्नुचाहिं सहेर कष्ट यसरी * मर्नु निको हो बरू ।
आफ्नै सम्पतिमा दिएर अरूले * गुजारान जो गर्दछन् ।
तिन्लाइ सब व्यक्ति जीवित छँदै * मुर्दा भनी ठान्दछन्॥८७॥
आफ्नै सम्पतिमा परी खटनमा * खानू तथा लाउनू ।
गर्दैनन् तिमि भैं बरू समरमा * ठान्छन् निको मारिनु ॥
यौटा राजकुमार भै जसरि यो * काटी रहेछौ दिन ।
त्यो देखेर मलाइ पीर मनमा * लागेर थाल्छु रून ॥८८॥

'हेमाता !'तिमी भन्दछौ खुशि भई* डाकेर व्यर्थै किन !
मैले पुत्र भनेर के गरि गरौं * माया तिमी नै भन ?
पारी ठाँट डटेर हिंड्नु तिमिले * धिक्कार हो भन्दछु !
तिम्रो देह छुँदा पनी मृतक झैं * ठानी घृणा गर्दछु ॥८९॥
जन्मेनौ किन क्लीव भैकन तिमी * बन्ने थियौ निष्क्रिय।
जसले खान दियो त्यही पुरुषको * बस्थ्यौ चिताई जय ॥
गर्छौ भृत्यसमान सिन्धुपतिको * जस्तो तिमी चाकरी।
जानू स्वर्गपुरी छ उत्तम बरू * संग्रामद्वारा मरी ॥९०॥
गर्छन् प्राप्त अवश्य श्रेष्ठ फल नै * सत्कर्मको वीरले।
पूरा त्यो शुभ कर्म हुन्न जबतक् * पर्खन्छ त्यै आशले ॥
तस्मात् निष्क्रिय भै नबस्नु जनले * मिल्नेछ सिद्धि भनी।
त्यै हो मूर्ख ठुलो स्वयं सफलता * मिल्दैन कैल्है पनि ॥९१॥
गर्नू आश सुकर्म सिद्ध नभए * त्यागी कुशंका डर।
भन्छन् त्यस्कन मूर्ख,मान्छ जन जो*प्रारब्धको नै भर ॥
'यस्तो काम गरें भएन तर त्यो * निर्विघ्न पूरा' भनी।
जो गर्दैन सुकर्म, श्रेष्ठ फल त्यो * पाउन्न कैल्है पनि ॥९२॥
गर्छन् क्षत्रिय वीर बाहुबलले * सम्पत्तिको आर्जन।
मर्छन् मर्नुपरे बरू समरमा * जान्नन् कहीं लत्रन ॥
गर्दैछौ भइ राजपुत्र तिमिले * जुन् काम हे सञ्जय !
यस्ले वृद्धि हुँदैन राज्य-धनको * मेरो छ यो निश्चय ॥९३॥
यस्तै तर्क गरेर नीतिहरूको * शिक्षा दिईथिन् जब।
आमाल्लाइ भने ति सञ्जयजिले * आफ्नू इरादा सब ॥
हे माता ! तिमिलाइ स्वर्गपुरिको * पाए पनी वैभव।
के होला सुखशान्ति प्राप्त म मरे * हुन्छन् वृथा ती सब॥९४॥

यो साम्राज्यभरी सबै तरहले * गर्दैछ जो शासन ।
त्यस्तो सैन्धवको विरोध कसरी * मैले गरौं लौ भन ॥
एक्लो छु म लड़ेर हुन्छु विजयी * कुन् चालले यो घरी ।
मेरो मृत्यु भयो भने तिमि पनी * हुन्छयौ खुशी केगरी?॥९५
मेरा साथ अनेक सिन्धुपतिका * बस्छन् सदा मानिस ।
त्यो देखेर मलाइ मानिस अरू * दिन्नन् कुनै साहस ॥
मेरै मानिसले पनी मकन क्यै * शिक्षा दिंदैनन् भने ।
एक्लै लड्न अघी सरौं यदि भने * छ व्यर्थमा मारिने ॥९६॥
व्यर्थै गर्छ विरोध शत्रु बलवान् * जानेर जो लोकमा ।
हे माता ! सुन मूर्ख हो जन त्यही * मारिन्छ संग्राममा ॥
मेरो मृत्यु गराइ राज्य कसरी * फिर्ता लिनेछौ भन ।
जानी-जानि मलाइ मर्न जननी ! * आज्ञा दिंदैछौ किन ? ॥९७
बस्नूपर्दछ हामिले बखतको * ऐले प्रतीक्षा गरी ।
अर्को युक्ति भए कुनै भन तिमी * गर्छु म त्यो राम्ररी ॥
छोराको सुनि बात दीन विदुला * दुःखी भए तापनि ।
लागिन् भन्न बुझाइ राज्य यसरी * पाइन्छ फिर्ता भनी॥९८॥
ठूला मानिसलाइ यै किसिमको * पर्छन् विपत्ती तर ।
गर्छन् यत्न हटाउने दुख सबै * त्यागेर मर्ने डर ॥
गर्दैछौ तिमि बात क्षुद्रजन भैं * बाबू ! वृथामा किन ?
सक्छौ सैन्धवबाट, साहस गरे * साम्राज्य फिर्ता लिन॥९९॥
आत्मालाइ मलीन पारि यसरी * हारे पछी हिम्मत ।
सक्छौ खोस्न तिमी बताउ कसरी* साम्राज्य पापीसित ॥
आफ्नु बढ्छ प्रभाव जुन् किसिमले* जस्तो जहाँ जो गरी ।
गर्नुपर्छ प्रयत्न त्यै किसिमको * सोचेर नाना थरी ॥५००॥

छन् तिम्रा अहिले वरीपरि जती * यो शत्रुका मानिस ।
खोज्छन् बन्न ठुलो स्वयं बखतमा* देखाइ दुस्साहस ॥
गर्छन् आदर खूब सिन्धुपतिको * लाग्दा असाध्यै डर ।
पाए क्वै अगुवा खड़ा सब हुनन् * संग्रामका खातिर ॥१॥
भित्री जो छ विचार राख्नु मनमा * आफ्नू लुकाई कन ।
मीठो बोल्न सके तिमीतिर स्वयं * मिल्छन् सबै सज्जन ॥
योग्यायोग्य गरी विचार खुशिले * सल्लाह दिन्छौ जब ।
आफ्नू बन्न ठुला स्वयं उनिहरू * तैयार हुन्छन् सब ॥२॥
फिर्ता राज मिले तिमीकन सबै * आनन्द मानी लिउन् ।
खोस्ने राज भनेर सिन्धुपतिको * तत्काल द्रोही बनुन् ॥
तिन्का मानिसलाइ आफ्नु वशमा * पार्नु यही युक्तिले ।
भित्री बात लुकाइराख्नु मनमा * आफ्नू ठुलो बुद्धिले ॥३॥
राजाका सँगमा मिली गर कुरा * उनकै हितैषी बनी ।
तिम्रो प्रेम बुझेर सिन्धु-पतिले * ठानुन् हितू हो भनी ॥
कैदी झैं तिमिलाइ राख्नु यसरी * घेरा दिलाई कन ।
मेरै दोष रहेछ यो सब भनी * ठानोस् स्वयं दुर्जन ॥४॥
यस्तो गर्न सक्यौ कुनै तरहले * बाबू ! तिमीले भने ।
हुन्छौ बन्धन मुक्त युक्ति छ यही * तत्काल फुक्का हुने ॥
यस्तो नीतिमहाँ चलीकन पछी * हुन्छौ दह्रो क्यै जब ।
सक्नेछौ तिमिले मिलाउन स्वयं * आफ्ना बिराना सब ॥५॥
मेरो भेद लिने भनेर मनमा * शंका नपर्नैं गरी ।
राम्रो भै व्यवहार गर्नु तिमिले * त्यस्का अगाडी परी ॥
मेलैको गरि बात शक्ति बलको * गर्नू परीक्षा उता ।
त्यस्का शत्रु मिलाउने गर छिटो * उद्योग ठुलो यता ॥६॥

आफ्नू शक्ति र शत्रुको बल दुवै * पैह्ले विचारी लिनू ।
त्यस्को जुन् बलहीनको स्थल छ सो* जानी चनाखो हुनू ॥
विश्वासी जन, योग्य-उत्तम सखा * भेला भएका घरी ।
गर्नू निश्चय मानका बखतको * सल्लाह राम्रो गरी ॥७॥
त्यस्का मित्रहरू र सैनिक हितू * हुन्छन् जसै साथमा ।
पापी सैन्धव होस् कुनै व्यसन वा * एकान्तको स्थानमा ॥
शक्तीहीन हुनेछ दुर्व्यसनले * गर्दा स्वयं सैन्धव ।
त्यै वेला खलमाथि आक्रमणको * गर्नू तयारी सब ॥८॥
डाक्नू झट्ट त्यहीं सशस्त्र तिमिले * आफ्ना सबै मानिस ।
तीखा शस्त्रहरू लिएर करमा * देखाउनू साहस ॥
तिम्रो जे मनमा छ बात नसकुन् * त्यो जान्न कोही पनि ।
चारै तर्फ डटेर गर्नु हमला * हो मुख्य वैरी भनी ॥९॥
आफैं डट्नु सशस्त्र सिन्धुपतिको * साम्नू तिमीले अनि ।
त्यस्को परिदिनू तुरन्त टुकुरा * लौ पार हो, जा भनी ॥
त्यस्का मानिस जो हुनन् वरिपरी * तिन्लाइ घेरा दिई ।
पैह्ले बाँधिलिनू ननिस्कन सकुन् * बाहीर बाठो भई ॥१०॥
त्यो वेला अघि सर्छ सिन्धुपतिको * जो शस्त्रधारी जन ।
हो यो शत्रु भनी विलम्ब नगरी * मारी दिनू त्यस्कन ॥
तिम्रो श्रेष्ठ प्रभाव शत्रुहरूले * देखुन् र जानुन् त्यहाँ ।
भाग्नेछन् घरतर्फ टिक्न नसकी * संग्राम भूमीमहाँ ॥११॥
एक्कासी यसरी प्रहार तिमिले * गर्छौ भने सञ्जय !
भाग्छन् शत्रुहरू पराजय भयो * भन्दै डरी निश्चय ॥
भागेका सब शत्रु एक स्थलमा * फेरी नमिल्ने गरी ।
चारै तर्फ पठाइ मानिसहरू * रोकी दिनू राम्ररी ॥१२॥

मेरो अर्ति लिएर यै किसिमले * चल्छौ भने सञ्जय !
हुन्छौ भूप मिती र शत्रु वशमा * होलान् सबै निश्चय ॥
स्याबासी तिमिलाइ लोकहरूले * आएर आफैं दिनन् ।
तिम्रो जीत भएपछी खुशि भई * भूपाल मानी लिनन् ॥ १३
तिनूलाई धनमानले वचनले * राजी गराई लिनू ।
सारा राज्यभरी सुशान्ति यसरी * तत्काल फैलाउनु ॥
यस्मा चूक गर्‍यौ कुनै यदि भने * मौका महाँ सञ्जय !
तिम्रो मृत्यु हुनेछ सिन्धु-पतिको * होबैन केही क्षय । १४
लैजाऊ तिमिले म दिन्छु खुशिले * आफ्नू सबै संपति ।
छानी-छानी मिलाउनेछु म पनी * आफ्ना हितैषी जति ॥
आफ्नू काम सहर्ष गुप्त रितले * तत्काल गर्दै गर ।
गर्नू हुन्न विलम्ब सञ्जय ! रहू * यो काममा तत्पर ॥१५॥
माताको सुनि बात योग्य मनमा * आफ्नू गरी निश्चय ।
थाले गर्न प्रयत्न योग्य रितले * त्यो काममा सञ्जय ॥
आफ्नू पूर्ण गरेर शक्ति पहिले * देखाउँदै साहस ।
मारी शत्रु बनेर भूप, वशमा * पारे सबै मानिस ॥१६॥
जसको शक्ति ठुलो छ त्यै पुरुषको * संमान गर्छन् सब ।
को देला खुशिले र राज्य अहिले * माग्छन् वृथा पाण्डव ॥
छाड़ी मेल हुने कुरा तिनिहरू * आई लड़ाई गरुन् ।
फिर्ता राज्य लिई घमण्ड कुरुको * संग्रामद्वारा हरुन् ॥१७॥
जस्तो अर्जुन जन्मदा हुन गयो * आकाशबाणी त्यहाँ ।
हे योगेश्वर ! सुन्नुहोस् सकल त्यो * भन्छु नढाँटी यहाँ ॥
शेखी हर्न समर्थ हुन्छ पछि यो * संसारका वीरको ।
राज्य प्राप्त गरेर कीर्ति भवमा * फैलाउला श्रेष्ठ यो ॥१८॥

यस्को भाग हरेर दुष्ट कुरुले * संग्राम गर्नन् तर ।
फिर्ता राज्य लिनेछ रक्षक हुनन् * श्री कृष्ण योगेश्वर ॥
योद्धा भीम र पार्थले समरमा * मारी सबै कौरव ।
लिन्छन् राज्य फिराई सत्य पनि हो* यो बात हे माधव ! ॥१९॥
सोही कारणले म दिन्छु खुशिले * संग्रामको सम्मति ।
हे गोविन्द ! सबै सुनाइ दिनुहोस् * मैले भनेको जति ॥
पाँचोटा सुतलाइ फेरि क्रमले * शिक्षा दिइन् बेसरी ।
त्यस्मा मुख्य कुरा थियो-समरमा* आउन् अगाड़ी सरी ॥२०

कृष्णले कर्णलाई पाण्डवतर्फ मिलाउन खोज्नु—

कुन्तीको सुनि बात फर्कनुभयो * मागी बिदा श्री हरि ।
राधाका सुत कर्णलाइ रथमा * राखेर सोही घरी ॥
आज्ञा भो हरिले निकै पर पुगी * हे कर्ण ! योद्धा सुन ।
जेठा दाजु भएर धर्म-सुतको * संकष्ट खप्छौ किन ॥२१॥
ज्ञाता छौ तिमि धर्म-शास्त्रहरुको * सम्पूर्ण राम्रो गरी ।
पापी कौरवको रहेर संगमा * गर्छौं वृथा चाकरी ॥
सुम्पन्छन् तिमिलाइ धर्म-सुतले * साम्राज्य दाजू भनी ।
गर्छन् आदर चार भाइ र सबै * राजाहरूले पनि ॥२२॥
गर्नेछौ सुख भोग स्वर्गपति झैं * कीर्ति फिंजाई कन ।
दाजू-भाइ मिलेर योग्य रितले * गर्नू प्रजापालन ॥
शिक्षा यै रितको दिएर हरिले * आज्ञा भएथ्यो जब ।
भन्छन् कर्ण बुझाइ नम्र स्वरले * आफ्नू इरादा सब ॥२३
कुंतीले दिइ जन्म जुन् किसिमले * तत्काल त्याग। दिइन् ।
राधाले जसरी लगेर घरमा * मेरो सुरक्षा गरिन् ॥

तिनको प्रेम समस्त बिर्सन प्रभो ! * आँटे पनी सक्तिनँ ।
मर्छु मर्नुपरे बरू तर उता * मिल्ने कुरा गर्दिनँ ॥२४॥
श्री दुर्योधन, पाण्डुका तनयको * केही नमानी डर ।
गर्छन् वात लड़ाइँमा विजयको * मानेर मेरै भर ॥
भोगी भोग प्रशस्त वीरहरूको * ऐह्ले कृतध्नी बनी ।
राजा हुन्छु भनेर त्याग्न यसरी * सक्तीनँ आँटे पनि ॥२५॥
यस्तो उत्तर कर्णको सुनिसकी * सम्झाउना खातिर ।
आज्ञा गर्नुभयो प्रसन्न मनले * श्री कृष्णले सादर ॥
जानी-जानि अधर्म वीर कुरुले * हे कर्ण ! धेरै गरे ।
ज्ञानी पाण्डवलाई न्याय-पथमा * धेरै विपत्ती परे ॥२६॥
आफ्नै बान्धव वा विपक्ष र हितू * कोही भए तापनि ।
गर्छन् पालन न्यायकै सुजनले * कर्त्तव्य यो हो भनी ॥
तस्मात् पाण्डव न्यायपूर्वक सधैं * बस्छन् भनी जान्दछौ ।
व्यर्थैं कौरवतर्फको भइ तिमी * कुन् न्यायले लड्दछौ२७
हामी जाउँ सँगै टुटाइ कुरुको * त्यो मोहको बन्धन ।
सुम्पन्छन् तिमिलाइ पाण्डु-सुतले * साम्राज्यको शासन ॥
गर्छन् आदर पाँच भाइहरूले * तिम्रो खड़ा भैकन ।
गर्नेछौ सुख भोग न्याय-पथको * गर्दै रही पालन ॥२८॥
राधाका सुत कर्णले सुनिसके * शिक्षा हरीको जब ।
जोरी हात दुवै भने विनयले * न्यूह्लेर हे माधव !
मैले सोख गरें प्रशस्त कुरुको * ठूलो कृपाले गरी !
श्री दुर्योधनको परें म वशमा * त्यै हेतुले हे हरि ! ॥२९॥
चाँड़ै युद्ध हुने कुरा छ कसरी * बिर्सौं म तिन्को गुन ।
लड्नू पाण्डवतर्फबाट म गई * राम्रो कुरा होइन ॥

मेरा भाइ भनेर लोकहरूले * पत्याउनन्न के गरी ?
'भाग्यो कर्ण डराइ मर्न' सबले * गर्छन् कुरा हे हरि ! ॥३०
मैले पाण्डवतर्फको भइ लड़े * नाशिन्छ कीर्ति सब ।
कीर्ति नाश गराइ बस्नु त बरू * मर्नू निको माधव !
मैले कौरवलाइ दुर्जन भनी * जाने बुझे तापनि ।
पापीतर्फ भएर लड्दछु प्रभो ! * कर्तव्य ठूलो भनी ॥३१॥
योद्धा छन् अहिले अजेय ति दुवै * श्रीभीम औ अर्जुन ।
पाई रक्षक नाथलाइ रणमा * ती हार्न सक्थे किन ?
मार्छन् कौरवलाइ पाण्डु-सुतले * संग्राममा निश्चय ।
खोज्छन् व्यर्थ सहाय शत्रु दलको * ती गर्न सक्छन् क्षय ॥३२
गर्लान् मेल मिलाप खातिर कुरो * धेरै थरीका किन ।
आउन् झट्ट भिरेर शस्त्र रणमा * साम्राज्य फिर्ता लिन ॥
मर्नू निश्चय नै छ कृष्ण ! म पनी * संग्राममै मर्दछु ।
साथी कौरवको भई जति गरें * अन्याय त्यो फाल्दछु॥३३
मेरो जन्म कथा र नाथसँगको * संवाद ऐल्हे जति ।
राख्नू गुप्त सबै युधिष्ठिर सुनी * सन्ताप मान्नन् अति ॥
जेठो दाजु भनेर धर्म-सुतले * जान्नन् मलाई जब ।
सुम्पन्छन् बुझि धर्मपूर्वक स्वयं * साम्राज्य औ वैभव ॥३४
श्री दुर्योधनका सबै गुनहरू * सम्झेर मैले पनी ।
दिन्छु कौरवलाइ राज खुशिले * कर्तव्य आफ्नू भनी ॥
कैल्हे हुन्न भलो दुवै तरफको * यो कामले हे हरी !
डरलाग्दा सपनाहरू म दिनहूँ * देख्छु सुतेको घरी ॥३५
यस्तो बात भनेर वर्णन गरे * तिन्ले सबै स्वप्नको ।
फेरी चित्त बुझाइ बक्सनुभयो * श्री कृष्णले कर्णको ॥

आयो नाश हुने सबै सुजनको * वेला नराम्रो अब ।
गर्दा न्याय पनी विचार नगरी *अन्याय ठान्छन् सब॥३६॥
यो आज्ञा हरिको सुनेर मनमा * क्यै देर सोचीकन ।
बोले कर्ण भएर नम्र बहुतै * हे नन्दका नन्दन !
बाँच्नेछन् जति व्यक्ति यो प्रलय झैं* संग्राम देखी अब ।
तिन्ले शान्त स्वरूप श्रेष्ठ प्रभुको *देख्नन् अवश्यै तब !॥३७

श्री कृष्णका चरणमा झुकि भक्ति साथ ।
ढोगीदिए विनयपूर्वक राखि माथ ॥
वर्ली तुरुन्त रथबाट बिदा भएर ।
फर्कें सहर्ष घरतर्फ ति कर्ण वीर ॥३८॥

कुन्ती-कर्ण सम्वाद—



श्री कृष्ण द्वारा कौरव-सभाको चर्चा

त्याहाँबाट सहर्ष मत्स्यपुरमा * पाल्नूभयो श्री हरि ।
भेटी पाण्डवलाइ दुष्ट कुरुको * इच्छा भनी राम्ररी ॥

यौटा केवल गुप्त कर्णसितको * संवाद राखीकन ।
जस्तो काम भयो सभाबिच सबै * गर्नू भयो वर्णन ॥३९॥
सारा कौरवको विचार मनको * सुन्नू भएथ्यो जब ।
बिन्ती गर्नुभयो युधिष्ठिरजिले * तत्काल हे केशव !
इच्छा जान्नुभयो स्वयं हजुरले * हाम्रो र उनको पनि ।
के गर्दा हित हुन्छ हामिहरूको * भन्नोस् दयालु बनी ॥४०
यस्तो विन्ति सुनेर धर्म-सुतको * कल्याणका खातिर ।
लाग्नूभो हित बात भन्न छिनमा* हाँसेर दामोदर ॥
राजन् ! अर्थ र धर्मको हित कुरा * आज्ञा भएथ्यो जति ।
यौटा श्रेष्ठ सभा गरीकन भनें * बाँकी नराखी रती ॥४१॥
सम्झाएँ भरिसक्य बात हितको * मैले निकै नै तर ।
त्यो दुर्योधनले गरेन खुशिले * त्यस्को कुनै आदर ॥
हाँसी मात्र रह्यो गुणी सुजनको * ठट्टा र हेलाँ गरी ।
हप्काएँ खललाइ खप्न नसकी * मैले स्वयं बेसरी ॥४२॥
ज्ञानी सज्जन औ मुनी, ऋषि त्यहाँ* जम्मा भएथे जति ।
सम्झाए सबले प्रशस्त तर त्यो * के मान्दथ्यो दुर्मति ॥
निन्दा, मान, स्वधर्म, अर्थ सबको* मान्दैन केही डर ।
त्यस्ता मानिसबाट राज्य कसरी * फिर्ता लिने हो, तर ॥४३
आफ्नू राज्य लिने स्वयं हजुरको* इच्छा भए भूपति ।
गर्नू पर्छ लड़ाई कम्मर कसी * चाँडै सकेको जति ॥
श्री योगेश्वरको युधिष्ठिरजिले * आज्ञा सुनेथे जब ।
जो जो व्यक्ति त्यहाँ थिए सकलको* सल्लाह मागे तब ॥४४
योद्धा भीम र पार्थ औ नृपहरू * जो जो बसेका थिए ।
लड्नै पर्छ भनी सबै सुजनले * सल्लाह आफ्नू दिए ॥

त्यो सल्लाह सुनेर धर्म-सुतले * डाकेर सेनापति ।
आज्ञा गर्नुभयो तयार गरिल्यौ * सेना भएका जति ॥४५॥
श्री दुर्योधनतर्फ सैनिक जती * जम्मा भएका थिए ।
आफ्ना अस्त्र भिरेर तत्पर रहू * भन्ने सुनाई दिए ॥
देखी कौरवको तयारि रणको * कुन्ती निकै आत्तिइन् ।
यस्तो तर्क-वितर्क आफ्नु मनमा * ती गर्न लाग्दी भइन् ॥४६
द्रोणाचार्य र भीष्म वीर कृपजी * यी तीन योद्धाहरु ।
गर्छन् पाण्डवको सदा हित कुरा * छैनन् हितैषी अरु ॥
योद्धा कर्ण अजेय वीर रणको * ज्ञाता हुनाले गरी ।
त्यस्ले मद्दत गर्छ पाण्डु-सुतको * मार्ने इरादा धरी ॥४७॥
मेरो पुत्र भनी मिलाउन सके * त्यस्लाइ आफू तिर ।
लड्दा पाण्डवलाई कर्णतिरको * होवैनथ्यो क्यै डर ॥
केही बेर गरेर तर्क मनमा * भेट्छु अहील्यै भनी ।
गर्थें कर्ण बसी सदा तप जहाँ * तत्काल पौंचिन् तिनी ॥४८
कुन्तीलाई विचारमग्न नजिकै * देखे उभेकी जब ।
जोरी हात दुवै ति कर्ण विरले * बिन्ती चढाए तब ॥
राधाको सुत कर्ण हूँ चरणमा * तिम्रो शुभे ! पर्दछु ।
मेरो योग्य सुकाम केहि छ भने * आनन्दले गर्दछु ॥४९॥
कुन्तीले सुनि बात कर्ण विरको * भन्दी भइन् सादर ।
राधाको सुत भन्दछौ किन वृथा * विश्वास मेरो गर ॥
मेरा हौ तिमि जेष्ठ पुत्र र पिता * हुन् सूर्य नारायण ।
गर्दैछौ यसरी विरोध अहिले * भाईहरूको किन ? ॥५०॥
जाऊ मिल्न तिमी प्रसन्न मनले * ती पाँच भाईसित ।
गर्दैनन् कहिले कुनै सुजनले * दुष्टात्मको संगत ॥

सुम्पन्छन् धन राज्य धर्म-सुतले * हुन् ज्येष्ठ भ्राता भनी ।
बस्ता राज्यमहाँ तिमी, सुखि हुनन् * राजा सुयोधन् पनि ॥५१॥



कुन्ती-कर्ण संवाद

यो शिक्षा तिमिले प्रसन्न मनले * स्वीकार गर्छौ भने ।
बाटो पाण्डवको र वीर कुरुको * रोकिन्छ मृत्यु हुने ॥
कुन्तीको सुनि बात दिक्क मनमा * लागे पनि बेसरी ।
भन्छन् कर्ण गरेर छेड़ बहुतै * तिन्‌लाइ बिझ्नेगरी॥५२॥
जुन् छोरा रविको, विवाह नहुँदै * तिम्रो भएको थियो ।
मार्‍यौ त्यस्‌कन आफुले र अहिले * अर्को जुनी यो लियो ॥
तिम्रो पुत्र भई कुनै बखतमा * माता ! म जन्मे पनि ।
सम्झी कुन् गुनलाइ भन्नु जननी * मेरी यिनै हुन् भनी ॥५३॥
मेरो ख्याति छ सूत-पुत्र भनि यो * सम्पूर्ण संसारमा ।
बस्ने क्षत्रिय हूँ भनेर कसरी * मैले गई राज्यमा ॥

माता काटिदियौ समूल पहिल्यै * त्यो कर्णरूपी रूख।
छोरो कर्ण भनेर व्यर्थ अहिले * देखाउँछयौ के मुख ! ॥५४
श्री दुर्योधनलाइ रक्षक भनी * गर्छु सदा चाकरी।
सोही कारण लड्नुपर्छ रणमा * मैले अगाड़ी सरी ॥
जस्को सम्पतिमा अनेक थरिका * भोगें खुशीले सुख।
सक्छु त्यागन कृतघ्न झैं म कसरी * देखेर त्यस्को दुख ॥५५॥
मेरो यो तप-दानको बखतमा * जे माग्छ जस्ले जति।
दिन्छु त्यस्कन वस्तु त्यो म खुशिले* शंका नमानी रति ॥
सोही कारले भन्यौ जति यहाँ * आई तिमीले कुरा।
मैले गर्नुपर्‍यो सहर्ष जननी ! * क्यै अंशमा त्यो पुरा॥५६॥
योटा अर्जुनलाइछाड़ि अरु जो * छन् चार भाई त्यहाँ।
मार्नेछैनँ कदापि चारकन त्यो * संग्राम भूमी महाँ ॥
मर्छन् अर्जुन वा म मर्छु रणमा * आउन्न अर्को स्थिति।
तिम्रा पाँच सुपुत्र बाँचिरहनन् * शंका नमाने रती ॥५७॥
मेरो त्यो व्रत पूर्ण हुन्छ सहजै * माता ! यही युक्तिले।
कुन्तीले सुनि कर्णको यति कुरा * भन्दी भइन् हर्षले ॥
बाबू कर्ण ! भन्यौ प्रसन्न मनले * नीति बुझाई जति।
यस्मा दोष कुनै म देख्दिनँ, भयो * दुर्दैवले यो स्थिति ॥५८॥
तिम्रो यै छ भने विचार रणको * दावाग्नि बल्ने भयो।
धेरै भूपहरू र वीरहरुको * मृत्यु हुने देखियो ॥
आफ्नू यो प्रणको विचार मनमा * गर्नू लड़ाइँ हुँदा।
दिन्छु आशिष दान गर्नु तिमिले * यस्तै सदासर्वदा ॥५९॥
येती कुरा गरिसकी बुझि कष्ट काल।
कुन्ती फिरिन् घममहाँ गरि अंकमाल ॥

श्री कर्णले दिनहुँको व्रत पूर्ण पारे।
बुद्धि पु-याइकन संकट काल टारे ॥६०॥

रुक्मीको तिरस्कार, युद्धको तयारी

साला श्री हरिका थिए नरपती ! * रुक्मी प्रतापी अति।
गर्छु पाण्डवको सहाय म भनी * सेना भएका जति ॥
सारा साथमहाँ लिएर सहसा * आई पुगे ती जब।
रुक्मीको गरि खूब आदर निकै * खूशी भए पाण्डव ॥६१॥
देखी सैनिकको र शस्त्रहरूको * उद्योग संग्रामको।
रुक्मीलाई भई घमण्ड मनमा * भन्दा भए बात यो ॥
योद्धा पाण्डवहो ! प्रयत्न म ठुलो * देख्छु यहाँ युद्धको।
व्यर्थै कष्ट उठाइ यत्न यसरी * गर्नै नपर्ने थियो ॥६२॥
जाबा कौरवको कसैकन पनी * लाग्ने भए क्यै डर।
एक्लै जित्न भनी उपस्थित म छु * संग्रामका खातिर ॥
रुक्मीले यसरी बढेर बहुतै * शेखी गरेको सुनी।
लागे अर्जुन भन्न नम्र स्वरले * केही नजान्ने बनी ॥६३
जस्का रक्षक कृष्ण गाण्डिव धनू * विख्यात छन् लोकमा।
त्यस्तो अर्जुन भीति मान्छ रणका* के हेतु ब्रह्माण्डमा ॥
हाम्रा सामु घमण्डसाथ यसरी * बोल्दै नबोल्ने गर।
इच्छा लाग्छ भने तिमी बस यहाँ * लाग्दैन जाऊ घर ॥६४॥
रुक्मीले जब पार्थको सुनिसके * यस्तो कड़ा उत्तर।
फर्के कौरवलाइ भेट्दछु भनी * मागी बिदा सादर ॥
यस्तै बात उहाँ पनी जब गरे * तिन्ले घमण्डी बनी।
रूखो उत्तर नै मिलेर कुरुको * दुःखी भए झन् तिनी ॥६५

रुक्मी वीर भई तिरस्कृत, सबै * सेना लिई साथमा ॥
फर्कै लाज भएर क्यै दिनपछी * ती भोजकट् देशमा ॥
बाठो छू म भनी घमंड मनमा * जो गर्छ रुक्मी सरी।
त्यस्को हुन्छ सदा अनादर ठुलो * मौका परेका घरी ॥६६॥
हे राजन् ! पृथिवीभरी जति थिए * राजा, प्रजा, सैनिक।
कोही पाण्डवका र कोहि कुरुका * बन्दा भए रक्षक ॥
सेना कौरवफर्का हुन गए * एघार अक्षौहिणी।
एघारै जनलाइ रक्षक स्वयं * छानेर राखे अनि ॥६७॥
रक्षा गर्न समस्त फौजहरुको * सेनापतीको पद।
श्री दुर्योधनले दिए खुशि भई * श्री भीष्मलाई जब ॥
जो अक्षौहिणि सात पाण्डु-सुतका * सेना डटेका थिए।
तिन्का रक्षक सात धर्म-सुतले * छानी खटाई दिए ॥६८॥
सेनाका पतिको सँभाल तिमिले * भारा स्वयं अर्जुन !
भन्दै सुम्पनुभो युधिष्ठिरजिले * आनन्द मानीकन ॥
पाल्नू भो बलरामजी पनि त्यहाँ * भेट्ने इरादा धरी।
राखे पाण्डवले सुआसन दिई * श्रद्धा गरी राम्ररी ॥६९॥
आज्ञा भो बलरामले समरको * देख्छु तयारी अति।
गर्छौ युद्ध भने दुवै तरफको * होला नराम्रो गति ॥
भाईलाइ भनें बुझाइ पहिल्यै * निष्कर्ष संग्रामको।
यो संग्राम हुँदैनथ्यो तर भयो * इच्छा हुँदा कृष्णको ॥७०॥
शिक्षा पाण्डवलाइ बक्सनुभयो * कल्याण गर्नें अनि।
पाल्नूभो बलराम तीर्थहरुमा * क्यै काल डुल्छु भनी ॥
सेना पाण्डवको र वीर कुरुका * जम्मा भएथे जति।
ती सारा कुरुक्षेत्रमा पुगिगए * तत्काल हे भूपति ॥७१॥

दुर्योधनको दूत भई उलूक जानु—

हे राजेन्द्र ! हिरण्वती तटमहाँ * संपूर्ण सेना लिई ।
पौंचे पाण्डवतर्फका सब जना * शस्त्रास्त्र सज्जित भई ॥
टाँगे पाल पुगेर वीर कुरुका * सेनाहरूले पनि ।
राखे शस्त्रहरू लगी शिविरमा * सारा चनाखो बनी ॥७२॥
श्री दुर्योधनले त्यसै बखतमा * सल्लाह पक्का गरी ।
श्री दुःशासन कर्णको मतमहाँ * मिल्ने गरी राम्ररी ॥
सारा बात सिकाइ पाण्डवकहाँ * भेजे उलूकै कन ।
तिन्ले पाण्डवको पुगी शिविरमा * भन्दा भए त्यै क्षण ॥७३॥
राजन् ! दूत म हूँ सुयोधनजिले* भन्नू भनेको जति ।
भन्छु बात मलाइ माफ दिनुहोस् * निर्दोष छु सद्मति ! ॥
ज्ञानी धार्मिक औ सुशील गुणका* खानी स्वयं भैकन ।
गर्दैछौ किन त्यो विड़ालव्रत झैं * दुर्नीतिको पालन ॥७४॥
हे राजन् ! पहिले बिछट्ट चतुरो * यौटा बिरालो थियो ।
हत्या गर्दिनँ लौ भनेर मुनि झैं * त्यस्ले सुबाटो लियो ॥
त्यस्को बात पत्याइ मूषकहरू * गर्थे गई चाकरी ।
खान्थ्यो मूषकत्यो प्रसन्न मनले* एक्लो मिलेका घरी ॥७५॥
जाने त्यो खलको बठ्याइँ सहजै * मूसाहरूले जब ।
त्यागी चाकरी दुष्टको, घर-घरै * तत्काल भागे सब ॥
पैह्ले धार्मिक हूँ भनेर तिमिले * बाठो बिरालो सरि ।
जस्तो धूर्त कुरा गऱ्यौ सुजनले* जानीसके यो घरी ॥७६॥
जस्को धर्म स्वरूप हुन्छ सबको * कल्याण चाहन्छ जो ।
त्यस्ले बान्धवको विनाश तिमि झैं* आँटेर गर्दैन त्यो ॥

भोग्यौ कष्ट अनेक घोर वनमा * मैले धपाई दिंदा ।
काटेथ्यौ लुकि एकवर्ष अघिको * आफ्नू प्रतिज्ञा हुँदा ॥७७॥
लड्ने निश्चय नै थियोयदि भने * भन्नूहवस् सज्जन !
व्यर्थै कष्टहरू अनेक थरिका * खप्नू भएथ्यो किन ?
पाई मद्दत ती विराट नृपको * शेखी गरी बेसरी ।
खोज्छौ कौरवलाइ पार्न वशमा * व्यर्थै तिमि यो घरी ॥७८॥
तिम्रो काल नगीचमा नरपते ! * आएछ भन्ने बुझ ।
आफ्नू बुद्धि सपार योग्य रितले * वेला छ बाँकी अझ ॥
युक्ती यै रितको सुयोधनजिको * पैह्ले भनी बेसरी ।
बोल्यो पार्थ र भीमको मुखमहाँ * हे रेर हेलाँ गरी ॥७९॥
ठूलो धाक लगाउँछौ समरको * हे मूर्ख ! व्यर्थै किन ?
आओ लड्नतुरुन्त शक्ति छ भने * शस्त्रास्त्र बोकीकन ॥
पाल्ने पेट सदैव भाट-नट झैं * त्यो भीम भान्से बनी ।
त्यसले जान्दछ के कुरा समरको * कर्तव्य यस्तो भनी । ८०॥
स्त्रीको रूप धरेर जुन् पुरुषले * आफ्नू गर्‍यो पालन ।
योद्धा कौरवलाइ जित्न रणमा * के सक्छ त्यो अर्जुन ?
पाँचै भाइ र द्रौपदीकन पनी * मौका परेका घरी ।
इच्छामाफिकले नचाइ वनमा * खेदें पशूकै सरी ॥८१॥
त्यस्तो काम गरेर चित्त नबुझी * श्री द्रौपदीको पनि ।
सारी तान्न लगाउने चिह्न म हूँ * राजा सुयोधन् भनी ॥
आएको अझ छैन चेत मनमा * खाएर त्यो ठक्कर ।
गर्दछौ किन व्यर्थ साहस ठूलो * संग्रामका खातिर ॥८२॥
लडने भीष्म र द्रोणका सँगमहाँ * जोड़ी छ को लौ भन ?
जो सर्नेछ अगाड़ि छड्दछु भनी * मारिन्छ त्यो दुर्जन ॥

श्री दुर्योधनको विचार यसरी * धेरै गरी वर्णन ।
बोल्यो श्री हरितर्फ हेरी सहसा * आँखा नचाईकन ॥८३॥
हे ग्वाला ! तँ चराइ गाई वनमा * डुल्ने भिखारी सरी ।
ठान्छु दास म कंसको, छल गरी * मारिस् गयो त्यो मरी ॥
तेरो त्यो छल इन्द्रजाल रणमा * शस्त्रास्त्र वर्षा हुँदा ।
केही काम दिदैन वीरहरुले * शेखी उतारी लिंदा ॥८४॥
देखाइस् निज रूप जो भ्रम हुने * मेरो सभामा बसी ।
त्यस्ले गोप हुनन् प्रसन्न अरुले * मान्दैन त्यस्मा खुशी ॥
भिक्षा वृत्ति लिने र भाट-नटको * हो काम त्यो हे हरि !
त्यस्ले मान हुँदैन वीरहरु झैं * संसारमा बेसरी ॥८५॥
गाई गोप र गोपिका बिचमहाँ * देखाई त्यस्तो छल ।
होला मान अवश्य, हुन्न रणमा * त्यो कामको क्यै फल ॥
निन्दा श्री हरिको गरेर यसरी * बोल्दै थियो त्यो जब ।
दाह्रा कट्ट किटेर क्रोधित भई * जाग्यो सभा नै सब ॥८६
आगो भै सहदेव औ नकुलजी * भन्छन् उलूक मूर्ख तँ ।
गर्दछस् बकवाद व्यर्थ यसरी * के हेतु हामीसित ?
गर्नू पर्छ कुरा बड़ा सँग बसी * हे नीच ! कुन् चालले ।
थाहा छैन भने नबोल्नु बढिया * ठान्छु तँ झै मूर्खले ॥८७॥
भोग्यौं कष्टहरू गई वनमहाँ * हामीहरूले जति ।
त्यस्को कारण मान्दछु म शकुनी * नै हो ठुलो दुर्मति ॥
गर्दछस् तँ पनी कुरा बढ़ी-बढ़ी * आफ्ना पिता झैं किन ?
सक्दैनौं अब खप्न बात ननिको * तेरो कुनै दुर्जन ! ॥८८॥
मार्नेछु म तँलाइ दुष्ट शकुनी * भन्दा अगाड़ी जब ।
सक्नेछु पशु झैं घिसार्न रणमा * सन्तोष होला तब ॥

त्यै वेला उठि भीमसेन रिसले * भन्छन् उलूकैसित ।
मैले भन्छु जती सुनाउनु गई * तैंले सुयोधन्‌सित ॥८९॥
मिथ्या हुन्न कदापि वीरहरूले * गर्छन् विचारी प्रण ।
मार्नेछु सब भाइलाइ रणमा * तेरो म दुर्योधन ॥
हाम्रो राज्य लिइस् छलेर जसरी * पाशा लड़ाईकन ।
साटो फेर्दछु त्यो म, तत्पर रहेस् * संग्राममा मारिन ॥९०
बोल्ने सत्य सदा युधिष्ठिर हुँदा * चिन्लाइ धोका दिइस् ।
हामीलाइ लड़ाइमा अघिसरी * हे दुष्ट ! कैह्ले जितिस् ?
गर्दा सत्य कबोल धर्म-सुतले * त्यस्लाई पूरा गरी ।
आयौं कौरवलाइ मार्न रणमा * हामी अगाड़ी सरी ॥९१
तेरो दुष्ट मती तथा कपट त्यो * चल्दैन पापी अब ।
मारिन्छन् रणभूमिमा नरपती * योद्धा सबै कौरव ॥
तिम्रा भाँचि दुवै तँलाई शिरमा * ठोक्नेछु मैले जब ।
इच्छा पूर्ण भयो भनेर मनमा * सन्तोष होला तब ॥९२॥
शेखी झार्न डटेर भीम यसरी * गर्जेर बोल्दै थिए ।
त्यै वेला रिसलाइ खप्न नसकी * श्री पार्थ भन्दा भए ॥
मैले भन्छु उलूक ! जे जति कुरा* भन्नू बुझाईकन ।
व्यर्थैमा बकवाद गर्छ रणको * के हेतु दुर्योधन ॥९३॥
भीष्म द्रोण र कर्णको शकुनिको * मानेर ठूलो भर ।
अ टेको छ लड़ाइँ गर्न खलले * मेरो नमानी डर ॥
सुत्नेछन् रणमा मरेर सब ती * गाण्डीव द्वारा जब ।
त्यो दुर्योधनलाई पर्छ पछितो * मर्दा सबै कौरव ॥९४॥
भन्थे अर्जुनले कुरा हृदयमा * बिझ्ने नराम्रोसित ।
धृष्टद्युम्न उठेर त्यै बखतमा * बोले उलूकै सित ॥

गर्छन् बात कती सुयोधन वृथा * श्री द्रोणको आड़ले ।
तिन्को काल भई म जन्मन गएँ * जान्दैछ संसारले ॥९५॥
कस्ले सक्छ मलाइ जित्न रणमा * आओस् अगाड़ी सरी ।
सक्छु लड्न महेन्द्रका सँग पनी * मौका परेका घरी ॥
केही बेरपछी विराट नृपती * बोले रिसाईकन ।
होला निर्णय वीरको समरमा * हे दुष्ट, दुर्योधन ॥९६॥
लागे भन्न उठेर त्यै बखतमा * योद्धा शिखण्डी पनि !
मैले मार्दछु भीष्मलाइ रणमा * बैरी पुरानू भनी ॥
तिन्को गर्न विनाश यो पृथिविमा * आएँ म जन्मीकन ।
तैंले पर्छ विपत्ति भोग्न रणमा * हे दुष्ट, दुर्योधन ॥९७॥
बिझ्ने बातहरू भने द्रुपदले * हे दूत ! भन्नू भनी ।
शिक्षा धर्म-कुमारले दिनुभयो * माने नमाने पनि ॥
मेरो बात सबै उलूक ! तँ गई * भन्नू सुयोधन्सित ।
व्यर्थैमा नगरुन् अझै हठ तथा * संग्राम हामीसित ॥९८॥
तिन्ले जो समचार हामीहरूको * निम्ति पठाए यहाँ ।
दिन्छन् पाण्डवले जवाफ बलियो * त्यस्को लड़ाई महाँ ॥
होला मेल भनी सह्यौं दृढ भई * तिन्को अनीति सब ।
फिर्ता राज्य लिने भनेर अब झन् * तैयार छन् पाण्डव ॥९९॥
शिक्षा सज्जनको नमानि रिसले * ती लड्न खोज्छन् भने ।
क्षत्री हूँ कसरी सहौं पथ अरू * देख्दीनँ शान्ती हुने ॥
सोही कारणले उटेर म पनी * गर्छु लड़ाई अब ।
देखाउन् रणमा पराक्रम तिनी * आफ्नू भएको सब ॥६००॥
देख्दा तत्परता बुझिन्छ अब यो * संग्राम पर्ने भयो ।
हाम्रो मेल हुने विचार अधिको * सम्पूर्ण आशा गयो ॥

यौटाले दिनहूँ अनीति पथमा * चल्नू घमण्डी बनी।
अर्कोले कसरी सहेर रहनू * दुर्भाग्य हो यो भनी ॥१॥
फर्की जाउ कि वा बसीरहु तिमी * उलूक ! ऐहले यहाँ।
यस्तो बात गरेर धर्म-सुत क्यै * दुःखी भए मन्महाँ॥
आज्ञा गर्नुभयो जनार्दनजिले * हे दूत ! भन्नू गई।
त्यो दुर्योधनलाइ हुन्छ पछितो * आपत्तिमा गाडिई ॥२॥
गर्छु सारथि काम श्री विजयको * मैले लड़ाई हुँदा।
तस्मात् जीत हुनेछ पाण्डु-सुतको* यो युद्धमा सर्वदा॥
योद्धा हूँ म भनी घमण्ड अहिले* गर्दैछ पापी किन ?
देखाओस् रणमा पराक्रम गरी * तत्काल दुर्योधन ॥३॥
यो आज्ञा हरिको सुनेर सहसा * उलूक फर्की गयो।
त्यो सम्चार लगी सभाबिच सबै * त्यस्ले सुनाई दियो॥
पाए सुन्न विचार शत्रुतिरको * उत्साहले पूर्ण त्यो।
कोही बोल्न सकेन त्यो बखतमा * सारा सभा स्तब्ध भो॥४॥

पितामहद्वारा दुवै पक्षका योद्धाहरूको बल वर्णन—

श्री दुर्योधनले विपक्षतिरको * इच्छा बुझेथे जब।
उर्दी झट्ट दिए तयार रहनू * सेनाहरूले अब॥
सोधे भीष्मजिलाइ सादर गई * हाम्रा र उन्का गरी।
योद्धा वीर कती रथी, अतिरथी * तैयार छन् यो घरी ॥५॥
जान्नूहुन्छ हजूरले स्थिति सबै * हामी दुवै पक्षको।
गर्नोस् वर्णन त्यो मलाइ मनमा * इच्छा भयो सुन्नको॥
तिन्को भाव बुझी पितामहजिले * गर्नुभयो वर्णन।
पैहले पाण्डवतर्फको सुन तिमी * हे वीर दुर्योधन ॥६॥

यौटा मुख्य रथी युधिष्ठिर स्वयं * विख्यात छन् भूपति ।
छन् श्री भीम महारथी र बलमा * हज्जार हात्ती जति ॥
उस्तै श्री सहदेव औ नकुल हुन् * भाई दुवै ती रथी ।
ज्ञाता छन् रथका, विपक्षतिरको * तो गर्न सक्छन् खती ॥७॥
एक्लै अर्जुनले लडी समरमा * संहार गर्नै हुँदा ।
लाखौं श्रेष्ठ महारथीहरु सरी * विख्यात छन् ती सदा ॥
योद्धा श्री अभिमन्यु सात्यकि रथी * छन वीर जो यी दुई ।
सक्छन जित्न समस्त शत्रु रणमा * आँटेर एक्लै गई ॥८॥
धृष्टद्युम्न र द्रौपदी सुतहरू * छन् पाँच विख्यात जो ।
हुन् यी श्रेष्ठ महारथी, गुण सबै * नै जान्दछन् युद्धको ॥
कुन्तीभोज, विराट और द्रुपदजी * श्री उत्तमौजा अनि ।
चेदी, पौण्ड्र र धृष्टकेतु वसुमान् * योद्धा शिखण्डी पनि॥९॥
श्रेणीमान् वसुदान् रथी अतिरथी * छन् यी प्रतापी अति ।
गर्छन् प्राण दिएर मद्दत सदा * यिनूले सकेको जति ॥
योद्धा पांडवतर्फका सकलको * पैहले गरी वर्णन ।
गर्छन् कौरवतर्फको पनि सबै * श्रीभीष्मले वर्णन ॥१०॥
तिम्रा जो अहिले हितेच्छुहरु छन् * हे वीर दुर्योधन !
तिनूको वर्णन गर्दछु सुन तिमी * शंका नमानी कन ॥
योद्धामा तिमि नै अजेय द्विरथी* भूपाल विख्यात छौ ।
भाई एक रथी उनान्सय सबै * छन् श्रेष्ठ यो जान्दछौ॥११
योद्धा श्री कृतवर्म हुन् अतिरथी * श्री शल्य राजा पनि ।
जानील्यौ अनुविन्द विन्द द्विरथी * हुन् नील राजा भनी ।
ख्याति प्राप्त बली जयद्रथ रथी * भूरिश्रवा भूपती ।
पाँचै भाइ त्रिगर्त श्रेष्ठ रथि हुन् * योद्धा प्रतापी अति ॥१२

द्रोणाचार्य महारथी र तिमी भैं * छन् वीर द्रौणी पनि ।
पाँचोटा रथिको समान कृपजी * छन् श्रेष्ठ योद्धा अनि ॥
राजा पौरव औ अजेय शकुनी * बाल्हीक ठूला रथी ।
राजन् भूपति छन् अरू पनि यहाँ * धेरै बताऊँ कती ॥१३॥
राधाका सुत कर्ण अर्धरथि हुन् * तिम्रा हितैषी पनि ।
लड्नै पर्छ भनी तिमीकन सदा * उत्साह दिन्छन् तिनी ॥
गर्दैनन् रणमा पराक्रम बरू * भाग्छन् डराई कन ।
यस्ताको भर मान्दछौ किन तिमी* हे बाबु दुर्योधन ! ॥१४
यस्ता बात सुनी पितामहजिको * क्वै बेर सोची कन ।
बोल्ले कर्ण रिसाइ–भीष्म ! यसरी * बोल्छौ वृथामा किन ?
श्री दुर्योधनका पितामह तथा * बूढा हुनाले गरी ।
तिम्रा दुष्ट कुरा सहन्छु म सदा * त्यै हेतुले बेसरी ॥१५॥
तिम्रो बिग्रिसकेछ बुद्धि वयका * साथै भएको जति ।
राखेका किन हो सुयोधनजिले * यिन्लाइ सेनापति ॥
हाम्रो पर्छ विरोध आपुसमहाँ * प्रत्यक्ष जुन् बातले ।
बर्ता पाण्डवको पक्षको हित हुने * गर्छन् कुरा भीष्मले ॥१६
लड्नेछन् जबसम्म भीष्म रणमा * सेनापती भै कन ।
आफ्नु इज्जत फाल्नलाइ म डटी * संग्राममा लड्दिनँ ॥
देखाऊँ रणमा पराक्रम जती * मैले गरी साहस ।
मेरो कीर्ति हुँदैन, मिल्छ सब त्यो * श्रीभीष्मलाई यश १७॥
यस्तो नीति-विरुद्ध बात रिसले * तिन्ले भनेको सुनी ।
लागे भन्न रिसाइ कर्णसित यो * श्री भीष्मजीले पनि ॥
शेखी गर्नु वृथा छ, कर्ण ! यसरी * दुर्वाच्य बोल्छौ किन ?
मारिन्छौ रणमा तिमी अब छिटै * श्री पार्थद्वारा सुन ॥१८॥

सक्छु मार्न हजार कर्ण सहजै * बूढो भएँ तापनि ।
बाँचेका तिमि छौ समस्त कुरुको * सल्लाहदाता बनी ॥
दिन्छौ दोष मलाइ आपुसमहाँ * हो भेद पार्ने भनी ।
मैले भेद हुने दुवैतिर कुरा * बोल्दीन कैह्ले पनि ॥१९॥
देखी क्रोध ठुलो पितामहजीको * तसैर दुर्योधन ।
भन्छन् नम्र भएर–'क्रोध यसरी* गर्नुभएको किन ?
योद्धा कर्ण तथा स्वयं हजुरको * मान्छु म ठूलो भर ।
प्रातःकाल हुँदा ठूलो समरको * गर्नू छ लौ तर्खर ॥२०॥
राम्रो गर्नुहवस् विचार बरु क्यै * कल्याणका खातिर ।
व्यर्थै आपुसमा गरेर झगड़ा * मिल्ने कुरा के छ र !
हाम्रो जीत हुनेछ कुन् किसिमले * संग्राम गर्दा अब ।
आज्ञा गर्नु हवस् प्रसन्न मनले * मेरा अगाडी सब ॥२१॥

शिखण्डीको उपाख्यान––

राजन् ! भीष्मजिलाइ शान्त यसरी* पारेर दुर्योधन ।
लागे सोध्न असाध्य नम्र स्वरमा * क्यै बेर शोचीकन ॥
द्रौणी, द्रोण र भीष्म, कर्ण, कृपजी* ती शत्रुका तर्फको ।
सारा सैनिक मार्नलाइ कति दिन् * लाग्नेछ हे वीर हो !॥२२
आज्ञा गर्नुभयो पितामहजिले * तिन्ले भनेको सुनी ।
नाती पाण्डवलाइ मार्नु कसरी * मैले कृतघ्नी बनी ॥
मेरो जो छ कबोल लड्दिन भनी * स्त्रीजातिका साथमा ।
नारीरूप शिखण्डिका सँग पनी * लड्दीनँ यो युद्धमा ॥२३
छाड़ी यी छ जना, अरू समरमा * योद्धा डटेका जति ।
मार्नेछु दिनहूँ हजार दश तक तक* एक्लै म हे सद्मति ! ॥

गर्दै पालन युद्धका नियमको * लड्नेछु जेहले तक ।
मेह्ला एक अवश्य लाग्छ यसरी * मार्दा सबै सैनिक ॥२४
यस्ता बात सुनी पितामहजिको * भन्दा भए द्रोणले ।
सेना पाण्डवका म तीस दिनमा * मार्छु सबै युक्तिले ॥
द्रोणाचार्यपछी भने कृपजिले * मैले लडाइँ गरी ।
सेना पाण्डवका त साठि दिनमा * मार्छु अगाडी सरी ॥२५
बोले बात सुनीसकी कृपजिको * द्रौणी उतर्सी कन ।
मैले मार्दछु लौ दसै दिन लडी * हे वीर दुर्योधन ! ॥
आफाफ्ना बलको बयान सबले * गर्दै गएको सुनी ।
लागे भन्न उठेर स्वप्न नसकी * श्रीकर्ण योद्धा अनि ॥२६॥
सारा सैनिक पाँच पाण्डव तथा * योद्धा र सेनापति ।
मार्नेछु म लड़ेर पाँच दिनमै * बाँकी नराखी रति ॥
व्यर्थै गर्नु विवाद हामिहरूले * पर्दैन यो बातमा ।
बोले भीष्म रिसाइ बात सुनि त्यो * श्रीकर्णका साथमा ॥२७॥
आउन्नन् जबसम्म एक रथमा * श्री कृष्ण औ अर्जुन ।
लाग्दैनन् जबसम्म शस्त्र र धनू * संग्राममा घन्कन ॥
त्यो वेलातक मन्परी जति सक्यो * हे कर्ण ! बोल्दै गर ।
भाग्नेछौ रणबाट, देखि ति दुवै- * लाई डराई घर ॥२८॥
धेरैपल्ट लड़ेर पार्थसँग नै * भाग्यौ लिई जीवन ।
त्यस्ता अर्जुनलाइ कम्मर कसरी * मार्छु भनेको किन ?
योद्धा हुँ म भनी घमण्ड मनमा * गर्छौ निकै नै तर ।
मान्दैछौ रणमा पराक्रम गरी * देखाउनामा डर ॥२९॥
हे दुर्योधनजी ! यसै विषयको * आख्यान भन्छु अनी ।
मान्नेछौ तिमिले पत्यार सहजे * स्त्री हो शिखण्डी भनी ॥

बाबा मृत्यु भएर स्वर्ग पुरिमा * जानू भएथ्यो जब ।
श्री चित्रांगदलाइ सादर दिएँ * यो राज्य औ वैभव ॥३०॥
केही कालपछी मरेर ती पनी * राजा बनाई क्न ।
सुम्पें भाइ विचित्रवीर्यकन यो * साम्राज्यको शासन ॥
त्यै ताका नृपती जितें समरमा * मैले अगाड़ी सरी ।
भाईको म विवाह गर्दछु भनी * इच्छा भयो त्योघरी ॥३१॥
काशीका नृपले स्वयंवर रचे * कन्याहरू तीनको ।
ल्याएथें म गई हरेर बलले * सेखी सबै भूपको ॥
'अम्बा' नाम हुने सुशील सबमा * जेठी र बाठी थिइन् ।
रोजेकी पहिल्यै छु शाल्व नृपती * -लाई खुशीले भनिन् ॥३२॥
त्यहाँबाट गइन् प्रसन्न मनले * पाई मद्वारा विदा ।
राखेनन् नृप शाल्वले घरमहाँ * मैले हरेको हुँदा ॥
अम्बा जंगलमा गइन् तप गरी * काटछु भनी जीवन ।
पाइन् अर्ति र होत्रवाहनजिको * क्ये शान्त पारी मन ॥३३
पौंचिन् माग्न सहायता परशुराम्-* लाई बताइन् स्थिति ।
आए साथमहाँ स्वयं गुरु पनी * तिन्को सुनि दुर्गति ॥
आज्ञा गर्नुभयो तिमी गर बिहा * अम्बा कुमारीसित ।
आज्ञाले गुरुको परी सकसमा * साह्रै यहाँ दुःखित ॥३४॥
गर्छु पालन ब्रह्मचर्य ब्रतको * भन्नेछ मेरो प्रण ।
अम्बाका संगमा विवाह म गुरो * यै हेतुले गर्दिनँ ॥
मेरो बात सुनी रिसाइ गुरुले * संग्राम गर्नू भयो ।
हाम्रो घोर लड़ाइँमा सहजमै * तेईस रात्री बित्यो ॥३५॥
संहारास्त्र रिसाइ छाड्दछु भनी * आँटी सकेको थिएँ ।
रोके झट्ट पुगी मुनी र ऋषिले * त्यै हेतुले रोकिएँ ॥

देख्नूभो जब त्यो पराक्रम ठूलो * मैले गरेको त्यहाँ ।
आज्ञा गर्नुभयो मलाइ गुरुले * डाकी अगाडीमहाँ ॥३६॥
रोकीदेउ लडाइँ भीष्म ! तिमिले * चेला-गुरूको अब ।
मेरो हार भयो तथा विजय-श्री * पायौ तिमीले सब ॥
येती बात भनी मलाइ गुरुले * फर्केर अर्को तिर ।
अम्बालाइ भने--प्रसन्न मनले * कल्याणका खातिर ॥३७॥
तिम्रा निम्ति गरें सके जति सबै * उद्योग हे सुन्दरी !
मैले मद्दत गर्न सक्तिनं अरू * आँटे पनी यो घरी ॥
जाऊ शाल्वकहाँ कि भीष्मसित वा * आफ्ना पिताको घर ।
तिम्रो जे छ अठोट शुद्ध मनले * हे सुन्दरी, त्यै गर ॥३८॥
अम्बा श्री गुरुको सुनीकन कुरा * अत्यन्त दुःखी भइन् ।
त्याहाँबाट गईं सदाशिवजिको * ठूलो तपस्या गरिन् ॥
अम्बाको तपदेखि श्रीशिवजिले * आई दिनूभो वर ।
'अर्को जन्म लिएर भीष्म बधको * उद्योग पूरा गर' ॥३९॥
यो आज्ञा शिवको सुनेर वनको * जम्मा गरी पत्कर ।
त्यागिन् अग्नि ठुलो जलाइ तन त्यो* अर्को जुनी खातिर ।
त्यै वेला तप गर्दथे द्रुपदले * श्री शम्भुको राम्ररी ।
आज्ञा भो शिवले सहर्ष वर के * माग्छौ भनी त्योघरी॥४०
यो अज्ञा शिवको सुनी द्रुपदले * बिन्ती गरे हे प्रभो !
छोरा-छोरि म पाउँ भीष्म-वधको * सामर्थ्य राख्ने विभो !
आज्ञा भो शिवले सुनी द्रुपदको * इच्छा दयालु बनी ।
छोरा एक हुनेछ भीष्म-वधको * सामर्थ्य राख्ने गुणी ॥४१॥
छोरी सोहि हुनेछ पुंस्त्व गुणले * सम्पन्न क्यै कालमा ।
पाल्नूभो शिवजी दिई वर त्यहाँ * फर्केर कैलाशमा ॥

रानीलाइ भने गएर नृपले * त्यो बात दर्बारमा ।
तिन्कै पुत्री भएर जन्मन गइन् * अम्बा कुनै कालमा ॥४२
स्त्रीको चिन्ह लुकाइ पालन गरे * छोरो 'शिखण्डी' भनी ।
छोरी हो नृपकी भनीकन त्यहाँ * जान्दैनथे क्वै पनि ॥
पुत्री एक थिएन् दशार्ण नृपकी * तिन्को शिखण्डीसित ।
मागी झट्ट बिहा गरी, द्रुपदजी * साह्रै भए हर्षित ॥४३॥
स्त्री जानी पतिलाइ भूप दुहिता * निक्कै भइन् व्याकुल ।
आमालाइ भनेपछी हुन गयो * दर्बारमा खल्बल ॥
राजाले सुनि यो कुरा समरको * आज्ञा, रिसाई दिए ।
त्यो सम्वाद सुनेर श्री द्रुपद झन् * सन्तापले आत्तिए ४४॥
मेरा निम्ति ठुलो वृथा समर यो * पर्ने भयो लौ भनी ।
गर्दै दुःख पुकार घोर वनमा * पौंची शिखण्डी पनि ॥
देखेथ्यो जब 'स्थूलकर्ण' बलियो * यौटा ठूलो यक्षले ।
सारा कष्ट बुझेर आग्रह गरी * त्यस्ले भन्यो प्रेमले॥४५॥
दिन्छु हे सुमुखी ! म चिन्ह नरको * आफ्नू खुशीले तर ।
त्यो फिर्ता दिनुपर्छ वर्ष दिनमा * पक्का प्रतिज्ञा गर ॥
तिन्को बात सुनेर खूब मनमा * खूशी शिखण्डी भए ।
साटा-साट गरेर चिन्ह घरमा * तत्काल फर्की गए ॥४६
पाए श्राप कुबेरबाट सहसा * त्यै हेतु ती यक्षले ।
'त्यो बाँचेतक लोकमा बसिरहेस् * हे यक्ष ! यै रूपले ॥'
नारीका सब चिन्ह साटि अहिले * बन्छन् शिखण्डी नर ।
जानी-जानि लडौं म त्योसित गई * के सिद्धिका खातिर ॥४७
धर्मा-धर्म गरी विचार मनमा * लड्नू शिखण्डीसित ।
मैले ठान्छु अयोग्य काम गरि यो* होवैन हाम्रो हित ॥

यो आख्यान सबै पितामहजिले * आज्ञा भएको सुनी ।
श्री दुर्योधनको गयो विजयको * आशा खरानी बनी ॥४८
पाए पाण्डवले विपक्षतिरको * सम्चार यस्तो जब ।
आज्ञा गर्नुभयो युधिष्ठिरजिले * डाकेर भाई सब ॥
एक्लै युद्ध गरेर कौरव तथा * सेना भएका जति ।
सक्छौ मार्न अवश्य, पार्थ ! रणमा* लाग्नेछ वेला कति ॥४९
लागे अर्जुन भन्न, धर्म-सुतले * आज्ञा भएको सुनी ।
राजन् ! श्रीशिवले मलाइ दिनुभो* जुन् अस्त्र लेऊ भनी ॥
त्यस्ले सक्दछु शत्रु मार्न सहजै * छन् तम्सिएका जति ।
गर्नू हुन्न प्रहार यो समरमा * त्यो अस्त्र हे सद्मति॥५०॥



विदुरले उदाहरण दिएको

गर्नू पर्छ विचार राखि अहिले * संग्राम साधारण ।
सक्नेछु दिन एकमै अरिहरू * सम्पूर्ण मारी दिन ॥

गर्थे ये रितका कुरा समरको * उत्साहले अर्जुन ।
शक्तीको सहदेवले, नकुलले * आफ्नो गरे वर्णन ॥५१
भन्थे भीम रिसाई शत्रु दलको * संहार गर्छु सब ।
वेला छैन विचारको समरको * जाऊँ छिटो लौ अब ॥
योद्धा पाण्डले र वीर कुरुले * पैह्ले गरी तर्खर ।
सेना, शस्त्र लिई दुबै थरि डटे * संग्रामका खातिर ॥५२॥

इति उद्योगपर्व समाप्त ।



* श्रीः *

# महाभारत भीष्मपर्व

प्रारम्भः

व्यासको आगमन र सञ्जयलाई दिव्यदृष्टि—

वन-वन डुलि गोपी-गोपको चित्त हर्ने ।
लुकि-लुकि दधि-नौनी प्रेमले नित्य चोर्ने ॥
अभय वर दिने औ भक्तमा प्रेम गर्ने ।
हरि भक्न सिकाउन् पन्थ यो सिन्धु तर्ने ॥१॥

पक्का निश्चय भैसक्यो जब त्यहाँ * पर्ने महाभारत ।
राजन् ! लड्न भनी दुवै तरफका * सेना भए उद्यत ॥
आए भेट्न भनेर व्यास सहसा * भूपाल अन्धासित ।
सोधे श्री धृतराष्ट्रले विनयले * श्री व्यास ज्ञानीसित ॥२॥

आँटे मर्न भनेर बान्धवहरू * देखी रहेंछु तर ।
छोरोको वशमा परी विवश छु * क्यै गर्नका खातिर ॥
शान्तिको नमिलेर पन्थ बहुतै * आत्तिन्छ मेरो मन ।
यस्को केहि भए उपाय सजिलो * गर्नू हवस् सज्जन ॥३॥

विन्ती श्री धृतराष्ट्रको सुनिसके * श्री व्यासजीले जब ।
लागे भन्न बुझाइ बात हितको * छर्लङ्ग पारी सब ॥
जो इच्छा हरिको छहुन्छ त्यहि नै * आई परी कारण ।
स्वप्ने पर्दछ कष्ट, चिन्तित भई * के पुग्छ बाबू ! भन ॥४॥

ज्ञानीलाइ हुँदैन दुःख मनमा * मान्छन् बरू ती खुशी ।
ऐल्हे दिन्छु म दिव्यदृष्टि, रण यो * हेर्नु घरैमा बसी ॥
भन्छन् श्री धृतराष्ट्र व्यासमुनिले * आज्ञा भएको सुनी ।
मैले कष्ट सहें अनेक थरिका * साना र ठूला पनि ॥५॥
ऐल्हे बन्धु-विनाशरूप रण त्यो * हेर्नैं इरादा गरी ।
इच्छा गर्दिनँ दिव्य-दृष्टि लिनको * मैले मुने ! यो घरी ॥
पाए सुन्छु बरू बसेर घरमै * त्यो युद्धको वर्णन ।
यस्तो बिन्ति सुनेर व्यास मुनिले * भन्छन् बुझाईकन ॥६॥
राजन् ! सञ्जयले बसीकन यहीं * प्रत्यक्ष देखे सरी ।
भन्नेछन् तिमिलाइ वर्णन गरी * त्यो युद्धको राम्ररी ॥
यस्तो श्री धृतराष्ट्रजी कन भनी * यौटा पठाई चर ।
डाकी सञ्जयलाइ व्यास मुनिले * आज्ञा भयो सादर ॥७॥
सुन्छन् रे धृतराष्ट्रले यहिं बसी * संग्रामको वर्णन ।
देखे भैं तिमिले बसीकन यहीं * मेरा कृपाले भन ॥
त्यो निम्ति अब दिव्यदृष्टि खुशिले * दिन्छु भनी व्यासले ।
इच्छा पूर्ण गराइबक्सनुभयो * तत्काल यै युक्तिले ॥८॥
पाई सञ्जय दिव्य-चक्षु मनमा * अत्यन्त खुशी भए ।
व्यर्थै मर्नु परेन त्यो समरमा * भन्ने विचारी लिए ॥
फेरी श्री धृतराष्ट्रलाइ हितको * शिक्षा दिई बेसरी ।
अन्तर्धान भएर व्यास सहसा * पाल्नूभयो त्यै घरी ॥९॥

युद्धमा पालन गर्ने नियम र शकुनहरूको वर्णन :—

राजा श्री धृतराष्ट्र व्याकुल भए * अत्यन्त चिन्ता परी ।
सोधे सञ्जयलाइ त्यै बखतमा * डाकेर श्रद्धा गरी ॥

देख्छू कौरवको र पाण्डु-सुतको * संग्रामको निश्चय ।
आँटे मनं लड़ेर आपुस महाँ * राजाहरू सञ्जय ! ॥१०॥
गर्दाहुन् सबले परस्पर कुरा * धेरै थरीका त्यहाँ ।
त्यो सारा तिमिले सुनाउ अहिले * मेरा अगाड़ी महाँ ॥
राजा श्री धृतराष्ट्रले दुखि भई * आज्ञा गरेको सुनी ।
थाले सञ्जयले बताउन सबै * क्यै बेर मन्मा गुनी ॥११
योद्धा लड्न भनेर कम्मर कसी * सारा डटेथे जब ।
थाले गर्न कुरा परस्पर मिली * साना र ठूला सब ॥
लड्नू क्षत्रिय धर्म हो भनि यहाँ * हामी लड़े तापनि ।
ईर्ष्या राख्न हुँदैन केहि मनमा * हो शत्रु मेरो भनी ॥१२॥
हामी यो रणबाट जीवित बची * पायौं भने फर्कन ।
बस्नूपर्छ मिलेर गाउँ घरमा * वैरत्व त्यागी कन ॥
लड्दामा पनि युद्धका नियमको * गर्दै रही पालन ।
गर्नूपर्छ प्रहार शस्त्रहरुको * जोडी मिलाईकन ॥१३॥
यस्तै बात गरी दुवै तरफका * मानीस छुट्ट्याउन ।
छाता श्वेत लगाइ चिन्ह शिरमा * डुल्थे ति गम्कीकन ॥
सोधे श्री धृतराष्ट्रले सुनि कुरा * क्यै शान्त पारी मन ।
जे देख्छौ तिमिले शुभा-शुभ त्यहाँ * सारा मलाई भन ॥१४॥
यो आज्ञा धृतराष्ट्रको सुनिसकी * भन्दा भए सञ्जय ।
जस्ले गर्छ अधर्म हे नरपते ! * पाउन्न त्यस्ले जय ॥
पक्षी काग र बाज गिद्ध बकुला * घेरा दिई यो घरी ।
चिच्याईकन उड्दछन् वरिपरी * साह्रै नराम्रो गरी ॥१५
उड्दैछन् हुटिटचाउँ दक्षिणतरफ् * चिच्याउदै बेसरी ।
आँसू काढि कराउँछन् हयहरू * दुःखी भई यो घरी ॥

ज्योती क्षीण तथा कबन्धहरूले * चौतर्फ ढाके सरी ।
देखिन्छन् रवि रक्त-वर्ण दिनहूँ * हे भूपती यो ! घरी ॥१६॥
हो यो रात तथा कि हो दिन भनी * गाह्रो छ छुट्याउन ।
वेला नाश हुने उपस्थित भयो * भन्छन् यिनै लक्षण ॥
हाँस्नू रक्त उकेल्नु कम्पित हुनू * नाच्नू स्वयं पल्टनु ।
आँसू कादि समस्त देव-प्रतिमा * मानीस जस्तै रुनु ॥१७॥
हो यो लक्षण नाशको हय विना * हिंड्नू अनेकौं रथ ।
धूलो खूब उडेर मानिसहरू * भेट्टाउँदैनन् पथ ॥
गाईका सँग गर्छ गर्दभ गई * संभोग त्यै कारण ।
जन्मन्छन् हिजडाहरू, अशुभको * यो हो ठुलो लक्षण १८॥
नक्षत्रादिकको विचार गणना * गर्दा तथा ज्योतिष ।
हेर्दा नाश हुने बुझिन्छ रणले * मर्छन् सबै मानिस ॥
उल्कापात र धूमकेतु दिनमै * आगोसरी खस्तछन् ।
यस्ता लक्षणले सदैव नृपते ! * संहार नै गर्दछन् ॥१९॥
जस्का सैनिक हिंड्दछन् खुशि भई* शस्त्रास्त्रका साथमा ।
जस्को कीर्ति ठुलो छ लोकभरिमा* जो चल्छ सद्धर्ममा ॥
जस्ले पाल्दछ पुत्र झैं जतनले * आफ्ना प्रजा सैनिक ।
त्यस्को हुन्छ अवश्य जीत रणमा * यो, हे प्रजापालक॥२०॥

सञ्जय-धृतराष्ट्र सम्वाद—

वैशम्पायनले भने—पृथिविका * मालीक जन्मेजय !
सोधेथे धृतराष्ट्रले जति-जति * भन्दै गए सञ्जय ॥
सुन्दा संजयका शुभाशुभ हुने * विस्तारले वर्णन ।
लामू सास गरेर फेरि नृपले * सोधे खोऱ्याईकन ॥२१

योद्धा पाण्डव वीर कौरवहरू * सेना लिई साथमा ।
आँटे मर्न लड़ेर भूपतिहरू * जुन् राज्यका लोभमा ॥
जुन् भूमीकन प्राप्त गर्न अहिले * आसक्त छु मै पनि ।
त्यस्को वर्णन सुदछु गर तिमी * पूरा दयालु बनी ॥२२
दृश्यादृश्य कती छ, लोक कसरी * यो सृष्टिकर्ता छ को ?
जो जो मुख्य कुरा छ यो पृथिविमा * संक्षेपमा सुन्छु त्यो ॥
यस्मा छन् कति सिन्धु, भूपतिहरू * कुन् देशमा बस्तछन् ।
सारा बात बताउ संजय ! तिमी * सुन्छू लगाएर मन् ॥२३॥
यस्तो प्रश्न सुनीसकी नृपतिको * आनन्द मानी कन ।
ज्ञानी संञ्जयले यथार्थ रूपमा * सारा गरे वर्णन ॥
पानी, वायु र अग्नि, भूमि नभ यी * हुन् पञ्चभूत सज्जन !
शब्द स्पर्श र रूप, गन्ध, रस यी * हुन् पाँच तिन्को गुण ॥२४॥
पाँचोटा गुण यी मिली पृथिविमा * जम्मा हुनाले गरी ।
जन्मन्छन् सब यी चराचरहरू * हे भूप ! धेरै थरी ॥
पैह्लो स्वेदज औ जरायुज तथा * तेस्रो छ जो अण्डज ।
जन्मन्छन् यसबाट स्थावर तथा * प्राणीहरू, जङ्गम ॥२५॥
यिन्लाइ 'चर' भन्दछन् 'अचर' हुन् * वृक्षादि जो छन् 'जड़' ।
पाँचै भूतहरुबाट जन्मन गई * मिल्छन् त्यसैमा सब ॥
सोही कारण लोकमा प्रकृतिका * छन् जीवधारी जति ।
सत्ता लीकन ब्रह्मका प्रकृति नै * राख्छिन् मिलाई स्थिति २६
उत्पत्ति स्थिति नाशको क्रम यही * मानिन्छ संसारमा ।
यस्को हुन्न विरुद्ध हे नरपते ! * कैह्ले कुनै लोकमा ॥
प्राणीलाइ स्वकर्मको फल दिने * सम्पूर्णमा व्यापक ।
साक्षात् ईश्वर ब्रह्म वा प्रकृति हुन् * ब्रह्माण्डका रक्षक ॥२७॥

यस्लाई सक्दिइन्न जान्न मनले * वा शक्तिले, ज्ञानले ।
भन्छन् तिन्कन ब्रह्म प्राणि जतिका* आत्मा भनी विज्ञले ॥
आत्मज्ञान हुने कुराहरु सबै * पैह्ले गरी वर्णन ।
लागे संजय भन्न फेरि नृपको * इच्छा विचारीकन ॥२८॥
राजन् ! पाण्डवलाई छैन मनमा * क्यै लोभ साम्राज्यको ।
गर्छन् पालन ती प्रसन्न मनले * सद्धर्मको, विप्रको ॥
राजन् ! मर्न तयार छन् नृपहरू * जुन् भूमिका खातिर ।
जस्का निम्ति हजूरका सुतहरू * सम्पूर्ण छन् तत्पर ॥२९॥
सोही भारत भूमिको हजूरको * इच्छा हुनाले गरी ।
गर्छु वर्णन सुन्नुहोस् नरपते ! * जाने जती यो घरी ॥
मान्धाता, मुचुकुन्द, श्रीनृग, शिवी* राजा पृथू सोमक ।
इक्ष्वाकू र दिलीप भूपति भए * सारा प्रजापालक ॥३०॥
मन्पर्थ्यो यिनिलाइ भारत सदा * हो श्रेष्ठ भूमी भनी ॥
सोही भारतको सुनाउँछु कुरा * हे भूप ! मैले पनि ।
सातोटा अतलादि लोकहरु छन् * यी भूमिका तल्तिर ।
भूर्लोकादि ठुला क्रमैसित सबै * छन् सात माथीतिर ॥३१॥
शुक्ती, सह्य, महेन्द्र श्री मलय औ* श्री ऋक्ष, विन्ध्याचल ।
सातै पर्वत पारियात्र छ यहाँ * विख्यात छन् निर्मल ॥
यी बाहेक वरि-परी अरु पनी * छन् श्रेष्ठ जो पर्वत ।
तिन्को छन् छ अपार श्रेष्ठ महिमा *छन ती सबै विस्तृत॥३२॥
राजन् ! म्लेच्छ र आर्य, संकर यिनै * छन् तीन जाती यहाँ ।
यिन्कै शासन चल्छ भारतभरी * जानीलिनोस् मन्महाँ ॥
गङ्गा, सिन्धु, सरस्वती र यमुना * गोदावरी, पिङ्जला ।
कावेरी, बहुला, बसा र विदिशा * चित्रोत्पला, मञ्जुला॥३३॥

वाणी, वेत्रवती, पयोष्णि, त्रिविदा * कृष्णा- वृषा, कौशिकी ।
राजन् ! भारतमा यसै किसिमका * धेरै अरू छन् नदी ॥
पुण्यात्मा र प्रसिद्ध पुण्य-सलिला * सारा हुनाले गरी ।
पानी पाइ प्रसन्न छन् जनहरु * यो देशका बेसरी ॥३४॥
गोधा, भद्र,कलिङ्ग,कुक्कुर तथा * कौशल्य और जाङ्गल ।
चेदी, मत्स्य, करूष, कोशल तथा* पाञ्चाल औ कुन्तल ॥
कुन्ती, अङ्ग, विदेह, बङ्ग,मधुमान्* काशी तथा भार्गव ।
यस्तै ग्राम र देश छन् अरु पनी * साना र ठूला सब ॥३५॥
पुण्यात्मा र प्रसिद्ध वीरहरू छन् * यी देशवासी सुखी ।
छैनन् भारतका कुनै नगरमा * कोही दरिद्री, दुखी ॥
रक्षा गर्दछ जो सबै तरहले * यी भूमिको राम्ररी ।
त्यस्को पूर्ण सबै मनोरथ भई * बस्नेछ इन्द्रै सरी ॥३६॥
राजन् ! अर्थ र धर्म, काम सबको* यी सिद्धिदात्री हुँदा ।
लड्छन् प्राप्त गरौं भनी नृपहरू * यी भूमिमा सर्वदा ॥
मासुको टुकुरा लिई कुकुरले * ताने, लुछे झैं गरी ।
यी भूमीकन प्राप्त गर्न रिसले * लड्छन् र जान्छन् मरी३७
इच्छा ती सब गर्दछन् पृथिविको * सम्पत्ति भोगौं भनी ।
राम्रो तृप्ति हुदैन भोगहरुले * कैह्ले कसैको पनि ॥
ऐह्ले सोहि अतृप्तिले मनमहाँ * ईर्ष्या बढी बेसरी ।
योद्धा कौरव वीर पाण्डवहरू * सेना तयारी गरी ॥३८॥
नीतीपूर्वक युद्धका नियमको * गर्छौं भनी पालन ।
आँटे मर्न लड़ेर बन्धुसित नै * वैरत्व ठानीकन ॥
रक्षा गर्न सके यिनै पृथिविले * दिन्छन् सदा सम्पति ।
इच्छा पूर्ण हुँदैन घोर कलिमा * हुन्छन् दुखी भूपति ॥३९॥

यस्तो सञ्जयले सुयोग्य रितले * वर्णन् गरेको सुनी ।
सोधे श्री धृतराष्ट्रले मनमहाँ * क्यै बेर राम्रो गुनी ॥
ज्ञानी सञ्जय ! जान्दछौ तिमि कुरा* राम्रो नराम्रो सब ।
सुन्छु लक्षण आयुको म कलिमा * यस्तो छ भन्ने अब ॥४०
तीनै कालमहाँ शुभाशुभ दिने * छन् जो कलीका फल ।
सारा बात सुनाउ स्पष्ट मन नै * पार्नै गरी निर्मल ॥
जम्बू,शाक र क्रौञ्च औ कुश तथा* छन् द्वीप जो पुष्कर ।
यिन्को वर्णन सुन्दछु बरु तिमी * संक्षेपमा नै गर ॥४१॥
यो आज्ञा धृतराष्ट्रको सुनिसकी * क्यै बेर सोचीकन ।
लागे सञ्जय गर्न घोर कलिको * आयुष्यको वर्णन ॥
राजन् ! उत्तम एक सत्य युग हो * त्रेता तथा द्वापर ।
हो चौथो कलिकालमा श्रम गरे * मिल्छन् स्वयं ईश्वर ॥४२
बाँचे चार हजार वर्ष सहजै * प्राणीहरू सत्यमा ।
त्रेतामा जन तिन् हजार जति नै * बाँच्नन् रही धर्ममा ॥
बाँच्ने द्वापरको प्रमाण छ दुई * हज्जार सम्वत्सर ।
मर्यादा कहिं छैन घोर कलिमा * आयुष्यको खातिर ॥४३॥
मर्छन् बालक गर्भका र तरुना * वेला नपुग्दै कति ।
पापी, वृद्ध र रोगग्रस्त कलिमा * बाँच्छन् सदा, भूपति !
जम्बूद्वीप ठूलो छ योजन सबै * अट्ठार हज्जारको ।
घेरेको छ समुद्रले वरिपरी * त्यस्को सबै नूनको ॥४४॥
नाना रत्न हुने अनेक थरि छन् * त्यो द्वीपमा पर्वत ।
बस्ता देव, मनुष्य, यक्ष सबले * शोभा छ झन् अद्भुत ।
शाक द्वीप पनी छ सात गिरिका * रत्नादिले भूषित ।
तिन्मा एक प्रधान मेरु गिरि छन् * गन्धर्वले सेवित ॥४५॥

शोभा खूब ठुलो छ श्याम गिरिको* त्यो देखि क्यै उत्तर ।
काला छन् नृपते ! बसे जति त्यहाँ* सम्पूर्ण नारी नर ॥
सोधे श्री धृतराष्ट्रले किन त्यहाँ * काला भएका भनी ।
वस्ता कृष्ण त्यहाँ प्रभाव परि त्यै * काला भएका तिनी ॥४६



संजय-धृतराष्ट्र संवादमा युग वर्णन :

यस्तै संजयले अनेक गिरिको * गर्दै गए वर्णन ।
त्यो देखी पर दुर्ग पर्वत ठुलो * अर्को छ हे राजन ॥
चल्दा केशरको सुगन्ध मिसिई * हावा त्यहाँको सदा ।
खूशी रैयत छन्, त्यहाँ नरपते ! * सारा सदा सर्वदा ॥४७॥
धेरै पर्वत छन् त्यहाँ वरिपरि * मैले बताऊँ कति ।
गर्छन् पूजन शम्भुको जनहरू * त्याहाँ बसेका जति ॥
गर्छन् पालन वर्णधर्महरुको * चारै थरीले त्यहाँ ।
सोही कारणले मिली अमरता * सार्है खुशी छन् त्यहाँ॥४८॥
गङ्गा आदि नदीहरू पनि त्यहाँ * बग्ने हुँदा निर्मल ।
वर्षा खातिर इन्द्रले बखतमा * दिन्छन् त्यहींको जल ॥

राजन् ! एक ठूलो छ सिन्धु घृतको * क्षीरोद भन्दा पर ।
त्योभन्दा दधिको ठुलो छ उदधी * हे भूपती ! चौबर ॥४९॥
रक्सीको छ समुद्र श्रेष्ठ दधिको * -भन्दा ठुलो दोब्बर ।
अर्को सिन्धु ठुलो छ स्वच्छ जलको * त्यो देखि केही पर ॥
राजन् ! गौर र कृष्णद्वीप, गिरि छन्* विख्यात धेरै त्यहाँ ।
मैले वर्णन गर्न सक्छु अहिले *प्रत्येकको लौ कहाँ ?॥५०॥
हे राजन् ! कुश द्वीपमा छ कुशको* यौटा ठुलो जङ्गल ।
त्यसको पूजनले त्यहाँ जन कुनै * छैनन् दुखी दुर्बल ।
क्रौञ्च द्वीपमहाँ छ क्रौञ्च गिरि जो * विख्यात संसारमा ।
बस्ता मेल-मिलापले जन दुखी *देखिन्न त्योस्थानमा॥५१॥
राजन् ! पुष्कर द्वीपमा छ गिरि जो * अर्को ठुलो पुष्कर ।
ब्रह्माको छ त्यहाँ निवास जनको * कल्याणका खातिर ॥
धेरै छन् उपद्वीप द्वीप नृपते ! * विख्यात पृथ्वीभरी ।
तिन्को विस्तृत रूपमा म कसरी * सक्नेछु वर्णन् गरी ॥५२॥
मैले जो उपद्वीप, द्वीपहरुको * ऐह्ले गरें वर्णन ।
गर्छन् एक स्वधर्मको सब त्यहाँ * प्राणीहरू पालन ॥
सोही कारणले परस्पर मिली * सानन्द ती बस्तछन् ।
ब्रह्माले लिइ दण्ड एक बलियो * रक्षा सदा गर्दछन् ॥५३॥
श्री ऐरावत, सुप्रतीक बलिया * अञ्जन् तथा वामन ।
चारोटा गजराज छन् पृथिवि नै * गर्नै सदा धारण ॥
फेर्दा श्वास सदा ति चार गजले * निस्कन्छ हावा जति ।
बाँच्छन् प्राणिहरू पिईकन त्यही * धेरै बताऊँ कति ?॥५४॥
भन्छन् श्री धृतराष्ट्र द्वीपहरुको * मैले सुनें वर्णन ।
राहु, चन्द्र र सूर्यको विषयमा * जे जान्दछौ त्यो भन ॥

लागे सञ्जय भन्न राहु ग्रहको * विस्तार सुन्नुहवस् ।
पूरा बाह्र हजार योजन जती * हो व्यास जानीलिनोस्॥५५
जो विस्तार कहिन्छ त्यो परिधिको * छत्तीस हज्जार हो ।
मोटो सात हजार योजन तथा * चाक्लो त्यती नै छ त्यो ॥
राजन् ! व्यास छ चन्द्रको पनि ठुलो* एघार हज्जारको ।
तिन्को मण्डल जो छ योजनमहाँ * तेत्तीस हज्जारको । ५६
भन्छन् विज्ञहरू सदा विपुलता * तिन्को छ साठी सय ।
तिन्को तेज यती छ भन्न म पनी * सक्तिन लौ निश्चय ॥
राजन् ! व्यास छ नौ हजार जति नै * विस्तार श्री सूर्यको ।
घेरा मण्डलको तथा परिधि हो * बत्तीस हज्जारको । ५७॥
तिन्को साठि हजारको विपुलता * मानिन्छ संसारमा ।
हे राजन् ! दिनरूप श्रेष्ठ रवि छन् * प्रत्यक्ष यो लोकमा ॥
राहूको रवि-चन्द्र देखि बहुतै * विस्तार बर्ता हुँदा ।
ढाकिन्छन् रवि-चन्द्र राहु ग्रहको * छाया परेरै सदा ॥५८॥
कस्तो रूप छ लोकको र कसरी * निर्माण यस्को भयो ।
सारा बात भनें, जती हजुरले * सोध्नूभएको थियो ॥
श्री दुर्योधनतर्फको अब सबै * त्यागेर चिन्ता जति ।
शान्ती स्थापन गर्नुहोस् मनमहाँ * आफ्नू स्वयं भूपति ॥५९

संग्रामको तयारी—

सोधे श्री धृतराष्ट्रले मनमहाँ * चिन्ता बढी बेसरी ।
ज्ञानी संजय ! युद्धको भन तिमी * सम्चार राम्रो गरी ॥
हाम्रा सैनिकको छ यो बखतमा * कुन् वीर सेनापति ।
सेनानायक को छ शत्रुतिरको * कस्तो छ युद्धस्थिति ॥६०

लागे संजय भन्न हे नरपते ! * सुन्नुहवस् सादर ।
सेना तत्पर छन् दुवै तरफका * संग्रामका खातिर ॥
भेरी, शंख, मृदंग, ढोल, नगरा * बाजा बजाई कन ।
गर्छन् हर्ष-बढाइँ खूब अहिले * युद्धार्थि दुर्योधन ॥६१॥
योद्धा कौरवतर्फका यस घरी * छन् भीष्म सेनापति ।
रक्षा खातिर भीष्मको वरिपरी * छन् श्रेष्ठ योद्धा जति ॥
आफाफ्ना लिइ शस्त्र सैनिक तथा* ठूला-ठूला भूपति !
जित्ने युद्ध कसो गरीकन भनी * सल्लाह गर्छन् कति ॥६२
राजन् ! पाण्डवतर्फ धर्म-सुतको * आज्ञा लिई पार्थले ।
यौटा व्यूह गरे तयार बलियो * श्री कृष्णको युक्तिले ॥
गर्जन्छन् रणमा ठुलो स्वर गरी * श्री भीम सेनापति ।
तिन्का रक्षक रूपमा नृपति छन् * धेरै कती हो कति ! ॥६३॥
कोही जान्छ उता, यतातिर कुनै * गर्छन् ठुलो खल्बल ।
दौड़न्छन् हयमा कती, रथ चढी * देखाउँदैछन् बल ॥
शान्ती छैन कतै ससैनिक सबै * भूपाल छन् चञ्चल ।
ढाकेको अहिले छ वीरहरूले * सम्पूर्ण युद्धस्थल ॥६४
श्री नारायणरूप मुख्य हरि छन् * श्री पार्थरूपी नर ।
जस्को कीर्ति ठुलो छ लोक हितको* निम्ती छ जो तत्पर ॥
न्यायोचित् व्यवहार बुद्धि बलमा * जो धर्ममा छन् स्थिर ।
पक्का जीत हुनेछ त्यै पुरुषको * भन्छन् सबैले तर ॥६५॥
श्री दुर्योधन क्रोधको भुमरिमा * राम्रो गरी गाड़िदा ।
आँटे बान्धव मर्न, मुख्य तिनि नै * यौटा विरोधी हुँदा ॥
चिन्ता गर्नु वृथा छ हे नरपते ! * जानेर दैवी-गति ।
सम्झी श्री भगवानलाई मनले * आफ्नू सपानोस् मति॥६६

गीता-सार पहिलो अध्याय — अर्जुन विषादयोग—

लागे ती धृतराष्ट्र सोध्न अहिले * त्यो धर्मको क्षेत्रमा ।
गर्छन् पाण्डव के र वीर कुरु के * संग्रामको निम्तिमा ॥
दृश्यादृश्य सबै बसेर घरमा * नै भन्नसक्ने हुँदा ।
ज्ञानी संजय ! लौ बताउ तिमिले * राखी ममाथी दया ॥६७
लागे संजय भन्न व्यूह रचना * देखेर दुर्योधन ।
भन्छन् नम्र भई गएर नगिचै * श्री द्रोण योद्धाकन ॥
सेना हेर्नुहवस् गुरो ! हजुरले * श्री पाण्डुका पुत्रको ।
भन्छु नाम प्रधान छन् जति उता * योद्धा तथा वीरको ॥६८
योद्धा भीम र पार्थ झैं बल हुने * छन् द्रौपदीका सुत ।
काशीराज र धृष्टकेतु, पुरुजित् * योद्धा सुभद्रा-सुत ॥
कुन्तीभोज र शैब्य,सात्यकि,द्रुपद् * श्री उत्तमौजा अनि ।
चेकीतान, विराट यी समरमा * लड्छन् हितैषी बनी ॥६९
त्यागने प्राण सहर्ष वीर जति छन् * विख्यात हामीतिर ।
तिन्को नाम बताउंछु हजुरले * जानी लिना खातिर ॥
द्रौणी, कर्ण, हजूर, भीष्म, कृपजी * भूरिश्रवा भूपति ।
मेरा निम्ति तयार मर्न सब छन् * योद्धाहरू सद्मति॥७०॥
हाम्रा रक्षक छन् प्रसिद्ध रणमा * श्री भीष्म सेनापति ।
रक्षा गर्न भनेर तत्पर उता * छन् भीम सेनापति ॥
हाम्रा सैन्य अजेय छन् समरमा * श्री भीष्मले रक्षित ।
रक्षक् भीम भएर शत्रुहरुले * हार्छन् सजीलैसित ॥७१॥
त्यै वेला कुरुराजलाइ सहजै * हर्षित् गराऊँ भनी ।
योद्धा भीष्मजिले गरे स्वर ठुलो * पारेर शंख-ध्वनि ॥

नाना शंख, मृदङ्ग, ढोल, नगरा * सम्पूर्ण बज्दा भए।
त्यसको शब्द सुनेर सैनिकहरू * युद्धार्थ झन् तम्सिए॥७२॥
गनूं भो निज पाञ्चजन्य हरिले * विख्यात शंख-ध्वनी।
फुक्थे शंख ति देवदत्त कहिले * श्री पार्थजीले पनि॥
गर्जी बेसरि पौंड्र शंख रणमा * फुक्ता भए भीमले।
राजन्! शंख अनन्त नामक फुके * श्री धर्मका पुत्रले॥७३॥
यौटा शंख सुघोष हो नकुलको * अर्को मणीपुष्पक।
योद्धा श्री सहदेवले पनि फुके * हे शत्रु संहारक!
काशीराज तथा विराट नृपले * श्री द्रौपदी पुत्रले।
धृष्टद्युम्न, शिखण्डि, सात्यकि अरु * सम्पूर्ण भूपालले॥७४॥
आफाफ्ना लिइ शंख घोर रवले * फुक्तै गएथे जब।
ठूलो शब्द भएर फैलिन गयो * आकाश, भूमी सब॥



दुवै पक्षका सेनाको मध्यमा अर्जुनको रथ

छोराहेरु थिए त्यहाँ हजुरका * तम्सी रहेका जति।
छाती पारिदियो विदीर्ण सबको * त्यो शब्दले भूपति!॥७५॥

आँटे शस्त्र प्रहार गर्न रणमा * योद्धाहरूले जब ।
लागे अर्जुन भन्न त्यै बखतमा * प्यारा सखा माधव !
"मेरो यो रथलाइ पक्ष दुइको * पौंचाउनोस् माझमा ।
मैले गर्नु लड़ाइँ पर्छ अहिले * कुन् वीरकासाथमा॥७६॥
दुर्बुद्धी कुरु-राजको समरमा * कल्याणका खातिर ।
जम्मा छन् कति वीर हेर्दछु सबै- * लाई म दामोदर !" ॥
यो बिन्ती हरिले धनञ्जयजिको * सुन्नू भएथ्यो जब ।
रोक्नुभो रथ माझमा समरको * भन्नूभयोलौ अब!॥७७॥
हे कुन्तीसुत ! हेर लौ नृपहरू * साम्नू खड़ा छन् जति ।
यिन्का साथ लड़ाइँ पर्छ बलियो * तिम्रो छिटै सद्मति ! ॥
यो आज्ञा हरिको सुनेर सहसा * आँखा घुमाई कन ।
सारा कौरव सैन्यलाइ नृपते ! * हेर्दा भए अर्जुन ॥७८॥
भाई, पुत्र र पौत्र, मित्र, ससुरा * मामा र काका, गुरु ।
साला, दाजु तथा अरू पनि सबै * देखेर बन्धूहरू ॥
सारा बान्धवलाइ मार्न रणमा * पर्नेछ मैले भनी ।
श्री दामोदरलाइ पार्थ दुखले *भन्छन् मयाल्ढ बनी॥७९॥
हे गोविन्द ! यहाँ उपस्थित जती * छन् युद्धका खातिर ।
आफ्ना बान्धव औ हितू जनहरू * देखेर चारैतिर ॥
मेरा अङ्गहरू भए शिथिल औ * सुक्तैछ घाँटी, मुख ।
कामेको छ शरीर बेसरि दियो * रोलाञ्च ले झन् दुख॥८०।
छाला पोल्दछ देहको र करको * गाण्डीव खस्तै गयो ।
शक्ती क्षीण भएर चेत तनको * सारा गए झैं भयो ॥
उल्टो लक्षण देख्तछु, समरको * इच्छा हराई सक्यो ।
मारी बान्धवलाइ लाभ पनि क्यै *पाइन्न पक्का छ यो ॥८१॥

मेरो शक्ति रहेन ठिङ्ग उभिने * के हेतु यस्तो भयो ।
इच्छा छैन लड़ाइँमा विजयको * सौख्यादि साम्राज्यको ॥
जस्का निम्ति थियो प्रयोजन ठूलो* साम्राज्यको भोगको ।
सोही बान्धव छन् उपस्थित सबै * इच्छा गरी युद्धको ॥८२
मारुन् कौरवले मलाइ अथवा * त्रैलोक्य पाए पनि ।
मेले गर्नु हुँदैन बन्धु-वध यो * हो पाप ठूलो भनी ॥
मार्दा श्री धृतराष्ट्रका सुतहरु * पाइन्न केही सुख ।
लाग्ला पाप अवश्य बन्धु-वधको * पर्नेछ भोग्नू दुख ॥८३॥
लोभ ग्रस्त भएर भ्रष्ट अहिले * छन् अन्ध झैं कोरव ।
मित्र द्रोह तथा विनाश कुलको * के देख्तथे ती सब ! ॥
हामीलाइ छ ज्ञान त्यो विषयको * प्रत्यक्ष द मोदर !
बस्नूपर्छ गरी विचार मनमा * त्यो पाप देखी पर ॥८४॥
धेरै पाप बढेर दूषित हुनन् * सम्पूर्ण नारी-नर ।
जन्मन्छन् अनि वर्णसंकरहरू * हे कृष्ण ! चारै तिर ॥
होला नाश समस्त वर्ण कुलको * सद्धर्म, त्यो पापले ।
त्यस्ता मानिस पर्दछन् नरकमा * भन्छन् यही विज्ञले ॥८५॥
त्यस्ले लुप्त हुनन् तिलोदक क्रिया * पिण्डादि सारा जब ।
गिर्नेछन् अनि पितृ स्वर्गपुरिका * ती नर्कमा रौरव ॥
जानी-जानि असत्य राज्य-सुखको* यो लोभमा गाडिई ।
आँट यौं बन्धव मार्न हामिहरुले * हे कृष्ण ! पापी भई ॥८६
आफ्ना शस्त्रहरू म छुन्न रणमा * मारुन् तिनैले बरु ।
त्यसले नै हित हुन्छ हामिहरुको * देखिन्न बाटो अरू ॥
यस्तो बिन्ति गरेर गाण्डिव धनू * तत्काल त्यागीकन ।
चिन्ताग्रस्त भई बसे रथमहाँ * श्रीहीन झैं अर्जुन ॥८७॥

आँसुले भरिएर श्री विजयका * आँखा थिए टल्पल ।
चिन्ता-शोक बढेर खूब मनमा * निक्कै भए व्याकुल ॥
लाग्यो खूब दया हरीकन दुखी * देखेर तिन्को स्थिति ।
आज्ञा गर्नुभयो बुझाउन भनी * तत्काल हे भूपति ! ॥८८॥
जस्ले कीर्ति हुँदैन, काम गरि जो* पाइन्न राम्रो गति ।
गर्दैनन् कहिले कुनै सुजनले * जुन् काम हे सद्मति !
त्यस्तो कायरता उपस्थित भयो * ऐल्हे तिमीमा किन ?
आँटेको छ लडाइँ पर्न अहिले * यो घोर हे अर्जुन !॥८९
गर्छौ बात वृथा नपुंसक सरी * हारी सबै हिम्मत ।
होऊ तत्पर शत्रु मार्न रणमा * तत्काल हे भारत ! ॥
जोरी हात दुवै विनम्र स्वरले * बिन्ती गरे पार्थले ।
द्रोणाचार्य र भीष्मलाइ कसरी * हान्ने प्रभो ! बाणले ॥९०
मैले नै गुरुलाइ यो समरमा * हे कृष्ण ! मार्नू परे ।
होला उत्तम लोकमा उदर यो * भिक्षान्नद्वारा भरे ॥
मैले पूज्य, गुरु दुवैकन स्वयं * मारे पनी युद्धमा ।
मिल्ने हो पछि रक्तमिश्रित उही * भोगादि संसारमा ॥९१॥
हाम्रो हुन्छ कि जीत शत्रुहरुको * जान्दीनँ हे केशव ?
चाहन्नौं जतिलाइ मार्न तिनि नै * साम्नू खडा छन् सब ॥
होला पालन धर्मको पथ सदा * कुन् कामले ? जान्दिनँ ।
मेरो श्रेय हुने कुरा हजुरले * भन्नोस् विचारीकन ॥९२
शिक्षा माग्दछु शिष्य हुँ हजुरको * छु आत्तिएको पनि ।
मेरो शोक हटाइदक्सनुहवस् * चाँडो दयालु बनी ॥
पाऊँ वैभवयुक्त यो पृथिविको * साम्राज्य निष्कण्टक ।
पाऊँ आसन इन्द्रको कि त बनूँ * ब्रह्माण्डको मालिक ॥९३॥

मेरा इन्द्रियलाइ क्षीण यसरी * पार्दैछ जुन् शोकले ।
त्यस्को नाश हुने उपाय सजिलो * देख्दीनँ क्यै बुद्धिले ॥
चिन्ता-ग्रस्त भएर यो किसिमले * बिन्ती गरी पार्थले ।
हे दामोदर ! युद्ध गर्दिनँ भनी * बस्ता भए शोकले ॥९४॥

गीतासार—दोस्रो अध्याय

यस्तो अर्जुनको कुरा सुनिसकी * ठट्टा गरे झैं गरी ।
हाँस्तै श्री हरिले कुरा हित हुने * आज्ञा भयो त्यो घरी ॥
जस्को शोक वृथा छ शोक अहिले * गर्छौं त्यसैको किन ?
तिम्रो बात सुनी भयो मकन लौ * आश्चर्य हे अर्जुन !॥९५॥
मार्ने मानिसको तथा पृथिविमा * बाँच्ने जतीको पनी ।
चिन्ता पण्डितलाइ हुन्न तिनको * सद्धर्म हो यो भनी ॥
पेह्ले हामि थियौं सबै पछि पनी * हुन्छौं यही चालले ।
ऐह्ले मात्र भयौं भनेर मनमा * ठान्छन् सदा मूर्खले ॥९६
देहीको छ कुमार, यौवन, जरा * तीनै स्थिति देहमा ।
जस्ले गर्छ बिचार धीर त्यहि हो * पर्दैन त्यो मोहमा ॥
हुन् यो इन्द्रियधर्म जो क्षणिक छन् * शीतोष्ण दुःखै सब ।
तिन्लाई खप वीर भैं, बुझ झुटो * केही नमानी दुख ॥९७॥
जस्ले सक्तछ खप्न इन्द्रियहरू * -का कष्ट यी अर्जुन !
त्यो हो धीर, हु दैन व्याकुल कवै * मोक्षाधिकारी जन ॥
आत्मा शाश्वत नित्य हो, न कहिले * मर्नै तथा जन्मने ।
मर्दा देह अनित्य त्यो पनि मरे * झैं बुद्धिमा भासिने ॥९८॥
आत्मा छिन्दछ, नित्य अव्यय तथा * जस्ले अजन्मा भनी ।
त्यस्का निम्ति समान हुन्छ भवमा * मर्नु र मार्नु पनि ॥

त्यागी जीर्ण लुगा नवीन जसरी * गर्छन्‌ सबै धारण ।
जन्मन्छन्‌ त्यजि देह जीर्ण जनले* त्यस्तै गरी अर्जुन ॥९९॥
आगोमा न त डढ्छ शस्त्रहरुले * काटेर काटिन्न जो ।
हावाले न त सुक्छ, आद्र जलमा * राखे पनी हुन्न जो ॥
सुक्नु, काटिनु, पोलिनु अरू पनी * छन्‌ जो विकारी गुण ।
आत्मा नित्य अचिन्त्य औ स्थिर हुँदा * सक्तैन यो मारिन ॥१००॥
आत्मा मर्दछ जन्म लिन्छ यदि यो* भन्छौ भने अर्जुन !
देहीको बुझि धर्म त्यो तिमि वृथा * यो शोक गर्छौ किन ?
मर्नेको यदि जन्म हुन्छ त भने * जन्मे पछी मर्दछ ।
यस्को छैन उपाय, बुझ्नु तिमिले * राम्रो गरी पर्दछ ॥१॥
मर्नू जन्मनुको अघी कि त पछी * देखिन्न कोही जन ।
देखा पर्दछ माझको समयमा * सम्पूर्णको जीवन ॥
गर्नू शोक वृथा छ पार्थ ! तिमिले* देखेर यस्तो स्थिति ।
चिन्ता त्याग गर्‍यौ भने समरले * नै मिल्छ राम्रो गति॥२॥
योद्धा क्षत्रियलाई युद्ध सरिको * क्यै छैन श्रेयस्कर ।
आफ्नू धर्म बुझेर युद्ध गर यो * त्यागी कुशङ्का डर ॥
आफैं द्वार खुला छ स्वर्ग-पुरिको * संग्राम द्वारा जब ।
गर्छन्‌ क्षत्रिय वीर प्राप्त सहजै * त्यो स्वर्गको वैभव ॥३॥
पाएको यदि धर्म-युद्ध अहिले * त्याग्छौ भने अर्जुन !
लाग्ला पाप सुकीर्ति, धर्म जति हो* जाला स्वयं नाशिन ॥
गर्नेछन्‌ पछिसम्म लोकहरुले * निन्दा नराम्रो गरी ।
निन्दा सुन्नुपरे, हुनेछ मनमा * जानू निको हो मरी ॥४॥
ठान्दैछन्‌ तिमिलाइ श्रेष्ठ जनले * जस्तो ठुलो यो घरी ।
भन्नेछन्‌ सबले मिली, पछि सर्‍यो* संग्रामको देखी डरी ॥

निन्दा शत्रुहरू पनी थरि-थरी * गर्नन् नराम्रो गरी ।
होला कष्ट ठुलो ति शत्रुहरुको * दुर्वाच्य सुन्नू परी ॥५॥
मिल्ला स्वर्ग मरे, जिते पृथिविको* भोग्छौ ठुलो। वैभव ।
सोही कारण युद्ध गर्दछु भनी * होऊ खडा लौ अब ।
हार्नू जित्नु समान दुःख-सुख हुन् * मर्नू र बाँच्नू पनि ।
सोही कारणले रहू दृढ तिमी * संग्राम गर्छु भनी ॥६॥

मैले जती हित कुरा अहिले सुनाएँ ।
निष्काम कर्म गर पार्थ ! भनी बुझाएँ ॥
गाह्रो छ बुझ्न तर भन्छु म कर्म-योग ।
यस्मा हुने पछि हुनन् सब तुच्छ भोग ॥ ७ ॥

तोड्नेछौ सब कर्म-बन्धन तिमी * जुन् ज्ञानले अर्जुन !
भन्छु त्यो पनि कर्म-योग मनको * त्यागी कुशंका सुन ॥
जस्ले गर्दछ कर्मयोग तिरको * राम्रो गरी साधन ।
मर्नू जन्मनु रूप कष्ट नगरी * पुग्ला सबै कामना ॥८॥
राख्नू पर्दछ बुद्धिलाइ जनले * रोकेर यो योगमा ।
जस्को अस्थिर बुद्धि हुन्छ जनत्यो* टिक्तैन यो पन्थमा ॥
प्रीती राख्दछ वेद वाक्यहरुमा * श्रद्धा बढाई कन ।
इच्छा गर्दछ कर्मको फल सदा * भोगौं भनी जो जन ॥९॥
गर्छन् यत्न, क्रिया अनेक थरि जो* ऐश्वर्य क खातिर ।
तिन्को बुद्धि हुँदैन सुस्थिर सखे * दौड्न्छ चारै तिर ॥
तिनोटा गुणका जती श्रुतिहरू * गर्छन् सदा वर्णन ।
निस्त्रैगुण्य रहू तिमी सकल ती * भोगादि त्यागीकन ॥१०
आशा त्याग अप्राप्तको नगर क्यै * इच्छा तिमी प्राप्तिको ।
आत्मालाइ चिह्न र दुःख-सुख यी * स्वप्नै रहू लोकको ॥

गर्नू कर्म नगर्नू आश फलको * आसक्तिमा गाड़िई।
ठान्नू सिद्धि-असिद्धिलाइ सम हो * भन्ने चनाखो भई ॥११॥
तिम्रो बुद्धि समत्वमा स्थिर भई * सक्नेछ राम्रौं जब।
सक्नेछौ अनि तोड्न वन्धनहरू * संसारका यी सब।
यो आज्ञा हरिको सुनेर मनमा * शंका हुनाले गरी।
सोधे अर्जुनले विनम्र स्वरले * आज्ञा हवस् हे हरि! ॥१२
कस्तो हुन्छ समाधिमा स्थित हुने * मानीसको लक्षण?
हिंड्नू, बोल्तु र बिस्नु पर्छ कसरी * त्यो व्यक्तिले मोहन!
यस्तो प्रश्न सुनीसकेर हरिले * आज्ञा भयो भारत!
गर्नू पर्छ प्रयत्न बुझ्न तिमिले * यो योग राम्रोसित ॥१३॥
इच्छा त्यागदछ आत्म-तुष्टि भईजो* योगस्थ हे अर्जुन!
जस्ले रोक्दछ वृत्तिलाइ मनको * हो 'प्रज्ञ' त्यै सज्जन ॥
जस्तै अङ्ग समेटि बस्छ कछुवा * त्यस्तै गरी इन्द्रिय।
जस्ले रोक्दछ बुद्धिमान त्यहि हो * भन्ने बुझे निश्चय ॥१४
सक्तैनन् जन रोक्न वृत्ति मनको * आसक्तिलाई जब।
पर्छन् यो भव सिन्धुको भुमरिमा * दुबुद्धि त्यस्ता सब ॥
जस्ले गर्दछ ब्रह्म-चिन्तन डटी * यै योगद्वारा सदा।
सिद्धि प्राप्त भई परम्पद पुगी * होला सुखी सर्वदा ॥१५॥

गीता सार—तेस्रो अध्याय ( ज्ञान कर्म योग ) :—

सोधे अर्जुनले सशंकित भई * श्री कृष्णका साथमा।
आत्मज्ञान ठुलो छ कर्महरूको * भन्दा सदा लोकमा ॥
यो आज्ञा प्रभुको प्रसन्न मनले * स्वीकार गर्छु तर।
यस्तो दुष्कर घोर कर्म कसरी * आज्ञा भयो लौ गर?॥१६

यस्ता मिश्रित वाक्यले हजुरको * व्यामोह जस्तो भएँ ।
शिक्षा स्पष्ट गरेर बुझ्न नसकी * हे कृष्ण ! भ्रम्‌मा परें ॥
मेरो जुन् पथमा चली हित हुने * पक्का छ हे केशव !
आज्ञा गर्नुहवस् त्यही हजुरले * राम्रो बुझाई अब ॥१७॥
यस्तो अर्जुनको कुरा सुनिसकी * आज्ञा भयो कृष्णले ।
निष्ठाका दुइ भेद छन्न पृथिविमा * मान्छन् सबै लोकले ॥
मान्छन् उत्तम सांख्य योगिहरूले* निष्ठा ठुलो ज्ञानले ।
मान्छन् उत्तम कर्मयोग भवमा * ज्ञानी तथा योगिले ॥१८॥
कस्को शक्ति छ टिक्न कर्म नगरी* क्यै बेर मात्रै पनी ।
गर्नुपर्दछ कर्म नै प्रकृतिको * सद्धर्म यै हो भनी ॥
माथीबाट समस्त इन्द्रियहरू * रोकेर राख्ने तर ।
भित्री चिन्तन खूब त्यै विषयको * गर्छन् सदा जो नर ॥१९॥
तिन्लाई सुख शान्ति सिद्धि कहिले * मिल्दैन हे अर्जुन !
ठान्छन् तिन्कन विज्ञ मानिसहरू* दम्भी तथा दुर्जन ॥
मिथ्या इन्द्रिय-भोग भित्रि मनले * रोकेर राखी कन ।
गर्छन् इन्द्रिय-कर्म बाह्य मनले * सानन्द जो सज्जन ॥२०
आशा केहि नराखि कर्म-फलको * आसक्ति जो त्यागदछन् ।
सिद्धि प्राप्त गरेर अर्जुन ! तिनै * ज्ञानी ठुला बन्दछन् ॥
गर्छन् शास्त्र-विहीत कर्म जनले * कल्याणका खातिर ।
तस्मात् कर्म ठुलो बुझीकन सखे ! * शंका नमानी गर ॥२१॥
त्यागदा कर्म समस्त भोजन पनी * मिल्दैन वेला महाँ ।
निर्वाहा हुन सक्छ पेट नभरे * यो देहको लौ कहाँ ?
गर्नू पर्दछ यज्ञ खातिर सदा * कर्मादि संसारमा ।
त्यस्को भिन्न चलेर बन्धनविषे * पर्छन् तिनै लोकमा ॥२२॥

आशा त्याग गरेर कर्म-फलको * आसक्ति त्यागीकन !
हो कर्त्तव्य भनी स्वयं गर तिमी * सत्कर्म हे अर्जुन !
सारा प्राणि र यज्ञ आदि भवमा * उत्पत्ति पैहले गरी ।
आज्ञा गर्नुभयो प्रजापतिजिले * रक्षार्थ सोही घरी ॥२३॥
गर्नु योग्य छ पञ्च-यज्ञ दिनहूँ * वर्णाश्रमी व्यक्तिले ।
इच्छा पूर्ण हुनेछ वृद्धि सबको * होला यही यज्ञले ॥
हुन्छन् उन्नत देवताहरू सबै * ये यज्ञद्वारा जब ।
तिम्रो उन्नति हुन्छ देवहरूकै * द्वारा बखत्मा सब ॥२४॥
सिद्धी मिल्छ सदा परस्पर गरे * निःस्वार्थ भै उन्नत ।
होला निश्चय लौ दुवै तरफको * कल्याण राम्रोसित ।
द्यौताबाट समस्त भोग भवका * पाए पछी व्यक्ति जो ।
एक्लै खान्छ नअर्पि देवकन जो * हे पार्थ ! त्यै चोर हो ॥२५
खाला जो अवशेष यज्ञहरूको * सन्तोष मानीकन ।
होला पाप सबै विनाश सहजै * त्यो व्यक्तिको अर्जुन !
एक्लै खान भनी पकाउँछ सखे ! * जुन् व्यक्तिले भोजन ।
पापी हो त्यही गर्छ अन्न-जलले * यो देहको पोषण ॥२६॥
अन्नैले सब सृष्टि हुन्छ भवमा * त्यो अन्न पानी परी ।
पैदा हुन्छ र यज्ञले जल सदा * वर्षन्छ वर्षा भरी ॥
हुन्छन् शास्त्रविहित् सुकर्म भवमा * यज्ञादि द्वारा जब ।
ती सत्कर्महरू तिमि बुझ सखे ! * छन् वेदद्वारा सब ॥२७॥
मन्छन् विज्ञहरू त्रिलोकभरिमा * हो वेद ब्रह्माक्षर ।
जानी व्यापक ब्रह्म सुस्थिर सदा * सत्कर्म गर्दै गर ॥
यो सृष्टि क्रमलाइ राम्ररि बुझी * गर्दैन जो पालन ।
त्यसले बाँच्नु वृथा छ पापहरूको * भागी बनी दुर्जन ॥२८॥

गर्दा कर्महरू सबै तरहको * आसक्ति जो त्यागदछन् ।
काटी बन्धन मोहका सकल ती * आनन्दमा पर्दछन् ॥
हाम्रा पूर्वजले गरे जति अघी * सत्कर्म संसारमा ।
मान्छन् सिद्ध प्रमाण जस्कन सबै * मानीसले लोकमा ॥२९॥
पैहेलेको जति जे छ आचरण त्यै * जस्तो भए तापनि ।
गर्छन् पालन लोकले अघि गरे * पुर्खाहरूले भनी ॥
मेरा निम्ति अप्राप्य छैन चिज क्यै * सम्पूर्ण ब्रह्माण्डमा ।
छैनन् बन्धन कर्मका पनि कुनै * मेरो तिनै लोकमा ॥३०॥
भिन्नै छु तपनी उचित् बखत औ * मौका बिचारी कन ।
गर्नै पर्दछ कर्म गर्दछु सदा * मैले पनी अर्जुन !
मैले कर्महरू सबै त्यजिदिए * हे पार्थ ! आलस्यले ।
मेरो मार्ग समाइ त्यागदछ सबै * कर्मादि संसारले ॥३१॥
मैले कर्म त्यजे समस्त दुनियाँ * थाल्छन् स्वयं बिग्रन ।
देलान् दोष मलाइ भ्रष्ट दुनियाँ * पार्नै भनी अर्जुन !
आसक्ती लिइ कर्मका वश हुने * निर्बोध व्यक्ती कन ।
त्यागने कर्म कदापि अर्ति नदिउन् * भेदादिमा गाड़िन ॥३२॥
सिद्धि योग र शुद्ध आचरणको * गर्नु स्वयं पालन ।
त्यस्तै कर्मतरफ् लगाउनु भनी * शिक्षा दिई अर्जुन ।
हे राजन् ! परधर्म हो भय दिने * राम्रो भए तापनि ।
आफ्नै धर्म छ श्रेष्ठ उत्तम सखे * कल्याणकर्ता भनी ॥३३॥
शिक्षा ज्ञान र धर्मको दिनुभयो * श्री कृष्णजीले जब ।
शंका एक उठी धनंजयजिले * बिन्ती गरे माधव !
इच्छा छैन तथापि केहि अरुले * लाई दिए झैं गरी ।
गर्छन् पाप मनुष्य प्रेरित भई * कुन् शक्तिद्वारा हरि ॥३४

शंका अर्जुनको सुनेर हरिले * फेरी बुझाऊँ भनी।
आज्ञा गर्नुभयो छ बुझ्न बहुतै * गाह्रो कुरा तैपनि।
काम-क्रोध यि शत्रु हुन् त्रिगुणमा * पापी ठुला छन् यिनी।
इच्छापूर्ण हुँदैन भोगहरूले * यिन्को कहील्यै पनि ॥३५
धूवाँले गरि अग्नि-दर्पण महाँ * धूलो परे झैं गरी।
जस्तै ढाक्तछ गर्भ जालहरूले * रक्षा गरी राम्ररी ॥
इच्छा वृद्धि भएर त्यै किसिमले * ज्ञानीहरूको पनि।
राजन्! ढाक्तछ ज्ञानका पथ सबै * त्यो कामनाले अनि ॥३६
राख्नूपर्दछ आफुले वश गरी * त्यै हेतुले कामना।
इच्छापूर्ण हुनेछ यो किसिमले * पूरा भई साधना ॥
तस्मात् इन्द्रियलाइ राख वशमा * हे पार्थ! रोकीकन।
रोक्ता इन्द्रिय काम हुन्छ वशमा * तिम्रो स्वयं अर्जुन ॥३७

गीता सार—चौथा अध्याय (निष्काम कर्मयोग र ज्ञान महिमा)—



निष्काम-कर्मयोग

राजन्! अर्जुनलाइ फेरि हरिले * शिक्षार्थ आज्ञा भयो।
मैले जुन् रविलाइ उत्तम भनें * पैह्लो यही योग हो ॥

शिक्षा श्री मनुलाइ त्यसपछि दिए * त्यै योगको सूर्यले ।
पाएथे मनुबाट योग यहि नै * इक्ष्वाकु भूपालले ॥३८॥
सोही योग परम्परागत हुँदै * राजर्षिमा बाँडियो ।
धेरै काल त हे सखे ! पृथिविमा * यो लुप्त जस्तै भयो ॥
मेरा हौ तिमी भक्त औ प्रिय सखा * त्यै हेतु हे अर्जुन !
मैले योग भनें पुरातन सबै * राम्रो गरी वर्णन ॥३९॥
सोह्रै उत्तम गोप्य योग मनले * गर्दै रहे चिन्तन ।
इच्छा पूर्ण हुनेछ, भोग-सुखमा * डुब्दैन कैल्है मन ॥
यो आज्ञा हरिको सुनेर मनमा * शंका उठी पार्थको ।
लागे सोध्न—हजूरदेखि पहिले * हो जन्म श्री सूर्यको॥४०
आज्ञा भो रविलाइ कुन् बखतमा* यो योग हे केशव !
शंका गर्नुहवस् निवारण प्रभो * मेरो भएको सब ॥
यस्तो ती नर-रूप श्री विजयले * बिन्ती गरेको सुही ।
श्री योगेश्वरले निवारण गरे * शंका दयालु बनी ॥४१॥
धेरै जन्महरू सखे ! बितिसके * तिम्रा र मेरा पनि ।
जान्दैनौ तिमि त्यो म जान्दछु सबै* यस्तो भएथ्यो भनी ॥
मेरो जन्म र मृत्यु हुन्न सबको * आत्मा म हूँ ईश्वर ।
सक्छु राख्न अधीनमा प्रकृति नै * रोकेर आफूतिर ॥४२
माया जो बलवान छन् सकलमा * तिनलाइ साथै लिई ।
आफै हुन्छु प्रकट् त्रिलोकभरिको * रक्षार्थ स्वामी भई ॥
वृद्धी भैकन पापको जति-जति * सद्धर्म घट्ला यहाँ ।
गर्छु धारण हे सखे ! उति-उती * औतार पृथ्वीमहाँ ॥४३॥
धर्मस्थानपन्न गर्न साधु जनको * उद्धारका खातिर ।
पापी मार्न भनेर चार युगमा * उत्पन्न हुन्छु तर ॥

मेरो जन्म र कर्म निर्मल हुँदा * जुन् व्यक्तिले चिन्दछन् ।
काटी बन्धन लोकका तिनिहरू * मैमा सखे ! मिल्दछन् ॥४४
त्यागी राग र क्रोध औ भय सदा * मेरो पिछा जो परे ।
त्यस्ता शुद्ध भएर ज्ञान तपले * संसार पारी तरे ॥
गर्छन् पूजन देवको जनहरू * जुन्न सिद्धिका खातिर ।
तिनलाई फल मिल्छ कर्महरूको * त्यै हेतु कर्मै गर ॥४५॥
सम्झी नित्य मलाइ नै भजन जो * जुन् भावले गर्दछन् ।
तिन्लाइ फल दिन्छु त्यै किसिमको* सानन्द ती भोग्दछन् ॥
चारै वर्ण विभागपूर्वक स्वयम् * मैले रचे तापनि ।
कर्त्ता ठान्दछ मूर्खले, सुजनले * चिन्छन् अकर्ता भनी॥४६॥
गर्छ कर्म मलाइ छैन फलको * इच्छा त्यसै कारण ।
जस्ले चिन्छ मलाइ त्यै पुरुष हो * ज्ञानी तथा सज्जन ॥
गर्थे कर्म मुमुक्षुले अघि सखे ! * मैले गरे झैं गरो ।
इच्छा त्याग गरेर कर्म-फलको * जान्थे ति पारी तरी ॥४७
हाम्रा पूर्वजले सुकर्म पहिले * जस्तो गरे सादर ।
त्यस्तै भाव गरी विचार मनमा * सत्कर्म आफ्नू गर ॥
हो यो कर्म, अकर्म हो यति भनी * गाह्रो छ छुट्ट्याउन ।
हुन्छन् मोहित विज्ञ पण्डित पनी * यो बातमा अर्जुन ! ॥४८
सोही कर्म बुझाउँछु बुझ तिमी * निष्काम राम्रो गरी ।
हुन्छौ बन्धन-मुक्त, पाप सहजै * जाने छ सारा टरी ॥
जस्ले इन्द्रिय-भोग त्यागदछ सखे ! * आशा तथा कामना ।
पाऊँ भोगहरू भनीकन कुनै * गर्दैन जो साधना ॥४९॥
पाएको जति वस्तुमा सुख तथा * सन्तोष जो मान्दछन् ।
त्यस्ता मानिसलाइ पण्डित पनी * ज्ञानी भनी जान्दछन् ।

कर्ता, द्रव्य र अग्नि आहुति, हवी * औ यज्ञको जो फल।
जस्ले ब्रह्म भनेर चिन्दछ सखे ! * हो ब्रह्म त्यो केवल ॥५०॥
यो हो यज्ञ-स्वरूप श्रेष्ठ भनि जो * विश्वासले गर्दछन्।
काटी बन्धन, ब्रह्मको पद महाँ * ती ब्रह्ममै पुग्दछन् ॥
गर्छन् पूजन रूप, यज्ञ भवमा * योताहरूको जति।
तर्छन् ब्रह्म चिन्हेर यज्ञ-फलको *सिद्धी मिली पार्थ; ती॥५१
सोही संयमरूप यज्ञ-व्रत हुन् * गर्नें सदा लोकमा।
कोही छन् तप-दान यज्ञहरु नैं * गर्नें खुशी साथमा ॥
गर्छन् योगस्वरूप यज्ञ कतिले * ज्ञान स्वरूपी कती।
गर्छन् यज्ञ स्वकर्म-रूप कतिले * आनन्द मानी अति ॥५२
प्राणायाम, अपानको गति दुवै * रोकेर राखी कन।
दिन्छन् आहुति प्राणको पनि कती* ज्ञानी, तपस्वी जन ॥
गर्छन् प्राण अपानमा लगि कती * रोकेर आफ्नू मन ॥
होम्छन् प्राण अपानमा लगि कती* रोकेर आफ्नू मन ॥५३॥
थोरै धेर नपारि संयम कती * आहारको गर्दछन्।
रोकी प्राण गती सहर्ष कतिले * प्राणै महाँ होम्दछन् ॥
सिद्धी प्राप्त हुने अनेक थरिका * यज्ञादि जो गर्दछन्।
खारी पाप समस्त ब्रह्म-पदको * आनन्द ती भोग्दछन् ॥५४
खाने अमृत यज्ञ-शेष खुशिले * योगीहरू छन् जति।
तिन्का टुट्छन कर्म बन्धनहरू * सम्पूर्ण हे सद्मति !
जस्लाइ सुख हुन्न लौकिक कुनै * यज्ञादि गर्दैछ जो।
सोही कारणले परत्र सुखमा * विश्वास मान्ने छ को ?५५
धेरै वर्णन यज्ञको छ श्रुतिमा * विस्तारले अर्जुन !
हुन्छौ मोक्ष गरे प्रसन्न मनले * सत्कर्मको चिन्तन ॥

ज्ञानै यज्ञ ठहर्छ उत्तम सखे ! * द्रव्यादि भन्दा सदा।
हुन्छन् कर्महरू विलीन सहजै * त्यो ज्ञान प्राप्तो हुँदा॥५६



कर्मयोग

सेवा चाकरिले रिझाउन सके * तत्वज्ञ ज्ञानी कन।
दिन्छन् ती उपदेश ज्ञान-पथको * शिक्षार्थ हे अर्जुन !
त्यो जानेपछि ज्ञान, हुन्न यसरी * व्यामोह कैहे पनि।
देख्नेछौ निज देहमा अनि ममा * छन् जीव सारा भनी ॥५७
आफ्नू यो अविवेक रूप मनको * सन्देह शंका सब।
काट्नूपर्दछ ज्ञानरूप बलियो * शस्त्रादिले नै अब॥
हार्नू जीत हुनू समान मनले * ठानेर हे भारत !
होऊ तत्पर युद्ध गर्दछु भनी * आफ्ना यि शत्रूसित ॥५८

गीता सार—पाँचौं अध्याय ( सांख्य योग ) : —

यो शिक्षा सुनि फेरि चित्त नबुझी * जोरेर बाहू दुई ।
सोधे अर्जुनले–चकित् हुन गएँ * हे कृष्ण ! शंका भई ॥
गर्नू कर्म र छाड्दिनू र कहिले * योगादि गर्नू भनी ।
आज्ञा गर्नुभयो र उत्तम छ कुन् * भन्नोस् दयालू बनी ॥ ५९
बिन्ती अर्जुनको सुनेर हरिले * आज्ञा भयो सादर ।
संन्यास् योग र कर्मयोग दुइले * कल्याण गर्छन् तर ॥
साह्रै उत्तम कर्म योग छ सखे ! * निष्काम भन्दा पनि ।
बस्छन् कर्म गरेर साधक सदा * निर्लिप्त जस्तै बनी ॥ ६०
राग-द्वेष र द्वन्द्व मुक्त जन जो * गर्दैन क्यै कामना ।
संन्यासी त्यहि हो हुँदैन भवको * त्यस्लाइ क्यै यातना ॥
संन्यास् योग र कर्मयोग दुइ छन् * भन्छन् सबै मूर्खले ।
भेट्नू ईश्वर लक्ष्य एक यहि नै * हो भन्दछन् विज्ञले ॥ ६१
पुग्छन् जुन् पदमा मरीकन सखे ! * कर्मिष्ठ योगी जति ।
देख्ने ज्ञान र कर्ममा सम सदा * पुग्छन् त्यहीं सद्मति !
रोकी इन्द्रियलाइ आफ्नू वशमा * जो राख्न सक्ला मन ।
आत्मा ईश्वर हो छ व्याप्त सबमा * जो भन्दछन् सज्जन ॥ ६२
त्यस्ता मानिस योगमा रत रही * कर्मै गरे तापनि ।
काटी बन्धन जन्मको मरणको * पुग्छन् परम्पद् तिनी ॥
नित्यानित्य प्रपञ्च हुन् क्षणिक जो * देखिन्छ संसारमा ।
यौटा सत्य छ ब्रह्म चिद्घन सखे ! * सम्पूर्ण ब्रह्माण्डमा ॥ ६३ ॥
सोही ईश्वरको परी भर महाँ * माया अड़ेकी हुँदा ।
ठान्नूपर्दछ स्वप्न झैं कि मृगको * तृष्णा सरी सर्वदा ॥

मायामा नभुलेर ईश्वर भनी * जो चिन्दछन् निर्गुण।
मान्नूपर्दछ सांख्य-योगि तिनि नै * हुन् श्रेष्ठ हे अर्जुन! ॥६४
देख्नू-सुन्नु, र सुँघ्नु खानु र छुनू * सुत्नू तथा पक्रनू।
फेर्नू सास र हिंड्नु औ त्यजि दिनू* हेर्नू तथा चिम्लनू॥
आफाफ्ना सब कर्म इन्द्रियहरू * गर्दै रहन्छन् भनी।
ठान्छन् सज्जनले 'म' गर्दिनँ भनी * क्यै काम कैल्हे पनि ॥६५
आफ्नू गर्दछ कर्म जो नियमले * आसक्ति त्यागी कन।
आफ्ना ती सब कर्मका फलहरू * जो गर्छ ब्रह्मार्पण॥
पालन् गर्न भनी नियम् जगतको * कर्मै गरे तापनि।
हुन्नन् लिप्त कदापि अम्बुजमहाँ * पानी परे झैं तिनी ॥६६
गर्छन् त्याग सहर्ष कर्मफलको * जो कर्मयोगी जन।
शान्ती प्राप्त गरेर ईश्वरकहाँ * पुग्छन् तिनै सज्जन॥
आशा गर्दछ जो सकाम फलको * आसक्ति राखीकन।
त्यस्ले भोग्दछ जन्मको मरणको * आपत्ति हे अर्जुन ! ॥६७
ज्ञानी, ब्राह्मण, श्वान औ गज तथा* चाण्डाल वा गाइमा।
आत्मा एक भनेर देख्दछ जन जो * हे पार्थ ! संसारमा॥
ज्ञानी औ समदर्शि लोकहरूले * तिन्लाइ नै भन्दछन्।
आत्मालाइ चिन्हेर ब्रह्मपदमा * सानन्द ती पुग्दछन्॥६८॥
बत्तीमा परि डढ्दछन् पुतलि जो * अज्ञानको कारण।
भोग्छन् कष्ट अनेक लोक सुखमा * आनन्द खोज्ने जन॥
इच्छा बढ्दछ भोगको जति बढी * पाए पनि अर्जुन।
त्यस्लाई सुख प्राप्त हुन्न कहिल्यै * आसक्तिकै कारण ॥६९॥
इच्छा माफिक भोगका चिजहरू * सम्पूर्ण पाए पनि।
जस्लाइ सुख, हर्ष हुन्न मनमा * हुन् तुच्छ सारा भनी॥

जस्ले ठान्छ समान दुःख, सुख वा* भोगादि संसारको ।
सक्ला ईश्वर चिन्ह, पाप तनको * खारिन्छ त्यो व्यक्तिको॥७०
उँचो-नीच कुभाव भाव मनको * त्यागेर दुर्भावना ।
इच्छा जसकन छैन भोगतिरको * गर्दैन जो साधना ॥
जस्लाइ रिस हुन्न कत्ति मनमा * आत्मा चिन्हेको छ जो ।
भन्छन् त्यसकन विज्ञ मानिसहरू * ज्ञानी त्यही व्यक्ति हो॥७१
जस्ले दान र यज्ञ, धर्म, तपको * सत्कर्मको ईश्वर !
प्राणीको मनभित्र जानि म' कुनै * निःस्वार्थमा भै स्थिर ॥
तत्व ज्ञान लिई, मलाइ जन जो * चिन्नेछ हे अर्जुन !
त्यस्लाई सुख मिल्छ, ब्रह्म-पदमा * पुग्नेछ त्यो सज्जन ॥७२

गीतासार ( छैठौं अध्याय ) ध्यानयोग र मनोनिग्रह :—

लाग्नूभो हरि भन्न कर्मफलको * आसक्ति त्यागीकन
जस्ले गर्छ सदैव योग्य रितले * सत्कर्म हे अर्जुन !
संन्यासी त्यहि हो, चिन्ही मकनत्यो* ज्ञानी र योगी भयो ।
आफ्नू कर्म त्यजेर को भन तिमी * योगी र ज्ञानी बन्यो ?॥७३
संन्यास् जसकन भन्दछन् जनहरू* हो योग नै त्यो पनि ।
गर्नू त्याग अवश्य पर्दछ सखे ! * हुन्न भोग झुट्टा भनी ॥
लोभी इन्द्रियका झुटा सुखहरू * खोज्दैन जस्को मन ।
योगारूढ भएर मिल्दछ ममा * त्यो व्यक्ति हे अर्जुन !॥७४
आफैं उत्तम मार्गमा चलि सदा * उद्धार आफ्नो गरोस् ।
आफू जानु अधोगतितिर स्वयं * रोक्ने इरादा धरोस् ॥
आफैं आफ्नु सखा, हितू छ तनमा* प्रत्येक मानीसको ।
आफैं शत्रु ठहर्छ आफ्नु, नगरे * यत्नादि उद्धारको ॥७५॥

जसले शान्त भएर राख्छ वशमा * रोकेर आफ्नू मन ।
गर्दा त्यै मनले सदा हित स्वयं * त्यो व्यक्तिको अर्जुन !
जस्ले त्यो मनलाइ रोक्न नसकी * स्वच्छन्द छाड़ी दिनन् ।
तिन्को शत्रु भएर सोहि मनले * ती पापमा गाडिनन् ॥७६
जसलाई छ समान दुःख सुख वा * शीतोष्ण, मानापमान् ।
जस्ले ठान्दछ हर्ष-शोक सम, ती * ज्ञानी तथा श्रेष्ठ हुन् ॥
जस्ले शान्त रहेर यो किसिमले * जित्नेछ आफ्नू मन ।
त्यस्ले तोड्छ मलाइ पाइ सहजै * संसारको बन्धन ॥७७॥
शास्त्र ज्ञान भएर शान्त मनमा * सन्तोष जो मान्दछन् ।
जस्को जीव विकार-हीन छ सखे ! * जो योगमा मग्न छन् ॥
माटो, पत्थर औ सुवर्ण सम जो * ठान्छन् जिती इन्द्रिय ।
गर्छन् प्राप्त मलाइ ती पुरुष वा * स्त्री,क्लीबले निश्चय॥७८
राजन ! बान्धव,शत्रु-मित्र र सुहृद्* मध्यस्थ, द्वेषी अनि ।
ज्ञानी, सन्त, तटस्थ, दुष्ट अथवा * काहो भए तापनि ॥
हो कर्तव्य भनेर त्याग्छ अभिमान्* जुन् व्यक्तिले देहको ।
आत्मा ठान्दछ जो समान सबको * त्यागी त्यही श्रेष्ठ हो ॥७९
रोकी इन्द्रिय औ जितो मन सखे * ईर्ष्या र आशा त्यजी ।
जस्ले योगमहाँ रही दृढ सदा * बस्ला मलाइ भजी ॥
छाड़ी संग्रह, विघ्न योग पथको * जो टार्छ आए जति ।
आत्मामा लगि जीव जोर्छ जन जो * सप्रन्छ त्यस्को मति ॥८०
शुद्ध स्थानमहाँ न नीच न उँचो * राखी सफा आसन ।
त्यस्माथी मृगचर्म त्यो उपरमा * राख्नू लुगा अर्जुन !
रोकी इन्द्रियका क्रियाकन सखे ! * एकाग्र पारी मन ।
सोही आसनमा बसुन्न जतनले * अभ्यास गर्नै जन ॥८१॥

आत्मा शुद्ध गराउनाकन ममा * नै चित्त-वृत्ति धरी ।
योगाभ्यास गरुन् कुनै तरहको * बाधा नपर्नै गरी ॥
राख्नू गर्दन, देह औ शिर सखे ! * सोझो तथा सुस्थिर ।
रोक्न शान्त भएर वेग मनको * कल्याणका खातिर ॥८२
टुप्पामा लगि नाकको, नयनको * ज्योती गरी केन्द्रित
गर्नू पर्छ मलाइ पाउन सदा * अभ्यास राम्रो सित ॥
योगाभ्यास गरेर यो किसिमले * हे पार्थ ! क्यै कालमा ।
सिद्धि प्राप्त भएर साधक स्वयं * मिल्नेछ आई ममा॥८३॥
बर्ता नींद हुने कि रात दिनमा * सुत्ने बढी वा कम ।
खाने बेसरि वा नखाइ रहने * यस्तो छ जस्को क्रम ।
त्यस्ता साधकलाइ योग पथमा * जन्मै बिताए पनि ।
सिद्धि प्राप्त हुँदैन निष्फल सबै * होला गरेको पनि ॥८४॥
धेरै-थोर नपारि जो नियमले * गर्ला सधैं साधना ।
सोही साधकको सबै तरहले * पुग्ला सखे ! कामना ॥
शान्ति प्राप्त हुने असाध्य सजिलो * यो योग जो गर्दछ ।
त्यस्ले नींद र भोक-प्यास सम नै * राख्नू सदा पर्दछ ॥८५॥
जस्को ईश्वरतर्फ चित्त यसरी * राम्रो गरी लाग्दछ ।
त्यो योगी भवसिन्धु गो-खुरसरी * आनन्दले तर्दछ ॥
जतो निश्चल हुन्छ दीपक सखे ! * हावा नलागी दिंदा ।
त्यस्तै निश्चल चित्त साधकहरू * राखुन सदा सर्वदा ॥८६
जीवात्मा सब छन् ममा, म पनि छु * प्राणी सबैमा भनी ।
देख्नू व्यापक पर्छ साधक भई * अभ्यास गर्दा पनि ॥
मैलाई सबमा तथा सब ममा * देख्नेछ त्यस्ले जब ।
त्यागी भेद अभिन्न आफु र ममा* ठान्नेछ त्यस्ले तब ॥८७॥

जोरी हात दुवै भने विजयले * हे कृष्ण, योगेश्वर !
ठान्नूपर्छ समान रोकि मन यो * कल्याणका खातिर ॥
आज्ञा गर्नुभयो स्वयं हजुरले * राम्रो बुझाई तर ।
साह्रै चञ्चल चित्तवृत्ति छ प्रभो ! * दौड़न्छ चारैतिर ॥८८॥
रोक्नू यो मन वायु रोक्नुसरि नै * गाह्रो हुनाले गरी ।
पाऊँ बुझ्न कुरा यसै विषयको * विस्तारले हे हरि !
आज्ञा भो हरिले बुझाउन भनी * वाणी गरी कोमल ।
गाह्रो पर्दछ रोक्नलाइ मन यो * साह्रै हुँदा चञ्चल ॥८९
सोधे अर्जुनले प्रभो ! छ मनमा * श्रद्धा र इच्छा तर ।
जस्ले यो मनलाइ रोक्न बलले * सक्तैन हे ईश्वर !
त्यस्ले ईश्वरलाइ भेट्न नसकी * भै योग देखी च्युत ।
कस्तो के गति प्राप्त गर्दछ सबै * आज्ञा हवस् अच्युत ॥९०
जस्ले यो मनलाइ राख्छ वशमा * सक्तैन हे अर्जुन !
त्यस्को सिद्ध हुँदैन योग अथवा * वैराग्यको साधन ॥
जस्ले यत्न गरेर राख्छ वशमा * रोकेर आफ्नू मन ।
सिद्धि प्राप्त हुनेछ केहि दिनमै * उद्योगले त्यस्कन ॥९१॥
बिन्ती अर्जुनको सुनेर हरिले * आज्ञा भयो सादर ।
गर्ला जो जन कर्म उत्तम सदा * कल्याणका खातिर ॥
त्यस्को नाश हुँदैन कर्म-फल ती * कैह्ले पनी सद्गति !
भेट्ला त्यो परलोकमा अनि यहाँ * अत्यन्त राम्रो गति ९२
योग भ्रष्ट भए पनि पछि मरी * क्वै पुण्यको लोकमा ।
बस्ला, जन्म लिनेछ धार्मिक, धनी* वा भूपको कोखमा ॥
सम्झी उत्तम कर्म पूर्व जुनिको * लागेर योगै तिर ।
आत्मालाइ चिन्हा परंपद महाँ * पुग्ला मरी त्यो नर ॥९३

ज्ञानी, सिद्ध, तपस्वि, विप्र अथवा * होस् कर्मकाण्डी जन ।
योगी उत्तम हो सखे ! रम तिमी * त्यै योगमा दी मन ॥
आफ्नू चित्त लगाइ सादर ममा * अभ्यास गर्नै छ जो ।
त्यस्ले भेट्छ मलाइ निश्चय सखे * योगी त्यही श्रेष्ठ हो ॥९४

गीता सार ( सातौं अध्याय ) ज्ञान विज्ञान योग

आज्ञा भो हरिले सखे ! मतिर नै * आफ्नू लगाई मन ।
योगाभ्यास महाँ हुँदा रत सबै * सन्देह त्यागी कन ॥
जान्नेछौ तिमिले मलाइ जसरी * सम्पूर्णमा व्यापक ।
त्यस्को मार्ग बताउँछु, बुझि त्यही * तर्छन् सबै साधक ॥९५॥
भन्छु उत्तम मार्ग योग-पथको * विज्ञानको ज्ञानको ।
त्यो जानेपछि क्यै रहन्न जनले * जान्ने कुरा योगको ॥
जस्का छन् शुभ कर्म पूर्व जुनिका * संस्कार राम्रा अति ।
श्रद्धा प्रेम अपार भक्ति छ ममा * जुन व्यक्तिको सद्गति !९६



आत्मसंयमयोग

त्यस्ता एक सहस्र व्यक्तिहरूमा * यौटा कुनै साधक ।
सक्ला जान्न मलाइ तत्त्व-बलले * हे शत्रु संहारक !

पृथ्वी औ नभ, बुद्धि, अग्नि, जल, मन् * वायू अहंकार छन् ।
मेरा यी जड़ शक्ति आठ अपरा * हे पार्थ ! निर्जीव हुन् ॥९७
अर्को चेतन शक्ति एक छ परा * संयोग यिन्को भई ।
हुन्छन् कारण, मुख्य भूतहरुको * उत्पत्तिमा यी दुई ॥
जानीलेउ म मूल कारण स्वयं * उत्पत्तिको हूँ भनी ।
मैमा लीन हुनेछ यो जगतको * सम्पूर्ण सृष्टी पनि ॥९८॥
धागोमा मणि झैं अभिन्न छ सखे !* ब्रह्माण्ड सारा ममा ।
अर्को छैन मदेखि भिन्न कहिने * क्यै वस्तु ब्रह्माण्डमा ॥
पानीमा रस हूँ, प्रकाश पनि हूँ * श्री चन्द्र औ सूर्यको ।
हे अर्जुन ! पुरुषत्व हूँ प्रणयको * ॐ कार हूँ वेदको ॥९९
मै हूँ जीवन रूप यो पृथिविका * प्राणी तथा जीवको ।
पृथ्वीको म सुगन्ध उत्त तथा * हूँ तेज श्री अग्निको ॥
बुद्धीरूप म बुद्धिमान, तपसी * -को शान्ति हूँ अर्जुन !
मैं हूँ बीज सखे ! सनातन सबै * जीवादिको जीवन ॥२००
सामर्थी नरहेरुको म बल औ * सामर्थ्य हूँ भारत !
ज्ञानी धार्मिकको त काम पनि मै * हूँ शास्त्रले संमत ॥
तीनोटा रज-सत्व औ तम भनी * हे पार्थ ! छन् जो गुण ।
तिन्को भाव ममा अभिन्न छ बरू * छैनन् ममा ती गुण ॥१
उत्पत्ति स्थिति नाश ती त्रिगुणको * हुन्छन् म देखी भनी ।
फुक्का छू म सदा तिनै गुणमहाँ * बाँधिन्नँ, कैल्हे पनि ॥
मेरी दुस्तर औ विचित्र त्रिगुणी * माया हुनाले गरी ।
चिन्दैनन् जनले मलाइ सहसा * त्यस्को वशैमा परी॥२॥
त्यो माया भवमा अलौकिक हुँदा * अत्यन्त नै अद्भुत ।
जस्ले त्यस्कन जित्नसक्तछ त्यही * हो श्रेष्ठ हे भारत !

मायाका गुणमा भुलेर भवको * आनन्दका खातिर ।
भज्दैनन् जनले मलाइ, दुखमा * पर्छन् ति चारैतिर ॥३॥
अर्थार्थी, ध्रुव, आर्त द्रौपदि तथा * जिज्ञासु ज्ञानी जन ।
गर्छन् लीन भएर भक्तहरु यी * मेरै सदा चिन्तन ॥
यी चारै थरि भक्तमा म छु बढी * ज्ञानीहरूको प्रिय ।
ज्ञानीलाइ सदा म गर्छु प्रिय ती * हुन्छन् सखे निर्भय ॥४॥
ज्ञानी, भक्त सबै उदार मतिका * हुन् एकनासे तर ।
मेरो प्रेम रहन्छ अर्जुन ! बढी * तत्वज्ञ ज्ञानीतिर ॥
योगाभ्यासमहाँ अड़ेर रहला * जो जन्म जन्मान्तर ।
योटै व्यापक वासुदेव सबमा * जो देख्न सक्ला नर॥५॥
झूटो लोक र देहलाइ पनि जो * ठान्नेछ मिथ्या भनी ।
ज्ञानीमा अति श्रेष्ठ हो जन त्यही * ठूलो महात्मा पनि ॥
पापी दूषित कर्ममा रत सदा * छन् दुष्ट लोभी जति ।
चिन्दैनन् कहिल्ले मलाई र ममा * लाग्दैन तिन्को मति ॥६
गर्छन् पूजन देवको जनहरू * राखेर जुन कामना ।
श्रद्धामाफिक सिद्धि दिन्छु म सदा * तिन्को बुझी भावना ॥
मायाको म छु आड़मा र सहजै * देखिन्न, त्यै कारण ।
ठान्छन् मृत्यु र जन्ममा म पनि छु * आबद्ध हे अर्जुन ॥७
ज्ञानीले अधियज्ञको र अधिभूत् * अध्यात्मलाई पनि ।
मेरो आत्मस्वरूप चिन्दछ स्वयं * प्रत्यक्ष त्यै हो भनी ॥
त्यस्तालाइ हुँदैन कष्ट कहिल्यै * मेरा कृपाले गरी ।
सम्झी अन्त्य बखतमहाँ मकन त्यो * जानेछ पारी तरी ॥८॥

गीतासार ( आठौं अध्याय ) अध्यात्म-भक्तियो :—

शिक्षा श्री हरिले जसै दिनुभयो * विज्ञानको ज्ञानको ।
विन्ती अर्जुनले गरे विनयले * पाऊ धरी कृष्णको ॥
कुन् हो ब्रह्म र कर्मको पथ प्रभो ! * हो योग अध्यात्म कुन् ।
आज्ञा भो अधियज्ञ श्रेष्ठ अधिभूत* त्यो योग को गर्दछन् ॥९
कुन् हो त्यो अधिदैव यो शरिरमा * भन्नोस् बुझाई कन ।
सम्झन्छन् प्रभुलाइ को र कसरी * मर्ने बखतमा जन ॥
यस्तो प्रश्न सुनीसकी विजयको * सन्देह हर्ने गरी ।
आज्ञा गर्नुभयो जनार्दनजिले * राखी दया त्यो घरी ॥१०
जस्को नाश हुँदैन व्यापक छ जो * हे पार्थ! त्यै ब्रह्म हो ।
जीवात्माकन जान योग-पथमा * अध्यात्म मानिन्छ त्यो ॥
उत्पत्ति जति गर्छ जीवहरुको * त्यो भाव नै कर्म हो ।
हेतू हो अधिभूत पालन तथा * उत्पत्तिको नाशको ॥११
भन्छन् भक्तहरू 'हिरण्यमय पुरुष्'* जस्लाइ ब्रह्माण्डमा ।
सोही हो 'अधिदैव' जीवहरुको * विख्यात देहादिमा ॥
अन्तर्यामि म 'वासुदेव' रूपले * सम्पूर्णमा छु स्थित ।
त्यस्लाई 'अधियज्ञ' जान तिमिले * हे पार्थ! राम्रोसित ॥१२
जस्ले त्याग्छ मलाइ सम्झि तन यो * हे मित्र ! आखीरमा ।
पक्का मोक्ष भएर मिल्दछ गई * त्यो जीव नै ब्रह्ममा
जुन्-जुन् रूप गरेर ध्यान मनमा * यो देह जो त्याग्दछन् ।
मर्दा सोहि विचार आइ जन ती * त्यै योनिमा पुग्दछन् १३॥
तस्मात् संझी मलाइ युद्ध तिमि यो * सद्धर्म ठानी गर ।
अर्पी कर्म मलाइ ब्रह्म-पदमा * पुग्छौ नमाने डर ॥

रो की चञ्चल चित्त, योग-पथको * अभ्यास गर्दै गरे ।
पाई दिव्य स्वरूपलाइ सहजै * ज्ञानी महात्मा तरे ॥१४॥
उत्पत्ति-स्थिति-नाश-सूक्ष्म, रवि झैं * जाज्वल्य औ चेतन ।
सर्वात्मा र अचिन्त्य, अव्यय तथा * शुद्धात्म सच्चिद्घन ॥
यस्ता ईश्वर श्री पुरातन पुरुष् * जो छन् सदा निर्मल ।
तिन्को ध्यान धरेर योग वलले * आत्मा गरी निश्चल ॥१५
मर्ने काल भएपछी भृकुटिमा * जो प्राण राख्ला स्थित ।
त्यस्ले संझि मलाइ ब्रह्म-पदमा * पुग्नेछ राम्रो सित ॥
भन्छन् नाश हुँदैन जस्कन कवे * ती वेदवेत्ता जन ।
जस्मा मिल्न ति ब्रह्मचर्य व्रतको * गर्छन् सदा पालन ॥१६॥
गर्छन् यत्न अवश्य मिल्दछु भनी * जस्मा सुयोगी जन ।
गर्छु सोहि सखे ! म दिव्य पदको * संक्षेपमा वर्णन ॥
ढोका इन्द्रियका थुनी हृदयमा * आफ्नू टिकाई मन ।
तालुमा लगि राख्नुपर्दछ सदा * त्यो प्राणवायूकन ॥१७॥
राखी सुस्थिर देह योग-पथको * अभ्यास जो गर्दछन् ॥
ॐ ब्रह्माक्षर मात्र बोलि मुखले * जो योगमा रम्दछन् ॥
संसारी सुख ठानि तुच्छ तन जो * यो रीतिले त्याग्दछन् ।
पाई मोक्ष सखे ! परंपद महाँ * योगी तिनै पुग्दछन् ॥१८
कालातीत म हूँ, मिले यदि ममा * फर्कन्न ज्ञानी जनम ।
पर्ला फर्कन ब्रह्मलोक तकमा * पौंचे पनि अर्जुन !
लोकालोक समस्त कर्म फलका * हुन् भोग गर्ने स्थल ।
योगाभ्यास गरी पुगे पनि यहाँ * हुन्नन् कुनै निश्चल ॥१९
ब्रह्माको दिन चार् सहस्र युगको * रात्री पनी त्यत्ति हो ।
होला नाश बितेपछी दिन त्यही * हे पार्थ ! ब्रह्माजिको ॥

जस्ले जान्दछ तत्वले अवधि यो * ती सृष्टिकर्ताजिको ।
जान्ने तत्व समस्त योग-बलले * योगी त्यही श्रेष्ठ हो ॥२०
श्री सूर्योदयले दिशाहरू स्वयं * ज्वाज्वल्य हुन्छन् जब ।
ब्रह्माको तनबाट जीव जति हुन् * उत्पन्न हुन्छन् सब ॥
सन्ध्याकाल भएपछी तनमहाँ * ब्रह्माजिको गैकन ।
हुन्छन् जीव समस्त लीन क्रमले * त्यै देहमा अर्जुन ! ॥२१
बारंबार सबै चराचरहरू * त्यो दिन् तथा रातमा ।
जन्मन्छन् अनि मर्दछन् क्रम यही* चल्दो छ ब्रह्माण्डमा ॥
योगाभ्यास गरे कुन् पथमहाँ * जान्छन् सुयोगी मरी ।
फर्कन्छन् पुगि ब्रह्मलोक तक को * के कर्म कस्तो गरी ?२२
गर्छु यी दुइ मार्गको अब सखे ! * संक्षेपमा वर्णन ।
सिद्धो मिल्दछ ध्यानपूर्वक तिमी * मैले भनेको सुन ॥
मैन्हा षट् अनि उत्तरायण तथा * त्यो शुक्ल पक्षै भरी ।
फेरी जन्मनलाइ यो पृथिविमा * आउन्न योगी मरी ॥२३
कृष्णै पक्ष र दक्षिणायन भरी * जो देह त्यागला जन ।
भोगी भोग स्वकर्मको पृथिविमा * त्यो आउला जन्मन ॥
दोटै उत्तम मार्ग हुन् तर सखे ! * सत्कर्म जो गर्दछन् ।
गर्दा लोभ तिनै सुकर्म फलको * चौरासिमा पर्दछन् ॥२४
भोगेच्छा फलको हुँदैन मनमा * दानादिको जस्कन ।
हुन्छन् मोक्ष सखे ! परंपदमहाँ * पौंची तिनै सज्जन ॥
सोही कारणले तिमी पनि सखे ! * आसक्ति त्यागीकन ।
योगाभ्यास गरी सुयोग्य रितले * मैमा लगाऊ मन ॥२५॥

गीतासार ( नवौं अध्याय ) राजविद्या राजगुह्य योग :–

बाटो श्री हरिले बताउनुभयो * विज्ञानको, ज्ञानको ।
हे अर्जुन ! तिमीलाइ गोप्य बहुतै* भन्छु कुरा योगको ।
जान्नेछौ तिमिले सबै तरहले * यो योगलाई जब ।
होला नाश स्वयं सबै अशुभको * उत्तीर्ण हौला तब ॥२६॥
यो विज्ञान समेत ज्ञान तिमिले * जानेपछी भारत ।
तर्छौ दुःख समुद्रबाट सहजै * अत्यन्त राम्रोसित ॥
राजा हो सब ज्ञानको फल दिने * प्रत्यक्ष यो उत्तम ।
यस्को साधनले हराउँछ स्वयं * अज्ञानरूपी तम ॥२७॥
श्रद्धा हुन्न पवित्र ज्ञानतिरको * राम्रो गरी जस्कन ।
त्यो पाउन्न मलाइ मृत्युपथकै * गर्नेछ आलिंगन ॥
ढाकेको छु अदृश्य भै जगत यो * सारा छ मैमा स्थित ।
सारा जीव ममा भए पनि म छु * निर्लिप्त प्राणीसित ॥२८
उत्पत्ति, स्थिति, नाश गर्दछु स्वयं * प्राणीहरूको सदा ।
चिन्दैनन् जनले मलाइ सहजै * माया बलीयो हुँदा ॥
जस्तै वायु उड़ी सबैतिर पछी * आकाशमा टिक्दछ ।
त्यस्तै प्राणिहरू ममा स्थित हुनू * हे पार्थ ! त्यै ठीक छ॥२९
उत्पत्ति सबको म कल्पभरको * आरम्भमा गर्दछु ।
तिनको नाश सखे ! स्वयं प्रकृतिले* कल्पान्तमा गर्दछु ॥
चिन्छन् सज्जनले र जीव सबमा * छु व्याप्त आत्मा बनी ।
तिनको बन्धनमा म कर्म फलमा * बाँधिन्नँ कैल्हे पनी ॥३०
मेरो शक्ति तथा महत्प्रकृतिले * आधार मानी भर ।
गर्छिन् सृष्टि सदा चराचर जगत् * देखिन्छ जो सुन्दर ॥

साक्षात् ईश्वर हूँ तथापि म सखे * यो देहधारी हुँदा ।
निन्दा गर्दछ मूर्ख, शक्ति नबुझी * अज्ञानले ढाकिंदा ॥३१
मेरो दिव्य प्रभाव, योग-बल औ * ती योगमाया कन ।
ठान्छन् मूर्ख विचारहीन जनले * मानीस साधारण ॥
फोक्रो आश सुकर्म गर्छ जन त्यो * विक्षिप्त जस्तै बनी ॥
गर्छन् धारण राक्षसी प्रकृति औ * ती आसुरी, मोहिनी॥३२
ज्ञानी, सज्जन योगमा स्थित हुने * योगीहरू छन् जति ।
मेरो अक्षररूप उत्तम चिन्ही * आफ्नू सपार्छन् मति ।
बारंबार गरी प्रणाम कतिले * मैमा लगाई मन ।
गर्छन् यत्न मलाइ पाउन कती * नामादिको कीर्तन ३३
राखी प्रेम ममा अनन्य गतिले * सर्वस्व अर्पीकन ।
मेरो पूजन गर्दछन् जति तिनै * हुन् कर्मयोगी जन ॥
छन् अर्का थरि भक्ति निर्गुण तथा * योगस्थ ज्ञानी जन ।
गर्छन् पूजन ध्यान योग मनको * आसक्ति त्यागीकन॥३४
मेरो लागि उपासनातिर कती * मिल्छु भनी ब्रह्ममा ।
गर्छन् यत्न सदा अनेक थरिका * ज्ञानीहरू लोकमा ॥
मेरो श्रेष्ठ विराटरूप मनमा * राखेर तेस्रा थरी ।
लाग्छन् नित्य उपासनातिर सखे ! * उद्योग धेरै गरी ॥३५
चिन्दैनन् तर ती मलाइ ऋतु हूँ * मै वस्तु हूँ श्राद्धको ।
मैं हूँ यज्ञ, स्वधा र औषधि तथा * हूँ अग्नि यज्ञादिको ॥
सामग्रीहरूमा म अन्न-घृत हूँ * मै नै परंधाम हूँ ।
गर्ने धारण यो चराचर जगत् * औ सृष्टिकर्ता म हूँ ॥३६॥
माता, पितृ तथा पितामह म हूँ * हे पार्थ मै मन्त्र हूँ ।
जान्ने योग्य, पवित्र धामहरूमा * ॐकार वा ब्रह्म हूँ ॥

मै हूँ साम, अथर्व, ऋक , यजुसखे * मै हूँ प्रजापालक ।
स्वामी हूँ सबको र कर्म फलको * दाता म हूँ रक्षक । ३७
वासस्थान म हूँ शुभाशुभ बसी * हेर्नै र गर्नै हित ।
इच्छा प्रत्युपकारको म मनमा * राख्तीनँ अकांसित ॥
उत्पत्ति स्थिति नाशको म हुँ सखे * आधार औ कारण ।
गर्नै मङ्गल जीवको प्रलयमा * हुँ विष्णु, नारायण॥३८॥
तातो हूँ रविमित्रको, जल खिंची * वर्षाउने नै म हूँ ।
बस्ने सत्य तथा असत् स्वरूपले * प्राणीहरूमा म हूँ ॥
मै हूँ मृत्यु र काल जीवहरूको * मै हूँ सखे! जीवन ।
मै हूँ अमृत औ हलाहल दुवै * जानी लिए अर्जुन ! ॥३९
पूजा, यज्ञ र सोम-पान विधिले * वेदोक्त जो गर्दछन् ।
तिनले पाइ मलाइ स्वर्ग-पुरिमा * आनन्दले भोग्दछन् ॥
आफ्नो भोग सुकर्मको फल त्यहाँ * जो सुख्खले भोग्दछन् ।
पुण्यक्षीण भएपछी पृथिविमा * हे पार्थ ! ती खस्तछन्॥४०
मर्नू-जन्मनु रूप कष्ट भवको * भोग्नेहरू छन् जति ।
इच्छा राखि सकाम कर्म-फलको * हुन्छन् दुखी दुर्मति ॥
बारंबार सखे ! त्यसै किसिमले * जन्मे मरे तापनि ।
भेट्तैनन्न कहिल्यै मलाइ र सदा * संकष्ट भोग्छन् तिनी ॥४१
श्रद्धासाथ सदैव गर्छ जन जो * जुन् देवको पूजन ।
मेरो पूजन त्यो ठहर्छ तपनी * उल्टो विधान् भैकन ॥
उल्टो नै फल प्राप्त गर्छ जन त्यो * सप्रन्न त्यस्को मति ।
जान्नूपर्छ मलाइ यज्ञहरूको * भोक्ता, सबैको गति ॥४२
श्रद्धाले फल, पुष्प, पत्र, जल जो * गर्ला ममा अर्पण ।
त्यस्को स्नेह ममा छ भैन भनि यो * जाँची विचारीकन ॥

गर्नेछ खुशिले स्वयं ग्रहण त्यो * प्रत्यक्ष पौंची कन ।
त्यस्लाई फल मिल्छ स्वर्गपुरिको * भोगादि हे अर्जुन ! ॥४३
नारी, वैश्य र शूद्र, अन्त्यज, अधं * कोही भए तापनि ।
मेरो आश्रयले परंपद महाँ * सानन्द पुग्नन् तिनी ॥
ज्ञानी ब्राह्मण, भक्त क्षत्रिय भई * मैमा लगाए मन ।
यो संसार-समुद्र तर्न सहजै * पर्नेछ गाह्रो किन ? ॥४४
सोही कारणले अनित्य सुख हुन् * हो देह यो नाशवान् ।
भन्ने खूब तिमी विचार गरिल्यौ * मैमा लगाएर मन ॥
ढोगी देउ मलाइ, पूजन सदा * मेरै सकेको गर ।
मेरो यो पद प्राप्त हुन्छ, यसरी * माने तिमीले भर ॥४५॥

गीताशार ( दसौं अध्याय ) विभूति योग

आज्ञा भो हरिले सखे ! वचन यो * कल्याणकारी सुन ।
तिम्रो प्रेम बुझी प्रभाव निज यो * भन्छु बुझाईकन ॥
उत्पत्ति, स्थिति, नाश कुन् समयमा * गर्छु म कुन् रूपले ।
जान्दैनन् पहिल्यै महर्षिगण वा * ज्ञानी तथा सिद्धले ॥४६॥
द्यौताको र महर्षि आदि सबको * मै हूँ सखे ! कारण ।
मेरो जन्म हुँदैन मृत्यु कपिल्यै * भन्ने विचारीकन ॥
लीलाले अवतार हुन्छ सबको * कल्याणका खातिर ।
जस्ले चिन्छ मलाइ यो किसिमले * हो श्रेष्ठ सोही नर ॥४७॥
मर्नू, जन्मनु, सत्य, शान्ति, वशमा * राख्ने सबै इन्द्रिय ।
राम्रो ज्ञान र दुःख-सुक्ख, भय वा * सत्कीर्ति औ निर्भय ॥
संतोषी, तप, दान, धर्म, समता * छन् भाव जो प्राणिमा ।
उत्पत्ती सबको मबाट छ, म हूँ * ती भाव सम्पूर्णमा ॥४८॥

ज्ञानी जो सनकादि चार मुनिको * उत्पत्ति पैह्ले भयो।
त्यस्का बाद महर्षि सात जनको * मैबाट उत्पत्ति भा॥



विभूति योग

जस्का सन्तति छन् सबै, मनु तिनै * हुन् चौध स्वायंभुव।
मेरै भाव र रूपमा निहित छन् * यी श्रेष्ठ ज्ञानी सब॥४९॥
मेरो श्रेष्ठ विभूतिलाई जन जो * योगादिले जान्दछन्।
मेरो निश्चय भक्तिले पछि ममा * आएर ती मिल्दछन्॥
आफ्नो प्राण-क्रिया प्रसन्न मनले * मैमा लगाईकन।
मेरो दिव्य प्रभाव वर्णन गरी * काटिन्छ जस्को दिन॥५०
आत्मा प्राण स्वयं समर्पण ममा * जो भक्तले गर्दछन्।
यो संसार-समुद्र गो-खुरसरी * सानन्द ती तर्दछन्॥
मेरो मात्र लिएर आश्रय सदा * जो योगमा रम्दछन्।
मेरो धाम तथा परंपद महाँ * ज्ञानी तिनै पुग्दछन् ५१
जस्ले ठान्छ मलाइ चिन्ह नसकी * मानीस साधारण।
मेरो गर्छ सदा अनादर सखे! * जस्ले विना कारण॥

भोग्ने कष्टहरू परी नरकमा * त्यै मूर्ख हो दुर्जन ।
शिक्षा यो हरिको सुनी विनयले * भन्दा भए अर्जुन ॥५२
हे योगेश्वर, नित्य व्यापक प्रभो ! * हे ब्रह्म, हे चिद्घन !
द्यौताका पनि आदिदेव भगवन् * हे कृष्ण ! नारायण !
उत्पत्ति-स्थिति, नाश एक छिनमै * गर्नैं प्रभू हुन् भनी ।
भन्छन् नारद, व्यास, देवल, असित् * ज्ञानी तपस्वी मुनी । ५३
आज्ञा गर्नुभयो मलाइ अहिले * सोही कुरा नाथले ।
त्यसको स्वागत गर्दछु म मनले * यो देहले प्राणले ॥
जान्दैनन् प्रभुको अपार महिमा * द्यौता तथा दानव ।
मैले सक्दछु जान्नलाइ कसरी * लीला हजुर्को सब ॥५४
आफैं रक्षकरूप जीवहरुका * हे जन्मदाता प्रभो !
आफ्नो श्रेष्ठ विभूतिले जगत यो * ढाकीलिने हे विभो !



विभूति योग

जान्ने योग्य विभूति ती हजुरले * आज्ञा भए हे हरि !
सक्थें जान्न गरी विचार मनले * सम्झी सबै राम्ररी ॥५५॥

तृप्ती हुन्न सुनी सुधासरि मिठो * शिक्षाहरू नाथको ।
पाउँ सुन्न विभूति योग म सबै * अर्ती सहित् ज्ञानको ॥
वाणी नम्र गरेर श्री विजयले * विन्ती गरेको सुनी ।
श्री योगेश्वरले बताउनुभयो * सारा दयालू बनी ॥५६
मेरा दिव्य बिभूति वर्णन गरी * सिद्धिन्न केही तर ।
केही अंश बताउँछु सुन सखे ! * कल्याणका खातिर ॥
मै हूँ आदि र मध्य अन्त्य भवका* सम्पूर्ण जीवादिको ।
आत्मारूप भएर बस्छु तनमा * हे पार्थ ! सम्पूर्णको॥५७॥
बाह्रोटा सुत हुन् सखे ! अदितिका * तिन्मा म हूँ अर्यमा ।
मै हूँ सूर्य स्वरूपको किरणमा * औ तेजमा, ज्योतिमा ॥
मै हूँ पार्थ ! मरीचि वायुहरु जो * छन् ती उनन्चासमा ।
तारामण्डलको म तेज हु सखे * नक्षत्रमा चन्द्रमा ॥५८॥
द्यौतामा म महेन्द्र, इन्द्रियमहाँ * जान्नू मलाई मन ।
प्राणीको सब मुख्य चेतनमहाँ * मैं हूँ सखे ! जीवन ॥
मैं हूँ यक्षमहाँ कुबेर वसुमा * मै अग्नि हूँ भारत !
गर्छन् जो जप यज्ञमा त्यहि म हूँ * गर्ने सबैको हित ॥५९॥
मै हू प्रोहितमा बृहस्पति तथा * नद्यादिमा सिन्धु हूँ ।
हे अर्जुन् ! सुन सामवेद कहिने * चारै थरीमा म हूँ ॥
मै हू श्रेष्ठ महर्षिमा भृगु तथा * ॐकार हू बीजमा ।
मैं हूँ पीप्पल वृक्ष, नारद पनी * हूँ मुख्य देवर्षिमा ॥६०
गर्दा मन्थन सिन्धु जो गज मिल्यो * त्यै हूँ म ऐरावत ।
घोड़ा श्रेष्ठ म हूँ त्यसै बखतको * उच्चैःश्रवा भारत ।
राजा मानिसमा, म चित्ररथ हूँ * विख्यात गन्धर्वमा ।
गाईमा म हुँ कामधेनु, बलियो * हूँ वज्र शस्त्रास्त्रमा ॥६१

मैं हूँ काम स्वरूप जीवहरूको * सन्तान उत्पत्तिमा ।
नाग सर्पमहाँ म शेष हुँ सखे ! * हूँ वासुकी नागमा ॥
पानीका अधिदेवमा वरुण हूँ * हूँ पितृमा अर्यमा ।
मैं हूँ दण्ड दिनेमहाँ यम तथा * प्रह्लाद हूँ दैत्यमा ॥६२
बेला काल स्वरूप जीवहरूको * संहारकर्ता म हूँ ।
सिंहै हूँ मृगहेरुमा र नदिमा * विख्यात गङ्गा म हूँ ।
मैं हूँ राघव शस्त्रधारिहरुमा * अध्यात्म हूँ योगमा ।
हे अर्जुन ! जल-जन्तुमा मगर हूँ * विद्या म हूँ ज्ञानमा ॥
मैं हूँ आदि र मध्य, अन्त्य सबको * हूँ नाशको कारण ।
जाने अक्षरमा 'अ' कार तिमिले * उत्पत्तिको अर्जुन ॥
मैं हूँ श्रेष्ठ विराटरूप सबको * हूँ कालको काल् भनी ।
जान्नू हेतु मलाइ जीवहरुको * हूँ सृष्टिकर्ता पनी ॥६४
श्री, कीर्ति, स्मृति, वाक्, क्षमा, धृति तथा * मेधा यि जो सात छन् ।
मैं हूँ यी गुण-भाव स्त्रीहरूमहाँ * मेरा सखे ! अङ्ग हुन् ॥
मैह्नामा म हूँ मार्गशीर्ष, छल हूँ * जूवा महाँ भारत !
मैं हूँ मालिक व्यक्तिका हृदयको * सद्भाव गर्ने हित ॥६५
मेरै रूप भएर पाण्डु सुतमा * प्रत्यक्ष छौ अर्जुन !
मैं हूँ कृष्ण समस्त वृष्णिहरुमा * श्री नन्दको नन्दन ॥
शुक्राचार्य म हूँ सबै कवि महाँ * ज्ञानी महाँ ज्ञान हूँ ।
वेदव्यास म हूँ सबै मुनिमहाँ * औ जीतको नीति हूँ ॥६६
मेरो दिव्य विभूतिको न छ कहीं * मध्यादि वा अन्त्य नै ॥
जो जो तेज र शक्ति छन् जगतमा * हुन् रूप मेरो तिनै ॥
भन्छु मुख्य कुरा प्रयोजन छ के * जाने सबै युक्तिले ।
ढाकेको छ सबै चराचर जगत् * मेरो सबै अंशले ॥६७॥

गीतासार ( एघारौं अध्याय विश्वरूप दर्शन )

यस्ता श्री हरिका विभूतिहरुको * सारा सुनी वर्णन ॥
जोरी हात दुवै प्रसन्न मनले * बोल्दा भए अर्जुन ॥
राखी प्रेम ममा बताउनुभयो * विज्ञान औ ज्ञान जो ।
भक्ति ज्ञान सुनेर गोप्य मनको * व्यामोह सारा गयो ॥६८
आज्ञा भो अविनाश रूप, महिमा * जो नाथले राम्ररी ।
उत्पत्ति-स्थिति-नाश जीवहरुको * सारा सुनें हे हरि !
आफ्नू श्रेष्ठ स्वरूपको हजुरले * जो गर्नुभो वर्णन ।
त्यो हो सत्य सबै, त्यही स्वरूपको * गर्ने थिएँ दर्शन ॥६९॥
शक्ति ज्ञान र तेज, वीर्य बलले * संयुक्त त्यो रूपको ।
पाए पर्शन गर्दथें नयनले * प्रत्यक्ष अव्यक्तको ॥
मैले हेर्न हुने भए हजुरको * त्यो रूप योगेश्वर !
चाँडो दर्शन बक्सियोस् गरि दया * छु हेर्नमा तत्पर ॥७०॥
यस्तो विन्ती सुनिसकी विजयको * आज्ञा भयो कृष्णले ।
मेरो दिव्य स्वरूप हेर तिमिले * हे पार्थ ! आनन्दले ॥
बाह्रै सूर्यहरू र अष्ट वसु औ * श्री रुद्र एकादश ।
बाह्रोटा सुत हेर श्री अदितिका * जस्को छ ठूलो यश ॥७१॥
भाई अश्विनी औ कुमार ति दुवै * वायु उनञ्चास जो ।
देखेनौ कहिले कहीं जति कुरा * लौ हेर सम्पूर्ण त्यो ॥
मेरो एक शरीरमा स्थित सखे ! * आब्रह्म हेरीकन ।
जे इच्छा मनमा छ हेर्न सब त्यो * देख्छौ स्वयं अर्जुन ॥७२
सक्तैनौ तर हेर्न यी नयनले * त्यो रूप त्यै कारण ।
हेर्नै, दिन्छु म दिव्य-दृष्टि तिमिले * मेरा विभूती कन ॥

मित्री नेत्र दिई सबै तरहले * तिनूको बुझाई मन ।
आफ्नो दिव्य विराटरूप हरिले * गर्नू भयो धारण ॥७३॥
हज्जारौं नेत्र, बाहु, मुख, पद, गहना देहमा छन् प्रशस्त ।
नाना शस्त्रास्त्रधारी अतुलबल तथा शौर्य आश्चर्ययुक्त ॥
ठूलो शक्ती र सीमा रहित विभवले पूर्ण त्यस्तो स्वरूप ।
हेर्थें श्री पार्थ शोभाकन तन-मनले हर्ष मानेर खूप ॥ ७४ ॥
एकै पल्ट हजार सूर्य नभका * राजन् ! उदाए पनि ।
सामुन्ने परि विश्वरूप प्रभुको * फीका हुनेछन् तिनी ॥
त्यस्ता ईश्वर देव-देव हरिको * त्यो रूपमा पार्थले ।
भिन्नाभिन्न समस्त विश्व स्थितभो*देखेर आश्चर्यले ॥७५॥
तिनूको देह भरी स्वयं हुन गयो * रोमाञ्च त्यो दृश्यले ।
जोरी हात दुवै प्रणाम शिरले * गर्दा भए प्रेमले ॥
लागे गर्न नुही प्रसन्न मनले * क्यै बेरमा ती स्तुति ।
हे योगेश्वर ! हे दयामय, प्रभो ! * यो सृष्टिमा छन् जति७६
सारा प्राणिहरू म देख्छु तनमा * प्रत्यक्ष नै नाथको ।
ब्रह्मा, शंभु, फणीन्द्र छन् ऋषिमुनी* ज्ञानी र सद्भक्त जो ॥
हज्जारौं थरि सर्प छन् हजुरका * सर्वाङ्गमा यो घरी ।
मैले आदि र मध्य, अन्त्य किन हो *देख्दीनँ लौ हे हरि ! ॥७७
खुट्टा, नेत्र, मुहार, पेट र भुजा * देख्छु हजारौं थरी ।
देखेको कहिले थिएन, पहिले * यो रूपलाई हरि !
गर्नें धारण शङ्ख, चक्र र गदा * श्रीवत्सले शोभित !
हेर्नेलाइ कठोर अग्नि सरिका * जाज्वल्य औ अद्भुत ॥७८
मन्छन् जसूकन वेदले जगतका * आधार ब्रह्माक्षर ।
लिन्छन् आश्रय लोकले हजुरको* यो रूपको सादर ॥

रक्षा गर्छ अनादि धर्म-पथ यो * जुन् रूपले नाथको ।
जानें अक्षय तेजले हजुरको * हे नाथ! त्यै रूप हो ॥७९॥
आँखा चन्द्र र सूर्य झैं चहकिला * छन् हात यत्ती भनी ।
जस्को जान्न सकिन्न शक्ति अथवा * सामर्थ्य आँटे पनि ॥
सस्का अग्निशिखासमान मुख छन् * बाहु हजारौं हुने ।
आफ्नू तेज फिंजाइ यो जगत जो * छन् दग्ध पारीदिने ॥८०॥
ढाकेको छ नराखि शेष कहिं क्यै * आकाश भूमी सब ।
यस्तो अद्भुत रूप उग्र प्रभुको * देख्छु म हे केशव !
प्राणी व्याकुल छन् गरी हजुरको * यो रूपको दर्शन ।
रक्षा गर्नुहवस् परें शरणमा * आत्तिन्छ मेरो मन ॥८१
गर्छन् मन्त्र पढेर देवगण वा * ज्ञानी मुनीले स्तुति ।
जोरी हात पुकार सिद्धहरूले * गर्छन् कती हो कति ॥
बाह्रै सूर्य र रुद्र देव वसु औ * गन्धर्व विद्याधर ।
सारा राक्षस, यक्ष छन् शरणमा * कल्याणका खातिर ॥८२
विश्वेदेव र अश्विनीसुत तथा * वायूहरू जन् जति ।
हेर्छन् रूप हजूरको घरि-घरी * आश्चर्य मानी अति ॥
बाहु, पाउ, उरू अनेक मुखमा * दाह्रा हुनाले गरी ।
प्राणी व्याकुल छन् सबै, म पनि छु * यो रूपद्वारा डरी ॥८३
भीष्म, द्रोण र कर्ण औ कृप तथा * छन् बीर जो कौरव ।
हामीतर्फ पनी अनेक जति छन् * विख्यात योद्धा सब ॥
दाह्रायुक्त हजूरका मुखहरू * जो छन् अनेकौं थरी ।
पस्तैछन् मुखमा धमाधम स्वयं * देखीरहेछु हरि ! ॥८४॥
अड्केका कति दाँतमा शिरहरू * धूलो भएका कति ।
जाँदैछन् विकराल घोर मुखमा * सम्पूर्ण योद्धा जति ॥

जस्तै सागरतर्फ नै नदिहरू * बग्छन् ठुलो वेगले ।
पस्छन वीरहरू सबै मुखमहाँ * हे नाथ ! त्यै चालले ॥८५
बत्तीमा पुतली सवेग जसरी * जान्छन् र मर्छन् सब ।
पस्तैछन् मुखमा त्यसै गरि सबै * योद्धाहरू केशव !
मैले चिन्ह सकीनँ रूप प्रभुको * यो उग्र हे ईश्वर !
आज्ञाहोस् हुनुहुन्छ को ? मकन त्यो * हे श्रेष्ठ योगेश्वर ! ८६
बारंबार प्रणाम गर्दछु दया * राखेर यो रूपको ।
इच्छा गर्छु प्रवृत्ति जान्न, नभनी * सक्नेछ को ? नाथको ॥
यस्तो आदि स्वरूप चिन्ह नसकी * छु आत्तिएको विभो !
मेरो विन्ति सुनी प्रसन्न हुनुहोस् * चाँडो दयालु प्रभो !॥८७
इच्छा अर्जुनको बुझी विनयले * बिन्ती गरेको सुनी ।
आज्ञा भो हरिले सखा विजयको * इच्छा पुऱ्याऊँ भनी ॥
चिन्दैनौ तिमिले मलाइ तपनी * मै देवको देव हूँ ।
गर्ने विश्व विनाश रूप यहि हो * मै कालको काल हूँ ॥८८
योद्धा कौरवतर्फका जति यहाँ * देख्छौ खड़ा छन् तिनी ।
बाँच्तैनन् तिमिले लड़ाइँ नगरी * छाड़ी दिए तापनि ॥
गर्छे युद्ध भनी तिमी उठ सखे ! * त्यागी कुशंका, डर ।
सारा शत्रु जिती सुकीर्ति भवमा * फैलाउ चारैतिर ॥८९॥
मै द्वारा सब शत्रु यी मरिसके * भन्ने विचारी कन ।
बन्नूपर्छ निमित्त मात्र तिमीले * यो युद्धमा अर्जुन !
भीष्म, द्रोण र कर्ण, शल्य रणमा * छन् वीर योद्धा जति ।
सारालाई जितेर राज्य सुख यो * भोग्नू ठुलो, सद्मति९
मै द्वारा अघिदेखि वध्य सब छन् * योद्धा त्यसै कारण ।
तिम्रो जीत हुनेछ, युद्ध गर लौ * शंका नमानीकन ।

यस्तो केशवको कुरा सुनिसकी * जोरी दुवै अञ्जली ।
काम्दै थर्थर, भीति मानि पसिना *काढेर झन् खल्खली ॥९१
वाणी रुद्ध भएर बोल्न नसकी * रुन्चे गराई स्वर ।
लागे भन्न गरी प्रणाम पदमा * श्री पार्थले सादर ॥
हे वेश ! जगन्निवास ! प्रभुको * सत्कीर्ति औ सद्‌गुण ।
गर्छन् गान सहर्ष देवगण, श्री * सिद्धादि औ चारण॥९२
मान्छन् हर्ष ठुलो मुनी ऋषिहरू * ज्ञानी तथा सज्जन ।
पापी-राक्षस भाग्दछन् दश दिशा * सारा डराई कन ॥
हे योगेश्वर, आदिरूप, विधिको * उत्पत्तिका कारण ।
बारंबार प्रणाम गर्छु पदमा * हे विष्णु नारायण ! ॥९३
सत्-चित्‌देखि अलग्ग अक्षर तथा * हे ब्रह्म, हे चिद्‌घन !
जान्दैनन् प्रभुको अनन्त महिमा * ज्ञानी तथा सज्जन ।
साक्षात् आदि पुरुष्, सनातन तथा * ब्रह्माण्डका आश्रय ।
हो यै रूप हजूरको परमपद् * भन्ने गरें निश्चय ॥९४
ब्रह्मा श्रीयम, अग्नि, श्रीवरुण औ * वायू तथा चन्द्रमा ।
हुन् यी रूप हजुरकै अरु जति * छन् जीव संसारमा ॥
बारंबार प्रणाम गर्छु पदमा * न्यूहेर योगेश्वर !
ढोग्छु फेरि हजारपल्ट प्रभुका * यी पाउमा ईश्वर ॥९५
हे सर्वज्ञ ! अनन्त वीर्य र अगम् * शक्ति हुँदा नाथको ।
भन्नू 'सर्व' हजूरलाई जनले * संसारमा योग्य हो ॥
गर्दैछु म प्रणाम यी चरणमा * पैह्ले अगाड़ीतिर ।
चारै तर्फ घुमी पछिल्तिर पनी * ढोग्छु म हे ईश्वर ! ॥९६
पैह्ले अपार महिमा प्रभुको नजानी ।
वा भूलले जति गरें निज मित्र ठानी ॥

मैले प्रमादवश प्रेम जनाइ धेर ।
हे कृष्ण, यादव, सखा ! भनि बेर बेर ॥९७॥
शय्या विहार संग आसन खान-पान ।
एकान्तमा कि त सभाबिच हे निरञ्जन !
जस्तो गरें जति जहाँ अपमान-मान ।
माग्छु क्षमा सकल हे करुणानिधान ! ॥९८॥
संसारका गुरु सुपूज्य पिता हजूर ।
त्रैलोक्यमा हजुर झैं अरु को कहाँ छ र ?
जानी मलाइ निज दास प्रभो, दया गरी ।
माफी दिनोस् ती अपराध सबै मुरारि ! ॥९९॥
पत्नीले पतिले र मित्र जनले * ठट्टामहाँ मित्रको ।
बाबूले सुतको बिजाइँ जसरी * खप्छन् गुरू शिष्यको ॥
त्यस्तै नै अपराध जे जति गरें * जानी नजानी सब ।
जानी दास मलाइ माफि दिनुहोस् * हाँसेर हे केशव ! ॥३००॥
पाएको पहिले थिएन कहिले * यो रूपको दर्शन ।
खुशी छु तर भित्रको भय बढी * आत्तिन्छ मेरो मन ॥
सोही कारण सौम्यरूप पहिलो * चाँडो गरी धारण ।
हे देवेश ! जगन्निवास ! दिनुहोस् * त्यो रूपको दर्शन ॥१॥
बारंबार प्रणाम गर्छु पदमा * आकाश ढाकीलिने ।
त्यागनोस् रूप विराट झट्ट अब यो * बाहू हजारौं हुने ॥
हात्मा चक्र गदा, किरीट शिरमा * पैह्री लिंदा टल्कने ।
हेर्छु रूप चतुर्भुजी हजुरको * आनन्द बर्साउने ॥२॥
विन्ती अर्जुनको सुनेर हरिले * त्यो रूप त्यागीकन ।
आफ्नू सौम्य मनुष्य रूप क्षणमा * गर्नू भयो धारण ॥

आज्ञा गर्नुभयो मुहार हँसिलो * पारेर हे फाल्गुन !
मैंले जो तिमिलाइ यो स्वरूपको * ऐल्हे दिएँ दर्शन ॥३॥
देखेनन् तिमिदेखि बाहिक अरू * याहाँ कसैले पनी ।
मैंले दर्शन यो तिमीकन दिएँ * प्यारा सखा हौ भनी ॥
वेदाभ्यास र दान-धर्म, तप वा * सत्कर्म गर्दा पनि ।
जो देख्यौ तिमिले कुनै पुरुषले * देख्दैन कैल्हे पनि ॥४॥
मेरो उग्र स्वरूपको जब सखे ! * पाई सक्यौ दर्शन ।
मोहाच्छन्न र व्यग्रता, व्यथित मन् * पाछौं वृथामा किन ?
राखी प्रेम ममा प्रसन्न मनले * त्यागी कुशंका डर ।
बारंबार चतुर्भुजी स्वरूपको * दर्शन् खुशीले गर ॥५॥
द्यौता, दानव, यक्ष राक्षस तथा * गन्धर्व, विद्याधर ।
गर्छन् आश सदा यही स्वरूपको * कल्याणका खातिर ॥
मेरो दर्शन देव-दुर्लभ सखे ! * पायौ तिमीले अब ।
मेरो भक्ति गरी ममा मिल तिमी * आसक्ति त्यागी सब ॥६॥

गीतासार ( बाह्रौं अध्याय ) भक्तियोग—

धेरै धैर्य र योग ज्ञान पथको * शिक्षा सुनी कृष्णको ।
सोधे अर्जुनले प्रसन्न मनले * पाऊ परी नाथको ॥
गर्छन् कोही हजूरका चरणको * सेवा तथा पूजन ।
कोही श्रेष्ठ भनेर ब्रह्म - पदको * गर्छन् सदा चिन्तन ॥७॥
स्वामीका यि दुवै उपासक तथा * छन् भक्ति गर्नें जति ।
प्यारा छन् प्रभुका दुवै थरिमहाँ * कुन् चाहिं हे सद्गति !
यस्तो विन्ती सुनेर श्री विजयको * आज्ञा भयो कृष्णले ।
जो एकाग्र भई निरन्तर सखे ! * श्रद्धा तथा भक्तिले॥८॥

मेरो पूजन गर्दछन् सगुण वा * यै रूपको दिन्-दिन ।
हुन् मेरा प्रिय भक्त योग-पथका * ज्ञाता तिनै सज्जन ।
रोकी चञ्चल चित्तलाइ वशमा * राखेर राम्रो गरी ।
जस्ले गर्दछ ध्यान योग बलले * एकाग्र भै राम्ररी ॥९॥
आत्मा देख्छ समस्त जीवहरूको * हे पार्थ ! जस्ले सम ।
त्यस्ले भेट्छ मलाई, ठान्छु म पनि * योगी त्यही उत्तम ॥
गर्दा चिन्तन ब्रह्मको दृढ भई * देहाभिमानी कन ।
पर्छन् स्वप्न अनेक सिद्धि पथमा * बाधाहरू अर्जुन ! ॥१ ॥
सारा कर्म गरी समर्पण ममा * मानेर मेरो भर ।
गर्छन् योग अनन्य भक्तहरू जो * कल्याणका खातिर ॥
मैमा चित्त लगाउने दृढ भई * छन् भक्त ज्ञानी जति ।
तिन्लाई भव-सिन्धुबाट सहजै * तार्छु म हे सद्मति ! ॥११
सोही कारणले तिमी पनि ममा * आफ्नू लगाऊ मन ।
गर्छौ प्राप्त मलाइ यो किसिमले * पक्का तिमी अर्जुन !
सक्तैनौ स्थिर राख्नलाइ मन नै * आफ्नू तिमीले भने ।
योगाभ्यास गरे मलाइ सहजै * छौ पार्थ ! भेट्टाउने ॥१२॥
सक्तैनौ यदि गर्न योग पथको * राम्रो भने पालन ।
सिद्धि मिल्दछ कर्मका फल सबै * मैमा गरे अर्पण ॥
सक्तैनौ यदि गर्न त्यो पनि भने * मर्मै नजानी कन ।
अभ्यास् गर्नु वृथा छ ज्ञानपथको * गर्नू बरु पालन ॥१३॥
मेरो ध्यान ठुलो छ हे विजयजी * त्यो ज्ञान देखी पनि ।
त्याग्नू श्रेष्ठ छ कर्मका फल, सके * त्यो ध्यान देखी पनि ॥
त्याग्दामा फल कर्मको मनमहाँ * शान्ति ठुलो पाउँछौ ।
शान्ति प्राप्त भएपछि सहजमै * आई ममा मिल्दछौ १४

राग द्वेष रहित समान सुख वा * दुःखादि जो मान्दछन् ।
प्राणिमाथि दया र शुद्ध मनले * एकत्व जो देख्दछन् ॥
योगाभ्यास गरी ममा मन दिई * त्याग्नेछ भोगादि जो ।
मेरो भक्त तथा तियेन्द्रिय हुँदा *प्यारो मलाई छ त्यो॥ १५
सक्छन् गर्न क्षमा प्रसन्न मनले * जो शत्रुलाई पनी ।
जस्ले ठान्छ मलाइ ईश्वर तथा * हर्ता र कर्ता भनी ॥
गर्ली क्रोध त्यजेर शुद्ध मनले * अभ्यास जो योगको ।
त्यसलाई सुख-दुःख हुन्न कहिल्यै * प्यारो मलाई छ त्यो॥ १६
निन्दा वा स्तुतिलाइ ठान्छ जन जो * हुन् एकनासे भनी ।
जस्ले ठान्छ समान तुच्छ तृण वा * हीरा र मोती पनि ॥
नीतीयुक्त कुरा सदैव मनमा * राख्नेछ बिर्सन्न जो ।
इच्छा पूर्ण भएर मिल्दछ ममा *प्यारो मलाई छ त्यो॥ १७

गीतासार ( तेह्रौ अध्याय ) क्षेत्र-क्षेत्रज्ञ विभाग योग :—

आज्ञा भो हरिले यही शरिर नै * हो क्षेत्र हे अर्जुन ।
भन्छन् विज्ञहरू चिन्हेर तपले * क्षेत्रज्ञ आत्माकन ॥
जान्नू व्याप्त मलाइ नै तिमि सदा * क्षेत्रज्ञ वा क्षेत्रमा
जस्ले चिन्दछ यी दुवैकन सखे ! * त्यो हो गुणी ज्ञानमा॥ १८
यो क्षेत्रज्ञ र क्षेत्रको स्वरूप वा * छन् भाव भेदादि जो ।
छोरैमा सुनिलेउ वर्णन तिमी * हे पार्थ ! भन्छु म त्यो ॥
पारें मित्र ! विभक्त देहहरूका * मन्त्रादिले यसकन ।
ज्ञानी श्रेष्ठ र ब्रह्मसूत्र पदले * गर्छन् सदा गायन ॥ १९॥
इच्छा द्वेष र बुद्धि मूल प्रकृति * औ पाँच ज्ञानेन्द्रिय ।
पाँचैभूत सुख-दुःख, पिण्ड तन यो * औ पाँच कर्मेन्द्रिय ॥

एघारौं मन चेतना धृति तथा * छन् भेद त्यसका जति ।
सारा रूप विकारले सहित जुन् * हो क्षेत्र त्यै सझति॥२०
व्यर्थैको अभिमान, दम्भ नहुने * बोल्ने सुधा झैं मिठो ।
अर्काको उपकारमा रत रही * कैल्हे नबोल्ने झुटो ॥
सेवा श्री गुरुको र मान्य जनको * गर्नै लगाई मन
श्रद्धा भक्ति र आत्मशुद्धि, मनको * संवेग रोकीकन ॥२१॥
राख्ने इन्द्रियलाइ आफ्नु वशमा * आसक्ति त्यागी दिने
संसारी सुख-दुःख वा न त कुनै * आपत्तिमा आत्तिने ॥
मर्नू-जन्म, बुढ्याइँ व्याधिहरुमा * छन् दुःखका दोष जो
त्यागी इन्द्रियका झुटा सुखहरू * छाड्ला अहंकार जो॥२२
पत्नी, पुत्र गृहादिमाथि ममता * राख्नू वृथा हो भनी
लेला, इष्टा-अनिष्ट एक बुझि जो * वैराग्य, ज्ञानी बनी ॥
जस्ले पाइ अलभ्य वस्तु मनमा * मान्दैन कैल्हे सुख ।
जस्ले घोर विपत्तिमा पनि सखे * मान्दैन कैल्हे दुख॥२३
मेरी अव्यभिचारिणी सुख दिने * सद्भक्तिको पालन ।
गर्नै, यो भव - सिन्धुबाट सहजै * तर्नै छ हे अर्जुन !
जान्ने योग्य छ जो र जस्कन सखे ! * जानेर राम्रो गरी ।
मुक्ती प्राप्त हुनेछ, त्यै विषयको * भन्छु कुरा यो वरी॥२४
जो हो ब्रह्म अनादि चिद्घन त्यही * हे पार्थ ! हो ईश्वर !
आफू सत् र असत् दुवै नकहिने * हो मुख्य कर्ता तर ॥
बाहू, पाउ, असंख्य नेत्र, मुख वा * छन् कान चारैतिर ।
नित्य व्यापक हे धनञ्जय ! छ त्यो * ब्रह्माण्डमा सुस्थिर॥२५
छैनन् इन्द्रिय, गर्व इन्द्रियहरू * को काम आनन्जले ।
आफू निर्गुण भै सबै गुणहरू * ती भोग्दछन् प्रेमले ॥

छन् आसक्तिरहित् तथापि सबको * गर्छन् तिनै पालन ।
छन् ती व्यापक भित्र बाहिर सदा * ब्रह्माण्डमा अर्जुन ॥२६
गाह्रो पर्दछ जान्नलाइ जनले * अत्यन्त सानो हुँदा ।
टाढा वा बहुतै नजीक स्थित छन् * सम्पूर्णमा सर्वदा ॥
हुन्छन् पालन सृष्टि नाश क्रमले * जसबाट यो विश्वको ।
देख्दा भिन्न हुने, अभिन्न रहने * शक्ती छ ती ईशको॥२७
ज्योतीका पनी ज्योति उत्तम तथा * हुन् तेजका तेज ती ।
यस्ता बोधस्वरूप ईश्वर चिन्हे * मिल्नेछ राम्रो गति ॥
चिन्ने योग्य भनेर चिन्दछ भने * तिन्लाइ जो ज्ञानले ।
ब्रह्मज्ञान त्यही कहिन्छ र लिनू * त्यस्लाइ वैराग्यले ॥२८
कुन् हो क्षेत्र विकार ज्ञान पथको * कुन् जान्नुपर्नें कब ।
त्यस्को भेद गरेर वर्णन गरें * मैले बुझाई सब ॥
राख्ने यो शुभ अर्तिलाइ मनमा * छन् भक्त मेरा जति ।
आत्मज्ञान भई मिलेपछि ममा * बिग्रन्न तिन्को गति॥२९
जानी लेउ सखे ! पुरुष् प्रकृति हुन् * दोटै अनादि भनी ।
राग-द्वेष तथा विकारहरुका * हुन् जन्मदाता यिनी ॥
जो छन् कारण कार्य औ त्रिगुण यी * संसारमा अर्जुन !
तिन्को हेतुस्वरूप यी प्रकृति नै * हुन् जन्मको कारण ॥३०
यिन्मा रङ्मगिएर जीवहरुले * भोक्ता म हूँ भन्दछन् ।
सोहो कारणले अनेक थरिका * संकष्टमा पर्दछन् ॥
गर्छन् भोग पुरुष नै प्रकृतिको * उत्पन्न सारा गुण ।
पुग्छन् त्यै गुण-संगले थरिथरी * -का योनिमा जन्मन॥३१

जस्ले जान्दछ योगले प्रकृतिको * यो कष्टदाता स्थिति ।
त्यस्को छुट्तछ जन्म औ मरणको * हे पार्थ ! त्यो दुर्गति ॥
आत्मारूप विषे डुबी हृदयमा * क्वै ध्यानले चिन्दछन् ।
कोही ज्ञानविषे डुबी हृदयमा * ऐनासरी देख्दछन् ॥३२
कोही सज्जन ज्ञानयोग पथको * गर्छन् सखे ! पालन ।
भेट्छन् कोहि त कर्मयोगतिरको * बाटो समाई कन ॥
अर्काबाट सुनी प्रमाण बुझि त्यै * छन् जो सपार्नै मति ।
अज्ञानी पनि तर्दछन् मरणको * तोड़ेर बाधा जति ॥३३
जस्तै हुन्छ प्रकाश विश्वभरिमा * श्री सूर्यको तेजले ।
आत्मा उज्ज्वल पाई क्षेत्रकन त्यो * सम्पूर्ण त्यै चालले ॥
यो क्षेत्रज्ञ र क्षेत्रलाइ यसरी * जो जान्दछन् राम्ररी ।
जान्छन् प्राप्त भएर ज्ञानि जन तो * संसार पारी तरी ॥३४।

गीतासार ( चौधौं अध्याय ) त्रिगुर्ण विभाग योग :—

आज्ञा भो हरिले म भन्दछु सखे ! * फेरी बुझाई कन ।
ज्ञुन् हो उत्ताम ज्ञान, जस्कन बुझो * तछन् मुनी, सज्जन ॥
जस्ले राख्दछ चित्तामा दृढ गरी * यो ज्ञानलाई सदा ।
त्यस्ले जन्म र सृष्टिमा प्रलयमा * भोग्दैन केही व्यथा ३५
मेरी ब्रह्म-स्वरूप जो प्रकृति छन् * तो स्थान हुन् जन्मको ।
तिन्मा स्थापन गर्छु बीज म सखे * रक्षार्थ उत्पत्तिको ॥
जन्मन्छन् जति जीव यो किसिमले * मैबाट हे अर्जुन !
तिन्को हूँ म पिता तथा प्रकृति हुन् * माता, यसै कारण ॥३६
आत्मालाइ कज्याउने प्रकृतिका * सत्वादि जो छन् गुण ।
तिन्ले बन्धन पार्दछन् शरिरको * जीवात्म नित्यै कन ॥

तिनमा उत्तम सत्व निर्मल हुँदा *मानिन्छ त्यो उज्ज्वल ।
त्यस्ले बन्धन पार्छ जीव, सुखको * देखाइ मिथ्या बल ॥ ३७



गुणत्रयविभाग योग

उत्पत्तिस्थल जान पार्थ ! रजको * आसक्ति औ कामना ।
यस्ले बद्दछ जीव, कर्म-फलको * दर्शाउँदै साधना ॥
मोहित पार्दछ जीवलाइ तमले * अज्ञान द्वारा सदा ।
निद्रा, आलस औ प्रमाद मनले * बाँधिन्छ, यो सर्वदा ॥ ३८
दाता हो सुखको त सत्य, रज हो * कर्मादिमा लाउने ।
ढाकी ज्ञान प्रमादतर्फ तम नै * हो पार्थ ! ढल्काउने ॥
बढ्दामा तम औ रजोगुण दुवै * प्राधान्य भो सत्वको ।
त्यस्तै सत्व तथा तमो गुण हुँदा *उल्टो स्थिति देखियो॥ ३९
जुन् वेला तनमा र इन्द्रियमहाँ * चैतन्यता बढ्दछ ।
वृद्धि भो भनि जान्नु सत्वगुणको * बाँकी दुवै घट्दछ ॥

अर्जुन् ! मानिसमा रजोगुण बढी * देखिन्छ निक्कै जब ।
तृष्णा-लोभ बढी कुतर्क जति छन् * जानिन्छ त्यस्लो सब॥४०
बढदै जान्छ सखे ! तमोगुण जसै * कर्तव्य बिर्सीकन ।
चेष्टा गर्दछ व्यर्थको थरि-थरी * दुष्कर्मको त्यो जन ॥
जस्ले त्याग्छ शरीर सत्वगुणको * वृद्धी भएका घरी ।
त्यस्ले भोग्छ अलभ्य स्वर्गपुरिको * सौख्यादि नाना थरी॥४१
जस्को छुट्दछ देह पार्थ ! रजको * बृद्धी हुँदा लोकमा ।
त्यसको जन्म हुनेछ कर्म-फलको * आसक्तिको योनिमा ॥
मर्ला मानिस जो तमोगुण सखे ! * बढ्दै गएका घरी ।
भग्ला कष्ट लिएर जन्म जन त्यो * कीटादिको बेसरी ॥४२॥
ज्ञानी बन्छ मनुष्य सत्वगुण नै * बढ्दै गए अर्जुन !
लोभी बन्छ कुतर्क गर्छ रजले * ढाक्तै गएमा जन ॥
बढ्दा मानिसमा तमोगुण जसै * अज्ञानताले गरी ॥
लाग्ला गर्न अनेक चूक जन त्यो * मोहान्ध भै बेसरी ॥४३
जान्छन् सत्वगुणी त ऊर्ध्वगतिको * बाटो लिई सुन्दर ॥
मध्यस्थै रहनन् रजोगुण हुने * जन्मी यहीं नै नर ॥
नीचो वृत्ति लिने तमोगुणिहरू * तल्लो स्थितिमा गई ।
लिन्छन् जन्म पतङ्ग कीटहरुको * हे पार्थ ! दुःखी भई ॥४४
यी तीनै गुणलाइ जुन् पुरुषले * गर्नेछ उल्लंघन ।
त्यस्ले जन्म बुढ्याइँ मृत्यु सबको * संकष्ट काटी कन ॥
मेरो चिद्घन रूपलाई मनले * संझेर राम्रो गरी ।
सक्ला भेट्न मलाइ तत्व बलले * यै देहले वा मरी ॥४५
सोधे अर्जुनले विकार गुणका * छन् जो अनेकौं थरी ।
मुक्ती ती सबबाट मिल्छ कसरी * आज्ञा हवस् हे हरि !

यो बिन्ती हरिले धनञ्जयजिको * सुन्नू भएथ्यो जब ।
आज्ञा गर्नुभयो विकार यसरी * नाशिन्छ भन्ने सब४६
जस्ले मान्छ समान दुःख सुख वा * हे पार्थ ! निन्दा स्तुति ।
ठान्ला शत्रु र मित्रलाइ सम जो * ढुङ्गा तथा सम्पति ॥
सम्झन्छन् जन जो प्रिया-प्रिय दुवै * हुन् एकनासे भनी ।
त्यो व्यक्ति गुणका विकारहरूमा * बाँधिन्न कैह्ले पनी ॥४७
जस्ले छाडदछ काम्य-कर्म गुणका * मानेर मेरो भर ।
सेवा गर्दछ भक्तिको पथ धरी * कल्याणका खातिर ॥
त्यस्ले मेट्छ विकार तीन गुणका * दोषादिलाई पनी ।
बाटो शाश्वतको र मोक्ष-पदको * भेट्नेछ ज्ञानी बनी॥४८

गीता सार ( पन्ध्रौं अध्याय ) क्षर-अक्षर योग :—

जुन् वृक्षको मूल सबै छ मास्तिर ।
छन् पात हाँगाहरू भूमिमन्तिर ॥
संसार-वृक्ष हरि-रूप छ यो विचित्र ।
छन् वेद रूप यसमा परिपूर्ण पत्र ॥४९॥

हाँगा छन्दहरू हुने सकल यो * अश्वत्थको वृक्षको ।
जस्ले जान्दछ भेद तत्व-बलले * वेदज्ञ त्यै व्यक्ति हो ॥
यस्को आदि न मध्य,अन्त्य छ कहीं * यस्तो भए तापनी ।
सक्छन् त्यो रूपलाइ चिह्न जनले * संसार रूपी भनी ॥५०
जस्तो रूप गरिन्छ वर्णन यहाँ * हे पार्थ ! अश्वत्थको ।
त्यस्तो ठीक स्थिती कुनै किसिमले * देखिन्न यो वृक्षको ॥
आसक्ती फल कर्मको त्यजि सखे ! * वैराग्यको अस्त्रले ।
काट्छन् मूल जसै सहर्ष रुखको * ज्ञानीहरू तत्वले ॥५१

फैलेको अघिदेखि सिर्जन भई * जो देखि यस् वृक्षको ।
सोही ईश्वरको नजान्न सकिने * लीला तथा रूपको ॥
फेरी जन्म हुँदैन यो पृथिवीमा * पाएपछी जस्कन ।
खोज्नूपर्छ गरी प्रयत्न जनले * तिन्लाई नै अर्जुन ५२
जस्को नष्ट छ मान-मोह मनको * आसक्ति जित्ने छ जो ।
आत्मामा स्थिर भै म नित्य हुँ भनी * मान्नेछ विश्वास जो ॥
जस्ले ठान्छ समान दुःख सुखका * आईपरेका स्थिति ।
पुग्ला निश्चय त्यो परंपदमहाँ * आफ्नू सपारी मति ५३
पाई जुन् पदलाइ फेरि जन यो * आउन्न संसारमा ।
राख्नू दिव्य प्रकाश रूप पद त्यो * आन्नदले चित्तमा ॥
आगो सूर्य र चन्द्रको पनि प्रकाश् * पुग्दैन जुन् पद्महाँ ।
हो मेरो त्यहि धाम, उत्तम पुगी * फर्कन्न प्राणी यहाँ ॥५४
जो आत्मा छ सनातनी शरिरमा * मेरै सखे ! अंश हो ।
आकर्षण् गरि पाँच इन्द्रियहरू * रोक्ने पनी सोहि हो ।
गन्धैको स्थलबाट गन्ध जसरी * लैजान्छ त्यो वायुले ।
आफ्नू त्याग्छ शरीर त्यै किसिमले* संसारमा जीवले ॥५५
त्यागी देह लिएर जान्छ मन औ * जीवात्मले इन्द्रिय ।
जस्तो मिल्छ शरीर बस्तछ सखे ! * त्यै देहमा निर्भय ॥
आँखा, कान र स्पर्श घ्राण, रसना * मन्को लिई आश्रय ॥
गर्छन् भोग सदा मिली विषयको * पाँचैवटा इन्द्रिय ॥५६
जाने देह त्यजेर वा शरिरमा * बस्ने भई सुस्थिर ।
तीनोटा गुण युक्त वा विषय नै * भोग्नेछ जो सादर ॥
सक्तैनन् जन देख्न जीवकन त्यो * अज्ञानले ढाकिंदा ।
देख्छन् यत्न गरेर तत्व बलले * ज्ञानीहरू सर्वदा ॥५७॥

थानें उज्वल लोकलाइ रविको * जुन् तेज हो सो अनि ।
जस्तो तेज छ, अग्निको र शशिको * हुँ पार्थ ! मै त्यो पनि ॥
गर्छु शक्ति लिएर भूमि तलका * प्राणीहरू धारण ।
पाल्छु पुष्ट म चन्द्रको बनि सुधा * अन्नादि साराकन ॥५८
अर्जुन ! प्राण, अपान वायुहरूले * ढाकेर चारैतिर ॥
गर्छु वास बनेर जीवहरूमा * आफैं म वैश्वानर ॥
गर्छन भोजन जीवले जगतमा * जो अन्न चारै थरी ।
पार्छु पाचन मै ति भोग्यहरूको * हे पार्थ ! रक्षा गरी ॥५९
यौटा नाश हुने सखे ! पुरुष हो * जसलाइ भन्छन क्षर ।
आत्मारूप छ जो विनाश नहुने * त्योचाहिं हो अक्षर ॥
तेस्रो जो दुइदेखि भिन्न छ सखे ! * सर्वज्ञ और उत्तम ।
रक्षा गर्दछ जीवको जगतमा * त्यो हो पुरूषोत्तम ॥६०

गीतासार ( सोहौं अध्याय ) दैवी र आसुरी सम्पत्ति बिभाग योग :—

श्री दामोदरले बताउनुभयो * जो छन् सखे ! निर्भय ।
राखी सात्विक वृत्ति धर्म गरि जो * रोक्छन् दसै इन्द्रिय ॥
अर्काको उपकारमा रत रही * ठान्ने साबैको जय ॥
इच्छा पुग्दछ ज्ञानले भनि सदा * जो गर्दछन् निश्चय६१
वाणीले मनले तथा शरिरले * कस्तै परे तापनी ।
अर्कालाइ दिंदैन कष्ट जन जो * कर्तव्य हो यो भनी ॥
शत्रूको पनि ठान्छ जो मनमनै * कल्याण हे अर्जुन !
जसले चल्दछ शास्त्रको वचनमा * विश्वास मानीकन ॥६२
जसको शुद्ध छ भित्र बाहिर दुवै * खोज्दैन सम्मान जो ॥
राख्ने धैर्य, क्षमा दया र वशमा * पर्दैन जो क्रोधको ॥

जस्को चञ्चल छैन चित्त अभिमान * गर्दैन जो सज्जन।
दैवी सम्पतिले हुने पुरुषको * यै हुन् सखे ! लक्षण ॥६३
पाखण्डी, अभिमानयुक्त रिसको * पोको, घमण्डी बनी।
अज्ञानी र कठोरता, कलुषता * जो राख्छ दम्भी बनी॥
जस्मा लक्षण छन् यसै किसिमका * हे पार्थ ! धेरै थरी।
जन्मन्छन् लिइ सम्पती पृथिविमा * यस्ताहरू आसुरी ॥६४
दैवी सम्पति हो सदा सुख तथा * शान्ती र मुक्ती दिने।
बन्धन्मा परि आसुरी मनमहाँ * संकष्ट धेर् पाइने॥
प्राणीले लिइने स्वभाव दुइ छन् * दैवी तथा आसुरी।
भन्छु आसुरिको म लक्षण अघी * दैवी भनें राम्ररी ॥६५
योग्यायोग्य विचारपूर्वक सखे ! * कर्तव्य जान्दैन जो।
झूटो बोल्छ, अशुद्ध बस्तछ सफा * आचार मान्दैन त्यो॥
गर्छन् बात कहीं प्रसंगवश ती * सर्वज्ञ आफैं बनी।
उत्पत्ती स्थिति नाश यो जगतको * क्वै छैन कर्ता भनी ॥६६
कर्ता ईश्वर छन् र आश्रय छ यो * मान्नु ठुलो भूल हो।
खानू-लाउनु भोगमा रत हुनू * ती मूढ मान्छन् ठुलो॥
झूटो भन्दछ आसुरी मत हुने * शिक्षा सबै शास्त्रको।
जान्ने भै अनुचित् कुराकन सही * भन्ने सदा मूर्ख त्यो ॥६७
इच्छा पूर्ण हुँदैन जुन् विषयले * खोजी त्यसैमा सुख।
उल्टो काम गरेर मोह मतिले * भोग्दन् अनेकौं दुख॥
धर्मात्मा म हुँ पूज्य लोकभरिमा * जान्ने र बाठो पनी।
दम्भी भैकन भ्रष्ट आचरण ती * गर्नन् मपाइँ बनी ॥६८
लिन्छन् आश्रय प्रेमले विषयमै * आशा बढाई कन।
गाडिन्छन् अभिमानले जुनिभरी * चिन्तामहाँ दुर्जन॥

राख्छन् सौख्य निमित्त खूब बटुली * अन्यायद्वारा धन ।
पर्छन् बन्धनमा ति कामुक, गरी * सम्पत्तिकै चिन्तन ६९
पाएँ आज यती, पुगेन कसरी * त्यस्को लिने सम्पति ।
त्यो पाए त सबै मनोरथहरू * पुग्थे भएका जति ॥
मैं हुँ ईश्वर भोग्दछु सुखहरू * पृथ्वीभरीका सब ।
मानेँछु बलवान शत्रु सहजै * क्वै छैन बाँकी अब ॥७०
मैं छु श्रेष्ठ उदार लोकभरिमा * विख्यात ठूलो धनी ।
धेरै बान्धव छन्, म झैं, अरु कुनै * पाइन्न खोजे पनि ॥
मैले दान दिनेछु यज्ञहरूमा * सम्मान बढ्ला अनि ।
यस्तै तर्क गरेर मोहवश मैं * रुन्छन् पछी दुर्गुणी ॥७१
द्वेषी क्रूर र आसुरी मत हुने * जो दुष्ट छन् दुर्मति ।
मेरो द्वेष, गरी परी नरकमा * संकष्ट भोग्छन् अति ॥
मानी शास्त्र प्रमाण योग्य रितले * सत्कर्म जो गर्दछन् ।
त्यागी क्रोध र लोभ, मोह जन ती * आनन्दले तर्दछन् ॥७२
त्यागी शास्त्र विधान दान, मख जो * गर्छन् घमण्डी बनी ।
तिन्लाइ सुख-शान्ति मुक्ति भवमा * मिल्दैन कैल्हे पनी ॥
योग्यायोग्य र शास्त्रको सुविधिमा * विश्वास मानीकन ।
गर्नू पर्दछ श्रेष्ठ कर्म तिमिले * सानन्द हे अर्जुन ! ॥७३

गीतासार ( सत्रौं अध्याय ) श्रद्धात्रय विभाग योग :—

श्री दामोदरले बताउनुभयो * सारा बुझाई जब ।
जोरी हात भने धनञ्जयजिले * न्यूहेर—हे माधव !
छाडी शास्त्र विधान गर्छ जन जो * यज्ञादि औ पूजन ।
सात्विक्-राजस-तामसी स्थितिमहाँ * मिल्नेछ कुन् त्यस्कन ॥७४

यस्तो विन्ति सुनीसकेर् हरिले * गम्भीर वाणी गरी ।
आज्ञा गर्नुभयो सबै त्रिगुणका * निष्ठाहरू राम्ररी ॥
वाणीले गरि हुन्छ तीन थरिको * श्रद्धा सबै व्यक्तिमा ।
सात्विक् राजस तामसीकन सुनी * राख्नू सखे ! चित्तमा ॥
जस्ले पूजन गर्छ देवगणको * त्यो व्यक्ति हो सात्विकी।
जस्ले मान्दछ यक्ष-राक्षसहरू * त्यो हो सखे राजसी ॥
जस्ले पुज्दछ भूत-प्रेत भवमा * मानिन्छ त्यो तामसी ।
त्यस्तालाइ हुँदैन प्राप्त कहिले * संतोष, शान्ति खुशी ॥
पाखण्डी अभिमानयुक्त, धनको * राखी अहं भावना ।
त्यागी शास्त्र विधान सिद्धि हित जो * गर्छन् शदा साधना ॥
तिन्को निष्फल हुन्छ दान, तप त्यो * धेरै गरे तापनि ।
दिन्छन् देहस्वरूप मलाइ नबुझी * संकष्ट व्यर्थै तिनी ॥७७
श्रद्धा तीन प्रकारको जब भयो * आफ्नू स्वभावै सरी ।
इच्छामाफिक छन् त्यसै किसिमका * आहार तीनै थरी ॥
गर्छन् यज्ञ र दान और तप पनी * जुन् चाल्ले जो जन ।
तिन्को भेद बताउँछु सुन सखे ! * एकाग्र पारी मन ॥७८॥
आयू औ बल-बुद्धि, श्री-सुख तथा* आरोग्य शान्ती दिने ।
चिल्लो औ रसयुक्त पौष्टिक भई * स्वादिष्ट बर्ता हुने ॥
यस्ता खाद्य पदार्थ छन् जति गुणी * संसारमा पाइने ।
खान्छन् आफ्नू स्वभावयोग्य दिनहूँ* सात्त्विक् सुवृत्तिलिने७९
रूखो औ नुनिलो पिरो र अमिलो* टर्रो र तीतो अति ।
पोल्ने देह र शोक-रोग बढने * खाने कुरा छन् जति ।
गर्दा प्रेरित भित्रको प्रकृतिले * आनन्द मानीकन ।
जो हुन् मध्यम ती रजोगुण लिने * गर्छन् यही भोजन ॥८०॥

जूठो औ रस स्वादहीन अमिलो * बासी कुअन्नै पनि ।
वेला बित्न गएर खाद्य चिजमा * दुर्गन्ध आए पनि ॥
जो लाग्दैन स्वयं अशुद्ध ठहरी * यज्ञादि सत्कर्ममा ।
गर्छन् भोजन तामसी प्रकृतिका * मानीस यो लोकमा ॥८१
मैले गर्नु सुयोग्य यो छ अथवा * कर्तव्य मेरो भनी ।
गर्छन् जो तप-यज्ञ शास्त्रहरुले * आज्ञा दिए झैं, अनि ॥
इच्छा ती शुभ कर्मको फल लिने * राख्तैन जो मानिस ।
सोही सात्विक वृत्तिका मनुज हुन् * फैलन्छ तिन्को यश॥८१
व्यर्थै धाक लगाउने कि फलको * इच्छा हुने बेसरी ।
गर्छन् जो शुभ यज्ञ राजस त्यही * हुन् पार्थ ! दोस्रा थरी ॥
श्रद्धा भक्ति र शास्त्र भिन्न मख जो* मानीसले गर्दछन् ।
सोही तामस वृत्तिका जन भनी * संसारले भन्दछन् ॥८३॥
जस्ले गर्दछ देव, विप्र, गुरु औ * सत्पात्रको पूजन ।
जस्मा हुन्छ पवित्रता, सरलता * साह्रै दयालु मन ॥
हिंसा हीन र ब्रह्मचर्य व्रत जो * गर्छन् सदा पालन ।
गर्ने मानिस देहको तप ठुलो * मानिन्छ त्यै सज्जय॥८४
व्यर्थै खिन्न दुखी अरूकन निहुँ * खोजेर पार्दैन जो ।
साँचो वा प्रिय वाक्य औ हित हुने * मीठो कुरा बोल्छ जो ॥
जस्को हुन्छ पवित्र आचरण औ * अन्याय गर्दैन जो ।
भन्छन् सज्जन वाक्यको तप सदा *गर्ने त्यही व्यक्ति हो ॥८५
रोकी चञ्चल वृत्तिलाइ मनको * जो हुन्न उच्छृङ्खल ।
जस्ले शान्त भएर गर्छ हरिको * सेवा सधैं निश्छल ॥
जो बोल्दैन झुटो कुरा र अनुचित् * कस्तै परे तापनी ।
हुन्छन् मुक्त सखे ! गरेर मनको * ठूलो तपस्या तिनी ॥८६

हे अर्जुन् ! तप देह वाक्य मनको * मैले भनें तीन जो ।
यस्तो तीन प्रकारको तप सदा * योगस्थ भै गर्छ जो ॥
भोग्ने ती तपका मिठा फलहरू * खोज्दैन हे पार्थ ! जो ।
भन्छन् सो तपलाइ सात्विक तथा * ज्ञानी पनी श्रेष्ठ हो ॥८७
आफ्नू दुष्ट स्वभावले कि मनले * वा स्वार्थ राखीकन ।
होला कीर्ति भनेर लोभवश भै * जो गर्दछन् पूजन ॥
चाँडै नाश हुने, क्षणिक् फल दिने * गर्छन् तपस्या जति ।
भन्छन् राजस वृत्तिका मनुज हुन्* तिन्लाइ हे सद्मति ! ॥८८
अर्काको धन पुत्र नाश अथवा * मार्ने इरादा लिई ।
आफ्ना इन्द्रिय और शरीरकन यो * संकष्ट व्यर्थै दिई ॥
जिद्दीले तप-दान-पूजन वृथा * जो गर्दछन् दुर्जन ।
भन्छन् तामस वृत्तिका जान भनी * संसारले तिन्कन ॥८९
गर्नू पर्छ सुकर्म, दान दिनु हो * कर्तव्य मेरो भनी ।
जाँची पात्र र देश काल र दुखी * साह्रै दरिद्री गुणी ॥
इच्छा प्रत्युपकारको मनमहाँ * राख्तै नराखीकन ।
गर्छन् जो जन दान सात्विक त्यही* मानिन्छ हे अर्जुन ॥९०
गर्दा दान सखे ! परेर करमा * वा कष्टका साथमा ।
इच्छा त्यो उपकारको मनमहाँ * राखेर आफन्तमा ।
त्यस्को हेतु कुनै प्रयोजन पछी * होला कि पूरा भनी ।
गर्छन् जे जति दान राजस त्यही * हो भन्दछन् सद्गुणी॥९१
पैह्ले आदरसाथ डाकि घरमा * हेलाँ पछाड़ी गरी ।
त्यागी देश र काल पात्र कुलको * चिन्ता, अगाड़ी सरी ॥
दिन्छन् दान कुपात्रमा र फलको *छन् आश राख्ने जति ।
तिन्को दान वृथा छ, भन्छ जनले* हुन् तामसी दुर्मति ॥९२

'ॐ तत्सत्' यहि तीन ब्रह्मरूप हो * श्री सच्चिदानन्दको ।
यो तीनै द्विज, वेद, यज्ञ सबको * उत्पत्तिको स्थान हो ॥
हे अर्जुन् ! तप-दान-यज्ञ र क्रिया * मानिन्छ शास्त्रोक्त जो ।
थाले गर्न, भनेर ॐ प्रणव यो * ब्रह्मज्ञले कार्य त्यो ॥९३
गर्नू यज्ञ सुकर्म दान तप औ * रोकेर राख्नू मन !
ॐ तत्सत् कन जान्नु ईश्वर, यही * सत्कर्म हुन अर्जुन !
श्रद्धाहीन भएर यज्ञ-तप वा * दानादि जो गर्दछन् ।
तिन्को कर्म असत् ठहर्दछ मरी * ती नर्कमा पर्दछन् ॥९४
श्रद्धा यज्ञ र दानको त्रिगुणको * शिक्षा सुनी कृष्णको ।
सोधे अर्जुनले विनम्र स्वरले * शंका जती चित्तको ॥
हे दामोदर, हे दयामय ! दुई * छन् योग जो दुष्कर ।
सन्यास् योग र कर्म योग कहनोस्* सुन्छु म दामोदर ! ॥९५
आज्ञा भो हरिले प्रसन्न मनले * इच्छा बुझी मित्रको ।
कोही भन्दछ काम्य कर्महरुको * नै त्याग संन्यास हो ॥
मान्छन् त्याग समस्त कर्म-फलको * संन्यास एका थरी ।
कोही भन्दछ त्याग्नु कर्महरु नै * दोषी हुनाले गरी ॥९५
मान्छन् यज्ञ र दान औ तप ठुलो * सत्कर्म जो सज्जन ।
भन्छन् त्याग्नु हुँदैन कर्म जनले * ती व्यक्ति हे अर्जुन !
आफ्नू निश्चय भन्दछु सुन तिमी * संन्यासको त्यागको ।
मान्छन् सज्जन भेद तीन थरिका * यज्ञादिको दानको ॥९७
ज्ञानीलाइ पनी सपार्दछ सधैं * सत्कर्मको सत्फल ।
गर्नु पर्दछ यज्ञ दान, तप नै * त्यै हेतु भै निश्चय ॥
मेरो श्रेष्ठ तथा उदार मत जुन् * हो भन्छु त्यो अर्जुन !
गर्नू योग्य छ दान, यज्ञ, तप नै * आसक्ति त्यागीकन॥९८

त्यागदा कर्म, नियम् हुँदैन जनको * कल्याण कैह्ले पनि ।
भन्छन् मोह भई त्यज्यो यदि भने* हो तामसी दुर्गुणी! ॥
स्वप्नूपर्छ शरीरले थरि-थरी * आपत्ति व्यर्थै भनी ।
जस्ले छाड्छ सुकर्म गर्न जन त्यो * सप्रन्न कैह्ले पनि ९९
गर्छन् जो शुभ कर्म त्यागि यसरी * हो राजसी त्याग त्यो ।
पाउन्नन् फल ती शुभाशुभ कुनै * त्यो त्याग वा कर्मको ॥
आशा त्याग्न सखे ! सुकर्म फलको* जो सक्तछन् सज्जन ।
जो गर्छन् निजकर्म श्रेष्ठ दिनहूँ * कर्तव्य जानीकन ॥४००
तिनूको कर्म ठहर्छ लोकहरूको * कल्याणका खातिर ।
मान्छन् त्यो शुभ कर्म सात्विक सबै* संसारले सादर ॥
निन्दा द्वेष हुँदैन, कर्म सुखमा * आसक्त त्यागी दिन ।
भन्छन् सत्वगुणी सुपुत्र सबले * त्यागी ठुलो त्यस्कन ॥१
इच्छा सक्तछ रोक्न जुन् पुरुषले * आसक्ति छाड़ीकन ।
त्यागी हो त्यहि व्यक्ति कर्म-फलमा * गाड़िन्न जस्को मन ॥
जस्तो कर्म जहाँ जती र जसरी * हुन्छन् सखे ! लोकमा ।
तिनूको कारण शुद्ध पाँच थरिको * मानिन्छ संसारमा ॥२॥
ती पाँचै थरिको म साङ्ख्यमतले * जस्तो भनेको छ त्यो ।
गर्छु गर्णन हे सखे ! सुन तिमी * कल्याणको मार्ग हो ॥
सिद्धीको स्थल देहमा छ सबको * जीवात्म जो अर्जुन !
कर्ता हो अभिमान, भिन्न थरिको * त्यस्मा छ जुन् कारण ॥३
त्यस्ता इन्द्रिय मुख्य छन् दस अरु * चेष्टा छ नाना थरी ।
दैवी सञ्चित कर्मका फलहरू * भोग्छन् यी हेतू परो ॥
गर्छन् कर्म शरीर-वाक्य-मनले * जस्तो जहाँ जो जन ।
तिनको योग्य तथा अयोग्य सबको * हुन् पाँच यी कारण ॥४

यस्तो हो तर ठान्छ आफूकन त्यो * कर्ता भनी केवल ।
बुद्धी नष्ट भई छिटै नरकमा * जाकिन्छ पापी खल ॥
कर्ता हूँ म भनेर व्यर्थ अभिमान् * हे पार्थ ! गर्दैन जो ।
ज्ञानी भोग झुटो पदार्थहरुमा * मान्दैन आनन्द जो ॥५
त्यो द्वारा सब व्यक्ति मारिन गए * वा कष्ट पाए पनी ।
दोषी त्यो ठहरिन्न, बन्धनमहाँ * बाँधिन्न पापी बनी ॥
ज्ञाता-ज्ञान र ज्ञेय तीन थरिका * छन् कर्मका प्रेरक ।
गर्नू कर्म भनेर यी बल सदा * दिन्छन् बनी रक्षक ॥६॥
कर्ता रूप छ जो र कर्म गरिने * तेस्रो छ जुन साधन ।
गर्ने कर्म छ भेद तीन थरिको * तिन्को पनी अर्जुन !
गर्नू भो पहिले मुनी कपिलले * सुन् साङ्ख्यको वर्णन ।
त्यस्का भेदहरू सबै सुन तिमी * एकाग्र पारी मन ॥७॥
यस्को ज्ञान भई सकेपछि स्वयं * ब्रह्माण्डका जीवमा ।
बुन्छन् यी सब एक व्यापक सदा * जुन् व्यक्तिका दृष्टिमा ॥
देख्ला जो सम-भावले स्थित हुने * यो विश्वका रक्षक ।
त्यस्को ज्ञान हुँदैन नाश कहिले * मानिन्छ त्यो सात्विक ॥८
जस्ले देख्छ थरी-थरी जगतका * सम्पूर्ण जीवात्ममा ।
बुद्धीकै अनुसार भिन्न थरिका * छन् भाव प्रत्येकमा ॥
यस्तो ज्ञान हुने र भेद मनमा * राख्नेछ जुन् मानिस ।
जस्मा वृत्ति रहन्छ यो किसिमको * त्यो ज्ञान हो राजस ॥९
जस्ले ठान्दछ मुख्य यो शरिर नै * कर्ता र आत्मा भनी ।
आफ्नू देह समानको अरु कुनै * देख्दैन कैल्हे पनि ॥
यस्तो युक्ति र अर्थहीन भवमा * जो मूढ छन् मानिस ।
तिन्को तत्व विहीन ज्ञान तिमिले * जानी लिए तामस ॥१०

जस्ले शास्त्र विधानमा दृढ रही * कर्तव्य जानीकन ।
आसक्ति, अभिमान त्यागि फलको * राख्तैन जो सज्जन ॥
रागद्वेष नराखि कर्म शुभ जो * त्यस्बाट हुन्छन् जति ।
त्यै हो सात्त्विक कर्म मिल्दछ सदा * त्यस्बाट राम्रो गति॥११
कर्ता हूँ शुभकर्म गर्दछु म नै * जो भन्छ ज्ञानी बनी ॥
आशा गर्दछ कर्मको फल सखे ! * भोग्नेछु पक्का भनी ॥
जस्ले ठान्छ ठूलो परिश्रम गरें * जुन् कर्म गर्दा पनी ।
भन्छन् राजस कर्म राखि अभिमान् * गर्ने यही हो भनी ॥१२
हिंसा औ परिणामको र बलको * ख्याले नराखीकन
आफ्नो लाभ तथा वृथा खति हुने * देख्दैन जो सज्जन ॥
गर्दै जान्छ स्वयं लिंड़ेढिपि गरी * सत्कर्म दुष्कर्म जो ।
तेस्को कर्म कहिन्छ 'तामस', त्यही * पापी तथा मूढ हो ॥१३
शेखी त्याग गरेर धैर्य मनमा * राखेर उत्साहले ।
त्यागी आश समस्त कर्म-फलको * कर्तव्यको भावले ॥
पूरा काम हुने अपूर्ण रहने * चिन्ता नगर्ने छ जो ।
कर्ता 'सात्विक' औ विकार नहुने * ज्ञानी त्यही व्यक्ति हो॥१४
लोभी औ अभिमानयुक्त, फलमा * आसक्ति बर्ता हुने ।
अर्काको अपराध केहि नभई * संकष्ट व्यर्थै दिने ॥
राग-द्वेष र हर्ष-शोकहरुमा * छन् गाडिने जो जन ।
कर्ता 'राजस' भन्दछन् सुजनले * त्यस्लाइ नै अर्जुन॥१५
शिक्षाहीन, अयुक्त, धूर्त गुणको * द्रोही तथा दुर्जन ।
गर्ने शोक तथा विचार अरुको * सम्पत्ति खोसी लिन ॥
छन् अल्छी परदारमा मन दिने * जो दीर्घसूत्री ; तन ।
कर्ता 'तामस' दुष्टता बढ़ि हुने * मानिन्छ यो दुर्जन ॥१६

जुन् बुद्धी छ प्रवृत्त मार्गतिर वा * लाग्ने निवृत्ती तिर ।
हो यो गर्न हुने र गर्न नहुने * जो जान्न सक्छन् नर ॥
बन्धन् , मोक्ष र भीति औ अभयको* ज्ञाता छ जो सज्जन ।
त्यस्को 'सात्विक' बुद्धि हो सुख दिने* प्रत्यक्ष हे अर्जुन ! ॥१७
कार्याकार्य-अधर्म-धर्म जन जो * जान्दैन राम्रो गरी ।
त्यस्को बुद्धि कहिन्छ 'राजस' त्यही* हो पार्थ दोस्रो थरी ॥
जातीलाइ नजाति वा असतमा * देख्ने सदा दुर्गुण ।
उल्टो बुद्धि कहिन्छ तामस त्यही * हो दुष्टको लक्षण ॥१॥
आत्मामा रमिई अचञ्चल छ जो * संसारका भोगमा ।
टिक्छन् इन्द्रियले र प्राण, मनले * जो ध्यानको योगमा ॥
ज्ञानी सज्जन व्यक्तिमा स्थित हुने * हो धारणा मुख्य जो ।
पैह्लो 'सात्विक' धारणा बुझ तिमी * हे पार्थ ! त्यै श्रेष्ठ हो ॥१९
इच्छा गर्दछ जो सुकर्म फलको * संसारका भोगको ।
ढल्की अर्थ र काम, धर्मतिरको * त्याग्दैन आसक्ति जो ॥
हे कुन्ती सुत ! हुन्छ जुन् सुजनमा* यो चालको धारणा ।
भन्छन् सज्जनले यसैकन सदा * हो 'राजसी' धारणा ॥२०
उल्टो बुद्धि हुने मनुष्यहरूले * जो राख्तछन् भावना ।
चिन्ता औ भयको र नींद, दुखको * त्याग्दैन जो कल्पना ॥
त्यस्ताका मनमा सदैव रहने * जुन् धारणा शक्ति हो ।
त्यस्रो 'तामस धारणा' सुजन वा * षट् शास्त्रले भन्छ त्यो॥२१
पैह्ले जो विष झैं भई पछि सुधा * झैं शान्तिदाता छ जो ।
सोही 'सात्विक' नामको सुख सखे ! * जानी लिनू श्रेष्ठ हो ॥
भोग्दा इन्द्रियका सबै सुखहरू * पैह्ले छ अमृत सरी ।
त्यै हो 'राजस' नामको सुखपछी * विष् झैं हुनाले गरी॥२२॥

आत्मालाइ विमोह पार्छ सुख जुन् * पेह्ले-पछाड़ी पनि ।
सोही 'तामस' नामको सुख बुझे * हो कष्टदाता भनी ॥
पृथ्वीमा, नभमा कि देव अथवा * पातालमा, स्वर्गमा ।
छैनन् सत्वहरू कुनै प्रकृतिको * त्रैगुण्य हीन् लोकमा॥२३
हुन्छन पार्थ ! स्वभावले गुणहरू * धेरै र थोरै जब ॥
भिन्नाभिन्न स्वभाव त्यै किसिमले * छन् प्राप्त गर्ने सब ॥
क्षत्री, ब्राह्मण, वैश्य, शूद्र यसरी * चारै थरीका भए ।
यिन्का कर्महरू पृथक्-पृथक नै * त्यै हेतुले बाँडिए ॥२४
शास्त्र ज्ञान हुनू र इन्द्रियहरू * रोकेर राख्नू सब ।
गर्नू पालन धर्म, कष्ट सहनू * जे पर्छ जस्तो जब ॥
अर्काको हित गर्नु शान्त मनले * गोविन्दको चिन्तन ।
मानिन्छन् शुभ कर्म विप्रगणका * सारा यिनै अर्जुन ! ॥२५
दानी, शौर्य र तेज, धैर्य, बल औ * चातुर्य बर्ता हुन ।
स्वामी भैकन न्यायपूर्वक रही * अन्याय रोकी दिन ॥
देखी शत्रुहरू डराइकन जो * भाग्दैन संग्राममा ।
हुन् यी 'क्षत्रिय' धर्म हे विजयजी * विख्यात संसारमा ॥२६॥
खेती गर्नु सदैव योग्य रितले * व्यापार गोपालन ।
हुन् यी उत्तम धर्म 'वैश्य'गणले * गर्नै सदा पालन ॥
सेवा क्षत्रिय, वैश्य विप्र सबको * गर्नू लगाई मन ।
ये हो उत्तम धर्म 'शूद्र'हरुले * गर्नै सदा पालन !॥२७॥
गर्छन पालन वर्ण-धर्म यसरी * चारै थरीले जब ।
तिनूलाई सुख, सिद्धि मिल्छ जसरी* भन्छु म त्यै लौ अब ॥
जो द्वारा जगतै छ व्याप्त र भए * जसबाट प्राणी सब ।
उत्पत्ति, स्थिति, नाश गर्छ सहजै * आँटे त जस्ले जब ॥२८

सोही ईश्वरको प्रसन्न मनले * जो गर्छ आराधना।
त्यस्लाई सुख सिद्धि मिल्दछ स्वयं * पूरा भई कामना ॥
जानेको परधर्म उत्तम छ औ * कल्याण गर्ने तर।
दोषीहोस् निज धर्म तैपनि त्यही * मानिन्छ श्रेयस्कर ॥२९
सोही कारणले स्वधर्म जनको * दोषी भए तापनि।
त्याग्नु हुन्न स्वधर्म क्यै किसिमको* आपत्ति आयो भनी ॥
धूवाँभित्र रहन्छ अग्नि जसरी * देखिन्न प्रत्यक्ष त्यो।
त्यस्तै धर्म निमित्त कष्ट सहनू * प्रत्येकले योग्य हो ॥३०
इच्छा शक्ति तथा स्पृहारहित जो * छन् बुद्धि राम्रो हुने।
रोकी इन्द्रिय साङ्ख्ययोगतिरको * बाटो समाई लिने ॥
बर्ता लुब्ध हुँदैन भोगहरुमा * मिथ्या बुझी जो जन।
त्यस्ले प्राप्त गर्‍यो सुसिद्धि सहजै * नैष्कर्मले अर्जुन ! ॥३१
सिद्धी प्राप्त गरेर ब्रह्मपदमा * पौंचिन्छ जुन् ज्ञानले।
थोरैमा सब भन्दछु बुझ तिमी * हे पार्थ ! आनन्दले ॥
त्यागी सात्विक बुद्धि युक्त र गुणी * आत्माविषे भै स्थिर।
राग-द्वेष र दुःख-सुक्ख त्यसको * त्यागे भई तत्पर ॥३२॥
वाणी इन्द्रिय और शरीर वशमा * जो राख्छ वैराग्यले।
त्यागी क्रोध, घमण्ड, कामबल औ * भोगादि सद्बुद्धिले ॥
माया, मोह त्यजेर शान्त मनले * जो ध्यानमा छन् स्थित।
गर्छन् प्राप्त अवश्य ब्रह्मपद ती * सत्पात्र राम्रोसित ॥३३॥
गर्ला प्राप्त यसोरि ब्रह्मपद जो * हे पार्थ ! आनन्दले।
आकांक्षा सुख-दुःख हुन्न मनमा * त्यस्लाई वैराग्यले ॥
राख्ला जो समभाव जीव जतिमा * हुन् एकनासे भनी।
पाई भक्ति 'परा' परम्पदमहाँ * त्यो पुग्छ ज्ञानी बनी ॥३४

यस्तो छ अनि जो म हूँ, भनि सखे * जानी सकी तत्वले ।
त्यस्ले चिन्छ मलाइ योग्य रितले * सोही परा भक्तिले ॥
मेरो आश्रय मानि गर्दछ भने * सत्कर्म, दुष्कर्म जो ।
कैल्है नाश हुँदैन जुन् पद यहीं * भेट्नेछ प्रत्यक्ष त्यो ॥३५
यो अर्को, म हुँ यो भनेर मनमा * शंका नराखी कन ।
आफ्ना कर्महरू स्वयं गर सबै * मैमा सखे ! अर्पण ॥
राम्रो अर्ति लियौ भने मनमहाँ * मेरो कृपाले गरी ।
हुन्छौ कष्ट सबै छुटेर विजयी * यो युद्धमा राम्ररी ॥३६
मान्दैनौ हितको कुरा यदि भने * मैले भनेको सुन ।
हुन्छौ भ्रष्ट घमण्ड राखि मनमा * पक्का तिमी अर्जुन !
भन्नू 'गर्दिनँ युद्ध' व्यर्थ हठले * मान्दीनँ राम्रो म त ।
हुन्छौ आफ्नु स्वभावले तिमि स्वयं * संग्राममा प्रेरित ॥३७॥
शिक्षा उत्तम ज्ञानको जति दिएँ * मैले चिताईं हित ।
जे इच्छा मनमा छ त्यै गर तिमी * सोचेर राम्रोसित ॥
मेरा हौ तिमी अंश औ प्रिय सखा ! * तिम्रो भलो खातिर ।
अर्को भन्छु म योग्य ज्ञान सुन त्यो * निःशङ्क भै सादर ॥ ८
मैलाई निज कर्म अर्पण गरी * मैमा लगाऊ मन ।
मेरो भक्त बनी प्रणाम गर लौ * मेरै गरी पूजन ॥
मेरा छौ प्रिय मित्र, सत्य म कुरा * भन्छु प्रतिज्ञा गरी ।
भेट्नेछौ तिमिले मलाइ यसरी * संसार पारी तरी ३९
छोड़ी धर्म सबै तिमी शरणमा * हे पार्थ ! मेरो पर ।
तिम्रो पाप छुटाइ उत्तम गती * दिन्छु नमाने डर ॥
देख्ने दोष ममा र सुन्न मनमा * इच्छा नराख्ने कन ।
जस्मा छैन तपस्विको गुण तथा * पापी छ जो दुर्जन ॥४०॥

जो गर्दैन परोपकार खुशिले * निन्दा सदा गर्दछ ।
गीता-ज्ञान कवै नभन्नु तिमिले * त्यस्मा ठुलो दोष छ ।
राखी प्रेम ममाथि दुःख-सुख जो * गर्छन् ममा अर्पण ।
गीता-ज्ञान सुनाउनू तिमि सखे * जो भक्तछन् तिन्कन ॥४१
गीताको सब यो रहस्य तिमिले * राम्रो बुझायौ भने ।
मेरो भक्ति बढी परंपद सखे ! * सानन्द छौ पाउने ॥
गीता-ज्ञान स्वरूप हामि दुइको * संवाद जो पढ्दछन् ।
मेरो पूजन रूप यज्ञ गरि ती * ज्ञानी बनी तर्दछन् ॥४२
मेरा अर्तिहरू सुन्यौ कि तिमिले * एकाग्र पारी मन ।
तिम्रो मोह गयो कि शेष छ अझैं * अज्ञानको लौ भन ॥
यो आज्ञा हरिको सुनेर मनमा * आनन्द मानी कन ।
जोरी हात दुबै विनम्र स्वरले * भन्दा भए अर्जुन ॥४३
मेरा मोह छुट्यो, सुनी हजुरका * शिक्षाहरू अच्युत !
पाई ज्ञान हराइ संशयहरू * छु चेतनामा स्थित ॥
जे आज्ञा प्रभुले भयो सकल त्यो * शंका नमानी कन ।
जानी ईश्वर औ हितू हजुर नै * गर्छू सबै पालन ॥४४॥
वार्ता श्री धृतराष्ट्रजीसित भनी * श्री कृष्ण औ पार्थको ।
भन्छन् सञ्जयजी म हर्षित भएँ * शिक्षा सुनी ज्ञानको ॥
गीता-रूप बताइबक्सनुभयो * जुन् योग गोविन्दले ।
पाएँ व्यासजिको कृपा हुन गई * त्यो सुन्न आनन्दले ॥
साह्रै अद्भुत विश्वरूप हरिको * त्यो सम्झनाले गरी ।
बारंबार खुशी म हुन्छु मनमा * आश्चर्यले यो घरी ॥
हो मेरो मत यो धनुर्धर जता * छन् पार्थ-योगेश्वर ।
श्री नीति र विभूति औ जय सदा * त्यै तर्फ हुन्छन् स्थिर ॥

युधिष्ठिरले भीष्मादिसित संग्रामको आज्ञा माग्नु, युयुत्सु पाण्डवतिर मिलन आउनु :—

गीता ज्ञान-स्वरूप पार्थ हरिको * संवाद सारा भनी।
भन्छन् सञ्जय जो स्थिती छ रणको * सुन्नूहवस् त्यो पनि॥
सेना त्यो कुरुक्षेत्रमा दुइ थरी * जम्मा भएकै थिए।
बाजा भेरि मृदङ्ग ढोल नगरा * तूर्यादि बज्दा भए॥४७
त्यै वेला रथमा भए जति सबै * शस्त्रास्त्र राखीकन।
एक्लै कौरवतर्फ पैदल हिंडे * श्री पाण्डुका नन्दन॥
सोधे अर्जुन आदि भाइहरूले * देखेर त्यस्तो गति।
बोलेनन् जब क्यै युधिष्ठिर अनी * जानेर तिन्को मति॥४८
आज्ञा भो हरिले म भन्छु नृपको * इच्छा सबैले सुन।
आज्ञा लड्न भनेर मान्य जनको * जान्छन् यि मागी लिन॥
जस्ले गर्छ लडाइँदेखि पहिले * यो नीतिको पालन।
त्यस्को जीत हुनेछ, शास्त्रहरूमा * पाइन्छ यो वर्णन॥४९
यो आज्ञा हरिको सुनी रथ त्यजी * ती चार भाईहरू॥
लागे धर्म - कुमारका पछी-पछी * योद्धा अनेकौं अरू॥
देखे लश्करलाइ शत्रुतिरका * आई रहेका जब।
'आए पर्न भनी स्वयं शरणमा' * हाँसेर भन्थे सब॥५०
पौंची धर्म-कुमार त्यो किसिमले * श्री भीष्मका सामुमा।
लागे भन्न मुसारि नम्र स्वरले * तिन्को दुवै पाउमा॥
आएँ क्षत्रिय-धर्मले गरि यहाँ * संग्राम गर्नै परी।
आज्ञा माग्न, हजुरले दिनुहवस् * राखी दया यो घरी॥५१
यस्तो धर्म-कुमारको सुनि कुरा * श्री भीष्मले सादर।
आज्ञा भो तिमिलाइ मङ्गल गरुन् * हे भूपती ! ईश्वर !॥

आयौं भेटन भनी प्रसन्न म भएँ * मागेर लेऊ बर ।
तिम्रो जीत हुनेछ यो समरमा * पर्दैन मान्नू डर ॥५२
हुन्नन् दास धनी र निर्धनहरू * हुन् दास सम्पत्तिका ।
सोही कारण दास भैं वश परें * ऐले म यी दुष्टका ॥
नाती हौ तिमी भैं म धार्मिक अरू* देख्दीनँ कोही पनि ।
गर्छौ पालन सत्यको तिमि सदा * कर्तव्य यो हो भनी ॥५३
मैले लड्नु पर्‍यो तिमीसँग छ यो * आश्चर्य दैवी गति !
लड्नू लौ तिमिले विचार नगरी * सम्बन्धको, सद्गति !
तिम्रो जीत हुनेछ, धर्म - पथको * गर्नू सदा पालन ।
तिम्रो के म गरूँ कुरा हित हुने *राजन् ! तिमी नै भन॥५४
लागे धर्म-कुमार भन्न—हितको * शिक्षा सुनी भीष्मको ।
लड्दा कौरवतर्फ भै हजुरले * आशा गयो जीतको ॥
को योद्धा छ हजूरका सँगमहाँ * लड्ने अगाड़ी सरी ।
हाम्रो जीत हुनेछ यो समरमा * कुन् यत्नले के गरी ?५५
होला युक्ति कुनै पराजय हुने * संग्राममा नाथको ।
आज्ञा गर्नुहवस् प्रसन्न मनले * जान्छु सुनी हेतु त्यो ॥
बिन्ती धर्म-कुमारको सुनिसकी * आज्ञा भयो भीष्मले ।
मौका छैन पछाडि आउनु तिमी * भन्नेछु आनन्दले ॥५६
त्याहाँबाट हिंड़ी युद्धिष्ठिर गए * श्री द्रोणका सामुमा ।
बिन्ती नम्र भएर सादर गरे * पक्री दुवै पाउमा ॥
लड्नु बक्सनुहोस् गुरो ! हजुरले * आज्ञा मलाई भनी ।
आए मागन हजूरका संग यहाँ * पर्नेछ लड्नै पनी ॥५७
मेरो जीत हुनेछ कुन् किसिमले * यो युद्धमा के गरी ?
त्यस्को भन्नुहवस् उपाय सजिलो * राखी दया यो घरी ॥

द्रोणाचार्यजिले बताउनुभयो * बिन्ती सुनी भूपको ।
'राजन् ! वीर मलाइ जित्न रणमा * सामू परी सक्छ को !५८
तिम्रो तर्फ भएर यो समरमा * लड्दीनँ मैले तर ।
त्यो बाहेक अरू छ जे मनमहाँ * मागेर लेऊ वर ॥
हुन्छन् सेवक प्राणिमात्र धनका * हुन्नन् धनी चाकर ।
त्यस्तै बन्धनमा परेर कुरुको * गर्छु सदा आदर ॥५९॥
यो दुर्योधनतर्फ भै समरमा * मैले लडे तापनि ।
गर्छु मङ्गल कामना म दिनहूँ * तिम्रो भलो होस् भनी ॥
त्यस्कै जीत हुनेछ यो समरमा * श्री कृष्ण छन् जोतिर ॥
जे इच्छा मनमा छ सोध अहिले * त्यागी कुशङ्का डर॥६०
द्रोणाचार्यजिको कुरा सुनिसकी * सोधी लिए भूपले ।
सक्छौं जित्न हजूरलाई रणमा * हे नाथ! कुन् युक्तिले ?
मैले सोध्नुपर्‍यो हजूरसंग नै * जुन् बात यो युक्तिको ।
बारंबार म दिन्छु आफुकन नै * धिक्कार धेरै गुरो ॥६१
आज्ञा भो गुरु द्रोणले नगर क्यै * चिन्ता तिमी चित्तमा ।
साँचो बात भन्यौ मलाइ सहसा * जित्ने छ को युद्धमा ?
विश्वासी जनबाट अप्रिय कुरा * सुन्नेछु आफै जब ।
त्यागी शस्त्रहरू विचेत रथमै * आफै हुनेछू तब ॥६२॥
सक्ला मार्न मलाइ त्यै बखतमा * आई कुनै वीरले ।
यो आज्ञा गुरुको सुनी खुशि भए * भूपाल; आनन्दले ॥
त्याहाँबाट हिंडी पुगे 'कृप' कहाँ * मेरा गुरू हुन् भनी ।
ढोगी बिन्ती गरे गुरो ! समरको * आज्ञा म पाऊँ भनी ॥
बिन्ती धर्म-कुमारको सुनि, दिए * शिक्षा कृपाचार्यले ।
बाँधे बन्धनमा मलाइ कुरुले * हे वीर ! सम्पत्तिले ॥

सोही कारणले उनै तिर भई * लड्नू परे पातिन ।
तिम्रो मङ्गल कामना म मनले * गर्छु हितैषी बनी ॥६४॥
हे राजन् ! तिमिले अवध्य छ भनी * जाने मलाई तर ।
तिम्रो जीत हुने प्रसन्न मनले * दिन्छु म आफैं वर ॥
यो आज्ञा कृपको सुनेर मनमा * आनन्द मानी कन ।
भन्छन् धर्म-कुमार शल्य नृपको * सामू पुगी त्यै क्षण ॥६५
मामा ! गर्छु प्रणाम, आशिष तथा * आज्ञा दिनोस् युद्धको ।
लागे शल्य बुझाइ भन्न खुशिले * बिन्ती सुनी भूपको ॥
पारे कौरवले मलाइ वशमा * सम्मान ठूलो गरी ।
सोही कारणले उनैतिर भई * लड्नै पर्‍यो यो घरी॥६६
यो संग्राममहाँ हजूरतिर भै * लड्ने कुरा बाहिक ।
गर्छू पूर्ण हजूरको हुकुम लौ * हे धर्मका रक्षक !
यस्तो बात सुनेर शल्य नृपको * अत्यन्त आनन्दले ।
इच्छा आफ्नु भने युधिष्ठिरजिले * युक्ती तथा बुद्धिले ॥६७
मामा ! कौरवतर्फ भै हजुरले * लड्नू भए तापनि ।
योटा काम हजूरले गरिदिनू * पर्ला दयालु बनी ॥
ठूलो, अर्जुनको र कर्ण विरको * संग्राम होला जब ।
राधाका सुत कर्णको हरिदिनू * उत्साह, शेखी सब ॥६८॥
इच्छा भानिजको बुझीकन भने * तत्काल श्री शल्यले ।
पूरा गर्छु कबोल यो हजुरको * हे भूप ! आनन्दले ॥
यो सल्लाह गरेर धर्म-सुतजी * फिर्नू भएथ्यो जब ।
पुग्नूभो अनि कर्णका शिविरमा * तत्काल श्रीमाधव ॥६९॥
भन्छन् कर्ण ठूलो सुआदर गरी * पाल्नूभएको किन ?
जो आज्ञा छ बताइबक्सनुहवस् * गर्छू म त्यो पालन ॥

आज्ञा भो हरिले–म सुन्दछु वृथा * हेलाँ गरे भीष्मले ।
गर्छौ कौरवको बनी किन तिमी * संग्राम के हेतुले ? ॥७०॥
योद्धा तत्पर छन् भए जति सबै * संग्राममा यो घरी ।
बस्छौ वीर भई नपुंसक सरी * यो गेहमा के गरी !
मर्दैनन् जबसम्म भीष्म तिमिले * शंका नमानीकन ।
लड्नू पाण्डवतर्फको भई स्वयं * सानन्द हे सज्जन ॥७१॥
श्री दुर्योधनतर्फ आउनु तिमी * श्री भीष्म गिर्नन् जब ।
कुन्तीका सुत ह्वौ भनेर म गई * जाहेर गर्छु अब ॥
लागे कर्ण बुझाइ भन्न हरिले * आज्ञा भएको सुनी ।
श्री दुर्योधनले मलाइ जसरी * राखे दयालु बनी ॥७२॥
बिर्सी त्यो गुनलाइ त्यागि कसरी * जाऊँ उता केशव !
मेरो नै भर मान्दछन् समरमा * ठूलो सबै कौरव ॥
मैले त्याग्न हुँदैन यो पृथिविको * साम्राज्य पाए पनि ।
लड्छु कौरवतर्फकै भइ पछी * श्रीभीष्म गिर्छन् अनि७२
मैले अप्रिय श्री सुयोधनजिको * गर्दीनँ हे केशव ! ।
यस्ता बात गरी सकी शिविरमा * फिर्नू भयो माधव ॥
सेनाका बिचमा युधिष्ठिर गई * भन्दा भए वीर हो !
मेरो तर्फ भएर खूशि मनले * आएर मिल्ने छ जो॥७४
त्यस्लाई म मिलाउँछु समरमा * तत्काल आफू तिर ।
लागे भन्न युयुत्सु–धर्मसुतको * आज्ञा सुनी सादर ॥
'आज्ञा हुन्छ भने म मिल्दछु स्वयं * आएर हे भूपति !
लड्छु कौरव वीरका संगमहाँ * शङ्का नमानी रति'॥७५
इच्छा जानि युयुत्सुको, नृपतिले * संमानका साथमा ।
आफ्नै भाइसमान आदर गरी * राख्नू भयो पासमा ॥

यो वार्ता धृतराष्ट्रजी संग बसी * भन्दा भए संजय ।
राजन् ! मिल्न गए युयुत्सु यसरी * उन्को चिताई जय ॥७६

पहिलो दिनको युद्ध, भीष्मद्वारा श्वेतवीर वध :—

बाजा बज्न गए दुवै तरफका * तत्काल चारैतिर ।
बढ्नू सैन्य भनी हुकुम् हुन गयो * संग्रामका खातिर ॥
आए पाण्डवका सुसैनिकहरू * बढ्दै अगाड़ी जब
बढ्दै कौरवतर्फका पनि हिंड़े * सेना अगाड़ी सब ॥७७॥
चारै तर्फ उठेर मेघ सहसा * आकाश ढाके सरी ।
ढाके त्यो रणभूमि सैनिकहरू * बढ्दै गई बेसरी ॥
हे राजन् ! गज, अश्व, पैदल, रथी* सेना र सेनापति ।
पृथ्वी कंप भयो हिंड़े जब सँगै * योद्धा तथा भूपति ॥७८
थाले गर्जन वीर सैनिकहरू * ठूलो भयो खल्बल ।
बाजा बज्न गएर झन् हुन गयो * अत्यन्त कोलाहल ॥
बाजा. शस्त्र, धनू तथा समरको * शङ्ख-ध्वनी बेसरी ।
ठूलो शब्द उठेर व्याप्त हुन गो * आकाश भूमी भरी ॥७९
थाले गर्जन भीमसेन सबले * सुन्दा भए त्यो ध्वनी ।
लागेथे मल-मूत्र त्यागन पशुले * लौ मार्न आँटे भनी ।
श्री दुर्योधन खूब क्रोधित भए * देखेर त्यस्तो स्थिति ।
आएर लड्न भनी लिएर संगमा * भाई र योद्धा जति ॥८०
जो योद्धा रथमा र अश्व-गजमा * सज्जित थिए पैदल ।
श्री दुर्योधनका हिंड़े पछि-पछी * गर्दै ठूलो खल्बल ॥
सोधे श्री धृतराष्ट्रले जब भए * तैयार सेना त्यहाँ ।
पैह्ले शस्त्र गऱ्यो प्रहार कसले * कस्का अगाड़ीमहाँ ॥८१

लागे सञ्जय भन्न—भीष्मकन गै * रोकी लिए पार्थले ।
श्री दुर्योधन-भीमसेन रिसले * लड्‌दा भए वेगले ॥



श्रीकृष्णले अर्जुनलाई उत्साह दिएको

रोके श्री कृतवर्मलाइ रणमा * श्री सात्यकी वीरले ।
छोरा अर्जुनका बृहद्बलजिको * सामू पुगे वेगले ॥८२॥
थाले लड्‌न डटेर श्री नकुलजी * औ वीर दुःशासन ।
योद्धा श्री सहदेव दुर्मुख उता * लड्थे रिसाई कन ॥
लड्थे शस्त्र लिई युधिष्ठिर स्वयं * श्री शल्यका साथमा ।
धृष्टद्युम्न भएर क्रोधित डटे * श्री द्रोणाका सामुमा ॥८३
रोके शङ्ख डटेर वेग बलियो * भूरिश्रवा वीरको ।
रोके वेग ति धृतकेतु विरले * भूपाल वाह्लीकको ॥
जस्तो राक्षस त्यो अलंबुष थियो * विख्यात संसारमा ।
त्यस्को शेखि हऱ्यो घटोत्कच पुगी* शस्त्रास्त्रका साथमा ॥८४
आएथे भगदत्त भूप रिसले * बढ्‌दै अगाडी जब ।
तिन्का सामु पुगे विराट नृपती * शस्त्रास्त्र बोकी सब ॥
द्रौणीको र शिखण्डिको हुन गयो * संग्राम झन्‌ अद्भुत ।
लागे लड्‌न रिसाउँदै द्रुपदजी * श्री सिन्धु राजासित ॥८५

छोरा जो प्रतिविन्ध्य धर्म-सुतका * साह्रै प्रतापी थिए।
तिनले त्यो रणभूमिमा शकुनिको * शेखी उतारी लिए ॥
योद्धा जो अनुविन्द, विन्द रणका * ज्ञाता, प्रतापी थिए।
बाटो रोकि ति कुन्तिभोज नृपको * संग्राम गर्दा भए ॥८६॥
राजन् ! यै रितले समान बलका * योद्धा थिए जो जति।
लड्थे जोड़ि मिलाइ सैनिकहरू * मार्छु भनी भूपति ! ॥
लड्थे हात्ति सवार क्रोधित भई * हात्ती चढ़ेकैसित।
लड्थे अश्व सवार क्रोधित हुँदै * घोड़ा चढेकासित ॥७७॥
योद्धा जो रथमा थिए सब रथी * -कै साथमा लड्दथे।
राजन् ! पैदल पैदलै सित लड़ी * संग्राममा गर्दथे ॥
गर्दा यै रितले प्रहार सबले * जोड़ी मिलाई कन।
थाले गिर्न मरी दुवै तरफका * सेनाहरू त्यै क्षण ॥८८॥
लड्दा अर्जुन औ पितामह तथा * श्री भीम दुर्योधन।
हेर्थे देवतरू बसेर मनमा * आनन्द मानी कन ॥
राजा शल्य तथा युधिष्ठिर दुवै * योद्धा भई तत्पर।
गर्थे मार्छु भनी प्रहार रिसले * ताकेर तीखा शर ॥८९॥
धृष्टद्युम्न र द्रोणको पति भयो * संग्राम जो अद्भुत।
मर्मस्थान गरी विचार शरले * हान्थे भई क्रोधित ॥
केही बेर त द्वन्द-युद्ध यसरी * चल्दै थियो बेसरी।
मर्यादा जब नाघियो अनि भए * सम्पूर्ण अन्धा सरी ॥९०
रात्री भैं सब अन्धकार दिनमै * संग्राममा फैलियो।
आफ्ना वीर तथा विपक्षि जनले * चिन्हे नसक्ने भयो ॥

आई ज्रुन तिरबाट शस्त्र तनमा * लाग्थ्यो ठुलो वेगले ।
ताकी सोहि दिशा प्रहार रिसले * गर्थे तिखा बाणले ॥९१॥
थाले मार्न पिता र पुत्र नचिन्ही * दाज्यू र भाई कन ।
मामा भानिज नै परस्पर कतै * मार्थे नदेखी जन ॥
तोड़ी बन्धन युद्धको जति मरे * जसका अगाडी जहाँ ।
थाले चुट्न समाइ काट्न रिसले * हानेर बैरी त्यहाँ ॥९२॥
हाहाकार भयो, धमाधम लड़े * सेना अनेकौं मरी ।
देखिन्थे शव मात्र त्यो बखतमा * संग्राम भूमी भरी ॥
हीरा-रत्न हुने कती मुकुटले * शोभा फिंजेका शिर ।
हिंड्थे मत्त भई गजेन्द्र रणमा * कुल्चेर चारैतिर ९३॥
बाहू, पाउ विहीन देह कतिका * मूढो ढले भैं थिए ।
त्यै माफिक् कति वीरका तनहरू * ढल्दै र थिच्दै गए ॥
लाग्दा मत्त गजेन्द्रका शरिरमा * तीखा अनेकौं शर ।
ढल्थे फन्न घुमेर पर्वत सरी * संग्राम भूमीभर । ९४॥
शक्ति-शूल-गदा र बाणहरूले * धूलो गराई रथ ।
थाले मार्न डटेर शत्रुदलको * रोकेर बढ्ने पथ ॥
त्यो युद्धस्थलमा गदा-मुशलले * आघात गर्थे कति ।
त्यस्ले भङ्ग भएर अंग कतिको *हुन्थ्यो नराम्रो स्थिति९५
लाग्दामा तरवारले कति दुई * टुक्रा भई गिर्दथे ।
हात्ती औ रथले थिचीकन कती * योद्धाहरू मर्दथे ॥
लागी चोट ठुलो र मर्न नसकी * बाँच्नेहरू जो थिए ।
आफ्ना मित्र र बन्धुलाइ नगिचै * डाक्दै र मर्दै गए ॥९६॥
सेनाको शवले र अश्व-गजले * ढाकेर युद्ध स्थल ।
बाटो बन्द भएर मच्चिन गयो * ठूलो त्यहाँ खल्बल ॥

केही बेर लड़ाइँ थामिन गयो * धूलो उड़ी बेसरी ।
आयो स्वच्छ प्रकाश दृश्य अनित्यो * देख्दा भए राम्ररी ९७
आफ्ना सैन्य मरी प्रशस्त, रणको * देखी नराम्रो स्थिति ।
थाले लड्न गएर भीष्मसित नै * श्री उत्तराका पति ॥
त्यै बेला कृतवर्म, शल्य, कृपजी * छोरा हजुर्का दुई ।
पाँचोटै बलवान्, सुयोधनजिको * तत्काल आज्ञा लिई ९८
मद्दत् गर्न भनी पितामहजिको * पौंचेर बायाँ तिर ।
आफ्आफ्ना रथमा डटीकन बसे * संग्रामका खातिर ॥
योद्धा श्री अभिमन्युले समरमा * छाड़ेर तीखा शर ।
घाऊ पारिदिए पितामहजिको * सारा शरीरै भर ॥९९॥
तिन्का रक्षक पाँच जो अरु थिए * योद्धा डटेका त्यहाँ ।
तिन्का अश्व र सारथी-रथ, ध्वजा * काटी दिए छिन्महाँ ॥
भाला, शूलहरू प्रहार रिसले * गर्दा तहाँ भीष्मले ।
घोड़ा औ अभिमन्युको रथ-ध्वजा * काटी दिए वेगले ॥५००
योद्धा श्री कृतवर्म, शल्य, कृपले * वर्षा गरी बाणको ।
घाऊ पारिदिए शरीर भरिमा * श्री पार्थका पुत्रको ॥
देख्दा श्री अभिमन्युको समरमा * यस्तो नराम्रो स्थिति ।
धृष्टद्युम्न विराटका सँग पुगे * श्रीभीम औ सात्यकी॥१॥
चारोटा बलवान रक्षकहरू * देखे त्यहाँ भीष्मले ।
पारे घायल चारलाइ सहजै * तीखा-तिखा बाणले ॥
योद्धा भीम बढ़ी पितामहजिको * त्यो वेग रोकी दिए ।
धृष्टद्युम्न अघी सरी कृपजिको * शेखी उतारी लिए ॥२॥
योद्धा श्री कृतवर्म सात्यकि दुवै * शस्त्रास्त्र हानी कन ।
गर्दै माछुं भनी विवाद रणमा * लाग्दा भए गर्जन ॥

हात्ती माथि चढी विराट सुतले * गर्जेर श्री शल्यको ।
मारी सारथि अश्व औ रथ-ध्वजा * भाँचीदिए श्रेष्ठ त्यो ॥३॥
राजा शल्य रिसाइ शक्ति बलियो * योटा लिई हातमा ।
मार्नें मनुसुबले विराट-सुतको * हानी दिए माथमा ॥
लाग्यो शक्ति गई सवेग शिरमा * प्राणान्त तिन्को भयो ।
तिन्को मत्त गजेन्द्र उत्तम पनि * त्यै शक्तिले मारियो ॥४
मारी मत्त-गजेन्द्र उत्तर दुवै * -लाई तिनी गर्जिए ।
उफ्री श्री कृतवर्मको रथमहाँ * तत्काल बस्ता भए ॥
भाई मारिदिए भनेर रिसले * श्री श्वेत आगो भई ।
ढाके शल्य नरेशलाइ रणमा * शस्त्रास्त्र छाड्दै गई ॥५॥
लागेथे जब श्वेतका शरहरू * श्री शल्य मूर्च्छित्न् भए ।
रक्षा गर्न भनेर मद्रपतिको * श्री भीष्म पौंची गए ॥
आए सात अरू रथी, अतिरथी * रक्षार्थ श्री भीष्मको ।
एकै पल्ट गरी प्रहार सबले * सातो लिए श्वेतको ॥६॥
सातैको धनुलाइ सात शरले * हानेर टुक्रा गरी ।
गर्जेथे बलवान श्वेत रणमा * सातो सबैको हरि ॥
सातोटै बलवानले धनु छिटै * अर्को लिई हातमा ।
लागे छाडन अनेक बाण रिसले * श्री श्वेतको देहमा ॥७॥
देखी पाण्डवतर्फका सकलले * संग्रामको त्यो स्थिति ।
लाखौं वीर मिलेर भीष्मसित नै * लड्दा भए भूपति !
त्यो देखीकन भीष्म क्रोधित भई * छाड़े अनेकौं शर ।
थाले सैनिक मर्न शत्रुतिरका * तत्काल चारैतिर ॥८॥
हाहाकार परेर भाग्न सब ती * चौतर्फ लागे जब ।
ठान्थे आपुसमा ति वीर कसरो * यो प्राण बाँच्ला अब ॥

सेना पाण्डव तर्फका जब भए * त्यो चालले कत्तल ।
आए श्वेत रिसाई दिव्य रथमा * थर्काइ युद्धस्थल ९॥
पैहे ढाकिदिर पितामहजिको * घोड़ा र सेतो रथ ।
पारे घायल कत्ति बढ्न नदिई * रोकेर तिनूको पथ ॥
काटे भीष्मजिले सबै शरहरू * श्री श्वेतको वेगले ।
घाऊ पारिदिए शरीर भरमा * आफ्ना तिखा बाणले ॥१०
मारी अश्व, ध्वजा-धनू, मुकुट औ * श्री छत्र काटी दिए ।
देखी दुर्गति भीष्मको समरमा * सेनाहरू आत्तिए ॥
पाए पाण्डव सैन्यले यसरि जो * बाँच्ने सुमौका त्यहाँ ।
स्याबासी दिइ श्वेतलाइ बहुतै * खुशी भए छिन्महाँ ॥११
त्यो देखीकन भीष्म क्रोधित भई * हानेर नौ बाणले ।
मारी अश्व, ध्वजा, धनू, रथ-मुकुट् * भाँची दिए वेगले ॥
योद्धा भीष्म र श्वेतको समर त्यो * जस्तो भयो अद्भुत ।
त्यस्को वर्णन गर्न सक्तिनँ यहाँ * सम्पूर्ण राम्रोसित ॥१२॥

स्वामी मरी गजहरू कति रित्तिएका ।
खुट्टा र सूँड गिंड़िई रणमा गिरेका ॥
घोडाहरू पनि सवार विहीन धेर ।
गिर्दै थिए कति त जीवन रित्तिएर ॥ १३ ॥
स्वामी र सारथि मरी रथ रित्तिएको ।
देखापरे शव किचेर हिंडीरहेको ॥
सेना दुवै तरफका मरि धेर त्याहाँ ।
ढाकी दिए स्थल जती रणभूमिमाहाँ ॥ १४ ॥

राजन् ! काल समान बाण तनमा * लागेर श्री भीष्मको ।
लागदा घाउ अनेक क्रोध रणमा * बढ्दै गयो श्वेतको ।

बर्छी एक लिई पितामहजिको * ताकेर वक्षस्थल ।
हाने माछु भनेर हे नरपते ! * देखाइ ठूलो बल ॥१५॥
त्यो देखीकन भीष्मले पनि छिटो * नौ बाण हानीकन ।
बर्छी काटिदिए हजार टुकुरा * पारेर सोही क्षण ॥
राजन् ! श्वेत रिसाइ उत्तम गदा * अर्को लिइ हातमा ।
'पर्खी माछु' भनी प्रहार सहसा * गर्दा भए गाथमा ॥१६॥
देखे श्रेष्ठ गदा अमोघ नजिकै * आई पुगेको जब ।
हामफाली रथबाट त्यो छलिदिए * श्री भीष्मजीले तब ॥
बज्र्यो श्रेष्ठ गदा गएर रथमा * साह्रै ठुलो वेगले ।
घोड़ा औ रथ सारथी हुन गए * धूलो त्यही चोटले ॥१७॥
देखे पाण्डव सैन्यले जब त्यहाँ * श्री भीष्मको दुर्गति ।
थाले शङ्ख फुकेर गर्जन सबै * आनन्दले भूपति !
श्री दुर्योधन खूब क्रोधित भए * देखी नराम्रो स्थिति ।
रक्षा गर्न पुगे लिएर संगमा * सेना र सेनापति ॥१८॥
योद्धा भीम र सात्यकी अरु पनी * जो जो प्रतापी थिए ।
रक्षाखातिर श्वेतको सकल ती * दौड़ेर पुग्दा भए ॥
भारी युद्ध भयो दुवै तरफको * सेना मरे बेसरी ।
योद्धा भीष्म र श्वेतको पनी भयो * संग्राम नाना थरी ॥१९॥
काटे श्वेत रिसाइ उत्तम धनू * श्री भीष्मजीको जब ॥
अर्को भीष्मजिले लिए धनु ठुलो * साह्रै रिसाई तब ।
बढ्थे भीम अगाड़ि बाण सयले * तिन्लाइ रोकीकन ।
रोके सात्यकिलाइ बीस शरले * हानेर सोही क्षण ॥२०॥
योद्धा श्री अभिमन्यु आदि बलिया * जो जो डटेका थिए ।
वर्षाई शर तीक्ष्ण, बढ्न नदिई * तत्काल रोकी दिए ॥

आए श्वेत रिसाइ त्यै बखतमा * बढ्दै अगाडी जब ।
मार्ने निश्चय गर्नु भो मनमनै * श्रीभीष्मजीले तब ॥२१
राखी कालसमान बाण धनुमा * मन्त्रेर छाड्नूभयो ।
लागी त्यो शर श्वेतको हृदय नै * बेधेर निस्की गयो ॥
पल्टयो जीव विहीन देह गिरि झैं * संग्राममा श्वेतको ।
ठूलो कौरवतर्फमा ध्वनि भयो * त्यो जीतले हर्षको ॥२२
भाई शङ्ख थिए त्यहीं नजिकमै * श्री श्वेतको त्यो घरी ।
दाज्यू मारिदिए भनेर रिसले * आए अगाडी सरी ॥
लागे मार्न अनेक सैनिकहरू * छाड़ेर तीखा शर ।
सेना गिर्न गए धमाधम मरी * तत्काल चारैतिर ॥२३॥
आफ्ना सैनिकको विनाश रणमा * देखेर श्री भीष्मले ।
लागे बढ्न रिसाई शङ्खतिर नै * मार्छु भनी वेगले ॥
रोके अर्जुनले पितामहजिको * त्यो वेग सामु गई ।
वर्षाए शर शल्यको तन भरी * श्रीशङ्खले तंसिई॥२४॥
वहीं त्यो रथबाट झट्ट करमा * लीए गदा शल्यले ।
चारोटै हय मारि चूर्ण रथ त्यो * पारी दिए वेगले ॥
हाम्फालीकन शङ्ख वीर रथमा * श्री पार्थजीको गए ।
राजा शल्य र भीष्मदेखि यसरी *ती शङ्ख बाँच्ता भए॥२५
एक्लै पाण्डवतर्फका सकल यी * सेना म मार्छु भनी ।
वर्षाए शर भीष्मले थरि-थरी * कालाग्नि जस्तै बनी ॥
लागी बाणहरू खटाखट मरे * सेनाहरू बेसरी ।
थाले प्राण बचाइ भाग्न रणमा * अत्यन्त हाहा परी ॥२६॥
सन्ध्याकाल भनेर वीरहरुले * तत्काल चारैतिर ।
रोकी युद्ध छिटै फिरे शिविरमा * विश्रामका खातिर ।

श्री दुर्योधनले ठुलो विजयश्री * पाए पछी त्यो दिन।
यौटा उत्सवको गरे निशि महाँ * सानन्द आयोजन ॥२७
राजन् ! धर्म कुमारलाइ मनमा * चिन्ता बढी बेसरी।
सोधे श्री हरिलाइ जान्छ मनको * मेरो व्यथा के गरी॥
हाम्रा फौजहरू बथान मृगका * ठानेर हेलाँ गरी।
मार्छन् भीष्म बनेर सिंह रणमा * देख्नू भयो हे हरि ॥२८॥
अड्ने वीर म कोहि देख्दिनँ यता * तिनको अगाडी सरी।
हाम्रो जीत हुनेछ यो समरमा * मान्ने प्रभो ! के गरी ?॥
गर्नू बन्धु विनाश यो किसिमले * अन्याय हो भन्दछु।
गर्नू जङ्गलमा गई तप बरू * राम्रो कुरा ठान्दछु ॥२९
जोरी हात दुवै युधिष्ठिरजिले * बिन्ती गरेको सुनी।
श्री दामोदरले बुझाउनुभयो * नीति दयालु बनी॥
हे राजन् ! यसरी वृथा हजुरले * चिन्ता गरेको किन ?।
सक्छन् जित्न समस्त कौरव जती * एक्लै लडी अर्जुन ॥३०
ठानी धर्म सहर्ष दुष्ट जनको * संहार गर्नू हवस्।
ज्ञानी सज्जनको प्रसन्न मनले * रक्षा सदा गर्नुहोस ॥
पैह्ले लड्न अघीसऱ्यो तर पछी * भाग्यो डराई कन।
निन्दा यो रितको पछी हजुरको * गर्नन् सबै दुर्जन ॥३१॥
हार्नू-जित्नु र मर्नु-बाँच्नु सब यो * हो बात साधारण।
त्यस्को ख्याल नराखि युद्ध खुशिले * गर्छन् सदा सज्जन ॥
सोही कारणले अकीर्ति फिंजिने * मान्दै नमानी डर।
जान्छु लौ वनमा भनेर हुनुभो * के हेतुले तत्पर ॥३२॥
नीतियुक्त कुरा बुझाउनुभयो * धेरै हरीले जब।
केही चित्त बुझेर धर्म-सुतको * चिन्ता हरायो सब ॥

धृष्टद्युम्नकहाँ पठाउनुभयो * तत्काल यौटा चर ।
आज्ञाले नृपको भए द्रुपदका * सत्पुत्र ती हाजिर ॥३३॥
भोली व्यूह तयार गर्नु तिमीले * हे वीर ! क्रौंचारुण ।
रक्षा गर्नु डटेर सैन्य सबको * सेनापती भैकन ॥
आज्ञा जे जति हो सबैकन दिई * सम्मानका साथमा ।
आफ्नू धर्म-कुमारजी शिविरमा * पाल्नूभयो रातमा ॥३४

दोस्रो दिनको युद्ध : द्रोणाचार्य, धृष्टद्युम्न, अर्जुन, भीष्मको संघर्ष

प्रातःकाल हुँदा भने जति कुरा * सारा तयारी भयो ।
त्यो क्रौंचारुण व्यूहको समरमा * शोभा ठुलो फैलियो ॥
योद्धा श्रेष्ठ र मुख्य-मुख्य जनले * रोकेर चारैतिर ।
मुख्य द्वार भरी बसे सब डटी * संग्रामका खातिर ॥३५॥
देखी व्यूह ठुलो विपक्षिहरूको * उत्साह झन् दोब्बर ।
श्री दुर्योधनको बढ्यो मनमहाँ * चिन्ता कुशंका डर ॥
ढाकी त्यो डरलाइ शान्त मनले * आफ्नू तयारी गरी ।
हाम्रा सैन्य डटुन् अघिल्तिर भनी * आज्ञा दिए त्यै घरी ॥३६
देख्नूभो जब श्री युधिष्ठिरजिले * त्यो व्यूह क्रौंचारुण ।
आज्ञा बक्सनुभो प्रहार सबले * गर्नू भनी त्यै क्षण ॥
आफ्नू इन्द्रधनू समान बलियो * पक्री धनू हातमा ।
वर्षाई शर भीष्म शत्रुतिरको * पस्तै गए व्यूहमा ॥३७
लागे मार्न अनेक सैन्य रिसले * वर्षा गरी बाणको ।
कोही वीर सकेन टिक्न रणमा * सामू परी भीष्मको ॥
जो जो वीरहरू विपक्षतिरका * तिनूका अगाडी परे ।
लागी घाउ अनेक तीक्ष्ण शरको * भाग्दै पछाडी सरे ॥३८॥

देखे अर्जुनले जसै समरको * साह्रै नराम्रो स्थिति ।
रोके भीष्मकहाँ पुगेर शरको * वर्षा गरी भूपति !
योद्धा भीष्म विकर्ण, शल्य, शकुनी * औ वीर दुर्योधन ।
हे राजन् ! कृपजी, जयद्रथ तथा * श्री द्रोण आईकन ॥३९॥
रोके अर्जुनलाइ बढ्न नदिई * घेरेर चारैतिर ।
एकैपल्ट गरे प्रहार सबले * अत्यन्त तीखा शर ॥
लागी घाउ शरीरमा रगतको * धारा बगे तापति ।
सारा चोट खपे धरेर दृढता * फर्नेछु साटो भनी ॥४०॥
त्यै वेला रिसले पितामहजिले * शस्त्रास्त्र छाड़ी कन ।
मारे सैन्य अनेक पाण्डु-सुतका * गर्दै ठुलो गर्जन ॥
लागे भाग्न डराइ सैनिकहरू * सारा पछाड़ीतिर ।
भाग्नेलाइ पनी लखेटि बलले * मार्थे चलाई शर ॥४१॥
त्यो देखीकन पार्थ क्रोधित भई * हेरेर चारैतिर ।
हाने भीष्मजिलाइ झट्ट पहिले * पच्चीस तीखा शर ॥
आएथे जति पृष्ठ-रक्षक बनी * श्री भीष्मका त्यो घरी ।
पारे घायल ती सबैकन त्यहाँ * एक्लै लड़ाइ गरी ॥४२॥
धृष्टद्युम्न, बिराट, सात्यकि अरू * विख्यात योद्धा पनि ।
आए गर्न भनेर मद्दत त्यहाँ * छन् पार्थ एक्लै भनी ॥
हानेथे सय बाणले शरिरमा * ताकेर श्री भीष्मले ।
तिनका बाण सबै वृथा गरिदिए * काटेर श्री पार्थले ॥४३॥
आफाफ्ना धनुको सवेग कहिले * टंकार गर्थे तिनी ।
छिद्रान्वेषण गर्दथे र कहिले * गर्जेर शङ्ख - ध्वनी ॥
देखिन्थे कहले झुलुक्क कहिले * ती वीर देखिन्नथे ।
तिनको कौशल, युद्धको चपलता * आश्चर्यले हेर्दथे ॥४४॥

घाऊ देहभरी दुवै कन भयो * शस्त्रास्त्रको चोटले ।
लड्थे तैपनि ती दुवै भइ दह्रो * साह्रै ठुलो वेगले ॥
पारे घायल कृष्णलाइ रणमा * नौ बाणले भीष्मले ।
त्यो देखी हय, सारथी, रिस गरी * मारी दिए पार्थले ॥४५
सेना जो दुइतर्फका समरको * निम्ती डटेका थिए ।
देख्दा ती दुइको पराक्रम सबै * तस्वीर झैं देखिए ॥
धृष्टद्युम्न र द्रोणको पनि, उता * संग्राम चल्दै थियो ।
योद्धा भीम कलिङ्ग वीरहरुको * झन् वेगले मच्चियो ॥४६
पाँचोटा गुरु द्रोणले शर झिकी * मन्त्रेर छाड्नू भयो ।
त्यस्ले अश्व र सारथी द्रुपदका * सत्पुत्रको मारियो ॥
धृष्टद्युम्न रिसाइ एक शरले * पैह्ले गरी घायल ।
लागे भन्न ति पर्खि-पर्खि रणमा * मार्छु तँताई खल ॥४७
क्रोधी भैकन कालदण्ड सरिको * मन्त्रेर यौटा शर ।
हाने मार्छु भनेर द्रोण गुरुले * ताकेर छाती तिर ॥
देख्दा त्यो शरलाइ पाण्डुसुतका * सम्पूर्ण सेना भरी ।
चिम्ले नेत्र तुरुन्त हेर्न नसकी * हाहा परी बेसरी ॥४८॥
देखे काल समान बाण तपनी * त्यागी कुशंका डर ।
धृष्टद्युम्नजिले निवारण गरे * त्यो कालरूपी शर ॥
यौटा शक्ति लिएर खूब बलियो * ताकेर हानी दिए ।
त्यस्को भीष्मजिले अनेक बिचमै * टुक्रा तुल्याईदिए ॥४९॥
मारी अश्व तथा धनू-रथ पनी * भाँची दिए बाणले ।
आफ्नू शक्ति वृथा गयो भनि ठुलो * चिन्ता परी क्रोधले ॥
धृष्टद्युम्नजिले पितामहजिलो * ताकेर वक्षस्थल ।
हाने एक गदा घुमाइ सहसा * थर्काइ युद्धस्थल ॥५०॥

हाँस्तै काटिदिए गदा पनि छिटै * श्री द्रोण आचार्यले ।
त्यो देखीकन अग्नि झैं द्रुपदका * छोरा भई क्रोधले ॥
दौड़े खड्ग लिएर डाल करमा * मार्छु भनी वेगले ।
बाटैमा तिनिलाइ रोकिदिनुभो * श्रीभीष्म बाणले ॥५१॥
तिन्को त्यो तरवार, ढाल सहजै * काटी दिनूभो अनि ।
आए महत गर्न भीम दगुरी * लौ मार्न आँटे भनी ॥
थाले गर्न प्रहार भीम रिसले * शस्त्रास्त्र चारैतिर ।
लागे मर्न कलिङ्ग वीर रणमा * लागेर तीखा शर ॥५२॥
द्रोणाचार्य पनि ससैनिक त्यहीं * संहार गर्दै थिए ।
श्री पाञ्चाल नरेश, मत्स्यपतिले * तिन्लाइ रोकी लिए ॥
सेना श्रीकौरव तर्फका सकलको * देखी नराम्रो स्थिति ।
आए वीर श्रुतायु सैनिक लिए * श्री केतुमान् भूपति ॥५३
एकै पल्ट लडे वृकोदर दुवै * भूपालका साथमा ।
बाऊ पारिदिए अनेक थरिका * शस्त्रास्त्रले देहमा ।
छोरा साथ लिई कलिङ्ग नृपले * मार्नै इरादा गरी ।
काटी छत्र, ध्वजा गराई विरथी * गर्जे दुवै बेसरी ॥५४॥
लागी घाउ समस्त देहभरिमा * श्री भीम क्रोधित् भए ।
हानी एक गदा कलिङ्ग नृपको * छोरो गिराई दिए ॥
यो देखी नृपले ससैनिक भई * घेरा दिई राम्ररी ।
लागे मार्न अनेक शस्त्रहरुले * ताकेर मर्नै गरी ॥५५॥
मोटा मन्त्रित कालदण्ड सरिको * हानी दिए बाणले ।
काटे भीम रिसाइ बाण नृपको * आफ्नू ठुलो खड्गले ॥
रोकी श्रेष्ठ प्रहार शत्रुदलको * संपूर्ण एकातिर ।
साथै सैन्यहरु कलिङ्ग नृपका * गर्जेर अकौतिर ॥५६॥

त्यो वेला जति वीर सैनिहरू * तिन्का अगाड़ी परे ।
त्यागी प्राण तुरुन्त त्यो समरमा * संसार पारी तरे ॥
हात्ती माथि चढी ठुलो स्वर गरी * गर्जेर सोही घरी ।
आए सम्मुख भानुमान नृपती * लड्ने इरादा धरी ॥५७॥
उफ्री भीम चढे तुरुन्त गजको * टेकी दुवै दाँतमा ।
टुक्रा पारिदिए त्यहीं नृपतिको * उत्साहका साथमा ॥
घाँटीमा तरवार हानि सहजै * काटेर हात्ती पनि ।
लागे मार्न घुमी-घुमी समरमा * संपूर्ण सेना तिनी ॥५८॥
एक्लै नाश गरे कलिङ्ग-पतिका * सेना हजारौं जब ।
थाले भाग्न डराइ सैनिकहरू * बाँकी बचेका सब ॥
देखेथे जब भीष्मले समरको * त्यस्तो नराम्रो गति ।
आए युद्ध त्यजेर पार्थ सितको * तत्काल हे भूपति ॥५९॥
देखे भीम कहाँ सवेग त्यसरी * तिन्ले गएको जब ।
दौडे पाण्डव तर्फका पनि उतै * विख्यात योद्धा सब ॥
योद्धा कौरव तर्फका पनि पुगे * रक्षार्थ श्री भीष्मको ।
जम्मा वीर भए दुवै तरफका * इच्छा गरी युद्धको ॥६०
धृष्टद्युम्न र भीम, सात्यकि तिनै * आए अगाडी जब ।
पारे घायल तीन-तीन शरले * श्री भीष्मजीले तब ॥
हाने नौ शरले रिसाइ बहुतै * तीनै जना वीरले ।
टुक्रा पारिदिए तुरन्त विचमै * ती बाणको भीष्मले ॥६१
दौडे भीम गदा लिएर रिसले * यस्लाइ मार्छु भनी ।
काटे छाड्न नपाइ झट्ट विचमै * श्री भीष्मले त्यो पनि ॥
काटी छत्र, ध्वजा र अश्व विरथी * पारी दिए भीमले ।
तिन्को अश्व र सारथी पनि छिटै * मारीदिए भीष्मले ॥६२॥

छाडी भीष्म र भीम लड्न सहसा * अन्यत्र जाँदा भए।
योद्धा सात्यकि श्री युधिष्ठिरजिको * रक्षार्थ दौडी गए॥
पौंचे लड्न भनी पितामह छिटै * श्री पार्थका पासमा।
धृष्टद्युम्न सहाय खातिर गए * श्री भीमका साथमा॥६३
घेरा बाँधि ठुलो श्रुतायुधजिका * सेना डटेका थिए।
वर्षाई शर भीमको तन भरी * तत्काल ढाकी दिए॥
राजन् ! सत्य र सत्यदेव नृपका * दोटा थिए रक्षक।
पारे घायल भीमलाइ तिनिले * हानी तिखा सायक॥६४
तिन्को चोटहरू खपीकन सबै * वर्षा गरी बाणको।
काटी छत्र, ध्वजा तथा रथ पनी * भाँचेर भूपालको॥
टुक्रा सत्य र सत्यसेन दुइको * पारी दिए खड्गले।
शेखी झारि दिए श्रुतायुधजिको * श्रीभीमले बाणले॥६५॥
थाले मार्न गदा घुमाइ रणमा * सम्पूर्ण सेना जब।
भागे प्राण बचाउँदै वरिपरी * बाँकी बचेका सब॥
द्रौणी, शल्य नरेश, वीर कृपजी * यी तीनका साथमा।
लड्थे श्री अभिमन्युजी दृढ भई * त्यो घोर संग्राममा॥६६
लागी चोट प्रसस्त घायल थिए * तीनै जना तैपनि।
गर्थे श्री अभिमन्युलाइ शरको * वर्षा हटाऊँ भनी॥
त्यो देखी अभिमन्युले धनुषमा * राखेर तीखा शर।
द्रौणीका हय मारि खूब रणमा * गर्जे ति चारैतिर॥६७॥
द्रौणी वीर गई बसे रथ महाँ * श्री शल्य भूपालको।
अर्को स्थानमहाँ गए तिनिहरू * त्यागेर संग्राम त्यो॥
नाती श्रेष्ठ हजूरका त्यहिं थिए * हे भूपती ! लक्ष्मण।
तिन्ले श्री अभिमन्युलाइ शरले * हाने रिसाईकन॥६८॥

त्यस्ले काटिदियो ठुलो धनुषको * ताँदो तुरुन्तै जब ।
तिन्को अद्भुत कर्मले समरमा * गर्थे प्रशंसा सब ॥
अर्को एक धनू लिएर करमा * श्री पार्थका पुत्रले ।
हाने लक्ष्मणलाइ क्रोधित भई * मन्त्रेर नौ बाणले ॥६९॥
पीडा धेर भएर खप्न नसकी * भागे जसै लक्ष्मण ।
पौंचे भीष्म र द्रोणका संग त्यहाँ * तत्काल दुर्योधन ॥
सारा कौरव वीरले मिलि ठुलो * देखाइ आफ्नू बल ।
एक्लो श्री अभिन्युलाइ रणमा * पार्दा भए घायल ॥७०
देखे अर्जुनले परिस्थिति त्यहाँ * साह्रै नराम्रो जब ।
मारे सैन्य, पुगेर झट्ट कुरुका * सामू परेका सब ॥
हा हाकार परेर सैनिक गए * भागेर चारै तिर ।
सायंकाल भयो गए शिविरमा * विश्रामका खातिर ॥७१

त्यस्रो दिनको युद्ध—भीष्मको पराक्रम, कृष्णको क्रोध :—

प्रातःकाल भए पछी हजुरका * छोरा सबै वीरले ।
ठूलो व्यूह रची लिए गरुडको * आकार झैं युक्तिले ॥
रक्षा गर्न भनेर व्यूह मुखमा * श्री द्रोण बस्ता भए ।
चारैतर्फ बसे डटी कन अरू * जो मुख्य योद्धा थिए७२
साह्रै उत्तम अर्धचन्द्र सरिको * श्री पाण्डुका पुत्रले ।
आफ्नू व्यूह गरे तयार बलियो * युक्ती तथा बुद्धिले ॥
मुख्य द्वारमहाँ डटी कन बसे * श्रीभीम योद्धा गई ।
चारैतर्फ डटे, थिए जति अरू * रक्षार्थ सेना लिई ॥७३
हे राजेन्द्र ! कुपुत्रले हजुरको * संग्रामका खातिर ।
आफ्नातर्फ हुकुम् दिए लड भनी * चिच्याइ चारै तिर ।

आए पाण्डव तर्फका पनि सबै * सेना अगाड़ी सरी ।
थाले गर्न प्रहार घोर रणमा * शस्त्रास्त्र नानाथरी ॥७४॥
लड्थे पैदलले पदाति संग नै * हो युद्ध नीति भनी ।
धेरै वीर रथी रथीसित भीड़े * कालाग्नि जस्ता बनी ॥
योद्धा जो गजमा थिए तिनि लडे * हात्ती चढेकै सित ।
थाले गिर्न मरेर सैन्य रणमा * साह्रै नराम्रोसित ॥७५
बाहु, पाउ विहीन देह कतिका * मूढ़ो ढले भैं थिए ।
टुक्रा कम्मरबाट भैकन कती * फ्याँकी दिए झैं भए ॥
हात्तीले थिचिई मरे कति त्यसै * लागेर तीखा शर ।
देखिन्थे शव मात्र सैन्यहरुका * संग्राम-भूमी भर ॥७६॥
मुर्दा माथि नटेकि हिंड्न रणमा * सक्तैनथे क्वै पनि ।
मार्थे आपुसमै ति चिह्न नसकी * हो शत्रु मेरो भनी ॥
हात्ती, पैदल, अश्व औ रथहरू * धेरै दगुर्दा त्यहाँ ।
छाडी देख्न समस्त अन्धसरिका * सेना भए छिन्महाँ ॥७७
लागे बढ्न अघी विराट र द्रुपद् * श्री भीम औ अर्जुन ।
बढ्थे श्री अभिमन्यु,सात्यकि छिटै* योद्धा हरू लीकन ॥
योद्धा कौरव तर्फका सकलले * देखेर यस्तो स्थिति ।
आए सम्मुख रोक्नलाइ पहिले * गान्धारका भूपती ॥७८॥
योद्धा मद्रपती, जयद्रथ तथा * श्री भीष्म, दुर्योधन ।
वर्षाए हतियार वीरहरूले * तत्काल रोकीकन ॥
राजन् ! वीर थिए समान बलका * श्री भीम - दुर्योधन ।
गर्थे मर्म बुझी प्रहार ति दुवै * शास्त्रास्त्र ताकीकन ॥७९
हाने श्रेष्ठ गदा घुमाइ रिसले * श्री भीमले बेसरी ।
लागी चोट ठुलो सुयोधन गिरे * तत्काल मूर्छा परी ॥

तिन्को सारथिले लग्यो रथ छिटै * विश्रामका खातिर ।
थाले सैनिक मार्न भीम रिसले * दौड़ेर चारैतिर ॥८०॥
लागे गर्जन श्री पितामह उता * देखेर युद्ध स्थिति ।
मारैं सैनिक पाण्ड-पुत्र तिरका * सामू परेका जति ॥
हात्ती, अश्व सवार पैदल रथी * संग्राम भूमी भरी ।
पस्तेका शव देखि हे नरपते ! * मूढो लड़े झैं गरी ॥८१॥
लागे भाग्न डराइ सैनिकहरू * चिच्याउँदै बेसरी ।
जान्थे रोक्न अगाडि भीष्मकन जो * तत्काल गिर्थें मरी ॥
सेना सात्यकिले फिराउन भनी * चेष्टा गरे बेसरी ।
फर्कैनन् तर वीर कोहि रणका * अत्यन्त हाहा परी ॥८२
देखे अर्जुनले, भए पनि परै * संग्रामको त्यो स्थिति ।
आए लड्न भनी चढेर रथ त्यो * दौड़ाउँदै भूपति !
सामू भीष्मजिको अड्याउनु भयो * श्री कृष्णले स्यन्दन ।
थाले गर्न प्रहार तीक्ष्ण शरले * ताकेर श्री अर्जुन ॥८३
घाऊ पारि दियो पितामहजिको * सर्वाङ्गमा बाणले ।
छाडे मन्त्रित बाण पार्थतिर नै * ताकेर श्री भीष्मले ॥
आए भीम र सात्यकी अघि सरी * रक्षार्थ श्री पार्थको ।
पाऱ्यो घायल ती दुवैकन त्यहीं * नौ बाणले भीष्मको ॥८४
रोकी वीर प्रधानलाइ त्यसरी * श्री पाण्डुका पुत्रको ।
एक्लै पारिदिए विनाश सहजै * संग्राममा सैन्यको ॥
त्यो देखेर भए धनञ्जय त्यहाँ * आगो सरी क्रोधले ।
ताँदो काटिदिए तुरुन्त धनुको * आफ्ना तिखा बाणले॥८५
अर्को श्रेष्ठ धनू लिए करमहाँ * तत्काल श्री भीष्मले ।
काटे त्यो पनी पार्थले चपलता * दर्शाउँदै वेगले ॥

देखी अद्भुत कार्य त्यो समरमा * जो वीर योद्धा थिए ।
स्यावासी सबले, पितामहजिले * तिन्लाई धेरै दिए ॥८६॥
ताकी कृष्ण तथा धनञ्जय दुवै * विख्यात योद्धा तिर ।
एकै पल्ट गरे प्रहार रिसले * तीखा अनेकौं शर ॥
धारो लाग्न गई निकै रगतको * घाऊ गराई दिए ।
लागी बाणहरू शरीर भरिमा * श्री पार्थ मूर्च्छित् भए ॥८७
सोही औसरमा पितामहजिले * श्री कृष्णलाई पनि ।
पारे घायल बाणले तन भरी * कालाग्नि जस्तै बनी ॥
ढाकेथे शर-जालले सहजमै * सम्पूर्ण युद्धस्थल ।
मारी सैनिक पाण्डुका तनयको * पारे ठुलो खल्बल ॥८८
गर्नू भो हरिले विचार मनमा * देखेर त्यस्तो स्थिति ।
आँटे भीष्मजिले भने पृथिविमा * प्राणीहरू छन् जति ॥
सक्छन मार्न सबै स्वयं समरमा * एक्लै लड़ाई गरी ।
बाँच्ने वीर म कोहि देख्दिनँ यहाँ * यिन्का अगाड़ी परी ॥८९



श्रीकृष्ण भीष्मलाई मार्न तत्पर हुनुभएको

सेना पाण्डव तर्फका श्रम बिना * मारी दिनेछन् सब ।
आफैं तत्पर भै पितामहजिको * संहार गर्छु अब ॥

मैले छाडि दिएँ भनें समरमा * यी पाँच भाई कन ।
नाती हुन् भनि क्यै विचार नगरी * मार्छन् बिना कारण ॥९०॥
यस्तो सोच गरेर संझनु भयो * श्री कृष्णले चित्तमा ।
राजन् ! चक्र ठुलो सुदर्शन स्वयं * आई पुग्यो हातमा
हाम्फाली रथबाट झट्ट हरिले * प्रस्थान गर्नू भयो ।
त्यो वेला तनको छटा प्रभुजिको * श्रीसूर्य झैं देखियो ॥९१॥
लत्रेको तल उत्तरीय, कटिमा * त्यो दिव्य पीताम्बर ।
नीलो मेघ समान वर्ण तनको * शोभा थियो सुन्दर ॥
आएका हरिलाइ त्यो किसिमले * देखे जसै भीष्मले ।
जोरी हात दुवै विनम्र स्वरमा * विन्ती गरे प्रेमले ॥९२॥
गर्छु स्वागत हे प्रभो ! हजुरका * साष्टाङ्ग पाऊ परी ।
पाए मर्न हजूर बाट रणमा * हुन्थ्यो भलो हे हरि !
स्वामी अन्धक वंश वृष्णिकुलका * गोपाल का रक्षक ।
आई मार्नु हवस् मलाइ खुशिले * हे दुष्ट संहारक ! ॥९३॥
सप्रन्छन् दुइ लोक यो किसिमले * मेरा स्वयं हे प्रभो !
कीर्ति गौरव बढ्छ लोक भरिमा * झन् राम्ररी हे प्रभो !
मूर्छा खुल्न गई त्यसै बखतमा * चैतन्य भै अर्जुन ।
दौड़े श्रीहरिलाई पक्रि रथमा * तत्काल फर्काउन ॥९४॥
लामा बाहु समाइ झट्ट हरिको * रोके जसै पार्थले ।
धक्याई तिनिलाइ क्यै अघि बढ़े * श्रीकृष्णजी रोषले ॥
हाले छाँद अघी बढ़ेर हरिको * तिन्ले दुवै पाउमा ।
तिन्लाई हरिले हटाउनु भयो * पक्री दुवै बाहुमा ॥९५
लागे अर्जुन भन्न-बिर्सि अघिको * आफ्नू प्रतिज्ञा कन ।
पाल्नूभो रथबाट यो किसिमले * गोविन्द ! व्यर्थै किन ?

हामी माथि कृपा छ जो हजुरको * मानी त्यसैको भर ।
मानैंछु सब शत्रुलाई रणमा * एक्लै नमानी डर ॥९६॥
आज्ञा पालन गर्दछु हजुरको * प्रत्येक हे केशव !
रोकी बक्सनुहोस् प्रभो ! हजुरले * यो क्रोध आफ्नू अब ॥
फिर्नू भो रथमा प्रसन्न मनले * तिन्को प्रतिज्ञा सुनी ।
थाले गर्न रिसाइ पार्थ धनुको * टंकार, शङ्खध्वनी ॥९७
बर्षाए शर बेसरी समरमा * पानी परे झैं जब ।
थाले गिर्न मरेर सैन्य कुरुका * साना र ठूला सब ॥
चारै तर्फ घुमाइ खूब रिसले * इन्द्रास्त्र मन्त्री कन ।
छाड़ी कौरवतर्फ पार्थ रणमा * थाल्दा भए गर्जन ॥९८
बल्दो अग्निशिखा समान सहमा * ढाकेर युद्धस्थल ।
पाऱ्यो वीर अनेक मारि रणमा * इन्द्रास्त्रले खल्बल ॥
त्यस्ले कौरव सैन्यको गरिदियो * संहार संग्राममा ।
हाहाकार गरी बचे जति गए * भागेर विश्राममा ॥९९॥
द्रौणी, द्रोण र शल्य, भीष्म, कृपजी * भूरीश्रवा भूपती ।
देखी अर्जुनको पराक्रम सबै * गर्थे प्रशंसा अति ॥
सारालाइ जिती बनेर विजयी * श्री पार्थ, दामोदर ।
सायंकाल हुँदा फिरे शिविरमा * विश्रामका खातिर ॥६००

चौथो दिनको युद्ध—भीष्मार्जुन युद्ध र अभिमन्यु, घटोत्कच आदिको पराक्रम :—

जस्को आकृति व्याल झैं नरपते ! * संग्राममा देखिने ।
पारे व्यूह तयार वीर कुरुले * चौतर्फ रक्षा हुने ॥
जस्तो व्यूह थियो ति पाण्डु-सुतको * तैयार पैले दिन ।
त्यस्तै व्यूह गरे तयार नृपते ! * रक्षार्थ चौथो दिन ॥१॥

रक्षा गर्न भनेर भीम मुखमा * त्यस्को बसेका थिए।
बाँकीका सब वीरले वरिपरी * ढाकेर घेरा दिए॥
सेना नायक भीष्म व्यूह मुखमा * आफैं डटेका थिए।
बाँकी वीर लिएर शस्त्र करमा * चौतर्फ घेरा दिए॥२॥
पैह्ले पैदल वीरका संग लड़े * तरवारले पैदल।
राजन्! श्रेष्ठ रथी-रथी संग लड़े * देखाइ आफ्नू बल॥
हात्ती अश्व सवार वीरहरुले * जोड़ी मिलाईकन।
लड्दा मर्न गए कती कती, भनी * माछ्र पखी दुर्जन!॥३
सेनानायक भीष्मले समरमा * वर्षा गरी बाणको।
मारे अश्वपती, रथी, गजपती * शेखी हरी वीरको॥
राम्रो प्वाँख जड़ीत औ सलह झें * छाड़ी अनेकौं शर।
ढाके देह सबै हरी विजयको * तत्काल चारैतिर॥४॥
काटे त्यो शर-जाललाइ सहजै * संग्राममा पार्थले।
पारे घायल भीष्मलाइ रणमा * आफ्ना तीख बाणले॥
लागे लड्न दुवै परस्पर त्यहाँ * शस्त्रास्त्र द्वारा जब।
तिन्को अद्भुत शस्त्र त्याग रणको * चातुर्य औ लाघव॥५॥
हेर्थें छक्क परेर मानिसहरू * तस्वीर जस्तै कति।
लागी चोट वरी-परी कति ढले * मुर्दा बनी भूपति।
द्रोणी, शल्य र चित्रसेन, शलका * छोरा र भूरिश्रवा॥
पाँचोटा बलवान वीर नृपते! * ज्ञाता थिए युद्धका॥६॥
पाँचैले अभिमन्युलाइ सहसा * आएर घेरा दिए।
आफ्नाफ्ना हथियारले रथ तथा * तिन्लाइ ढाकी लिए॥
एक्लै श्री अभिमन्युले सकलको * शस्त्रास्त्र काटीकन।
पारे घायल पाँच-पाँच शरले * ती पाँच योद्धाकन॥७॥

तिनूको शौर्य तथा पराक्रम दुवै * देखेर ईर्ष्या गरी।
सेना कौरवका पुगीकन अरू * घेरा दिए वेसरी॥



भीष्म र अर्जुनको संग्राम

एकैपल्ट गरे प्रहार सबले * शस्त्रास्त्र आफ्ना तर।
काटे बालक वीरले सहज ती * छाडी अनेकौं शर॥८॥
देखे श्री अभिमन्युले समरमा * एक्लै लड़ेको जब।
आए पार्थ कराउँदै–'कुमति हो!' * मर्छौं तुरुन्तै सब॥
ती पाँचै जनलाइ छाड़ि पहिले * पच्चीस तीखा शर।
मारी अश्व र सारथी गरिदिए * घाऊ शरीरैभर॥९॥
श्री दुर्योधनले ति पाँच जनको * देखी ठुलो दुर्गति।
आइ झट्ट लिएर रक्षकहरू * आफ्ना भएका जति॥
त्यो देखीकन पाण्डु-पुत्रहरूका * जो मुख्य योद्धा थिए।
आफाफ्ना लिए वीर सैनिक सबै * दौड़ेर पुग्दा भए॥१०॥
धृष्टद्युम्न रिसाइ झट्ट पहिले * हानेर नौ बाणले।
पारे घायल मुख्य वीर कृपजी * -लाई ठुलो वेगले॥
छोरा कौरवका थिए दमन जो * तम्सी रहेका त्यहाँ।
तिन्लाइ टुकुरा गरी गिंडिदिए * संग्राम भूमीमहाँ॥११॥

आएथे शल-पुत्र लीकन गदा * मानें इरादा धरी ।
तिनको भाँचि गदा सरोप शरले * हान्दा, गए ती मरी ॥
छोरो मारि दिए भनेर शलले * क्रोधित भई बेसरी ।
धृष्टद्युम्नजिलाइ घायल गरे * नौ बाणले त्यै घरी॥१२॥
राजा शल्य पनी छिटो अघिसरी * ताकेर छाती तिर ।
सेनाका पतिलाइ मार्दछु भनी * हाने हजारौं शर ॥
काटी ती दुइ वीरका शर जती * अत्यन्त हेलाँ गरी ।
पारे घायल सात-सात शरले * पीडा दिई बेसरी ॥१३॥
आफ्ना ती दुइ वीरको गति तथा * देखेर युद्ध-स्थिति ।
भाई साथ लिई सुयोधन पुगे * रक्षार्थ हे भूपति !
श्री दुर्योधनलाइ त्यो किसिमले * देखे पुगेको जब ।
आए भीम गदा र सैनिक लिई * आफ्ना भएका सब ॥१४
योद्धा श्री सहदेव औ नकुलजी * भाई दुवैले पनि ।
वर्षाए शर शल्यले समर यो * छोडेर भागुन् भनी ॥
माद्रीका सुतलाइ उत्तर दिए * ती शल्यले बाणले ।
भागेनन् तर ती कुनै किसिमले * लड्दै रहे वेगले ॥१५॥
श्री दुर्योधनलाइ त्यै बखतमा * देखेर श्री भीमले ।
गर्छु अन्त्य म युद्धको भनि गदा * आफ्नू लिए रोषले ॥
झम्टेथे जब मार्नलाइ बिचमै * रोकी दिए भीष्मले ।
त्यो देखेर समस्त सैनिकहरू * भागे ठुलो वेगले ॥१६॥
श्री दुर्योधनले ठुला गजपती * सेना हजारौं लिई ।
रोके भीम र पार्थका तनयको * त्यो वेग सामु भई ॥
कुल्चाई गजले म मार्दछु भनी * इच्छा गरी मन् महाँ ।
हात्ती माथि चढी स्वयं मगधका * भूपाल आए त्यहाँ ॥१७

आयो मत्त-गजेन्द्र पार्थ सुतको * बढ्दै अगाडी जब ।
यौटा बाण गरी प्रहार सहजै * मारी दिए त्यो गज ॥
अर्को सायक अर्धचन्द्र सरिको * छाड़ी दिए छिन्नमहाँ ।
त्यस्ले श्री मगधेन्द्रको शिर दुई * टुक्रा गरायो त्यहाँ ॥१८
आए लौहमयी गदा लिइ ठुलो * श्री भीम सोही घरी ।
लागे मार्न धुमी सहस्र गजको * त्यो फौज टुक्रा गरी ।
फोरी मस्तक छिन्न-भिन्न कतिको * पारे बजारी गदा ।
देखिन्थे गिरि झैं कती गज मरी * संग्राममा तेसिंदा ॥१९॥
सेता दाँत दुबै र सूँढ कतिका * खुट्टा सबै काटिंदा ।
भाग्थे वीर कती डराइ गजको * त्यो दुर्गती देखिंदा ॥
गर्छन् रक्षण इन्द्रको सुरहरू * जुन् चालले स्वर्गमा ।
त्यस्तै रक्षण भीमको सकलले * गर्दा भए युद्धमा ॥२०॥
श्री दुर्योधनले त्यसै बखतमा * छोड़े अनेकौं शर ।
लागी त्यो शर भीम मूर्छित भए * क्यै बेरका खातिर ॥
रक्षा सात्यकिले पुगीकन गरे * तत्काल श्री भीमको ।
लाग्यो सात्यकिलाइ बाण पथमै * भूरिश्रवा वीरको ॥२१॥
फर्की झट्ट गरे प्रहार रिसले * श्री सात्यकीले शर ।
भागे प्राण बचाइ हे नरपते ! * भूरिश्रवाजी घर ॥
ठूलो शब्द भई रणस्थल महाँ * मूर्च्छा खुल्यो भीमको ।
थाले गर्जन फेरि घोर रवले * इच्छा गरी युद्धको ॥२२
भाई चौध लिई सुयोधन बढ़े * ती भीम योद्धातिर ।
वर्षाए सबले 'क्षुरप्र' कहिने * तीखा अनेकौं शर ॥
घाऊ अङ्ग भरी भई रगतको * धारा बगेथ्यो जब ।
साक्षात् श्रीयमराज झैं हुन गए * श्री भीम योद्धा तब ॥२३॥

श्री दुर्योधनलाइ रोकि पहिले * पारी दिए घायल ।
तिनका भाईसरू सबै कन भने * पर्खी म आएँ खल !
हानी मुद्गरले, गदा र शरले * ती चौध भाई कन ।
पौंचाए यमराजका नगरमा * मारेर सोही क्षण ॥२४॥
आए भीष्म कराउँदै समरको * देखेर त्यस्तो स्थिति ।
पानू पर्छ मिलेर वीरहरु हो ! * यो भीमको दुर्गति ॥
सुन्दा भीष्मजिको पुकार रणमा * दौड़ेर आए सब ।
आए पाण्डव तर्फका पनि सबै * विख्यात योद्धा तब ॥२५॥
राजा ती भगदत्त मत्त गजमा * आई ठुलो वेगले ।
ढाके भीम र सारथी रथ पनी * शास्त्रास्त्र नौ बाणले ॥
रोके ती अभिमन्यु सात्यकि पुगी * ती भूपलाई तर ।
हाहा पारिदियो सवेग गजले * त्यो युद्धभूमी भर ॥२६॥
हाने ती भगदत्तले शरहरू * श्री भीमलाई अनि ।
त्यसले चेत हराइ च्याप्प रथमा * ढल्की बसेथे तिनी ॥
देखेथे भगदत्तले जब त्यहाँ * श्री भीमको त्यो स्थिति ।
थाले गर्जन सिंह झैं समरमा * उफ्र र हे भूपति ! ॥२७
मायावी बलियो घटोत्कच सबै * हेरी रहेको थियो ।
मायाके गजमा चढेर रणमा * रक्षार्थ आई पुग्यो ॥
त्यस्तै मत्त गजेन्द्र तीन बलिया * त्यस्का पछाड़ीं थिए ।
राजन ! ती गजलाइ कोरवहरू * देखेर नै आत्तिए ॥२८॥
आफ्नू औ भगदत्तको गज दुवै * त्यस्ले लडाई दियो ।
हेर्नें लायक युद्ध मत्त गजको * क्यै बेर चल्दो भयो ॥
राजाको गजलाइ घायल अघी * पारी सकेके थिए ।
त्यै माथी गज चारले वरिपरी * घेरेर पीड़ा दिए ॥२९॥

केही बेर लड्यो तथापि नसकी * चिच्याउँदै बेसरी ।
भाग्यो जङ्गल तर्फ हे नरपते ! * त्यो प्राण-रक्षा गरी ॥
चारोटा गजराजले दलिमली * पारेर सेना भरी ।
धेरै सैन्य मरे; कती त डरले * भागे ति हाहापरी ॥३०

आफ्ना सैनिको विनाश त्यसरी * देखेर दुर्योधन ।
रक्षा खातिरमा फिरे शिविरमा * बाँकी छँदै क्यै दिन ॥
सेना पाण्डव तर्फका जति थिए * गर्जेर चारैतिर ।
फर्के हर्ष मनाउँदै शिविरमा * विश्रामका खातिर ॥३१

पाँचौं दिनको युद्ध—कौरव-पाण्डवको मकर-श्येन व्यूह निर्माण, परस्पर घोर संग्राम :—

सोधे श्री धृतराष्ट्रले मनमहाँ * अत्यन्त चिन्ता परी ।
जस्का भीष्म र द्रोण, शल्य, कृपभैं * छन्, वीर द्रौणी सरी ॥
हार्छन् वीर तिनै भनीकन सँधैं * गर्छौ तिमी वर्णन ।
सुन्दा यो समाचार घोर भयले * आत्तिन्छ मेरो मन ॥३२

मेरा पुत्रहरू सहर्ष विजयी * हुन्छन् भनी के गरी ।
निद्रा, भोक मलाइ छैन कहिल्यै * चिन्ता त्यसैको परी ॥
छैनन् पाण्डवतर्फ हामितिर झैं * विख्यात योद्धा तर ।
तिन्कै जीत सदैव सुन्दछु, कि बा * पाए कसैको वर ॥३३॥

पाँचै भाइ अवध्य छन् समरमा * कुन् ज्ञान पाई कन ।
टल्कन्छन् नभमा विनाश नहुने * नक्षत्र जस्तै किन ?
शिक्षा जो पहिले दिए विदुरले * होला पछी यो भनी ।
देख्दैछु अहिले हुँदैछ सब त्यै * प्रत्यक्ष मैले पनि ॥३४॥

सक्तैनन् जसरी मनुष्य जलधी * पौरेर पारी हुन ।
त्यतै नाघ्न समुद्र कष्टहरुको * आँटे पनि सक्किन ॥

मेरा ती सय पुत्र माथि बलियो * आयो विपत्ति अब ।
मार्छन् तिन्कन भीमले समरमा * बाँकी नराखी सब ॥२५
मैले मात्र अनेक दण्ड यसरी * भोग्नू परेको किन ?
हो वा दैवगती कि कारण कुनै * आर्को छ यस्मा भन ॥
भीष्म, द्रोण, विकर्ण,शल्य, शकुनी * द्रौणी र दुर्योधन ।
भागेका सब सैन्य आफुतिरका * प्रत्यक्ष देखीकन ॥३६॥
गर्दैछन् अब के प्रयत्न, विजयी * आफू हुने युद्धमा ।
त्यसको हाल बताउ सञ्जय ! छिटो * आनन्दका साथमा ॥
यो आज्ञा धृतराष्ट्रको सुनिसकी * क्यै बेर सोची कन ।
बोल्ले—भन्दछु सुन्नुहोस् नरपते ! * त्यो जीतको कारण ॥३७
जस्ले पालन धर्म कर्महरूको * गर्नेछ श्रद्धासित ।
त्यस्को जीत हुनेछ, ईश्वर पनी * गर्छन् त्यसैको हित ॥
योद्धा पाण्डव सत्यमा दृढ रही * निर्वाह गर्ने हुँदा ।
तिन्को मद्दत गर्दछन् समरमा * श्रीकृष्णले सर्वदा ॥३८॥
श्री दुर्योधनलाइ जो हजुर झैं * चिन्ता कुशंका भई ।
सोधे सादर श्री पितामह कहाँ * त्यै युद्धमा नै गई ॥
जस्तो उत्तर भीष्मले दिनुभयो * तिन्लाइ हे भूपति !
त्यको सार कुरा म भन्दछु सबै * जाने, बुझेको जति ॥३९
हे राजन् ! नररूप अर्जुन तथा * हुन् कृष्ण नारायण ।
उत्पत्ति स्थिति नाशका पनि यिनै * प्रत्यक्ष हुन् कारण ॥
मारी दानव, यक्ष, राक्षस तथा * पापी दुरात्मा जति ।
लिन्छन् यी अवतार धर्म-पथको * रक्षार्थ हे भूपति ! ॥४०॥
तीनै काल, त्रिलोक, तीन गुणका * स्वामी यिनै हुन् भनी ।
गर्छन् आदरले सदा स्तुति स्वयं * ब्रह्मा र धाता पनि ॥

शक्तैनन् जब शेषले गुणहरू * तिनूको गरी वर्णन ।
सक्ला को अरुले बताउ तिमी नै * हे वीर दुर्योधन ! ॥४१॥
सोधे फेरि त्यहाँ सुयोधनजिले * शंका निकाली कन ।
हुन् ती श्रेष्ठ भने म सुन्छु दुइको * उत्पत्तिको कारण ॥
तिनूको चित्त बुझाउनाकन त्यहाँ * आज्ञा भयो भीष्मले ।
तिनूको जान्न सकिन्छ केहि महिमा* सत्संग वा ज्ञानले ॥४२
गर्नू तर्क वृथा छ यो विषयमा * श्री कृष्ण नै ब्रह्म हुन् ।
यो ब्रह्माण्ड भरी जहाँ छ जति जे * तीदेखि भिन्नै छ कुन् !
ज्ञानी-भक्त र कर्मनिष्ठ तपसी * जो भक्त छन् सज्जन ।
रक्षा ती सबको र पाण्डु-सुतको * गर्छन् त्यसै कारण ॥४४॥
तिनको जीत हुनेछ यो समरमा * हार्छौं तिमी निश्चय ।
गर्छौं मेल भने अझै गर छिटो * त्यागी कुशंका भय ॥
शिक्षा भीष्मजिको सुनेर मुखले * केही नबोली कन ।
चिन्ताग्रस्त भई फिरे शिविरमा * भूपाल दुर्योधन ॥४४॥
प्रातःकाल भए पछी मकरको * आकारको सुन्दर ।
पारे व्यूह तयार वीर कुरुले * संग्रामका खातिर ॥
पारे व्यूह तयार श्येन सरिको * श्री पाण्डुका पुत्रले ।
आए लड्न भनी दुवै तरफका * प्रेरित् भई कालले ॥४५
पैह्ले पैदलका लड़े सँग महाँ * जो जो थिए पैदल ।
आफ्नू जोड़ि मिलाउँदै सब भिड़े * थर्काइ युद्धस्थल
नीतीपूर्वकले चल्यो समर त्यो * क्यै वैरका खातिर ।
लागे गिर्न मरेर सैनिकहरू * संग्राम भूमी भर ॥४६॥
योद्धा भीष्म र भीमसेन रणको * चातुर्यका साथमा ।
गर्थे शस्त्र प्रहार योग्य रितले * लाग्ने गरीं गाथमा ॥

द्रोणाचार्य पुगेर सात्यकिजिको * सामू अड्याई रथ ।
वर्षाए हतियार मार्दछु भनो * रोकेर तिन्को पथ ॥४७
रक्षा गर्न भनेर सात्यकिजिको * श्री भीमले बेसरी ।
वर्षाए हतियार द्रोण-गुरुको * सर्वाङ्गमा त्यो घरी ॥
राजा शल्य र द्रोण, भीष्म सबले * छोड़ेर तीखा शर ।
गर्जे, ढाकि दिएर भीमकन ती * ठूलो निकालो स्वर॥४८
तीनोटा बलवानको जब सुने * गर्जी रहेको ध्वनी ।
आए श्री अभिमन्युका संग त्यहाँ * योद्धा शिखण्डी पनि ॥
वर्षाए हतियार वीर दुइले * ती तीन योद्धा कन ।
ढाके झैं रविलाइ बाणहरूले *लाग्याँ सफा देखिन॥४९॥
सामू देखि शिखण्डिलाइ रणमा * स्त्री जाति यो हो भनी ।
राखी शस्त्रहरू पितामहजिले * थामे लड़ाइँ पनि ॥
द्रोणाचार्य पुगे तुरुन्त दगुरी * रक्षार्थ श्री भीष्मको ।
त्यागी बाणहरू शरीर भरिमा * आगो सरी द्रोणको ॥५०
भागे प्राण बचाइ त्यै बखतमा * योद्धा शिखण्डी जब ।
योद्धा भीष्मकहाँ सुयोधन पुगे * सेना बटुल्दै सब ॥
पौंचे पार्थ, जहाँ ससैनिक थिए * ती भीष्म दुर्योधन ।
ढाकेथे शरले तुरुन्त ति दुबै * विख्यात योद्धाकन ॥५१
हे राजेन्द्र ! हजुरका सुतहरू * -लाई बचाऊँ भनी ।
वर्षाए हतियार क्रोधित भई * ती भीष्मजीले पनि ॥
जस्तो दानवको भयो रण अघि * श्री इन्द्रका साथमा ।
त्यस्तै भीष्म र पार्थको पनि भयो * संग्राम त्यो स्थानमा ॥५२
जो संग्राम भयो भयंकर त्यहाँ * आरम्भ हे भूपति !
त्यस्मा वीरहरू मरे कति रथी * घोड़ा चढ़ेका कति ॥

सेनाका शिर-पाउले र तनले * भूमी सबै ढाकियो ।
हात्तीको हयको कठोर स्वरले * सातो सबैको लियो ५३॥
देखे युद्ध विभीषिका अति ठुलो * योद्धाहरूले तर ।
होमे प्राण बरू सहर्ष यशको * रक्षार्थ त्यागी डर ॥
गर्जी वीरहरू परस्पर लड़े * साँढे लड़े झैं गरी ।
काटेका शिर औ कबन्ध रणमा * देखापरे त्यो घरी ॥५४॥
योद्धा भीम जहाँ थिए त्यहीं पुगे * तम्सेर दुर्योधन ।
घाऊ पारि दिए शरीर भरिमा * नौ बाण हानी कन ॥
त्यो देखीकन भीम क्रोधित भई * हाने गदाले जब ।
भागे प्राण लिई सुयोधन त्यहीं * शस्त्रास्त्र छाडी सब ॥५५॥
योद्धा भीष्म तथा विराट नृपको * संग्राम चल्थ्यो उता ।
द्रौणी पार्थ दुबै प्रहार रिसले * गर्दै थिए झन् यता ॥
योद्धा ती अभिमन्यु, लक्ष्मण दुवै * देखाउँथे वीरता ।
श्री दुर्योधन भीमसेन दुइको * भिन्नै थियो धीरता ॥५६॥
गर्थे आपसमा प्रहार रिसले * यी चार जोड़ी जब ।
हुन्थ्यो शब्द कठोर श्रेष्ठ धनुको * आश्चर्य मान्थे सब ॥
भिन्नै सात्यकि लड्दथे नरपते ! * भूरिश्रवाजी सित ।
पारे सात्यकिलाई बाण दसले * ती भूपले मूर्छित ॥५७॥
हे राजन् ! दस पुत्र सात्यकिजिका * निक्कै प्रतापी थिए ।
मूर्छा पारिदिए पिताकन भनी * संग्राममा तम्सिए ॥
काटे छत्र, धनू , ध्वजा, रथ सबै * भूरिश्रवाको जब ।
मारे ती दसलाइ बाण दशले * ती भूपतीले तब ॥५८॥
मूर्छाबाट उठेर सात्यकिजिले * देखे मरेका सुत ।
लागे लड्न डटेर फेरि रिसले * भूरिश्रवाजी सित ॥

केही बेर लड़े परस्पर दुवै * योद्धाहरू बेसरी ।
काटी छत्र, धनू गराइ विरथी * गर्जे दुवै त्यो घरी ॥५९॥
राखे भूपतिलाइ झट्ट रथमा * पोंचेर श्री द्रोणले ।
राखे सात्यकिलाइ आफ्नु रथमा * तत्काल श्री भीमले ॥
अर्को स्थानमहाँ लगे ति दुइले * ती वीरलाई जब ।
जम्मा पाण्डु कुमारका हुन गए * योद्धा र सेना सब ॥६०॥
वर्षाए शर ती पितामहजिको * लाग्ने गरी अङ्गमा ।
पारी घायल भीष्मलाइ खुशिले * गर्जें सबै युद्धमा ॥
क्रोधित् भैकन भीष्मले सब मिली * घाऊ गराए भनी ।
एक्लैले सबलाइ घायल गरे * कालाग्नि जस्तै बनी ॥६१
कोही भागि गए, कति डटि रहे * इच्छा गरी युद्धको ।
इच्छा पूर्ण गरे पितामहजिले * संग्राममा वीरको ॥
लागे सैनिक भाग्न टिक्न नसकी * रक्षा गरी प्राणको ।
साह्रै अद्भुत युद्ध देखिन गयो * ती भीष्म औ पार्थको ६२
सेना नाश भए दुवै तरफका * त्यो युद्धमा बेसरी ।
फर्कै सैन्यहरू सबै शिविरमा * थाकेर सोही घरी ॥
थाके पाण्डु-कुमारका पनि सबै * योद्धा र सेना तर ।
राखी धैर्य ठुलो फिरे शिविरमा * विश्रामका खातिर ॥६३

छैठौं दिनको युद्ध—धृतराष्ट्रको चिन्ता, धृष्टद्युम्न र द्रोणाचार्यको पराक्रम :—

सोधे ती धृतराष्ट्रले मनमहाँ * लागेर चिन्ता, भय ।
हाम्रो जीत हुने उपाय भन लौ * थाहा भए सञ्जय !
विद्या, बुद्धि, विवेक, सद्गुण तथा * चातुर्य औ शूरता ।
ज्ञाता छन् रण नीतिका, छ सबमा * गम्भीरता, धीरता ॥६४॥

छैनन् सैनिकमा कुनै पनि बुढ़ा * रोगी तथा बालक ।
रक्षा गर्न तयार छन् हर घड़ी * ती शत्रु संहारक ॥
योग्यायोग्य गरी विचार सबको * भर्ना गरेको हुँदा ।
बेलामा सबलाइ द्रव्य खुसिले * दिन्छन् सदासर्वदा ॥६५
शक्ती, तोमर, भिन्दिपाल र गदा * शस्त्रास्त्र छन् जो अरू ।
सक्छन् गर्न प्रयोग योग्य रितले * सम्पूर्ण सेनाहरू ॥
मुष्टी, खड्ग र मल्लयुद्ध अथवा * ज्ञाता गदा युद्धका ।
हाम्रा सैनिक छन् सबै तरहले * ज्ञाता धनुर्वेदका ॥६६॥
यस्ता वीरहरू लिएर सँगमा * संग्राम गर्दा पनि ।
हाम्रो जीत हुँदैन, सुन्छु दिनहूँ * हारी रहेछन् भनी ॥
गर्दैछन् फल भोग पूर्व जुनिको * राम्रो नराम्रो सब ।
दैवाधीन छ यो भनेर करले * सन्तोष मान्छू अब ॥६७
यस्मा कारण क्यै भए पनि अरू * चाँडो बुझाई मन ।
सुन्दा बान्धवको विनाश रणमा * आत्तिन्छ मेरो मन ॥
यो आज्ञा धृतराष्ट्रको सुनिसकी * भन्दा भए सञ्जय ।
जस्ले गर्छ अनीति मात्र दिनहूँ * हार्नेछ त्यो निश्चय ॥६८
जस्तो पाण्डव वीरका सँग अघी * गर्नू भएथ्यो छल ।
मर्नू बान्धव औ सुपुत्र रणमा * हो यो त्यसैको फल ॥
चिन्ता गर्नु वृथा छ दैवगति हो * भन्ने बुझी भूपति !
सुन्नोस् वर्णन युद्धको अब अरू * भन्छू म देखे जति ॥६९
प्रातःकाल हुँदा दुवै तरफका * सेना भई तत्पर ।
पारे व्यूह तयार वीर कुरुले * संग्रामका खातिर ।
क्रौंच व्यूह रचेर पाण्डु - सुतले * आफ्नू तयारी गरे ।
राजन् ! लड्न भनी दुवै तरफका * सेना अगाड़ी सरे ॥७०॥

नीतिपूर्वकको लड़ाइँ पहिले * क्यै बेर चल्दो भयो ।
काटा-काट हुँदा परस्पर ठुलो * त्यो व्यूह टुट्तै गयो ॥
हाने भीम रिसाइ बाण दशले * श्री द्रोणको देहमा ।
घाऊ परिदिए र गर्जन गरे * उत्साहका साथमा ॥७१
द्रोणाचार्य रिसाई मन्त्रित तिखा * नौ बाण हानी कन ।
पारी घायल भीमलाइ रणमा * गर्दा भए गर्जन ।
मारे मारथि भीमले पनि सबै * घोडाहरू द्रोणको ॥
बाँधे बाग समाइ पाउ दुइमा * आचार्यले अश्वको ॥७२
पारी घायल भीमलाइ पहिले * सेना थिए जो त्यहाँ ।
सारालाइ अनेक बाणहरूले * टुक्रा गरे छिन्नमहाँ ॥
गर्थे पार्थ रिसाइ त्यै किसिमले * संहार अर्को तिर ।
भाग्थे सैन्य हजूरका डर भई * हे भूप ! चारैतिर ॥७३॥
ती दुर्योधनका थिए नजिकमा * भाई प्रतातो जति ।
देखी ती सबलाइ क्रोधित भए * श्री भीम योद्धा अति ॥
घेरे सैन्य थिए तथापि नडरी * एक्लै पुगी माझमा ।
थाले मार्न घुमी-घुमी वरिपरी * उत्साहका साथमा ॥७४॥
वर्ही त्यो रथबाट लीकन गदा * गर्जी ठुलो वेगले ।
थाले गर्न समस्त सैन्यहरूको * संहार ती क्रोधले ॥
ती दुर्योधन आत्तिए समरको * देखी नराम्रो स्थिति ।
पर्क्नौं यस्कन जीवितै भनि गरे * सल्लाह हे भूपति ! ॥७५
एक्लै भीम हुँदा गएर सबले * चौतर्फ घेरी लिए ।
वर्षाई कन शस्त्र-अस्त्र तनमा * घाऊ गराई दिए ॥
लाग्यो चोट निकै तथापि तिनिले * किञ्चित् नमानी कन ।
एक्लै नै सबलाइ घायल गरी * थाल्दा भए गर्जन ॥७६॥

धृष्टद्युम्नजिले सुने स्वर ठुलो * ती भीमको युद्धमा ।
छाडी द्रोणजिलाइ, वेगसित ती * पौंचे त्यही स्थानमा ॥
देखी सारथिलाइ मात्र रथमा * सोधे कहाँ छन् भनी ।
लाग्यो सारथि भन्न–छन् समरमा * एक्लै परेका तिनी ॥७७
रक्षा गर्न भनी पुगे द्रुपदका * छोरा नगीचैं जब ।
आयो साहस भीमको शरिरमा * कम्ती भएको सब ॥
थाले मार्न दुवै मिलेर रणमा * सेना रथी पैदल ।
गर्दैं गर्जन भन्दथे घरि-घरी * 'भाग्छस् कहाँ हे खल !'॥
तिन्को कौशल देखि आत्तिन गए * भूपाल दुर्योधन ।
डाकी भाइहरू भने गर छिटो * शस्त्रास्त्रको वर्षण ॥
दाजूको सुनि यो हुकुम् हजुरका * छोरा र सेना पनि ।
थाले गर्न प्रहार बाण रिसले * तिन्लाइ मारौं भनी ॥७९
धृष्टद्युम्न रिसाइ बाण सबको * काटेर बीचैं महाँ ।
छाडे मन्त्रित मोहनास्त्र अडिए * सारा जहाँका तहाँ ॥
हाम्रो जीत भयो भनीकन दुवै * योद्धाहरू गर्जिए ।
बाँकी सैन्य जती थिए हजुरका * चौतर्फ भागीगए ॥८०
तीनोटा शरले उता द्रुपदको * शेखी हरे द्रोणले ।
सम्झन्दै अघिको विवाद मनमा * भागे तिनी वेगले ॥
द्रोणाचार्यजिले सुनी हजुरका * छोराहरूको गति ।
फर्काए पुगि चेतना सकलको * प्रज्ञास्त्रले भूपति ॥८१॥
फेरी लड्न अघीसरे हजुरका * छोराहरू तम्सिई ।
लागे सोध्न उता युधिष्ठिरजिले * अत्यन्त चिन्तित् भई ॥
धृष्टद्युम्न र भीमलाइ म यहाँ * हे वीर हो ! देख्दिन ।
ल्याओ लौ समचार झट्ट सबले * तिन्लाइ खोजीकन ॥८२

त्यो आज्ञा अभिमन्युले जब सुने * सेना लिए बेसरी ।
तिन्मा बाह्रजना धनुर्धर थिए * हे भूपती ! त्यो घरी ॥
पाँचोटा बलवान द्रौपदिजिका * छोरा थिए साथमा ।
खोज्दै वीरहरू पुगे सब, थिए * श्रीभीम ज्युन् स्थानमा ॥
सेनामाथि हजुरका सकलले * शास्त्रास्त्र वर्षा गरे ।
धेरै सैन्य मरेर शेष डरले * भाग्दै पछाड़ी सरे ॥
त्यो देखीकन श्री सुयोधन गई * रोके सकेको जति ।
पारे मूर्छित भीमले समरमा * तिन्लाइ हे भूपति ! ॥८४
ती दुर्योधनलाइ राखि रथमा * झट्टै कृपाचार्यले ।
त्यागी त्यो रणभूमि क्यै पर लगी * राख्दा भए यत्नले ॥
धेरै सैन्य पुगेर वीर कुरुका * घेरेर चारैतिर ।
वर्षाए हतियार पाण्डु - सुतका * सम्पूर्ण सेना भर ॥८५॥
लड्थे वीर विकर्ण औ द्रुपदका * छोरा रिसाई कन ।
ती योद्धा सुतकर्म, दुर्मुख उता * थाल्दा भए गर्जन ॥
हे राजन् ! सुतकीर्तिको हजुरका * छोरा जयत्सेनको ।
काटाकाटा हुँदै शतानिक पुगे * इच्छा गरी युद्धको॥८६॥
तिन्का सामु पुगे रिसाइ सहसा * दुष्कर्ण योद्धा पनि ।
केही बेर लड़े सरोष सब ती * माछुँ कि मछुँ भनी ॥
पाँचोटा बलवान द्रौपदिजिका * छोरा भई क्रोधित ।
लागे लड्न रिसाउँदै हजुरका * ती पाच छोरासित ॥८७॥

श्री भीष्म क्रोधित भई कन सैन्यलाई ।
मारेर पाण्डु सुतका रणमा गिराई ॥
गर्जेर उच्च स्वरले जब शङ्ख फुक्थे ।
योद्धा पनि समरबाट डराइ भाग्थे ॥ ८८ ॥

श्री पार्थले समरमा कुरु सैन्यलाई ।
मारे रिसाइकन बाण तिखा चलाई ॥
हात्ती र अश्व, रथको टुकुरा गराई ।
मानीसका शिर दिए रणमा वछ्याई ॥८९॥

यौटा युद्ध हुँदै थियो नरपते ! * संहार गर्नै यता ।
चल्थ्यो ती अभिन्यु वीरहरुको * संग्राम भिन्नै उता ॥
थाल्ले गिर्न मरेर सैनिकहरू * शस्त्रास्त्रको चोटले ।
मर्थे सैन्य जती-जती, उति-उती * लड्थे ठुलो वेगले ॥९०

हात्ती गिर्न गए फुटेर रणमा * सम्पूर्ण गण्डस्थल ।
घोड़ाको शिर काटिई कति ढले * ढाकेर युद्धस्थल ॥
टुक्रा भैकन छत्र औ रथ ध्वजा * चौतर्फ गिर्दा त्यहाँ ।
खोलो बग्न गयो ठुलो रगतको * संग्राम भूमीमहाँ ॥९१

सन्ध्याकाल भयो र सैनिकहरू * थाकी सकेका थिए ।
रोकी युद्ध त्यहीं सबै शिविरमा * हे भूपती ! फर्किए ॥
स्याबासी दिनुभो युधिष्ठिरजिले * सेना र योद्धाकन ।
फर्के वीरहरु सबै शिविरमा * विश्राम गर्नाकन ॥९२॥

सातौं दिनको युद्धः—दुर्योधनले भीष्मलाई छेड़हान्नु र प्रधान योद्धाहरूको घोर संग्राम :—

सोधे रात्रिमहाँ सुयोधन गई * श्री भीष्म योद्धासित ।
गर्नू हुन्न हजुर युद्ध किन हो ? * मेरो चिताई हित ॥
धौता, दानव, यक्ष राक्षस सबै * आए पनि युद्धमा ।
सक्नू हुन्छ हजूर मान सहजे * उत्साहका साथमा ॥९३

जाबो पाण्डवलाइ मार्न यसरी * गाह्रो परेको किन ?
देख्छु युद्ध हजूरको म दिनहूँ * आत्तिन्छ साह्रै मन ।

आफ्ना नाति भनी दया हजुरले * गर्नू भयो क्यै भने ॥
बाटो देखिदन मर्नु बाहिक अरू * कल्याण हम्रो हुने ॥९४॥
श्री दुर्योधनको कुरा सुनि सकी * हाँसेर श्री भीष्मले ।
भन्नू भो सुन हे सुयोधन ! तिमी * मेरो कुरा ध्यानले ॥
योद्धा पाण्डव छन् अजेय रणमा * सद्धर्मका पालक ।
त्यस्माथी करुणा गरीकन स्वयं * गोविन्दछन् रक्षक ॥९५
सक्तैनन् तिनिलाइ जित्न रणमा * संसारका वीरले ।
एक्लैले पनि गर्दछन् समरमा * संहार श्री पार्थले ॥
गर्नेछु म प्रत्य तैपनि ठुलो * तिम्रो चिताई हित ।
लड्छु मोह त्यजेर प्राण तनको * ती पाँच भाईसित ॥९६
श्री दुर्योधनलाइ यै किसिमले * धेरै दिए सान्त्वना ।
आए हर्ष भएर ती शिविरमा * पुग्ला भनी कामना ॥
प्रातःकाल भयो र सैनिकहरू * सारा भई तत्पर ।
निस्के शस्त्र लिएर सज्जित हुँदै * संग्रामका खातिर ॥९७॥
ठूलो 'मण्डल व्यूह' वीर कुरुले * तैयार पारी लिएर ।
राजन् ! पाण्डव 'वज्र-व्यूह' बलियो* देखेर खूसी थिए ॥
भीष्म, द्रोण, विकर्ण शल्य शकुनी * द्रौणी तथा बाल्हिक ।
धेरै भूपहरू अरू पनि थिए * त्यो व्यूहका रक्षका ॥९८
त्यो देखेर उता युधिष्ठिरजिले * विख्यात योद्धा जति ।
राखे व्यूह बरी-परी जतनले * तत्काल हे भूपति !
निस्के वीरहरू दुबै तरफका * लड्ने इरादा गरी ।
द्रोणाचार्य, विराट सम्मुख भए * मार्छु भनी त्यो घरी ॥९९

श्री दुर्योधनको तथा द्रुपदको * संग्राम चल्दै थियो ।
द्रोणीको र शिखण्डिको रण उता * झन् बेसरी मच्चियो ॥
लड्थे श्री सहदेव औ नकुलजी * ती शल्य मामासित ।
योद्धा श्री अभिमन्युलाइ रणमा * रोक्थे अर्जुनको सुत॥७००
झम्टे ती अनुविन्द, विन्द दुइले * योद्धा इरावान् कन ।
राजन् ! सात्यकि औ अलम्बुष दुवै * लाग्दा भए गर्जन ॥
जोड़ी ती भगदत्तको समरमा * योद्धा घटोत्कच भयो ।
आए संमुख धृष्टकेतु नृपती * भूरिश्रवा भूपको ॥१
चल्दो भो रण श्री युधिष्ठिरजिको * राजा शतायूसित ।
लड्थे ती कृप, चेकितान रिसले * पारौं भनी मूर्छित ॥
बाँकीका सब सैन्यले समरमा * वर्षा गरी बाणको ।
चारैतर्फ घुमी-घुमी रथ ठूलो * ढाकी दिए पार्थको ॥२
त्यस्तै सैन्यहरू मिलीकन सबै * घेरा दिई राम्ररी ।
ढाकेथे रथ भीष्मको शरहरू * पानी परे झैं छरी ॥
ढाके कृष्ण र पार्थलाइ त्यसरी * सेनाहरूले जब ।
काटे त्यो शर-जाल श्री विजयले * छरलङ्ग पारी सब ॥३॥
धेरै बाण गरी प्रहार पहिले * इन्द्रास्त्र छाड़ी दिए ।
त्यस्ले सैन्यहरू मरी हजुरका * चौतर्फ गिर्दै गए ॥
लागे भाग्न डराइ सैनिकहरू * 'लौ मार्न आँटे' भनी ।
लागी घाउ अनेक टिक्न नसकी * भागे सुशर्मा पनी ॥४॥
ठूलो व्यूह भएर भङ्ग सहसा * गर्दा भए खलबल ।
श्री दुर्योधन वीरले समरको * देखेर त्यो हल्चल ॥
हे योद्धाहरु हो ! पितामहजिको * रक्षा सबैले गर ।
अर्पी जीवन लड्नलाइ अहिले * श्री भीष्म छन् तत्पर॥५

योो आज्ञा सुनि ती सुयोधनजिको * सेना र योद्धा गई ।
रक्षा गर्न डटे पितामहजिको * चौतर्फ घेरा दिई ॥
आए पार्थ र भीष्म सम्मुख भई * गर्दै ठुलो गर्जन ।
तिनको शब्द सुनेर काँतर जती * लाग्दा भए तर्सन ॥६
राजन् ! द्रोण तथा विराट नृपको * त्यो घोर संग्राममा ।
हानेथे दस बाणले नृपतिले * श्री द्रोणको देहमा ॥
त्यै माथी रथ, अश्व,सारथि, ध्वजा* काटी दिएथे जब ।
तीनोटा शरले विराट नृपको * शस्त्रास्त्र काटी सब ॥७
सातोटा शरले तुरुन्त विरथी * पारी दिए द्रोणले ।
छोराको रथमा गईकन बसे * ती भूपती वेगले ॥
लागे गर्न प्रहार बाणहरु ती * बाबू र छोरा भई ।
राजाका सुत शङ्खलाइ शरले * हानेर लाग्यो गई ॥८॥
तिनको मृत्यु भयो तुरुन्त रथमै * त्यो बाणको चोटले ।
छोरो मर्न गयो तथापि नृपती * भागे ठुलो वेगले ॥
धृष्टद्युम्नजिले सुयोधनजिको * ताकेर छाती महाँ ।
हानी वाण अनेक घायल छिटै * पारी दिएथे त्यहाँ ॥९॥
तिनको चोट खपी तिखा शरहरू * छानेर छाड़ी दिए ।
त्यस्ले घायल बेसरी द्रुपदका * छोरा त्यहीं भै गए ॥
धृष्टद्युम्न रिसाइ झट्ट विरथी * पारी दिएथे जब ।
त्यागी स्यन्दन खड्ग पक्रि दगुरे * भन्दै 'म मार्छु अब'॥१०
त्यै वेला शकुनी पुगेर रथमा * तिन्लाइ राखी लिए ।
आफ्नू हार बुझी सुयोधन निकै * ती भीम योद्धा कन ॥
पारे घायल अश्व-सारथि सबै * मारेर सोही क्षण ॥११॥

तिन्को चोट ठूलो खपेर रिसले * आगो सरीका भई ।
हानेथे दस बाण वज्रसरिका * लागे सबै ती गई ॥
घोड़ा औ रथ, सारथी, धनु सबै * धूलो भएथ्यो जब ।
भागे ती कृतवर्म देह भरिमा * लागेर घाऊ सब ॥१२॥
हे राजन् ! अनुविन्द विन्द दुइको * योद्धा इरावान् सित ।
चल्थ्यो युद्ध उता प्रहार शरको * गर्थे निकै अद्भुत ॥
मारे सारथि-अश्व उत्तम धनू * भाँचे इरावानले ।
भागे ती दुइ भाई टिक्न नसकी * त्यै बाणका चोटले ॥१३
हे राजन् ! रणमा घटोत्कच पुग्यो * गर्जी ठूलो वेगले ।
त्यस्लाई भगदत्तले समरमा * रोके तिखा बाणले ॥
ढाक्यो राक्षसले अनेक शरको * वर्षा गरी बेसरी ।
रात्री झैं गरि अन्धकार हुनगो * संग्रामभूमी भरी ॥१४॥
काटी त्यो शरजाल झट्ट नृपले * हाने ठूलो तोमर ।
पक्री राक्षसले गराइ टुकुरा * फाली दियो पर्तिर ॥
हानी शक्ति ठूलो तुरुन्त नृपले * पारी दिए घायल ।
गर्ज्यो राक्षस चोटले नरपते ! * थर्कोई युद्धस्थल ॥१५॥
हान्यो मत्त गजेन्द्रलाइ नृपको * त्यस्ले रिसाई जब ।
आँट्यो राक्षसलाइ मार्न गजले * भाग्यो डराई तब ॥
मार्‍यो सैन्यहरू दली-मलि गरी * हात्ती रिसाई कन ।
त्यो देखी भगदत्त हर्षित भई * थाल्दा भए गर्जन ॥१६
हे राजन् ! सहदेव औ नकुलको * ती शल्य मामासित ।
भिन्नै युद्ध हुँदा अनेक शरले * हानेर आच्छादित ॥
पारे ती सहदेवले समरमा * मामा रिसाए जब ।
घोड़ा-सारथि छत्र औ रथ-ध्वजा * धूलो गराए सब ॥१७॥

भाईको रथमा बसेर रिसले * मन्त्रेर राम्रो सित ।
मामालाइ गरी प्रहार सहजै * पारी दिए मूर्च्छित ॥
भिन्नै युद्ध श्रुतायु-धर्मसुतको * चल्दै थियो भूपति !
गर्थें आपुसमा प्रहार रिसले * शक्ती पुगेको जति ॥१८
छाड़ी बाण श्रुतायुले समरमा * पारे जसै घायल ।
मारी सारथि अश्व धर्म-सुतले * पारी दिए खल्बल ॥
भागेथे रथहीन भै नरपते ! * राजा श्रुतायू जब ।
भागे सैन्यहरू डराइ मनमा * बाँकी बचेका सब ॥१९॥
लड्थे बेसरि चेकितान-कृपजी * हे भूप ! अर्कोतिर ।
गर्थें आपुसमा प्रहार रिसले * ताकेर तीखा शर ॥
मारे अश्व र सारथी, रथ-ध्वजा * काटे दुवैले अनि ।
वर्हें खड्ग-गदा लिएर रणमा * मार्छु तँलाई भनी ॥२०॥
हानाहान हुँदा गिरे जब दुवै * योद्धा भई मूर्च्छित ।
आई रक्षकले दुवैकन लगे * रक्षार्थ हे भारत !
योध्या उत्तम धृष्टकेतु र उता * भूरिश्रवा वीरको ।
भिन्नै युद्ध हुँदै थियो घरि-घरी * वर्षा गरी बाणको ॥२१।
मारेथे जब अश्व सारथि सबै * भूरिश्रवा भूपले ।
त्यागी स्यन्दन धृष्टकेतु डरले * भागे ठुलो वेगले ॥
हे राजेन्द्र ! विकर्णका संगमहाँ * आएर दुर्मर्षण ।
ढाके ती अभिमन्युलाइ शरले * चौतर्फ घेरीकन ॥२२॥
काटे त्यो शरजाल शत्रुहरुको * ती पार्थका पुत्रले ।
पारी घायल ती दुवैकन त्यहीं * गर्जें ठुलो शब्दले ॥
थाले गर्न विनाश सैन्यहरुको * तिन्ले रिसाई जब ।
लागे भाग्न हजूरका जति थिए * सेना बचेका सब ॥२३॥

आए भीष्म चढेर श्वेत रथमा * देखेर युद्ध स्थिति ।
तिन्का उत्तम पृष्ठ रक्षक थिए * लाखौं ठूला भूपती ॥
साह्रै बालक पार्थ-पुत्र तिर ती * दौडे ठुलो वेगले ।
वर्षाए हतियारले थरि - थरी ! * सम्पूर्ण भूपालले ॥२४॥
देखेथे अभिमन्युको समरमा * श्री पार्थले त्यो स्थिति ।
देखाई कन त्यै दिशातिर भने * हे रुक्मिणीका पति !
योद्धा भीम तथा यि भूपतिहरू * सम्पूर्ण जम्मा भई ।
आँटे बालकलाई मार्न सहजै * चौतर्फ घेरा दिई ॥२५॥
मेरो झट्ट पुऱ्याइ बकसनु हवस् * त्यै ठाउँमा स्यन्दन
तिन्को बिन्ति सुनेर वायु गतिले * घोड़ा बढाई कन ॥
सामू भीष्मजिको लगेर रथ त्यो * रोक्नू भयो कृष्णले ।
देख्तै अर्जुनलाई सैन्य कुरुका * भागे ठूलो वेगले ॥२६॥
जो - जो मुख्य थिए डटे तिनिहरू * संग्रामका खातिर ।
लागे अर्जुन भन्न क्रोधित भई * हेर्दै सुशर्मा तिर ॥
तिम्रो जो मनमा छ वैर अघिको * सम्झी ठुलो दुर्गति ।
त्यसको आज डटी रहू समरमा * गर्छु म तूर्णाहुति २७॥
छेड्ने बात सुनेर केहि मुखले * बोल्दै नबोल्ने पनि ।
वर्षाए सबले मिली शरहरू * तिनलाइ मारौं भनी ॥
जस्तो घायल सर्प क्रोधित भई * झम्टन्छ स्वाँ-स्वाँ गरी ।
त्यस्तै क्रोधित श्री धनञ्जय भए * हे भूपती ! बेसरी ॥२८॥
एक्लैले सब वीरका शरहरू * काटेर टुक्रा गरी ।
मारी अश्व र सारथी, रथ-ध्वजा * भाँची दिए त्यै घरी ॥
धाऊ लागि कती, मरीकन कती * गिर्दा भए भूपती ।
बाँचेनन् रणभूमिमा नरपते ! * सामू परेका जति ॥२९॥

देखिन्थे नरपालका शिर तथा * घाँटी र पाऊ, कर ।
खोलो बग्न गयो ठुलो रगतको * संग्राम भूमी भर ॥
आए रोक्न भनी जयद्रथ तथा * भूपाल दुर्योधन ।
तिनको शेखि हरी, पितामहकहाँ * पुग्दा भए अर्जुन ॥३०॥
छाड़ी युद्ध नरेश शल्यसितको * भाईहरु ली कन ।
दौड़ाई रथ श्री युधिष्ठिर पनी * पुग्नू भयो त्यै क्षण ॥
पाँचै भाइ गए जतातिर अरु * योद्धाहरु जो थिए ।
रक्षा गर्न भनी उतैतिर सबै * क्रोधित् भई लम्किए ॥३१
देखे पाण्डवका, पितामह कहाँ * योद्धा डटेका जब ।
हे राजेन्द्र ! हजूरका पनि पुगे * सेना र योद्धा सब ॥
पाँचै भाइ र कृष्णलाइ पहिले * हानी तिखा बाणले ।
घाऊ पारि निकै जयद्रथ त्यहाँ * गर्जे ठुलो वेगले ॥३२॥
योद्धा भीम रिसाइ त्यै बखतमा * गर्दै ठुलो गर्जन ।
पारे घायल, श्री जयद्रथजिको * शेखी उतारी कन ॥
भन्नू भो नरपाल धर्म-सुतले * योद्धा शिखण्डीसित ।
मार्दैनौ किन भीष्मलाइ रणमा * मेरो चिताई हित ॥३३॥
भाग्दैछन् रणबाट सैनिकहरु * लागेर तीखा शर ।
पैह्लेको प्रणलाई सम्झि अहिले * कर्तव्य पूरा गर ॥
यस्तो बात सुनेर धर्म-सुतको * क्रोधित् शिखण्डी भए ।
वर्षाई शर भीष्मलाई सहजे * आपत्ति पारीदिए ॥३४॥
स्त्री जानी तिनिलाइ भीष्मजि हिंड़े * तत्काल अर्कोतिर ।
वर्षाए सबले मिलेर रिसले * श्री पार्थलाई शर ॥
श्री दुर्योधन, शल्य आदि सबको * शस्त्रास्त्र काटीकन ।
पारी घायल गर्जिए स्वर ठुलो * पारेर श्री अर्जुन ॥३५॥

ढाके फेरि गएर वीरहरूले * ती भीष्मलाई तर ।
मारी सैनिक पाण्डुका तनयको * पारी दिए सोत्तर ।
रोक्ने वेग ठुलो गएर नजिकै * देखिन्नथे क्वै गनि ।
सामुन्ने जति पर्दथे सकलको * संहार गर्थे तिनी ॥३६॥
रोके वेग, पुगी पितामहजिको * तत्काल श्री पार्थले ।
लागे लड्न स्वयं दुवै तरफका * सेनाहरू वेगले ॥
हे राजेन्द्र ! लड़ाइँमा मृतकका * बाहू र पाऊ शिर ।
पौरन्थे जल-जन्तु झैं रगतमा * संग्राम भूमी भर ॥३८॥
मान्छन् आज सबै हजूरकन नै * यो नाशको कारण ।
सायंकाल हुँदा विदा हुनु भयो * श्री सूर्यनारायण ॥
सेना नायकको हुकुम् हुन गई * संग्राम त्यो थामियो ।
त्यो बेला रणभूमिमा गजबको * शान्ति स्वयं देखियो३८
फर्के सैन्यहरू दुवै तरफका * विश्राममा खातिर ।
भूत, प्रेत, पिशाच, डाकिनिहरू * त्यो युद्ध भूमी भर ॥
दिन्थे त्रास कराइ उच्च स्वरले * ती जन्तुले चित्तमा ।
डुल्थे गिद्ध र स्याल आदि खुसिले* जम्मा भई रातमा ॥३९

आठौं दिनको युद्ध —भीमद्वारा दुर्योधनका सत्र भाईको संहार, घटोत्कचको पराक्रम,
इरावान बध र भीष्म-युधिष्ठिर संवाद—

प्रातःकाल भयो र खल्बल गरे * हे भूप ! आठौं दिन ।
ठूलो व्यूह रचे पितामहजिले * आफैं खड़ा भैकन ॥
राखे वीरहरू मिलाइ क्रमले * सम्पूर्ण चारै तिर ।
राजन् ! अर्पनलाइ जीवन सबै * सेना थिए तत्पर ॥४०॥
चुच्चे व्यूह रचे ति पाण्डुसुतले * तत्काल शृंगाटक ।
धृष्टद्युम्न बसे अघिल्तिर बनी * त्यो व्यूहको रक्षक ॥

चारै तर्फ प्रसिद्ध भूपतिहरू * राखे मिलाई कन ।
योद्धा लड्न भनी ठुलो उदधि झैं * लागे सबै उर्लन ॥४१॥
बाजा बज्न गए दुवै तरफका * उत्साह बढ्ने गरी ।
थाले खलबल गर्न वीरहरूले * हे भूपती ! बेसरी ।
लागे गर्न सहर्ष श्रेष्ठ धनुको * टङ्कार शङ्ख-ध्वनि ।
गर्थे शस्त्र प्रहार क्रोधित भई * यो शत्रु मार्छु भनी॥४२
थाले गिर्न मरेर सैनिकहरू * संग्राम भूमी भरी ।
त्यो देखेर रिसाइ झन् अघिसरी * लड्दा भए बेसरी ॥
लड्दा भीष्म र भीम हे नरपते ! * संहार ठुलो भयो ।
पैह्ले दानवको र देवगणको * संग्राम झैं देखियो ॥४३
मारे इन्द्र रिसाइ वीर नमुची * औ वृत्र जुन चाल्ले ।
सेना नाश गरे गदा लिइ ठुलो * त्यै चालले भीमले ॥
वर्षाए शर भीष्मले शमरमा * पानी परे झैं गरा ।
लागे गिर्न अनेक पाण्डु-सुतका * योद्धा र सेना मरी ॥४४
धृष्टद्युम्न पुगेर वेग बलियो * रोकी दिए भीष्मको ।
भाई साथ लिई सुयोधन पुगे * साम्नु बली भीमको ॥
थाले गर्न प्रहार क्रोधित भई * सत्रै जनाले जब ।
तिन्का चोट खपी भने मनमनै * यिन्लाइ मार्छु अब ॥४५
ती दुर्योधनलाइ पाँच शरले * रोकेर एकातिर ।
पैह्लेको प्रण सम्झँदै गिंडिदिए * सत्रै जनाको शिर ॥
भाई मारि दिए भनेर मनमा * दुःखी सुयोधन् भए ।
पैह्लेको हितका कुरा विदुरको * एल्हे सबै सम्झिए ॥४६॥
पुत्र-स्नेह र मोहको वश परी * पैह्ले हजुर्ले पनि ।
हेला गर्नु भयो गुणी विदुरको * शिक्षा वृथा हो भनी ॥

मनेंछन् रणमा सुपुत्र अघिको * दुर्नीतिको कारण ।
चिन्ता गर्नु वृथा छ दैवगति हो * भन्ने विचारीकन ॥४७
राजन् ! भीष्मकहाँ सुयोधन गई * भन्छन् दुखाई मन ।
यो संग्राम महाँ पितामह छँदै * हारी रहेछु किन ॥
भाइ मारि दिए स्वयं हजुरकै * सामू लडी भीमले ।
आफ्नू हार हुने म देख्छु रणमा * हे नाथ ! दुर्भाग्यले ॥४८
तिन्को बात सुनी पितामहजिले * भन्नू भयो सादर ।
द्यौता, दानव, यक्ष, राक्षस तथा * गन्धर्व औ किन्नर ॥
सारा आइ लड़े पनी समरमा * ती पार्थले मार्दछन् ।
त्यस्ता पाण्डवलाइ मार्न अहिले *कुन् वीरले आँट्तछन् ॥४९
'हे दुर्योधन ! बुद्धिलाइ पहिले * आफ्नू गरी सुस्थिर ।
लड्नू पर्छ लड़ाइँमा कि मनले * जे भन्छ सोही गर'
यस्तो शुष्क सुनी सुयोधनजिले * श्री भीष्मको उत्तर ।
त्याहाँबाट उठी गए शिविरमा * क्यै वेरका खातिर ॥५०॥
लागे सञ्जय भन्न हे नरपते ! * संवाद संग्रामको ।
भन्छु सुन्नु हवस्, भयो अति ठुलो * संहार भूपालको ॥
धृष्टद्युम्न विराट सात्यकि तथा * श्री द्रौपदीका सुत ।
धेरै वीर अरू मिलीकन लडे * ती भीष्म योद्धासित ॥५१
गर्थे नाश अनेक पाण्डु-सुतका * सेना गुरू द्रोणले ।
हात्ती नाश गरे गदा लिइ ठुलो * उन्मत्त झैं भीमले ॥
लागे गिर्न मरी धमाधम त्यहाँ * घोड़ा र हात्ती जब ।
गर्थे शस्त्र प्रहार क्रोधित भई * झन् बेसरी ती सब ।५२॥
हे राजेन्द्र ! यता मनुष्यहरूको * संहार चल्दै थियो ।
अर्का तर्फ पुगेर वीर शकुनी * संग्राम झन् मच्चियो ॥

लागे गर्न विनाश पाण्डु-सुतका * सेना तिखा बाणले ।
रोके वेग ठुलो अघिल्तर पुगी * तीन्को इरावानले ॥५३॥
तिन्का साथ थियो सुशिक्षित ठुलो * सेना त्यहाँ अश्वको ।
तिन्ले नाश गरे हजूर तिरका * सेना तथा वीरको ।
छोरा जो छजना थिए शकुनिका * निक्कै प्रतापी त्यहाँ ।
आए शस्त्र भिरेर लड्दछु भनी * संग्राम भूमीमहाँ ॥५४॥
वर्षाए हथियार क्रोधित भई * ती षट्-रथी वीरले ।
पारी व्याकुल शत्रुलाइ रणमा * गर्जे ठुलो वेगले ॥
तिन्को चोटहरू खपे शरिरमा * योद्धा इरावानले ।
मूर्छा पारि दिए सबैकन त्यहाँ * हानी तीखा बाणले ॥५५॥
आँटे काट्न लिएर खड्ग करमा * तिन्ले नगीचै गई ।
आए लड्न भनेर फेरि रिसले * चैतन्यता फर्किई ॥
दौड़े पैदल नै लिएर करमा * तर्वार ती भूपति ।
मारी षट्-रथिलाइ बाहु-बलले * पारे ठुलो दुर्गति ॥५६॥
त्यो देखेर पुगे अलम्बुष कहाँ * दौड़ेर दुर्योधन ।
लागे भन्न गएर मार तिमीले * पापी इरावान् कन ॥
आयो 'हुन्छ' भनेर क्रोधित भई * तत्काल त्यो राक्षस ।
लाग्यो गर्न प्रहार राखि मनमा * सद्धैर्य औ साहस ।५७
त्यस्का शस्त्र सबै अनेक टुकुरा * पारे इरावानले ।
घाऊ पारि शरीरमा धनु पनी * भाँची दिए बाणले ॥
मायावी बलियो अलम्बुष थियो * प्रख्यात त्यै कारण ।
पाऱ्यो मोहित शत्रुलाइ र गयो * आकाशमा गर्जन ॥५८॥
मायाका ति पनी अलम्बुष सरी * ज्ञाता हुनाले गरी ।
थाले मार्न पुगेर बाणहरूले * आकाशमै बेसरी ॥

हुन्थ्यो फेरि दुरुस्त राक्षस त्यहाँ * सर्वाङ्ग काटे पनि ।
इच्छा माफिक रूप धारण गरी * गर्जी रहन्थ्यो खूनी॥५९
आए मद्दत गर्न नाग रणमा * योद्धा इरावन् कन ।
ल्यायो रूप लिएर त्यो गरुड़को * ती नाग पक्षी कन ॥
पैहे मोहित दुष्टले गरी दियो * माया फिंजी बेसरी ।
काट्यो खड्ग लिई गिरे समरमा * योद्धा इरावान् मरी ॥६०
थाले गर्जन वीर कौरवहरू * हो जीत हाम्रो भनी ।
लागे भाग्न डराइ पाण्डु-सुतका * सेना र योद्धा पनि ॥
त्यो देखेर पुगी घटोत्कच त्यहाँ * गर्ज्यो ठुलो शब्दले ।
भागेका सब फर्किए समरमा * अत्यन्त उत्साहले ॥६१
आफ्ना मित्र लिई त्रिशूल करमा * पक्षी ठुलो वेगले ।
लाग्यो मार्न हजूरका थरि-थरी * सेनाहरू क्रोधले ।
भागे वीर कती गिरे कति मरी * हाहा परी बेसरी ।
रोके वेग पुगी सुयोधन त्यहाँ * सेना लिई त्यो घरी ॥६२
तिन्को मद्दत गर्न बङ्ग-नृपती * हात्ती हजारौं लिई ।
सारा राक्षस मार्दछु भनि पुगे * अत्यन्त क्रोधित् भई ॥
वर्षाए हतियार श्रेष्ठ गजका * सेनाहरूले जब ।
थाले गर्जन वीर राक्षसहरू * त्यो चोट खाई सब ॥६३
फर्सा, बाण, त्रिशूल, मुग्दर, गदा * वृक्षादि औ पर्वत ।
वर्षाए गजका सवारहरुमा * साह्रै नराम्रोसित ॥
लागी चोट फुटे गजेन्द्रहरुका * तत्काल गण्डस्थल ।
ढाके वीर तथा मरेर गजले * सम्पूर्ण युद्धस्थल ॥६४
श्री दुर्योधनले अनेक शरको * वर्षा गरी वेसरी ।
सेना राक्षसका धमाधम गिरे * त्यो चोट द्वारा मरी ॥

आफ्ना सैनिकको घटोत्कच थियो * हेरी रहेको स्थिति ।
लाग्यो भन्न पुगी सुयोधन कहाँ * त्यो वीर हे भूपति !॥६५
जूआमा छलले जितेर सहजै * सर्वस्व खोसी लियौ ।
पाँचै भाइ र द्रौपदी कन पनी * वन्मा धपाई दियौ ॥
यो अन्याय गऱ्यौ अनेक पहिले * हे वीर दुर्योधन !
भागेनौ रणबाट क्यै गरि भने * तिर्छु म त्यस्को ऋण६६
यो वक्रोक्ति सुनाइ बाणहरुको * वर्षा गरी बेसरी ।
घाऊ परिदियो सुयोधनजिको * सर्वाङ्गमा त्यो घरी ॥
त्यस्को चोट सहेर अग्नि सरिका * पच्चीस तीखा शर ।
हानो राक्षसको शरीर सहजै * पारीदिए जर्जर ॥६७॥
घाऊ लाग्न गई घटोत्कच भयो * झन् बेसरी क्रोधित ।
झम्टयो शक्ति लिएर एक कलियो * साह्रै नराम्रो सित ॥
त्यो देखीकन झट्ट बंग नृपले * हात्ती अगाड़ी गरी ।
शक्ति छाड्न नपाउँदै नरपते ! * रोकी दिए त्यो घरी ॥६८
हान्यो राक्षसले गजेन्द्रकन त्यो * शक्ती ठुलो वेगले ।
चिच्यायो गज बेसरी शिर फुटी * त्यो शक्तिको चोटले ॥
श्री दुर्योधनलाइ पाँच शरले * पेल्हे गरी घायल ।
गर्ज्यो राक्षस त्यो कठोर स्वरले * थर्काइ युद्धस्थल ॥६९॥
त्यस्को शब्द सुनी पितामहजिले * आज्ञा दिनू भो जब ।
रक्षा गर्न पुगे सुयोधन कहाँ * सेना र योद्‌धा सब ॥
एकैपल्ट गरे प्रहार सबले * त्यस्लाइ मारौं भनी ।
गर्ज्यो राक्षस झन् शरीर भरिमा * शस्त्रास्त्र लागे पनि ॥७०
छाड़ी बाण तिखा नरेशहरुको * शेखी उतान्यो जब ।
लागे भाग्न डराउँदै नरपते ! * बाँकी बचेका सब ॥

एक्लो राक्षसको युधिरजिले * सुन्दा ठुलो गर्जन ।
रक्षा खातिर भीमका सँग ठुलो * भेजे सुसेनाकन ॥७१॥
राजन् ! पाण्डवका तथा हजुरका * सेनाहरूले पनि ।
काटाकाट गरे परस्पर महाँ * कालाग्नि जस्तै बनी ॥
हाने सायक भीमलाइ रिसले * छब्बीस श्री द्रोणले ।
केही बेर अचेत झैं हुन गए * ती भीम त्यो चोटले ॥७२
साटो फेर्न भनेर बाण दसले * हानेर छातीमहाँ ।
लागी चोट ढले पछाड़ि रथको * ती द्रोण योद्धा त्यहाँ ॥
द्रौणी वीर तथा सुयोधन दुवै * देखेर त्यस्तो स्थिति ।
लागे लड्न सवेग भीमसित नै * तत्काल हे भूपति ! ॥७३
राजा नील पुगेर त्यै बखतमा * रक्षार्थ श्री भीमको ।
शेखी झारिदिए सुयोधन तथा * ती द्रोणका पुत्रको ॥
पारे मूर्च्छित नीललाइ रणमा * योद्धा दुवैले जब ।
भूमी कम्प गरी घटोत्कच पुग्यो * देख्दै डराए सब ।७४॥
द्रौणी माथि गरी प्रहार पहिले * पारी दियो घायल ।
लागे गर्न प्रहार द्रोण सुतले * भन्दै 'पखी हे खल !'
मारे राक्षस सैन्य हे नरपते ! * त्यस्का अनेकौं जब ।
मायावी बलियो घटोत्कच हुँदा * माया फिंजायो तब ॥७५॥
देखे वीर प्रधानलाइ रणमा * त्यसैं रहेका मरी ।
सारा मोह भई हिंडे शिविरमा * सेना र योद्धा डरी ।
फर्कैनन् रणका बुझाइ बहुतै * फर्काउँदा द्रोणले ।
श्री दुर्योधनजी पितामह कहाँ * पुग्दा भए वेगले ॥७६॥
लागे भन्न मलाइ यो समरमा * पारी दियो लज्जित ।
त्यस्को वेग तुरुन्त रोकि दिनुहोस् * मेरो चिताई हित ॥

हाँस्तै भीष्मजिले बुझाउनु भयो * हे भूप दुर्योधन !
लड्छन् भूपति भूपकै सँगमहाँ * जोड़ी मिलाईकन ॥७७॥
पाजी राक्षसका गएर सँगमा * त्यर्थै लड़ेका किन ?
जाउन् श्री भगदत्त सैनिक लिए * त्यस्लाइ रोकी लिन ॥
यो आज्ञा सुनि श्री पितामहजिको * तत्काल राजी भई ।
आए लड्न भनी सशस्त्र सँगमा * सेना प्रसस्तै लिई ॥७८॥
वर्षाए शर श्री वृकोदरजिको * सर्वाङ्गमा बेसरी ।
घाऊ पारि दिए, बग्यो रगतको * धारा नराम्रो गरी ॥
आई राक्षसले त्रिशूल करमा * पक्की चलाई दियो ।
त्यस्ले ती भगदत्तको बल जती * सम्पूर्ण तानी लियो ॥७९
लाग्यो चोट तथापि धैर्य मनमा * राखेर भूपालले ।
हाने राक्षसलाइ वज्र सरिको * शक्ती ठुलो वेगले ॥
त्यस्ले शक्ति समाइ झट्ट बिचमै * टुक्रा गराई कन ।
पाऱ्यो घायल भूपलाइ र गयो * आकाशमा गर्जन ॥८०॥
हे राजन् ! भगदत्तले पनि तिखा * छाड़ी अनेकौं शर ।
पारे घायल जो अघिल्तिर थिए * संग्रामका खातिर ॥
त्यै बेला पुगि पार्थले जब सुने * छोरो मरेको त्यहाँ ।
लागे गर्न विषाद हे नरपते ! * दुःखी भई मन्महाँ॥८१॥
त्यो देखी हरिले बुझाउनु भयो * तिन्लाइ राम्रो गरी ।
राजन् ! लड्न भनेर तत्पर भए * श्री पार्थ सोही घरी ॥
सेना, वीरहरू दुवै तरफका * आएर त्यै स्थानमा ।
लागे लड्न डटी, हिंडे कति छिटै * राजा मरी स्वर्गमा ॥८२॥
शक्ती, वज्र, गदा, रथी र रथका * टुक्रा, ध्वजा, तोमर ।
फेटा, बाण, सुवस्त्र, भूपहरुका * टल्की रहेका शिर ॥

देखिन्थे रणभूमिमा वरिपरी * हात्ती र घोड़ा गिरी ।
ढाक्यो भूमि सबै र कौँतर जती * देखेर भाग्थे डरी ॥८३॥
उत्साही जतिले पराक्रम गरे * अर्पी स्वयं जीवन ।
मान्थे दुःख कती वृथा त्यति ठुलो * संहार देखी कन ॥
दाजू-भाइ तथा पिता र सुतको * संग्राम त्यो देखियो ।
सायंकाल हुँदै गयो जति-जती * झन् बेसरी मच्चियो ८४
छाड़े लड्न स्वयं दुवै तरफले * निक्कै अँध्यारो भई ।
विश्राम् गर्न भनी पसे शिविरमा * सेना र योद्धा गई ॥
देखी राक्षसको पराक्रम तथा * आफ्नू नराम्रो स्थिति ।
पौंचे कर्ण कहाँ सुयोधन स्वयं * त्यै रातमा भूपति ! ॥८५
लागे भन्न बुझाइ आज रणमा * मेरो लियो इज्जत ।
मार्‍यो सैन्य र भूपती सब ठुला * हे वीर राधासुत ! ॥
यौटा राक्षसले अवध्य बलिया * मेरा सबै वीरको ।
शेखी झारिदियो, चतुर्दिक हिंडे * त्यागेर संग्राम त्यो ॥८६
चिन्ताग्रस्त भएँ म हुन्छु विजयी * हे वीर ! कुन् युक्तिले ।
तिम्रो मात्र मलाइ आश छ ठुलो * आएँ त्यसै हेतुले ॥
हे दुर्योधन वीर ! व्यर्थ मनमा * चिन्ता नगर्नोस् अब ।
मार्छु पाण्डवलाइ निश्चय छ यो * लड्नेछु मैले जब ॥८७॥
ऐल्हे भीष्म कहाँ गई विनयले * भन्नोस् बुझाई कन ।
छाडुन लड्न तिनी, म लड्दछु अनी * हे वीर दुर्योधन ! ॥
त्याहाँबाट हिंड़े सुयोधन, ठुलो * पाएर आश्वासन ।
लागे भन्न पुगी पितामह कहाँ * आँसू चुहाई कन ॥८८
जित्नू हुन्छ हजूरले मन गरे * जुन् वीर आए पनि ।
बाँच्नू पाण्डवले म ठान्छु मनमा * दुर्भाग्य आफ्नो भनी ॥

छाडनू हुन्छ दया गरीकन भने * विश्राम गर्नू हवस् ।
माछन् पाण्डरलाइ कर्ण रणमा *तिन्लाई मौका दिनोस्८९
श्री दुर्योधनको कुरा हृदयमा * अत्यन्त बिझ्ने सुनी ।
हाँस्तै भीष्मजिले भने, मनमनै * दुःखी भए तापनि ॥
घोच्ने बात मलाइ व्यर्थ यसरी * भन्छौ तिमी यो किन ?
लड्दैछु म प्रयत्नपूर्वक सधैं * हे वीर ! दुर्योधन ! ॥९०
एक्लै पार्थ थिए विराट नृपको * गाई हरेका घरी ।
बाँधेको तिमीलाइ चित्ररथले * बिर्सी सक्यौ के गरी ?
पारी मोहित वीरलाइ पगरी * खोसी लिंदा पार्थले ।
मारेनन् किन युद्धमा अघिसरी * तिन्लाइ ती कर्णले ॥९१
टिक्तैनन् कहिले पनी विजयको * साम्ने ति राधा-सुत ।
मार्छन् पाण्डवलाइ के गरि तिनी * तिम्रो चिताई हित ?
छाड़ी एक शिखण्डिलाइ रणमा * साम्ने हुनेछन् जति ।
मार्नें छु सबलाइ भोलि सहजै * बाँकी नराखी ॥९२॥
भन्छु बाबु, जती कुरा सब तिमी * पत्यार मेरो गर ।
ऐले जाउ बरु तिमी शिविरमा * विश्रामका खातिर ॥
शिक्षा यै रितका अरु पनि दिए * श्री भीष्मले सान्त्वना ।
चिन्ता त्याग गरी सुयोधन फिरे * पुग्ला भनी कामना ॥९३

नवौं दिनको युद्ध—पाण्डव सेनाको संहार, शिखण्डीसित विवाद, भीष्मले अर्जुनलाई आफू मर्नें उपाय बताउनु :—

प्रातःकाल हुँदा दुवै तरफका * सेना र सेनापति ।
ठूलो व्यूह रचेर तत्पर भए * युद्धार्थ हे भूपति !
भेरी शङ्ख, मृगङ्ग, ढोल, नगरा * गो-शृङ्ग औ पुष्कर ।
लागे बज्न अनेक वाद्य रणका * उत्साहका खातिर ॥९४

सेना पैदल औ रथी गजपती * घोडा चढ़ेका पनि ।
पंक्तीवद्ध भई हिंडे, घरि-घरी * गर्थें ति शङ्खध्वनि ॥
तिन्को गर्जन सिंहनादहरुले * भूमी भयो कम्पित ।
थाले लड्न डटी दुवै तरफका * सेना भई क्रोधित ॥९५॥
हे राजन् ! अभिमन्युले शरहरू * वर्षा गरी बेसरी ।
लागे गिर्न हजूरका ति बलिया * सेना र योद्धा मरी ।
देखिन्थे यमराज झैं समरमा * श्री उत्तराका पति ।
तिनका सामु सकेन टिक्न रणमा * कोही पनी भूपती ॥९६॥
द्रौणी, द्रोणगुरू, बृहद्बल तथा * भूपाल श्री सिन्धुका ।
यी चारै बलवान् पुगे नगिचमा * श्री पार्थको पुत्रका ॥
काटी श्रेष्ठ धनू, ध्वजा, रथ सबै * भाँची दिएथे जब ।
छेके वीर अरू पुगेर, विरथी * तिन्लाइ देखी तब ॥९७॥
अर्को स्यन्दनमा बसेर रिसले * श्री पार्थका पुत्रले ।
ती चारै जनलाइ मूर्च्छित गरी * गर्जे ठुलो वेगले ।
बर्साए हतियार सैन्यहरुमा * पानी परे झैं जब ।
बत्तीमा पुतली मरेसरि भए * सेना हजुर्का सब ॥९८॥
एक्लै श्री अभिमन्युले समरमा * गर्जी रहेको सुनी ।
माद्रीका सुत, वीर सात्यकि पुगे * श्रीभीम योद्धा पनि ॥
ती चारै जनलाइ झट्ट बिचमै * रोकेर श्री भीष्मले ।
पारे घायल चार-चार शरले * हानी ठुलो वेगले ॥९९॥
देखी धैर्य तथा पराक्रम ठुलो * ती भीष्मको त्यो घरी ।
स्याबासी सबले दिए नरपते ! * तारीफ धेरै गरी ॥
योद्धा भीम रिसाइ त्यै बखतमा * गर्जी ठुलो शब्दले ॥
पारे घायल भीष्मलाइ रणमा * हानी ठुलो शक्तिले ॥८००

त्यो देखेर पुग्यो अलम्बुष त्यहाँ * दुस्साहसी राक्षस ।
त्यस्को धैर्य तथा पराक्रम सुनी * डर्थे सबै मानिस ॥
थाल्यो गर्जन सिंहनाद गरि त्यो * थर्काइ युद्धस्थल ।
बर्साई हतियार शत्रु दलमा * पारी दियो खल्बल ॥१॥
पारी श्री अभिमन्युलाइ रणमा * शस्त्रास्त्रले घायल ।
दौड्यो झम्टन द्रौपदी सुतहरू * ती पाँचलाइ खल ॥
एकै पल्ट गरे प्रहार रिसले * पाँचै जनाले त्यहाँ ।
मूर्छा पर्न गई अलम्बुष गिर्‍यो * संग्राम भूमीमहाँ ॥२॥
त्यो देखेर पुगे पितामह छिटै * रक्षार्थ त्यो वीरको ।
लागे भन्न शिखण्डि वीर सहसा * सामू पुगी भीष्मको ॥
गर्छौ व्यर्थ घमण्ड वीर छु भनी * बर्ता तिमीले किन ।
जानेछौ यमराजको नगरको * शोभा बढाई दिन ॥३॥
तिम्रो धैर्य तथा पराक्रम जती * मैले सबै जान्दछु ।
स्त्री भन्छौ तिमीले, मचाहिं तृण झैं * संसारमा ठान्दछु ॥
भागेनौ रणबाट क्यै गरि भने * यो आजको युद्धमा ।
तिम्रो प्राण लिनेछु भीष्म ! खुशिले * जानू छिटै स्वर्गमा ॥४॥
धेरै बात सुने पितामहजिले * बिझ्ने र बाङ्गो तर ।
छुच्चोलाइ दिनू बृथा छ जनले * क्यै बातको उत्तर ॥
बोलेनन् गरि तर्क यो मनमहाँ * श्री भीष्मजीले जब ।
गर्दै बाण प्रहार बात ननिका * भन्थे शिखण्डी सब ॥५॥
मार्छु शत्रु गई पितामहजिको * भन्ने इरादा धरी ।
आयो राक्षस ऋष्यश्रृङ्ग करमा * शक्ति लिई बेसरी ॥
त्यो देखीकन वीर सात्यकि पुगी * त्यस्लाइ रोकी दिए ।
चाँडै राक्षसलाइ घायल गरी * ती वेगले गर्जिए ॥६॥

राजन् ! प्राण लिने थियो करमहाँ * जुन् शक्ति त्यो वीरको ।
ताकी सात्यकितर्फ क्रोधित भई * तत्काल छोड्ने थियो ॥
पारे सात्यकिले अनेक टुकुरा * छाड्नै नपाईकन ।
हान्नी बाण अनेक घायल गरे * त्यस्लाई सोही क्षण ॥७
भाग्यो राक्षस त्यो सवेग बलले * संग्राम त्यागी जब ।
वर्साए भगदत्तले पुगी त्यहाँ * शस्त्रास्त्र आफ्ना सब ॥
तिन्का शस्त्रहरू गराइ टुकुरा * श्री सात्यकीले पनि ।
हाने एक त्रिशूलले नरपते ! * तिन्लाई मार्छु भनी॥८
त्यसले श्री भगदत्त मूर्च्छित भए * क्ये बेरका खातिर ।
त्यो देखीकन श्री सुयोधन पुगी * छाड़े अनेकौं शर ॥
द्रोणाचार्य पुगे सबेग त्यहिं नै * राजा सुशर्मा पनि ।
त्यो देखेर पुगे धनञ्जय त्यहीं * तिन्लाइ रोकौं भनी ॥९
देखे ती अभिमन्यु वीर रथमा * जान्थे त्यतै वेगले !
रोकेथे पथमैं सुदक्षिण पुगी * हे भूपती ! क्रोधले ॥
आए झट्ट बिराट औ द्रुपदजी * देखेर युद्ध स्थिति ।
ती योद्धा दुइका अघिल्तिर डटे * द्रौणी पुगी भूपति ! ॥१०
हे राजन् ! सहदेव और नकुलजी * पुग्दा त्यही स्थानमा ।
लागे लड्न विकर्ण वीर कृपजी * ती वीरका साथमा
देखे भीम पुगेर मत्त गजको * सेना डटेको जब ।
लागे मार्न पसी, गदा लिइ ठुलो * बाँकी नराखी सब ॥११॥
राजन् ! वीरहरू दुवै तरफका * आएर त्यै स्थानमा ।
मार्छु शत्रु कि मर्दछु भनि लड़े * उत्साहका साथमा ॥
धेरै अश्वपती तथा गजपती * योद्धा रथी, पैदल ।
गर्थे शस्त्र प्रहार वीर रणको * देखाउँदै कौशल ॥१२॥

लागे गिर्न तरेर सैनिक तथा * योद्धा दुवै तर्फका ।
देखिन्थे टुकुराहरू शरिरका * सेना तथा वीरका ॥
मर्दा श्रेष्ठ रथी र सारथि दुवै * रित्तो भई स्यन्दन ।
आफ्नै तर्फ पनी सवेग दगुरी * थाल्दा भए कुल्चन ॥१३
मर्दा मत्त गजेन्द्रका अधिपती * त्यो रित्तिएथ्यो जब ।
लाग्यो कुल्चन सैन्यलाई दगुरी * आफ्ना-बिराना सब ॥
हाहाकार पर्‍यो दुवै तरफको * संग्राम ठूलो भयो ।
राजन् ! प्राण बचाई सैन्य-दल त्यो* चौतर्फ भाग्दै गयो ॥१४
लाग्यो बग्न नदी ठुलो रगतको * हे भूपती ! युद्धमा ।
देखिन्थे रथ, अश्व, बाण, गजका * थुप्रा सबै स्थानमा ॥
जस्तो अद्भुत युद्ध वीरहरुको * चल्दो भयो त्यो दिन ।
गाह्रो पर्दछ गर्नलाइ सब त्यो * श्री शेषले वर्णन ॥१५
थाके वीरहरू गए रवि पनी * अस्ताउँदै पश्चिम ।
छाड़े चिन्ह विपक्ष-पक्ष जनले * बढ्दै गएथ्यो तम ॥
आफाफ्ना लिइ सैन्यका दलहरू * बाँकी बचेका जति ।
विश्राम् गर्न भनी गए शिविरमा * योद्धा र सेनापति ॥१६
राजन् ! धर्मकुमार चिन्तित भए * देखेर युद्ध स्थिति ।
पाँचै भाइ विचार खातिर बसे * त्यो रातमा भूपति !
सोधे श्री हरिलाइ राखि बिचमा * श्री धर्मका पुत्रले ।
हाम्रो जीत हुनेछ यो समरमा * हे नाथ ! कुन् युक्तिले॥१७
जस्तो नाश गरे पितामहजिले * यो आजको युद्धमा ।
जित्ने आश गयो, विषाद बरु झन् * बढ्दो छ यो चित्तमा ॥
मेरै निम्ति खपे यि भाइहरूले * धेरै थरीका दुख ।
साध्वी द्रौपदिलाइ कुन बखतमा * मैले दिएँ के सुख ॥१८

चिन्ताग्रस्त भएँ म यो विषयमा * शिक्षा दिनोस् माधव !
के गर्दा हित हुन्छ हामिहरुको * यो युद्धमा केशव !
रक्षा गर्नुभएन क्यै गरि भने * यो कष्टमा नाथले ।
हाम्रा सैन्य र वीरलाइ सहजै * मार्छन् लड़ी भीष्मले ॥१९
मैले हेतु बनेर यो कलहको * बाँच्नू वृथा हो अब ।
जान्छु जङ्गलमा प्रसन्न मनले * बस्नेछु हे केशव ! ॥
बिन्ती धर्मकुमारको सुनिसकी * आज्ञा भयो कृष्णले ।
चिन्ता गर्नु अयोग्य हो हजुर झैं * सत्पात्र भूपालले ॥२०॥
चारोटा बलवान भाइहरु छन् * संग्राममा उद्यत ।
मार्नेछन् सब शत्रुलाई रणमा * आँटे सजीले सित ॥
प्यारा अर्जुन हुन् सखा र म पनी * गर्छु उनैको हित ।
रक्षा गर्न म छु उपस्थित, अरू * चाहिन्छ के मद्दत ॥२१॥
मार्दैनन् यदि भीष्मलाइ रणमा * भोली भने पार्थले ।
मार्नेछु म स्वयं सुदर्शन लिई * संग्राममा वेगले ॥
लागे भन्न सहर्ष धर्म-सुतले * हे कृष्ण ! योगेश्वर !
आज्ञाले प्रभुको प्रसन्न म भएँ * चिन्ता हरायो डर ॥२२
जाबो भीष्मजिको कुरा म गरुँ के * हे सृष्टि संहारक !
जित्छन् पार्थ महेन्द्रलाइ प्रभु झैं * पाए पछी रक्षक ॥
सोधौं भीष्मजिलाइ यै बखतमा * हामीहरू गैकन ।
आफ्नो मृत्यु हुने उपाय सजिलो * आफैं भनुन् यै क्षण ॥२३
यो सल्लाह गरी पुगे शिविरमा * तत्काल श्री भीष्मको ।
ढोगे पाउमहाँ झुकेर सबले * सानन्द ती वीरको ॥
बोले भीष्म सहर्ष वीरहरु हो ! * खाली छ सिहासन ।
गर्छु स्वागत प्रेमले बस यहाँ * शंका नमानीकन ॥२४॥

आई दर्शन बक्सियो हजुरले * जो आज हे अच्युत !
रक्षा गर्नुहवस्, म गर्दछु प्रभो * आनन्दले स्वागत ॥
साह्रै खुशि भए युधिष्ठिर तिमी * आई दिनाले यहाँ ।
मगी लेउ लडाइँ बाहिक अरू * इच्छा छ जे मन्महाँ॥२५



भीष्मले आफ्नू मृत्युको उपाय बताउनू

हे बाबूहरु हो ! म पूर्ण गरूँ लौ * कुन् काम तिम्रो भन ?
यो आज्ञा सुनि श्री युधिष्ठिरजिले * आनन्द मानीकन ॥
हाम्रो जीत हुनेछ यो समरमा * कुन् युक्तिले भन्नुहोस् ।
आफ्नो मृत्यु हुनै स्वयं हजुरले * युक्ती बताईदिनोस् ॥२६॥
लड्नूहुन्छ हजूर यो समरमा * हे वीर ! जैह्ले तक ।
हाम्रो जीत हुँदैन निश्चय छ यो * हे शत्रु - संहारक !
तिन्को बात सुनी पितामहजिले * हाँसेर आज्ञा भयो ।
हे बाबू ! तिमिले भने जति कुरा * सम्पूर्ण त्यो सत्य हो ॥२७
जैह्ले सम्म रहन्छ शस्त्र करमा * मेरो अगाडी परी ।
जानेछन् रणभूमिमा मरि सबै * संसार पारी तरी ॥
राखुन् स्त्री अथवा नपुंसक कुनै * योद्धा अगाडी तिर ।
छाड्नन् पार्थ बसी पछिन्तिर तिखा * ताकी अनेकौं शर ॥२८

स्त्री देखी हतियार आफ्नु रथमा * मैले जसै राख्दछु ।
मारे अर्जुनले भने समरमा * त्यै युक्तिले मर्दछु ॥
तिम्रा रक्षक छन् उपस्थित स्वयं * सर्वज्ञ योगेश्वर ।
मैले भन्नु वृथा छ यो किसिमको * यो काम यस्तो गर ॥२९
शिक्षा यै रितका दिए अरु पनी * श्री भीष्मजीले जब ।
बोले पार्थ भएर खिन्न मनले * तत्काल हे केशव !
जस्को काखमहाँ प्रसन्न मनले * खेलें म सानू छँदा ।
हाम्रो गर्नुभयो पितामहजिले * रक्षा सदासर्वदा ॥३०॥
यिन्लाई कसरी पछिल्तिर बसी * मारौं म हे अच्युत !
होला काम गरेर क्षुद्र कसरी * हामीहरूको हित ।
यस्तो बात सुनी सकी विजयको * आज्ञा भयो कृष्णले ।
भन्छौ मार्दिन भीष्मलाइ रणमा * कुन् युक्ति वा नीतिले॥३१
सम्झी क्षत्रिय-धर्म मार्दछु भनी * आफैं प्रतिज्ञा गरी ।
ऐह्ले कायर झैं कुरा किन तिमी * गर्छौ पछाडी सरी ॥
पैह्ले निश्चय भैसक्यो वध हुने * जुन् युक्तिले भीष्मको ।
सक्तैनौ अब टार्नलाइ निमिले * बेला सखे ! कालको ॥३२
शिक्षा यै रितको सुने हित हुने * श्री कृष्णजीको जब ।
भन्छन् चित्त बुझ्यो, म मार्दछु लडी* श्री भीष्मलाई अब ॥
राजन् ! पाण्डवले सबै तरहले * सल्लाह पक्का गरी ।
विश्राम् गर्न भनी सबै शिविरमा * फिर्दा भए त्यो घरी॥३३

दसौं दिनको युद्ध—भीष्मको पराक्रम र पार्थद्वारा उनको पतन :—

सोधे श्री धृतराष्ट्रले समरमा * विख्यात श्री भीष्मको ।
सामू आई लड़े शिखण्डि कसरी * मद्दत् लिई पार्थको ॥

लागे सञ्जय भन्न हे नरपते ! * संग्रामको खातिर ।
प्रातः काल हुँदा दुवै तरफका * सेना भए तत्पर ॥३४॥
ठूलो व्यूह गरे तयार पहिले * श्री पाण्डुका पुत्रले ।
साम्ने राखि शिखण्डिलाइ सहसा * धावा गरे वेगले ॥
त्यस्तै व्यूह हजूरको पनि थियो * तैयार हे भूपति !
रोके वेग विपक्षिको अघि सरी * सेना र सेनापति ॥३५॥
लागे गर्न प्रहार सैन्यहरुले * रोके र छेके पनि ।
काटे व्यूहमहाँ पसेर रिसले * कालाग्नि जस्ता बनी ॥
जस्तो गिर्दछ वृक्षबाट जिमिमा * पाकी सकेको फल ।
लागे गिर्न मरेर त्यै किसिमले * सेनाहरूको दल ॥३६
योद्धा भीष्म असाध्य क्रोधित भई * छोड़े हजारौं शर ।
सेना नाश भए असंख्य र पऱ्यो * हाहा विपक्षीतिर ॥
त्यो देखेर शिखण्डिका संग पुगे * श्री पार्थ त्यै स्थानमा ।
बर्साए जल वृष्टि झैं शरहरू * उत्साहका साथमा ॥३७॥
ठूला भूपति पृष्ठरक्षक जती * योद्धा थिए भीष्मका ।
कोही बढन सकेन रोकिन गए * फेला परी पार्थका ॥
योद्धा भीष्म रिसाइ अस्त्रहरूको * वर्षा गरी त्यो घरी ।
मारी सैनिक; पार्थको तनभरी * घाऊ गरे बेसरी ॥३८॥
तिन्को चोट खपी भने विजयले * योद्धा शिखण्डीसित ।
चाँड़ो वीर ! तिमी अघी बढ़, भई * शास्त्रास्त्रले सज्जित ॥
मानू पर्दछ भीष्मलाई तिमिले * यो आजको युद्धमा ।
गर्नेछु म पनी प्रहार बलले * तिम्रो रही साथमा ॥३९
तिन्को बात सुनेर गर्जन गरी * बढ्दै शिखण्डी गए ।
योद्धा पाण्डवपक्षका अरु पनी * रक्षार्थ पुग्दा भए ॥

धृष्टद्युम्न विराट औ द्रुपदजी * योद्‌धा सुभद्रासुत ।
पावा गर्न पुगे पितामहजिको * सामू भई क्रोधित ४०॥
देखी कौरव वीरले समरको * त्यस्तो नराम्रो स्थिति ।
दौड़े रोक्न भनेर शत्रुतिरको * त्यो वेग हे भूपति !
वर्षाए शर भीमको उपरमा * भूरिश्रवाले गई ।
लड्थे वीर विकर्ण औ नकुलजी * साह्रै चनाखो भई ॥४१
रोके श्री कृतवर्मले द्रुपदका * सत्पुत्रलाई त्यहाँ ।
लड्थे श्री सहदेव औ कृप दुवै * क्रोधित् भई मन्‌महाँ ॥
रोके दुर्मुखले घटोत्कच बली * दुर्धर्षको वेग त्यो ।
श्री दुर्योधनको र सात्यकिजिको * संग्राम झन् मच्चियो ।४२
लड्थे श्री अभिमन्युका सँग डटी * काम्बोजका भूपती ।
रोके वेग विराट औ द्रुपदको * द्रौणी रिसाई अति ॥
द्रोणाचार्य तथा युधिष्ठिर दुवै * लड्दै थिएर क्रोधले ।
योद्धा पार्थ शिखण्डिका सँग पुगी* गर्जे ठुलो वेगले ॥४३॥
धृष्टद्युम्न कराइ उच्च स्वरले * हेरेर सेनातिर ।
भन्थे भीष्मजिलाइ मार्न सबले * उद्योग चाँड़ो गर ॥
आए इन्द्र भने पनी समरमा * मार्छन्‌ लड़ी पार्थले ।
शक्ती शून्य र धैर्यहीन र बुढ़ा * के लड्दछन् भीष्मले ४४
तिन्को बात सुनी सबै अघि बढ़े * अत्यन्त उत्साहले ।
पारे घायल भीष्मलाइ शरको * वर्षा गरी वेगले ॥
देखेथे सबले ठुलो समरमा * यौटा कुरा अद्‌भुत ।
श्री दुःशासन पार्थका सँग भए * संग्राममा उद्यत ॥४५
ठुलो वेग समुद्रका तटमहाँ * रोकिन्छ जुन् चालले ।
त्यस्तै वेग किरीटिको हजुरका * रोकी दिए पुत्रले ॥

जस्तो युद्ध भयो मयासुर तथा * श्री इन्द्रको पूर्वमा ।
त्यस्तै युद्ध गरे सवेग दुइले * उत्साहका साथमा ॥४६
तीसोटा शरले धनञ्जय तथा * श्री कृष्णलाई पनि ।
पारे घायल पुत्रले हजुरका * हुन् मुख्य वैरी भनी ॥
काटी छत्र-ध्वजा, मुकूट शिरको * नौ बाणले पार्थले ।
घाऊ पारिदिए बग्यो रगतको * धारा ठुलो वेगले ॥४७
श्री दुःशासन भीष्मको रथमहाँ * दौड़ेर पुग्दा भए ।
रक्षा जीवनको गरी श्रम हरी * ती युद्धमा तम्सिए ॥
गर्थे शस्त्र प्रहार भीष्मतिर जो * श्री सात्यकी क्रोधले ।
राजन्! रोक्न भनी अलम्बुष पुग्यो * साह्रै ठुलो वेगले ॥४८॥
पारे राक्षसलाइ घायल छिटै * श्री सात्यकीले जब ।
आए श्री भगदत्त सैनिक लिई * आफ्ना भएका सब ॥
छाड़ी बाण अठार घायल गरी * शक्ती चलाई दिए ।
त्यस्को सात्यकिले अनेक टुकुरा * पारी खसाल्दा भए ॥४९
श्री दुर्योधनले पुगीकन त्यहाँ * चौतर्फ घेरा दिई ।
बर्साए हतियार वीरहरूले * तिनलाइ क्रोधित् भई ॥
तिन्का शस्त्र गरी निवारण छिटै * श्री सात्यकी गर्जिए ।
ठूलो शब्द सुनी सुयोधन पुगी * त्यो वेग रोकीलिए ॥५०
त्यै वेला दस वीरले हजुरका * छाड़ी अनेकौं शर ।
पारे घायल भीमलाइ रणमा * छेकेर चारैतिर ॥
एक्लैले सब वीरका शरहरू * टुक्रा अनेकौं गरी ।
काटे छत्र-धनू-ध्वजा-रथ सबै * श्रीभीमले त्यो घरी ॥५१॥
बर्साई हतियार देहभरिमा * घाऊ गराई कन ।
शेखी झारिदिएर वीर दसको * थाले तिनी गर्जन ॥

त्यो वेला दुइतर्फका नरपते ! * जम्मा भई सैनिक ।
लागे गर्न प्रहार क्रोधित भई * शस्त्रास्त्र संहारक ॥५२
लागे गिर्न मरी धमाधम कती * मूर्छा परेथे कति ।
घोडाले, रथले र मत्त गजले * कुल्ची मरेथे कति ।
दाज्यू-भाइ पिता र पुत्र रणमा * चिन्दैनथे त्यो घरी ।
सेना नाश भए दुवै तरफका * त्यो युद्धमा बेसरी ॥५३
राजन् ! अर्जुनले अघिल्तिर छिटै * राखी शिखण्डी कन ।
वर्साए शर भीष्मको शरिरमा * गर्दै ठूलो गर्जन ॥
तेरो काल स्वयं उपस्थित म छु * उम्केर जालास् कहाँ ।
पर्खी भीष्म ! तँलाइ मार्दछु छिटै * मैले लड़ाईंमहाँ ॥५४॥
तैंले लड्नु डटी नलड्नु रथमा * शस्त्रास्त्र राखी दिनू ।
नारी ठान्नु मलाइ वीर हुँ भनी * संग्राममा तम्सिनु ॥
मेरा निम्ति महत्त्वहीन छ कुरा * तैंले जती भन्दछस् ।
रक्षा हुन्न कुरा गरी समरमा * माछु छिटै मर्दछस् ॥५५॥
यस्तो बात शिखण्डिको सब सुने * श्री भीष्मजीले तर ।
थाले गर्न प्रहार, केहि नदिई * त्यो क्षुद्रको उत्तर ॥
सेना पाण्डवतर्फका वरिपरी * जो जो डटेका थिए ।
वर्साई शर श्री पितामहजिले * संहार गर्दा भए ॥५६॥
घाऊ लागि कती, मरी कति गिरे * मूर्च्छा परेथे कति ।
हाहा पारिदिए पितामहजिले * तत्काल हे भूपति !
भागेका निज सैन्यलाइ सहसा * देखेर श्री पार्थले ।
छाड़े वाण तिखा पछिल्तिर रही * साह्रै ठूलो वेगले ॥५७॥
घाऊ लागि शरीरमा रगतको * धारा बगे तापनि ।
माग चोट खपी रहे विजयको * हो वंश आफ्नो भनी ॥

श्री दुःशासनले पराक्रम गरे * रक्षार्थ श्री भीष्मको ।
रोके वेग डटेर बाण सयले * तत्काल श्री पार्थको ॥५८
पाँचोटा शरले ध्वजा-रथ-धनू * टुक्रा गराई कन ।
श्री दुःशासनलाइ मूर्छित गरी * गर्जी रहे अर्जुन ॥
त्यो देखेर सवेग बाण धनुमा * राखे छिटै भीष्मले ।
तीनोटा शर छाडि तीन टुकुरा * पारे धनू पार्थले ॥५९॥
अर्को श्रेष्ठ धनू लिएर करमा * तिन्ले रिसाई जब ।
काटे त्यो धनुलाइ एक शरले * श्री पार्थजीले तब ॥
लिन्थे भीष्म जती-जती धनुहरू * संग्रामको खातिर ।
काट्थे पार्थ सवेग तत्पर रही * छाड्दै अनेकौं शर ॥६०
आँटे शक्ति लिएर छाड्न सहसा * श्री भीष्यले वेगले ।
काटे छाड्न नपाइ शक्ति करमै * तत्काल नौ बाणले ॥
छाड्थे शस्त्रहरू अघिल्तिर डटी * धेरै शिखण्डी पनि ।
हेर्थे मात्र घुमाइ नेत्र रिसले * श्री भीष्म आगो बनी॥६१
रक्षा खातिर भीष्मको वरिपरी * जो मुख्य योद्धा थिए ।
तिन्ले अर्जुनलाइ बाणहरूले * चौतर्फ ढाकी दिए ॥
पैह्ले शस्त्रहरू निवारण गरी * प्रत्येक योद्धा कन ।
पारी घायल वेसरी समरमा * गर्जी रहे अर्जुन ॥६२॥
आए लड्न भनी सवेग रथमा * ब्युँतेर दुःशासन ।
भन्छन् भीष्म रिसाइ पार्थ यसरी * शस्त्रास्त्र छाड्छन् किन ? ॥
ह्वैनन् बाण शिखण्डिका अतितिखा * हुन् बाण यी पार्थका ।
शक्ति क्षीण हुँदैछ संमुख परी * धेरै थरी अस्त्रका ॥६३॥
गर्थे बात यता अघिल्तिर उता * राखी शिखण्डी कन ।
छाड्थे बाण लुकी धनञ्जय जती * पुग्थ्यो सबै गाड्िन ॥

खाली स्थान रहेन देखिन गयो * सर्वाङ्ग चाल्नो सरी ।
मूर्च्छा पर्न गई लडे रथमहाँ * श्री भीष्म सोही घरी ॥६४
तिन्को देहभरी तिखा शरहरू * जो गाड़िएका थिए ।
गिर्दा त्यो रथबाट सोही शरको * शय्या गरी पल्टिए ॥
आयो चेत र दक्षिणायन हुँदा * श्री सूर्यनारायण ।
राखे जीवन उत्तरायणमहाँ * मर्छु भनी त्यो क्षण ॥६५

भीष्मलाई बाणको तकिया दिएर जल-पान गराउनु र श्रीकृष्ण-युधिष्ठिर संवाद :—

सोधे श्री धृतराष्ट्रले मनमनै * रोएर हे सञ्जय ! ।
जस्ले पालन ब्रह्मचर्य व्रतको * गर्थे नमानी भय ॥
त्यस्ता वीर गिरेपछी समरमा * हाम्रो उताको पनि ।
कस्तो बात गरे सबै भन छिटै * सुन्छु म हे सद्गुणी ! ॥६६
लागे सञ्जय भन्न—हे नरपते ! * देखेर युद्ध-स्थिति ।
थाले गर्जन शत्रुतर्फ खुशिले * योद्धा र सेना जति ॥
चिन्ताग्रस्त थिए सुयोधन निकै * देखेर ठूलो क्षति ।
रोकी युद्ध पुगे रुँदै सब त्यहीं * सेना तथा भूपती ॥६७
देखी भीष्मजिले सबैकन त्यहाँ * जम्मा भएका जब ।
गर्थे स्वागत प्रेमले सकलको * वैरत्व बिर्सी सब ॥
शय्यामा शरको हुँदा तल अली * झुण्डीरहेथ्यो शिर ।
मागेथे तकिया र उत्तम छिटै * गर्दा भए हाजिर ॥६८॥
चारै तर्फ जड़ाउ झालर तथा * बुट्टा हुने सुन्दर ।
देखी त्यो तकिया भने वरिपरी * हेरी सबैका तिर ॥
शोभा हीन भनी अयोग्य तकिया * लिन्नन् कुनै वीरले ।
दिन्छन् हेर, सबै मलाइ तकिया * शोभा दिने पार्थले ॥६९

आज्ञा भीष्मजिको सुनेर मनमा * श्री पार्थ खुशी भए ।
तीनोटा शरको बनाइ त्रिकुटी * राम्रो तकीया दिए ॥
सोझो भो शिर त्यो सुयोग्य तकिया * पाएर वीरोचित ।
दिन्थे आशिष पार्थलाइ 'रणमा * जित्ने' भई हर्षित ॥७०॥
हेरे दृष्टि घुमाउँदै वरिपरी * जो जो जुटेका थिए ।
'पानी खान्छु' भनी पितामहजिले * तत्काल मागी लिए ॥
आज्ञा पाइ गएर सैनिक छिटो * मीठो तथा शीतल ।
झारीमा सुनका सवेग दगुरी * ल्याई पुऱ्याए जल ॥७१
पानी खान्नँ म यो र वस्तु पनि क्यै * भोग्दीनँ यो लोकको ।
गर्छु दर्शन छन् उपस्थित भने * श्री कृष्णको, पार्थको ॥
आज्ञा पाइ गएर झट्ट नजिकै * भन्दा भए अर्जुन ।
इच्छा जे मनमा छ त्यो कहिदिए * गर्नें थिएँ पालन ॥७२॥
बिन्ती अर्जुनको सुनीकन भने * खुशी भई भीष्मले ।
घाऊ पारिदिंदा शरीरभरिमा * तिम्रा तिखा बाणले
बाबू ! दग्ध हुँदैछ यो बखतमा * सम्पूर्ण मर्म-स्थल ।
लाग्यो प्यास सुकेर ओठ,मुख लौ * ल्याएर देऊ जल ॥७३॥
तिन्का भाव बुझेर श्री विजयले * राखी धनूमा शर ।
पर्जन्यास्त्र गरी प्रयोग मनले * छाडेर पृथ्वीतिर ॥
पैह्ले स्वच्छ सुधा समान जलको * धारो निकाली लिए ।
त्यो धारो मुखमा पितामहजिको * पर्नें तुल्याई दिए ॥७४॥
पारे भीष्मजिलाई तृप्त यसरी * श्री पार्थले त्यो घरी ।
हेर्थे भूपहरू वरीपरि सबै * लाटोक्वसेरा सरी ॥
आशीर्वाद दिए पितामहजिले * आनन्द मानीकन ।
अर्को छैन कुनै धनुर्धर तिमो * झैं श्रेष्ठ हे अर्जुन ! ॥७५

हुन्छन् उत्तम जीव जङ्गम सबै * प्राणीहरूमा नर ।
जस्तै उत्तम पक्षिमा गरुड़ छन् * विख्यात पृथ्वीभर ॥
भन्छन् श्रेष्ठ समुद्रलाइ नदिमा * श्री सूर्य छन् तेजमा ।
जस्तै श्रेष्ठ सुमेरु छन् गिरिमहाँ * छन् जातमा ब्राह्मण॥७६
त्यस्तै श्रेष्ठ तथा धनुर्धर ठूछा * छन् वीरमा अर्जुन ।
सम्झाए ऋषिले तथा परशुराम् * जीले बुझाईकन ॥
मैले द्रोणजिले तथा विदुरले * श्रीकृष्णजीले पनि ।
संझायौं बहुतै सुयोधनजिले * यो युद्ध रोकुन्न भनी ॥७७
मानेनन् हितका कुरा अनि गरे * सद्धर्म उल्लंघन ।
मारिन्छन् अब भीमबाट रणमा * यी वीर दुर्योधन ॥
यस्तो बात सुनी सुयोधन भए * दुःखी तथा चिन्तित ।
त्यो देखेर भने पितामहजिले * तिन्लाइ राम्रोसित ॥७८॥
बाबू ! क्रोध त्यजेर शान्त मनले * मैले भनेको सुन ।
जस्तो अर्जुनले पराक्रम गरे * को सक्छ त्यस्तो भन ॥
आधा राज्य दिएर मेल तिमिले * गर्छौ भने यै घरी ।
मैले मेल गराइदिन्छु अहिले * हे वीर ! राम्रो गरी ॥७९॥
रक्षा गर्न भनेर जुन् पुरुषको * श्रीकृष्ण छन् साथमा ।
सक्तैनौ तिमि जित्नलाइ कहिल्यै * तिन्लाइ संग्राममा ॥
शिक्षा यै रितका दिए अरु पनी * श्री भीष्मजीले तर ।
श्री दुर्योधन मौन भैकन गए * विश्रामका खातिर ८०॥
रक्षा खातिर भीष्मको वरिपरी * सारा व्यवस्था गरी ।
फर्के पाण्डवतर्फका पनि सबै * खूशी भई बेसरी ॥
बाटोमा हरिले युधिष्ठिरजिको * सन्तोषका खातिर ।
आज्ञा गर्नुभयो प्रसन्न मनले * गर्दै ठुलो आदर ॥८१॥

गिनूँ भीष्म लड़ाइँमा नरपते ! * सौभाग्यको बात हो ।
हाम्रो जीत हुनू पनी त यसरी * संग्राममा भाग्य हो ॥
ठूला वीर थिए पितामह पनी * विख्यात संसारमा ।
हेर्दा नेत्र घुमाउँदै हजुरले * गिर्दा भए युद्धमा ॥८२॥
आफ्नू आदरको कुरा जब सुने * श्री धर्मका पुत्रले ।
लागे भन्न समाउँदै चरणमा * श्री कृष्णको प्रेमले ॥
जस्का रक्षक छन् तिनै भुवनका * मालीक दामोदर ।
त्यस्को जीत हुनू सबै तरहले * आश्चर्य नै के छ र !॥८३
जो पर्नेछ हजूरका शरणमा * कल्याणकर्त्ता भनी ।
त्यस्को जीत सदैव हुन्छ रणमा * हार्दैन कैल्हे पनी ॥
यस्ता बात सुनी सकी मुसुमुसू * हाँसे ति योगेश्वर ।
मान्दै हर्ष पुगे सबै शिबिरमा * विश्रामका खातिर ॥८४॥

भीष्म र कर्णको रहस्यमय संवाद :—

लागे सञ्जय भन्न–हे नरपते ! * जानेर युद्ध-स्थिति ।
आए कर्ण छिटै पितामहकहाँ * मन्मा डराई अति ॥
आँखा बन्द गरेर मौन शरको * शय्या गरेका त्यहाँ ।
देखी भीष्मजिलाइ दुःखित भए * श्रीकर्णजी मन्महाँ ॥८५॥
तिन्को धैर्य अदम्य साहस ठुलो * जानेर संग्राममा ।
केही बेर गरी विचार मनले * ढोगी दुवै पाउमा ॥
बोले हे कुरुश्रेष्ठ ! भीष्म, सुगुणी * हे वीर देवव्रत !
जस्को द्वेष सदैव राखिलिनुभो * त्यै हूँ म राधा-सुत ॥८६
खोली नेत्र हटाइ रक्षक सबै * एकान्त पारीकन ।
राखी काँधमहाँ दुवै कर गरे * सानन्द आलिङ्गन ॥

गर्दै स्नेन भने पितामहजिले * हे वीर कुन्ती-सुत !
आऊ, आउ म गर्दछु मनमनै * तिम्रो ठुलो स्वागत ॥८७
राधाका सुत वा अधीरथ पिता * तिम्रा दुवै होइनन् ।
श्री कुन्ती जननी तथा रवि पिता * तिम्रा दुवै श्रेष्ठ छन् ॥
ज्ञानी नारदले र व्यास मुनिको * आज्ञा हुनाले गरी ।
यस्मा संशय छैन सत्य तिमिले * जानी लिए राम्ररी ॥८८॥
ज्ञाता छौ तिमी शस्त्र-अस्त्रहरुका * दानी तथा सद्गुणी ।
सक्छौ गर्न तिमी पराक्रम ठुलो * आँटे त जेहे पनि ॥
तिम्रा पाण्डव भाइ हुन् यदि तिमी * सल्लाह मान्छौ भने ।
तिन्का साथ मिले दुवै तरफको * कल्याण देख्छु हुने ॥८९
मेरो मृत्यु भएर अग्नि बलियो * संग्रामको यो निभोस् ।
गर्दैछु शुभकामना हित सबै * राजा प्रजाको गरोस् ॥
बोले कर्ण—हजूरका सब कुरा * हुन् सत्य यी मान्दछु ।
कुन्तीको सुत हूँ, पिता रवि भनी * मैले पनी जान्दछु ॥९०
तिन्ले त्यागिदिंदा सुयोधनजिले * गर्दा भए पालन ।
मैले त्याग्न हुँदैन यो बखतमा * तिन्लाइ यै कारण ॥
जस्तै रक्षक पाण्डुपुत्रहरुका * छन् कृष्ण योगेश्वर !
त्यस्तै वैभव, देह वीर कुरुका * निम्ती छ यो हाजिर ॥९१
यो संहार अवश्य हुन्छ अब ता * टर्दैन टारे पनि ।
मान्नूपर्दछ दैवको गति सदा * हे वीर ! ठूलो भनी ॥
मैले जान्दछु धैर्य, साहस सबै * श्री कृष्णको, पार्थको ।
जित्ने ती दुइलाइ यो पृथिवीमा * शक्ती छ कुन वीरको ?९२
लड्ने ती दुइ वीरका सँग सदा * उत्साह राख्ने हुँदा ।
जित्नेछु म किरीटिलाइ रणमा * राख्छु म शक्ती सदा ॥

मेरो निश्चय भै सक्यो समरमा * जाने त्यसै कारण ।
आशीर्वाद हजूरको र रणको * आएँ म आज्ञा लिन ॥९३
बिझ्ने बात तथा अनादर कुनै * मैले गरेको भया ।
माफी बक्सनुहोस् प्रसन्न मनले * राखी ममाथी दया ॥
कुन्तीका सुतको कुरा सुनिसकी * आज्ञा दिए भीष्मले ।
जे इच्छा मनमा छ प्राप्त गर त्यो * हे कर्ण ! उत्साहले ॥९४
मैले जो कटु बात बेसरी भनें * मौका कुमौकामहाँ ।
त्यस्को ख्याल नराख्नु वीर ! तिमीले* कैल्हे पनी मन्‌महाँ ॥
धेरै यत्न गरें दुवै तरफको * कल्याण सोची तर ।
सिद्धि प्राप्त भएन, छन् बरु सबै * यी मर्नमा तत्पर ॥९५॥
भन्छौ युद्धबिना कुनै तरहले * जाँदैन यो शत्रुता ।
देखाऊ तिमिले गई समरमा * बाबू ! ठुलो योग्यता ॥
राखी धैर्य सदैव साहस गरी * सद्धर्मको पालन् ।
आज्ञा दिन्छु लडाइँमा अब तिमी * जाऊ खुशी भैकन ९६
थामी क्षत्रियधर्म योग्य रितले * लड्दा अगाड़ी सरी ।
पाऊ वीर गती ठुलो, विजयको * गाण्डीव द्वारा मरी ॥
आशीर्वाद लिई प्रणाम गरि ती * श्री भीष्म योद्धाकन ।
फर्की कर्ण गए सुयोधनकहाँ * दुःखी गराई मन ॥९७॥

भीष्मपर्व समाप्त

*

: श्रीः :

# महाभारत द्रोणपर्व

कुरु-वीर र द्रोणको अगाड़िके गर्ने भन्ने मन्त्रणाः —

जस्को छ आठ करमा सब अस्त्र-शस्त्र ।
जो पार्दछिन् समरमा अरिलाई त्रस्त ॥
तिन्का सफा चरणमा परि बार-बार ।
बिन्ती म गर्दछु, ठुलो भव-सिन्धु तार ॥१॥

वैशम्पायनले भने—सुन कथा * हे भूप ! जन्मेजय !
सोधे श्री धृतराष्ट्रले नगिचमा * डाकेर हे सञ्जय !
त्यागी शस्त्र सबै गिरे समरमा * श्रीभीष्म योद्धा जब ।
भन्छन् पाण्डव के कुरा र बहुतै * दुःखी हुनन् कौरव ॥२॥
हामीतर्फ ठुलो पराक्रम हुने * श्रीभीष्म जस्तो छ को ?
होला जीत अवश्य यो समरमा * श्री पाण्डुका पुत्रको ॥
के गर्दैछ विचार यो बखतमा * पापिष्ट दुर्योधन ।
बाबू सञ्जय ! युद्धको स्थितिसबै* चाँडो मलाई भन ॥३॥
बोले सञ्जयजी, भयो जब त्यहाँ * श्रीभीष्मको त्यो स्थिति ।
गर्थे कौरव वीर शोक रणमा * आफ्नू बुझी दुर्गति ॥
राधाका सुत कर्ण त्यै बखतमा * आएर गर्जी कन ।
थाले भन्न—समस्त वीरहरु हो ! * मैले भनेको सुन ॥४॥
वर्ता स्नेह भएर पाण्डु-सुतको * श्री भीष्मको चित्तमा ।
मारेनन् तिनिलाइ क्रोधित भई * शस्त्रास्त्रले युद्धमा ॥

ठूलो युद्ध गरेर पाण्डहवरू * -लाई म माछु अब ।
हाम्रो जीत हुनेछ, त्याग मनमा * शङ्का छ जो त्यो सब॥५
योद्धा द्रोण प्रसिद्ध छन् अब हउन् * ती वीर सेनापति ।
गर्नैछ कुरु-फौजको म रणमा * रक्षा सकेको जति ॥ ॥
तिन्को बात सुनी निकै खुशि भए * हे नाथ ! दुर्योधन ।
सेनाका पतिको दिए पद ठुलो * श्रीद्रोण योद्धाकन ॥६॥
श्री दुर्योधनलाई द्रोण गुरुले * भन्नूभयो—लौ अब ।
जे इच्छा मनमा छ त्यो सुन तिमी * पूरा म गर्छु सब ॥
त्यो आज्ञा सुनि द्रोणको खुशि भए * अत्यन्त दुर्योधन ।
केही बेर गरी विचार मनमा * भन्छन् बुझाईकन ॥७॥
बाँधी धर्म-कुमारलाइ रणमा * राखेर नै जीवित ।
सुम्पी बक्सनुहोस् मलाइ सबको * होला यसैले हित ॥
श्री दुर्योधनको कुरा सुनिसकी * भन्नूभयो द्रोणले ।
माग्यौ जीवित शत्रुलाइ अहिले * हे बाबू ! कुन् हेतुले ॥८॥
जस्का शत्रु पनी सहर्ष नमरी * बाँची रहुन् भन्दछन् ।
तिन्को नाम अजातशत्रु सबले * त्ये हेतुले मान्दछन् ॥
तिम्रो वैभव, राज्य, जीवन लिने * पक्का इरादा लिई ।
आएको छ लड़ाइमा अघिसरी * जो मुख्य बैरी भई ॥९
त्यस्ता धर्मकुमारलाई तिमिले * हे वीर ! दुर्योधन !
भन्दैनौ वध गर्न योग्य रणमा * के बात सोचीकन ?
आफ्नू भाग लिएर सादर बसुन् * भन्छौ भने पाण्डव ।
ऐहले मेल गराउँछु हिंड तिमी * त्यागी कुशंका सब ॥१०
श्री दुर्योधनले भने गुरुजिको * सल्लाह त्यस्तो सुनी ।
योद्धा अर्जुनलाइ जित्न रणमा * सक्तैन कोही पनि ॥

हाम्रो नाश हुनेछ युद्ध यसरी * चल्दै रहे क्यै दिन ।
पक्रौं जीवित भन्दछु म त गुरो ! * तिन्‌लाइ ये कारण ॥११



द्रोणाचार्य र दुर्योधनको वार्तालाप

चारै भाइ सहर्ष धर्मसुतको * आज्ञामहाँ चल्दछन् ।
तिन्‌को पाइ हुकुम् छिटै विजयले * संग्राम यो थाम्दछन् ॥
थामे युद्ध भने मरे जति गए * बाँकी सबै बाँच्तछन् ।
सोही कारणले युधिष्ठिर सधैं * सानन्द बाँचीरहुन् ॥१२
त्यो इच्छा गुरुले सुयोधनजिको * सुन्नूभएथ्यो जब ।
केही बेरपछी बताउनुभयो * आफ्नू इरादा सब ॥
योद्धा अर्जुनलाइ जित्न रणमा * सक्तैन कोही पनि ।
भन्दैछौ तिमि नै, भनौं म कसरी * पक्रेर बाँध्छु भनी ॥१३
रक्षा धर्म-कुमारको जतनले * गर्छन् स्वयं फाल्गुन ।
साम्नू अर्जुनकै सकिन्छ कसरी * तिन्‌लाइ पक्री लिन ॥

योद्धा अर्जुनलाइ क्यै तरहले * अन्तै हटायौ भने।
मेरा सामुमहाँ युधिष्ठिर अनी * छन् युद्धमा आउने ॥१४
हे राजन्! रणमा घटी दुइ जसै * आएर ती टिक्तछन्।
सक्नेछु तिनलाई पार्न वशमा * पक्का पनी पर्दछन् ॥
वार्ता गुप्त गरी सुयोधनजिले * त्यो राख्नुपर्थ्यो तर।
जाने पाण्डव पक्षले पनि थिए * तिन्का अनेकौं चर ॥१५

द्रोणाचार्यको पहिलो दिनको युद्धः—

हे राजन्! गुरुले सुयोधनजिको * सम्पूर्ण चिन्ता हरी।
आफैं व्यूह रचे ठुलो 'शकट' झैं * लड्ने इरादा धरी ॥
थाले बज्न मृदङ्ग, ढोल, नगरा * आवाज त्यस्को सुनी।
भागे कायर, शूर वीर खुशिले * नाच्थे म लड्छु भनी॥१६
आफूलाइ समाउने गुरुजिको * त्यस्तो प्रतिज्ञा सुनी।
भाईलाइ भने युधिष्ठिरजिले * अत्यन्त दुःखी बनी ॥
गर्छन् यत्न मलाइ आज रणमा * श्री द्रोणले पक्रन।
हे भाई! तिमिले उपाय सजिलो * यस्को गर्‍यौ के भन॥१७
लागे अर्जुन भन्न जीवित म छु * हे नाथ! जैह्ले तक।
चिन्ता व्यर्थ नगर्नुहोस् हजुरले * हे शत्रु—संहारक!
पाएथे जब श्री धनंजयजिको * त्यो श्रेष्ठ आश्वासन।
'क्रौंच व्यूह' रचे युधिष्ठिरजिले * आनन्द मानीकन ॥१८
सामुन्ने दुइतर्फका जब डटे * आएर सेनाहरू।
एघारौं दिनको भयो समर त्यो * श्री द्रोणद्वारा शुरू ॥
सेना पाण्डवतर्फका गुरुजिले * मारे नराम्रो गरी।
खोलो बग्न गयो ठुलो रगतको * हे भूपती! त्यो घरी ॥१९

दौडे पाण्डव वीर देखि रणको * त्यस्तो नराम्रो स्थिति ।
थाले गर्न प्रहार कौरवहरू * पर्थे अगाड़ी जति ॥
तोडे श्री सहदेवले शकुनिको * मारेर घोड़ा, रथ ।
मारे सारथि, अश्व श्री शकुनिले * रोकेर तिन्को पथ ॥२०॥
आफाफ्ना रथले विहीन त्यसरी * दोटै भएथे जब ।
थाले मण्डल बाँधि लड्न बलियो * हान्दै गदाले तब ॥
द्रोणाचार्यजिलाइ श्री द्रुपदले * रोके अगाडी सरी ।
घाऊ पारिदिए अनेक शरले * हानेर सोही घरी ॥२१॥
छाड़ी पङ्ख सुवर्ण मण्डित हुने * तीखा अनेकौं शर ।
घाऊ पारिदिए निकै द्रुपदले * सारा शरीरै भर ॥
त्यो देखेर रिसाइ तीक्ष्ण शरले * हानी गुरु द्रोणले ।
पारे घायल बेसरी, द्रुपदजी * भागे ठुलो वेगले २२
श्री दुर्योधनका 'विविंशति' यहाँ * जो एक भाई थिए ।
तिन्ले सारथि भीमको रथ ध्वजा * सम्पूर्ण नाशी दिए ॥
हाने एक गदा वृकोदरजिले * साह्रै रिसाई कन ।
आँटे मार्न भनी विविंशति छिटै * भागे लिई जीवन ॥२३॥
हे राजन् ! कृतवर्म सात्यकि दुवै * योद्धा भई सम्मुख ।
थाले लड्न दुवै परस्पर डटी * रोकेर बढ्ने पथ ॥
रोकेथे पथ श्री जयद्रथजिको * ती छत्रधर्मै गई ।
थाले गर्न प्रहार बेसरि दुवै * मार्नै इरादा लिई ॥२४॥
जान्थे लड्न भनी युयुत्सु बलले * श्री द्रोण योद्धातिर ।
रोके आइ सुबाहुले तनभरी * हानेर तीखा शर ॥
तिन्का बाणहरू अनेक टुकुरा * पारेर काटी कन ।
दोटै हात युयुत्सुले धनुसहित * काटी दिए त्यै क्षण ॥२५॥

जस्तो युद्ध भयो अघी नरपते ! * त्यो घोर देवासुर ।
त्यस्तै शल्य तथा युधिष्ठिर भए * संग्राममा तत्पर ॥
हान्थे शल्य तिखा-तिखा शर जति * ताकेर लाग्ने गरी ।
काट्थे धर्मकुमार पारि टुकुरा * ती बाण सोही घरी ॥२६
मारी सारथि अश्व औ रथ, ध्वजा * टुक्रा गराई दिए ।
त्यस्को शल्य रिसाइ झट्ट बदला * नौ बाणद्वारा लिए ॥
योद्धा वाह्लिक भूपती द्रुपदजी * बूढा थिए तापनी ।
थाले गर्न प्रहार क्रोधित भई * माछु कि मछु भनी ॥२७
योद्धा श्री अनुविन्द, विन्द दुइले * सम्पूर्ण सेना लिई ।
रोकेथे रथ गै विराट नृपको * चौतर्फ घेरा दिई ॥
अग्नी इन्द्र अघी बलीसित लड़े * जुन् चाल्ले स्वर्गमा ।
तिन्को युद्ध पनी भयंकर भयो * त्यस्तै कुरुक्षेत्रमा ॥२८॥
जान्थे श्री सुतसेन तीव्र गतिले * श्री द्रोण योद्धातिर ।
रोके झट्ट विविंशती अघिसरी * हानेर तीखा शर ॥
सातोटा शर तीव्र भीमरथले * मन्त्रेर छाड़े जब ।
पौंचाए यमलोक सारथिसहित् * श्री शाल्वलाई तब ॥२९॥
सामुन्ने प्रतिविन्ध्य द्रोणगुरुको * आए जसै तम्सिई ।
रोके बाण चलाइ आठ बिचमै * द्रौणी अगाड़ी गई ॥
जान्थे कैकयपुत्र पाँच बलिया * बढ्दै अगाड़ीतिर ।
रोके कर्ण पुगी त्यसै बखतमा * छाडी अनेकौं शर ॥३०॥
मारेथे मणिमानलाइ रणमा * भूरिश्रवा भूपले ।
थाले गर्जन ती दुवै तरफका * योद्धाहरू रोषले ॥
धूलो, अग्नि र लौहका घन, गदा * शस्त्रास्त्र औ पत्थर ।
फ्याँक्तै राक्षस त्यो घटोत्कच पुग्यो * संग्रामको खातिर ॥३१॥

त्यस्को रोष तथा पराक्रम दुवै * देखेर योद्धा पनि ।
गर्थे आपुसमा कुरा डर परी * लौ काल आयो भनी ॥
त्यस्को वेग ठुलो अलम्बुष पुगी * रोक्यो अगाडी सरी ।
थाले लड्न दुवै अनेक थरिका * शस्त्रास्त्र वर्षा गरी ॥३२॥
भिन्नाभिन्न लड़े दुवै तरफका * योद्धा र सेनापति ।
जो संहार भयो त्यहाँ नरपते ! * मैले बताऊँ कति !
श्री दुर्योधनको वृकोदरजिको * संग्राम चल्दै थियो ।
सेना मत्त अनेक श्रेष्ठ गजको * आएर घेरा दियो ॥३३॥
योद्धा भीम रिसाइ तीक्ष्ण शरले * हान्थे गदाले जब ।
फोरी मस्तक बग्दथ्यो रगतको * धारा र ढल्थे सब ॥
मारी त्यै गज-सैन्यलाइ रणमा * हा हा ! गराई दिए ।
श्री दुर्योधनलाई आठ शरले * हाना छिटै गर्जिए ॥३४॥
लाग्दा घाउ निकै सुयोधन ठुलो * पीड़ा भई आर्त्तिए ।
त्यो वेला भगदत्त श्रेष्ठ गजमा * रक्षार्थ पुग्दा भए ॥
तिनको त्यो गजमा हजार गजको * शक्ती हुनाले गरी ।
चिच्याई रथ भीमको सहजमा * फाली दियो बेसरी ॥३५
भागेथे जब भीम स्यन्दन त्यजी * कुर्लेर माछु भनी ।
लाग्यो दौड़न वेगले पछि-पछी * त्यो श्रेष्ठ हात्ती पनी ॥
हाने बाण रिसाइ बीस शिरमा * फर्केर श्री भीमले ।
लाग्यो मस्तकबाट बग्न मदको * धारा ठुलो वेगले ॥ ६
खुट्टाले अनि सूँढ़ले शरिरले * थिच्दै र मिच्दै गरी ।
थाल्यो दल्मल गर्न पाण्डु-सुतका * सम्पूर्ण सेना भरी ।
बर्साए सबले मिली शरहरू * त्यस्लाइ मारौं भनी ।
घुम्थ्यो त्यो गजराज घायल भई * संग्राममा फन्फनी ॥३७॥

धेरै भूप मरे र सैनिक कती * भागे डराई कन ।
देखी दुर्गति सैन्यको समरमा * आए स्वयं अर्जुन ॥
त्यो देखेर पुगे सवेग गुरुजी * श्री पार्थका सामुमा ।
चेला औ गुरुको पऱ्यो अति ठुलो * संग्राम त्यो स्थानमा ॥३८

गर्थे ती गुरु-शिष्य उच्च स्वरले * गर्जेर शङ्ख-ध्वनि ।
त्यो पैह्लो दिनको ठुलो समरमा * हारेन कोही पनि ॥
सन्ध्याकाल भयो दुवै तरफका * सेना र सेनापति ।
फर्कंथे अति हर्षले शिविरमा * तत्काल हे भूपति ॥३९

द्रोणाचार्यको दोस्रो दिनको युद्ध, अर्जुनद्वारा संसप्तक
सेनाका अधिकांश भागको संहार

राजन् ! सैन्य डटे दुवै तरफका * युद्धार्थ बार्हौं दिन ।
भन्नूभो गुरु द्रोणले सुन तिमी * हे वीर दुर्योधन !
हीजोको रणमा सचेत नभए * रक्षार्थ श्री अर्जुन ।
मैले धर्म-कुमारलाइ सहजै * सक्ने थिएँ पक्रन ॥४०

लागे भन्न सुनेर बात गुरुको * राजा सुशर्मा त्यहाँ ।
लैजाऊँ भन हे सुयोधन ! छिटै * ती पार्थलाई कहाँ ?
रोक्नेछु जब सैन्यका सँगमहाँ * तिन्लाई मैले पर ।
पक्रुन् धर्मकुमारलाइ गुरुले * छेकेर चारैतिर ॥४१॥

त्यो सल्लाह सुनी त्रिगर्तपतिको * सोत्साह दुर्योधन ।
लागे भन्न बुझाइ द्रोण गुरुको * सामू खड़ा भैकन ॥
सेना साथ रहुन् त्रिगर्तपतिका * संशक्त, नारायणी ।
रोकुन् बुद्धि पुऱ्याइ खूब रणमा * श्रीपार्थलाई तिनी ॥४२॥

यस्तो बात सुनी सुयोधनजिको * राजा सुशर्मा गए ।
ठूलो व्यूह बनाइ सैन्यहरूको * क्यै दूर राख्ता भए ॥

योद्धा अर्जुनलाइ हाँक दिन ती * थाले अगाड़ी सरी ।
तिन्को हाँक सुनेर क्रोधित भए * श्री पार्थजी बेसरी ॥४३॥
धृष्टद्युम्न र सात्यकी, विरहरू * तत्काल डाकी कन ।
लागे भन्न बुझाइ बात रणको * तिनलाइ श्री अर्जुन ॥
बाबू हो ! म यहाँ फिरेर जब तक् * आउन्नँ तैह्ले तक ।
दाजू धर्म-कुमारको तिमीहरू * योद्धा भयौ रक्षक ॥४४
रक्षा गर्नु प्रयत्नपूर्वक सदा * संग्राममा युक्तिले ।
गर्नन् यत्न अवश्य पक्रन भनी * आचार्य श्री द्रोणले ॥
हेरी श्री हरितर्फ ती विजयले * बिन्ती गरे सादर ।
लैजानोस् रथ हे प्रभो ! अब छिटै * राजा सुशर्मातिर ॥४५॥
ऐह्ले हाँक मलाई लड्दछु भनी * तिन्ले दिंदैछन् जब ।
जे गर्दा हित हुन्छ त्यै हजुरले * गर्नू हवस् केशव ! ॥
आज्ञा पालन गर्नुभो प्रभुजिले * बिन्ती सखाको सुनी ।
साह्रै खूशि भए सुयोधन छिटै * पुग्नेछ इच्छा भनी ॥४६
आए पार्थ भनी त्रिगर्त – पतिले * देखे आडी जब ।
आधा चन्द्रसमान व्यूह रचना * आफ्नू गराए तब ॥
बर्साए पहिले रिसाइ तिनिले * हज्जार तीखा शर ।
ढाके अर्जुनलाइ औ रथ पनी * तत्काल चारैतिर ४७॥
काटे त्यो शर-जाल श्री विजयले * टुका हजारौं गरी ।
छाड़ी बाण अनेक घायल छिटै * पारी दिए बेसरी ॥
भाई लड्न पुगे त्रिगर्तपतिका * देखी नराम्रो स्थिति ।
लागी बाण तिखा-तिखा विजयका * तिन्को भयो गद्गति ॥४८
त्यो देखेर त्रिगर्तका नरपती * फेरी अगाडी सरे ।
ताकी अर्जुनतर्फ बाणहरुको * तत्काल वर्षा गरे ॥

ढाकेथ्यो शर-जालले रथ तथा * श्री पार्थलाई जब ।
काटेथे टुकुरा गराइ सहजै * ती बाण तिनूका सब ॥४९॥

शतानीक र सत्यजीत आदिको वध, भयभीत युधिष्ठिरको पलायन :—

देखथे जब द्रोणले विजयजी * अल्झी रहेका उता ।
सेनाको रचि व्यूह त्यो गरुड़ झैं * तैयार पारे यता ॥
धेरै सैन्य लिएर शत्रुतिर ती * बिस्तार बढदै गए ।
जो जो वीर परे अघिल्तिर सबै * संग्राममा मारिए ॥५०॥
त्यो देखेर बनाइ व्यूह बलियो * तैयार पारी लिए ।
धृष्टद्युम्न गएर द्रोण गुरुको * त्यो वेग रोकीदिए ॥
रोके भाइ गई सुयोधनजिको * तिन्लाइ संग्राममा ।
पारी घायल फेरि द्रोण गुरुका * पुग्दा भए सामुमा ॥५१॥
धृष्टद्युम्न बढेर त्यो किसिमले * आए अगाडी जब ।
श्री दुर्योधनले अघीसरी भने * मार्छु तँलाई अब ॥
लागे लडन दुवै रिसाइ बहुतै * शस्त्रास्त्रद्वारा यता ।
बर्साए हतियार द्रोण गुरुले * पाएर मौका उता ॥५२॥
धेरै सैन्य मरे र पाण्डु-सुतको * ठूलो भएथ्यो क्षति ।
रोके वेग गएर द्रोण गुरुको * सेना र सेनापति ॥
सेनानायक औ सवार हयका * हात्ती, रथी, पैदल ।
थाले लड्न त्यहाँ दुवै तरफका * देखाइ आफ्नू बल ॥५३॥
गर्जन्थे कहिले कठोर स्वरले * गर्थे ति कोलाहल ।
वार्ता केहि सुनिन्नथ्यो नरपते ! * ठूलो हुँदा खल्बल ॥
छाड़े चिह्न त्यहाँ दुवै तरफले * आफ्नो-बिरानो जब ।
सेना पाण्डवतर्फका जति थिए * मर्दै गएथे सब ॥५४॥

रात्रीसरी हुन गयो दिनमै झुलोले ।
ढाकीदियो पृथिवि, व्योम दिशा क्रमैले ॥
खुट्टा र बाहु, शिर, गर्दन आदि अङ्ग ।
टुक्रा भई कति मरे, कति अङ्ग भङ्ग ॥५५॥
आधा मरेर कति छट्पट खूब गर्थे ।
त्यै माथि वीर कति मृत्यु भएर गिर्थे ॥
उत्साहले कति सहर्ष अगाडि सर्थे ।
गर्जेर शत्रु दलको कति शेखि हर्थे ॥५६॥
भागे सैनिक पाण्डु-पुत्रतिरका * धेरै डराई कन ।
चाँडै द्रोण गुरू युधिष्ठिर तरफ् * बढ्दै गए पक्रन ॥
लागे कौरव वीर भन्न गुरुको * देखेर त्यो पौरुष ।
लौ, लौ, हेर ! समस्त वीरहरु हो * श्रीद्रोणको साहस ॥५७॥
डुल्छन् मत्त भएर सिंह वनमा * निर्भीक जुन् चालले ।
मार्दैछन् रणमा घुमी अरिहरू * आचार्य त्यै चालले ॥
भाग्दैछन् रणबाट धर्म-सुत लौ * आफ्नू लिई जीवन ।
जाँदैछन् गुरुजी पनी पछि पछि * तिन्लाइ नै पक्रन ॥५८
देखेथे जब सत्यजीत नृपले * त्यस्तो नराम्रो स्थिति ।
साम्नू द्रोणजिको पुगे रथ लिई * चाँडै सकेको जति ॥
तीखा बाण मयूर-पङ्ख सरिका * पच्चीस छाडी दिए ।
लागी ती शर द्रोणका तनभरी * घाऊ अनेकौं भए ॥५९
पौंची श्री वृक वीरले समरमा * साहाय तिन्को गरे ।
दोटा वीर मिलेर शत्रुदलको * तत्काल सातो हरे ॥
छोड़े मन्त्रित पाँच बाण गुरुले * तिन्लाइ ताकी कन ।
भागे तत्क्षण सत्यजीत, वृकको * त्यस्ले लियो ज़ीवन ॥६०॥

सेना लीकन सत्यजीत रणमा * फर्केर फेरी गए ।
पारी घायल द्रोणलाइ शरले * मूर्च्छा गराई दिए ॥
थाले गर्जन बेसरी विजय यो * मेरो भयो लौ भनी ।
आयो चेत गुरुजिलाइ सहसा *त्यो शब्द चर्को सुनी॥६१

छाड़े क्रोध गरेर अग्निसरिको * मन्त्रेर यौटा शर ।
हावा झैं गइ सत्यजीत नृपको * त्यस्ले गिरायो शिर ॥
योद्धा क्षेमक छत्रदेव वसुमान् * सामू पुगे द्रोणका ।
काटेथे शिर द्रोणले समरमा * नौ बाणले तीनका ॥६२

आए लड्न भनी शतानिक जसै * श्री द्रोणका साथमा ।
तिन्लाइ गुरुले पठाउनुभयो * मारी छिटै स्वर्गमा ॥
लागे भग्न डराइ पाण्डु-सुतका * सेना र सेनापति ।
भागे धर्म-कुमार मर्दछु भनी * मन्मा डराई अति ॥६३

आचार्यको प्रशंसा, भीमसेनको पराक्रम—

राजन् ! धर्म-कुमारको स्थिति त्यहाँ* देखे नराम्रो जब ।
रोके सैन्य बटेर पाण्डु-सुतका * श्री द्रोणलाई तब ॥
मारेथे कतिलाइ घायल भई * भागे डराई कति ।
त्यो देखेर भने सुयोधनजिले * आनन्द मानी अति॥६४

योद्धा कर्ण ! सखे, पराक्रम ठुलो * लौ हेर आचार्यको ।
घुम्दैछन् रणमा दिवाकर सरी * शेखी हरी शत्रुको ॥
पार्छन् दलमल जन्तुलाइ वनमा * जुन् चालले सिंहले ।
मार्दैछन् त्यहि चालले समरमा * सेनाहरू द्रोणले ॥६५॥

भाग्दैछन् रणबाट जीवन लिई * सेना र सेनापति ।
बाँच्तैनन् अब कोहि वीर गुरुका * सामू परेका जति ॥

श्री दुर्योधनले गरे गुरुजिको * निक्कै प्रशंसा जब ।
बोले कर्ण म भन्छु नीति रणको * हे मित्र ! सुन्नोस् अब ६६
ठूलो सर्प भए पनो नरपते ! * क्यै छिद्र पाए भने ।
सक्छन् मार्न अवश्य क्षुद्र कमिला * द्वारा छ त्यो मारिने ॥
खोज्दैछन् यहि चालले समरमा * क्यै छिद्र आचार्यको ।
मार्नेछन् कि त पक्रनन् सब मिली * हो नीति संग्रामको॥६७
सोही कारणले ससैनिक छिटै * हामीहरूले गई ।
गर्नूपर्छ सहाय झट्ट गुरुको * चौतर्फ घेरा दिई ॥
मौका उत्तम देख्दछु म अहिले * हामीहरू गैकन ।
सक्छौं धर्म-कुमारलाइ सहजै * संग्राममा पक्रन ॥६८॥
राधाका सुत कर्णको सुनिसके * सल्लाह त्यस्तो जब ।
आफ्ना फौजभरी सुयोधनजिले * उर्दी फिंजाए तब ॥
योद्धा, वीर, पराक्रमी समरका * ज्ञाता हितैषी जन ।
गर्नूपर्छ सहाय शीघ्र गुरुको * मारी सबै दुश्मन ॥६९
यस्तो उर्दि फिंजी चढेर रथमा * हावा सरी वेगले ।
श्री दुर्योधनजी पुगे समरमा * अत्यन्त उत्साहले ॥
गर्जी शङ्ख फुकेर सैनिकहरू * तिन्का पछाड़ी गए ।
रक्षा गर्न भनेर द्रोण गुरुको * चौतर्फ जम्मा भए ॥७०
त्यो देखेर समस्त पाण्डु-सुतका * घेरा दिई सैनिक ।
थाले गर्जन बेसरी थरि-थरी * योद्धा तथा नायक ॥
घेरा दी रणमा बढे रिस गरी * कालै सरीका बनी ।
थाले शस्त्र उठाइ मार्न सबले * उम्केर जाला भनी ॥७१॥
श्री दुर्योधनका थिए गजपती * सेना अगाड़ी जति ।
सारालाइ दिए हुकुम् बढ अघी * हे वीर ! सेनापति ॥

त्यो आज्ञा अधिराजको गजपती * योद्धाहरूले सुनी।
थाले गर्न विनाश शत्रुतिरका * सेनाहरूको तिनी ॥७२॥
देखेथे जब भीमले समरको * त्यस्तो नराम्रो स्थिति।
थाले श्रेष्ठ गदा बजार्न शिरमा * गर्जेर हे भूपति!
लागेथ्यो जतिलाइ चोट बलियो * तिन्का गदाको त्यहाँ।
गिर्थे फन्न घुमी मरेर रणको * ती वीर भूमीमहाँ ॥७३॥
पक्री सूँढ गजेन्द्रको रिस गरी * फ्याँक्थे घुमाई जब।
धेरै सैन्यहरू थिची पर गई * लड्थे मरी ती सब ॥
देखेथे जब भीमको समरमा * त्यस्तो ठुलो पौरुष।
थाले सैनिक भाग्न वीर कुरुका * त्यागी सबै साहस ॥७४॥
लागे लड्न स्वयं सुयोधन डटी * तिन्का अगाड़ी गई।
लाग्यो एक गदा, हिंड़े समर त्यो * त्यागेर मूर्छित् भई ॥
आए अङ्गपती सुयोधनजिको * देखेर त्यो दुर्गति।
लागी एक गदा कठोर शिरमा * भागे डराई अति ॥७५॥
देखेथे भगदत्तले जब ठुलो * श्री भीमको पौरुष।
हात्तीमाथि चढी अघिल्तिर पुगे * देखाउँदै साहस ॥
पक्रेथ्यो रथ भीमको गज बढी * आफ्नू ठुलो सूँढले।
भागे भीम त्यजेर श्रेष्ठ रथ त्यो * फ्याँकीदियो वेगले॥७६॥
पक्रे पुच्छर झट्ट फेरि गजको * उफ्रेर श्री भीमले।
त्यो युद्धस्थलमा घिसार्न सहसा * लागे तिनी वेगले ॥
फुस्कायो गजले दुवै पयरले * हिर्काइ त्यो पुच्छर।
आफ्नू सूँढ बढाइ पक्रन पुग्यो * श्रीभीमको कम्मर ॥७७॥
खुट्टाले थिचि मार्नको मन गऱ्यो * तिन्लाइ त्यो दुष्टले।
त्यसको सूँढ हटाइ भीम सहसा * फुत्के ठुलो युक्तिले ॥

भागे भीम डराइ मत्त गजको * त्यो चाल देखीकन ।
थाले कौरव वीर उच्च स्वरले * संग्राममा गर्जन ॥७८॥

भगदत्त र उनको योजनणादको पराक्रमः —

हे राजन् ! जब भीमसेन रणमा * भागे डराईकन ।
थाले श्रीभगदत्त झन खुशि हुँदै * संग्राममा गर्जन ॥
हात्तीलाइ बढाइ पाण्डु सुतका * सम्पूर्ण सेनाभरी ।
लागे मार्न घुमी-घुमी समरमा * सातो सबैको हरी ।७९॥
कुल्ची, दाँत धसी, कतीकन थिची * फ्याँकी कती सूँढले ।
मार्‍यो सैनिक सुप्रतीक गजको * त्यो श्रेष्ठ सन्तानले ।
त्यो देखेर पुगे दशार्णवपती * हात्ती चढी वेगले ।
ढाकेथे भगदत्तलाइ रणमा * आफ्नू तिखा बाणले॥८०
तिन्को त्यो शर-जाल काटि बलले * हात्ती बढाईकन ।
मारे श्री भगदत्तले समरमा * तिन्को गयो जीवन ॥
तिन्को दुर्गति देखि भीम रिसले * आगो सरीका भए ।
घोड़ामाथि चढेर लड्दछु भनी * तिन्को अगाड़ी गए ॥८१
बर्साई जल सूँढले हयसहित् * तिन्लाइ ढाकीदियो ।
देखी त्यो गजको पराक्रम ठुलो * त्यो अश्व भागी गयो ॥
दोस्रोपल्ट पनी हटाइ त्यसरी * श्री भीम योद्धाकन ।
हात्ती श्री भगदत्तको घरी-घरि * गर्दो भयो गजन ॥८२॥
धृष्टद्युम्न र धृष्टकेतु बलवान् * श्री द्रौपदी पुत्रले ।
एकै पल्ट गरे प्रहार गज त्यो * मारौं भनी वेगले ॥
तिन्को चोट सबै खपी रगतको * धारा बगे तापनि ।
मार्‍यो सैनिक पाण्डु-पुत्रहरुका * विक्षिप्त जस्तो बनी॥८३

दौडन्थ्यो गज त्यो जतातिर उतै * सेनाहरू बेसरी ।
भाग्थे प्राण बचाइ हे नरपते ! * बाख्रा र भेड़ा सरी ॥
थाले गर्जन बेसरी हजुरका * सेनाहरू हर्षले ।
सोधे श्रीहरिलाइ शब्द सुनि त्यो * शंका परी पार्थले ॥८४॥
हे गोविन्द ! सुनिन्छ वीर कुरुको * संग्राममा गर्जन ।
आफ्नू सैनिकको सुनी स्वर दुखी * आत्तिन्छ मेरो मन ॥
भन्नूभो हरिले कुरा सुनी सबै * प्यारा सखा अर्जुन !
गर्दैछौ यसरी विलम्ब अहिले * यो युद्धमा नै किन ?८५
जो संसप्तक सैन्यको दल छ यो * सेना छ नारायणी ।
यिन्लाइ पहिले हटाउ पथका * हुन् विघ्नकर्ता भनी ॥
त्यो आज्ञा हरिको सुनी विजयले * पानी परे झैं गरी ।
बर्साए शर क्रोधले समरमा * हे भूपती ! बेसरी ॥८६
लाग्यो त्यो जतिलाइ बाण अथवा * जो जो अगाड़ी परे ।
सारा सैन्य मरेर सोत्तार भई * संसार पारी तरे ॥
देखी दुर्गति सैन्यको समरमा * राजा सुशर्मा गए ।
तिन्का भाइहरू सहायक बनी * साथै गएका थिए ॥८७॥
श्री योगेश्वरलाई शक्ति पहिले * हाने रिसाईकन ।
बर्साई शर पार्थका उपरमा * थाले तिनी गर्जन ॥
यौटा बाण चलाइ शक्ति बिचमै * टुक्रा गराई दिए ।
तिन्को त्यो शर-जाल श्रीविजयले * व्यर्थै गराई लिए ॥८८॥
मारे भाइहरू त्रिगर्त-पतिका * नौ बाण हानीकन ।
लागी बाण त्रिगर्त-राज डरले * भागे लिई जीवन ॥
कोही वीर रहेन श्री विजयको * सामू डटेको जब ।
भागे भाग्न सके जतो, अरु मरे * साम्ने परेका सब ॥८९॥

सारा फौज हटाइ त्यो किसिमले * बिन्ती गरे केशव !
आफ्ना सैनिकतर्फ झट्ट रथ यो * लैजानुहोस् लौ अब ॥
मार्थे श्री भगदत्त मर्दन गरी * सेना अनेकौं जहाँ ।
हावाको गतिले पुग्यो रथ, छिटै * तिन्का अगाड़ीमहाँ॥९०
पौंचे शक्न भनेर कौरव जती * श्री पार्थको त्यो रथ ।
मारी सैन्य सबै खुला गरिलिए * तत्काल आफ्नू पथ ॥
जस्को रक्षक सारथी प्रभुजि छन् * मालीक ब्रह्माण्डका ।
सक्छन् टिक्न लड़ाइँमा अघिसरी * कुन् वीर ती पार्थका ९१

वैष्णवास्त्र श्री कृष्णजीमा लीन हुनू र हात्तको वध :—

हे राजन् ! भगदत्त सैन्य-दलको * संहार गर्दै थिए ।
तिन्को वेग, पुगेर श्री विजयले * तत्काल रोकीदिए ॥
हात्तीले हयलाइ पक्रन भनी * आँटयो जसै सूँढले ।
छल्नूभो रथ त्यो लगी बगलमा * साह्रै छिटो कृष्णले॥९२
फर्क्यो फेरि समाउँ त्यो रथ भनी * हात्ती रिसाई जब ।
छल्थे त्यै क्रमले अघी-पछि गरी * त्यस्लाइ श्री केशव ॥
धेरैपल्ट छलेर सोही क्रमले * हात्ती थकाईकन ।
केही दूर लगी अड्याउनुभयो * श्रीकृष्णले स्यन्दन॥९३॥
त्यो देखी भगदत्तले अति तिखा * छाडे अनेकौं शर ।
टुक्रा पारिदिए सबै विजयले * ती बाण तिन्का, तर ॥
हाने शक्ति, तुरुन्त क्रोधित भई * तिन्ले ठुलो वेगले ।
त्यस्लाई पनि पार्थले विफल नै * पारीदिए बाणले ॥९४॥
ढाके ती भगदत्तलाइ शरको * वर्षा गरी बेसरी ।
छातीको गजको ठुलो कवच नै * काटीदिए त्यो घरी ॥

आयो झम्टन पार्थलाइ गज त्यो * साह्रै रिसाईकन ।
घाऊ पारिदिए शरीरभरमा * नौ बाणले त्यसकन ॥९५



योजनपाद हात्तीसहित राजा भगदत्तको वध

लाग्यो ढल्न गजेन्द्र खप्न नसकी * त्यो चोटले भूमिमा ।
च्यापेथे भगदत्तले गज ठुलो * आफ्ना दुवै जाँघमा ॥
छाड़े त्यो स्थितिमा पनी दृढ रही * तत्काल योटा शर ।
बाङ्गो अर्जुनको किरीट हुनगो * लागेर बायाँतिर ॥९६॥
लागे पार्थ किरीट खस्तछ भनी * पक्रेर सोझ्याउन ।
पाए श्री भगदत्तले नरपते ! * मौका त्यसै कारण ॥
छाड़े वैष्णव अस्त्र पार्थतिर त्यो * हावा-गतीले गयो ।
छेकी अर्जुनलाइ झट्ट हरिले * त्यो चोट खप्नू भयो॥९७
पाएथ्यो जब अस्त्रले प्रभुजिको * त्यो श्रेष्ठ वक्षस्थल ।
माला रूप भयो सरोज-दलको * शोभा दिने निर्मल ॥
बल्दो अग्निशिखा र सूर्य, शशि झैं* शोभा फिंजाईकन ।
लाग्यो मन्द बतासले अलि-अली * त्यो वक्षमा हल्लन॥९८

श्री योगेश्वरको पराक्रम ठुलो * देखेर श्री अर्जुन ।
वाणी नम्र गरी भने विनयले * साह्रै दुखाई मन ॥
छाड़े अंकुशरूप अस्त्र नृपले * मैलाइ ताकीकन ।
त्यस्को चोट हजूरले सहनुभो * हे नाथ ! व्यर्थै किन ॥९९
गर्छु सारथि कार्य मात्र भनि जो * गर्नू भएथ्यो प्रण।
त्यो बिर्सेर रथीसमान अहिले * उल्टो गरेको किन ?
यो गाण्डीव धनू र शस्त्रहरुले * ऐह्ले म रित्तो भए ।
शक्ती क्षीण, विवेक हीन, निंद वा * विक्षिप्त झैं देखिए ॥१००
हुन्थ्यो उत्तम नाथले समरमा * जुन् कार्य गर्नू भयो ।
शोभा श्रेष्ठ रथी हुने यश जती * मेरो थियो त्यो गयो ॥
साह्रै चित्त दुखाइ श्री विजयले * विन्ती गरेको सुनी ।
भन्नू हरिले म व्यर्थ कहिले * गर्दीनँ केही पनी ॥१॥
तिम्रो जीवनको बिनाश सहजै * गर्ने थियो अस्त्रले ।
त्यस्को चोट स्वपें स्वयं हृदयमा * हे मित्र ! त्यै हेतुले ॥
भन्छु मित्र ! परंपरा सुन तिमी * यो वैष्णवी अस्त्रको ।
शंका हुन्छ स्वयं निवारण सबै * तिम्रो बढेको छ जो ॥२॥
मैले चार स्वरूप लोक हितमा * गर्छु सदा धारण ।
मेरो सोहि स्वरूप बन्छ जनको * कल्याणको, साधन ॥
नृ-नारायण रूप जो छ पहिलो * कल्याणका निम्तिमा ।
बद्रीमा तप गर्दछु दृढ रही * हे मित्र ! भूलोकमा ॥३
दोस्रो आत्म स्वरूपले हृदयमा * बस्छु म प्रत्येकको ।
हेर्छु कर्महरू शुभाशुभ सदा * साक्षी बना जीवको ॥
छन् मेरा अवतार जो धरि-धरी * तेस्रो त्यही रूप हो ।
त्यस्को गर्छु सहायता बखतमा * मेरो छ सद्भक्त जो ।४॥

त्यो एकार्णवमा युगान्ततक जो * सुत्छू सखे ! सिन्धुमा ।
हो त्यो रूप चतुर्थ, अब्द बहुतै * जान्छन् बिती नींदमा ॥
वेलामा पछि भङ्ग हुन्छ क्रमले * त्यो योगनिद्रा जब ।
पार्छु दुष्ट सुपात्रलाइ वरले * राजी रहन्छन् सब ॥५
मौका सोहि थियो पुगेर पृथिवी * बिन्ती गरिन् सादर ।
पाऊँ वैष्णव अस्त्र पुत्रकन यो * मेरो, दिनोस् ईश्वर ! ॥
त्यस्तो बिन्ती सुनी दया हृदयमा * आएर भूमी प्रति ।
मैले अस्त्र दिएँ कुनै तरहको * शंका नमानी रति ॥६॥

त्यो अस्त्र वीर नरकासुरले लिएर ।
खूशी भयो सकल शत्रुहरू जितेर ॥
यी भूपलाइ पछि सोहि मिलेर अस्त्र ।
पार्दै थिए समरमा अरिलाइ त्रस्त ॥७॥

ऐह्ले शस्त्र गरे प्रहार तिनिले * मैले गरी प्रेरित ।
तिम्रो नाश हुने बुझी समरमा * त्यो अस्त्रले निश्चित ॥
मैले लीन गराइ आफ्नु तनमा * त्यस्लाइ राख्दो भएँ ।
तिम्रो जीवनलाइ मित्र ! यसरी * मैले बचाई लिएँ ॥८॥
ठूलो जो भगदत्तका सँग थियो * दिव्यास्त्र त्यो सिद्धियो ।
हात्तीको भरमा यहाँ दृढ़ भई * संग्राम गर्दैछ यो ॥
तिम्रो शत्रु ठुलो र दुर्जय तथा * योद्धा छ यो दुर्धर ।
यस्लाई अब मार झट्ट धनुमा * राखेर तीखा शर ॥९॥
साह्रै वृद्ध भई दुवै नयनका * भौं झुण्डिनाले गरी ।
बाँधेको छ खिंचेर मास्तिर सखे ! * ती भूपले राम्ररी ॥
डोरी काट तिमी तिखा शरहरू * छोड़ेर हे अर्जुन !
आँखा बन्द भई, हुनेछ सजिलो * तिन्लाइ मारी लिन॥१०॥

त्यो आज्ञा हरिको सुनी शर लिई * श्री पार्थले उज्ज्वल ।
छाड़े योजनपाद नाम गजको * ताकेर कुम्भस्थल ॥
धारा बग्न गयो ठुलो रगतको * त्यो बाणको चोटले ।
थाल्यो फन्फनि घुम्न मत्त गज त्यो* संग्राममा वेगले ॥११॥
गर्थ्यो यत्न जती बढाउन अघी * त्यो माहुते त्यस्कन ।
लाग्यो सर्न पछाड़ि खप्न नसकी * पीड़ा, डराई कन ।
दोटा दन्त घुँड़ा धसी पृथिविमा * त्यो ढल्न लाग्यो जब ॥
तीखा बाणहरू थपे अरु पनी *त्यस्लाइ ताकी तब॥१२॥
त्यस्को देह भई धुजा जब फुटयो * त्यो श्रेष्ठ गण्डस्थल ।
चिच्याई नृपको गिर्‍यो गज मरी * ढाकेर युद्धस्थल ॥
आँखीभौं भगदत्तले जसरि त्यो * बाँधेर लड्दै थिए ।
योटा बाण चलाइ श्री विजयले * त्यस्लाइ काटीदिए॥१३॥
अन्धा झैं नृपती भए समरमा * केही नदेख्ने जब ।
लागे बाण तिखा-तिखा विजयका * तिन्लाइ आई सब ॥
आँटे लड्न नरेश खप्न नसकी * त्यो चोटले भूमिमा ।
काटेथे भगदत्तको शिर छिटै * जाउन् भनी स्वर्गमा ॥१४
देखे कौरव वीरले समरमा * ती भूपतीको गति ।
आए लड्न भनेर वीर शकुनी * तत्काल हे भूपति !
तिन्का 'वृश्चिक' औ थिए 'अचल' जो* भाई दुवै साथमा ।
भेजेथे दुइलाइ बाण दुइले *श्रीपार्थले स्वर्गमा॥१५॥
त्यो देखेर रिसाउँदै शकुनिले * माया फिंजाईकन ।
घेरै अस्त्र, अनेक जन्तु वनका * गर्दा भए सिर्जन ॥
थाले बर्सन शस्त्र, जन्तुहरूले * लागे जसै झम्टन ।
माया अर्जुनले निवारण गरे * अग्न्यास्त्र छाड़ीकन॥१६

संज्ञा-शून्य भए तुरुन्त शकुनी * लागेर तीखा शर ।
भाग्यो सारथिले लिई रथ छिटै * संग्रामको बाहिर ॥
लागे गर्न विनाश पार्थ रणमा * नारायणी सैन्यको ।
थाले कौरव वीर भाग्न डरले * आशा त्यजी प्राणको ॥१७

अश्वत्थामाद्वारा नीलको वध, कर्णका तीन भाइको मृत्यु—

योद्धा नील नरेश पाण्डु-सुतका * सेनामहाँ जो थिए ।
तिन्ले कौरव सैन्यको समरमा * संहार गर्दा भए ॥
लागे भन्न गएर द्रोण गुरुका * छोरा रिसाईकन ।
गर्दैछौ वध फौजको समरमा * व्यर्थै तिमीले किन ? ॥१८
मेरा साथ तिमी लड़ाइँ खुशिले * हे नील राजा ! गर ।
तिम्रो पूर्ण हुनन्न मनोरथ जसै * लाग्नेछ मेरो शर ॥
द्रोणीको सुनि वक्र उक्ति, शरको * वर्षा गरे नीलले ।
तिन्का बाण सबै गराइ टुकुरा * काटी तीखा बाणले ॥१९
मारी सारथि, अश्व औ रथ, ध्वजा * तत्काल भाँचीदिए ।
यौटा शक्ति प्रहार बेसरि गरी * खूसी हुँदै गर्जिए ॥
राजा नील कुदेर त्यो रथ त्यजी * रक्षा गरे प्राणको ।
हाने शक्ति लिएर एक शिरमा * ती द्रोणका पुत्रको ॥२०
शक्तीको बिचमै गराइ टुकुरा * छाडेर यौटा शर ।
द्रौणीले सहजै ति नील नृपको * काटी गिराए शिर ॥
द्रौणी, द्रोण गुरू, सुयोधन तथा * तिन्का सखा कर्णले ।
थाले गर्न विनाश पाण्डु-सुतका * सेनाहरू वेगले ॥२१॥
योद्धा भीम लिएर फौज बलियो * तिन्का अगाडी गए ।
बर्साई हतियार वेग सबको * तत्काल रोकीदिए ॥

लागे लड्न त्यहाँ दुबै तरफका * ती फौज अन्धा बनी ।
छाड़े चिह्न प्रहारमा सुत-पिता * भाई, हितैषी पनी ॥२२॥
शक्ती, पाश, गदा परस्पर सबै * छाड्थे कराई त्यहाँ ।
भन्थे कोहि तँलाइ मार्दछु पखी * भागेर जान्छस् कहाँ ?
राजन् ! फौज मरे दुबै तरफका * संग्राममा बेसरी ।
भन्थे आर्त भई कती सुत-पिता * भाई तथा हे हरि ! ।२३
त्यै वेला गुरु द्रोण, पाण्डु-सुतका * मार्दै थिए सैनिक ।
आए पार्थ फिरी, गरीकन ठुलो * संहार संसप्तक ॥
देखी अर्जुनलाइ वायुगतिले * आईपुगेको त्यहाँ ।
श्री दुर्योधनजी पुगे अति छिटो * तिनका अगाडीमहाँ ॥२४
भाई तीन लिई पुगे रथ चढी * श्री कर्ण संग्राममा ।
लागी अर्जुनका तिखा शर गए * तीनै जना स्वर्गमा ॥
मारे भाइ भनेर सूर्य-सुतले * साह्रै रिसाईकन ।
ढाकी अर्जुनलाइ बाणहरुले * थाले तिनी गर्जन । २५॥
योद्धा भीम र सात्यकी, द्रुपदजी * तत्काल साम्ने गई ।
रोके वेग, प्रहार सूर्य्य-सुतको * तीनै जनाले भई ॥
एकै पल्ट गरी प्रहार सलले * सातो लिए कर्णको ।
पारे घायल बेसरी तन भरी * धारा बग्यो रक्तको ॥२६
त्यो देखेर पुगे जयद्रथ तथा * श्री द्रोण, दुर्योधन ।
लागे गर्न प्रहार शत्रुदलको * रोकेर धावाकन ॥
पृथ्वी कम्प हुने गरी थरि-थरी * शस्त्रास्त्र औ बाणले ।
लड्थे वीरहरू परस्पर त्यहाँ * अत्यन्त उत्साहले ॥२७
जस्तो युद्ध भयो अघी नरपते ! * त्यो घोर देवासुर ।
त्यस्तै युद्ध त्यहाँ पनी हुन गयो * देखेर लाग्ने डर ॥

घेरै सैन्य भए मुहूर्तभरिमै * संग्राममा सोत्तर ।
देखिन्थे शव मात्र हे नरपते ! * त्यो युद्धभूमीभर ॥२८॥
देखी त्यो रणको परिस्थिति छिटै * भागे डरी कातर ।
त्यस्ले सैन्य र वीरमा हुन गयो * उत्साह झन् दोब्बर ॥
रोके युद्ध तुरुन्त श्री रवि हिंडे * बिस्तार पश्चिम्‌तिर ।
सन्ध्याकाल भयो दुवै थरि गए * विश्रामको खातिर ॥२९

द्रोणाचार्यको तेस्रो दिनको युद्ध, युधिष्ठिरको चिन्ता र दुर्योधनको उपालम्भ, अभिमन्युको उत्साह :—

लागे सञ्जय भन्न हे नरपते ! * सम्झेर युद्ध स्थिति ।
प्रातःकाल उठी सुयोधनजिले * सन्ताप मानी अति ॥
श्रद्धा-प्रेम थियो अवश्य मनमा * श्री द्रोणजीका प्रति ।
लागे भन्न गएर तैपनि तिमी * सोत्साह हे भूपति ! ॥३०
गर्नू भो प्रण जो स्वयं हजुरले * विश्वास त्यस्को गरें ।
साह्रै नै अलपत्र यो समरमा * त्यस्ले म ऐह्ले परें ॥
छाड्दा धर्म-कुमारलाइ रणमा * मौका मिले तापनी ।
आशा त्यागिदिएँ गुरो ! विजयको * हाछ्रं लड़ाइं भनी ॥३१॥
माया पाण्डवको मदेखि छ बढी * आचार्यको चित्तमा ।
सोही कारणले म देख्दिनँ ठुलो * उत्साह संग्राममा ॥
हाम्रा वीरहरू अनेक दिनह्रूँ * संग्राममा मर्दछन् ।
उनका वीर सबै सुरक्षित रही * उत्साहले लड्दछन् ॥३२
हुन् ती शिष्य हजूरका प्रिय न ता * तिनको छ के योग्यता ?
धोका हो भनिठान्दछु समरमा * देखाउनू वीरता ॥
श्री दुर्योधनले गरे जब कुरा * छेड़ेर बिझ्ने गरी ।
भन्नूभो गुरु द्रोणले भइ दुखी * सम्झाउँदै राम्ररी ॥३३॥

पूरा गर्न सकीनँ जुन प्रण भनी * आरोप ऐह्ले गर्‍यौ ।
त्यस्ले हे अधिराज ! यो समरको * उत्साह मेरो हर्‍यौ ॥
द्यौता, दानव, यक्ष, राक्षस तथा * गन्धर्व, विद्याधर ।
आउन जो शिवदेखि बाहिक अरू * संग्रामको खातिर ॥३४॥
सक्छन् जित्न अवश्य संमुख गई * एक्लै लडी अर्जुन ।
पक्कौं धर्म-कुमारलाइ कसरी * तिन्को अगाडी भन ॥
हे दुर्योधन ! छन् युवा समरका * ज्ञाता गुणी अर्जुन ।
तिन्लाई कसरी जितौं म छु बुढो * संग्राममा लौ भन॥३५॥
श्री योगेश्वर हाँक्तछन् रथ बसी * जस्को बनी सारथी ।
जा छन् शत्रु विनाश गर्न रणमा * सामर्थ्य राख्ने रथी ॥
जान्दैछौ तिमीले पनी समर यो * जित्छन् उनैले भनी ।
गर्दैछु भरिसक्य यत्न अहिले * बूढो भए तापनी ॥३६॥
यौटा सत्य कुरा म भन्दछु अरू * हे वीर दुर्योधन !
यौटा वीर कुनै विपक्षतिरका * मार्नेछु आजै सुन ॥
अल्झाउन् रणमा निकै पर लगी * श्री पार्थलाई बरू ।
रोक्नेछ जति आउनन् अरु यता * योद्धा र सेनाहरू ॥३७
आज्ञाले गुरु द्रोणको पर हटे * संपूर्ण संसप्तक ।
एक्लै पार्थ लड़े पुगेर नलिई * सेना कुनै नायक ॥
लागे गर्न अनेक बीरहरुको * संहार तिन्ले उता ।
चक्रव्यूह रचे नतोड्न सकिने * आचार्यजीले यता ॥३८
जो जो वीर गएर पाण्डु-सुतका * लड्थे अगाड़ी सरी ।
मार्थे द्रोण, डटेर व्यूह-मुखमै * छेकेर सोही घरी ॥
लागे धर्म-कुमार भन्न रणको * देखेर त्यस्तो स्थिति ।
वेला संकटको उपस्थित भयो * हे वीर, सेनापति॥३९॥

चक्रव्यूह बनाइ आज गुरुले * लड्छन् सबै कौरव ।
मारिन्छन् अब वीर-सैनिकहरू * हाम्रा भएका सब ॥
तोड्ने व्यूह स्वयं धनञ्जयविना * क्वै छैन हाम्रातिर ।
अल्झेका अहिले ति शत्रु-दलमा * छन् हामिदेखि पर ॥४०
मर्छन् सैन्यहरू भनेर मनमा * योटा छ ठूलो दुख ।
अर्को ताप छ पार्थलाइ कसरी * देखाउने हो मुख ॥
के गर्दा हित हुन्छ यो बखतमा * सल्लाह पैह्ले गरौं ।
जस्तो निश्चय हुन्छ त्यैं किसिमले * हामी अगाड़ी सरौं ॥४१
चिन्ताग्रस्त भएर धर्म-सुतले * त्यस्तो भनेको सुनी ।
लागे श्री अभिमन्यु भन्न वयका * सानै भए तापनि ॥
माताले पहिले पितासित कुनै * आख्यान सुन्छु भनी ।
बर्ता आग्रह गर्नु भो नरपते ! * लागेन निद्रा भनी ॥४२॥
तोड्ने व्यूह कथा सुनाउनुभयो * मेरा पिताले जब ।
मैले हे अधिराज ! त्यो उदरमै * सुन्दै गएथें सब ॥
आमाले जब सुन्न सुन्दर कथा * छाड़िन् निदाईकन ।
आधा मात्र भनी निदाउनुभयो * मेरा पिता अर्जुन ॥४३॥
तोड्ने व्यूह सुनें कथा नरपते * आधा त मैले तर ।
पूरा पाइनँ सुन्न ताड़ि सहजै * त्यो निस्कने बाहिर ॥
एक्लै तोड्न म सक्छु तैपनि गई * आचार्यको व्यूह त्यो ।
मार्छु कौरव वीरलाइ रणमा * आज्ञा दिनोस् जानको ४४
जोड़ी छैन भनी तिनै भुवनमा * ख्याती छ जुन वीरको ।
छोरा हुँ म उनै धनञ्जयजिको * भानीज श्रीकृष्णको ॥
गर्नेछु रणमा म शत्रुदलको * संहार उत्साहले ।
हाम्रो जीत अवश्य हुन्छ प्रभुको * आशीषले पुण्यले ॥४५॥

हे राजन् , अभिमन्युको सुनि कुरा * देखी ठुलो साहस ।
बोल्ले धर्म-कुमार, 'यो पृथिविमा * बढ्ने छ तिम्रो यश ॥'
हे बाबू ! गर व्यूह भेदन तिमी * पैह्ले अगाडी गई ।
सेना साथ लिई सहाय गरुँला * हामी सबैले भई ॥४६॥
बोल्ले भीम रिसाइ धर्म-सुतले * आज्ञा भएको सुनी ।
बाबू ! मद्दत गर्दछौं संग गई * हामीहरूले पनी ॥
पैह्ले भेदन व्यूहको गरि तिमी * बाटो बनाऊ गई ।
पस्छौं हामिहरू पनी सँग-सँगै * तिम्रो पछाड़ी भई ॥४७॥
यो आज्ञा अभिमन्युले जब सुने * उत्साहले बेसरी ।
आए भेट्न जहाँ थिइन् शिविरमा * श्री उत्तरा सुन्दरी ॥
स्वप्ना देखि नजाति सोहि निशिमा * सम्भेर सोही कुरा ।
शंका पर्न गई कुनै अशुभको * दुःखी थिइन् उत्तरा ॥४८

उत्तरा अभिमन्यु संवाद :—

श्री पार्थका तनयले प्रिय पत्निलाई ।
देखी प्रसन्न मनले करमा समाई ॥
सोधे-मुहार शशि झैं किन हो मलीन ।
देख्छु शुभे ! भन बुझाइ समस्त कारण ॥४९॥

साध्वीले पतिको कुरा सुनिसकिन् * मीठो सुधा झैं जब ।
लागिन् भन्न-तिनी विनम्र स्वरमा * आफ्नू कुशंका सब ॥
देखें स्वप्न नजानि एक निशिमा * मैले त्यसै कारण ।
बस्नोस् आज भएर शान्त यहिं नै * संग्राम त्यागीकन ५०॥
आशंकाहरु उछ्लतछन् थरि-थरी * हे नाथ ! दुःस्वप्नको ।
गर्छ आज म चाकरी रुजु रही * यी पद्म झैं पाउको ॥

गर्दै दुःख पुकार नम्र स्वरमा * रोकीन् सतीले जब ।
लागे भन्न बुझाउँदै समरको * आफ्नू इरादा सब ॥५१
सेना छन् अहिले उपस्थित यहाँ * हामीहरूका जति ।
मर्नेछन् सहजै परेर गुरुको * त्यो व्यूहमा हे सति !
जानूभो अहिले पिता समरको * खातीर निक्कै पर ।
छैनन् भेदन गर्न व्यूह अहिले * क्वै वीर हामीतिर ॥५२
रक्षा सैनिकको गरेर गुरुको * त्यो व्यूह तोड्ने प्रण ।
आएको छु गरेर, भङ्ग कसरी, * गर्नें प्रतिज्ञा भन ?
देखिन्छन् जति स्वप्न घोर निशिमा* हुन्छन् ति झूटा भनी ।
मान्नू दुःख वृथा छ त्यो सब कुरा * जानेर हे मानिनी ॥५३
जो छन् वीर प्रसिद्ध अर्जुन, तिमी * तिन्की बुहारी भई ।
गर्दीनौ किन धैर्य धारण शुभे ! * के पुग्छ चिन्ता लिई ॥
पत्नी हौ तिमि वीरकी पृथिविमा * जस्को छ ठूलो यश ।
मेरो वृद्धि गराउ शत्रु-वधको * उत्साह औ साहस ॥५४
मार्नें शत्रुहरू त्यसै दिन गई * एक्लै लड़ाइँ गरी ।
स्वामीको सुनि त्यो कुरा हृदयमा * झन् उग्र चिन्ता परी ॥
केही बेर गरी विचार मनमा * ती उत्तरा सुन्दरी ।
लागिन् भन्न समाइ पाउ पतिका * दुःखी भई बेसरी ॥५५॥
हे स्वामी ! छ हजूरको समरमा * उत्साह पूरा बल ।
जान्नुहुन्न तथापि पूर्ण छल औ * संग्रामका कौशल ॥
छन् योद्धा गुरुजी सबै तरहले * नीतिज्ञ, जान्ने छल ।
तिन्को मद्दत गर्न छन् अरु पनी * योद्धाहरूका दल ॥५६॥
त्यस्ता उत्कट वीरका सँग गई * लड्छु म एक्लै भनी ।
जो आज्ञा अहिले भयो हजुरले * आत्तिन्छु सोही सुनी ॥

लड्नूभो सबले मिली बितिसक्यो * यो आज बाह्रौं दिन ।
हाम्रो जीत भएन, शत्रुदलको * संहार पूरा किन ? ॥५७
आफ्नो पूर्ण हुने मनोरथ कुरा * प्रत्येकले गर्दछन् ।
अर्कालाइ पर्‍यो कुनै दुख भने * आफू पछी सर्दछन् ।
सोही कारणले हिताहित दुवै * आफ्नू विचारीकन ।
आफ्नू शक्ति जती छ कार्य त्यतिनै* गर्छन् सदा सज्जन ॥५८
देख्छन् उत्तम कार्य गर्न तर त्यो * गाह्रो भए दुस्तर ।
अर्कालाइ उचाल्दछन् गर भनी * आफू रहन्छन् पर ॥
लै-लैमा पछिको विचार नगरी * त्यो कार्य जो गर्दछन् ।
भोग्छन् कष्ट तिनै, अरू बखतमा * आफू पछी सर्दछन् ॥५९
त्यस्तै दुःस्थिति देख्दछु म अहिले * आफू डराईकन ।
होस्याएर हजुरलाइ रणमा * आँटे पठाईदिन ॥
गर्दा युद्ध त्यहाँ कुनै तरहको * आपत्ति आयो भने ।
भोग्नूपर्छ स्वयं, हुँदैन अरु क्वै *त्यो दुःख बाँडी लिने ॥६०
दासी हूँ म हजूरका चरणकी * हे नाथ ! अर्धाङ्गिनी ।
मान्नै पर्छ हजूरले हित कुरा * मैले भनेको पनि ॥
त्यस्माथी छु रजोवती म अहिले * हो आज चौथो दिन ।
माग्दैछु ऋतुदान आतुर भई * हे उत्तराका धन ! ॥६१
पत्नीलाइ दिँदैन दान ऋतु जो * मौका विचारीकन ।
लागी पाप ठुलो तिनै नरकमा * पर्छन् मरी दुर्जन ॥
राम्रो उक्ति र नीतिपूर्वक कुरा * तिन्ले भनेको सुनी ।
इच्छा पूर्ण गरे ति पार्थ सुतले * कर्तव्य हो यो भनी ॥६२
हे प्यारी, जति छन् म भैं बल हुने * योद्धाहरू लोकमा ।
चाहिन्नन् तिनलाइ मद्दत दिने * मानीस संग्राममा ॥

सक्छु लड्न म इन्द्रका सँग पनी * मौका परेका घरी ।
यो जाबो रणमा सहायक लिनू * पर्दैन हे सुन्दरी ! ॥६३॥
भागे उत्तर युद्धबाट जसरी * देखी थिनै कौरव ।
त्यस्तो छैन म गर्न सक्तछु शुभे * वैरी जती छन् सब ॥
पत्नी भैकन वीरकी किन कुरा * गछ्र्यौ बनी कातर ।
हे प्यारी ! तिमि देउ आत्मबलको * उत्साह, त्यागी डर ॥६४
वेला छैन विशेष गर्न अहिले * यो प्रेमको गन्थन ।
जान्छु, देऊ बिदा प्रिये ! समरमा * आनन्द मानीकन ॥
जाने निश्चय युद्धमा जब सुनिन् * आफ्ना पतीको कुरा ।
साह्रै नम्र भई मिठो वचनले * बोल्दी भइन् उत्तरा ६५
सक्छु रोक्न हजूरलाइ कसरी * हे नाथ ! मैले तर ।
बिन्ती गर्दछु नाथको समरमा * रक्षा गरुन् ईश्वर ॥
पैह्राएर किरीट औ कवच त्यो * शस्त्रास्त्र सज्जित गरिन् ।
स्वामीलाइ चढाइ श्रेष्ठ रथमा * श्री उत्तरा फर्किइन् ॥६६॥

अभिमन्युको चक्रव्यूहमा प्रवेश र कौरवको चतुरंगिणी सेनाको संहार :—

हे राजन् ! रथ वेगले समरमा * जाँदै थियो तैपनी ।
भन्थे सारथिलाई भट्ट रथ यो * मेरो पुऱ्याऊ तिनी ॥
लाग्यो भन्न सुमित्र सारथि कुरा * तिनले गरेको सुनी ।
गर्दा हडबड कार्यमा सफलता * पाइन्न केह्नै पनी ॥६७॥
सुम्पेको छ हजूरलाइ अहिले * जुन् भार वा कार्य यो ।
त्यस्मा गर्नु विचार योग्य रितले * हे नाथ ! कर्तव्य हो ॥
जान्ने युद्ध-कला सबै तरहका * श्री द्रोण आचार्य छन् ।
जान्नू हुन्न कला हजूर रणको * जुन् गोप्य वा श्रेष्ठ हुन्॥६८

सोही कारणले विचार नगरी * संग्राम गर्नाकन ।
देख्दा शैशवको उमेर कलिलो * आत्तिन्छ मेरो मन ॥
त्यस्तो सारथिको सुनी हित कुरा * केही नटेरीकन ।
लागे श्री अभिमन्यु गर्न बलको * आफ्नू स्वयं वर्णन ॥६९
आए लड्न भई विपक्षतिरका * श्री इन्द्रलाई पनी ।
एक्लै निर्भय लड्दछु, सुन तिमी * ती काल जस्तै बनी ॥
मामा कृष्ण, पिता धनञ्जय पनि * आए अगाड़ी सरी ।
मान्नेछैन म सारथे ! भय कुनै * संग्राममा यो घरी ॥७०॥
ज्ञाता द्रोणजि छन् भनी भय ठुलो * देखाउँदै छौ, तर ।
मैले मान्दिनँ युद्धका बखतमा * योद्धा कसैको डर ॥
त्यस्तो बात सुनेर वायुगतिले * तिन्ले बढाए रथ ।
धूलो त्यो रथ-वेगले उडि ठुलो * ढाक्यो दिशा औ पथ ॥७१
पौंचायो रथ व्यूहको मुखमहाँ * त्यो सारथीले जब ।
दौड़े मद्दत गर्न पाण्डु-सुतका * योद्धा प्रतापी सब ॥
बर्साई अभिमन्युले शरहरू * सेना तथा नायक ।
मारे वीर अनेक व्यूहमुखमा * जो-जो थिए रक्षक ॥७२
भागे कौरव-सैन्य टिक्न नसकी * आफ्नो लिई जीवन ।
बढ्दै गो रथ भित्रतर्फ सहजै * त्यो व्यूह तोडीकन ॥
तोड़ेको जति व्यूहलाइ अघि झैं * चौंडै बनाई लिए ।
योद्धा पाण्डवतर्फका जति थिए * ती बाहिरै रोकिए ॥७३॥
हे राजन् ! अघि द्रौपदी हरणमा * ती सिन्धुका भूपले ।
हारेथे अपमान बेसरि गरे * पक्रेर श्री भीमले ॥
तिन्ले श्री शिवको गरी तप ठुलो * मागी लिए जुन् वर ।
रोके पाण्डव-वीरलाइ अहिले * त्यै हेतुले बाहिर ॥७४॥

एक्लै भित्र पसेर पार्थ-सुतले * गर्दा भए दल्मल ।
बर्साई शर घेर शत्रु-दलमा * पारी दिए खल्बल ॥
तिन्ले मत्त गजेन्द्र झैं डुलि-डुली * शस्त्रास्त्र छाड़ीकन ।
मार्दै सैन्य अनेक, उच्च-स्वरले * थाल्दा भए गर्जन ॥७५॥
जो-जो वीर बढेर पार्थ-सुतका * सामू लड़ाई गरे ।
त्यागी जीवन ती सुती समरमा * संसार पारी तरे ॥
जान्थे जुन्तिर पार्थका तनय ती * त्यो तर्फका सैनिक ।
भाग्थे खूब डरी नदेखि नजिकै * आफ्नू कुनै रक्षक ॥७६
सामुन्ने अभिन्युका जब परे * सत्यश्रवा भूपती ।
लागी बाण तुरुन्त नै समरमा * तिन्को भयो सद्गति ॥
आए लड्न भनेर रुक्मरथजी * तिन्का अगाड़ी सरी ।
त्यागे जीवन युद्धमा शर तिखा * लागेर सोही घरी ॥७७॥
धेरै राजकुमारले समरको * देखी नराम्रो स्थिति ।
वर्षाए सबले मिली शरहरू * आफ्ना भएका जति ॥
गन्धर्वास्त्र लिएर पार्थ-सुतले * मन्त्रेर छाड़ी दिए ।
एकै साथ मरेर राज-सुत ती * सारा त्यहीं पस्त्रिए॥७८॥
त्यो देखेर रिसाई सूर्य-सुतका * भाई सुन्धवा गए ।
योटा बाण चलाइ पार्थ-सुतले * तिन्लाई मारी दिए ॥
आए लड्न भनी त्यसै बखतमा * दौड़ेर दुर्योधन ।
लागी बाण तिखा त्यजी समर त्यो * भागे लिई जीवन ॥७९
भाई मारिदिए भनेर रिसले * श्री कर्ण आगो भए ।
बसाई शर पार्थका तनयको * त्यो देह ढाकी दिए ॥
काटी त्यो शर-जाललाइ सहजै * श्री पार्थका पुत्रले ।
छाड़े बाण पचास, कर्ण डरले * भागे ठुलो वेगले ॥८०

छोरा लक्ष्मण जो सुयोधनजिका * निक्कै प्रतापी थिए ।
सामुन्ने अभिमन्युका पुगि निकै * उत्साहले गर्जिए ॥
तिन्लाइ शर पाँच पार्थ-सुतले * हाने रिसाई जब ।
घोड़ा, सारथि, छत्र औ शिर पनी * टुक्रा भएथ्यो सब ॥८१
हे राजन् ! अभिमन्युको समरमा * उत्साह देखीकन ।
आए लड्न भनेर क्रोधित हुँदै * गर्जेर दुःशासन ॥
देखेथे तिनिलाइ पार्थ-सुतले * सामू डटेका जब ।
खोज्थें दुष्ट ! लड़ाइमा घुमि-घुमी * पाएँ तँलाई अब ॥८२
तेरो शोणित पान गर्न शर छन् * मेरा सबै आतुर ।
भागीनस रणबाट क्यै गरि भने * काटछु म तेरो शिर ॥
यस्तो बात भनेर तीन शरले * हाने रिसाईकन ।
लागी त्यो शर तीक्ष्ण व्याकुल भई * भागे लिई जीवन ॥८३
आए कोशलका बृहद्बल ठुला * राजा लड़ाई महाँ ।
श्री वृन्दारक भूपती पनि डटे * उत्साह राखी त्यहाँ ॥
द्रौणी औ कृतवर्म, कर्ण, कृपजी * श्री द्रोण दुर्योधन ।
घेरे षड् रथिले सबैतिर डटी * घेरा बनाईकन ॥८४॥
एकै पल्ट गरी प्रहार सबले * तीखा अनेकौं शर ।
घाऊ श्री अभिमन्युको तनभरी * पारी दिएथे तर ॥
तिन्को चोट खपी सबै शरहरू * टुक्रा गराईकन ।
श्री वृन्दारक औ बृहद्बलजिको * तिन्ले लिए जीवन ॥८५
पारे षड् रथिलाइ व्याकुल छिटै * आफ्ना तिखा बाणले ।
मारे एक सहस्र पुत्र नृपका * श्री पार्थका पुत्रले ॥
राजा भोग र अश्वकेतु बलिया * मन्त्रीहरू कर्णका ।
आठोटा शरले गिंड़े शिरहरू * तत्काल ती वीरका ॥८६

मन्त्री मारिदिए भनेर रिसले * गर्जेर श्री कर्णले ।
हानेथे अभिमन्युको शरिरमा * ताकेर नौ बाणले ॥
तिन्का बाण जती समस्त विचमै * टुक्रा गराईकन ।
पारी व्याकुल कर्णलाइ रणमा * लागे तिनी गर्जन ॥८७
देखेथे अभिमन्युको बल ठुलो * उत्साह संग्राममा ।
लागे भन्न गएर सूर्य-सुतले * आचार्यको साथमा ॥
जागे झैं छ सुषुप्त सिंह रणमा * ऐह्ले सुभद्रा-सुत ।
एक्लै लड्दछ हेर्नुहोस् कति छिटो * संम्पूर्ण योद्धासित ॥८८॥
भाग्नू क्षत्रिय-धर्मले कसरि लौ * त्यागेर युद्ध स्थल ।
मनूं ठानि निको उपस्थित म छू * साह्रै भई घायल ॥
हेर्नोस् सैनिक, वीर हामितिरका * भागीरहेछन सब ।
चाँड़ै हामिहरू मिलीकन गुरो ! * यस्लाइ मारौं अब ॥८९॥
यस्तो बात सुनेर सूर्य-सुतको * भन्नूभयो द्रोणले ।
एक्लो बालक वीर हेर रणमा * लड्दैछ कुन् चालले ॥
साह्रै कष्ट दियो मलाइ शिशुले * पारे पनी मूर्च्छित ।
त्यस्को देखि ठुलो पराक्रम म छू * अत्यन्त नै हर्षित ॥९०॥
मामा कृष्ण तथा धनञ्जय दुवै * भन्दा बढी शौर्यले ।
जान्ने नीति लड़ाइँमा कुशल झैं * लड्दैछ यो धैर्यले ॥
हे बाबू ! अभिमन्यु वीर तिमि झैं * पैदा हुनेछन् जति ।
गर्नेछन् गुणगान, धैर्य रणको * तिम्रो खुशीले अति ॥९१

अभिमन्यु वध :—

राम्रो व्यक्ति पनी कुसङ्गत भई * बिग्रन्छ जुन् चालले ।
सोही चाल शुरू गरे विवश भै * संग्राममा द्रोणले ॥

पैहले जुन् अभिमन्युको खुशि हुँदै * धेरै प्रसंशा गरे ।
राजन् ! लड्न भनी त्यसैसंग तिनी * फेरी अगाडी सरे ॥९२॥
द्रोणी, श्री कृप वीर कर्ण, शकुनी * आचार्य, दुःशासन ।
छेके षड् रथिले मिली वरिपरी * घेरा बनाईकन ॥
बर्साए सबले मिली शरहरू * पानो परे झैं गरी ।
ढाकेथे अभिमन्युको रथ-ध्वजा * औ सारथी वेसरी ॥९३॥
त्यो देखेर रिसाइ पार्थ-सुतले * काटी सबैको शर ।
एक्लै षड् रथिलाइ बाणहरूले * ढाकेर चारै तिर ॥
तीखा बाण पचासले गुरुजिको * सातो पहीले लिए ।
अस्सीले कृतवर्मको तनभरी * घाऊ गराई दिए ॥९४॥
साठी बाण चलाइ वीर कृपजी * लाई गरे घायल ।
काटे झट्ट किरीट सूर्य-सुतको * नौ बाणले उज्ज्वल ॥
द्रौणीलाइ तिखा-तिखा शरहरू * मन्त्रेर हाने दस ।
स्याबासी सब शत्रुले पनि दिए * देखेर त्यो साहस ॥९५॥
राजन् ! सारथि पार्थका तनयको * संकेत पाई कन ।
लाग्यो त्यो रणभूमिमा रथ छिटो * चौतर्फ दौड़ाउन ॥
मारे सैन्य अनेक वीर कुरुका * तिन्ले नराम्रोसित ।
थाले गर्जन बेसरी समरमा * एक्लै सुभद्रा-सुत ॥९६॥
द्रौणीले दस बाण द्रोण गुरुले * ताकेर नौ बाणले ।
त्यै साथी शर बीस कर्ण, कृपले * थप्ता भए वेगले ॥
लागी षड् रथिका तिखा शरहरू * ती पार्थका पुत्रको ।
धारा बग्न गयो शरीरभरिमा * घाऊ भई रक्तको ॥९७॥
शोभा युक्त तिनी गुराँस फुल झैं * संग्राममा देखिए ।
देखी त्यो पुरुषार्थ, वीरहरूले * स्याबास भन्दा भए ॥

तिन्का चोट सबै खपेर रिसले * देखाइ आफ्नू बल ॥
पारे षड् रथिलाइ घायल तिखा * नौ बाणले व्याकुल ॥९८
घोड़ा, सारथि, छत्र, औ रथ, ध्वजा * धूलो गरे द्रोणको ।
मारी अश्व र सारथी रथ छिटै * फ्याँके कृपाचार्यको ॥
द्रौणीलाइ र कर्णलाइ शरले * मन्त्रेर हानीकन ।
पारी घायल वेसरी घुमि-घुमी * थाले तिनी गर्जन ॥९९॥
सोधे फेरि डराइ सूर्य-सुतले * आचार्यलाई त्यहाँ ।
यस्को मृत्यु हुनेछ के गरि गुरो ! * संग्राम भूमीमहाँ ॥
देखी विह्वल कर्णलाइ रणमा * हाँसेर भन्नूभयो ।
पैह्लेको अभिमन्युले कवच जो *भेदिन्न हे कर्ण ! त्यो२००
सोही कारण अश्व, सारथि, धनू * शस्त्रास्त्र नाशीकन ।
लेओ शक्ति भए मिलेर सबले * यो वीरको जीवन ॥
जैह्लेसम्म रहन्छ यो समरमा * शस्त्रास्त्रले सज्जित ।
मर्नेछैन भनेर जान सबले * योद्धा सुभद्रा-सुत ॥ १॥
त्यस्तो बात सुनेर द्रोण गुरुको * क्रोधित् भई कर्णले ।
घोड़ा चार र सारथीकन छिटै * मारी दिए बाणले ॥
हे राजन् । अभिमन्युलाइ विरथी * पारेर त्यो चालले ।
एकै पल्ट गरे प्रहार सबले * छेकेर, शस्त्रास्त्रले ॥ २॥
राखी धैर्य अपार पार्थ-सुतले * सारा खपी चोट त्यो ।
पारे घायल षड्रथीकन त्यहाँ * वर्षा गरी बाणको ॥
देखी साहस त्यो अदम्य शिशुको * आश्चर्य माने जब ।
बोले श्री अभिमन्यु, भाव मनको * जानेर तिन्को सब ॥३॥
एक्लोलाई मिली महारथि लिई * सेनाहरू साथमा ।
गर्दैछौ यसरी प्रहार किन हो * हे दुष्ट हो ! युद्धमा ॥

योद्धाले रणमा अधर्म यसरी * गर्नू ठुलो पाप हो ।
पापी हो ! तिमिहेरु वीर सबमा * छौ श्रेष्ठ भन्ने छ को ?॥४
यस्तो श्री अभिमन्युको मुनि कुरा * त्यागेर लज्ला जति ।
श्री दुर्योधनले भन्ने रिस गरी * गर्जेर हे भूपति !
व्यर्थैको बकवाद यो समरमा * गर्छस् तँ के हे खल !
आफ्नू शत्रु निभाउने बखतमा * गर्छन् सबैले छल ॥५॥
यस्तो बात सुनी सुयोधनजिको * कालाग्नि जस्तै बनी ।
हानेथे शर एक पार्थ सुतले * हे दुष्ट पर्खी ! भनी *
मूर्छा पर्न गए सुयोधन त्यहीं * त्यो बाण लागीकन ।
भाँचेथे अभिमन्युको धनुष त्यो * आएर दुःशासन ॥६॥
हे राजन् ! तरवार ढाल करमा * आफ्नू लिई वेगले ।
थाले मार्न अनेक शत्रु रणमा * श्री पार्थका पुत्रले ॥
काटे त्यो तरवार-ढाल करको * तत्काल आचार्यले ।
त्यो देखेर अनीति पार्थ-सुतले * भन्दा भए क्रोधले ॥७
एक्लो शस्त्र-विहीन पैदल म छु * थाकीसकेको यहाँ ।
छाड्दैछौ किन शस्त्र दुष्ट भतिलो * संग्राम - भूमी महाँ ॥
त्यागी धर्म मलाइ मारि यसरी * दुर्नाम देखी अरू ।
कीर्ति वृद्धि हुनेछ के ? तिमीहरू * मर्नू निको हो बरू ॥८
योद्धा, वीर हुने घमण्ड मनमा * राख्छौ सबैले भने ।
मौका देउ मलाई दुष्ट जन हो ! * शस्त्रास्त्र आफ्ना लिने ॥
मैले शस्त्र लिएपछी तिमिहरू * ऐह्ल जती छौ यहाँ ।
इच्छा पूर्ण हुने गरी लड़ सबै * यो युद्ध भूमीमहाँ ॥९॥
लड्ने रीति र नीति औ हित कुरा * मैले भनें यो जति ।
मेरो दुर्बलता विचार नगरे * भन्छु म हे दुर्मति !

योद्धा क्षत्रिय हूँ, दया समरमा * माग्दीनँ कैल्हे पनि ।
मैले ठान्छु बरु लड़ेर खुशिले * मनू निको हो भनी ॥१०
योग्यायोग्य विचार विज्ञ जनले * जैल्हे पनी गर्दछन् ।
पापीचाहिं अधर्ममा अघि- अघी * लज्जा त्यजी सर्दछन् ॥
गर्दैनौ सबले विचार मनमा * मेरो कुराको, तर ।
मान्नेछन् तिमिहेरुलाइ पछिका * मानीसले कायर ॥११॥
चाँडै मार बरु म हेर्दिनँ तिमी * पापीहरूको मुख ।
भोग्नेछु म गएर स्वर्गपुरिका * इच्छित् अनेकौं सुख ॥
श्री कृष्णार्जुनले कुरा मरणको * मेरो सुनेका घरी ।
मार्नन् निश्चय अग्निले खर ठुलो * थुप्रो डढ़ाए सरि ॥१२॥
मामा कृष्ण तथा धनञ्जय पिता- * जीको भई सम्झना ।
लागे श्री अभिमन्यु गर्न रणमा * दुःखी भई प्रार्थना ॥



अभिमन्यु वध

मामाको र पिताजिको चरणमा * बिन्ती छ यो आखिरी ।
राख्नू याद मरें म यो समरमा * जस्तो अवस्था परी ॥१३

पापी कौरवको विनाश प्रभुले * गर्नू नबिर्सीकन ।
मैले पाइनँ आखिरी बखतमा * दुर्भाग्यले दर्शन ॥
गर्थे दुःख पुकार पार्थ-सुतले * सन्ताप मानी उता ।
एकै पल्ट प्रहार कौरवहरू * गर्थे रिसाई यता ॥१४॥
बर्ता चोट परेर मूर्छित भई * लोटे सुभद्रा-सुत ।
हान्थे तैपनि शस्त्रले खलहरू * साह्रै नराम्रोसित ॥
श्री दुःशासनको कुमार दगुर्‍यो * यौटा गदा लीकन ।
हानो मस्तकमा ति पार्थ-सुतको * त्यस्ले लियो जीवन ॥१५

श्री पार्थका तनयले जब प्राण त्यागे ।
हर्ष ध्वनी सकल कौरव गर्न लागे ॥
हा हा पर्‍यो अति ठुलो रण-भूमिमाहाँ ।
गर्थे विषाद सब पाण्डव वीर त्याहाँ ॥१६॥

उत्तराको शोक :—

हे राजन् ! अभिमन्युको मरणको * संवाद त्यो फैलियो ।
सारा पाण्डव, सैन्य शोक-दहमा * त्यो तापले गाड़ियो ॥
ल्याएथे अभिमन्युको शिविरमा * त्यो देह बोकीकन ।
गर्थे शोक बसी युधिष्ठिरहरू * साह्रै दुखाई मन ॥१७॥
देखी त्यो मृत-देहलाइ पतिको * श्री उत्तरा सुन्दरी !
वाणी रुद्ध भई ढलिन् पृथिविमा * तत्काल मूर्छा परी ॥
शान्ती प्राप्त भयो अलीकति बरू * मूर्छा परेका घरी ।
दासीका उपचारले जब भइन् * ती होशमा सुन्दरी ॥१८
ढाकेको रविलाइ बादल सरी * लागेर धेरै धुलो ।
साध्वीले मृत देहलाइ पतिको * देख्दी भइन् तेजिलो ॥

चिच्याईकन बाहुले पिटि-पिटी * छाती तथा माथमा ।
लागिन् गर्न विलाप पार्थ-सुतको * पक्री दुवै पाउमा ॥१९॥
एक्लै पाल्नुभयो मलाइ नलिई * हे नाथ ! ऐह्ले किन ?
यस्को उत्तर क्यै दिनोस् उठि छिटै * हे उत्तराका धन !
स्वामी ! हूँ म पनी दुखी हजुरकी * दासी र अर्धाङ्गिनी ।
आधा अङ्गविना म बाँचु कसरी * आज्ञा हवस् त्यो पनि ॥२०
कस्तो के गरुँला कती सुखहरू * भोग्ने इरादा थियो ।
उल्टो दैवगती भएर अहिले * सम्पूर्ण त्यो नाशियो ॥
सक्छु बाँच्न कहाँ विना हजूरको * एक्लै म संसारमा ।
दुःखी देह त्यजी म बस्छु प्रभुको * सेवा गरी साथमा ॥२१॥
आमा-बाबु र बन्धु-बान्धव अरू * जो छन् हितैषी जन ।
स्वामी झैं सुख भोग, आदर दिने * क्वै हुन्न नारीकन ॥
मेरो विन्ति नमानि आज यसरी * त्याग्नू हुँदा नाथले ।
राखौं जीवन को भनेर अथवा * कुन् सौख्यको आशले२२
हा हा प्राणपती ! भनीकन रुँदै * धेरै बिलौना गरिन् ।
हे राजन् ! अभिमन्युकी नव-बधू * तत्काल मूर्छा परिन् ॥
श्री योगेश्वर पाँच पाण्डव तथा * रानी सुभद्रा अरू ।
आए श्री अभिमन्युको शिविरमा * सम्पूर्ण बन्धुहरू ॥२३॥
हे राजन् ! अभिमन्युलाइ त्यसरी * मारेर दुर्नीतिले ।
छोरा, नाति हजूरका, शिविरमा * फर्केर आनन्दले ।
हाम्रो जीत भयो भनेर खुशिले * गर्थें ठुलो उत्सव ।
गर्थें खूब विलाप धर्म-सुतका * रानी तथा बान्धव॥२४॥
चल्ने धर्म र नीतिपूर्वक सदा * षड् शास्त्र जो जान्दथे ।
जस्तै कष्ट परे पनी दृढ रही * जो धैर्य छाड्दैनथे ॥

त्यस्ता धर्म-कुमारले पनि ठुलो * सन्ताप मानीकन।
गर्दै घोर विलाप धैर्य मनको * त्यागेर लागे रुन ॥२५॥
हे बाबू ! वनवासको बखतमा * जो जो परेथे दुख।
हामीले सब त्यो सह्यौं सहजमा * हेरेर तिम्रो मुख॥
जो आपत्ति पर्‍यो असह्य तिमिले * त्यागी दिंदा जीवन।
मेरो शक्ति रहेन खप्न दुख यो * बाँच्ने कसोरी भन ? ॥२६
हाम्रा सन्ततिमा प्रधान तिमि नै * यौटा थियौ लायक।
कस्ले गर्छ सहाय हामिहरूको * हे शत्रु संहारक !
मामा कृष्ण छँदै पिताहरु सबै * तिम्रो गयो जीवन।
गर्नै छन अपकीर्ति बेसरि भनी * आत्तिन्छ मेरो मन ॥२७
हाम्रो युद्ध हुँदैछ यो बखतमा * जुन राज्यको खातिर।
कस्ले भोग्दछ राज्य त्यो अब ठुलो* मानौं म कस्को भर॥
आज्ञा लड्न भनेर जो अघि दिएँ * मैले नसोचीकन।
त्यस्को दण्ड दिए मलाइ विधिले * यो दुःख भोग्नाकन ॥२८
तिम्रो त्यो रणको पराक्रम सबै * हे बाबु ! सम्झी लिंदा।
गर्नेछन् गुणगान लोकहरुले * तिम्रो सदा सर्वदा॥
मैले झैं परिणाम ख्याल नगरी * गर्नेन् जती कर्म जो।
फेला निश्चय पर्दछन् तिनि म झैं * कोही ठुलो कष्टको ॥२९
राजन् ! धर्म-कुमार दुःखित भई * गर्थे बिलौना यता।
रुन्थे धैर्य त्यजेर बान्धव तथा * रानीहरू झन् उता॥
देखी प्राणविहीन देह सुतको * दुःखी सुभद्रा भइन्।
हा हा पुत्र ! कता गयौ तिमि भनी * क्यै बेर मूर्च्छा परिन् ३०
दासीका उपचारले जब फिर्‍यो * क्यै कालमा चेतना।
हेरी श्री हरितर्फ सादर भनिन् * खप्तै ठुलो यातना॥

मेरो जीवनको सदा सुख दिने * आधार यौटा थियो ।
मामा पितृहरू छँदै समरमा * कुन हेतुले मारियो ॥ ३१
त्यागयो जो अहिले अपूर्ण वयको * मानीजले जीवन ।
दाज्यू ! आज बताउनोस् हजुरले * यो मृत्युको कारण ?
मर्दा लायक पुत्र पाण्डु-कुलको * बत्ती निभे झैं भयो ।
आशा औ सुख-शांतिभोग मनको * त्यस्को सँगैमा गयो ॥३२॥
त्यस्तो बालकलाइ घोर-रणमा * एक्लै पठाई दिनु ।
एक्लैले सबलाइ जित्तछ भनी * मिथ्या दुराशा हुनु ॥
उल्टो दैवगती भनौं कि कसरी * सन्तोष मानी लिनु ।
हामी माथि दया सधैं हजुरको * यै हो कि दाज्यू ! हुनु ॥३३

श्री कृष्णले द्रौपदी र अर्जुनको चित्त बुझाउनु :—

राजन् ! धर्म-कुमार दुःखित भई* हा पुत्र ! भन्थे उता ।
रुन्थे पार्थ र द्रौपदी दुख ठुलो * मानेर बेग्लै यता ॥
जस्ले चोट खपे अनेक थरिका * शस्त्रास्त्रको युद्धमा ।
सोही पार्थ भए अचेत, सुतको * त्यो मृत्युको शोकमा ॥३४
त्यस्ताको गति त्यो भयो यदिभने * संसारका व्यक्तिले ।
मान्नू दुःख पर्‍यो भनेर मनमा * सन्तोष कुन युक्तिले ॥
देख्नूभो जब कृष्णले निज सखा * श्री पार्थको त्यो गति ।
आज्ञा गर्नुभयो बुझाइ करमा * पक्रे र हे सद्गति ! ॥३५॥
गर्छन् प्राप्त सदैव उत्तम गती * संग्राममा वीरले ।
भाग्छन् भीरुहरू डराई रणमा * मार्ला भनी शत्रुले ॥
जस्तो युद्धमहाँ पराक्रम गर्‍यो * तिम्रो गुणी पुत्रले ।
त्यस्को वर्णन गर्न आज म पनी * सक्तीनँ विस्तारले ॥३६॥

जन्मेका जति मर्दछन् भनि सबै * संसारले जान्दछन् ।
ज्ञानी व्यक्तिहरू विपत्ति जति जे * आए पनी खप्तछन् ॥
गर्दैछौ तिमि शोक दुःखित भई * हे पार्थ ! ऐहले यता ॥
तिम्रा शत्रुहरू प्रसन्न मनले * हाँसीरहेछन् उता ॥३७॥
वैरीले अपमान जो अघि गरे * त्यस्लाइ बिर्सीकन ।
फाल्छौ के अब मूर्ख झैं तिमिहरू * रोएर यो जीवन ॥
ज्ञानीको पनि ज्ञान के विपदमा * नाशिन्छ ? हे अर्जुन !
तिम्रो देखि अधैर्यपूर्ण स्थिति यो * आत्तिन्छ मेरो मन ॥३८॥
को हूँ के स्थितिमा म छु र अहिले * कर्तव्य मेरो छ कुन् ।
के हो उत्तम धर्म ज्ञान र ठूलो * कुन् नीति हो भन्दछन् ॥
योद्धा अर्जुन ! यी कुराहरू सबै * आपत्तिका कारण ।
प्यारो पुत्र मऱ्यो भनेर सबले * बिर्सी सक्यौ की भन!॥३९
हाम्रो नाश भयो नखप्न सकिने * सर्वस्व जस्तै तर ।
जाँचिन्छन् दुख क्यै पऱ्यो यदि भने * प्रत्येक नारी-नर ॥
मारे जो अभिमन्युलाइ रणमा * अन्याय ठूलो गरी ।
साटो फेर्नु अवश्य पर्छ तिमिले * संग्राममा राम्ररी ॥४०॥
शिक्षा अर्जुनले सुनेर हरिको * क्यै शान्ति पाए जब ।
लागिन् द्रौपदि भन्न दुःखित हुँदै * रोएर हे केशव !
को आजन्म नबिर्सिने दुख खपी * बाँची रहूँ भन्दछन् ।
यस्तो कष्ट खपेर बाँच्नु त बरु * मर्नूनिको ठान्दछन् ॥४१
गर्नूपर्दछ धैर्य धारण भनी * आज्ञा भयो नाथले ।
इच्छा गर्छु तथापि हुन्न मनमा * शान्ती कुनै युक्तिले ॥
केही शेष रहेछ पूर्व जुनिको * दुष्कर्म मेरो अहो !
बाँचेकै छु म पुत्रको मरण यो * देखेर धिक्कार हो ! ॥४२

मुर्दा श्री अभिमन्युको शरिरमा * हेर्दै ठुलो शोकले ।
लागिन् भन्न ति द्रौपदी मुटुमहाँ * गाँठो परी कष्ठले ॥
हे बाबू ! तिमि मान्य व्यक्तिहरूको * गर्थ्यौ सदा आदर ।
गर्दैनौ किन आज आदर, सबै * छौं मान्य नारी-नर ।४३
देख्दामा तिमिले मलाइ कहिले * दुःखी तथा व्याकुल ।
मेरो दुःख हटाउँथ्यौ गरि कुरा * मीठो तथा कोमल ॥
मिल्ने कौरव दुष्टका सँग कुरा * हाम्रो चलेकै घरी ।
लिन्छु राज्य मुमा ! लडेर रणमा * भन्थ्यौ अगाडी सरी ॥४४
जस्तो कष्ट मलाइ हुन्छ अहिले * तिम्रो कुरा संझदा ।
त्यस्तो कष्ट भएन घोर वनमा * सन्ताप भोगी लिंदा ॥
बाबू, पाण्डव पाँचमा तिमि थियौ * आत्मा सरीका प्रिय ॥
तिम्रो ती सबकै अघिल्तिर गरे * वैरीहरूले क्षय ॥४५॥
कैल्हे लाग्दछ काम पाण्डु-सुतको * त्यो धीरता, शूरता ।
जस्तो जे अब यी पराक्रम गरून् * धिक्कार ठान्छु म ता ।
हा हा पुत्र ! भनी विलाप त्यसरी * श्री द्रौपदीले गरिन् ।
वाणी रुद्ध भएर ख्वप्न नसकी * क्यै बेर मूर्छा परिन् ॥४६

अर्जुनको प्रतिज्ञा सुनेर जयद्रथ भयभीत हुनु—

राजन् ! पाण्डव वीरको शिविरमा * छाई करूणा रस ।
रुन्थे पुत्र मर्‍यो भनी धुरु-धुरु * त्यागी सबै साहस ॥
रातो अर्जुन वीर वीर-रसको * उत्साहले देखिए ।
बिर्सी कष्ट सबै कठोर स्वरमा * गर्जेर भन्दा भए ॥४७
हे योद्धागण, वीर, विज्ञजन हो ! * मेरो प्रतिज्ञा सुन ।
एक्लो त्यो अभिमन्युको समरमा * जस्ले लियो जीवन ॥

कस्तै वीर पराक्रमी समरको * ज्ञाता भए तापनी ।
बाँच्नै छैन कदापि जान्नु सबले * मार्नेछु मैले भनी ॥४८
पैह्लो कारण हुन् जयद्रथ लिने * त्यो पुत्रको जीवन ।
भोलीकै दिनमा म मार्दछु स्वयं * संग्राममा तिन्‌कन ॥
पूरा गर्न सकीनँ यो प्रण भने * त्यागनेछु मैले तन ।
साक्षात् शंकर भैं थिए त्यति कुरा* भन्दा त्यहाँ अर्जुन॥४९
अश्रु-पूर्ण दिए दुवै नयन ती * ज्युन् वीरको शोकले ।
बल्दो अग्नि-शिखासरी हुन गए * तत्काल ती रोषले ॥
द्यौता, दानव, यक्ष, राक्षस तथा * गन्धर्व विद्याधर ।
द्रौणी, द्रोण र कर्ण, श्रीकृपजि नै * रक्षार्थ हुन् तत्पर ॥५०
मद्दत् श्रीयम, इन्द्र, रुद्र सबले * तिन्‌को गरुन् तापनी ।
मार्छु निश्चय त्यो जयद्रथ ठुलो * हो शत्रु मेरो भनी ॥
हे राजन् ! मणिहीन नागसरिको * निश्वास छाडीकन ।
गर्थे बातसँगै कठोर धनुको * टङ्क.र श्रीअर्जुन ॥५१॥
देखी साहस, पार्थको प्रण सुनी * वैरीहरूका चर ।
बिन्ती गर्न पुगे सुयोधनकहाँ * मानेर मन्‌मा डर ॥
त्यो संवाद सुनेर सिन्धु-पतिले * मर्नेछु भोली भनी ।
श्री दुर्योधनलाइ सादर भने * अ यन्त दुःखी,बनी॥५२
रक्षा गर्नुहवस् सुयोधन ! छिटै * मेरो कुनै यत्नले ।
भोली निश्चय मार्दछन् समरमा * क्रोधित भई पार्थले ॥
यस्तो बात सुनेर सिन्धुपतिको * हाँसेर दुर्योधन ।
लागे भन्न बुझाइ व्यर्थ डर यो * मानीरहेछौ किन ? ॥५३
द्रोणाचार्य र कर्ण, श्रीकृप गुरू * श्रीशल्य, द्रौणी, शल ।
तिम्रा निम्ति तयार छन् अरु पनी * योद्धा र सेना-दल ।

सक्छौ लड्‌न तिमी पनी समरमा * शस्त्रास्त्र द्वारा जब ॥
व्यर्थैमा डर पाण्डुका तनयको * पर्दैन मान्नू अब ॥५४
धेरै साहस द्रोणले पनि दिए * गर्छु म रक्षा भनी ।
फर्के सिन्धु-पति छिटै शिविरमा * शंकित् थिए तापनी ॥
हे राजन् ! धृतराष्ट्रले जब सुने * संग्रामको हालत ।
सम्झी श्री अभिमन्युलाइ मनमा * रोए नराम्रोसित ॥५५॥

व्यासजी र युधिष्ठिरको मृत्युविषयक प्रश्नोत्तर :—

ज्ञानी धर्म-कुमारको जब भयो * उद्विग्न साह्रै मन ।
डुल्दै व्यास मुनी उपस्थित भए * तिन्‌लाइ सम्झाउन ॥
पाई दर्शन व्यासजीकन दिए * तत्काल सिंहासन ।
पाँचै भाइ मिली प्रसन्न मनले * तिन्‌को गरे पूजन ॥५६॥
हे सर्वज्ञ मुने ! म विह्वल भएँ * त्यो पुत्रको शोकले ।
शान्ती प्राप्त हुने मलाई दिनुहोस् * शिक्षा कुनै नाथले ॥
मर्छन् भूपति जो अनेक रणमा * तिन्‌लाइ मार्ने छ को ?
उत्पत्ति कसरी भयो अघि कहाँ * कोदेखि त्यो मृत्युको ? ५७
त्यस्ले जीवन लिन्छ जीवहरुको * हे नाथ ! कुन् कारण ?
शंका गर्नुहवस् निवारण सबै * मेरो बुझाई मन ॥
बिन्ती धर्म-कुमारको सुनिसकी * भन्नूभयो व्यासले ।
शान्ती प्राप्त हुँदैन हे नरपते ! * चिन्ता तथा शोकले ५८
पैह्लेको इतिहास यै विषयको * भन्छु म यौटा सुन ।
राजा एक थिए 'अकम्पन' कुनै * ज्ञानी तथा सज्जन ॥
तिम्रो झैं सुत मारियो समरमा * ती भूपतिको जब ।
शिक्षा नारदले दिई नृपतिको * चिन्ता हटाए सब ॥५९

भन्दैछु म त्यही प्रसंग विधिको * यो विश्वको सृष्टिमा ।
बढ्दै जीव गए प्रशस्त नमरी * हे भूप ! संसारमा ॥
ब्रह्मालाइ भनिन् गई पृथिवीले * त्यो कष्ट आफ्नू जब ।
तिनको बात सुनी विचार नगरी * ब्रह्मा रिसाए तब ॥६०॥
ब्रह्माको त्यहि क्रोधबाट सहसा * प्रत्यक्ष आगो सरी ।
नारी एक त्यहीं उपस्थित भइन् * त्रैलोक्यकी सुन्दरी ॥
तिनको नाम बताइ 'मृत्यु' विधिले * आज्ञा दिए सादर ।
तिम्रो नै वशमा हुनन् पृथिवीका * प्राणी र नारी-नर ॥६१॥
हे मृत्यो ! तिमिले लिनू समयमा * प्रत्येकको जीवन ।
ब्रह्मालाइ भनिन् विनम्र स्वरमा * तिनले दुखी भैकन ॥
सक्छु गर्न विनाश सृष्टि कसरी * पुत्री भई नाथको ।
दोषी हुन्छु म बन्धु-बान्धव सबै * मारीदिंदा लोकको ॥६२॥
गाह्रो कार्य छ नाथ ! यो म अबला * नारी कहाँ सक्दथें !
मेरो लायक कार्य क्यै अरु दिए * आनन्दले गर्दथें ॥
ब्रह्माले सुनि मृत्युको विनय त्यो * आज्ञा दिए सादर ।
मैले भन्छु जती प्रसन्न मनले * हे मृत्यु ! पूरा गर ॥६३
आयू क्षीण भएर जीव जतिले * त्याग्छन् स्वयं जीवन ।
व्याधी, रोग, जरा अनेक थरि छन् * त्यो मृत्युको कारण ॥
त्यस्मा पाप पनी कुनै तरहको * लाग्दैन हे सुन्दरी !
मैले दिन्छु हुकुम् गई गर तिमी * त्यो काम राम्रो गरी॥६४॥
दैवाधीन र कर्मको वश परी * प्राणी सबै मर्दछन् ।
जो देला तिमिलाइ दोष, सबले * त्यो मूर्ख हो भन्दछन् ॥
काम-क्रोध त्यजेर धर्म-पथको * गर्दै रही पालन ।
शंका कत्ति नमानि जीवहरुको * लेऊ तिमी जीवन ॥६५

भोगुन् लौ सब कर्मको फल भनी * यो सृष्टि पूरा भयो ।
गर्नू कार्य समान भाव सबमा * राखेर, कर्तव्य हो ॥
सोही कारण कर्ममाफिक शुभे ! * जो मर्छ मर्नैं दिनू ।
दिन्छन् दोष मलाइ नै सब भनी * पर्दैन चिन्ता लिनू ॥६६॥
ब्रह्माले त्यसरी बुझाउनुभयो * ती मृत्युलाई जब ।
लागिन् मार्न समस्त लोकभरिका * प्राणी तथा मानव ॥
यो संवाद सुनाइ धर्म-सुतको * क्यै शान्त पारी मन ।
लागे भन्न बुझाइ बात हितको * श्री कृष्णद्वैपायन ॥६७॥

युधिष्ठिरलाई सोह्र राजाहरूको उदाहरण दिनु—

हे राजन् ! पहिले थिए नरपती * कोही ठुला सृञ्जय ।
गर्थे ती शुभ कर्म जीवन थियो * अत्यन्त शान्तिमय ॥
नारद्ले मल-मूत्र नै सुन हुने * योद्धा तथा सद्गुणी ।
छोरो एक हुने दिए वर अघी * हुन् भक्त मेरा भनी ॥६८॥
होला 'पारस' झैं दिने सुन सदा * पक्का अनौठो मणि ।
जान्थे भूपतिका कुमार वनमा * ठूलो शिकारी बनी ॥
यस्तो क्षुद्र विचार राखि मनमा * पक्री कुनै चोरले ।
मार्‍यो पेट चिरेर पुत्र नृपको * त्यो, रत्नको लोभले ॥६९॥
राजा सृञ्जय पुत्रको मरणले * अत्यन्त दुःखी थिए ।
ज्ञानी नारदले पुगी हित हुने * तिन्लाइ शिक्षा दिए ॥
त्यागी शोक, चलाइ शान्त मनले * साम्राज्यको शासन ।
राजा सृञ्जयले ठुलो सुख गरी * त्याग्दा भए जीवन ॥७०॥
लिन्थे भाग स्वयं गई सुरहरू * जुन् यज्ञमा हर्षले ।
सक्तैनन् मख गर्न श्री मरुत झैं * अर्को कुनै भूपले ॥

जसले दीन, दरिद्र, ब्राह्मण, प्रजा * राजी गरेका थिए ।
बाँचेनन् ति पनी सधैं, समयमा * त्यो देह त्यागी गए॥७१
पैह्ले एक 'सुहोत्र' नामक थिए * दानी ठुला भूपति !
धेरै यज्ञ गरेर विप्रगणमा * बाँड्थे तिनी सम्पति ॥
सक्तैनन् अब गर्न शासन कुनै * ती भूप भैं लोकमा ।
त्यस्ता भूपतिले पनी तन त्यजी * जानूपऱ्यो स्वर्गमा ॥७२
राजा 'पौरव' नामका अघि कुनै * ठूला प्रतापी थिए ।
तिन्ले जो हयमेध उत्तम गरी * सम्पत्ति बाँडी दिए ॥
बाँड्रे त्यो धन खूब, बोक्न नसकी * भेट्टाउनेले पनि ।
गर्दैछन् सुख भोग स्वर्गपुरीको *त्यो देह त्यागी तिनी॥७३
जस्ले यज्ञ गरी सुपात्र द्विजमा * बाँड्थे सदा दक्षिणा ।
इच्छिन् वस्तु दिएर पूर्ण सबको * जस्ले गरे कामना ॥
जुन् राजासरिको भएन अझ तक् * दानी तिनै लोकमा ।
त्यस्ता भूप 'शिवी'पनी तन त्यजी* जाँदा भए स्वर्गमा ॥७४
को जान्दैन प्रभाव हे नरपते ! * श्री रामको गौरव ।
जस्ले त्यागिदिए प्रसन्न मनले * साम्राज्य औ वैभव ॥
जस्को राज्यभरी प्रजागण सुखी * दानी थिए सज्जन ।
त्यस्ता भूपति रामजी पनि गए * वेला पुगेका दिन ॥७५॥
ल्याएथे अघि जाह्नवीकन यहाँ * जस्ले तपस्या गरी ।
तारे पूर्वज जो अकाल गतिले * पैह्ले गएथे मरी ॥
जस्ले यज्ञहरू गरेर द्विजको * खुशी गराए मन ।
त्यस्ता भूपति श्री भगीरथ पनी * बाँचीरहेनन् किन ?॥७६॥
जान्थे स्वर्ग सदेह मानिसहरू * जस्को गरी दर्शन ।
गर्थे उत्तम जो अनेक मखको * सानन्द आयोजन ॥

जस्को गर्न सकिन्न शौर्य-बलको * उत्कर्षको वर्णन ।
त्यस्ता भूप दिलीपले पनि यहीं * त्यागीदिए जीवन ॥७७॥
'मान्धाता' नृपती तिनै भुवनमा * कीर्ति फिंजेका थिए ।
तिन्ले ब्राह्मणलाइ यज्ञहरूमा * संपत्ति इच्छित दिए ॥
त्यस्ता विज्ञ नरेशले पनि यहीं * त्यागनृपऱ्यो जीवन ।
मान्छौ दुःख तिमी मऱ्यो सुत भनी * राजन् ! वृथामा किन ?७८
हज्जारौं हयमेध जुन् नृपतिले * आनन्द मानी गरे ।
आफ्ना दीन प्रजा दुखी स्वजनको * संकष्ट जस्ले हरे ॥
दोस्रो इन्द्रसमान कीर्ति भवमा * जस्ले फिंजेका थिए ।
त्यस्ता भूप ययाति स्वर्गपुरिमा * त्यो देह त्यागी गए ॥७९
हे राजन् ! 'शशबिन्दु' नामक अघी * जो श्रेष्ठ राजा थिए ।
रानी एक सहस्रमा सुतहरू * तिन्का हजारौं भए ॥
ज्ञानी भूपतिले ठुला मखहरू * धेरै गरे तापनी ।
गर्दैछन् सुख भोग स्वर्गपुरिमा * त्यो देह त्यागी तिनी ॥८०
अग्नीको वरदानले दिन-दिनै * जो दान गर्थे सुन ।
श्रद्धापूर्वक अग्निहोत्र विधिको * जो गर्दथे पालन ॥
जस्को ख्याति थियो तिनै भुवनमा * विख्यात औ अक्षय ।
बाँचेनन् ति पनी गए समयमा * स्वर्लोक राजा 'गय' ॥८१
जस्ले देव, मनुष्य, पितृ, अतिथी * -को गर्दथे पूजन ।
जो स्वाध्याय र अग्निहोत्र विधिको * गर्थे सधैं पालन ॥
दिन्थे दान अनेक यज्ञहरूमा * जो भूप आनन्दले ।
बाँचेनन् ति पनि लाग्यो समयमा * आएर दुष्कालले ॥८२॥
खेल्थे निर्भय खूब बाल वयमै * जो सिंहका साथमा ।
फैलेको अझसम्म कीर्ति छ ठुलो * गुन्न भूपको लोकमा ॥

ऐह्लसम्म छँदैछ जुन् भरतको * नै नामले 'भारत'।
त्यस्ता भूप मरे भने किन तिमी * हुन्छौ वृथा दुःखित ॥८३
दिन्थे पर्वत मार्ग जो उदधिमा * हिंड्थे धरा झैं गरी।
जस्को देव, मनुष्य, यक्षगणले * गर्थें सदा चाकरी ॥
इच्छामाफिक भूमिको गरिलिए * जुन् भूपले दोहन।
गर्दैछन् सुख भोग तो 'पृथु' मरी * बाँचीरहेनन् किन ? ॥८४
एक्काईस पटक् गराइ पृथिवी- * लाई विना क्षत्रिय।
बाँचेकै अझसम्म छन् परशुराम् * मर्छन् पछी निश्चय ॥
चिन्ता गर्नु वृथा छ यो पृथिविमा * जन्मे जती मर्दछन्।
सोही कारण हो असत्य दुनियाँ * ज्ञानीहरू भन्दछन् ॥८५
जस्का गर्न सकिन्न सद्गुणहरू * आँटे पनी वर्णन।
त्यस्ता भूपतिले पनी यश फिंजा * त्यागी गए जीवन ॥
तिम्रो जो सुत मारियो नरपते ! * त्यस्मा थियो कुन् गुण ?
जस्का निम्ति गरेर शोक यसरी * रुन्छौ मलाई भन ॥८६
शिक्षा नारदको सुनी नृपतिले * सन्तोष माने तर।
तिन्को दुःख बुझेर देव-ऋषिले * कल्याणको खातिर।
राजाको मृत पुत्रलाइ सहसा * पारी दिए जीवित।
पाई जीवित पुत्र सृञ्जय भए * आनन्दले हर्षित ॥८७॥
त्यो आख्यान सुनाइ पाण्डु-सुतको * चिन्ता हरी व्यासले।
शिक्षा धर्म-कुमारलाइ दिनुभो * राम्रो गरी स्नेहले ॥
दैवाधीन छ जीव, व्यक्ति सबको * मर्नू तथा जन्मनु।
केही दुःख पऱ्यो भने अबुझ झैं * हो व्यर्थ चिन्ता लिनु॥८८
जानेको तिमिले छ कष्टहरूको * संसार हो यो घर।
दैवाधीन भई मऱ्यो सुत भनी * रुन्छौ तिमी धर्धर ॥

जानेको छ असत्य हो भनि सबै * -ले विश्वलाई तर ।
रुन्छन् दुःख पऱ्यो भने अबुझ झैं * प्रत्येक नारी-नर ॥८९॥
यो संसार असत्य विज्ञ जनले * औ शास्त्रले भन्दछन् ।
हो यो सत्य कुरा तथापि सहसा * कुन् व्यक्ति पत्याउँछन् ?
मनू जन्मनु दैवका अधिनमा * जानेर हे भूपति !
चिन्ता व्यर्थ गरी रह्यौ मदि भने * सप्रन्न तिम्रो मति ॥९०
थाल्छन् गर्न अनर्थ क्षत्रिय ठुला * राजाहरूले जब ।
तिन्लाइ वशमा गराउन भनी * उद्योग गर्छन् सब ॥
देखी-देखि अनीति मौन भइ जो * बस्छन् ठुला क्षत्रिय ।
त्यस्तालाइ सुविज्ञ भूपहरूले *मान्छन् कहाँ क्षत्रिय ! ॥९१
राजन् ! पुत्र मरेर दुःखित भई * कर्तव्य त्याग्यौ भने ।
बिर्सी सत्पथ कष्ट-रूप रहमा * छौ बेसरी गाडिने ॥
हाँस्छन् कौरव हर्षले शिविरमा * देखेर तिम्रो स्थिति ।
रुन्छौ चित्त दुखाउँदै तिमि भुली * कर्तव्य हे भूपति ! ॥९२॥
बिर्सी कष्टहरू सबै तरहका * पारेर चित्त स्थिर ।
के गर्दा हित हुन्छ सोचि मनले * कर्तव्य आफ्नू गर ।
शिक्षा पाण्डु-कुमारलाइ त्यसरी * श्री व्यासजीले दिए ।
अन्तर्धान भएर आश्रममहाँ * तत्काल फर्की गए ॥९३॥

व्यग्र चित्त भएका अर्जुनलाई श्रीकृष्णले बुझाउनु र पाशुपतास्त्र दिलाउनु :—

सुन्दा श्री धृतराष्ट्रले मरण त्यो * श्री पार्थका पुत्रको ।
भन्थे त्यो कुलदीप, द्रोण गुरुकै * दुर्नीतिले मारियो ॥
ज्ञानी सञ्जयले सबै जब गरे * संग्रामको वर्णन ।
त्यो संवाद सुनी प्रजागण पनी * रोए दुखाई मन ॥९४॥

हाम्रो जीत भयो भनीकन उता * हर्षित थिए कौरव ।
सन्ध्याकाल भयो गए शिविरमा * दुःखी हुँदै पाण्डव ॥
निद्रा लाग्न सकेन तापनि बसे * शय्या महाँ अर्जुन ।
श्री योगेश्वर बस्नुभो नगिचमा * तिन्लाइ सम्झाउन ॥९५॥
डर्लाग्दो परिणामको अलिकती * ख्यालै नराखीकन ।
मार्छु सिन्धुपती भनी किन गर्‍यौ * गम्भीर त्यस्तो प्रण ॥
भोली पूर्ण भएन त्यो प्रण भने * संग्राममा अर्जुन !
तिम्रो के गति हुन्छ सम्झिकन त्यो * आत्तिन्छ मेरो मन ॥९६
त्यो गम्भीर कुरा सुने विजयले * श्री कृष्णजीको जब ।
लागे भन्न तिनी विनम्र स्वरमा * न्यूहेर हे केशव !
जस्का चिद्घनरूप ईश्वर सदा * छन् साथमा रक्षक ।
त्यस्ले त्यो प्रण पूर्ण गर्छ सहजै * हे शत्रु-संहारक ! ॥९७॥
त्यस्को मद्दत गर्न इन्द्र, यम नै * आए पनी युद्धमा ।
जित्नेछु म प्रतापले हजुरको * तिन्लाइ संग्राममा ॥
मेरो शक्ति तथा पराक्रम सबै * संसारले जान्दछन् ।
हे योगेश्वर ! यी मलाइ प्रभुले * जाँच्ने कुरा मात्र हुन् ॥९८
बिन्ती अर्जुनको सुनी मुसु-मुसू * श्री कृष्ण हाँस्नूभयो ।
गर्थे मित्र दुवै कुरा निशि भने * बिस्तार आधा गयो ॥
गर्दा चिन्तन चित्तमा विजयले * लागेन निद्रा जब ।
माया आफ्नु फिंजाइ भट्ट हरिले * छोपीदिनूभो तब ॥९९॥
शय्याबाट उठाई बक्सनुभयो * बाहू समाई कन ।
स्वप्नाकै स्थितिमा हिंडे हरिसँगै * आनन्दले अर्जुन ॥
लोकालोक, समुद्र, उत्तम नदी * नाला, ठुला पर्वत ।
देख्ता बाग, तड़ाग, आश्रम, कुटी * हुन्थे तिनी हर्षित ॥३००॥

यौटा पर्वतको ठूलो शिखरको * माथी पुगे ती जब ।
देखेथे उभिएर घोर तपमा * लाग्नु भएको शिव ॥
बाँधेको शिरमा जटा र कटिमा * जस्को छ बाघम्बर ।
आँखा तीन र नागको छ गहना * घाँटी भरी सुन्दर ॥१॥
बाहूमा छ त्रिशूल भस्म तनमा * वामाङ्गमा पार्वती ।
देखी सूर्यसमान कान्ति शिवको * आनन्द मानी अति ॥
टाढैबाट गरी प्रणाम दुइले * श्री शम्भुका पाउमा ।
लागे गर्न गई नगीच स्तुति यो * उत्साहका साथमा ॥२॥
हे विश्वेश्वर ! आदिकारणप्रभो ! * हे लोकका आश्रय !
हे योगेश्वर ! ब्रह्मरूप भगवन् ! * सर्वज्ञ ! हे चिन्मय !
गर्दछौं पदमा प्रणाम प्रभुको * हामीहरू सादर ।
हामीमाथि दया गरी नजरले * हेर्नू हवस् ईश्वर ! ॥३॥
श्री कृष्णार्जुनको सुनी स्तुति भने * के काम यस्तो पर्‍यो ।
आयौ भेटन मलाइ यो बखतमा * हाँसेर भन्नूभयो ॥
त्यो आज्ञा शिवको सुनेर हरिले * भन्नूभयो सादर ।
छोरा मारिदिए भनी समरमा * दुःखित सखा छन् तर॥४

१—अर्जुनले अलि पर पुगेपछि लड़ाइँ गर्न लागेका आफ्ना पुत्र अभिमन्युलाई देखेर अत्यन्त हर्षले आलिङ्गन गर्नलाग्दा अभिमन्युले भने—हे वीर ! तिमी को हौ, यहाँ किन आएका, मसित तिम्रो के काम छ ?' अर्जुनले छोराको कुरा सुनेर छक्क परी श्रीकृष्णलाई सोधे 'हे प्रभो ! यो अभिमन्यु आज मलाई किन चिन्दैन ? यसको कारण आज्ञा हवस् ।' आफ्ना प्रिय सखाको त्यस्तो विन्ति सुनी श्रीकृष्णले हाँसेर भन्नुभयो--'हे पार्थ ! मैले पृथ्वीको भार उतार्न यो अवतार लिएपछि स्वर्गका सबै देवताहरू पनि मानिसको रूप धारण गरेर पृथ्वीमा आए । तिनै देवताहरूमध्ये ब्रह्माको आज्ञाले चन्द्रमा तिम्रो पुत्र अभिमन्यु भएर सोह्र कलामा केवल एक कला मात्र लिएर जन्मेका थिए । उनको सोह्र कला आज पूर्ण भएको हुनाले संग्रामको निहुँ पारी मनुष्य शरीर त्यागी फेरी चन्द्रमामै लीन भए । मनुष्य-जन्मनु शरीरको धर्म हुनाले र अनेक पटक भरी-जन्मिसकेको हुनाले पूर्व जन्मको सबै कुरा स्मरण रहन गाह्रो पर्दछ, त्यसे कारणले अभिमन्युले चिन्ह सकेनन् । (कुनै कुनै भाषा महाभारतमा यस्तो कथा पनि छ तर, यो कथा मूलमा छैन । —लेखक )

भोली नै वध गर्छु सिन्धु-पतिको * भन्ने प्रतिज्ञा गरी ।
आयौं पर्न हजूरको शरणमा * हामी दुवै यो घरी ॥
जे गर्दा हित हुन्छ यी विजयको * गर्नोस् त्यही हे शिव !
भन्नूभो शिवले कुरा सुनिसकी * हाँसेर हे माधव ! ॥५॥
पाए जो वरदान सिन्धु-पतिले * मेरो तपस्या गरी ।
रोके पाण्डव चारलाइ रणमा * त्यै हेतुले हे हरि !
तिनको त्यो वरको प्रभाव सकियो * भोली लडी पार्थले ।
मारुन् दुर्जय सिन्धुराजकन लौ * त्यो श्रेष्ठ दिव्यास्त्रले ॥६॥
त्यो आज्ञा शिवले गरेर पहिले * बाँधेर पद्मासन ।
चिम्ली नेत्र दुवै गरी हृदयमा * चिद्ब्रह्मको चिन्तन ॥
आफ्नू पाशुपतास्त्र मन्त्रित गरी * आशीषको साथमा ।
सुम्पीबक्सनुभो सहर्ष शिवले * श्री पार्थको हातमा ॥७॥
पाए आशिष दिव्य अस्त्र त्यसरी * श्री शम्भुदेखी जब ।
त्याहाँबाट बिदा भईकन हिंड़े * श्री पार्थ औ केशव !
माया आफ्नु खिंचेर झट्ट हरिले * चैतन्य पारी दिंदा ।
हेर्थे छक्क परेर अर्जुन, कुरा * त्यो स्वप्नको सम्झँदा ॥८

नर-नारायणको वार्तालापः—

स्वप्ना हो, विपना कि वा भ्रम भयो * यस्तो मलाई किन ?
शय्यामाथि बसेर चिन्तन यही * गर्दै थिए अर्जुन ॥
अर्को दिव्य तथा सफा पलङमा * सुत्नूभएथ्यो हरि ।
हेर्थे पद्मसमान आनन तिनी * श्रीकृष्णको राम्ररी ॥९॥
निद्राबाट उठी गएर नजिकै * केही नजान्ने बनी ।
गर्दै प्रेम सुध्याइबक्सनुभयो * हे मित्र ! के भो भनी ।

मानी कौरव वीरको भय वृथा * निद्रा त्यजी भोजन ।
गर्दछौ किन हे सखा ! मन तिमी * कुन् बातको चिंतन ॥१०
जस्तो लक्षण देख्दछु म अहिले * तिम्रो सखा अर्जुन !
हो त्यो कायरता अधैर्य मनको * भन्छन् सबै सज्जन ॥
गर्छन् धारण धैर्य, साहस ठुलो * राख्छन् सदा वीरले ।
खप्छन् कष्ट जती परे पनि सबै * उत्साह औ धैर्यले ॥११॥
गर्दा कार्य कुनै विचार पहिले * गर्नू पर्‍यो क्यै भने ।
सल्लाहा लिनुपर्छ विज्ञ जनको * कल्याण आफ्नू हुने ॥
ती जान्ने जनमा पनी चतुर जो * छन् मित्र आफ्ना गुणी ।
तिन्का साथ बसेर निर्णय सदा * गर्नू चनाखो बनी ॥१२॥
कस्तै होस् चतुरो, हितू र गुणवान * स्वार्थी र कप्टी भए ।
केह्रे सिद्ध हुँदैन कार्य जनको * सल्लाह त्यस्को लिए ॥
जान्नेको नसुनी विचार जन जो * लींडे ढिपी गर्दछन् ।
नाशी कार्य ति हास्य-पात्र भइ झन् * आपत्तिमा पर्दछन् ॥१३
त्यो आज्ञा हरिको सुनी विनयले * सम्झी कुरा स्वप्नको ।
थाले तर्क-वितर्क गर्न मनमा * हो कार्य के कृष्णको ?
यिन्को जान्न सकिन्न कार्य कहिले * गर्छन् कहाँ कुन् गई ।
जानेको छ सबै तथापि अहिले * बोल्छन् नजान्ने भई ॥१४
केही बेर गरी विचार मनमा * बिन्ती गरे सादर ।
अज्ञानी मद-मोहले ग्रसित हूँ * यौटा गृहस्थी नर ॥
हे योगेश्वर ! पुत्रको मरणले * चिन्तित भएकै थिएँ ।
होला त्यो प्रण पूर्ण के गरि भनी * झन् बेसरी आत्तिएँ ॥१५॥
गर्दा तर्क स्वयं तरङ्ग मनमा * उठ्छन् अनेकौं थरी ।
देख्छु स्वप्न विचित्र घोर निशिमा * निद्राविना हे हरि !

कस्ते सक्छ यथार्थ जान्न प्रभुको * लीला छ जो दुस्तर ।
रक्षा गर्नुहवस् म छु शरणमा * हे कृष्ण योगेश्वर ॥१६॥
साँचो भन्न पनी म सक्तिनँ प्रभो * त्यो स्वप्नको बात हो ।
त्यस्लाई कसरी असत्य म भनूँ * प्रत्यक्ष जो देखियो ॥
यस्तो विन्ति गरी मुहार प्रभुको * हेरी रहे पार्थले ।
तिनको प्रेम बुझी प्रसन्न मनले * मन्नूभयो कृष्णले॥१७
अर्काको उपकार जो जति जहाँ * गर्छ चिताई हित ।
मैले प्रत्युपकार खोज्दिनँ सखे ! * केही पनि त्योसित ॥
गर्छन् नित्य मलाइ सम्झि जन जो * कर्तव्यको पालन ।
गर्छु भक्त भनेर ती सुजनको * कल्याण हे अर्जुन ! ॥१८
सोही कारणले तिमी पनि कुनै * शंका नमानीकन ।
आफ्नू धर्म बुझी सदा गर सखे * कर्तव्यको पालन ॥
त्यो आज्ञा हरिको सुनेर मनमा * सन्तोष मानीकन ।
रक्षा गर्नुहवस् भनी शरणमा * पर्दा भए अर्जुन ॥१९
प्रातःकाल उठेर धर्म-सुतले * स्नानादि पूजा गरी ।
बाँड्थे धन-वस्त्र विप्रगणमा * पूजा गरी राम्ररी ॥
त्यै वेला समचार एक चरले * ल्याई पुऱ्यायो त्यहाँ ।
ऐले पाल्नुहुँदैछ हे नरपते ! *श्रीकृष्ण आफैं यहाँ ॥२०
त्यो संवाद सुनेर धर्म-सुतले * गर्दै ठुलो स्वागत ।
राखे आसनमा र पूजन गरे * श्रद्धा र भक्तीसित ॥
गर्नेछन् प्रण पूर्ण ती विजयले * संग्रामा के गरी ।
त्यो सन्देह भएर नम्र स्वरमा * बिन्ती गरे हे हरि !॥२१॥
जस्तै आश्रय इन्द्रको सुरहरू * लिन्छन् सबै स्वर्गमा ।
त्यस्तै आश्रय जानि हामि प्रभुको* पर्छौं सदा पाउमा ॥

हामीलाइ छलेर शत्रुहरूले * जो कष्ट पैह्ले दिए ।
जान्नुहुन्छ: हजूर राज्य जसरी * हामीहरूको लिए ॥२२॥
इच्छाले प्रभुकै भयौं समरमा * उत्साहले उद्यत ।
पार्नुहोस् प्रण पूर्ण श्री विजयको * हाम्रो चिताई हित ॥
यस्तो विन्ति सुनेर धर्म-सुतको * आज्ञा भयो कृष्णले ।
चिन्ता गर्नु वृथा छ यो विषयमा * शंका झिकी नाथले॥२३
काट्नन् आज अवश्य सिन्धुपतिको* मेरा सखाले शिर ।
फर्कन्नन् प्रणलाइ पूर्ण नगरी * ती श्रेष्ठ योद्धा घर ॥
जस्तै अग्नि जलाउँछन् सहजमा * ठूला-ठुला जङ्गल ।
त्यस्तै भस्म गराउँछन् विजयले * वैरीहरूको दल ॥२४॥
हे राजन् ! हरिले दिएर त्यसरी * तिन्लाइ आश्वासन ।
बस्नूभो रथमा सहर्ष सँगमा * जाँदा भए अर्जुन ॥
ठूलो व्यूह बनाइ सैन्यहरुको * श्री सात्यकी वीरले ।
योद्धा पाण्डवका हिंडे समरमा * अत्यन्त उत्साहले ॥२५

द्रोणाचार्यको चौथो दिनको युद्धमा अर्जुनद्वारा गजसेनाको संहार र गुरु शिष्यको संग्राम :–

राजन् ! व्यूह बनाई त्यो शकट झैं * श्री द्रोण आचार्यले ।
मुख्य द्वारमहाँ बसे उनि स्वयं * अत्यन्त उत्साहले ।
छानी-छानि अनेक वीरहरूको * घेरा लगाई दिए ।
चारै तर्फ डटेर सिन्धु-पतिको * रक्षा गरेका थिए ॥२६॥
आएथे जब वेगले समयमा * गर्जेर श्री अर्जुन ।
रोकेथे गज सैन्यका अधिपती * आएर दुर्मर्षण ॥
पारे घायल पार्थलाइ पहिल्यै * तिन्ले तिखा बाणले ।
तिन्को चोट खपेर व्याकुल गरे * नौ बाणले पार्थले ॥२७॥

भागेथे रणभूमिबाट डरले * तत्काल दुर्मर्षण ।
लागेथे गज सैन्यको अति ठुलो * संहारमा अर्जुन ॥
खोलो बग्न गयो ठुलो रगतको * बाहु र पाऊ, शिर ।
बग्थे जन्तुसमान सायक धनू * शस्त्रास्त्र चारैतिर ॥२८॥
हाहाकार गरेर सैन्य कुरुका * भागे बचेका सब ।
द्रोणाचार्यकहाँ बढाइ रथ त्यो * पुग्नुभयो केशव ॥
भन्नूभो निज शिष्यलाइ नजिकै * देखेर आचार्यले ।
बाबू ! स्वागत गर्दछु समरमा * तिम्रो म शस्त्रास्त्रले ॥२९॥
ठूलो युद्ध गरी मलाइ पहिले * सन्तुष्ट पारीकन ।
सक्नेछौ तिमि पस्न आज सहजै * यो व्यूहमा अर्जुन !
तिम्रो जाँच म गर्छु आज रणको * हेर्छु ठुलो कौशल ।
देखाऊ गुरुका अघिल्तिर छिटै * आफ्नू भएको बल ॥३०॥
त्यो आज्ञा गुरुको सुनी विजयले * बिन्ती गरे सादर ।
हे आचार्य ! लिनोस् म दिन्छु खुशिले*आफ्नू परीक्षा, तर ॥
यौटा काम ठुलो छ सिन्धुपतिको * आजै लिनू जीवन ।
छुतै यार गुरो ! म त्यसपछि स्वयं * आफ्नू परीक्षा दिन ॥३१
यस्तो बात गरेर बाण दसले * आचार्यका पाउमा ।
हानी स्वागत द्रोणको विजयले * गर्दा भए युद्धमा ॥
हे राजन् ! गुरु-शिष्य क्रोधित भई * बर्साउँथे जो शर ।
ढाक्थ्यो भूमि-अकाश त्यो शलह झैं* फैलेर चारैतिर ॥३२॥
केह्ली ती शर झिक्तथे र धनुमा * राखेर छाड्थे तिनी ।
हेर्थे कौशल युद्धको अरु सबै * तस्वीर जस्ता बनी ॥
ढाक्यो मण्डल सूर्यको र दिनमै * रात्रीसरी देखियो ।
थाले थर्-थर काम्न कातरहरू * सातो कतीको गयो॥३३

लागी वाणहरू दुवै तरफको * संहार ठूलो भयो ।
हे राजेन्द्र ! अभूतपूर्व रण ती * चेला-गुरूको थियो ॥
धेरै बेर चलीरह्यो क्रम त्यही * योद्धा दुवैको जब ।
भन्नूभो हरिले विलम्ब किन यो * हे पार्थ ! गर्छौं अब ॥३४
त्यो आज्ञा पहिले गरी रथ छिटै * हाँक्नूभयो वेगले ।
आए रोक्न भनेर कौरवहरू * सम्पूर्ण उत्साहले ॥
सारालाइ जितेर एक क्षणमा * गर्दै ठूलो गर्जन ।
मारी रक्षक व्यूहभित्र सहजै * पस्ता भए अर्जुन ॥३५॥
रोक्नूभो गुरु द्रोणले अरु सबै * योद्धा विपक्षीकन ।
आए लड्न भनेर पार्थसँग ती * दौड़ेर दुःशासन ॥
चाँडै नै तिनिलाइ पाँच शरले * हानी भगाई दिए ।
आए रोक्न भनेर पार्थकन जो * तत्काल ती मारिए ॥३६॥
राजन् ! अश्वपती, रथी, गजपती * सेनापती, पैदल ।
लागी वाण तिखा-तिखा विजयका * धेरै भए कत्तल ॥
हाहाकार परेर वीर गुरुका * भागी रहेका थिए ।
पक्री एक गदा 'श्रुतायुध' पुगी * लड्छु म भन्दा भए॥३७
हाने सोहि गदा, ति अस्त्र नलिने * श्री कृष्णलाई तर ।
फर्की सोहि गदा गएर सहसा * तिनकै फुटायो शिर ॥
पैह्लेका वरले श्रुतायुध मरे * आफ्नै गदाले जब ।
आए श्री कृतवर्म वीर रिसले * लड्छु म भन्दै अब । ३८
पारे घायल पार्थलाइ शरको * वर्षा गरी बेसरी ।
काटे ती शरलाइ श्री विजयले * हज्जार टुक्रा गरी ॥
भागेथे कृतवर्म जीवन लिई * साह्रै ठुमो वेगले ।
मारी सारथि, अश्वऔर रथ-ध्वजा* भाँची दिए पार्थले ॥३९

सैन्य संहार भएको देखी दुर्योधनले गुरुलाई कठोर वचन भन्नु :—

राजन् ! वीरहरू हजूरतिरका * घेरै मरेथे जब ।
लागे भाग्न डराइ जीवन लिई * हा हा ! परी कौरव ॥
द्रोणाचार्यकहाँ सुयोधन पुगे * देखेर त्यस्तो स्थिति ।
लागे भन्न गुरो ! यि सैन्यहरुको * हेर्नू हवस् दुर्गति ॥४०॥
गर्दैछन् सबले कुरा समरमा * गर्दा हजुरैं क्षमा ।
मारे सैनिक, मार्दछन् अझ पसी * श्री पार्थले व्यूहमा ॥
तिन्लाइ अघि बढ्न आज नदिई * रोकीदिएको भए ।
तोड़ी व्यूह तिनी हजूरकन ती * के जानसक्ने थिए ॥४१॥
को जान्दैन हजूरको जति छ जे * संग्राममा योग्यता ।
बिर्से झैं किन गर्नुहुन्छ यसरी * आफ्नू ठुलो वीरता ॥
ब्रह्मन् ! अर्जुन छन् सबै तरहले * दुर्जेय योद्धा तर ।
यो संग्राम शुरू गरें हजुरकै * मानेर ठूलो भर ॥४२॥
सेवामा गुरुको कुनै त्रुटि नहोस् * भन्ने विचारीकन ।
मैले शक्ति पुगे जती चरणमा * आफ्नू लगाएँ मन ॥
त्यस्को प्राप्त भयो मलाइ रणमा * साह्रै नमीठो फल ।
गर्नू हुन्छ हजूर भित्रि मनले * ती शत्रुकै मङ्गल ॥४३॥
जानेको छु, तथापि जो दिनुभयो * पैह्ले मलाई वर ।
त्यो संझेर हुनोस् जयद्रथजिको * कल्याणमा तत्पर ॥
भन्थे अर्जुनको सुनी प्रण तिनी * भागेर जान्छु घर ।
रोकें तिन्कन मूर्खता गरि यहाँ * मानी हजुर्को भर ॥४४॥
मेरा निम्ति दया अलीकति पनी * बाँकी भए चित्तमा ।
रक्षा अर्जुनबाट सिन्धु-पतिको * गर्नू हवस् युद्धमा ॥

श्री दुर्योधनको सुनी हृदयमा * बिझ्ने कुरा द्रोणले ।
साह्रै चित्त दुखाइ दुर्जन बुझी * भन्नू भयो रोषले ॥४५॥
जस्तो बात भन्यौ मलाइ अहिले * छेड़ेर दुर्योधन !
बोल्छन् दुर्जन, मूर्ख मात्र यसरी * भन्छन् कहाँ सज्जन !
छोरो झैं तिमिलाइ ठान्छु मनले * मैले त्यसै कारण ।
त्यस्को दुःख मलाइ छैन मनमा * हे वीर ! दुर्योधन ॥४६॥
जिद्दी वा हठले कुकर्म पहिले * गर्छन् जती दुर्जन ।
आत्तिन्छन् पछि पापका फलहरू * भोग्नू परेको दिन ॥
मेरो स्नेह जती छ पाण्डु-सुतमा * त्यो चित्तको मात्र हो ।
गर्दैछु म सकेजती शरिरले * हे वीर ! तिम्रो भलो ४७॥
लाएको तिमिले मलाइ पहिले * बिर्सन्नँ सारा गुन ।
संझेको नभए लड़ाइँ यसरी * गर्थें म ऐह्ले किन ?
तिम्रो साथ रहेर जो हुन गयो * दुर्नाम संसारमा ।
त्यस्को निष्कृति हुन्छ जीवन लड़ी * त्यागेपछी युद्धमा ॥४८॥
योद्धा, वीर तिमी सबै तरहले * छौ श्रेष्ठ दुर्योधन !
छन् ती राज्यविहीन पाण्डव दुखी * छोरो मरी अर्जुन ॥
सक्छौ लड्न डटी तिमी विजयका * सामू लड़ाइँ गर ।
जाऊ सैन्यहरू लिएर, मनमा * पर्दैन मान्नू डर ॥४९॥
त्यो आज्ञा गुरुको सुयोधनजिले * सुन्दा भएथे जब ।
भन्छन् अर्जुन छन् ठुला पृथिविका * योद्धाहरूमा सब ॥
आफैं सक्नुभएन रोक्न गुरुले * संग्राममा जस्कन ।
त्यस्का साथ गएर लौ लड़ भनी * आज्ञा भएको किन ? ॥५०
सक्छौं जित्न सुरेन्द्रलाइ रणमा * हामीहरूले तर ।
गाह्रो मान्दछु लडन ती विजयको * लागेर बर्ता डर ॥

एक्लै दुर्धर वीरका सँग लड़ौं * मैंले गई के गरी ?
भन्नूभो गुरु द्रोणले सुनि कुरा * तिन्‌लाई सोही घरी ॥५१
मारेथे सुरराजले कवच जुन् * पैह्रेर वृत्रासुर ।
त्यो पैह्रेपछि हुन्न शत्रुदलको * संग्राममा क्यै डर ॥
जस्ले खप्न सकिन्छ चोट शरको * आघात वज्रादिको
तिम्रो मङ्गल गर्न वर्म बलियो * पैह्राउँछु आज यो ॥५२॥
आशीर्वाद दिई स्वयं कवच त्यो * बाँधीदिए द्रोणले ।
गर्नू युद्ध डटेर पार्थसँग नै * हे वीर ! उत्साहले ॥
जूवा होइन, दुष्ट त्यो शकुनिको * चल्दैन याहाँ छल ।
जो गर्ला पुरुषार्थ हुन्छ विजयी * त्यो पक्ष नै केवल ॥५३॥
राधाका सुत कर्णलाइ सँगमा * रक्षार्थ राखी लिनू ।
कृष्णार्जुन्‌कन आजको दिनभरी * पर्नेछ रोकी दिनू ॥
त्यो आज्ञा गुरुको सुनेर मनमा * सन्तोष मानीकन ।
सेना साथ लिई सुयोधन गए * लड्थे जहाँ अर्जुन ॥५४

दुवै पक्षको परस्पर संकुल युद्ध :—

हे राजन ! गुरु द्रोण व्यूह–मुखमा * आफैं डटेका थिए ।
खोज्थे पस्न जती विपक्षतिरका * तिन्‌लाइ मार्दै गए ॥
त्यो देखेर डराइ सैनिकहरू * भागी रहेथे जब ।
धृष्टद्युम्न पुगी भने–तिमिहरू * पर्दैन भाग्नू अब ॥५५॥
छाड़ेथे सय बाण द्रोण-गुरुले * तिन्‌लाइ ताकी, नर ।
धृष्टद्युम्नजिले अनेक टुकुरा * पारी गुरुका शर ॥
हानी बाण पचीस देहभरिमा * घाऊ गराए जब ।
पारी घायल द्रोणले पनि भने * पर्खी म मार्छु अब ॥५६

गर्थे आपुसमा प्रहार ति दुवै * योद्धा रिसाई कन।
भाग्थे सैन्य कती डराइ रणमा * तिन्को सुनी गर्जन॥
आए लड्न भनेर श्री द्रुपदजी * बढ्दै अगाडीतिर।
रोकेथे अनुविन्द, विन्द दुइले * तिनलाइ छाडी शर॥५७
पौंचे मद्दत गर्न श्रेष्ठ रथमा * योद्धा शिखण्डी जब।
रोक्नूभो तिनिलाइ द्रोणगुरुले * आएर सामू तब॥
पाँचोटा बलवान द्रौपदिजिका * छोराहरू जो थिए।
श्री बाल्हीक नरेशले समरमा * तिन्लाइ रोकीलिए॥५८
रोके धर्म-कुमारलाइ सहजै * आएर श्री शल्यले।
लागे लड्न दुवै नरेश रणमा * अत्यन्त उत्साहले॥
रोके सात्यकिको प्रहार बलियो * पौंचेर दुःशासन।
छाडी शस्त्रहरू परस्पर दुवै * गर्थे ठुलो गर्जन॥५९॥
काटेथे शकुनी गई नकुलको * ताँदो धनूको जब।
पारे घायल शक्तिले र शकुनी * भागे डराई तब॥
आयो क्रोध गरी घटोत्कच * जसै गर्जेर संग्राममा।
रोक्यो राक्षस त्यो अलम्बुष पुगी * उत्साहका साथमा॥६०
लड्छन् मत्त गजेन्द्र घोर वनमा * गर्जेर जुन् चालले।
सोही चाल गरेर राक्षस दुवै * लड्थे ति उत्साहले॥
राधाका सुत कर्ण और कृप दुवै * दायाँ र बायाँ भई।
सेनाका प्रति पृष्ठरक्षकहरू * चौतर्फ घेरा दिई॥६१॥
राखी माझमहाँ जयद्रथजिको * राक्षा सबै गर्दथे।
सुन्दा तैपनि पार्थका धनुषको * टंकार ती डर्दथे॥
ढाकेथे जब सैन्यलाइ शरले * संग्राममा भीमले।
भागेथे रणबाट खप्न नसकी * तत्काल ती वेगले॥६२

राजन् ! युद्ध भयो परस्पर त्यहाँ * जस्तो दुबै पक्षको ।
त्यस्मा प्राण गए दुबै तरफका * सेना तथा वीरको ॥
द्रोणाचार्य र सात्यकी जब भए * संग्राममा उद्यत ।
हेर्थें छक्क परी प्रहार दुइको * शस्त्रास्त्रको अद्भुत ॥६३

लाग्ने अनेक शरका कतिलाइ घाउ ।
टुक्रा भई कति गिरे शिर, बाहु, पाउ ॥
खोलो बग्यो रगतको रणभूमि माहाँ ।
भागे डराइ कति सैनिक भीरु त्याहाँ ॥६४॥

राजन् ! पस्न भनेर व्यूह-मुखमा * जो जो अघी सर्दथे ।
रोकी ती सबलाइ शस्त्रबलले * श्री द्रोणले मार्दथे ॥
त्यो देखेर भने युधिष्ठिरजिले * हे सात्यकी ! हेर्नुहोस् ।
मार्दैछन् सब सैन्यलाइ गुरुले * चाँडो गई रोक्नुहोस् ॥६५
त्यो आज्ञा दिईं श्री युधिष्ठिरजिले * हानी तीखा बाणले ।
पारी घायल द्रोणलाइ सहसा * गर्जे ठुलो हर्षले ॥
तोड़ी व्यूह पसेर सात्यकिजिले * संहार थाले उता ।
मारे सारथि, अश्व धर्म-सुतको * आचार्यजीले यता ॥६६
भागे धर्म-कुमार भट्ट डरले * संग्राम त्यागीकन ।
मारी सैन्य अनेक शत्रुदलका * थाले गुरू गर्जन ॥
हेर्थें छक्क परी पराक्रम सबै * आचार्यको त्यो दिन ।
आगोमा खर झैं अनेक भटले * त्यागे त्यहाँ जीवन ॥६७॥

अर्जुनद्वारा दुर्योधनको पराजय :—

योद्धा सात्यकि औ धनञ्जय पसी * त्यो चक्र झैं व्यूहमा ।
मारेथे अनुविन्द, विन्द बलिया * योद्धा दुवै युद्धमा ॥

पैह्नी वर्म अमोघ द्रोण गुरुको * पोंचेर दुर्योधन।
लागे भन्न तिमी पराक्रम सबै * देखाउ हे अर्जुन ॥६८॥
देखाउन् छल-छद्म आफ्नु सब यी * श्री कृष्णजीले पनि।
त्यस्तो बात भनी तिखा शरहरू * छाडेर गर्जे तिनी।
लाग्यो चोट निकै धनञ्जय तथा * श्री कृष्णलाई जब।
छाड़े अर्जुनले तिखा शरहरू * मन्त्रेर आफ्ना सब ॥६९
व्यर्थै बाणहरू भए सकल ती * त्यो वर्ममा चिप्लिई।
सोध्नूभो हरिले सखासित त्यहाँ * केही नजान्ने भई॥
यस्तो ता कहिले भएन पहिले * मैले कहीं देखिनँ।
तिम्रा बाणहरू भए विफल यी * कुन हेतुले अर्जुन ! ॥७०
यो आज्ञा हरिको सुनी विजयले * बिन्ती गरे केशव।
जान्नूहुन्छ हजूरले सब कुरा * हुन्छन् जहाँ जे जब॥
आए लड्न लगाई वर्म गुरुको * ऐह्ले यि दुर्योधन।
मेरा वार सबै वृथा हुन गए * हे नाथ ! त्यै कारण ॥७१
जान्दैनन् यिनिले विधान सब त्यो * पैह्रे पनी वर्मको।
गर्छु भेदन वर्म द्रोण गुरुको * आज्ञा भए नाथको॥
यस्तो बात सुनेर श्री विजयको * श्री कृष्ण खूशी भए।
अर्को एक धनू लिई विजयले * ताँदो चढ़ाई लिए ॥७२
द्रौणीले बुझि त्यो परिस्थिति सबै * दिव्यास्त्र छाड़ीकन।
ताँदो काटिदिएर झट्ट धनुको * थाले तिनी गर्जन॥
त्यो वेला सहसा सुयोधनजिले * नौ बाण छाडे जब।
घाऊ पारिदिए शरीरभरिमा * श्री पार्थजीको जब ॥७३॥
काटी चाबुक कृष्णको शरिरमा * घाऊ गराईकन।
थाले गर्जन बेसरी समरमा * सोत्साह दुर्योधन॥

ढाक्दै पार्थ र कृष्णलाइ शरको * वर्षा गरी बेसरी ।
सारा कौरव सिंहनाद खुशिले * गर्दाभए त्यो घरी ७४॥
चाटी ओठ रिसाइ श्री विजयले * हानी तिखा बाणले ।
मारे अश्व र सारथी, रथ-धनू * भाँची दिए वेगले ॥
श्री दुर्योधनलाइ चोट तनमा * लाग्दै नलाग्ने हुँदा ।
हत्केला नङभित्र मात्र शरले * हान्थे तिनी सर्वदा ॥७५
लागी चोट अनेक खप्न नसकी * भागे ति दुर्योधन ।
सेनाले चतुरंगिणी दल गई * चौतर्फ घेरीकन ॥
एकै पल्ट गरे प्रहार सबले * पानी परे झैं शर ।
ढाके पार्थ र कृष्ण औ रथ पनी * देखिन्नथ्यो क्यै तर ॥७६
आज्ञाले हरिको गरे धनुषको * टङ्कार श्री पार्थले ।
आफ्नू शङ्ख बजाइ बक्सनुभयो * चर्को गरी कृष्णले ॥
त्यस्को शब्द भयो त्रिलोकभरिमा * तत्काल आच्छादित ।
धेरै सैन्यरू ढले समरमा * त्यस्ले भई मोहित ॥७७
त्याहाँबाट भएर मुक्त रथ त्यो * बढ्दै गयो पार्थको ।
रोके कौरव वीरले अघिसरी * वर्षा गरी बाणको ॥
हे राजन ! वृषसेन, कर्ण नृपती * भूरिश्रवा औ शल ।
द्रौणी शल्य तथा जयद्रथजिले * देखाइ आफ्नू बल ॥७८
एकै पल्ट गरी प्रहार सबले * शस्त्रास्त्रले, बाणले ।
पारी घायल पार्थ, कृष्णकन ती * गर्जे ठुलो हर्षले
देखी घायल कृष्णलाइ पहिले * क्रोधित भए अर्जुन ।
पारे घायल कर्णलाई पहिले * नौ बाण हानीकन ॥७९॥
द्रौणीको रथ, शल्यको धनु-ध्वजा* भूरिश्रवाको पनि ।
मारे अश्व र सारथी कृपजिको * हुन श्रेष्ठ योद्धा भनी ॥

आठोटा रणधीरका सँग डटी * एक्लै लड़े अर्जुन ।
हे राजन् ! म कती गरौं समरमा * संहारको वर्णन ॥८०

द्रोणाचार्य र भीमको युद्ध, शलको मृत्यु कर्ण-भीम विवाद :—

पाएनन जब सुन्न धर्म-सुतले * श्री पार्थको गर्जन ।
लागे भन्न ति भीमलाइ मनमा * सन्ताप मानीकन ।
जाऊ मद्दत गर्न ती विजयको * हे भीम ! यो व्यूहमा ।
योद्धा भीम पुगे सुनी हुकुम त्यो * आचार्यको सामुमा ॥८१
हाँस्तै भन्नुभयो तुरुन्त गुरुले * तिन्लाइ ठट्टा गरी ।
सक्तैनौ तिमी पस्न अर्जुनसरी * धोका दिई यो घरी ॥
पैह्ले पार मलाइ तुष्ट रणमा * देऊ गुरु दक्षिणा ।
यस्तो बात सुनी पचास शरले * तिन्ले दिए यातना ॥८२
तिन्को चोट खपी पचीस शरले * हान्नूभयो द्रोणले ।
लागी चोट ठुलो वृकोदर भए * कालाग्नि झैं क्रोधले ॥
बोकी द्रोणजिको ठुलो रथ छिटै * फ्याँके भकुण्डोसरि ।
हाहाकार परेर सैन्य कुरुका * सम्पूर्ण भागे डरी ॥८३
देखेथे सबले पराक्रम ठुलो * तिन्ले गरेको जब ।
लागे गर्न कुरा परस्पर त्यहाँ * श्री द्रोण मर्छन् अब !
त्यागी त्यो रथलाइ झट्ट गुरुले * रक्षा गरे प्राणको ।
आए फेरि चढेर श्रेष्ठ रथमा *इच्छा गरी लड्नको ॥८४
फ्याँके त्यो रथलाइ फेरि अघि झैं * बोकेर श्री भीमले ।
आठोटा रथलाइ फ्याँकि क्रमले * गर्जे तिनी हर्षले ॥
झुक्क्याई गुरु द्रोणजीकन पसे * श्री भीम त्यो व्यूहमा ।
धेरै सैन्य भए विनाश गुरुका * तिन्को परी सामुमा ॥८५

देखी शौर्य ठुलो वृकोदरजिको * श्री कर्ण सामू गए।
छाड़ी एक हजार बाण रिसले * तिन्लाइ छोपी दिए ॥
काटी त्यो शरजाल सूर्य-सुतको * तत्काल श्री भीमले।
मारी अश्व र सारथी, रथ-ध्वजा * भाँची दिए वेगले ॥८६॥
भाई दुर्मुख जो सुयोधनजिका * निक्कै प्रतापी थिए।
आए लड्न र भीमले सहजमा * तिन्लाइ मारी दिए ॥
पाँचोटा कुरुराजका अरु थिए * भाई प्रतापी त्यहाँ।
देखी दुर्मुखको गती अघिसरे * ती युद्धभूमिमहाँ ॥८७॥
बर्साई शर भीमलाइ सबले * छाड़ी दिएथे जब।
पापी हो ! रणमा मरी तिमीहरू * लौ स्वर्ग जाओ अब ॥
यस्तो बात भनेर पाँच शरले * तिन्को गिराए शिए।
आए कर्ण रिसाइ फेरि, रथमा * संग्रामको खातिर ॥८८
पारे घायल भीमलाइ शरले * हानेर तिन्ले जब।
तिन्का चोटहरू खपे शरिरमा * किञ्चित् नमानी सब ॥
हानी मुग्दलले छिटै रथ ध्वजा * धूलो गराई दिए।
हाम्फाली रथबाट कर्ण डहले * संग्राम त्यागी गए ॥८९
श्री दुर्योधनका थिए अरु त्यहाँ * भाईहरु तेत्तिस।
बर्साए सबले मिली शरहरू * गर्दै ठुलो शाहस ॥
तिन्का बाणहरू समस्त बिचमै * टुक्रा गराई कन।
जाओ स्वर्ग छिटै भनेर सबको * काटीदिए गर्दन ॥९०॥
आए कर्ण रिसाइ फेरि रथमा * अत्यन्त उत्साहले।
तिन्को स्वागतमा प्रहार शरको * गर्दा भए भीमले ॥
लागे भन्न सहर्ष सूर्य-सुतले * तिन्लाइ ठट्टा गरी।
जान्दैनौ रणनीति, अन्न-घरमा * खाएर भूँड़ी भरी ॥९१॥

नारीका बिचमा बसी गफ चुटी * आफ्नू बिताऊ दिन ।
व्यर्थैमा किन फाल्दछौ समरमा * यो मूर्ख झैं जीवन ॥
मार्नैछन् यिनिलाइ श्री विजयले * भन्ने विचारी कन ।
त्यस्को उत्तर क्यैं नदी शुरु गरे * शस्त्रास्त्र बर्साउन ॥९२॥
राजन् ! दुर्जनले अनादर कहीं * ठूलो गरे तापनि ।
दिन्नन उत्तर विज्ञले, बरू क्षमा * गर्छन्‌ दयालु बनी ॥
छोरा श्री सहदेवका, समरका * ज्ञाता थिए वीर जो ।
तिन्का सासु पुगेर भूप शलले * वर्षा गरे बाणको ॥९३
छोराले सहदेवका ति शलको * काटी गिराए शिर ।
भागे सैन्य त्यहाँ भए जति अरू * तत्काल चारैतिर ॥
राजा केकय, क्षेमधूर्ति नृपती * लड्दै थिए बेसरी ।
लागी केकयका तिखा शर गए * श्रीक्षेमधूर्ति मरी ॥९४॥
चेदीराज रिसाइ भूप सुधना * -लाई गिराए जब ।
हाहाकार गरेर सैनिकहरू * भागे डराई सब ॥
जस्तो अर्जुनले पराक्रम गरे * हे भूपति ! त्यो दिन ।
मैले सक्तिनँ गर्नलाई अहिले * सम्पूर्ण त्यो वर्णन ॥९५॥

भूरिश्रवाको वध :—

राजन् ! वीर मरे दुवै तरफका * सेना र सेनापति ।
थाले गर्न प्रहार क्रोधित भई * भूरिश्रवा सात्यकि ॥
जस्तो इन्द्र र वृत्रको अति ठुलो * संग्राम पैल्हे भयो ।
त्यस्तै ती दुइ वीर मत्त-गज झैं * लड्दा त्यहाँ देखियो॥ ९६
जस्तो युद्ध गरे अघी नरपते ! * राजा बली, इन्द्रले ।
त्यस्तै शस्त्र प्रहार क्रोधित भई * गर्थे दुवै वीरले ॥

लागी शस्त्र अनेक देहभरिमा * धारा बगी रक्तको ।
गेरूको गिरिराज झैं हुन गयो * शोभा दुवै वीरकी ॥९७
यौटा अद्भुत कार्य त्यै बखतमा * देखा पऱ्यो भूपति !
एकै पल्ट मरे दुवै तरफका * घोड़ा तथा सारथी ॥
ओर्ह्लें खड्ग लिएर मार्दछु भनी * योद्धा दुवै भूमिमा ।
खोज्थे छिद्र प्रहार गर्न ति दुवै * क्रोधित भई देहमा ॥९८॥
आँटे सात्यकिलाइ मार्न जब ती * भूरिश्रवा भूपले ।
तिन्को खड्गसमेत हात शरले * काटी दिए पार्थले ॥
देखी अर्जुनको अधर्म, रणको * त्यो नीति उल्लंघन ।
त्यागी शस्त्र म मर्दछु अब भनी * बाँधेर पद्मासन ॥९९॥
प्राणायाम गरी बसे पृथिविमा * भूरिश्रवाजी जब ।
काटेथे शिर भूपको गइ छिटै * श्री सात्यकीले तब ॥
अर्काका सँग युद्धमा रत तिनी * निर्दोष भूपालको ।
काट्नू हात, चलाइ बाण त्यसरी * हो धूर्तता पार्थको ॥४००॥
आफू विज्ञ भएर नीति यसरी * त्यागेपछी युद्धको ।
आफ्नू धर्म र नीति पालन अरू * संग्राममा गर्छ को ?
निन्दा बेसरि पार्थको जब गरे * जम्मा भई कौरव ।
बोले अर्जुन–धर्म सम्झ पहिले * आफ्नू गरेको सब ॥१॥
आफ्ना बन्धु कुनै हितू जब कहीं * आपत्तिमा पर्दछन् ।
मैले झैं अरूले पनी सहजमा * संकष्ट त्यो टार्दछन् ॥
गर्दैछौ बकवाद मूर्ख जन झैं * पापीहरू हो ! किन ?
मैले जान्दछु नीतिशास्त्र श्रुतिको * गर्छु सदा पालन ॥२॥
आफ्नू रक्षण गर्न तत्पर रहू * पर्दैन शिक्षा किन ।
माऱ्यौ षड्रथिले मिलीकन हिजे * सत्पुत्र मेरो किन ?

आफ्नू सम्झ कुकर्म, धर्म तनले * पैह्ले गरेको सब ।
त्यस्को दुष्फल भोग्नको बखतमा * के अर्ति दिन्छौ अब ॥३॥
यस्तो उत्तर पार्थको सुनि त्यहाँ * बोलेन कोही पनी ।
दोषी बोल्न समर्थ हुन्छ र कहाँ * कुन् बात बोल्थे तिनी ॥
श्री कृष्णार्जुन, भीम, सात्यकि भए * तत्काल एकातिर ।
योद्धा वीरहरू डटे हजुरका * सम्पूर्ण अर्कोतिर ।४॥
लाग्यो: अद्भुत रूपले नरपते ! * संग्राम त्यो मच्चिन ।
सेना वीर प्रशस्त नै हजुरका * थाले त्यहाँ मारिन ॥
गर्थे अर्जुन सिंहनाद धनुको * टङ्कार शङ्ख-ध्वनि ।
थाले गर्जन भीम, सात्यकि तथा * श्रीकृष्ण आफैं पनि ॥५॥
त्यस्को घोर कठोर उच्च स्वरले * त्रैलोक्य नै ढाकियो ।
चिन्ता धर्म-कुमारको जति थियो * त्यो शब्द सुन्दा गयो ॥
भागे कायर भीतिले ! खुशी भए * योद्धा ठुला जो थिए ।
द्रौणी, द्रोण र कर्ण औ कृप पनी * उत्साहले गर्जिए ॥६॥
योद्धा अर्जुन, भीम, सात्यकि थिए * यी तीन मात्रै उता
लाखौं सैनिक वीर दुर्धर थिए * योद्धा प्रतापी यता ॥
राजन् ! तैपनि पार्थले समरमा * वर्षा गरी बाणको ।
हाहाकार गराइ बेसरि हरे * सातो सबै वीरको ॥७॥
ठूला वीरहरू हजूरतिरका * धेरै भए तापनी ।
गर्थे युद्ध डराउँदै विजयले * मार्छन् कि ऐह्ले भनी
लागी बाण शरीरमा रगतको * धारा बगे तापनी ।
लड्थे वीरहरू डटेर गिरि झैं * कर्तव्य हो यो भनी ॥८॥
छाड़े एक सहस्र बाण सहसा * क्रोधित भई कर्णले ।
श्री कृष्णार्जुनलाइ घायल गरी * गर्जे तिनी हर्षले ॥

लाग्यो चोट भनेर क्रोधित भई * तत्काल श्री पार्थले ।
मारे सारथि, अश्व सूर्य-सुतको * तत्काल नौ बाणले ॥९॥
अर्को एक अमोघ बाण धनुमा * ती राख्न लागे जब ।
त्यो देखी गुरुले बुझे समरमा * यी कर्ण मर्छन् अब ॥
काटे बाण गुरुजिले विजयको * छाडनै नपाईकन ।
राधाका सुत कर्णको हुन गयो * रक्षा त्यसै कारण ॥१०
चारै तर्फ डटेर वीर कुरुले * शस्त्रास्त्र वर्षा गरी ।
ढाकी अर्जुनलाई गर्जन गरे * उत्साहले बेसरी ॥
काटेथे सब शस्त्र ती विजयले * इन्द्रास्त्र हानीकन ।
लागेथ्यो दुइतर्फको समर त्यो * झन् बेसरी मच्चिन ॥११

जयद्रथ बधः--

राजन् ! त्यो दिन वीर जो विजयको* सामु डटी लड्दथे ।
पर्थ्यो मर्नु कि वा त्यजी समर त्यो* तत्काल नै भाग्दथे ॥
धेरै वीरहरू मरे हुन गयो * संहार ठूलो तर ।
रक्षा वीरहरू जयद्रथ जिको * गर्थे रही तत्पर ॥१२॥
गर्थे यत्न अगाड़ि बढ्न रणमा * श्रीपार्थ योद्धा जति ।
रोक्थे वीरहरू डटेर कुरुका * सेनापती झन् उति ॥
त्यै वेला निज मित्रलाइ हरिले * विस्तार भन्नूभयो ।
घेरामा बलियो जयद्रथ लुकी * ऐल्हे बसेको छ जो ॥१३
पैल्हे षड्रथिलाइ आज नजिती * यिन्लाइ मारी लिन्न ।
गाह्रो देख्छु, तिमी पराक्रम ठूलो * देखाउँदैनौ किन ?
व्यर्थै अल्मलमा सबै बितिसक्यो * वेला सखे ! अर्जुन !
गर्छु एक प्रयत्न उत्तम तिमी * मैले भनेको सुन ॥१४॥

छेकी दिन्छु म सूर्यलाइ सहसा * मायामयी चक्रले ।
तिम्रो नाश बुझी जयद्रथ स्वयं * नै आउला हर्षले ॥
त्यै वेला तिमिले विलम्ब नगरी * त्यस्को लिनू जीवन ।
'जो आज्ञा प्रभुको' भनीकन भए * साह्रै खुशी अर्जुन ॥१५
ढाक्नूभो रविलाइ शेष दिनको * केही छँदै कृष्णले ।
छाड्यो देखिन, अन्धकार सहसा * बढ्दै गयो वेगले ॥
ढल्दै पश्चिममा दिवाकर गए * बिस्तार अस्ताउँदै ।
लागे गर्जन धीर वीर कुरुका * अत्यन्त हर्षित् हुँदै ॥१६।
राखे शस्त्रहरू समस्त रथमा * दुःखी भई पार्थले ।
थाले गर्न विषाद पाण्डु-सुतका * सेनापती वीरले ॥



जयद्रथ वध

श्री दुर्योधन भट्ट सिन्धुपतिको * केही नगीचै गए ।
हाँस्तै धैर्य दिएर उच्च स्वरले * गर्जेर भन्दा भए ॥१७॥

आऊ सिन्धुपती ! अघिल्तिर तिमी * पर्दैन मान्नू भय ।
मर्छन् अर्जुन युद्धमा विजयश्री * मिल्ने भयो निश्चय ॥
पूरा पाण्डवले गरे अघि कुरा * कुन्चाहिं आफ्नो प्रण ।
सक्थे यो प्रण पूर्ण गर्न कसरी * हे मित्र ! यी अर्जुन॥१८
श्री दुर्योधन बोल्दथे अघि सरी * हाँसेर ठट्टा गरी ।
हेर्थें सूर्यतिरै जयद्रथ उता * शंका हुनाले डरी ॥
भन्नूभो हरिले त्यसै बखतमा * गर्जेर हे अर्जुन !
मार्दैनौ किन शत्रुलाइ अल्लिले * बाँकी छ केही दिन ॥१९
जाँदैछन् रविलाइ हेर सबले * बिस्तार अस्ताचल ।
पूरा त्यो प्रण पार्न वीर ! विधिले * मौका दिए उज्ज्वल ॥
त्यो आज्ञा हरिको सुनीकन भए * चैतन्य श्री अर्जुन ।
पैहले षड् रथिलाइ व्याकुल गरे * शस्त्रास्त्र छाडीकन ॥२०॥
त्यो बेला पुरुषार्थ जुन् किसिमको * श्री पार्थको देखियो ।
त्यस्तो अद्भुत दृश्य हुन्छ न त वा* पैह्ले भएकै थियो ॥
हाने श्री कृपलाइ बीस शरले * चाँडै हटुन् यी भनी ।
श्री दुर्योधनलाइ बाह्र शरले * हानेर गर्जे तिनी ॥२१
कुन् बेला शर झिक्तथे र धनुमा * कुन्न चालले राख्दथे ।
छाड्थे ती कहिले कुनै पनि त्यहाँ * प्रत्यक्ष देख्दैनथे ॥
देख्थे केवल शत्रुका शिरहरू * गिर्दै गएको त्यहाँ ।
देखिन्थ्यो शव मात्र सैन्य दलको * संग्राम भूमिमहाँ ॥२२
भागे वीर कती त्यजी समर त्यो * आफ्नू लिई जीवन ।
बाटो पाइ खुला जयद्रथतिरै * बढ्दै गए अर्जुन ॥
पाएको शिवबाट शस्त्र धनुमा * मन्त्रेर राखे जब ।
त्यसको तेज असह्य हेर्न नसकी * न्यूहे सबै कौरव ॥२३॥

आज्ञाले हरिको छिटै विजयले * छाड़ी दिए त्यो शर ।
त्यस्ले काटिदियो जयद्रथजिको * त्यो शोभिएको शिर ॥
पाँचोटा शरले बनाइ फुलको * थुंगा सरी पार्थले ।
भेजेथे शिरलाइ वायुगतिले * आकाशको मार्गले ॥२४
वृद्धक्षत्र समन्तपञ्च तटमा * तिनूका पिताजी थिए ।
काखामा शिर त्यो लगेर शरले * तिन्को खसालीदिए ॥
यो आयो कसरी यहाँ किन भनी * उठ्ता तिनी झस्किई ।
वृद्धक्षत्र मरे फुटी शिर त्यहीं * हज्जार टुक्रा भई ॥२५
पैह्लेको वरदानले नृपतिले * होशै नपाईकन ।
भूमीमा सुतको गिराइ शिर त्यो * त्याग्दा भए जीवन ॥
छोरा, बाबू दुवै मरे नरपते ! * यो युक्तिद्वारा जब ।
आफ्नू देखि स्वयं ठुलो विफलता * दुःखी भए कौरव ॥२६॥
योद्धा अर्जुनले गरे धनुषको * टङ्कार शङ्ख-ध्वनि ।
फुक्नूभो निज शङ्ख उच्च स्वरले* श्री कृष्णजीले पनी ॥
खुशी धर्म-कुमारजी हुन गए * त्यो शब्दलाई सुनी ।
सारा वीर खुशी भए, विजय यो *हाम्रो भयो लौ भनी॥२७
मार्छन् शत्रुहरू अनेक रणमा * जुन् चालले इन्द्रले ।
मारेथे बलवान शत्रु सहजै * त्यै चालले पार्थले ॥
जस्तै भाग्दछ अन्धकार रविको * ज्योती ठुलो फैलिंदा ।
त्यस्तै कौरव भाग्दथे विजयले * शस्त्रास्त्र बर्साउँदा ॥२८॥

अर्जुन-युधिष्ठिर वार्तालाप :—

साारालाइ जितीसको समरको * मैदान खाली गरी ।
लागे अर्जुन भन्न नम्र स्वरमा * हर्षित हुँदै हे हरि !

छैनन् कोहि छली ठुलो हजुर भैं * बाठो तिनै लोकमा ।
मारें त्यो बलवान शत्रु प्रभुको * मद्दत् तिमी युद्धमा ॥२९
मेरो जुन् प्रण त्यो असम्भव थियो * हे नाथ ! पूरा हुन ।
त्यस्लाई प्रभुको दया हुन गई * छाडें पुऱ्याई कन ॥
मैले युद्ध शुरू गरें हजुरकै * पाएर ठूलो भर ।
सोही कारणले म मान्दिनँ कुनै * योद्धाहरूको डर ॥३०॥
बिन्ती अर्जुनको सुनी खुशि हुँदै * श्रीकृष्ण हाँस्नूभयो ।
हाँस्ता भीम र सात्यकी विजयको * आनन्द बढ्दै गयो ॥
त्याहाँबाट हिंड़े प्रसन्न मनले * चारै जना ती जब ।
गर्दै वर्णन शूरता विजयको * बोल्नूभयो केशव ।।३१॥
स्याबासी तिमिलाइ दिन्छु बहुतै * प्यारा सखा अर्जुन !
योद्धा को छ तिमीसमान अहिले * संसारमा लौ भन !
जस्तो आज गऱ्यौ पराक्रम ठुलो * हे वीर ! संग्राममा ।
बढ्दा कीर्ति गुणानुवाद जनले * गर्छन् पछी लोकमा ॥३२
त्यो आज्ञा हरिको सुनी विजयले * बिन्ती गरे सादर !
इच्छाले प्रभुको सदा सफलता * पाइन्छ हे ईश्वर !
बिन्ती अर्जुनको सुनी मुसुमुसू * श्री कृष्ण हाँस्नूभयो ।
हे राजन् ! रणभूमिबाट रथ त्यो * विस्तार बढ्दै गयो ॥३३
जो जी वीरहरू मरे समरमा * सेना र सेनापति ।
तिनको वर्णन गर्नुभो प्रभुजिले * सम्पूर्ण हे भूपति !
वस्त्राभूषणले विभूषित ठुलो * योद्धाहरूको शिर ।
बाहू, पाउ भई अनेक टुकुरा * लागेर तिम्रा शर ॥३४
लोटेका रणभूमिमा मृतक यी * लौ हेर हे अर्जुन !
मूर्च्छित् छन् कति वीर घायल भई * बाँकी छँदै जीवन

सेना छन् गजका सवार हयका * योद्धा रथी, पैदल ।
ठोक्रा, बाण, धनू, ध्वजा र रथले * सम्पूर्ण युद्धस्थल ॥३५॥
ढाकेको छ शरीरले मृतकको * जुन् चालले अर्जुन !
देखिन्छन् नभमा सुशोभित हुने * मानो यि तारागण ॥
यस्तै बात गरी युधिष्ठिरकहाँ * पुग्दा भए ती जब ।
आए सुन्न भनी ठूलो विजयको * संवाद चाँडो सब ३६॥
तिन्को भाव बुझी युधिष्ठिर तरफ् * हेरेर श्री कृष्णले ।
आज्ञा गर्नुभयो विनम्र स्वरले * हाँसेर आनन्दले ॥
हाम्रो जीत भयो ठूलो हजुरको * हे भूप ! आशीषले ।
मारी भूपति सिन्धुको प्रण ठूलो * पूरा गरे पार्थले ॥३७॥
जस्तै पार्थ मलाइ सुम्पनुभयो * मानेर ठूलो भर ।
तिन्लाई प्रण पूर्ण पारि अहिले * मैले गरें हाजिर ॥
आज्ञा श्री हरिको सुनी हृदयमा * खोलो बगी हर्षको ।
बिन्ती गर्नुभयो युधिष्ठरजिले * पाऊ परी कृष्णको ॥३८॥
जस्तै तर्न सकिन्न घोर जलधी * जाने पनी पौड़न ।
त्यस्तै यो सुख-सिन्धु गर्न गहिरो * आँटे पनी सक्तिनँ ॥
जस्का रक्षक छन् तिनै भुवनका * मालीक योगेश्वर ।
त्यसले जित्नु र पूर्ण गर्नु प्रण, कुन् * हो कार्य यो दुष्कर ॥३९
पाई आश्रय नाथकै समरमा * हामी भयौं तत्पर ।
मान्छौं जीत हुने अवश्य मनमा * विश्वास हे ईश्वर !
द्यौताको हित गर्दछन् दृढ़ भई * जुन् चालले इन्द्रले ।
त्यस्तै मङ्गल गर्नुहुन्छ खुशिले * हाम्रो सदा नाथले ॥४०
पूरा कार्यहरू भए अघि जती * होलान् पछाड़ी जति ।
ऐले पूर्ण हुँदैछ जो, सकलमा * हो नाथकै सम्मति ॥

गर्थे धर्म-कुमार हर्षित हुँदै * श्री कृष्णजीको स्तुति।
ढोगे सात्यकि, भीम वीर दुइले * आनन्द मानी अति ॥४१
देखी ती दुइ वीरलाइ नगिचै * श्री धर्मका पुत्रले।
भन्नूभो पहिले सुआदर गरी * अत्यन्त आनन्दले॥
जित्ने कौरव वीरलाई रणमा * विख्यात हे वीर हो!
तिम्रो शौर्य सुनी मलाइ अहिले * साह्रै ठुलो हर्षभो ॥४२॥

दुर्योधन र आचार्यको, द्रौणी र कर्णको विवाद :—

राजन्! सिन्धुपती जयद्रथ मरे * त्यो युक्तिद्वारा जब।
जो जो वीर थिए हजूरतिरका * दुःखी भए ती सब॥
गर्दै चिन्तन युद्धको विषयमा * भूपाल दुर्योधन।
बोले द्रोणजिको गएर नजिकै * साह्रै दुखाई मन ॥४३
गर्जन्छन् रणमा पराक्रम गरी * जाबो शिखण्डी पनि।
मारे सैनिक वीर श्री विजयले * जो सात अक्षौहिणी॥
आजै जुन् छलले जयद्रथ मरे * देख्दा स्थिती यो सब।
हाम्रो जीत हुने रहेन मनमा * आशा मलाई अब ॥४४॥
गर्छन् पाण्डवले पराक्रम जती * संग्राममा अद्‌भुत।
हुन्छन पूर्ण हजुरले मनमनै * तिन्को चिताई हित॥
मेरो निम्ति दिए जती नृपतिले * यो युद्धमा जीवन।
तिन्को त्यो ऋण तिर्न आज म गुरो! * आँटे पनी सक्तिनँ ॥४५॥
पापी, दुष्ट, कृतघ्न, दुर्मति म झैं * होवैन कोही पनि।
मैले बाँच्नु वृथा छ बान्धव तथा * यी मित्रद्रोही बनी॥
श्री दुर्योधनको सुने हृदयमा * बिझ्ने कुरा त्यो जब।
लागे भन्न गुरु, वृथा किन तिमी * यो छेड़ गर्छौ अब ॥४६॥

खोसी, धार्मिक पाण्डु-पुत्रहरूको * सर्वस्व अन्यायले ।
गर्छौं आश लड़ाइँ जित्दछु भनी * हे वीर ! कुन् नीतिले ॥
जूवा खेल्न भनेर उद्यत भयौ * मानेर छस्को भर ।
आउन् लड्न डटेर पार्थसँग ती * आफ्नू कसी कम्मर ॥४७
मानेनौ तिमिले मिलापतिरको * प्रस्ताव दुर्योधन !
त्यस्को दुष्परिणाय रूप रण यो * देखेर रुन्छौ किन ?
जस्का साथ लड़ेर भीष्मसरिका * योद्धा सुते बाणमा ।
त्यस्ता अर्जुनको अघिल्तिर परी * बाँच्नेछ को युद्धमा ? ४८
योद्धा कर्ण, तिमी र शल्य, शकुनी- * द्वारा भई रक्षित ।
मारे अर्जुनले जयद्रथ मरे * त्यस्तो नराम्रोसित ।
योद्धा भीष्म सुते पराजित भई * संग्राममा जुन् दिन ।
हाम्रो जीत हुने, थियो जति सबै * आशा गयो त्यै दिन ॥४९
आए सृञ्जय वीर पाण्डुसुतका * सेनाहरू उर्लिई ।
गर्छन् गर्जन हेर, उच्च स्वरले * पाञ्चाल जम्मा भई ॥
मार्छु अर्जुनलाइ निश्चय भनी * भन्थे अघी कर्ण जो ।
जाँदैनन् किन लड्न पार्थसंग ती * मौका बुझी श्रेष्ठ यो ॥५०
तिनलाइ जबसम्म आज रणमा * मैले डटी मार्दिनँ ।
त्यो वेलातक देहको कवच यो * खोल्दीनँ दुर्योधन ?
रक्षा गर्नु यता डटेर तिमिले * आफ्ना सबै सैन्यको ।
बाँचेसम्म उता म गर्दछु गई * संहार पाञ्चालको ॥५१॥
यस्तो बात भनी हिंड़े गुरु छिटै * संग्रामको खातिर ।
श्री दुर्योधनलाइ अङ्गपतिले * भन्दा भए सादर ॥
चिन्ता गर्नु वृथा छ मित्र ! तिमिले * यो कर्ण बाँचेतक ।
हाम्रो जीत अवश्य हुन्छ रणमा * हे शत्रुसंहारक ! ॥५२॥

आई शम्भु, सुरेन्द्रले, वरुणले * रक्षा गरे तापनी ।
राख्नू निश्चय चित्तमा समरमा * ती पार्थ मर्छन् भनी ॥
जो शक्ती सुरराजले दिनुभयो * पैल्हे खुशी भैकन ।
हे दुर्योधन ! मर्दछन् समरमा * त्यो शक्तिले अर्जुन ॥५३
राजा केकयका र वृष्णिकुलका * पाञ्चालका छन् जति ।
सक्छु ती सबलाइ मार्न रणमा * एक्लै म हे भूपति ! ॥
सुम्पन्छु तिमिलाइ राज्य सब यो * पृथ्वीभरीको जति ।
चिन्ता त्याग, विषाद् यो विषयमा * शंका नमानी रती ॥५४॥
तिन्को धाक रवाफको सुनि कुरा * हाँस्तै कृपाचार्यले ।
भन्नूभो जति भन्दछन् त्यति कुरा * गर्छन् कहाँ कर्णले ॥
राधाका सुत ! अङ्गदेशभरिका * मालीक छौ, वीर छौ ।
जस्ले राज्य दियो त्यसैसँग तिमी * झूटो कुरा बोल्दछौ ॥५५॥
व्यर्थैको गफले जितिन्न कहिले * हे कर्ण ! संग्राममा ।
देखाऊ रणमा पराक्रम लड़ी * श्री पार्थका साथमा ॥
बोल्दैनन् तिमि झैं असत्य कहिले * नीतिज्ञ औ वीरले ।
आफ्नू शक्ति ठुलो गई समरमा * देखाउँछन् धैर्यले ॥५६॥
श्री दुर्योधन वीर चित्ररथको * फेला परेका घरी !
भागेथ्यौ रणबाट जीवन लिई * पैल्हे तिमी नै डरी ॥
गर्दा युद्ध विराटको नगरमा * एक्लै थिए अर्जुन ।
भाग्यौ तैपनि टिक्नलाइ नसकी * संग्राम त्यागी किन ?॥५७
एक्लो अर्जुनलाइ जित्न नसकी * भाग्थौ डराई जब ।
सक्छौ जित्न कसोरि, मद्दत दिने * छन् साथमा केशव ॥
जाऊ लड्न भएर मौन रणमा * देखाउनू वीरता ।
हो दुर्योधनलाइ ढाँट्नु तिमिले * साह्रै ठुलो धूर्तता ॥५८॥

बोले कर्ण रिसाइ श्री कृपजिले * निन्दा गरेको सुनी ।
बोल्दैछौ यसरी बढी किन तिमी * हे विप्र ! बाठो बनी ॥
हो यो वीर भनेर विज्ञ जनले * देखेर नै जान्दछन् ।
के जानुन् द्विज त्यो कुरा, उदर जो * मागेर नै भर्दछन् ॥५९॥
पैह्लेपल्ट भनी क्षमा गरिदिएँ * दुर्वाच्य बोले पनि ।
गर्नेछैनँ क्षमा कदापि सुगुणी * ह्वौ मान्य मेरा भनी ॥
बोल्छौ पक्ष लिएर पाण्डु-सुतको * हे विप्र ! बर्ता किन ?
देखौला तिमिले लिनेछु रणमा * ती शत्रुका जीवन ॥६०॥
ब्रह्मन् ! अर्जुन वीर हुन् भनि ठुला * मैले पनी मान्दछु ।
गर्ने हुन् छल मात्र, वीर नभई * ती कृष्णजी जान्दछु ॥
दैवाधीन रहन्छ विप्र रणमा * हार्ने र जित्ने पनि ।
कस्ले सक्तछ भन्न हुन्छ विजयी * यो पक्ष हार्ला भनी ॥६१॥
बर्ता आफ्नु गरी बढाइँ कृपको * निन्दा गरेको सुनी ।
बोले खड्ग झिकेर द्रोण-सुतजी * कालाग्नि जस्तै बनी ॥
गर्छौ बात बढेर कर्ण ! किन यो * आचार्यका साथमा ।
मामा झैं अरू सूत-पुत्र ! भन को * छन् वीर संग्राममा ॥६२॥
योद्धा हूँ म भनी घमण्ड मनमा * राख्छौ तिमी क्यै भने ।
आऊ युद्ध गरौं घमण्ड म छिटै * छू आज तोड़ी दिने ॥
मामाले जति भन्नुभो हित कुरा * हुन् सत्य सारा तर ।
मान्दैनौ तिमिले, म काट्छु अहिले * हे कर्ण ! तिम्रो शिर ॥६३
श्री कृष्णार्जुनलाइ जित्न रणमा * कुन् वीरले सक्छ र !
तिन्का साथ लड़ाइँ गर्दछु भनी * हुन्छौ तिमी तत्पर ॥
द्रोणीकी सुनि बात खड्ग करमा * आफ्नू लिए कर्णले ।
आँटे मार्न दुवै परस्पर लड़ी * हानेर त्यै खड्गले ॥६४॥

श्री आचार्य तथा सुयोधन उठी * सम्झाउँ दै प्रेमले ।
रोके ती दुइ वीरलाइ दुइले * पक्रेर सम्मानले ॥
हुन्नन् रुष्ट सुपात्र ब्राह्मणहरू * कैह्लैँ विना कारण ।
भन्दै तुष्ट हुनूभयो कृप अनी * बोले ति दुर्योधन ॥६५॥
द्रौणी वीर ! सुविज्ञ ब्राह्मण गुणी * हुन्छन् दयालू सब ।
राधाका सुत कर्णलाइ दिनुहोस् * माफी तपाइँ अब ॥
छौ मेरा प्रिय मित्र, बन्धु र हितू * हे कर्ण ! त्यै कारण ।
शान्तीपूर्वक भन्दछु जति कुरा * माफी गरी त्यो सुन ॥६६
द्रौणी, द्रोण तिमी र शल्य, शकुनी * मानी सबैको भर ।
छन् वैरी बलिया तथापि म भएँ * संग्राममा तत्पर ॥
हामी आपुसमै लड़ीकन मरे * यो घोर क्रोधाग्निमा ।
हाँस्नेछन् सब शत्रु वीर खुशिले * उत्साहका साथमा ॥६७॥

हे मित्र हो ! गर परस्पर माफ आज ।
हाँस्तैछ यो स्थिति बुझेर सबै समाज ॥
बिन्ती सुयोधनजिको दुइले सुनेर ।
बस्ता सबै जब भए अघि झैं मिलेर ॥६८॥

दुवै पक्षको रात्रि-युद्ध :—

लड्थे द्रोण डटेर क्रोधित भई * त्यो व्यूहको द्वारमा ।
लागे मर्न अनेक भूपतिहरू * तिनको परी सामुमा ॥
आए कर्ण पनी त्यसै बखतमा * गर्दै ठूलो गर्जन ॥
वर्साए हतियार पाण्डु-सुतका * सेनाहरू गैकन ॥६९॥
तिन्का शस्त्र सबै निवारण गरी * तत्काल श्री कर्णले ।
मारे वीरहरू अनेक रणमा * आफ्ना तिखा बाणले ॥

सन्ध्याकाल भयो तथापि रण त्यो * चल्दै रह्यो रातमा ।
गर्थे खड्ग प्रहार सैनिकहरू * राँको लिई हातमा ॥७०
श्री दुर्योधनले युधिष्ठिरजिको * ताकेर वक्षस्थल ।
योटा बाण गरी प्रहार सहसा * पारीदिए विह्वल ॥
तिन्को चोट खपेर धर्म-सुतले * हाने ठुलो शक्तिले ।
भागे प्राण लिई सुयोधन छिटै * त्यो शक्तिको चोटले॥७१
योद्धा भीम र सात्यकी पनि पुगे * गर्जेर संग्राममा ।
छोरा आइ कलिंगको नृपतिका * तिन्को डटे सामुमा ॥
मुड्की एक छिटै वृकोदरजिले * हान्दा भए माथमा ।
त्यागी जीवन भूपका सुत गए * त्यो चोटले स्वर्गमा ॥७२
साक्षात् रुद्रसमान भीम रणमा * संहार गर्दै थिए ।
सेना टिक्न कठिन् भएर कुरुका * चौतर्फ भाग्दा भए ॥
शक्ती एक गरे प्रहार सहसा * आएर श्री कर्णले ।
पर्की लाग्न नपाइ झट्ट बिचमै * त्यो शक्ति श्रीभीमले॥७३
मार्छु कर्ण तँलाइ पर्खि भनि त्यो * छाड़ी दिए वेगले ।
आफैंले निज शक्तिलाइ रणमा * काट्नूपर्‍यो कर्णले ॥
भागे सात्यकि वीरका सँग लड़ी * भूरिश्रवाका पिता ।
रोकेथे तिनलाइ वायुगतिले * आएर द्रौणी उता ॥७४
सेना सोमकका असंख्य नृपते ! * पाञ्चालका जो थिए ।
द्रौणीले सबको कठोर शरले * संहार गर्दै गए ॥
तिन्को मद्दत सोमदत्त नृपले * गर्दै थिए तापनी ।
मारे सात्यकिले, गए समरमा * त्यो देह त्यागी तिनी॥७५
गर्दैन गर्जन बेसरी लिइ ठुलो * सेनाहरू राक्षसी ।
आएथ्यो रथमा घटोत्कच लिई * शस्त्रास्त्र घूँड़ा घसी ॥

त्यस्का सामु डटेर द्रोणसुतले * शस्त्रास्त्र वर्षा गरे ।
छोरो राक्षसको र सैनिकहरू * तत्काल धेरै मरे ॥७६॥
द्रौणीको गइ श्री श्रुताह्वयजिले * त्यो वेग रोकी लिए ।
हाने शक्ति लिएर द्रोण-सुतले * ती भूपती मारिए ॥
पाँचोटा सुकुमार द्रौपदिजिका * आए अगाड़ी सरी ।
बर्साए हतियार क्रोधित भई * ती पाँचले बेसरी ॥७७॥
काटे द्रोणकुमारले शर सबै * लाग्नै नपाईकन ।
ती पाँचै जनलाइ मूर्छित गरी * थाले तिनी गर्जन ॥
द्रोणाचार्य तथा युधिष्ठिर दुवै * लड्थे रिसाई उता ।
आए लड्न भनेर फेरि रणमा * भूरिश्रवाका पिता ॥७८॥
हाने एक गदा वृकोदरजिले * तिन्‌लाई ताकीकन ।
ठूलो चोट परेर स्वप्न नसकी * तिन्‌ले त्यजे जीवन ॥
देखी यो स्थिति युद्धको अघिसरी * वाल्हीक राजा गए ।
बर्साई शर भीमका शरिरमा * घाऊ गराई दिए ॥७९॥
तिन्‌को चोट खपी वृकोदरजिले * हाने गदा माथमा ।
लागी श्रेष्ठ गदा मरीकन गए * वाल्हीकजी स्वर्गमा ॥
तिन्‌का पुत्रहरू थिए दस जना * योद्धा प्रतापी सब ।
आए क्रोध गरी पिताकन त्यहाँ * देखे मरेका जब ॥८०॥
मारे ती दशलाइ बाण दशले * तत्काल श्री भीष्मले !
थाले मार्न रिसाई पाण्डु-सुतका * सेनाहरू कर्णले ॥
लागे गर्न प्रहार उज्ज्वल ठुलो * राँको लिई हातमा ।
राजन् ! सैन्यहरू दुवै तरफका * त्यो रातको बीचमा ॥८१
काटा-काट गरी दुवै तरफका * सेना र सेनापति ।
लागे मर्न अनेक रात्रि रणमा * योद्धा तथा भूपति ॥

भूरि भूपतिलाइ सात्यकिजिले * मारे रिसाई यता ।
खाई चोट ठुलो युधिष्ठिरजिको * भागे सुयोधन् उता ८२
द्रौणी वीर तथा घटोत्कच दुवै * अत्यन्त उत्साहले ।
लागे माछ्छु भनेर लड्न शरको * वर्षा गरी वेगले ॥
लागी घाउ शरीरमा रगतको * धारा बगे तापनी ।
गर्जन्थे दुइ वीर उच्च स्वरले * माछ्छु तँलाई भनी ॥८३

अलंबुष, अलायुध र घटोत्कच वध— :

लागे सञ्जय गर्न फेरि रणको * विस्तार हे भूपति !
मार्थे द्रोण र कर्ण पाण्डु-सुतका * सेना रिसाई अति ॥
सेना सृञ्जयका र वीर बलिया * पाञ्चालका जो थिए ।
द्रोणाचार्य र कर्णका शर तिखा * लागेर गिर्दै गए ॥ ८४॥
हाहाकार गरेर सैनिकहरू * भागे डराई जब ।
देखी त्यो रणको परिस्थिति सबै * बोल्नूभयो केशव ॥
योद्धा अर्जुन ! हेर कर्ण कसरी * उत्साहले धैर्यले ।
गर्दैछन् वध वीर सृञ्जय तथा * पाञ्चालको वेगले ८५
शक्ती एक अमोघ स्वर्गपतिको * तिनको छ जो साथमा ।
तिन्का साथ हुँदैन लड्न तिमिले * ऐह्ले डटी सामुमा ॥
आज्ञाले हरिको छिटै विजयले * योटा पठाए चर ।
मायावी बलियो घटोत्कच भयो * तत्काल नै हाजिर ॥८६
जोरी हात भन्यो मलाइ अहिले * डाक्नू भएको किन ?
गर्छु पूर्ण छिटै हुकुम् दिनुहवस् * हे वीर कृष्णार्जुन !
भन्नूभो हरिले प्रधान तिमि छौ * योद्धा हिडिम्बा-सुत !
दुःखी छन् अहिले यि पाण्डवहरू * देऊ तिमी मद्दत ॥८७

गोठालाहरू जन्तुलाइ वनमा * ज्युन् चालले खेद्दछन् ।
खेदेका सब सैन्य अङ्गपतिले * त्यस्तै डरी भाग्दछन् ॥
माया-युद्ध र रात्रिको समरका * ज्ञाता हुनाले गरी ।
जाऊ, वेग लिएर रोक सहजै * ती कर्णको यो घरी ॥८८
गर्दैछन् कसरी विनाश रणमा * लौ हेर तिनले उता ।
हाम्रा सैनिक युद्धबाट कसरी * भागी रहेछन् यता ॥
माया चल्दछ राक्षसी निशिमहाँ * बर्ता त्यसै कारण ।
लेऊ युद्ध गरेर द्वै-रथ छिटै * ती कर्णको जीवन ॥८९॥
त्यो आज्ञा हरिको सुनी बिजयले * आफ्नू दिए सम्मति ।
मागी झट्ट बिदा घटोत्कच गयो * गर्जेर हे भूपति !
पौंचेथ्यो जब त्यो चढेर रथमा * उत्साहले युद्धमा ।
आयो रोक्न भनी अलम्बुष थियो * जो कौरवी सैन्यमा ॥९०
देखी राक्षस त्यो घटोत्कच गई * टुप्पी समाईकन ।
काटी गर्दन खड्गले समरमा * त्यस्को लियो जीवन ॥
काटेको शिर त्यो सुयोधनतरफ् * हेरेर हाँसीकन ।
फ्याँक्यो लेउ भनेर झट्ट रथमा * सौगात दुर्योधन ! ॥९१
देख्यौ की तिमिले पराक्रम ठुलो * मैले गरेको अब ।
तिम्रा सैनिक ध्वस्त पार्दछु छिटै * निःशेष पारी सब ॥
बर्ता गर्व गरेर कर्णसित त्यो * लड्थ्यो डिडिम्बा-सुत ।
अर्का राक्षस जो अलायुध थियो * आयो, हुँदै क्रोधित ॥९२
त्यो दुर्योधनको गई नगिचमा * बोल्दो भयो गर्वले ।
मेरो बन्धु हिडम्बलाइ वनमा * मारे यिनै भीमले ॥
साटो फेर्न तयार छु म अहिले * मौका छ आज्ञा दिनोस् ।
जस्तो गर्छु यहाँ पराक्रम ठुलो * त्यो आज हेर्नूहवस् ॥९३

श्री दुर्योधनले भने सुनि कुरा * जाऊ तिमी युद्धमा ।
गर्नन् मद्दत सैन्य, वीर सबले * तिम्रो रही साथमा ॥
लड्थे कर्ण तथा घठोत्कच्च जहाँ * योद्धा दुवै रोषले ।
आयो लड्न भनी 'अलायुध' त्यहीं * हावासरी वेगले ॥९४॥
आयो राक्षस यो अलायुध भनी * देखे जसै भीमले ।
मारे राक्षस-सैन्यलाइ पहिले * हानी गदा वेगले ॥
अन्तर्धान भयो अलायुध छिटै * देखेर त्यस्तो स्थिति ।
पार्‍यो व्याकुल भीमलाइ शरको * वर्षा गरी भूपति ! ॥९५॥
देखी दुर्गति भीमको रथ त्यजी * तर्वार खैंचीकन ।
हान्यो गर्दनमा घटोत्कच पुगी * त्यस्को लियो जीवन ॥
पैह्ले फैं शिर त्यो सुयोधनतरफ् * फ्याँकेर भन्दो भयो ।
हे योद्धा ! उपहार लेउ रणको * सौगात राम्रो छ यो ॥९६॥
मारी ती दुइ वीरलाइ त्यसरी * गर्दै ठुलो गर्जन ।
गर्थ्यो गुप्त भई घटोत्कच त्यहाँ * शस्त्रास्त्रको वर्षण ॥
लागे ढल्न मरी विपक्षतिरका * सेना अनेकौं जब ।
थाले भाग्न डराइ सैन्य निशिमा * बाँकी बचेका सब ॥९७॥
राधाका-सुत कर्णले समरको * देखी नराम्रो स्थिति ।
फर्काए सबलाइ साहस दिई * सम्झाइ हे भूपति !
बर्साए हतियार अंगपतिले * गर्जेर धेरै थरी ।
फ्याँक्यो राक्षसले समाइ सहजै * टुक्रा हजारौं गरी ॥९८॥
छाड़ी तोमर, पाश उत्तम गदा * तीखो शतघ्नी जब ।
मार्‍यो सारथि अश्व औ रथ-ध्वजा * धूलो गरायो सब ॥
देखेथे जब कर्णलाइ विरथी * सेना सबै आत्तिई ।
लागे भन्न डरी विनम्र स्वरमा * तिन्का नगीचै गई ॥९९॥

लड्दै राक्षस यो रह्यो यदि भने * क्यै बेर यैं चाल्ले ।
बाँच्तैनौं सबलाइ मार्दछ छिटै * हे कर्ण ! यो दुष्टले ॥
पाएको अघि इन्द्रबाट तिमिले * शक्ती छ जो पासमा ॥
गर्दैनौ किन त्यो प्रयोग अहिले * यो दुष्टको देहमा ॥५७०॥
यस्ले नाश गरी सकेपछि सबै * सेनाहरू युद्धमा ।
के लाग्ला पछि काम त्यो भन छिटै * तिम्रो रही साथमा ॥
केही बेर गरी विचार मनमा * सारा कुरा कर्णले ।
छाड़े दिव्य अमोघ शक्ति सबको * इच्छा बुझी वेगले ॥१॥



घटोत्कच वध

लाखौं सैन्य थिची घटोत्कच ढल्यो * त्यो शक्तिको चोटले ।
लागे गर्जन वीर कौरवहरू * संग्राममा हर्षले ॥
सम्झी राक्षसका युधिष्ठिरजिले * पैल्है गरेको गुन ।
वाणी रुद्ध भएर बोल्न नसकी * साह्रै दुखाए मन ॥२॥

कौरवहरूको रात्रिमा सुतेका शत्रुमाथि धावा; द्रुपद र विराटको मृत्यु :—

राजन् ! राक्षस त्यो मरेपछि पनी * संग्राम चल्दै थियो ।
मर्थे वीर जती जती, उति-उती * झन् बेसरी मच्चियो ॥
शक्ती, पाश, गदा, खुँड़ा र खुकुरी * दिव्यास्त्र औ तोमर ।
गर्थे वीरहरू प्रहार रिसले * तर्वार तीखा शर ॥३॥
लागे गिर्न कती धमाधम मरी * शस्त्रास्त्रको चोटले ।
भागे कायर, बीर झन् अघि सरी * लड्थे ठुलो वेगले ॥
आधा रात बितेपछी विजयले * आज्ञा दिएथे जब ।
सेना सुत्न भनेर पाण्डु-सुतका * जाँदा भएथे सब ॥४॥
सेना कौरवतर्फका पनि गए * विश्रामका खातिर ।
द्रोणाचार्यकहाँ सुयोधन पुगी * बिन्ती गरे सादर ॥
निद्रा लाग्न सकेन आज निशिमा * आएँ त्यसै कारण ।
गर्नुहुन्छ क्षमा हजूर रणमा * ती शत्रुलाई किन ? ॥५
हाम्रो हार हुने प्रधान गुरुजी * अर्को छ जो कारण ।
हामी निर्बल छौं, अवध्य र बली * छन् युद्धमा अर्जुन ॥
तिनका सैन्यहरू समस्त अहिले * थाकेर छन् नींदमा ।
हामीले हमला गरौं गई गुरो ! * यो रातकै बीचमा ॥६॥
जसले छोड्दछ शत्रुलाइ रणमा * मौका मिलेका घरी ।
त्यसको जीत हुँदैन, शास्त्र मतले * त्यो जान्छ पक्का मरी ॥
ब्रह्मन् ! भाग्यविहीन आज म हुँदा * वा दैवका चक्रले ।
बाँचेकै अझ शत्रु छन् समरमा * गर्दा क्षमा नाथले ॥७॥
योद्धा श्रेष्ठ हजुर भैं न त ठुलो * अर्को छ को लोकमा ।
पाई उत्तम वीर मद्दत दिने * हार्नैं भएँ युद्धमा ॥

चिन्ताग्रस्त भई मलाई निशिमा * लागेन निद्रा जब ।
गर्नोस् यत्न कुनै छिटो अब गुरो !* बाँच्ने दुखी कौरव ॥८॥



आचार्य द्रोणको वध

तिनको बात सुनेर द्रोण गुरुले * भन्नूभयो रोषले ।
भन्छौ छेड़ गनी मलाइ यसरी * हे वीर ! कुन बुद्धिले ?
जस्ले बुद्धि दियो लड़ौं भनि अघी* ऐंह्ले कहाँ छन् तिनी ।
गर्दैनन् किन युद्ध पार्थसँग ती * तिम्रा सहायक् बनी ॥९
बारंबार मलाइ यो किसिमले * दुःखी नपार्नें गर ।
जे भन्छौ तिमि त्यो प्रसन्न मनले* छु गर्नमा तत्पर ॥
सक्छौ लड्न तिमी पनी समरका * ज्ञाता ठुला वीर छौ ।
लड्दैनौ किन पार्थका सँग डटी * व्यर्थैं डरी भाग्दछौ॥१०॥

वार्ता सुनेर गुरुको, मनमा रिसाई
बोले सुयोधन तयार छु लड्नलाई ॥

जुन् शत्रुको हजुरले अहिले मलाई ।
भन्नूभयो गुण र शौर्य सबै बुझाई ॥११॥
तिन्को लिनेछु गइ आज अवश्य प्राण ।
की मर्दछु समरमा दिइ आफ्नू ज्यान ॥
पाल्नोस् हजुर लिई कौरव सैन्य आधा ।
धावा म गर्छु सब तोड़िदिएर बाधा ॥१२॥

सेनालाइ उठाइ भाग दुइमा * तत्काल बाँड़ी लिए ।
आधा भाग लिएर गर्न हमला * प्रस्थान गर्दा भए ॥
सेना पाण्डवर्फका समरमा * थाकी सुतेका थिए ।
त्यै वेला हमला गरेर कुरुले * हाहा गराई दिए ॥१३॥
सारा सैन्य उठेर पाण्डु-सुतका * गर्दै ठुलो खल्बल ।
लागे लड्न त्यहाँ भयो नरपते ! * अत्यन्त कोलाहल ॥
आए लड्न विराट औ द्रुपदजी * श्री द्रोणका सामुमा ।
मारे ती दुइलाइ बाण दुइले * आचार्यले युद्धमा ॥२४॥
मेरो मारिदिदिए पिताकन भनी * सेना लिई साथमा ।
धृष्टद्युम्न पुगे सवेग रथमा * आचार्यको सामुमा ॥
श्री दुर्योधनका सँगै शकुनिले * शस्त्रास्त्र वर्षा गरी ।
रोकेथे बिचमै अगाड़ि नबढुन् * भन्ने भई त्यो घरी ॥१५
राजन् ! वीरहरू परस्पर डटी * त्यो रात्रिमा लड्दथे ।
धेरै वीर विपक्षलाइ नचिन्ही * मार्थे तथा मर्दथे ॥
धृष्टद्युम्न र भीम कैकय तथा * पाँचालका वीरले ।
बर्साए हतियार द्रोण गुरुको * सामू डटी वेगले ॥१६
श्री दुर्योधन, कर्ण, शल्य, शकुनी * सेना र सेनापति ।
रक्षाखातिर द्रोणको वरिपरी * जम्मा थिए भूपति !

योद्धा, वीर प्रधान सैन्य गुरुको * जो जो अगाड़ी परे।
भागे भाग्न सके जती कति त्यहीं * मूर्च्छा परे वा मरे ॥१७॥
लाग्यो बग्न नदी त्यहाँ रगतको * बाहु र पाऊ, शिर।
देखिन्थे जल-जन्तु झैं रथ बगी * त्यो रक्तमा सुन्दर ॥
त्यो देखेर कती डराइ मनमा * तत्काल नै भाग्दथे।
जस्मा धैर्य थियो तिनैहरु डटी * उत्साहले लड्दथे ॥१८॥

धृष्टद्युम्नद्वारा आचार्यको वध--

योद्धा कैकय, सैन्य पाण्डु-सुतका * पांचालका जो थिए।
साराले गुरुलाइ बाणहरुले * तत्काल ढाकीदिए ॥
राखी धैर्य ठुलो सबै शरहरू * काटेर आचार्यले ॥
मारे वीर अनेक क्रोधित भई * छाड़ेर ब्रह्मास्त्रले ॥१९॥
तिन्को शौर्य तथा पराक्रम ठुलो * देखेर श्री कृष्णले।
भन्नूभो सुन पार्थ ! नाश सहजै * गर्नें भए द्रोणले ॥
यिन्को मृत्यु हुने उपाय पहिले * देखी छ जो निश्चय।
त्यस्मा गर्न सके कुनै छल छिटो * होता सबैको हित ॥२०॥
केही बेर अझै डटी समरमा * बाँची रहे यी भने।
छन् हाम्रा जति वीर सैन्य अहिले * सम्पूर्ण छन् मारिने ॥
यिन्का दीर्घ तथा बलिष्ठ करमा * छन् अस्त्र जैह्ले तक।
सक्तैनौ यिनिलाइ मार्न रणमा * हे वीर ! तैह्लेतक ॥२१॥
प्यारो पुत्र मऱ्यो भनीकन सखे ! * सुन्नन् गुरुले जब।
यिन्को मृत्यु हुनेछ निश्चय जसै * शस्त्रास्त्र याग्नन् सब ॥
चारै भाइ र पार्थले जब सुने * त्यो योजना कृष्णको।
लागे अर्जुन भन्न गर्दिनँ भयो ! * हत्या म आचार्यको ॥२२

यो आज्ञा छल छद्म औ कपटको * मान्दोनँ योगेश्वर !
आज्ञा बक्सनुहोस् मलाइ अरु क्यै * छु गर्नमा तत्पर ॥
माने भाइसमेत धर्म-सुतले * अत्यन्त गाह्रोसित ।
योद्धा भीम स्वयं भए नरपते ! * त्यो कार्यमा उद्यत ॥२३
अश्वत्थामा भनेको गज मद चुहुने जो थियो श्रेष्ठ एक ।
मारेथे भीमले त्यो गजकन रणमा बाण हानी अनेक ॥
अश्वत्थामा मरे लौ भनि खबर झुटो फैलिएको सुनेर ।
चिन्ता आचार्यलाइ अधिक हुन गयो सत्य हो की भनेर ॥२४
त्यै वेला ऋषि औ मुनीश्वर पुगी * आकाशवाणी गरी ।
हामी जे जति भन्दछौं सुन तिमी * हे द्रोणजी ! राम्ररी ॥
ऐल्हे सम्म गर्‍यौ सबै तरहका * सद्धर्मको पालन ।
गर्दैछौ अब अन्त्यको वखतमा * दुष्कर्म हत्या किन ? ॥२५
त्यागी अस्त्र सबै प्रसन्न मनले * लौ हेर हामीतिर ।
प्राणायाम गरी शरीर त्यज यो * हे द्रोण ! हो नश्वर ॥
अन्तर्धान भए मुनी, ऋषिहरू * शिक्षा दिई त्यो जब ।
लागे गर्न विचार द्रोण मनमा * के गर्नुपर्ला अब ! ॥२६॥
बोल्दैनन् कहिले कुनै विषयमा * झूटो ति कुन्ती-सुत ।
तिन्ले निर्णय गर्दछन्, भ्रम सबै * जानेछ राम्रोसित ॥
राखे निश्चय त्यो गरेर रथमा * शस्त्रास्त्र आचार्यले ।
सोधे झट्ट पुगी युधिष्ठिरकहाँ * हावासरी वेगले ॥२७॥
बोल्दैनौ कहिल्यै तिमी नरपते ! * झूटो त्यसै कारण ।
द्रौणीको तिमी जान्दछौ खबर नै * चाँड़ो मलाई भन ॥
तिन्को प्रश्न सुनी युधिष्ठिर परे * साह्रै सकस्मा तर ।
केही बेर गरे विचार अनि यो * तिन्ले दिए उत्तर ॥२८

अश्वत्थामा मरेको खबर रणभरी फैलिएको छ ऐह्ले ।
त्यो हात्ती हो कि मान्छे भ्रम छ अझ गुरो ! स्पष्ट जान्दीनँ मैले ॥
'अश्वत्थामा मरे लौ' यति खबर जसै सुन्न पाए गुरुले ।
पाएनन् सुन्न हो त्यो गज कि नर भनी शङ्ख फुक्ता सबैले २९
छोरोको सुनि मृत्युको खबर त्यो * त्यागछु भनी जीवन ।
प्राणायाय शुरू गरे हृदयले * सम्झेर नारायण ॥
धृष्टद्युम्न लिएर खड्ग करमा * दौड़े अगाड़ी जब ।
भन्थे ती सब हेर, पितृ-वधको * साटो म फेर्छु अब ३०
भन्थे अर्जुनजी नमार यसरी * आचार्यलाई तर ।
काटे त्यो नसुनेर झट्ट गुरुको * टुप्पी समाई शिर ॥
फ्याँके त्यो शिरलाइ कौरवतरफ् * गर्जेर तिन्ले जब ।
पापी मूर्ख यि हुन् भनो कुरुहरू * धिक्कार दिन्थे सब॥३१
श्री दुर्योधन, कर्ण, शल्य, शकुनी * गान्धारका भूपति ।
फर्कन्थे रणबाट हे नरपते ! * सन्ताप मानी अति ॥
लागे भाग्न डराइ सैन्य कुरुका * सम्पूर्ण योद्धा यता ।
गर्थे हर्ष बढाइँ पाण्डु-सुतका * योद्धा र सेना उता ॥३२
द्रोणी वीर लड़ाइँमा अलि परै * अल्झी रहेका थिए ।
भागेका सबलाइ देखि सहसा * के हो भनी फर्किए ॥
सोधे-हे कुरुराज ! सैन्य यसरी * भागी रहेछन् किन ?
हेरे श्री कृपतर्फ बोल्न नसकी * क्यै बात दुर्योधन ॥३३
तिन्को भाव बुझेर वीर कृपले * दुःखी भए तापनी ।
सारा बात भने बुझाइ गुरुले * संसार छाड़े भनी ॥
द्रोणीले सुनि त्यो पिता मरणको * संवाद दुःखी भए ।
केही बेर गरी विचार रिसले * रातो भई गर्जिए ॥३४

मेरो पराक्रम सबै परबाट हेर ।
माछु विपक्षतिरका सब श्रेष्ठ वीर ॥
मारे पिताकन गरी छल आज जस्तो ।
साटो म फेर्दछु अवश्य लड़ेर त्यस्को ॥३५॥

सात्यकि र धृतद्युम्नको कठोर विवाद— :

श्री दुर्योधनले र वीर कुरुले * तिन्को सुनी गर्जन ।
द्रौणीलाइ भनेर धन्य, खुशिले * थाले सबै उफ्रन ॥
सुन्दा गर्जनको कठोर स्वर त्यो * मनमा डराईकन ।
सोधे अर्जुनलाइ धर्म-सुतले * त्यस्को सबै कारण ॥३६
पर्थ्यौं हामिहरू खुशी हुनु बरू * आचार्यको मृत्युले ॥
उल्टो हर्षित छन् सबै कुरुहरू * हे पार्थ ! कुन् हेतुले ॥
पक्का कोहि मिल्यो सहायक ठुलो * योद्धा त्यसै कारण ।
गर्जन्छन् अहिले यि कौरवहरू * भन्दैछ मेरो मन ॥६७
को होला भन त्यो मलाइ अहिले * सोचेर हे अर्जुन !
यस्तो प्रन्न सुनेर धर्म-सुतको * सम्झी गुरूका गुन ॥
साह्रै चित्त दुखाउदै विजयले * त्यसको भने कारण ।
आफ्नू धर्म र नीतिमा स्थिर हुने * छन् श्रेष्ठ जो ब्राह्मण ॥३८
दिन्छन् दान सुपात्रलाइ दिनहूँ * षट्कर्म जो गर्दछन् ।
एक्लै कौरवलाइ मद्दत दिने * ती द्रोणका पुत्र हुन् ॥
मार्‍यौं जो गुरुलाइ धर्म-पथको * तोड़ी सबै बन्धन ।
साटो फेर्न तयार छन् समरमा * द्रौणी रिसाईकन ॥३९॥
छाड्दैनन् अब धृष्टद्युम्नकन ती * आचार्यका पुत्रले ।
रक्षा गर्नुपर्‍यो मिलेर सबले * तिन्को कुनै यत्नले ॥

मैंले रोक्न सकीनँ आज गुरुको * हत्या हुँदामा जब ।
त्यस्को दुष्फलले ठूलो नरकमा * पर्छु म पक्का अब ॥४०
त्यस्तो बात सुनी सकी विजयको * भन्दा भए भीमले ।
बोल्छौ भाइ ! भएर क्षत्रिय तिमी * यो बात कुन् नीतिले ॥
बिर्स्यौं की कुरुले दिए जति सबै * संकष्ट हे अर्जुन !
हामीले सहि दुःख त्यो गरिसक्यौं * सद्धर्मको पालन ॥४१॥
गर्छु युद्ध भनी स्वयं अघि सरी * उत्साह पैह्ले दियौ ।
मारे द्रोणजिलाइ आज, किन त्यो * दुष्कर्म हो भन्दछौ ?
इच्छा छैन भने तिमी बस यहीं * पर्दैन लड्नू अब ।
एक्लैले पनि सक्छु मार्न रणमा * सम्पूर्ण यी कौरव ॥४२
यस्तो बात गरी वृकोदर भए * संग्राममा तत्पर ।
लागे भन्न बुझाउँदै द्रुपदका * छोरा उठी सादर ॥
बिर्सी क्षत्रिय धर्म निन्दित स्वयं * बन्नू भएको किन ?
पापी कौरवले स्वधर्म पथको * कैह्ले गरे पालन ? ॥४३
ज्ञानी ब्राह्मणका सुकर्म कति छन् * तिन्लाइ त्यागीकन ।
लड्ने क्षत्रिय धर्मले समरमा * हुन्छन् कहाँ ब्राह्मण !
मान्नू ब्राह्मण द्रोणलाइ कसरी * राख्थे सबै आयुध ।
निःशस्त्री अनभिज्ञको पनि गरे * दिव्यास्त्रद्वारा वध॥४४॥
तिनको नै वध गर्नलाइ पहिले * उत्पत्ति मेरो भयो ।
सोही कारण प्राण आज रणमा * आचार्यजीको गयो ॥
मारे वीर भनेर गर्नु खुशिले * पर्थ्यो बरु स्वागत ।
निन्दा गर्नुभयो वृथा किन यहाँ * उल्टो नराम्रोसित ॥४५
द्रोणाचार्य नृशंस, क्रूर मनमा * कप्टी र द्रोही थिए ।
आफ्नू धर्म त्यजेर क्षत्रिय हुने * दुष्कर्मले मारिए ॥

तिन्को बात सुनी भने विजयले * धिक्कार धेरै दिई ।
कस्ले मान्दछ श्रेष्ठ, यो जति गऱ्यो* दुष्कर्म पापी भई ॥४६
लागे सात्यकि भन्न नेत्र रिसले * राता गराईकन ॥
धृष्टद्युम्न तिमी समान अरु को * पापी हुनन् लौ भन !
योद्धा, वीर तथा धनुर्धर ठुला * संसारमा छन् जति ।
तिन्मा उत्तम, मान्य ब्राह्मण थिए * आचार्य हे दुर्मति ! ॥४७
हाम्रा कौरवका र पाण्डु-सुतका, * कैकेय, पाञ्चालका ।
द्रोणाचार्य गुरु भईकन मरे * फेला परी दुष्टका ॥
बोल्ने बात अभद्र दुष्ट अहिले * जीवित् छ यो दुर्जन ।
छैनौ वीर कुनै उपस्थित यहाँ * यस्को लिने जीवन ॥४८
हत्याले गुरुको ठुलो नरकमा * पर्छस् तँ पापी मरी ।
तेरो पाण्डव गर्दछन् भइ दुखी * निन्दा नराम्रो गरी ॥
माफी आज दिएँ नबोल्नु यसरी * हे दुष्ट ! कैल्है पनि ।
धृष्टद्युम्न उठी भने, सब कुरा * श्री सात्यकीको सुनी ॥४९
गर्छन् सज्जन को बढ़ेर तिमि भैं * निन्दा सदा दुर्जन ।
गर्नाले बकवाद व्यर्थ तिमिले * हानी छ मेरो कुन ?
पापी, नीच तिमी दुराचरणले * छौ पूर्ण आफैं तर ।
निन्दा गर्न भनी सदैव अरुको * हुन्छौ तिमी तत्पर ॥५०
दिन्छौ दोष मलाइ द्रोण-बधको * हे सात्यकी दुर्जन !
निर्दोषी तिमिले गऱ्यौ वध गई * भूरिश्रवाको किन ?
दिन्छौ दोष मलाइ व्यर्थ तिमि छौ * दुष्कर्ममा उद्यत ।
लाग्ला पाप भनी डराउँछु बरु * बोलेर पापीसित ॥५१॥
कुन् हो उत्तम धर्म, जान्न सजिलो* ठान्छौ कि हे दुर्जन !
त्यस्तै रूप अधर्मको पनि सफा * गाह्रो छ जानी लिन ॥

सोही कारणले विवाद नगरी * जाऊ लड़ाइँ गर।
बोल्यौ केहि भने म काट्छु गुरुझैं * टुप्पी समाई शिर ॥५२॥
तिन्को बात सुनेर क्रोधित भई * श्री सात्यकी वीरले।
दौड़े एक गदा लिएर सहसा * माछु भनी वेगले ॥
धृष्टद्युम्न पनी लिएर करमा * ठूलो खुँड़ा दौड़िए।
योद्धा भीम र कृष्णले गइ छिटै * पक्रेर रोकीदिए ॥५३॥

अश्वत्थामा द्वारा नारायणास्त्रको प्रयोग : श्री कृष्णद्वारा सबैको रक्षा :—

राजन् ! कौरव वीर त्यै बखतमा * उर्लेर आए सब।
त्यो देखेर हिंड़े लिएर संग्रमा * सेनाहरू पाण्डव ॥
गर्छन् श्री यमराजले प्रलयमा * संहार जुन् चालले।
पारे सैनिक ध्वस्त त्यै किसिमले * श्री द्रोणका पुत्रले ॥५४॥
थुप्रो लाग्न गयो पहाड़सरिको * मुर्दाहरूको त्यहाँ ॥
लागे ढल्न मरी दुवै तरफका * सेनाहरू छिन्महाँ ॥
ठूला पर्वत वा समुद्र दुइको * लागे सरी ठक्कर।
त्यस्तै वीर भिडे दुवै तरफका * संग्राम-भूमीभर ॥५५॥
त्यो वेला जति वीर सम्मुख परे * श्री द्रोणका पुत्रको।
तिन्मा कोहि बचेन जीवन गयो * अक्षौहिणी एकको ॥
श्री नारायण अस्त्र सम्झि मनले * मन्त्रेर राम्रोसित।
छाड़े पाण्डव सैन्यका उपरमा * द्रौणी भई क्रोधित ॥५६॥
निस्के बाण अनेक अग्निसरिका * त्यो अस्त्रदेखी जब।
लागे मर्न डढेर संमुख जती * त्यस्का परे ती सब ॥
जस्तो ढाक्तछ सूर्यको किरणले * त्रैलोक्य नै छिन्महाँ।
त्यस्तै सैनिकलाइ बाणहरूले * ढाकी दिएथ्यो त्यहाँ । ५७

बोले धर्म-कुमार शीघ्र भयले * देखेर युद्ध-स्थिति ।
धृष्टद्युम्न लिएर सैनिक सबै * पाञ्चालका भूपति ॥
योद्धा अन्धकका र वृष्णि कुलका * सारा थिए साथमा ।
आफाफ्ना घर जाउ व्यर्थ नपरी * यो घोर आपत्तिमा ।५८
भाई अर्जुन छन् तटस्थ हरि छन् * ब्रह्माण्डका मालिक ।
मर्नै हामि भयौं डढेर सँगमा * प्यारा सबै सैनिक ॥
भोग्दैछौं परिणाम आज छलले * हत्या गुरुको गरी ।
हाम्फालीकन अग्निमा म त छिटै * जान्छु खुशीले मरी ॥५९
हाम्रो हार भयो त्यज्नुन् विजयको * आशा सबै पाण्डव ।
यो संग्राम जितेर कौरवहरू * साम्राज्य भोगुन् अब ॥
त्यस्तो बात सुनेर धर्मसुतको * बाहू उचालीकन ।
भन्नूभो हरिले गरेर पहिले * शंखध्वनी गर्जन ॥६०॥
योद्धा, सैनिक, वीर पर्व डरले * भागी रहेछौ किन ?
भूमीमा रथबाट वर्ल पहिले * शस्त्रास्त्र फालीकन ॥
पैह्ले देखि विधान निश्चय छ यो * दिव्यास्त्र शान्ती हुने ।
अर्को छैन कुनै उपाय सजिलो * हे वीरहो ! बाँचिने ॥६१॥
त्यो आज्ञा हरिको सुनेर सबले * गर्दा भए पालन ।
मानेनन् जब भीमले शुरु गऱ्यो * त्यो अस्त्रले झम्टन ॥
त्यो देखेर छिटो पुगी विजयले * बाहू समाईकन ।
तानी भूमिमहाँ बचाउन सके * श्री भीमको जीवन ॥६२॥
श्री नारायण अस्त्र शान्त त्यसरी * पार्नू भयो कृष्णले ।
फर्के सैनिक वीर पाण्डु-सुतका * लड्छौं भनी वेगले ॥
त्यो देखेर कुमार द्रोण गुरुका * अत्यन्त क्रोधित् भए ।
श्री कृष्णार्जुनलाइ ताकि सहसा * अग्न्यास्त्र छाड़ीदिए ॥६३

आयो अग्निशिखासमान क्रमले * अग्न्यास्त्र बढ्दै जब ।
छाडे मन्त्रित पार्थले पनि छिटै * ब्रह्मास्त्र आफ्नू तब
दोटै अस्त्र मिली विलीन सहसा * श्री कृष्णजीमा भए ।
सारा सैन्य डटेर फेरि रणमा * उत्साहले गर्जिए ॥६४॥

श्री द्रौणी दुई अस्त्रको विफलता * देखेर दुःखी थिए ।
त्यसको कारण व्यासले पुगि त्यहाँ * सारा बुझाई दिए ॥
अग्नी-अग्नि मिलेर शान्त जसरी * हुन्छन् नपोलीकन ।
पाई केन्द्र भए विलीन अहिले * दिव्यास्त्र त्यै कारण॥६५॥



व्यासजी द्वारा अर्जुनलाई शिक्षा

हे ब्रह्मन् ! पहिले थियो त्रिपुर जो * योद्धा ठुलो दानव ।
त्यसले जङ्गलमा गई तप गर्‍यो * संकष्ट खप्ते जब ॥
ब्रह्मा तुष्ट भएर इच्छित दिए * त्यो दैत्यलाई वर ।
लाग्यो घुम्न भएर दैत्य विजयी * सानन्द चारैतिर ॥६६॥

तिनोटा पुर रौप्य, लौह, सुनको * पैह्ले बनाईकन ।
द्यौतालाइ जितेर स्वर्गपुरिको * त्यस्ले गर्‍यो शासन ॥
ब्रह्माजीसंग कष्ट देवगणले * आफ्नू भनेथे जब ।
ब्रह्माले शिवको सबै सँग भई * गर्नू भएथ्यो स्तव ॥६७
द्यौताको स्तुतिले प्रसन्न हुनुभो * तत्काल विश्वंभर ।
पाल्नूभो रथमा चढी त्रिपुर त्यो * छाड़ेर यौटा शर ।
मारी दानवलाइ देवगणको * संकष्ट हर्नू भयो ।
श्री कृष्णार्जुनले सुअस्त्र त्यहि नै * ल्याईसकेको थियो ॥६८
तिम्रा अस्त्र भए विनष्ट अहिले * त्यै अस्त्रको तेजले ।
चिन्ता गर्नु वृथा छ यो विषयमा * हे विप्र ! त्यै हेतुले ॥
श्री नारायण कृष्ण हुन् नर यिनै * हे विप्र ! हुन् अर्जुन ।
यिन्को ध्यान गरे हुनेछ क्रमले * चिद्ब्रह्मको दर्शन ॥६९
अन्तर्धान भई भनीकन यती * श्री व्यास पाल्नूभयो ।
द्रौणीका मनको विषाद अथवा * सारा अशान्ती गयो ॥
राजन् ! फेरि डटे दुवै तरफमा * योद्धाहरू युद्धमा ।
बर्साई हतियार क्रोधित हुँदै * उत्साहका साथमा ॥७०
छाडथे बाण जती-जती रिस गरी * श्री द्रोणका पुत्रले ।
काट्थे ती सब बाणलाइ बिचमै * टुक्रा गरी पार्थले ॥
द्रौणी दिक्क भएर घायल बनी * 'धिक्कार' भन्दै गए ।
सन्ध्याकाल भयो दुवै तरफले * संग्राम रोकीदिए ॥७१
श्री कृष्णार्जुनदेखि बाहिक सबै * श्री द्रोणको मृत्युले ।
हाम्रो जीत हुने भयो अब भनी * गर्थें कुरा हर्षले ॥
योद्धा कौरवतर्फका जति थिए * सेना र सेनापति ।
हाम्रो हार हुनेछ निश्चय भनी * गर्थे कुरा भूपति ! ॥७२॥

सारा संजयले गरे समरको * विस्तारले वर्णन ।
त्यो सुन्दा धृतराष्ट्र दुःखित भए * सम्झी गुरूका गुन ॥
साह्रै दुःख दिने कुपुत्र हुनगो * यो दुष्ट दुर्योधन ।
भन्थे भूप रुँदै अवश्य रणमा * मारिन्छ त्यो दुर्जन ॥७३

यो द्रोणपर्व सब जो जन पाठ गर्छन् ।
संसार-सिन्धु सहजैसित पार तर्छन् ॥
सम्पत्ति, सन्तति र कीर्ति बढेर जाला ।
त्यागेर देह सुख स्वर्ग गएर भोग्ला ॥७४॥

द्रोणपर्व समाप्त ।



# महाभारत कर्णपर्व

प्रारम्भः

दुर्योधनले कर्णलाई सेनापति बनाउनु :—

वैशम्पायन भन्दथे शुभ कथा * सुन्थे ति जन्मेजय ।
भन्थे श्री धृतराष्ट्रजीसँग त्यही * विस्तारले सञ्जय ॥
देखाए जति शूरता समरमा * हे भूपती ! द्रोणले ।
त्यस्तो गर्न ठुलो पराक्रम अरू * सक्नेछ कुन् वीरले ॥१॥
सारा पाण्डव हर्षले शिविरमा * फर्की सकेथे जब ।
आफ्नू हार हुने सुनिश्चित गरी * आए सबै कौरव ॥
श्री दुर्योधनले सबै नृपहरू * डाकेर त्यै रातमा ।
सोधे एक सभा गरी नरपते ! * संग्रामका निम्तिमा ॥२॥
हे राजागण हो ! ठुलो कपट जो * वैरीहरूले गरे ।
त्यस्मा भीष्म हितैषि द्रोण यि दुवै * विख्यात योद्धा मरे ॥
जित्ने पाण्डव वीरलाइ कसरी * हामीहरूले अब ।
सोची यत्न कुनै बताउनुहवस् * हे भूपती हो ! सब ॥३॥
यस्तो प्रश्न सुनी सुयोधनजिको * राजाहरूले तर ।
कोही वीर उठेन दिन्छु म भनी * त्यो प्रश्नको उत्तर ॥
द्रौणीका मुखमा सबै नृपतिका * आँखा डटेका थिए ।
तिनको भाव बुझेर द्रोणसुतले * बिस्तार भन्दा भए ॥४॥
योद्धा कर्णसमानको अरु कुनै * मैले यहाँ देख्दिनँ ।
सक्छन् जित्न यिनी पराक्रम गरी * हे वीर दुर्योधन !

ज्ञाता छन् सब अस्त्र शस्त्रहरूको * संग्राममा दुर्धर ।
सेनाका पतिको दिनोस् पद ठूलो * यिन्लाइ नै सादर ॥५॥
त्यो सल्लाह सुनेर द्रोणसुतको * आनन्द मानीकन ।
लागे भन्न उठेर आदर गरी * तिन्लाइ दुर्योधन ॥
योद्धा कर्ण ! ठूलो म मान्छु मनमा * तिमो अहीले भर ।
तिम्रै धैर्य र शक्तिले अघि भएँ * संग्राममा तत्पर ॥६॥
मेरा शत्रु समस्त पाण्डवहरू * छन् श्रेष्ठ योद्धा तर ।
मारी ती सबलाइ वीर ! तिमिले * ऊद्धार मेरो गर ॥
मेरो कार्य छ कष्ट-साध्य तिमिले * राम्रो गरी जान्दछौ ।
सोही कारणले मलाइ विजयी * पारू भने सक्तछौ ॥७॥
सेनाका पतिको ठूलो पद छ जो * हे कर्ण ! संग्राममा ।
सुम्पन्छु अब भार त्यो म बलियो * तिम्रा सखे ! काँधमा ॥
बोले सूर्य-कुमार बात सुनि त्यो * हे वीर ! दुर्योधन ।
व्यर्थैमा तिमिले म जीवित छँदै * चिन्ता गरेको किन ? ॥८॥
मार्छु शत्रु भनी कबोल पहिल्यै * देखी गरेको हुँदा ।
त्यस्को पालन गर्न देह, मनले * तैयार छु सर्वदा ॥
मेरो शौर्य र शक्तिमा अब कुनै * शंका नमानीकन ।
हेर्दै युद्ध बसीरहू शिविरमा * हे मित्र दुर्योधन ! ॥९॥
तिन्को बात सुनी सुयोधन त्यहाँ * अत्यन्त हर्षित भए ।
सेनाका पतिको तुरुन्त अभिषेक् * श्री कर्णलाई दिए ॥
पाई त्यो पद-भार कर्ण मनमा * निक्कै भए हर्षित ।
देखिन्थे रवि-पुत्र त्यो बखतमा * श्रीस्कन्ध झैं शोभित ॥१०
पारे व्यूह तयार त्यो मकर झैं * जस्को थियो आकृति ।
त्यो चौधौं दिन लड्न उद्यत भए * श्री कर्ण सेनापति ॥

प्रातःकाल उठेर पाण्डु-सुतले * देखे तयारी जब ।
चन्द्राकार बनाइ व्यूह बलियो * आए अगाड़ी सब ॥११
लागे लड्न डटेर हे नरपते ! * सेना दुवै पक्षका ।
बाहू, पाउ अनेक अङ्ग क्षणमा * टुक्रा भए वीरका ॥
पुण्यात्मा भइ पुण्य क्षीण जसरी * गिर्छन् त्यही चालले ।
धेरै सैन्यहरू धमाधम गिरे * शस्त्रास्त्रका चोटले ॥१२
रोके अर्जुनलाइ बढ्न नदिई * संसप्तका सैन्यले ।
लागे मार्न समाप्त पार्न क्षणमा * तिन्लाइ श्री पार्थले ॥
योद्धा भीम चढेर श्रेष्ठ गजमा * बढ्दै अगाड़ी गए ।
सामुन्ने पुगि क्षेमधूर्ति नृपले * तिन्लाइ रोकीदिए १३
हात्ती ती दुइ वीरका जब मरे * दौड़े गदा लीकन ।
हानी एक गदा वृकोदरजिले * तिन्को लिए जीवन ।
भागे सैन्य सबै डराइ नृपको * देखी नराम्रो स्थिति ।
फर्काए सबलाइ कर्ण सहसा * आएर हे भूपति ! ॥१४
बर्साए हतियार क्रोधित भई * ती कर्णले बेसरी ।
लागे गिर्न विपक्षका पनि त्यहाँ * सेना अनेकौं मरी ॥
रोकेथे सहदेवले पुगि छिटै * संहार ती कर्णको ।
थाले गर्न प्रहार वीर दुइ ती * गर्जेर शस्त्रास्त्रको ॥१५
धृष्टद्युम्न बढेर वेग कृपको * तत्काल रोकीदिए ।
पर्खी हे शकुनी ! भनी नकुलले * गर्जेर सातो लिए ॥
लागे भन्न शिखण्डि क्रोधित भई * हे दुष्ट दुःशासन !
तिम्रो लिन्छु, डटी रहे समरमा * मैले छिटो जीवन ॥१६
श्री दुर्योधनलाइ धर्म-सुतले * आएर रोकीदिए ।
भाई जो अनुविन्द, विन्द रणका * ज्ञाता प्रतापी थिए ॥

तिनूको युद्ध ति सात्यकीसित पऱ्यो * हे भूपती ! वेसरी ।
बर्साए शर खूब सम्मुख डटी * मार्ने इरादा धरी ॥१७
रोके वेग डटेर द्रोणसुतको * संग्राममा भीमले ।
लागे लड्न दुवै अनेक शरको * वर्षा गरी वेगले ॥
राजा श्री श्रुतकीर्ति सम्मुख भई * लड्दा भए शल्यको ।
गर्जन्थे दुइ वीर उच्च स्वरले * वर्षा गरी बाणको ॥१८
लड्छन् मत्त गजेन्द्र घोर वनमा * गर्जेर जुन् चालले ।
त्यस्तै ती अनुविन्द, विन्द रणना * लड्दा भए वेगले ॥
मारी अश्व र सारथी, रथ ध्वजा * टुक्रा गराईकन ।
पारी घायल सात्यकीकन गरी * लागे दुवै गर्जन ॥१९॥
तिनूको चोट सबै खपेर तनमा * श्री सात्यकीले पनि ।
हाने बाण तिखा पचास विरथी * पारे मलाई भनी ॥
लागी बाण दुवै भएर विरथी * दौड़े गदा लीकन ।
गर्थे यत्न दुवै थरी घुमि-घुमी * प्राणान्त पारीदिन ॥२०
मारेथे अनुविन्दलाइ पहिले * हानी गदा माथमा ।
काटेथे शिर विन्दका पनि छिटै * तर्वारले युद्धमा ॥
मारे कैकय वीरलाइ त्यसरी * श्री सात्यकीले जब ।
लागे भाग्न डराइ सैनिकहरू * तिनूका भएका सब ॥२१
गर्दा अर्जुनले प्रहार रणमा * शस्त्रास्त्र संहारक ।
लागे ढल्न मरी धमाधम सबै * सेना ति संसप्तक ॥
हे राजन् ! श्रुतकर्म द्रौपदिजिका * जो वीर छोरा थिए ।
तिनूले जीवन चित्रसेन नृपको * नौ बाणद्वारा लिए ॥२२
अर्का जो प्रतिविन्ध्य नामक थिए * श्री द्रौपदिका सुत ।
तिनूले क्रोधित चित्रको वध गरे * साह्रै नराक्रोसित ॥

योद्धा अर्जुनले पराक्रम ठुलो * देखे गरेको जब ।
आए द्रोणकुमार सम्मुख भई * भन्दै म लड्छू अब ॥२३
रोकेथे गुरु-पुत्रलाइ सहसा * आएर श्री भीमले ।
थाले लड्न दुवै परस्पर ठुलो * उत्साह औ धैर्यले ॥
राजन् ! क्षत्रिय वीर भीम बलमा * पूरा प्रतापी थिए ।
त्यस्तै ब्राह्मण वीर द्रोणसुत झन् * शस्त्रज्ञ पक्का थिए ॥२४॥
तीखा बाणहरू प्रहार रिसले * गर्थें जती भीमले ।
काट्थे ती सबलाइ झट्ट बिचमै * श्री द्रोणका पुत्रले ॥
द्रौणीले पनि छाड्दथे जति-जती * दिव्यास्त्र मन्त्रीकन ।
काटी ती सबलाइ भीम खुशिले * थाल्थे त्यहाँ गर्जन ॥२५॥
जस्तो अद्भुत युद्ध वीर दुइको * त्यो देखियो भूपति !
त्यस्तो युद्ध थिएन अद्भुत कुनै * पैह्ले बितेका जति ॥
ढाकिन्थे कहिले अनेक शरको * वर्षा गरी वेसरी ।
देखिन्थे कहिले सबै शरहरू * काटेर टुक्रा गरी ॥२६॥
निक्कै बेर लडी रहे जब दुवै * योद्धा भई क्रोधित ।
लागी बाण तिखा परस्पर दुवै * योद्धा भए मूर्छित ॥
देखे सारथिले दुवै तरफका * आफ्ना रथीको स्थिति ।
फर्काई रथ वेगले पर लगे * तत्काल हे भूपति ॥२७॥
भाइ जो भगदत्तका अतिबली * योटा प्रतापी थिए ।
साटो फेर्न भनेर पार्थसित ती * आएर लड्दा भए ॥
तिनको काटिदिए त्यहाँ विजयले * इन्द्रास्त्र हानी शिर ।
लागे कौरव वीर भाग्न डरले * तत्काल चारैतिर ॥२८॥
फर्याँक्थे पार्थ, जता थिए उदधि झैं * सेना ति संसप्तक ।
लागे छोड्न समाप्त पार्दछु भनी * शस्त्रास्त्र संहारक ॥

सेना मत्त गजेन्द्रको अति ठुलो * भिन्नै थियो एक जो ।
आएथ्यो गज-सैन्य दल्मल गरी * श्रीपार्थका सामु त्यो ॥२९
एकै पल्ट गरे प्रहार सबले * शस्त्रास्त्र आफ्ना तर ।
मारे ती सबलाइ एक क्षणमै * छाडी अनेकौं शर ॥
योद्धा दण्ड र दण्डधार गजका * सेनापती जो थिए ।
तिन्लाई पनि पार्थले शरहरू * छाडेर मारीदिए ॥३०॥
तिन्को मृत्यु भएर पाण्डवहरू * सारा थिए हर्षित ।
लागे भन्न गएर सूर्य-सुतको * सामू ति माद्री-सुत ॥
पापी कर्ण ! तिमी समान अरुको * होला नढाँटी भन ।
मानिन्छौ तिमि नै प्रधान सबमा * यो युद्धको कारण ॥३१
श्री दुर्योधनलाई साहस दियौ * झूटो पहीले जति ।
मर्दैछन् त्यहि हेतु कौरव तथा * सम्पूर्ण यी भूपति ॥
मार्नेछु तिमिलाइ आज रणमा * जानी ठुलो कण्टक ।
थाले गर्न प्रहार बेसरि भनी * शस्त्रास्त्र संहारक ॥३२॥
ताँदो काटिदिई शरीरभरमा * घाऊ गराईदिए ।
राधाका सुत कर्ण घायल हुँदा * अत्यन्त क्रोधित् भए ॥
घोड़ा, सारथि, छत्र औ रथ-ध्वजा * काटेर नौ बाणले ।
तिन्लाइ विरथी गराइ सहजै * हाँसे तिनी हर्षले ॥३३॥
सक्ती, तोमर पाश खड्ग र गदा * दिव्यास्त्र जो-जो थिए ॥
माद्रीका सुत छाड्दथे जति सबै * श्री कर्ण काट्तै गए ॥
मारी सारथि, अश्व झट्ट विरथी * तिन्लाइ पारे जब ।
भागेथे रणबाट श्री नकुलजी * साह्रै डराई तब ॥३४॥
हे राजन् ! सहदेवको शकुनिको * संग्राम चल्दैं थियो ।
ती दोटै बलवानको समर झन् * आश्चर्य लाग्ने भयो ।

तिन्का अश्व र सारथी जब मरे * दौड़े गदा लीकन ।
खोज्थे दाउ प्रहारको घुमि-घुमी * प्राणान्त पारीदिन ॥३५
लागेथ्यो सहदेवलाइ शिरमा * ठूलो गदा त्यो जब ।
भागेथे रणबाट टिक्न नसकी * शस्त्रास्त्र फ्याँकी सब ॥
धृष्टद्युम्न प्रधान वीर कृपको * संग्राम त्यो अद्भुत ।
हेर्थे सैन्यहरू लड़ाइँ नगरी * सारा हुँदै हर्षित ॥३६॥
लागी बाणहरू शरीरभरिमा * धारा वगी रक्तको ।
देखिन्थ्यो तन रक्त पुष्पसरिको * राम्रो दुवै वीरको ॥
छाड़ेथे जब अग्निबाण कृपले * मार्ने इरादा गरी ।
धृष्टद्युम्न लड़ाइँबाट सहसा * भागे पछाड़ी सरी ॥३७
तिन्लाई कृपले ठुलो स्वर गरी * गर्जी लखेटे तर ।
पौंचे ती कृपतर्फ हेर्न नसकी * संग्रामको बाहिर ॥
श्री दुर्योधनलाइ धर्म-सुतले * वर्षा गरी बाणको ।
घाऊ पारिदिए शरीरभरिमा * धारा बग्यो रक्तको ॥३८
तिन्को चोट खपी सुयोधनजिले * छाड़ी ठुलो तोमर ।
मारी अश्व र सारथी थपिदिए * त्यै माथि धेरै शर ॥
काटे बाण सबै युधिष्ठिरजिले * लाग्नै नपाईकन ।
यो दुर्योधनलाइ मार्दछु भनी * थाले तिनी गर्जन ॥३९
रोके भीम पुगी म यस्कन पछी * मार्नेछु मैले भनी ।
त्यो देखेर पुगे विपक्षतिरका * योद्धा र सेना पनी ॥
योद्धा कर्ण र द्रोण-पुत्र, कृपजी * यी तीनका साथमा ।
लड्थे पार्थ र भीम सात्यकि डटी * त्यो घोर संग्राममा ॥४०
शक्ती, तोमर खड्ग, पाश र गदा * दिव्यास्त्र, अग्न्यास्त्रको ।
गर्थे आपुसमा प्रहार रिसले * इन्द्रास्त्र, ब्रह्मास्त्रको ॥

राजा कोशलका तथा मगधका * औ अङ्ग, बङ्गादिका ।
आए लड्न डटेर कम्मर कसी * घेरै थरी देशका ॥४१॥
धृष्टद्युम्न शिखण्डि, भूपति अरु * जो जो प्रतापी थिए ।
सारा लड्न भनेर सोहि स्थलमा * तत्काल पुग्दा भए ॥
हात्ती, अश्व-सवार, पैदल, रथी * योद्धा र सेनापति ।
थाले गर्न प्रहार शस्त्र रिसले * आफ्ना भएका जति४२
सेना वीरहरू दुवै तरफका * जो जो थिए दुर्धर ।
थाले ढल्न मरी धामधम त्यहाँ * लागी गदा तोमर ॥
ढाकेथ्यो मृत-देहले नरपते ! * सम्पूर्ण युद्धस्थल ।
देखिन्थे गज अश्व बाहु शिरका * थुप्राहरू केवल ॥४३॥
चम्कन्थे कतिका खुँडा र खुकुरी * तर्वार विद्युत् सरी ।
लौ लौ मार, समात, काट सब यो* चिच्याउँथे बेसरी ॥
भूत-प्रेत, पिशाच, गिद्धहरू झन * उन्मत्त जस्तै बनी ।
डुल्थे श्वान र काग आदि खुशिले * संग्राममा डंकिनी ॥४४

सेना मरे जब दुवैतिरका प्रशस्त ।
अस्ताउनाकन हिंडे रवि सुस्त-सुस्त ॥
मर्नें मरे तर थिए जति सैन्य शेष
फर्के सबै शिविरमा तब हे नरेश ! ॥४५॥

कर्णको दोस्रो दिनको युद्धमा त्रिपुरासुरको उपाख्यान राजा शल्य सारथी हुनु:—

हे राजन् ! धृतराष्ट्रले जब सुने * संग्रामको त्यो स्थिति ।
सोधे सञ्जयलाई फेरि मनमा * सन्ताप मानी अति ॥
सक्थे पाण्डवलाई जित्न रणमा * इच्छा गरे कर्णले ।
तिनले जित्न नसक्नु हामिहरुको * हो भन्छु दुर्भाग्यले॥४६॥

प्रातः काल उठेर वीर कुरुले * कस्तो तयारी गरे ?
योद्धा-सैन्य कती दुवै तरफका * कुन् वीरद्वारा मरे ॥
यस्को वर्णन सुन्दछु भन तिमी * विस्तारले सञ्जय !
हाम्रो हार हुने रहेन अब क्यै * शंका तथा संशय ॥४७॥
राजाको सुनि प्रश्न सञ्जयजिले * बिन्ती गरे सादर ।
गर्नुभो पहिले अधर्म जति जो * केही नमानी डर ॥
हे राजन् ! पछिको विचार नगरी * गर्नुभयो जो छल ।
त्यसको भोग्नु परीरहेछ अहिले * राम्रो नराम्रो फल ॥४८॥
भन्थे पाण्डवले लडाइँ नगरौं * हामीहरूले तर ।
व्यर्थै मोहमहाँ परी हुनुभयो * संग्राममा तत्पर ।
निर्दोषी जनको हुँदैछ अहिले * संहार जो युद्धमा ।
भोग्नूपर्दछ पाप त्यो हजुरले * पक्का कुनै जन्ममा ४९
गर्छु वर्णन सुन्नुहोस समरको * त्यागेर चिन्ता अब ।
प्रातः काल उठेर तत्पर भए * सेना हजुर्का सब ॥
पैह्लै व्यूह गरी तयार बलियो * ती अङ्गका भूपले ।
श्री दुर्योधनको गई शिविरमा * भन्दा भए रोषले ॥५०॥
मेरो आज लडाइँ पर्दछ ठुलो * श्री पार्थका साथमा ।
मैले मार्दछु की मलाई तिनिले * मारीदिनन् युद्धमा ॥
पाएको गुरुबाट छ धनुष यो * संसारमा श्रेष्ठ जो ।
मार्ने अर्जुनलाइ आज रणमा * मेरो त्यही अस्त्र हो ॥५१॥
हे दुर्योधन ! युद्धमा कुशल औ * छन् वीर जो अर्जुन ।
सुम्पन्छु तिमिलाइ राज्य रणमा * तिन्लाइ मारीकन ॥
विद्यामा, बल-बुद्धिमा र गुणमा * दिव्यास्त्रको ज्ञानमा ।
बर्ता अर्जुनदेखि छु म अहिले * संग्रामको नीतिमा ॥५२॥

जस्तै दुर्लभ हुन्न क्यै पनि कुरा * ज्ञानी मनस्वीकन ।
त्यस्तै पाण्डवलाइ जित्न रणमा * गाह्रो कुरा मान्दिनँ ॥
तिनको गाण्डिव नामको धनु छ जो * विख्यात संसारमा ।
त्योभन्दा छ बढी धनू विजय यो * मेरो पनी हातमा ॥५३॥
गर्ने शस्त्र प्रहार नीति रणको * मैले जती जान्दछु ।
छैनन् विज्ञ त्यती धनञ्जय भनी * जानीसकेको म छु ॥
यौटा जो छ विशेषता विजयमा * हे मित्र दुर्योधन !
मेरो हार हुने सदैव रणमा * हो मुख्य त्यै कारण ॥५४॥
तिनका सारथि छन् तिनै भुवनका * मालिक योगेश्वर ।
रक्षा गर्न भनी सदा विजयको * छन् युद्धमा तत्पर ॥
त्यस्तै सारथि एक आज नहुँदा * लाचार छु यो घरी ।
मेरो यो रथलाई शल्य नृपले * हाँकी दिए राम्ररी ॥५५॥
मार्थें निश्चय पार्थलाइ रणमा * हे मित्र दुर्योधन !
यसको गर्नुहवस् प्रबन्ध अहिले * सोची विचारीकन ॥
राधाका सुत कर्णको सुनि कुरा * राम्रो भन्यौ यो भनी ।
लागे भन्न पुगी छिटै शिविरमा * श्रीशल्यलाई तिनी ॥५६॥
हे मामा ! अघिदेखिकै हजुरको * मान्छु म ठूलो भर ।
छैनन् वीर हजूर झैं पृथिविमा * अर्को कुनै दुर्धर ॥
मेरो मङ्गलका निमित्त र ठुला * ती शत्रु मानीकन ।
यौटा कार्य हजूरले गरिदिनू- * पर्ने भयो सज्जन ! ॥५७॥
गर्छन् सारथि कर्म जुन् किसिमले * श्री कृष्णले पार्थको ।
त्यस्तै बाग समाउनोस् हजुरले * श्री कर्णका अश्वको ॥
गर्छन् मद्दत पार्थको समरमा * जुन् चालले कृष्णले ।
त्यस्तै मद्दत कर्णलाइ दिनुहोस् * मामा ! दया-भावले ॥५८॥

मार्नें भीष्म र द्रोणलाइ छलले * श्री कृष्ण नै हुन् भनी ।
जानेकै छ समस्त वीरहरुले * मामा ! हजुर्ले पनि ॥




दुर्योधन र कर्णको वार्त्तालाप

भीष्म, द्रोण बुढा थिए समरमा * तिन्को भयो सद्गति ।
माग्छन् मद्दत नाथको भइ दुखी * बाँचे जती भूपति ॥५९
जस्तै कर्णसमान दुर्धर रथी * छैनन् तिनै लोकमा !
त्यस्तै सारथि विज्ञ क्वै हजुर भैं * देख्दीनँ संसारमा ॥
राधाका सुत कर्णको रथ स्वयं * हाँकीदिए नाथले ।
पाँचै भाई र सैन्यलाइ रणमा * जित्ने थिए कर्णले ॥६०॥
श्री दुर्योधनले विनम्र स्वरमा * बिन्ती गरेको सुनी ।
लागे भन्न रिसाइ मद्रपतिले * आगोसरीका बनी ॥
हे दुर्योधन ! यो अनादर ठुलो * मेरो गरेको किन ?
योग्यायोग्य गरी विचार पहिले * बोल्छन् सदा सज्जन६१

जानीलेउ म हूँ नरेश तिमि झैं * यौटा ठुलो देशको ।
भन्छौ सारथि कर्म गर्न कसरी * त्यो सूतका पुत्रको ।
राजा शल्य रिसाउँदै दिइसकी * पैल्हे कड़ा उत्तर ।
आफ्ना सैन्य सबै लिएर सहसा * ती जानलागे घर ॥६२॥
त्यो देखीकन श्री सुयोधन परे * श्री शल्यका पाउमा ।
लागे भन्न बुझाइ फेरि तिनिले * सम्मानका साथमा ॥
हे मामा ! बलवान शत्रुसितको * कोही ठुलो युद्धमा ।
राख्छन् सारथि आफुदेखि बलियो * जान्ने रथी साथमा ॥६३
सामुन्ने छ प्रमाण श्री विजयका * छन् सारथी श्री हरि ।
भन्नूहुन्छ मलाइ लौ हजुरले * हेलाँ गर्‍यौ बेसरी ॥
अर्कों दिन्छु प्रमाण यो विषयको * पैल्हे भएको अब ।
भाई तीन थिए अघी त्रिपुर जो * साह्रै ठुला दानव ॥६४
ब्रह्माको तप कष्टपूर्वक गरी * तिन्ले रिझाए जब ।
भन्नूभो विधिले गएर वर जे * इच्छा छ लेओ अब ॥
'ब्रह्मन् ! हामीहरू कदापि नमरौं' * तिन्ले भनेको सुनी ।
भन्नूभो विधिले सदैव भवमा * बाँच्तैन कोही पनि ॥६५
राखी क्यै अवकाश माग वर लौ * हे वीर हो ! मृत्युको ।
बिन्ती दानवले गरे सुनिसकी * आज्ञा ति ब्रह्माजिको ॥
यौटै बाण चलाइ जो निमिषमा * तोड्नेछ हाम्रो पुर ।
सोही मार्न समर्थ होस्, दिनुहवस् * माग्छौं प्रभो ! यै वर ॥६६
इच्छा पूर्ण हुनेछ वीरहरु हो ! * तिम्रो 'तथास्तु' भनी ।
पाल्नूभो निज धाममा खुशि हुँदै * श्री सृष्टिकर्ता पनि ॥
चाँदी, लोह सुवर्णका पुर रचे * आएर ती दैत्यले ।
शोभा ती पुरको अलौकिक थियो * रत्नादिको तेजले ॥६७॥

राखे स्वर्ग र भूमिमा पुर लगी * सानन्द पातालमा ॥
थाले गर्न रजाइँ देवगणको * शेखी हरी स्वर्गमा ॥
तीनोटा पुरमा तलाउ बढिया * मीठो सुधाका थिए ।
मर्ने दानवलाइ अमृत छरी * तत्काल ब्यूँताउँथे ॥६८
इच्छामाफिक हिंड्दथे पुरहरू * डुल्थे सदा दानव ।
सारालाइ गराइ आफ्नु वशमा * स्वामी बने ती सब ॥
ब्रह्मालाइ लिई सदाशिवकहाँ * सम्पूर्ण द्यौता गए ।
आफ्ना कष्ट सबै विनम्र स्वरमा * एकेक भन्दा भए ॥६९
तिन्को विन्ति सुनीसकेर शिवले * आज्ञा भयो सादर ।
मार्ने दानवलाइ यत्न पहिले * मैले भनेको गर ॥
ब्रह्मा सारथि, भूमिको रथ तथा * श्री विष्णुरूपी शर ।
पाए मार्छु रथी बनेर म गई * छन् दैत्य ती दुर्धर ॥७०
आज्ञाले शिवको तयार रथ त्यो * द्यौताहरूले गरे ॥
ठूलो युद्ध पर्‍यो सबै असुर ती * श्री शम्भुद्वारा मरे ।
हे मामा ! 'त्रिपुरारि' नाम शिवको * त्यै हेतुले फैलियो ।
भन्नोस् सारथि कर्म कुन् बखतमा * निन्दित् भएको थियो॥७१
ब्रह्माजीकन तुच्छ भन्छ, जन को * त्यो सारथी कर्मले ।
निन्दित् कार्य भए सहर्ष कसरी * गर्ने थिए कृष्णले ।
विद्या, बुद्धि, विवेक, शौर्य, बल जो* देखिन्छ यी कर्णको ।
त्यस्ले सारथि-पुत्र भन्न सहसा *तिन्लाइ सक्ने छ को ?७२
जस्तै पुत्र हुँदैन स्याल, वनको * राजा ठूलो सिंहको ।
त्यस्तै कारण क्यै अवश्य छ ठूलो * यी कर्णका जन्मको ।
पाएथे जमदग्नि-पुत्रसितको * दिव्यास्त्र यिन्ले सब ।
चिन्ता गर्नु वृथा छ यो विषयमा * मामा ! हजुरले अब ॥७३

योद्धा कर्णसमान वीर अहिले * छैनन् तिनै लोकमा ।
तीभन्दा पनि श्रेष्ठ नै हजुरकै * शक्ती छ संसारमा ॥
सोही कारण कर्णको रथ गई * सानन्द हाँकीदिनोस् ।
मेरो कष्ट दया गरीकन ठुलो * तत्काल टारीलिनोस्॥७४

श्री दुर्योधनले विनम्र स्वरमा * बिन्ती गरेको सुनी ।
लागे भन्न बुझाइ शल्य नृपती * क्यै बेर मन्मा गुनी ॥
तिम्रो कार्य र मान्दछौ समरमा * मेरो तिमीले भर ।
हाँक्नेछु रथ हे सुयोधन ! गई * तिन्को म ऐल्हे तर ॥७५

भन्नेछु जति देखुँला हित कुरा * राम्रो नराम्रो जब ।
खप्नूपर्छ तिमी र कर्ण दुइले * मैले भनेको सब ॥
यो मेरो प्रण कर्णले र तिमिले * स्वीकार गर्छौ भने ।
गर्नेछु गइ कार्य सारथि भई * कल्याण तिम्रो हुने॥७६॥

सारा बात भने सुयोधन गई * श्री कर्णलाई जब ।
श्री दुर्योधनको कुरा सुनिसकी * माने तिनीले सब ॥
यस्तो बात सुनेर मद्रपतिको * आनन्द मानीकन ।
त्याहाँबाट हिंडे चढ़ेर रथमा * तत्काल दुर्योधन ॥७७

राजा शल्य र योद्धा कर्णको परस्पर विवाद :—

पैल्हे सारथि शल्यलाइ रथमा * राखेर श्री कर्णले ।
आफू श्रेष्ठ रथी भईकन बसे * अत्यन्त उत्साहले ॥
ठूलो व्यूह बनाइ सैन्यहरुको * बाजा बजाईकन ।
आए लड्न भनी डटेर रणमा * गर्दै ठुलो गर्जन ॥७८

अर्को व्यूह गरे तयार बलियो * संसप्तका सैन्यको ।
थाले गर्जन ती कठोर स्वरले * बाजा बज्यो युद्धको ॥

देखे व्यूह ठुलो विपक्षतिरको * त्यस्तो तयारी जब ।
आए व्यूह बनाइ पाण्डु-सुतका * सेना र योद्धा सब॥७९॥



योद्धा कर्ण र राजा शल्यको विवाद

एक्लै मार्न भनेर अर्जुन गए * संसप्त सेनातिर ।
बाँकी वीर सबै यतातिर भए * संग्राममा तत्पर ॥
रक्षा गर्न भनेर व्यूह-मुखमा * श्री कर्ण योद्धा थिए ।
तिनका साथ लड़ाइँ गर्न पहिले * पाञ्चाल योद्धा गए ॥८०
सेना अश्वपती, रथी, गजपती * जो जो थिए पैदल ।
बर्साई हतियार सूर्य-सुतले * गर्दै गए कत्तल ॥
आए लड्न भनेर सृञ्जयहरू * तिनका अगाड़ी जब ।
पारे सोत्तर कर्णले शरहरू * छाड़ेर तीखा सब ॥८१॥
धेरै सैन्य र वीरले समरमा * त्यागदा भए जीवन ।
हाहाकार परी बचे जति सबै * भागे डराईकन ॥

बोल्ले सारथितर्फ हेरि खुशिले * श्री कर्ण गर्जीकन ।
राजा शल्य ! बढ़ाउ यो रथ छिटै * छन् ती जहाँ अर्जुन ॥८२
माछु अर्जुनलाइ आज रणमा * भन्ने छ मेरो प्रण ।
श्री दुर्योधनका सबै तरहको * पूरा म तिर्छु ऋण ॥
हाम्रा सैनिक वीरले पनि जती * भन्छू म ऐहे सुनुन् ।
यत्ता अर्जुनको लगाइ पहिले * आई मलाई भनुन् ॥८३॥
जस्ले अर्जुनलाइ पार्दछ छिटै * संग्राममा सम्मुख ।
पाई इच्छित सम्पती मसँग त्यो * भोग्नेछ ठूलो सुख ॥
योद्धा द्रोण तथा पितामह दुवै * ठूलो प्रतापी थिए ।
आयो मृत्यु पुगेपछी समय ती * संग्राममा मारिए ८४॥
त्यस्ताले पनि कर्म-भोग सकिई * जानूपर्‍यो स्वर्गमा ।
कस्ले सक्तछ भन्न बाँच्तछू सधैं * जन्मेर संसारमा ॥
ज्ञानी, मूढ, कृतघ्न, विज्ञ र गुणी * कोही भए तापनी ।
जानेछन् यमराजको नगरमा * दैवी विधान् हो भनी । ८५
बर्ता गर्नु कुरा वृथा छ रणमा * हे शल्य राजा ! सुन ।
आए इन्द्र, कुबेर औ वरुणजी- * लाई लिई अर्जुन ॥
एक्लैले सबका लडेर संगमा * तिन्लाइ मारीकन ।
दिन्छु राज्य त्रिलोकको खुशि हुनन् * भूपाल दुर्योधन ॥८६
धेरै नै रवि-पुत्रले गरिसके * आफ्नू बढाई तर ।
राजा शल्य रिसाइ स्वप्न नसकी * त्यस्को दिए उत्तर ॥
व्यर्थै कर्ण ! बढेर ग्राम, धन त्यो * बाँडछु म भन्छौ किन ?
भेटिन्छन् रणमा टिक्यौ यदि भने * क्यै बेरमा अर्जुन ॥८७
योद्धा अर्जुन सिंह, स्याल तिमि हौ * उद्दण्ड राधा-सुत !
जाबो स्याल भएर लड्नु कसरी * ती बाघ राजासित ॥

खोज्छौ तर्न समुद्रलाइ शिरमा * बाँधी ठूलो पत्थर ।
व्यर्थैमा गिरिको पुगी शिखरमा * हाम्फाल्न छौ तत्पर ॥८८
मर्नै नै तिमिलाइ निश्चय भए * युक्ती म भन्छु सुन ।
एक्लै अर्जुन वीरका संग लड़ी * देऊ छिटै जीवन ॥
आफ्नू मङ्गलका निमित्त संगमा * सम्पूर्ण सेना लिई ।
लड्नू प्राण बचाउँदै समरमा * आफू पछाड़ी भई ॥८९॥
त्यस्तो बात सुनेर मद्रपतिको * श्री सूर्यका पुत्रले ।
शेखीले परिपूर्ण उत्तर दिए * क्रोधित् हुँदै रोषले ॥
मान्दैछु निज बाहुको भर ठुलो * मैले त्यही कारण ।
एक्लै युद्ध गरेर मार्दछु भनें * ती पार्थलाई सुन ॥९०॥
योद्धाको गुणलाइ शल्य ! स्वगुणी * मानीसले जान्दछन् ।
सक्तैनन् गुण जान्न मूर्ख तिमिझैं * शेखी गरी बोल्दछन् ॥
गर्छौ व्यर्थ बढ़ाइँ शत्रुतिरको * हाम्रा हितैषी बनी ।
तिम्रो बात सुनी सबै बुझिसकें * छौ मित्र-द्रोही भनी ॥९१॥
हात्तीलाइ डराउनाकन कहीं * नाङ्लो ठटाएसरी ।
गर्दै बात छली मलाइ भयमा * पारौं भनी यो घरी ॥
आएको अहिले म छु समरमा * मार्छु कि मर्छु भनी ।
योद्धा हूँ भयभीत हुन्नँ रणमा * हे शल्य ! कैल्है पनि ॥९२
यस्ता बात सुनेर सूर्य-सुतको * श्री शल्य क्रोधित् भए ।
तिनूको तोड्न घमण्ड उत्तर तिखो * तीतर्फ हेर्दै दिए ॥
जस्तै गर्छ बनेर सिंह नकली * शेखी छुचो स्यालले ।
देख्यो सिंह भने लुते कुकुर झैं * त्यो भाग्छ जुन् चालले ॥
सुन्दैनौ जबसम्म उच्च स्वरको * श्री पार्थको गर्जन ।
गर्दै जाऊ तिमी पराक्रमहरू * आफ्नो स्वयं वर्णन ॥

देख्नेछौ तिमी पार्थलाइ रथमा * आईपुगेको जब ।
भाग्नेछौ रणबाट जीवन लिई * आफ्ना हितैषी सब ॥९४



कर्ण र शल्यको चर्काचर्की

त्यस्तै बात अनेक बाणसरिका * तिन्ले भनेको सुनी ।
बोले कर्ण रिसाइ मद्रपतिको * शेखी उताछु भनी ॥
पाएको गुरुबाट छ अघि ठुला * दिव्यास्त्र मैले जति ।
त्यसले सक्दछु गर्न शत्रुहरूको * संहार हे भूपति ! ॥९५॥
योद्धा अर्जुनको पराक्रम तथा * श्री कृष्णजीको छल ।
कस्ले सक्दछ बुझन राम्ररि सबै * मै जान्दछु केवल ॥
सोही कारण लड्नलाइ जब ती * मेरा अगाड़ी हुनन् ।
छोड्नेछु म अमोघ बाण रणमा * पक्का तिनी मारिनन् ॥९६
गर्छौ शासन भूपती भइ तिमी * हे मूर्ख ! जुन् देशको ।
त्यस्को वर्णन गर्दछु सुनिरहू * हो उक्ति त्यो विज्ञको ॥

हुन्छन् दुर्जन मद्रदेशभरिका * सम्पूर्ण नारी नर !
मेरो बात सुनेर स्वप्न नसके * मात्रै दिनू उत्तर ॥९७॥
वेश्या झैं युवतीहरू थरि-थरी * शृंगार पारीकन ।
निस्कन्छन् घरबाट केहि नभनी * त्यो निस्कने कारण ।
सामुन्ने पतिको पसेर घरमा * निर्धक्क गुण्डो नर ।
जाऊँ लौ हिंड-डुल्न सुन्दरि भनी * लैजान्छ पक्री कर ॥९८॥
पापी, मूर्ख, कृतघ्न स्त्रीहरु पनी * केही नमानी भय ।
जान्छन् जार पती लिएर कुलको * सद्धर्म पार्छन् क्षय ॥
भक्ष्याभक्ष्य कुनै विचार नगरी * चोखो र जूठो पनि ।
खाई भात पिएर मद्य पयमा * डुल्छन् नटी झैं बनी ॥९९
नारी औ नर छन् सबै तरहले * जुन् देशका निन्दित ।
त्यस्तो देशमहाँ बनी नरपती * हुन्छौ तिमी हर्षित ॥
जन्मेका यहि देशमा तिमि पनी * स्त्रीबाट हौ दुर्जन !
गर्दैछौ अहिले घमण्ड म ठुलो * भन्दै त्यसै कारण ॥१००
बोल्यौ केहि कुहा बढेर तिमिले * मेरो अगाड़ी भने ।
मार्नेछु तिमिलाइ नै म पहिले * छौ व्यर्थमा मारिने ॥
आफ्नू प्राणसमान देशभरिको * निन्दा गरेको सुनी ।
लागे भन्न नरेश शल्य रिसले * आगोसरीका बनी ॥१॥
पापी, धार्मिक, नीच उच्च कुलका * ज्ञानी तथा दुर्जन ।
छैनन् कुन् पुर, देशमा जनहरू * हे कर्ण योद्धा ! भन ॥
योद्धा, सत्य-प्रतिज्ञ, धार्मिक, गुणी * दानी म हूँ भूपति !
निन्दा यो तिमिले गरेर अहिले * के हुन्छ मेरो खति ! ॥२
मार्छु जो तिमि भन्दछौ रिस गरी * कुन् दोष देखीकन ।
सक्छौ के सहजै मलाइ रणमा * हे नीच ! मारीलिन ? ॥

मार्नें शक्ति भए उपस्थित हुँदा * संग्राममा अर्जुन ।
देखाऊ तिमिले भए जति सबै * चातुर्य हे दुर्जन ॥३॥
भन्छु एक कथा यसै विषयको * यौटा म ऐले सुन ।
यौटा काग रहेछ कर्ण तिमि झैं * धेरै हुने दुर्गुण ॥
पाल्यो त्यसकन वैश्यले थरि-थरी * मीठो दिई भोजन ।
पक्षी उड्दछ को म झैं अरु भनी * शेखी भयो त्यसकन ॥४॥
थाल्यो उड्न यता-उता घरि-घरी * त्यो काग गम्कीकन ।
आयो पर्ण प्रसिद्ध हंस त्यहिं नै * संयोगले कवै दिन ॥
उड्ने कौशल कागले थरि-थरी * चौतर्फ देखाउँथ्यो ।
चाला उद्धत पर्णले सकल त्यो * देखेर सोधीलियो ॥५॥



शल्यद्वारा काक एवं हंसको उदाहरण

सक्छौ उड्न तिमी कती दिन सखे ! * थाक्ते नथाकीकन ।
जानेको छ कती प्रकार तिमिले * उड्ने सबै त्यो भन ॥
हे राधासुत ! हंसको सुनि कुरा * हाँस्तै भन्यो कागले ।
सोध्यौ पर्ण ! मलाइ आज तिमिले * यो बात कुन हेतुले ? ॥६

सक्छु उड्न सखे ! अवाधगतिले * थाक्तीनँ कैह्ले पनि ।
जानीलेउ मलाइ पक्षिहरुमा * हो काग ठुलो भनी ॥
मैले जान्दछु उड्नको सय विधी * सम्पूर्ण त्यस्को क्रम ।
पक्षी छौ तिमी जङ्गली शहरमा * बस्ने म हूँ उत्तम ॥७॥
सोही कारण गर्व गर्नु तिमिले * व्यर्थै भनी ठान्दछु ।
सक्तैनौ तिमि उड्न मित्र ! म जती * भन्ने कुरा जान्दछु ॥
बोल्यो पूर्ण कुरा सुनेर मुखमा * हेर्दै रिसाए पनि ।
हामी जाँच गरौं उडेर बलको * आऊ अहीले भनी ॥८॥
यस्तो बात गरेर हंस पहिले * बिस्तार उड्दो भयो ।
निक्कै वेग बढाई काग सहसा * उड्दै पछाड़ी गयो ॥
उड्थ्यो हंस फिंजाइ पङ्ख शरभैं * योटै सफा चालले ।
आफ्नू कौशल उड्नको थरि-थरि * देखाउँथ्यो कागले ॥९
लागे उड्न दुबै निकै पर पुगी * ती सिन्धुमाथी जब ।
लाग्यो गर्न विचार काग मनमा * पक्का म मर्छु अब ॥
भूमीमा र तया-उती घरि-घरी * विश्राम गर्थ्यो तर ।
पानीमाथि थिएन आश्रय कुनै * विश्रामको खातिर १०
केही बेर उडेर घोर जलमा * त्यो कर्ण, थाकी गिऱ्यो ।
बोकी त्यस्कन हंसले सहजमा * उद्धार त्यस्को गऱ्यो
जस्तै खाइ ति वैश्यको घरमहाँ * जूठो मिठो भोजन ।
गर्थ्यो काग घमण्ड खूब मनमा * आफैं ठुलो भैकन ॥११
त्यस्तै कौरवका भएर भतुवा * आफैं मपाइँ बनी ।
योद्धा पार्थ र कृष्णलाइ तिमिले * हो मार्न खोज्नू पनी ॥
आफूलाई विचार कागसरिको * छन् हंस झैं अर्जुन ।
डट्नेछौ जब सिन्धु-रूप रणमा * आफ्नू परीक्षा दिन ॥१२

देख्नेछन् सबले पराक्रम त्यहाँ * तिम्रो भएको जति ।
मार्छौं के अरुलाइ मर्नु तिमिले * नै पर्छ हे दुर्मति !
बिर्झने बात अनेक शल्य नृपले * भन्दै गएको सुनी ।
लागे भन्न रिसाइ दुर्वचन झन * ती कर्ण आगो बनी ॥१३
मेरो शक्ति तथा पराक्रमहरू * जान्दै नजानीकन ।
गर्दै जाउ तिमी विपक्षतिरको * विक्षिप्त झैं वर्णन ॥
बाँच्तैनन तर आजको समरमा * ती पाण्डुका नन्दन ।
पापी, नीच, छली तिमीसरि अरू * होवैन क्वै दुर्जन ॥१४॥
जस्तै अर्जुन जान्दछन् समरको * नीती तथा कौशल ।
तीभन्दा पनि क्यै बढी सब कुरा * जान्ने म छु केवल ॥
बर्ता यै रितको प्रलाप तिनिले * गर्दै गएथे जब ।
बोले शल्य गरी घमण्ड तिमिले * हो व्यर्थ बोल्नू अब ॥१५॥
सारा कौरवलाइ चित्ररथले * बाँधी लगेका घरी ।
देखायौ पुरुषार्थ जुन, सब जना * त्यो जान्दछन् राम्ररी ॥
अर्कोपल्ट विराटको नगरमा * गाई हरेको घरी ।
जित्ने अर्जुनलाई वीर तिमि छौ * एक्लै लड़ाइँ गरी ॥१६
जो संग्राम अनेक वीरहरुको * चल्दैछ संहारक ।
गर्छौ बात बढेर जुन् समरको * ऐले बनी नायक ॥
घेरैपल्ट जित्यौ यहाँ पनि लड़ी * श्री पार्थका साथमा ।
को सक्ला तिमिलाइ जित्न यसरी * मिथ्या कुरा बोल्नमा १७
राधाका सुत कर्णलाइ त्यसरी * छेड़ेर वाक्-बाणले ।
जो उत्साह थियो सबै हरिलिए * तत्काल श्री शल्यले ॥
लागे हाँक्न बढाइ झट्ट रथ ती * केही नबोली जब ।
थाले भन्न डराई कर्ण मनमा * शङ्का उठेका सब ॥१८

मेरो कुरा सुनि तिमी दुख क्यै नमान ।
श्री भीष्म, द्रोण दुइ वीर थिए प्रधान ॥
तिन्ले पनी नसकि अर्जुनलाइ मार्न ।
आफै पर्‍यो शमरमा तन त्याग गर्न ॥१९॥
देखेर वीर दुइको गति शल्य दाई !
शंकित छु पार्थसंग आज म लड्नलाई ॥
भन्नूभयो मकन अस्त्र दिई गुरूले ।
विद्या छलीकन लियौ जति यो तिमीले ॥२०॥
वैरीहरू सब जिती यश फैलिएला ।
यो मृत्युको बखतमा सब बिर्सिएला ॥
सेवा सुपात्र जनको गरी दान दिन्थें ।
अभ्यास शस्त्रहरूको म गरीरहन्थें ॥२१॥
अज्ञानमा शर गईकन गाईलाई ।
लागेर गो-वध भयो सुन शल्य दाई ॥
तिन्का सुरक्षक थिए द्विज विप्र एक ।
गाई म दिन्छु द्विजलाई भनें अनेक ॥२२॥
मेरो कुरा नसुनि ब्राह्मण झन् रिसाए ।
दिन्छु म श्राप भनि हात दुवै उठाए ॥
हे कर्ण ! जुन् समरमा भय प्राप्त होला ।
पांग्रा गड़ी पृथिविमा रथ भासिएला ॥२३॥
दिव्यास्त्र वा अरु पनी सब बिर्सिएला ।
आयो भनी बुझिलिए तब काल-वेला ॥
त्यै हेतु हो कि किन हो सब अस्त्र-शस्त्र ।
निस्तेज छन् अधिक छु मनमा म त्रस्त ॥२४॥

त्यागे भीष्म र द्रोणले समरमा * जुन् त्चालले जीवन ।
मर्छु की म पनी भनेर भयले * आत्तिन्छ मेरो मन ॥
मेरो मत्यु भयो भने समरमा * छन् भूप औ सैन्य जो ।
मार्छन् अर्जुनले सबै, विजयको * आशा भएको गयो ॥२५
जोड़ी अर्जुनको रहेन मपछी * संसारमा क्वै पनि ।
चिन्ता लाग्छ ठुलो सुयोधन दुखी * हुन्छन् कि साह्रै भनी ॥
यस्तो बात सुनेर सूर्य-सुतको * केही नमानी डर ।
शेखी बल्ल टुट्यो भनीकन दिए * श्री शल्यले उत्तर ।।२६॥
दैवाधीन छ मर्नु बाँच्नु सबको * भन्ने विचारीकन ।
गर्छौ तर्क-वितर्क व्यर्थ मनमा * हे कर्ण ! योद्धा किन ?
मार्नेछु सब शत्रुलाइ रणमा * मौका परेको घरी ।
जो इच्छा कुरुराजको छ सब त्यो * छाड्नेछु पूरा गरी ॥२७॥

दुवै पक्षको घोर युद्ध र कर्णको पराक्रम :—

राजन् ! कर्ण र शल्य भूपति कुरा * गर्थें रिसाई यता ।
आयो पाण्डवको बढेर नजिकै * गर्जेर सेना उता ॥
त्यो देखीकन शल्यले रथ छिटै * हाँके ठुलो वेगले ।
थाले गर्न प्रहार सैन्य सब ती * मार्छु भनी कर्णले ॥२८॥
पैह्ले वीरहरू 'प्रभद्रक' जती * तिनका अगाड़ी परे ।
चाँडै नै यमराजको नगरमा * जाने तयारी गरे ॥
रोके वीर गई प्रधान सबमा * पच्चीस पाञ्चालका ।
काटे गर्दन कर्णले समरमा * प्रत्येक ती वीरका ॥२९॥
योद्धा चेदि नरेशका जति परे * श्री कर्णका सामुमा ।
कोही एक बचेन जीवन त्यजी * सारा गए स्वर्गमा ॥

सेना बिन्दु र शूरसेन नृपती * श्री चित्रसेन भानुले ।
रोके वेग डटेर सूर्य-सुतको * अत्यन्त उत्साहले ॥३०॥
राधाका सुत कर्णले सहजमा * तिन्लाइ मारीकन ।
मारी वीर अनेक उच्च स्वरले * थाले त्यहाँ गर्जन ॥
धृष्टद्युम्न र सात्यकीसँग गई * श्री द्रौपदीका सुत ।
चेदी, कैकय औ वृकोदर पुगी * योद्धा शिखण्डीसित ३१
धेरै वीर पुगी 'प्रभद्रक' तथा * पाञ्चालका मत्स्यका ।
काटे बाणहरू मिलेर सबले * ती तेजिला कर्णका ॥
वर्षामा जलको पहाड़हरूमा * धारा गिरे झैं गरी ।
एकै पल्ट गरे प्रहार सबले * मार्ने इरादा धरी ॥३२॥
भानूसेन, सुखेन वीर दुइ जो * छोरा थिए कर्णका ।
पारे घायल भीमलाइ तिनिले * वर्षा गरी बाणका ॥
तिन्को चोट खपी वृकोदरजिले * हाने गदा बेसरी ।
लागी खप्परमा गिरि पृथिविमा * जाँदा भए ती मरी ॥३३
साराको खपि चोट सूर्य-सुतले * हानेर तीखा शर ।
गर्जे ती सबलाइ घायल गरी * चर्को निकाली स्वर ॥
कैह्ले बाण निकाल्दथे र कहिले * संधान गर्थे तिनी ।
छाड्थे बाणहरू अनेक कब त्यो * देख्दैनथे क्वै पनि ॥३४
काटिन्थ्यो शिर वीरको समरमा * ती बाण लागी जब ।
लड्ने कौशल श्रेष्ठ सूर्य-सुतको * प्रत्यक्ष देख्थे तब ॥
गर्थें बाण प्रहार एक यदि क्वै * श्री कर्णको देहमा ।
मार्थें त्यस्कन बाण तेब्बर छिटै * छाडेर संग्राममा ॥३५॥
तिन्को सामु अड़ेर वीरहरू क्वै * लड्नै नसक्ने भए ।
चन्देरी र निषाद औ द्रविड़का * सेना सबै मारिए ॥

काटेका रुख झैं विपक्षतिरका * सेना गिरेथे जब ।
बोले झट्ट पुगी युधिष्ठिर त्यहाँ * हे कर्ण ! माछु अब ॥३६
हाँसे कर्ण सुनेर धर्म-सुतको * त्यो हाँक, हेलाँ गरी ।
गर्छु स्वागत बाणले हजुरको * भन्दा भए बेसरी ॥
पाँचोटा शर झट्ट सूर्य-सुतले * छाड़े जसै उज्ज्वल ।
लागी देहभरी युधिष्ठिर भए * ती बाणले घायल ॥२७
योटा बाण झिकी प्रहार शिरमा * ताकेर तिन्ले गरे ।
लाग्यो बाण र चोट खप्न नसकी * श्री कर्ण मूर्छा परे ॥
तिन्लाई नृप शल्यले पर लगे * विश्रामको खातिर ।
लागे कौरव सैन्य भाग्न डरले * तत्काल चारैतिर ॥३८
आए चेत फिरेपछी समरमा * श्री कर्ण फर्कीकन ।
ताकी धर्म-कुमारलाइ शरको * गर्दा भए वर्षण ॥
मारी अश्व र सारथी, कवच जो * पैह्री रहेका थिए ।
भाँची त्यस्कन बेसरी तनभरी * घाऊ गराईदिए ॥३९॥
भागे धर्म-कुमार टिक्न नसकी * संग्राम त्यागीकन ।
दौड़ाए रथ कर्णले पछि-पछी * तिन्लाइ पक्री लिन ॥
रोके शल्य नरेशले नगर यो * दुष्कर्म भन्दै जब ।
योद्धा भीम पुगी अघिल्तिर भने * माछु तँलाई अब ॥४०
जो जो अस्त्रहरू प्रहार रिसले * गर्दै गए भीमले ।
हाँस्तै बाणहरू चलाइ सहजै * काटी दिए कर्णले ॥
मारी अश्व र सारथी, रथ ध्वजा * धूलो गराईदिए ।
योद्धा भीम रिसाइ उत्तम गदा * तत्काल छोड्दा भए॥४१
बज्र्यो श्रेष्ठ गदा गएर जब त्यो * श्री कर्णको देहमा ।
लाग्यो चोट ठुलो र खप्न नसकी * मूर्छा परे युद्धमा ॥

देखेथे जब श्री सुयोधनजिले * संग्रामको त्यो स्थिति ।
लागे भन्न कराइ उच्च स्वरले * हे वीर ! सेनापति ॥४२॥
जाओ भाइहरू, वृकोदर छ जो * संहारमा तत्पर ।
रोक्नू वेग सबै मिलेर रणमा * बर्साइ आफ्ना शर ॥
दाज्यूको सुनि यो हुकुं, जति त्यहाँ * सेना थिए ती लिए ।
बत्तीका पुतलीसरी हजुरका * छोराहरू दौड़िए ॥४३॥
आएका निज शत्रुलाइ नजिकै * देखे जसै भीमले ।
मारे ती सबलाइ एकक्षणमा * आफ्ना तिखा बाणले ॥
आयो होश र कर्ण फेरि रणमा * आए रिसाईकन ।
बर्साए शर बेसरी शुरु गरे * चर्को गरी गर्जन ॥४४॥
मारी अश्व र सारथी, रथ, ध्वजा * धूलो गरे कर्णले ।
उफ्री झट्ट गदा लिई रथ त्यजी * श्री भीम उत्साहले ॥
घोड़ामा, रथमा थिए गजपती * सेना प्रतापी जति ।
पारे ध्वस्त, रिसाइ भीम सहसा * तिन्लाइ हे भूपति ॥४५॥
त्यो देखेर रिसाइ वीर शकुनी * सेना लिई अश्वको ।
बर्साए हतियार, वेग बलियो * रोकेर श्री भीमको ॥
मारेथे अघि दैत्य-सैन्य जसरी * हे भूपति ! इन्द्रले ।
योद्धा भीम रिसाइ सैन्य-हयको * मारे त्यही चालले ॥४६॥
भागेथे शकुनी र कर्ण रणमा * आए अगाड़ी सरी ।
रोके सात्यकिले अघिल्तिर गई * तिनलाइ सोही घरी ॥
द्रौणी मद्दत गर्न सूर्य-सुतको * तत्काल साम्ने गए ।
घोड़ा, सारथि वीर सात्यकिजिको * मारी गिराईदिए ॥४७॥
पौंचे मद्दतमा युधिष्ठिर स्वयं * श्री सात्यकीको जब ।
द्रौणीका शरले ति घायल भई * भागे डराई तब ॥

त्यो देखी सहदेव औ नकुलजी * आए अगाड़ी सरी ।
श्री दुर्योधनले गएर बीचमै * रोकी दिए त्यो घरी ॥४८
धृष्टद्युम्न गई अनेक शरको * वर्षा गरी बेसरी ।
पारे व्याकुल श्री सुयोधनजिको * सम्पूर्ण शेखी हरी ॥
तिनूको मद्दत गर्न सूर्य-सुतले * इच्छा गरेथे तर ।
रोकेथे तिनिलाइ पाण्डु-सुतका * सेना गई दुर्धर ॥४९॥
ती सेनाहरुको प्रहार बिचमै * काटेर श्री कर्णले ।
मारेथे सबलाइ एक क्षणमै * आफ्ना तिखा बाणले ॥
त्यो वेला जति वीर, सैनिक परे * श्री कर्णको क्रोधमा ।
कोही बाँच्न सकेन जीवन त्यजी * जाँदा भए स्वर्गमा ॥५०
भीष्म, द्रोण प्रधान वीर दुइको * भन्दा बढी कर्णले ।
देखाए रणमा पराक्रम ठुलो * उत्साहले धैर्यले ॥
हाहाकार गरेर पाण्डु-सुतका * भागे सबै सैनिक ।
हुन्थे कौरव सैन्य हर्षित मिली * श्री कर्ण झैं नायक ॥५१॥

राजन् ! मरी अधिक सैनिक वीर त्याहाँ ।
खोलो बग्यो रगतको रणभूमिमाहाँ ॥
देखेर वीरहरुले स्थिति हर्ष मान्थे ।
त्यो हेर्न शक्ति नपुगी कति भीरु भाग्थे ॥५२॥
हात्ती र अश्व, रथ पैदल वीरका जो ।
बाहू, र पाउ, शिरका टुकुरा थिए त्यो ॥
बग्दा त्यही रगत रूप ठुलो नदीमा ।
पार्थैं ति भान जलजन्तुसमान त्यसमा ॥५३॥

अर्जुनद्वारा संसप्तक सेनाको संहार र द्रौणीको प्रहारबाट धृष्टद्युम्नको रक्षा—

राजन् ! वीर थिए प्रधान नृप जो * संसप्तका सैन्यमा ।
मार्थे पार्थ रिसाइ बाणहरुले * तिनूलाइ संग्राममा ॥

एकै पल्ट मिली प्रहार सबले * शस्त्रास्त्र आफ्ना गरी ।
पक्रे अर्जुनको गई रथ छिटै * घेरा दिई राम्ररी ॥५४
देख्नूभो जब कृष्णले विजयको * त्यस्तो नराम्रो स्थिति ।
ओर्ली त्यो रथबाट चाबुक लिंदै * दौड़ेर हे भूपति !
चारै तर्फ घुमेर क्रोधित भई * ठोक्नूभएथ्यो जब ।
लागे भाग्न डराइ सैनिकहरू * संसप्तका ती सब ॥५५
बर्साए हरिमाथि क्यैं पर रही * शस्त्रास्त्र ती वीरले ।
आफ्ना रक्षक कृष्णको स्थिति जसै* देख्दा खए पार्थले ॥
छाड़े ती सबलाइ मार्दछु भनी * नागास्त्र मन्त्रीकन ।
त्यस्‌ले मोह भए कती र कतिले * त्याग्नुपर्‍यो जीवन ॥५६
लागे भन्न डरी कती त्यहिं मरे * भाग्दा ढली कुल्चिई ।
राजन् ! वीर दुवै बसेर रथमा * शान्ती सुविस्ता भई ॥
गर्थे कौरव सिंहनाद रणमा * चर्को निकाली स्वर ।
सोधे अर्जुनले सशंकित भई * हे कृष्ण योगेश्वर ॥५७
गर्जन्छन् सब सैन्य शत्रुतिका * ऐल्हे खुशीले किन ?
हाम्रा सैनिक छन् मलीन र दुखी * हे नाथ ! कुन् कारण !
चिन्तित् छु मनमा म यो विषयमा * जानौं भनी केशव !
जाऊँ हामि त्यहाँ, लगाम हयको * फर्काउनूहोस् अब ॥५८
बिन्ती अर्जुनको सुनेर हरिले * फर्काउनूभो रथ ।
हिंड्दा वायुसरी उडीकन धुलो * ढाक्यो दिशा औ पथ ॥
आए रोक्न भनेर सैन्य शकका * काम्बोजका म्लेच्छका ।
साम्ने अर्जुनका परे जति मरे * सेनाहरू शत्रुका ॥५९
आफ्ना फौजमहाँ सखा, प्रिय दुवै * तत्काल पुग्दा भए ।
भेटी धर्म-कुमारलाइ मनको * सन्देह मेटीलिए ॥

धृष्टद्युम्न र कर्ण सम्मुख भई * लड्दै थिए बेसरी।
आए मद्दत गर्न सैनिक लिई * श्रीसात्यकी त्यै घरी ॥६०
द्रौणी वीर रिसाइ सूर्य-सुतको * साहायको खातिर।
आई पाण्डव सैन्यका उपरमा * वर्षा गराए शर ॥
धृष्टद्युम्नजिलाइ द्रोणसुतले * देखे अगाडी जब।
लागे भन्न रिसाइ नीच कपटी * मार्छु तँलाई अब ॥६१
हत्या ब्राह्मणको गरी अझ पनी * पापी तँ छस् जीवित।
वेला आइपुग्यो तँ आज रणमा * मर्ने भइस् निश्चित ॥
बर्साए शर बेसरी थरि-थरी * दुर्वाच्य बोलीकन।
मारी अश्व र सारथी रथ ध्वजा * भाँची, गरे गर्जन ॥६२॥
देख्नूभो हरिले जसै द्रुपदका * सत्पुत्रको दुःस्थिति।
रोक्नूभो रथ बीचमा लगि छिटै * त्यो युद्ध हे भूपति!
धृष्टद्युम्न हिंडे मलाइ हरिले * मौका दिनूभो भनी।
बर्साए हतियार द्रोण-सुतले * तिनूलाइ भागे पनी॥६३॥
ढाके पार्थ र कृष्णलाइ शरको * वर्षा गरी बेसरी।
घाऊ पारिदिए शरीरभरिमा * साह्रै नराम्रो गरी ॥
खप्छन् पर्वत वेग घोर जलको * सम्पूर्ण जुन् चाल्ले।
त्यस्तै चोट खपेर द्रोण-सुतको * सर्वाङ्गमा पार्थले ॥६४॥
छाडे मन्त्रित 'शक्ति' एक तिनले * साह्रै रिसाई जब।
लाग्यो शक्ति गई जसै हृदयमा * ठाने 'म मर्छु अब' ॥
भागे त्यो रणबाट टिक्न नसकी * द्रौणी डराईकन।
जो संसप्त थिए पुगे त्यहीं छिटै * श्रीकृष्ण औ अर्जुन॥६५
पारे घायल कर्णलाइ रणमा * योद्धा शिखण्डी गई।
थाले गर्जन ती कठोर स्वरले * उन्मत्त जस्तै भई ॥

तिन्को चोट खपेर सूर्य-सुतले * छाड़ी अठासी शर ।
मारी अश्व र सारथी, रथ, धनू * भाँचे ध्वजा, चामर ॥६६॥
यौटा शक्ति गरे प्रहार तिनिले * श्री कर्णलाई तर ।
काटे लाग्न नपाइ अङ्ग बिचमै * तिन्ले चलाई शर ॥
त्यै माथी सय बाण सूर्य-सुतले * तत्काल थप्ता भए ।
त्यस्को चोट कठोर खप्न नसकी * भागी शिखण्डी गए ॥६७॥
थाले मार्न रिसाइ पाण्डु-सुतका * सेनाहरू कर्णले ।
तिन्का साथ सकेन लड्न रणमा * कोही पनी धैर्यले ॥
माद्रीका सहदेव औ नकुल जो * छोरा प्रतापी थिए ।
श्री दुर्योधनको अघिल्तिर डटी * ती वीर लड्दा भए ॥६८
धृष्टद्युम्न पुगेर मद्दत दिई * थाले जसै गर्जन ।
श्री दुर्योधनको सहायक भए * तत्काल दुःशासन ॥
सेना जो गजको सुयोधनजिको * रक्षार्थ लड्दै थिए ।
लागे भीम गदा बजार्न रिसले * धेरैजसो मारिए ॥६९॥

युधिष्ठिर र दुर्योधनको भीम र कर्णले सहायता गर्नु :—

लड्थे अर्जुन वीर हे नरपते ! * संसप्त सेनातिर ।
मार्थे पाण्डव-सैन्य कर्ण रणमा * छाड़ेर तीखा शर ॥
आफ्ना सैनिकलाइ धर्म-सुतले * देखे मरेका जब ।
आए लड्न भनेर, सैनिक हिंडे * तिन्का पछाड़ी सब ॥७०
श्री दुर्योधनले ससैनिक गई * तिन्लाइ रोकीदिए ।
बर्साई हतियार देहभरिमा * घाऊ गराईदिए ॥
तिन्को चोट खपी सुयोधनजिले * हानी तिखा बाणले ।
पारी घायल धर्मराजकन ती * गर्जे ठुलो हर्षले ७१॥

त्यै वेला सहदेव वीर सहसा * रक्षार्थ पुग्दा भए ।
श्री दुर्योधनलाइ 'तोमर' ठुलो * ताकेर छाड़ीदिए ॥
लागेथ्यो जब त्यो गई रगतको * धारा बग्यो बेसरी ।
त्यो देखीकन सूर्य-पुत्र सहसा * आएर सोही घरी ॥७२॥
योद्धा पाण्डवतर्फका जति थिए * साम्ने डटेका त्यहाँ ।
पारे व्याकुल ती सबैकन ठुला * दिव्यास्त्रले छिन्नमहाँ ॥
मारेथे जब पृष्ठरक्षकहरू * श्री धर्मका पुत्रको ।
घाऊ पारिदिए शरीरभरिमा * वर्षा गरी बाणको ॥७३॥
भागे भाइ दुवै लिई शिविरमा * संग्राम त्यागी जब ।
पर्को झट्ट भनी मतो गरि पछी * लागे सबै कौरव ॥
भाग्थे पाण्डव तीन भाइ डरले * संग्राम त्यागी तर ।
छाड्थे शस्त्रहरू लखेटि रिसले * ती कर्ण तीखा शर ॥७४॥
एक्लै भीम अजेय सैन्य गजको * संहार गर्दै थिए ।
देखी धर्म-कुमारको स्थिति यता * ती वेगले दौड़िए ॥
आए रोक्न भनेर वीर कुरुका * सेना र योद्धा तर ।
मारे ती सबलाइ एक क्षणमा * छाड़ी अनेकौं शर ॥७५॥
थाले लड्न दुवै गजेन्द्रसरिका * श्री भीम दुर्योधन ।
खाई चोटहरू सुयोधन निकै * लागे त्यहाँ आत्तिन ॥
देखी साहस भीमको नरपते ! * श्री सूर्यको पुत्रले ।
रक्षा गर्न भनी सुयोधनकहाँ * पुग्दा भए वेगले ॥७६॥
बर्साए हतियार क्रोधित भई * श्री भीममाथी जब ।
योद्धा भीम रिसाइ बाण दशले * काटीदिए ती सब ॥
तीखा बाण अनेक सूर्य-सुतले * पानी परे झैं छरे ।
सेना पाण्डवतर्फका नगिचमा * जो-जो थिए ती मरे ॥७७

लागे भाग्न डराइ सैनिकहरू * सम्पूर्ण बाँचे जति ।
थाले गर्जन वीर कौरवहरू * आनन्द मानी अति ॥
चर्को शब्द र सिंहनाद जब त्यो * चौतर्फमा फैलियो ।
चिन्ता बेसरि चित्तमा विजयको * त्यस्ले बढाईदियो ॥७८॥
छाड़ो लड्न विषाद-युक्त स्वरमा * बिन्ती गरे हे हरि !
गर्जन्छन् किन सैन्य आज कुरुका * संग्राममा बेसरी ॥
हाम्रो केहि खती भयो कि अहिले * भन्ने विचारीकन ।
हे योगेश्वर, कृष्ण, हे प्रिय सखा ! * शंकित् छ मेरो मन ॥७९
योद्धा धर्म-कुमारको रथ-ध्वजा * केही पनी देख्दिनँ ।
पक्का कौरवले गरे छल कुनै * पापी छ दुर्योधन ॥
हाम्रा सैनिक छन् जहाँ रथ त्यहीं * लैजानुहोस केशव !
मारौंला म पछाड़ि आइ बरू यी * संसप्त सेना सब ॥८०॥
बिन्ती अर्जुनको सुनेर रथ त्यो * तत्काल गोविन्दले ।
आफ्ना सैनिकतर्फ हाँकिदिनुभो * हावासरी वेगले ॥
देखी सैनिकको परिस्थिति उता * गर्जेर श्री भीमले ।
मार्थे वीर अनेक शत्रुतिरका * उत्साहले धैर्यले ॥८१॥
देखाईकन पार्थलाई हरिले * त्यो शूरता भीमको ।
चिन्ता गर्नुभयो निवारण सबै * प्यारा सखा पार्थको ॥
सोधे भीमकहाँ पुगी विजयले * देख्दीनँ मैले यहाँ ।
दाज्यू धर्म-कुमारलाइ अहिले * पाल्नूभयो लौ कहाँ ॥८२
बोले अर्जुनको कुरा सुनिसकी * देखी निकै व्याकुल ।
पाल्नूभो अधिराज सूर्य-सुतले * पारीदिंदा घायल ॥
लागी वाण अनेक देह जब भो * संग्राममा जर्जर ।
जानूभो डरले फिरी शिविरमा * विश्रामको खातिर ॥८३

थाले रिसाइ गर्जन पार्थ वीर।
विन्ती गरे प्रिय सखासँग उत्निखेर॥
हे कृष्ण ! कर्णकन मार्दछु आज मैले।
चाँड़ो पुऱ्याउनुहवस् रथ यो हजुरैं ॥८४॥

यस्तो बात सुनी बुझाउनुभयो * तिन्लाइ श्री कृष्णले।
गर्दछौ अनभिज्ञ झैं तिमि कुरा * हे मित्र ! कुन्न हेतुले॥
दाज्यूको पहिले बुझी कुशलको * सम्चार आई यहाँ।
मानू त्यो रवि-पुत्रलाई तिमिले * उम्केर जाला कहाँ ॥८५

राजन्‌ ! अर्जुनलाइ त्यो किसिमले * सम्झाइ श्री कृष्णले।
लाग्नूभो रथलाइ हाँक्न सहसा * हावासरी वेगले॥
बोले अर्जुन भीमलाइ रणमा * रक्षा सबैको गरी।
लड्नूहोस् अहिले म आउँछु यहाँ * अत्यन्त चाँड़ै फिरी ॥८६

कर्णले भार्गवास्त्रको प्रयोग गर्नु, अर्जुनले आफ्नू निन्दा सुनी दाज्यूलाई मार्न तत्पर हुनुः—

श्री कृष्णार्जुन फर्किए जब यता * सल्लाह यस्तो गरी।
थाले गर्न प्रहार भीम रणमा * शस्त्रास्त्र नाना थरी॥
लागे कौरव सैन्य भाग्न डरले * संग्राम त्यागी जब।
बोले कर्ण दिएर साहस ठुलो * पर्दैन भाग्नू अब ॥८७

मन्त्री भार्गव अस्त्र योगबलले * तत्काल छाड़ीदिए।
राजन्‌ ! बाण असंख्य सूर्यसरिका * त्यसबाट पैदा भए॥
सेना उत्तम पाण्डु-पुत्रहरुका * पाञ्चालका जो थिए।
लागी भार्गव अस्त्रका शरहरू * धेरै थरी मारिए ॥८८॥

देखाए हरिलाइ सूर्य-सुतको * त्यो क्रूरता पार्थले।
सम्झाईकन पार्थलाइ पथमै * भन्नूभयो कृष्णले॥

थाक्नेछन् जब कर्ण यै किसिमले * हे मित्र ! संग्राममा ।
गनू युद्ध फिरेर आइ तिमिले * ती कर्णका साथमा ॥८९॥
गर्दै बात पुगे युधिष्ठिरकहाँ * श्री कृष्ण औ अर्जुन ।
ढोगे ती दुइले प्रसन्न मनले * पायौं भनी दर्शन ॥
देखे धर्म-कुमारले जब दुवै * लाई कुवेलामहाँ ।
ठाने निश्चय कर्णको बध गरी * आए खुशीले यहाँ ॥९०॥
सोधे अर्जुनलाइ मध्य दिनमै * हे भाइ ! आयौ किन ?
मार्‍यौ दुर्जन कर्णलाइ कसरी * सम्वाद त्यस्को भन ॥
योद्धा कर्ण थिए नजित्न सकिने * संग्राममा तैपनि ।
मार्‍यौ के गरि त्यो बताउ मनमा *सन्तोष होला सुनी ॥९१॥
जस्तो आज गरे पराक्रम ठुलो * संग्राममा कर्णले ।
त्यस्तो भीष्म र द्रोणले न त गरे * अर्को कुनै वीरले ॥
सक्ने जित्न सुरेन्द्रलाइ पनि ती * साह्रै प्रतापी थिए ।
तिम्रो सामु परेर आज कसरी * ती युद्धमा मारिए ॥९२॥
हाम्रा साथ विरोधको बखतमा * मद्दत् लिनाखातिर ।
राखेका धृतराष्ट्रले महलमा * ठूलो दिई आदर ॥
त्यस्ता वीर प्रधानलाइ तिमीले * मारीदिंदा अर्जुन !
हाम्रो कण्टक मारियो भनि ठुलो * हर्षित् छ मेरो मन ॥९३॥
दाज्यूको सुनि प्रश्न लज्जित हुँदै * न्यूहाइ आफ्नो शिर ।
जोरी हात दुवै धनञ्जयजिले * त्यस्को दिए उत्तर ॥
फिर्नूभो रणबाट घायल भई * ती कर्णद्वारा भनी ।
आएँ भेट्न भनेर हे नरपते ! * सम्चार ऐहे सुनी ॥९४
मेरो युद्ध हुँदै थियो अति ठुलो * संसप्त सेनातिर ।
मार्नैछु गइ कर्णलाइ रणमा * मान्दीनँ मैले डर ॥

बोले धर्म-कुमार क्रोधित भई * बिन्ती सुनी पार्थको ।
खाई चोट अनेक शत्रुहरूका * संग्राममा कर्णको ॥९५।
आयौ भेट्न निहूँ गरेर डरले * भागेर त्यो कर्णको ।
गर्नू बात भएर वीर यसरी * धिक्कार हो आज यो ॥
यो गाण्डीव लिनू वृथा छ करमा * हो व्यर्थ बन्नू रथी ।
ठोक्को अक्षय यो लिनू, हरि हुनू * धिक्कार हो सारथी ! ॥९६
भाग्नू त्यो रणबाट आज डरले * धिक्कार हो अर्जुन !
तिम्रो यो व्यवहारदेखि बहुतै * दुःखी छ मेरो मन ॥
मैले सक्तिनँ लड्न कर्णसँग यो * पैहे भनेको भए ।
धेरै भूप, भएर आहुतिसरी * के आज मनैं थिए ?॥९७



अर्जुन र युधिष्ठिरको विवाद—श्रीकृष्णले शान्त गराउनु

चढ्नू अग्नि-प्रदत्त श्रेष्ठ रथ यो * धिक्कार हो पौरुष ।
हो धिक्कार तिमी कपीध्वज हुनू * धिक्कार तिम्रो यश ॥

त्यो धिक्कार सुनेर धर्म-सुतको * क्रोधित् भई अर्जुन ।
दाजूको वध गर्न तत्पर भए * तर्वार खैंचीकन ॥९८॥
देख्नूभो हरि परिस्थिति दुवै * भाईहरूको जब ।
पक्री अर्जुनको विशाल भुजमा * बोल्नूभयो केशव ॥
मार्दैछन् बलवान शत्रु नगिचै * श्री भीम गर्जीकन ।
खैंच्यौ यो तरवार शत्रु नगिच * कोही पनी देख्दिनँ ॥९९
तिम्रो को छ बताउ शत्रु अहिले * कस्लाइ मार्नाकन ।
खैंच्यौ यो तरवार क्रोधित भई * तत्काल हे अर्जुन !
यस्तो झोंक प्रताप धैर्य रणमा * देखाउनू पर्दछ ।
जाऊँ लौ हिंड़ युद्धमा, अझ ठुला * वैरीहरू मार्नुछ ॥२००॥
आयौ गर्न भनेर कार्य तिमी जो * पूरा भयो त्यो अब ।
त्यो आज्ञा हरिको सुनी विजयले * बिन्ती गरे-माधव !
जो धिक्कार दिनेछ गाण्डीव धनू- * लाई मलाई पनि ।
मैले त्यस्कन मार्नुपर्छ, छ प्रभो ! * आफ्नू प्रतिज्ञा भनी ॥१
सोही बात भने मलाइ अहिले * यी धर्मका पुत्रले ।
आफ्नू त्यो प्रण राख्न, गर्छु वधलौ * यिन्को म यै खड्गले ॥
आज्ञा गर्नुभयो कुरा सुनिसकी * श्री पार्थको कृष्णले ।
गर्छन् दुर्जन मात्र बात यसरी * भन्दैन सत्पात्रले ॥२॥
जस्ता धार्मिक शीलयुक्त र गुणी * छन् श्रेष्ठ यी भूपति ।
त्यस्तो को छ अरू बताउ तिमि नै * त्रैलोक्यमा सद्मति ॥
राजाको छ मनाइमा जति ठुलो * गम्भीरता गूढता ।
तिम्रो पुग्न सकेन बुझ्न सब त्यो * राम्रो गरी योग्यता ॥३
सक्तैनन् अरू वीर मार्न रणमा * ती कर्णलाई भनी ।
उत्तेजित तिमिलाइ पारिदिनुभो * यी भूपतीले पनी ॥

दाज्यूको वध गर्न तत्पर भयौ * सानू कुरामा पनी ।
ठान्छौ के तिमि यो कुकर्म मनले * धर्मै गरेको भनी ॥४॥
जस्ले ठान्दछ आफुलाइ ब्रतले * वा दानले धार्मिक ।
नाशी धर्म सबै ठुलो नरकमा * पर्नेछ नालायक ॥
धर्माधर्म नजानि व्यर्थ हठमा * चल्नेहरू छन् जति ।
पर्छन् कौशिक विप्र झैं नरकमा * हे मित्र ! ती दुर्मति ॥५
गर्छन् व्याध 'बलाक' झैं बुझि कुरा * जो धर्मको पालन ।
यो संसार–समुद्र गोखुरसरी * तर्छन् तिनै सज्जन ॥
यो आज्ञा हरिको सुनी विजयले * बिन्ती गरे सादर ।
मैले कार्य कुनै हिताहिता हुने * जान्दीनँ हे ईश्वर ! ॥६
को हुन् व्याध बलाक कौशिक थिए * कस्ता हठी ब्राह्मण ।
तिन्को गर्नुहवस् म सुन्दछु प्रभो ! * विस्तारले वर्णन ॥
मेरो हुन्छ गरेर कार्य अब के * निर्विघ्न पूरा प्रण ।
शिक्षा पाउँ म धर्मको हजुरकै * हूँ दास नारायण ! ॥७॥
यस्तो बिन्ति सुनेर श्री विजयको * भन्नूभयो कृष्णले ।
भन्छू व्याध-बलाकको सुन कथा * हे मित्र ! संक्षेपले ॥
बोल्ने सत्य बलाक नामक थिए * व्याधा कुनै कालमा ।
अर्काको उपकारमा रत रही * चल्थे साथ धर्ममा ॥८॥
मारी जन्तुहरू जहान सबको * आजीविका गर्दथे ।
जानी हिंसक बाघलाइ पनि ती * भेट्टाउँदा मार्दथे ॥
साना जन्पुहरू अनेक वनका * मार्ने हुँदा बाघले ।
रक्षा ती सबको भयो पछि तरे * ती व्याध त्यै धर्मले ॥९
साह्रै सूक्ष्म छ धर्मको गति सखे ! * गाह्रो छ जानी लिन ।
यौटा कौशिक नाम विज्ञ तपसी * कोही थिए ब्राह्मण ॥

बोल्थे सत्य सदा बसेर वनमा * गर्थे तपस्या तिनी ।
भन्थे ती द्विजलाइ मानिसहरू * हुन् सत्यवादी यिनी ॥१०
आएथे बटुवाहरू द्विज जहाँ * बस्थे तपस्या गरी ।
सन्ध्याकाल थियो, बसे रुखमनी * ती बास रात्री भरी ॥
खोज्दै ती बटुवाहरूकन पुगे * डाकू अनेकौं जब ।
लागे सोध्न पुगेर कौशिककहाँ * ती पान्थलाई सब ॥११
देख्यौ की बटुवाहरूकन यहाँ * ब्रह्मन् ! तिमीले भन ।
बोल्ने सत्य हुँदा, सबै भनिदिए * तिन्ले नढाँटीकन ।
डाकूले सब सम्पती पथिकको * पक्रेर खोसी लिए ।
लागी पाप त्यही मरी नरकमा * ती विप्र पर्दा भए ॥१२
सृष्टिका सब जीवको सुन सखे ! * हिंसा नगर्नै छ जो ।
ठूलो धार्मिक व्यक्ति यो पृथिविमा * हे पार्थ ! त्यै व्यक्ति हो ॥
सोधे अर्जुनले हुनेछ प्रण त्यो * पूरा यहाँ के गरी ?
आज्ञा गर्नुहवस् मलाइ सजिलो * शिक्षा कुनै हे हरि ॥१३॥
भन्नूभो हरिले अनादर गरी * श्री धर्मका पुत्रको ।
हे योद्धा ! प्रण पूर्ण पार तिमिले * पैह्ले गरेको छ जो ॥
कोही सज्जनको अनादर गरी * दुर्वाच्य बोल्नू पनि ।
मारे झैं हुन जान्छ निश्चय बुझे * हो वेदवाणी भनी ॥१४

अर्जुन स्वयं मर्न तयार हुनु र युधिष्ठिरको विषादपूर्ण उद्‌गार :—

त्यो आज्ञा हरिको सुनेर मनमा * संकोच लागे पनि ।
निन्दा धर्म-कुमारको गरिलिए * आज्ञा प्रभूको भनी ॥
आयौ त्यो रणबाट टिक्न नसकी * भागेर टाढा जब ।
गर्नू वाक्-शरको प्रहार यसरी * को मान्छ राम्रो अब ॥१५

आफू शूर बनेर गर्न तिमिले * निन्दा सुनी खासमा ।
तिम्रो कीर्ति हुँदैन वृद्धि कहिले * यो कार्यले लोकमा ॥
त्यायौं सम्पति जो प्रशस्त नृपती * चारै दिशाका जिती ।
हारी द्यूतमहाँ स्वयं गरिदियौ * हाम्रो ठूलो दुर्गति ॥१६॥
सोही द्यूतस्वरूप घोर रण यो * आयो अगाडी जब ।
खोज्छौ जित्न मलाइ सम्मुख गरी * ती बन्धुलाई अब ॥
गर्दैछन् अहिले पराक्रम ठुलो * जुन् युद्धमा भीमले ।
तिन्ले केहि भने सुहाउँछ बरू * सुन्छु म संतोषले ॥१७
आशा जीवनको त्यजेर रणमा * लड्छू सधैं तैपनी ।
दिन्छौ दोष मलाइ, को छ तिमि झैं * निर्लज्ज और बेगुनी ॥
लाग्यो भूपतिलाइ दुःख त्यसरी * निन्दा गरेको सुनी ।
खैंचे अर्जुनले तुरन्त अघि झैं * तर्वार फेरी पनि ॥१८॥
पक्री हात तुरुन्त श्री विजयको * भन्नूभयो कृष्णले ।
तान्यौ यो तरवार फेरि तिमिले * हे मित्र ! कुन् हेतुले ॥
त्यो आज्ञा हरिको सुनी विजयले * बिन्ती गरे सादर ।
जाहेरै छ हजूरलाइ प्रण जो * मेरो छ हे ईश्वर ! ॥१९
भ्राता धर्म-कुमारलाइ यसरी * दुर्वाच्य बोलीकन ।
आफ्नो यो शिर काट्छु छैन अब क्यै * बाँच्ने मलाई मन ॥
मेरो मृत्यु भई हुनेछ सहजे * त्यो पापको मार्जन ।
भन्नूभो हरिले समाइ करमा * हाँसेर हे अर्जुन ! ॥२०
दाजूमाथि उठाइ खड्ग अघि नै * हानीसकेको भए ।
हुन्थ्यो के स्थिति, लोकले पनि पछी * के तर्क गर्न्न थिए !
साह्रै सूक्ष्म छ धर्मको पथ सखे ! * भन्छु म त्यै कारण ।
व्यर्थै जान तयार छौ नरकमा * त्यागी सुखी जीवन ॥२१

आफ्नो त्यो प्रण राख्नलाइ तिमिले* दुर्वाच्य बोल्यौ तर ।
के भित्री मनले भन्यौ र यसरी * छौ मर्नमा तत्पर ॥
त्यस्को पाप पनी कुनै तरहले * लाग्दैन हे अर्जुन !
जे भन्छु म उपाय त्यो गर छिटै * शङ्का नमानीकन ॥२२
आफ्नो गर्नु बढाइँ मर्नुसरि हो * सत्पात्रका निम्तिमा ।
धेरै मिल्छ प्रमाण यो विषयको * खोजो गरे शास्त्रमा ॥
सोही कारणले स्वयं गर तिमी * आफ्नू बढाइँ अब ।
शान्ती प्राप्त हुनेछ, पाप जति हो * निर्मूल होला सब ॥२३
माफी त्यसपछि माग धर्म-सुतको * पाऊ समाईकन ।
मानी श्रीहरिको हुकुम् खुशि भए * तत्काल श्री अर्जुन ॥
दाजूका मुखमा तिखा नयनले * हेरेर गर्जीकन ।
पैह्लेको पुरुषार्थको शुरु गरे * श्री पार्थले वर्णन ॥२४
राजन् ! वीर म हूँ जिती असुर औ * द्यौता तथा दानव ।
मैले भूप सबै जिती पृथिविका * ल्याएँ ठूलो वैभव ॥
पूरा उत्तम राजसूय मख त्यो * मैले गरेरै भयो ।
मारें वीर अनेक दुष्ट कुरुको * सातो त्यसैले गयो २५
मैले खाण्डव दाहमा अनलको * इच्छा पुऱ्याई दिएँ ।
मैले पाशुपतास्त्र तुष्ट शिवजी- * लाई गराई लिएँ ॥
लड्ने वीर समान शौर्य-बलका * छैनन् तिनै लोकमा ।
सोही कारणले अजेय पनि छु * हे भूपती ! युद्धमा ॥२६
योद्धा अर्जुन कर्ण वीर दुइमा * यौटा कुनै बाँच्दछन् ।
मैले मार्दछु वा मलाइ रणमा * ती कर्णले मार्दछन् ॥
बाँधेको अहिले छ जो कवच यो * भन्छु प्रतिज्ञा गरी ।
खोल्नेछैनँ नमारि कर्णकन लौ * मद्दत् दिनोस् हे हरि !॥२७

आफ्नो शौर्य गरेर वर्णन निकै * श्रीपार्थ लज्जित थिए।
पाऊमा परि श्री युधिष्ठिरजिको * न्यूहेर भन्दा भए ॥
पाऊँ यो अपराध माफ अहिले * मैले गरेको जति।
मारी निश्चय कर्णलाइ रणमा * फर्कन्छु हे भूपति !॥ २८
मेरो यो रथलाइ वायु-गतिले * हाँक्नूहवस् केशव !
वेला छैन मलाइ पर्खन बढी * जान्छु म चाँडै अब ॥
त्यस्तो बात सुने युधिष्ठिरजिले * श्री पार्थको तैपनि।
शान्ती प्राप्त भएन दुःखित थिए * वाक्-बाणले नै तिनी ॥२९
लागे अर्जुनलाइ भन्न-तिमिले * ऐह्ले भनेको जति।
साँचो हो, अघिका अनर्थहरुको * मै मूल हूँ दुर्मति ॥
पापी, दुष्ट, दुरात्म, दुर्व्यसनमा * आसक्त औ आलसी।
आफू सक्तिनँ कार्य र हुकुम् * दिन्छु घरैमा बसी ॥३०॥
मैले नै सब भाइलाइ वनको * संकष्ट ठूलो दिएँ।
पाए आज बिदा म घोर वनमा * सानन्द जाने थिएँ ॥
आशीर्वाद म दिन्छु मङ्गल गरुन् * कल्याण योगेश्वर।
यस्तो बात भनेर जान वनमा * राजा भए तत्पर ॥३१॥
देखी भूपतिको परिस्थिति स्वयं * सम्झाइ श्री कृष्णले।
शान्ति प्राप्त गराइबक्सनुभयो * धर्मार्थका बातले ॥
शिक्षा श्री हरिको सुनेर मनमा * सन्तोष आयो जब।
पाउ पक्रि दुवै विनम्र स्वरमा * बिन्ती गरे केशव ॥३२
हाम्रो संकट टारिबक्सनुभयो * ऐह्ले हजुर्ले सब।
आज्ञा बक्सनुहोस् प्रसन्न मनले * पूरा म गर्छु अब ॥
त्यस्तो विन्ति गरेर कृष्णसँग ती * फर्कैर भाईतिर।
बोले-जाउ तिमि प्रसन्न मनले * संग्रामको खातिर ॥३३॥

राधाको सुत कर्णलाइ रणमा * मारेर आऊ अब ।
रक्षा गर्न भनेर तत्पर सदा * छन् सारथी माधव ॥
हे राजन् ! रथमा चढे जब गई * योद्धा दुवै दुर्धर ।
हावाको गतिले हिंडी रथ गयो * संग्राम भूमीतिर ॥३४॥

दुवै पक्षको द्वन्द्वयुद्ध—वृषसेन, चित्रसेन र दुर्योधनका दस भाईहरूको वध—
भीमद्वारा दुःशासनको रक्तपात :-

सोधे श्री धृतराष्ट्रले समरको * राम्रो नराम्रो स्थिति ।
लागे वर्णन गर्न सञ्जय सबै * प्रत्यक्ष देखे जति ॥
हे राजन् ! हरिले बढाउनुभयो * उत्साह श्री पार्थको ।
लागे गर्जन ती सहर्ष वधको * इच्छा गरी कर्णको ॥३५
केही बेर अगाड़िदेखि रण त्यो * मच्चीरहेकै थियो ।
लागी उत्तम बाण सूर्य-सुतको * सातो सबैको लियो ॥
लड्ने श्री कृपको अघिल्तिर डटी * योद्धा शिखण्डी थिए ।
योद्धा सात्यकिले सुयोधनजिको * गर्जेर सातो लिए ॥३६
लड्ने वीर सुषेणका सँग डरी * श्री उत्तमौजा थिए ।
काटी गर्दन कर्णका तनयको * त्यै तर्फ फ्यांदीदिए ॥
रोके सात्यकिले प्रहार बलोयो * साम्ने डटी कर्णको ।
लागे मर्न अनेक सैन्य कुरुका * लागी गदा भीमको ॥३७
सोधे सारथिलाइ चिन्तित हुँदै * संग्राममा भीमले ।
आएका परबाट देख्दछु निकै * सेनाहरू वेगले ॥
चिन्छौ के तिमिले बताउ, म त क्यै * सक्तीनँ ठम्याउन ।
आएनन् किन पार्थ धर्म-सुतको * सम्चार जानीकन ॥३८॥
बोले सारथि श्री विशंक खुशिले * हेरेर केही पर ।
आएको रथ देख्दछु विजयकै * संग्राम - भूमी - तिर ॥

गर्जन्छन् हनुमान सुन्छु धनुको * टङ्कार शङ्ख-ध्वनी ।
योद्धा भीम खुशी भए त्यति कुरा * ती सारथीको सुनी ॥३९
मार्दै सैनिक शत्रुका जब पुगे * संग्राममा अर्जुन ।
हे राजन् ! दुई भाइले शुरु गरे * संहार गर्जीकन ॥
भागे सैन्य डराइ शत्रुतिरका * बाँकी बचेका जति ।
आए लड्न भनेर वीर शकुनी * तत्काल हे भूपति ! ॥४०॥
पाए चोट अनेक बाणहरुको * श्री भीमद्वारा जब ।
भागे त्यो रणबाट, ठानि मनमा * पक्का म मर्छु अब ॥
लाखौं अश्वपती तथा गजपती * योद्धा हजारौं थिए ।
सेना पैदल झन असंख्य कुरुका * त्यो युद्धमा मारिए ॥४१॥
त्यो देखेर रिसाइ कर्ण रणमा * आई ठुलो वेगले ।
मारी सोमक-सैन्य उच्च स्वरले * गर्जे तिनी हर्षले ॥
फर्काए रथ शल्यले अनि छिटै * पाञ्चाल सेनातिर ।
मारे सैन्य असंख्य सूर्य-सुतले * छोडी अनेकौं शर ॥४२॥
पाई सम्मुथ सात्यकीकन छिटै * हाने ठुलो तोमर ।
त्यो देखीकन भीमले सहजमा * हानेर आफ्नो शर ॥
काटी तोमरको अनेक टुकुरा * तत्काल पारीदिए ।
पाई औसर सात्यकी समर त्यो * त्यागेर अन्तै गए ॥४३॥
आएथे जब चित्रसेन रणमा * अत्यन्त उत्साहले ।
तिन्को गर्दनको तुरुन्त टुकुरा * पारे युधामन्युले ॥
आए श्री वृषसेनजी समरको * देखेर त्यस्तो स्थिति ।
तिन्का साथ लड़े डटी नकुलजी * तत्काल हे भूपति ! ॥४४॥
देखाए दुइ वीरले समरको * जाने जती कौशल ।
ढाक्यो ती दुइका अनेक शरले * सम्पूर्ण युद्धस्थल ॥

थाले गर्जन बेसरी नकुलजी * हानेर नौ बाणले ।
लागी त्यो वृषसेनका हृदयमा * लोटे ढुलो वेगले ॥४५॥
श्री दुर्योधनका थिए दस जना * भाईहरू जो त्यहाँ ।
आए लड्न भनेर सैनिक लिई * तिन्का अगाड़ीमहाँ ।
आएका बलवान शत्रु त्यसरी * देखे जसै भीमले ।
आफ्नू श्रेष्ठ गदा लिएर रिसले * दौड़े ढुलो वेगले ॥४६॥
बर्साए सबले मिली शरहरू * रोक्ने इरादा धरी ।
रोकिन्थे किन श्री वृकोदर बढ़े * झन् वायु झैं बेसरी ॥
ठोको लौहमयी गदा नरपते ! * प्रत्येकको माथमा ।
मारे ती सबलाई उच्च स्वरले * गर्जेर संग्राममा ॥४७॥
फ्याँकेथे शिर श्री सुयोधनतरफ् * सौगात लेऊ भनी ।
देखी दुर्गति भाइको हुन गए * दुःखी सुयोधन् पनी ॥
आए क्रोध गरी त्यसै बखतमा * गर्जेर दुःशासन ।
पारे व्याकुल भीमलाइ शरको * वर्षा गराईकन ॥४८॥
वल्हें भीम गदा लिई पृथिविमा * हे भूपती ! वेगले ।
श्री दुःशासनलाइ मार्दछु भनी * छाड्दा भए क्रोधले ॥
लागेथ्यो जब माथमा गइ गदा * त्यो वज्र झैं बेसरी ।
धारा बग्न गयो निकै रगतको * प्राणान्त पार्ने गरी ॥४९
राजन् ! चोट थपे वृकोदरजिले * त्यैमाथि अर्को जब ।
लोटे ती रथबाट, सैनिक अरू * भागे डराई सब ।
छातीमाथि घुड़ा धसीकन बसी * घाँटी थिची बेसरी ।
लागे भन्न तिनी कठोर स्वरले * सातो सबैको हरी ॥५०
यो दुःशासनका सहायक हितू * छौ वीर जो जो यहाँ ।
आउन्नौ किन हो ? बचाउन कुनै * मेरा अगाडीमहाँ ॥

चुल्ठो द्रौपदिको सभाबिच लगी * यो दुष्टले पक्रँदा ।
गर्नेछु पछि रक्त-पान रणमा * भन्ने प्रतिज्ञा हुँदा ॥५१
मेरो त्यो प्रण पूर्ण पार्न अहिले * मौका दियो भाग्यले ।
जस्को सम्मतिले गर्‍यो अघि ठुलो* दुष्कर्म यो दुष्टले ॥
रक्षा गर्न भनेर यो बखतमा * आउन्न सोही किन ।
मारेको अझ छैन, जीवित छ यो * पापिष्ट दुःशासन ॥५२
श्री दुर्योधन, वीर कर्ण अरु जो * योद्धा थिए सम्मुख ।
लागे गर्जन भीम उच्च स्वरले * हेरी सबैको मुख ॥
हे दुःशासन ! नीच कर्म पहिले * जस्तो गरेको थिइस् ।
त्यस्को दुष्परिणाम आज रणमा * भोगेर मर्ने भइस् ॥५३॥



भीम द्वारा दुःशासनको रक्त-पान

फोरी कण्ठ लिएर रक्त करमा * खाँदै उकेल्दै गरी ।
ती दुःशासनलाइ फेरि रिसले * भन्दा भए बेसरी ॥

हारी राज्य दुखी भएर वनमा * जाँदा विना कारण ।
गोरू हो ! वनमा गई तिमिहरू * आफ्नो बिताओ दिन५४
भन्दामा तईंले सहायकहरू * हे दुष्ट ! जो जो थिए ।
आउन्नन् किन ती बचाउन कि वा * भागेर अन्तै गए ॥
यस्तो छेड़ सुने पनी सुति-सुती * हाँसेर दुःशासन ।
लागे भन्न नमानि दुःख मनमा * ती भीम योद्धाकन ॥५५
मार्नें शत्रु अनेक वज्रसरिको * मेरो यही हातले ।
पर्क्रें द्रौपदिको सभाबिच लगी * चुल्ठो ठुलो हर्षले ॥
मौका पाइ अनेक शत्रुहरूको * शेखी उतारीदिएँ ।
वेला प्राप्त भयो र आज रणमा * हे भीम ! मर्नें भएँ॥५६॥
त्यागी जीवन युद्धमा म खुशिले * बस्छु गई स्वर्गमा ।
खाउन् श्वान कि श्याल,खाऊतिमिनै*यो देह संग्राममा ॥
तिनको तर्क सुनेर भीम रिसले * आगोसरीका भए ।
देखाए अघि बाहु उत्तम भनी * जो त्यै उखेली लिए॥५७
त्यो वेला तरवार उत्तम झिकी * काटेर तिनको शिर ।
फ्याँके क्रोध गरेर तुच्छ तृण झैं * राजा सुयोधन्तिर ॥
हे दुर्योधन ! नीच, दुष्ट, कुमती * तिम्रो पनी यै गति ।
चाँडै हुन्छ भनेर जान मनमा * विश्वास हे दुर्मति ! ॥५८
त्यस्तो छेड़ सुने सुयोधन तथा * योद्धा अरूले पनि ।
कोही बोल्न सकेर हे नरपते ! * मार्छन् कि ऐहे भनी ॥
निक्कै रक्त पिई वृकोदर भए * उन्मत्त जस्ता जब ।
थाले सैनिक मार्न वीर कुरुका * साम्ने परेका सब ॥५९
भागे प्राण लिई कती त्यहिं मरे * लागी गदा भीमको ।
देखिन्थ्यो अनुहार त्यो बखतमा * श्री हीन झैं कर्णको ॥

देखेथे जब कर्णको समरमा * श्री शल्यले त्यो स्थिति ।
लागे भन्न दिएर साहस ठुलो * तिन्लाइ हे भूपति ! ॥६०
ठुलो वीर भएर शस्त्रहरुका * ज्ञाता, प्रतापी पनि ।
मान्दैछौ डर भीमको किन तिमी * मार्ला कि ऐह्ले भनी ॥
त्यस्तो बात सुनेर शल्य नृपको * देखेर युद्ध स्थिति ।
लागे लड्न रिसाइ कर्ण रणमा * उत्साह मानी अति ॥६१॥

अर्जुनसितको घोर युद्ध—कर्णको मृत्यु—

हे राजन् ! रणमा पराक्रम ठुलो * गर्दै थिए कर्णले ।
आएथ्यो रथ पार्थको पनि त्यतै * हावासरी वेगले ॥
योद्धा सम्मुख ती भए जब दुवै * संग्रामको खातिर ।
आए हेर्न भनी विमानहरुमा * गन्धर्व, विद्याधर ॥६२॥
ब्रह्मा, शम्भु र इन्द्र, सूर्य्य, सुर ओ * ज्ञानी, मुनी, ब्राह्मण ।
दिन्थे आशिष युद्धमा विजय श्री * पाउन् भनी अर्जुन ॥
भूत प्रेत, पिशाच, राक्षस तथा * धेरै थरी दानव ।
बोल्थे पक्ष लिएर सूर्य-सुतको * उल्टो मतीका सब ॥६३॥
लागे डुल्न बसी विमानहरुमा * चौतर्फ आकाशमा ।
थाले गर्न प्रहार शस्त्र ति दुवै * उत्साहले युद्धमा ॥
गर्दा कर्ण र पार्थले धनुषको * टंकार शङ्ख - ध्वनी ।
गर्थे वर्षण पुष्पका सुरहरू * त्यो शब्दलाई सुनी ॥६४॥
बर्साए दुइ वीरले जब त्यहाँ * लाखौं, करोड़ौं शर ।
थाले ढल्न मरेर सैनिक तथा * भूपाल चारैतिर ॥
जो संहार भयो दुवै तरफका * सेना र भूपालको ।
त्यो देखेर दुखेछ चित्त बहुतै * श्री द्रोणका पुत्रको ॥६५॥

पक्री हात भने विनम्र स्वरमा * हे वीर दुर्योधन !
बोक्दैछौ किन पाप लौ भन, लिई * निर्दोषको जीवन ॥
बिग्रेको अझ छैन केहि, हुनु जे * जस्तो थियो त्यो भयो ।
बाँच्थे, मेल गरे यि सैनिक तथा * छन् शेष भूपाल जो ॥६६
गर्छन् पाण्डवले मिलाप, म गई * प्रस्ताव यो राख्तछु
आज्ञा देउ तिमी, म पूर्ण सहजै * पारी यहाँ आउँछु ॥
भन्नेछन् जति बात यो विषयमा * श्री कृष्ण योगेश्वर ।
जानी रक्षक श्री युधिष्ठिरजिले * त्यो मान्दछन् सादर ॥६७
गर्दैनन् अरु भाइ धर्म-सुतको * आज्ञा कुनै लङ्घन ।
सक्छौ रोक्न छिटै मिली यति ठुलो * संहार, दुर्योधन !
शिक्षा सज्जनको र औषधि मिठो * संसारमा मान्छ को ?
ती दुर्योधन मान्दथे हित कुरा * आचार्यका पुत्रको ? ॥६८
लागे भन्न बुझाइ नम्र स्वरमा * तिनलाइ राम्रोसित ।
भन्नूभो जति बात सत्य सब हुन् * मेरो चिताई हित ॥
ती दुःशासनको गऱ्यो समरमा * जुन् दुर्गती भीमले ।
बिझ्ने बात भन्यो मलाइ जसरी * हे मित्र ! त्यो दुष्टले ॥६९॥
सुन्नूभो गुरु-पुत्रले पनि, गरौं * त्यसको म के वर्णन ।
छातीमा शर झैं गड़ी घरि-घरी * घोच्तैछ हे सज्जन !
हाम्रो जीत हुनेछ यो समरमा * आशा र जुन् कारण ।
भन्छु आज रहेर व्यस्त रणमा * थाकीसके अर्जुन ॥७०॥
अर्को को छ सुविज्ञ सूर्य-सुत झैं * योद्धा तिनै लोकमा ।
मार्छन् निश्चय पार्थलाइ तिनिले * यो आजको युद्धमा ॥
द्रौणीलाइ बुझाइ यो किसिमले * हेरेर सेनातिर ।
श्री दुर्योधनले भने तिमिहरू * जाओ लड़ाई गर ॥७१॥

हे राजेन्द्र ! कुमन्त्रणा दिनुभयो * जस्तो र ज्युन् नीतिले ।
त्यसको दुष्परिणाम त्यो हजुरकै * भोग्नूपर्‍यो पुत्रले ॥
आई सम्मुख क्रोधपूर्ण अहि झैं * श्री कर्ण औ अर्जुन ।
भूमी कम्प हुने गरी शुरु गरे * शंखध्वनी गर्जन ॥७२॥
जस्तो यो र अघी भयो नरपते ! * संग्राम देवासुर !
त्यस्तै कर्ण र पार्थले शुरू गरे * देखेर लाग्ने डर ॥
पारे घायल पार्थलाइ शरको * वर्षा गरी कर्णले ।
त्यो वेला कुरुवीर दर्शक सबै * गर्जैं ठूलो हर्षले ॥७३
चौंडो अर्जुनलाइ मार रणमा * भन्थे कराई कति ।
स्याबासी दिइ कर्णलाई थपरी * पिट्दै दगुर्थें कति ॥
लागे भन्न डराइ पाण्डु-सुतका * सम्पूर्ण सेना जब ।
भाग्नेलाइ अनेक वीर कुरुका * मार्थे लखेटी सब ॥७४॥
देखेथे जब पार्थले समरको * आफ्नो नराम्रो स्थिति ।
काटेथे शरजाल सूर्य-सुतको * तत्काल हे भूपति !
नौ 'नालीक' र 'अंजलीक' सय जो*नाराच भन्ने शर ।
छाड़े बाण 'वराहकर्ण' धनुमा * राखेर अर्को 'क्षुर' ॥७५
पस्छन् सर्पहरू सवेग दगुरी * ज्युन् चालले प्वालमा ।
त्यस्तै बाण गएर सूर्य-सुतको * पस्ता भए देहमा ॥
लागी चोट प्रशस्त ती हुन गए * संग्राममा विह्वल ।
सारा ध्वस्त गरी दिए विजयले * वैरीहरूको छल ॥७६॥
लागे भाग्न कती र खलबल ठूलो * तिन्ले गरेको सुनी ।
आए कर्ण फिरेर चेत, कसरी * हाहा पर्‍यो यो भनी ॥
देखी दुर्गति खूब आफुतिरको * गर्दै ठूलो गर्जन ।
छोड़े अर्जुनलाइ मार्दछु भनी * अग्न्यास्त्र मन्त्रीकन॥७७

लागे निस्कन अग्नि झैं शरहरू * त्यस्बाट सोही क्षण ।
त्यस्को वारुण अस्त्रले गरिदिए * श्री पार्थले मार्जन ॥
वायव्यास्त्र गरे प्रहार रिसले * श्री कर्णमाथी जब ।
रोके वेग चलाइ सूर्य-सुतले *दिव्यास्त्र त्यो भार्गव॥७८
लागी भार्गव अस्त्र घायल भए * तत्काल श्री अर्जुन ।
मार्‍यो सैनिक अग्नि झैं शरहरू * त्यस्बाट निस्कीकन ॥
ढाकेथ्यो रथ पार्थको जब त्यहाँ * धेरै तिखा बाणले ।
त्यो देखीकन चक्र बक्सनुभयो * तिन्लाइ श्रीकृष्णले॥७९
छाड़े चक्र लिई सुदर्शन जसै * मन्नेर श्री पार्थले ।
भागे वीर डरी, कती त्यहीं मरे * त्यो चक्रको तेजले ॥
राखेको अघिदेखि पाँच शर जो * पूजा गरी दिन्दिन ।
सन्धाने त्यहि बाण सूर्य-सुतले * साहै रिसाईकन ॥८०॥
हेरी चक्र दिने तिनै भुवनका * स्वामी मुरारीतिर ।
छाड़े अग्नि सरी, अमोघ तिनले * ती पाँच तीखा शर ॥
फोरी पीठ तथा ठुलो कवचको * टुक्रा हजारौं गरी ।
निस्की बाणहरू सरासर गए * पातालमा बेसरी ॥८१
लागी श्री हरिलाइ घाउ तनमा * धारा बग्यो रक्तको ।
त्यो देखेर सुषुप्त क्रोध सहसा * जागद्रो भयो पार्थको ॥
थाले गर्न प्रहार कर्णतिर ती * दिव्यास्त्र नाना थरी ।
काट्थे लाग्न नपाइ कर्ण बिचमै * त्यस्लाइ टुक्रा गरी ८२
त्यस्तै कर्ण पनी जती शर तथा * दिव्यास्त्र बर्साउँथे ।
त्यस्लाइ सहजै धनंजय पनी * आकाशमै काट्दथे ॥
लागे लड्न दुवै परस्पर त्यहाँ * दिव्यास्त्र द्वारा जब ।
देखी अद्भुत युद्ध दर्शकहरू * हेर्थे खुशीले सब ॥८३॥

यस्तो युद्ध भएन घोर कहिले * होला न फेरी अब ।
गर्थें छक्क परी कुरा थरि-थरी * द्यौता तथा दानव ॥
पाऱ्यो खल्बल कर्णका शर गई * पातालमा बेसरी ।
लागे भाग्न अनेक नाग डरले * आफ्नू सुरक्षा गरी ॥८४
बाँच्ने खाण्डव दाहको बखतमा * जो अश्वसेन् नाग हो ।
त्यस्ले पाण्डवको र वीर कुरुको * हो युद्ध भन्ने बुझ्यो ॥
साटो फेर्न भनेर पार्थसँग त्यो * खोज्दै थियो औसर ।
ठोक्रोमा गई कर्णको शर बनी * बस्तो भयो आखिर ॥८५
राखेथे जब कर्णले धनुषमा * संयोगले त्यै शर ।
रोके हेतु बुझाइ शल्य नृपले * ती कर्णलाई तर ॥
योद्धा हूँ म भनी घमण्ड मनमा * बर्ता हुनाले गरी ।
मानेनन् हितका कुरा नरपते ! * ती कर्णले त्यो घरी॥८६॥
ब्रह्मा, शम्भु, कुबेर औ यम अरू * जो जो थिए देवता ।
लागे थर्थर काम्न नाग शरको * देखेर गम्भीरता॥
लागी अर्जुन मर्दछौ अब तिमी * यो नागरूपी शर ।
केही शक्ति भए प्रयत्न बलियो * रक्षार्थ चाँडो गर ॥८७॥
यस्तो बात भनेर नाग-शर त्यो * छाडीदिए कर्णले ।
देखी अग्नि-शिखासमान शर त्यो * हाँसेर श्री कृष्णले ॥
थिच्नूभो रथ त्यो घुँडा धसि-धसी * ती चार घोडा बसे ।
आधा भूमिमहाँ सवेग रथका * ती श्रेष्ठ पाङ्ग्रा धसे ॥८८
लाग्यो तैपनि पार्थको मुकुटमा * त्यो बाण आई जब ।
भाँच्चो श्रेष्ठ किरीट औ कवच त्यो * धूलो गरायो सब ॥
बाँधेथे शिरमा तुरुन्त पगरी * रक्षार्थ श्री पार्थले ।
पार्नूभो रथलाइ फेरि अघि झैं * अङ्गुष्ठले कृष्णले ॥८९

देखी कौशल कृष्णको खुशि भए * हे भूपती ! सज्जन ।
आयो तक्षकको सुपुत्र रिसले * तत्काल फर्कीकन ॥
बोल्यो खिन्न भएर कर्णसित त्यो * हे श्रेष्ठ योद्धा ! सुन ।
बाँचे लक्ष चुकीदिएर तिमिले * संग्राममा अर्जुन ॥९०॥
अर्कोपल्ट प्रहार फेरि धनुमा * राखी मलाई गर ।
मार्छु अर्जुनलाइ; छैन हरि छन् * रक्षार्थ भन्ने डर ॥
त्यस्तो तक्षक-पुत्रको सुनि कुरा * भन्दा भए कर्णले ।
यौटा बाण म एकपल्ट रणमा * छाड्छु त्यही हेतुले ॥९१
अर्कोपल्ट प्रहार गर्दिनँ सखे ! * तोड़ेर आफ्नू प्रण ।
लाखौं अर्जुनलाइ मार्न सहजै * सक्छु त्यसै कारण ॥
मैले वीर भएर मद्दत लिनू * राम्रो कुरा मान्दिनँ ।
जे इच्छा मनमा छ त्यो गर तिमी * त्यस्मा म क्यै बोल्दिनँ९२
रूखो उत्तर पाइ सूर्य-सुतको *त्यो अश्वसेन् झोंक्कियो ।
आफ्नू नागस्वरूप धारण गरी * हावासरी दौड़ियो ॥
सोधे छक्क परेर श्री विजयले * श्री कृष्णको साथमा ।
आयो यो किन नाग क्रोधित भई * हे नाथ ! संग्राममा ॥९३
यस्तो प्रश्न सुनेर श्री विजयको * भन्नूभयो कृष्णले ।
हो यो तक्षक-पुत्र वैर अघिको * सम्झेर यो दुष्टले ॥
आएको अहिले छ मार पहिले * यस्लाइ हे अर्जुन !
माता खाण्डव दाहमा मरि, बस्यो * पातालमा गैकन ॥९४॥
साटो फेर्न भनी उपस्थित हुने * हो अश्वसेन् नाग यो ।
त्यो आज्ञा हरिको सुनी विजयको * क्रोधाग्नि झन् दन्कियो ॥
छाड़ेथे तिनले छ बाण सहसा * त्यस्लाई ताकीकन ।
टुक्रा सात भएर हे नरपते ! * त्यस्ले तज्यो जीवन ॥९५

हाने अर्जुनलाइ सर्य-सुतले * नौ बाण जो उज्ज्वल ।
त्यस्ले घाउ गरी शरीरभरमा * पारीदियो विह्वल ॥
तिन्को चोट खपेर बीस शरले * हानेर श्री पार्थले ।
मूर्च्छा पारिदिए, लगे पर छिटै * तिन्लाइ श्री शल्यले ॥९६
आयो चेत फिरेर फेरि रणमा * श्री कर्ण फर्के जब ।
भाँची श्रेष्ठ किरीट औ कवचको * धूलो गराए सब ॥
योद्धा अर्जुनले थपे जब अरू * तीखा हजारौं शर ।
थाले बिर्सन भार्गवास्त्र अधिका * श्री कर्णजीले, तर ॥९७
धिक्कारी निज धर्म-कर्म, बलको * निन्दा गरी बेसरी ।
छाड़े मन्त्रित ब्रह्म-अस्त्र तिनले * मार्नै इरान धरी ॥
पारे त्यस्कन शान्त श्री विजयले * ब्रह्मास्त्र छाड़ीकन ।
छाड्दै दिव्य अनेक शस्त्र खुशिले * थाले दुवै गर्जन ॥९८॥
त्यै वेला रथका पसे पृथिविमा * पाङ्ग्राहरू कर्णको ।
जो-जो यत्न गरे बृथा सब भए * त्यो झिक्नमा शल्यको ।
ओर्ली कर्ण स्वयं समाइ रथको * पाङ्ग्रो उचाले जब ।
हेर्थे छक्क परी थिए जति त्यहाँ * सेना तथा कौरव ९९
पृथ्वी अंगुल चार मास्तिर उठिन् * निस्केन पाङ्ग्रा जब ।
बोले कर्ण त्यजेर आश मनको * संग्राम जित्ने सब ॥
योद्धा अर्जुन, धीर-वीर सुगुणी * संग्राम नीतिज्ञ छौ ।
सोही कारण धर्ण-पाप तिमिले * राम्रो गरी जान्दछौ ३००
पाङ्ग्रा यो रथको म झिक्तिनँ स्वयं * तानेर जैहले तक ।
त्यो गाण्डीव नलेउ राख, रथमा * हे वीर ! तेल्हेतक ॥
भन्नूभो सुनि बात सूर्य-सुतको * हाँसेर श्री कृष्णले ।
गर्दैछौ अब धर्मको तिमि कुरा * हे कर्ण, कुन् नीतिले ॥१

तान्नू वस्त्र लगी सभा भवनया * श्री द्रौपदीको पनी ।
लाहाका घरमा डढाउनु पनी * धर्मै गरेको भनो ॥
मानूं त्यो अभिमन्युलाइ सबसे * ठान्छौ भने धर्म हो ।
ऐल्हे गर्नु प्रहार यी विजयको * कर्तव्य भन्दैन को ? ॥२
त्यो वक्रोक्ति सुनेर कर्ण रिसले * झन्न अग्निशर्मा भए ।
श्री कृष्णार्जुनलाइ बाण सयले * घाऊ गरी गर्जिए ॥
देखी घायल कृष्णलाइ रिसले * आगो भए अर्जुन ।
छाड़े, चोट खपेर सूर्य-सुतको * ब्रह्मास्त्र मंत्रीकन ॥३॥
त्यस्को मार्जन कर्णले गरिदिए * ब्रह्मास्त्रद्वारा अनि ।
छाड़े वारुण अस्त्र श्री विजयको * प्राणान्त पार्छ भनी ॥



अर्जुन द्वारा कर्ण-वध

लागेथ्यो जब त्यो गएर तनमा * मूर्छा परे अर्जुन ।
थाले कर्ण निकाल्न फेरि रथको * पांग्रा समाईकन ॥४॥

आयो अर्जुनलाइ चेत सहसा * त्यो देखि श्री कृष्णले ।
भन्नूभो वध गर्नू सूर्य-सुतको * मौका दियो दैवले ॥
राखेको अधिदेखि पूजन गरी * दिव्यास्त्र तिम्रो छ जो ।
छाड़ेनौ अब त्यो भने पछि सखे ! * मारेर मर्दैन यो ॥५॥
त्यो आज्ञा हरिको सुनी विजयले * राम्रो बुझी औसर ।
छाड़े मन्त्रित बाण, सूर्य-सुतको * त्यसले गिरायो शिर ॥
यौटा तेज शरीरबाट सहसा * ती कर्णको निस्कियो ।
पौंची त्यो रवि-बिम्बभित्र मिसिई * चाँड़ै हराई गयो ॥६॥
देखी सूर्य-कुमारको मरण त्यो * खुशी भए पाण्डव ।
गर्थे बात हुनेछ जीत रणमा * दुःखी थिए कौरव ॥
आफ्नो हार हुने बुझी समरमा * दुःखी थिए कौरव ।
हाहाकार गरेर सैनिक अरू * भागे डराई सब ॥७॥

कौरव सेना शिविरमा फर्कनु र शल्यले दुर्योधनलाई सान्त्वना दिनु :—

बिन्ती सञ्जयले गरे स्थिति सबै * विस्तारले युद्धको ।
सोधेथे धृष्टराष्ट्रले वध सुनी * श्री सूर्यका पुत्रको ॥
आशा शेष रहने यो समरमा * जित्ने मलाई अब ।
त्यर्थै सैनिक बन्धु-बान्धव मरे * छोरा हितैषी सब ॥८॥
बाबू सञ्जय ! वीर सूर्य-सुतले * त्यागेपछी जीवन ।
हाम्रा सैनिकले र पुत्रहरूले * के के गरे त्यो भन ॥
जित्ने युद्ध प्रयत्न कुन् अब ठूलो * गर्दैछ दुर्योधन ।
त्यो संवाद सुनाउ कर्ण - वधले * दुःखी छ मेरो मन ॥९॥
लागे सञ्जय भन्न अन्ध नृपको * आज्ञा सुनी सादर ।
भोग्नूपर्दछ कर्मका फलहरू * हे भूपती ! आखिर ॥

योद्धा कर्ण मरे, भयो समरमा * चौतर्फ कोलाहल ।
भागे सैन्य बचे जती हजुरका * साह्रै परी मुश्किल ॥१०॥



कर्ण-वधको वृत्तान्त सुनेर युधिष्ठिरले श्रीकृष्णको प्रशंसा गरेको

राजन् ! पार्थ र कर्णको समरमा * भूपाल धेरै मरे ।
पैल्हेका दुइ बीरदेखि बढि नै * संहार तिनले गरे ॥
श्री दुर्योधन खूब दुःखित थिए * देखेर युद्ध स्थिति ।
फर्के तैपनि लड्न साहस लिई * सेना बचेका जति ॥११॥
राजा शल्य र द्रोण-पुत्र, कृपजी * योद्धा अरू जो थिए ।
ती दुर्योधनको सहायक भई * तत्काल साथै गए ॥
आफाफ्ना हतियार वीर सबले * गर्जेर वर्षा गरे ।
धेरै सैनिक पाण्डु-पुत्रहरूका * ती अस्त्र लागी मरे ॥१२॥
आफ्ना सैनिकको परिस्थिति त्यहाँ * देखेर श्री भीमले ।
दौड़े वज्र सरी गदा लिई ठूलो * ती वायु झैं वेगले ॥

घेरै कौरव सैन्यको गरिदिए * संहार तिनले जब ।
लागे भाग्न डराइ टिक्न नसकी * बाँकी बचेका सब ॥१३॥
त्यो देखेर लड़े सुयोधन गई * श्री भीमका साथमा ।
गर्थे यत्न गदा बजार्न ति दुवै * माछ्रुं भनी माथमा ॥
धृष्टद्युम्न प्रधान वीर शकुनी * भिन्नै डटी लड्दथे ।
आफ्नू युद्धकला प्रदर्शन दुवै * उत्साहले गर्दथे ॥१४॥
त्यै वेला कुरु-सैन्य सिन्धु-जल झैं * उर्लेर आए जब ।
योद्धा अर्जुनले डटीकन स्वयं * त्यो वेग रोके सब ॥
ढाली भीष्म र द्रोण, कर्ण दुइको * जस्ले लियो जीवन ।
त्यस्ता अर्जुनलाइ कुन् पुरुषले * सक्थ्यो र रोकीलिन ॥१५
केही बेर लड़ी फिरे शिविरमा * सेना बचेका जति ।
लागे भन्न गई सुयोधनकहाँ * श्री मद्रका भूपति ॥
शक्ती साहस छैन वीरहरूमा * अत्यन्त थाके सव ।
जाउन् जान दिनोस् सबै शिविरमा * विश्राम गर्छन् अब ॥१६॥
त्यो सल्लाह सुनी सुयोधनजिले * उर्दी फिंजाईदिए ।
बाँचेका जति वीर कौरवहरू * दुःखी हुँदै फर्किए ॥
गर्थे हर्षबढ़ाइँ पाण्डव उता * अत्यन्त उत्साहले ।
सारा विन्ति गरे युधिष्ठिरकहाँ * पौंचेर विस्तारले ॥१७॥
आफ्ना भाइहरू लिएर सँगमा * गोविन्दलाई पनि ।
आए हेर्न भनेर कर्ण - वधको * वृत्तान्त सारा सुनी ॥
आज्ञा गर्नुभयो जनार्दनजिले * हेर्नू हवस् भूपति !
लड्दा कर्ण र पार्थ वीरहरूको * कस्तो भयो दुर्गति ।१८॥
हात्ती, अश्व, मनुष्यका शवहरू * छन् थुप्रिएका महाँ ।
टुक्रा छन् रथका र अस्त्रहरूका * संग्राम भूमीमहाँ ॥

राजन्‌ ! दृश्य छ जो भयानक महाँ * वीभत्स लाग्ने भय ।
निर्दोषी कति वीरको हुन गयो * यो युद्ध द्वारा क्षय १९॥
वस्त्राभूषणले सुसज्जित कती * छन्‌ भूपतीका शिर ।
बाहु, पाउ र अङ्ग अस्त्रहरू नै * देखिन्छ चारै तिर ॥
हुन्थे हर्षित वीर पाण्डवहरू * चर्चा सुनी युद्धको ।
दानी, वीर, गुणी, सुधी र बलिया * सेनापति कर्णको ॥२०
देखी जीवनहीन देह मनमा * धारा बगी हर्षको ।
पाँचै भाइ भई प्रसन्न करमा * पक्रेर श्री कृष्णको ॥
लागे भन्न दया हुँदा हजुरको * हाम्रो भयो यो जय ।
सक्नेछौं अब गर्न हामिहरूले * वैरीहरूको क्षय ॥२१॥

हेरेर सूर्य-सुतको मृत देहलाई ।
मान्यौं प्रधान रणधीर भनी रमाई ॥
फर्के प्रसन्न भइ केशव पाँच भाई ।
त्यो बात सञ्जय गए सब भन्नलाई ॥२२॥

कर्णपर्व समाप्त



# महाभारत शल्यपर्व

प्रारम्भः

धृतराष्ट्रको चिन्ता–कृपाचार्यको संधि प्रस्ताव दुर्योधनद्वारा अस्वीकृत—

वैशम्पायनको कथा मन दिई * सुन्थे ति जन्मेजय ।
आएथे समचार कर्ण-वधको * बोकेर श्री सञ्जय ॥
हे राजन् ! धृतराष्ट्रले जब सुने * संग्रामको वर्णन ।
केही बेर भएर मूर्च्छित पछी * रोए दुखी भैकन ॥१
हा हा कर्ण ! भनेर शोक नृपले * बर्ता गरेथे जब ।
संझाए परमार्थको विदुरले * नीती बुझाई सब ॥
केही शान्त भए सुनी विदुरको * शिक्षा र आश्वासन ।
बाबू सञ्जय ! युद्धको गर तिमी * विस्तारले वर्णन ॥२॥
राजाको सुनि प्रश्न वर्णन गरी * भन्दा भए सञ्जय ।
योद्धा कर्ण मरे, भयो समरमा * सेनाहरूको क्षय ॥
श्री दुर्योधनलाइ विज्ञ कृपले * भन्नूभयो सादर ।
बिग्रेको अझ छैन संधि तिमि नै * प्रस्ताव राखी गर ॥३॥
आफ्नै बान्धव हुन्, अजेय पनिछन् * देख्यौ स्वयं पाण्डव ।
बाँच्छन् संधि गरे अझै नृपहरू * सेना तथा कौरव ॥
पाँचै भाइ र कृष्ण सात्यकि यती * छन् सात बाँकी उता ।
द्रोणी, श्री कृतवर्म, वीर कृप छन् * तिम्रा हितैषी यता ॥४॥
सेना झन् दुइतर्फका मरिसके * निःशेष जस्तै सब ।
केही देख्दिनँ लाभ हामिहरूले * गर्दा लड़ाइँ अब ॥

राजा विज्ञ भई भलो र कुभलो * आफ्नो नबुझने छ जा ।
राज्य-भ्रष्ट भई अनेक थरिका * संकष्ट भोग्नेछ त्यो ॥५॥
श्री दुर्योधनले सुनी हित हुने * शिक्षा कृपाचार्यको ।
पोखे नम्र भई कठोर स्वरमा * दुर्भावना चित्तको ॥
ब्रह्मन् ! जो दिनुभो मलाइ अहिले* शिक्षा, चिताई हित ।
त्यस्को गर्छु म देहले वचनले * औ चित्तले स्वागत॥६॥
मेरा निम्ति गरी समर्पण सदा * यो युद्धमा जीवन ।
जस्तो गर्नुभयो पराक्रम सबै * देख्थें म त्यो दिन्दिन ॥
पैह्ले पाण्डवलाइ दुःखहरू जो * हामीहरूले दियौं ।
ऐह्ले कुन् मुखले तिनैसित गई * लौ मिल्न आयौं भनौं ७
भन्नू, मूढहरू गएर वनमा * आफ्नो बिताओ दिन ।
तान्दै ल्याउनु द्रौपदीकन गई * दुर्मत् सभामा लिन ॥
फिर्ता राज्य म दिन्नँ लड्दछु भनी * पैह्ले स्वयं तम्सिनू ।
ऐह्ले मिल्छु भनेर कायर बनी * मैले गई न्यूह्नू ? ॥८॥
बिर्सन्नन् कहिले पनी तिनिहरू * आफ्नो ठुलो दुर्गति ।
झुक्नूचाहिं बरू मरे समरमा * मिल्नेछ राम्रो गति ।
मैले भोगिसकें सबै सुख तथा * साम्राज्य औ वैभव ॥
ठूला यज्ञ गरेर ब्राह्मणहरू * सन्तुष्ट पारें सब ॥९॥
मेरा पूर्ण भए मनोरथहरू * सम्पूर्ण हे ब्राह्मण !
मिल्नूचाहिं बरू लड़ी समरमा * त्यागछु म यो जीवन ॥
सोही कारणले मिलापतिरको * प्रस्ताव यो मान्दिनँ ।
जे आज्ञा अहिले दिए पनि अरू * मान्छु खुशी मैकन ॥१०

सेनापति भएका शल्को पराक्रम :—

यस्तो उत्तर श्री सुयोधनजिले * आचार्यलाई दिई ।
सल्लाहा सबको लिए गरि सभा * अत्यन्त दुःखी भई ॥
द्रौणीलाइ भने तपाइँ हुनुहोस् * हे वीर ! सेनापति ।
तिन्को बात सुनेर द्रोण-सुतले * आफ्नो दिए सम्मति ११
राजन् ! वीर प्रधान हामीहरूमा * छन् मद्रका भूपति ।
हाम्रा सैनिकको बनाउनुहवस् * तिन्लाइ सेनापति ॥
त्यो सल्लाह सुनी सुयोधनजिले * आनन्द मानीकन ।
चाँडै नै नृप शल्यलाइ अभिषेक् * गर्दा भए त्यै दिन ॥१२



राजा शल्यलाई सेनापति पदको अभिषेक

पाई त्यो पद-भार गर्व मनमा * बढ्दै गयो वेगले ।
श्री दुर्योधनलाइ सादर भने * सेनापती शल्यले ॥

गर्नू होस सुकला गएर अहिले * सानन्द हे भूपति !
भोली निश्चय मार्दछ हजुरका * छन् शत्रु बाँकी जति ॥१३
यो संसारभरी प्रसिद्ध अहिले * छन् वीर कृष्णार्जुन ।
तीभन्दा म बढ़ी छु बाहुबलमा * हे वीर दुर्योधन !
सोही कारणले प्रसन्न मनले * त्यागेर चिन्ता सब ।
थाक्नूभो बहुतै गई शिविरमा * विश्राम गर्नोस् अब ॥१४
शेखीयुक्त कुरा निकै अरु जती * बोले त्यहाँ शल्यले ।
त्यो संवाद लगे युधिष्ठिरकहाँ * त्यै रातमा दूतले
भीष्म, द्रोण, प्रधान कर्ण क्रमले * संग्राममा मारिए ।
श्री दुर्योधन त्यो उपस्थित रही * प्रत्यक्ष देख्दैथिए ॥१५
आशा तैपनि जो थियो बलवती * ती वीरका चित्तमा ।
जित्छन् पाण्डवलाइ शल्य नृपले * एक्लै लड़ी युद्धमा ॥
यो विश्वास भई गए शिविरमा * फर्केर दुर्योधन ।
त्यो सम्चार सुनी युधिष्ठिरजिले * क्यै बेर सोचीकन ॥१६
सोधे श्री हरिलाइ शल्यसित को * लड्ने छ संग्राममा ।
कस्ले सक्दछ मार्न हामितिरका * सम्पूर्ण यी वीरमा ॥
यस्तो प्रश्न सुनेर धर्म-सुतको * भन्नूभयो कृष्णले ।
सक्छन् गर्न कती पराक्रम ठुलो * संग्राममा शल्यले ॥१७॥
मैले जान्दछु राम्ररी, समरका * ज्ञाता र नीतिज्ञ छन् ।
हाम्रा सैनिक ध्वस्त पार्न तिनिले * आँटे भने सक्छन् ॥
भीष्म, द्रोण र कर्णदेखि बढि नै * छन् मद्रका भूपति ।
धृष्टद्युम्न र भीम, सात्यकि अरू * छन् वीर हाम्रा जति ॥१८
सक्दैनन् तिनिलाइ मार्न रणमा * हे भूप ! त्यै कारण ।
शक्ती देख्छु हजूरमै म त ठुलो * तिनूलाइ मानीकन ॥

मारे शम्बरलाइ घोर रणमा * ज्युन् धैर्यले इन्द्रले ।
त्यस्तै धैर्य गरेर धारण स्वयं * मानूं हवस् नाथले ॥१९॥
त्यो सल्लाह गरी हरी शिविरमा * पाल्नूभएथ्यो जब ।
आफाफ्ना स्थलमा गईकन सुते * सेना तथा पाण्डव ॥
सेना, वीर भए दुवै तरफका * तैयार सत्रौं दिन ।
आए लड्न, गरेर उच्च स्वरले * शंख-ध्वनी गर्जन ॥२०॥
योद्धा सृञ्जयको र वीर कुरुको * संग्राम जो मच्चियो ।
त्यो देवासुरको ठुलो समर झैं * हे भूपती ! देखियो ॥
योद्धा, अश्वपती, रथी, गजपती * सेना सबै पैदल ।
लागे लड्न भएर सम्मुख ठुलो * देखाउँदै कौशल ॥२१॥
सेना पाण्डवतर्फका जब मरे * धेरै नराम्रोसित ।
आए अर्जुन, भीम संमुख भई * त्यो दृश्यले क्रोधित ॥
शक्ती, पाश, गदा र खड्ग बलिया * दिव्यास्त्र औ तोमर ।
थाले गर्न प्रहार भाइ दुइले * तीखा हजारौं शर ॥२२॥
धेरै कौरव सैन्यको हुन गयो * संहार त्यस्ले जब ।
हाहाकार गरी त्यजी समर त्यो * भागे डराई सब ॥
भागेका निज सैन्यलाइ त्यसरी * देखेर श्री शल्यले ।
रोके ती दुइ भाइलाइ शरको * वर्षा गरी वेगले ॥२३॥
देखी साहस शल्यको कुरुहरू * अत्यन्त खूशी भए ।
भागेका सब सैन्य बाँच्नतिरको * आशा त्यजी फर्किए ॥
धेरै वीर मरी दुवै तरफका * खोला बगे रक्तका ।
ढाकेथे रण-भूमि अङ्गहरू औ * शस्त्रास्त्रले वीरका ॥२४॥
आए संमुख चित्रसेन नकुलको * गर्जी ठुलो वेगले ।
छोरा हुन् तिनि कर्णका, शरहरू * वर्षा गरी क्रोधले ॥

मारी सारथि, अश्व औ रथ, ध्वजा * धूलो गराईदिए ।
पारी व्याकुल बेसरी समरमा * ती चित्रसेन् गर्जिए ॥२५॥
चाँडै नै रथमा चढी नकुलजी * आए रिसाईकन ।
मारी अश्व र सारथी, धनु पनी * भाँचीदिए त्यै क्षण ॥
पाँचोटा शरले शरीरभरिमा * घाऊ गराईदिए ।
बग्दा रक्त शरीरबाट रविको * ती बिम्ब झैं देखिए ॥२६



कर्णका भाईको शिर भीमसेनले काटेको

काटेथे टुपिमा धरी नकुलले * ती चित्रसेन्को शिर ।
जो सत्सेन, सुषेण भाइ दुइटा * योद्धा थिए दुर्धर ॥
दाजू मारिदिए भनी नकुलको * साम्ने डटे ती जब ।
तिन्को मद्दत गर्न कौरव पुगे * सेना बटुल्दै सब ॥२७॥
बर्साए सबले मिली थरि-थरी * शस्त्रास्त्र मार्छु भनी ।
काटे शस्त्र समस्त श्री नकुलले * एक्लै भए तापनी ॥

मारी सैन्य अनेक वीर कुरुका * पैह्ले भगाईकन ।
ती सत्सेन, सुषेणको पनि लिए * नौ बाणले जीवन ॥२८॥
जो-जो वीर त्यहाँ उपस्थित थिए * भागे डरी तो पनि ।
आए शल्य तुरुन्त ती सकलको * रक्षा म गर्छु भनी ॥
जस्तो धैर्य धरी पराक्रम गरे * संग्राममा शल्यले ।
त्यो देखेर समस्त सैनिकहरू * फर्के ठुलो हर्षले ॥२९॥
धृष्टद्युम्न, युयुत्सु, सात्यकि तथा * श्री भीम योद्धा पनी ।
आए सैन्य लिएर मद्रपतिको * त्यो वेग रोकौं भनी ॥
वर्साए सबले मिली शरहरू * चौतर्फ रोकीकन ।
टुक्रा पारि समस्त बाण बिचमै * गर्दै ठुलो गर्जन ॥३०
छाड्थे जब बाण उत्तम तिखा * ताकेर श्री शल्यले ।
लागी वज्रसमान बाणहरु ती * हे भूपती वेगले ॥
सारा पाण्डव वीर घायल भए * त्यो चोट लागी तब ।
लागे भाग्न अनेक व्याकुल भई * सेना बचेका सब ॥३१॥
माद्री-पुत्र दुवै युधिष्ठिर तथा * ताकी शिखण्डीतिर ।
छाड़े बाण अनेक शल्य नृपले * संहारको खातिर ।
जो-जो सोमक औ प्रभद्रक त्यहाँ * योद्धा प्रतापी थिए ।
लागी बाण अनेक ती शलह झैं * संग्राममा मारिए ॥३२
गर्दा बाण प्रहार शल्य नृपले * श्री सूर्य देखिन्नथे ।
तिनको चोटमहाँ परी नरपते ! * क्वै वीर बाँच्तैनथे ।
ढाकेथे जब शल्यले दश दिशा * आकाश युद्ध-स्थल ।
भागी सैन्य पुगे युधिष्ठिरकहाँ * योद्धा रथी पैदल ॥३३
त्यो देखेर समस्त पाण्डु-सुतका * योद्धा उतै दौड़िए ।
एकै पल्ट मिली प्रहार सबले * तत्काल गर्दा भए ॥

पारे घायल शल्यलाइ त्यसरी * छेकेर तिन्ले जब ।
द्रौणी श्री कृतवर्म, वीर शकुनी * आए सबै कौरव ॥३४॥
श्री दुर्योधनले डटी विजयको * त्यो वेग रोकीदिए ।
द्रौणी श्री सहदेव औ नकुलको * साम्ने डटेका थिए ॥
रोके श्री कृतवर्मले पुगि छिटै * श्री भीम योद्धाकन ।
गर्दै घोर प्रहार वीरहरू ती *ती थाले सबै गर्जन॥३५॥
हे राजन् ! कृतवर्मले परिघले * हानेर श्री भीमको ।
मारे अश्व र सारथी, रथ ठुलो * पारीदिएथे धुलो ॥
वलेंथे रथबाट भीम रिसले * ठूलो गदा लीकन ।
भाँची श्री कृतवर्मको रथ पनी * थाले तिनी गर्जन ॥३६
द्रौणीले गइ द्रौपदी-सुतहरू * लाई गरे घायल ।
माद्रीका दुइ पुत्रलाइ शरले * पारीदिए व्याकुल ॥
वलेंथे रथबाट वीर ति दुवै * तर्वार आफ्ना लिई ।
काटे शल्यकुमारको शिर टुपी * पक्रेर क्रोधित् भई ॥३७

अर्जुन र अश्वत्थामा-युधिष्ठिर शल्यको युद्ध—

प्यारो पुत्र मऱ्यो भनेर रणमा * देखे जसै शल्यले ।
पारे घायल श्री युधिष्ठिरजिको * सर्वाङ्गमा बाणले ॥
दाजूको जब त्यो परिस्थिथियि स्वयं * देख्दा भए भीमले ।
मारे सारथि अश्व शल्य नृपको * ठोकी गदा वेगले ॥३८
हाने तोमर भीमको हृदयमा * ताकेर तिन्ले तर ।
फर्काए बिचमै समाइ करले * श्री शल्यको तोमर ॥
त्यस्ले अश्व र सारथी जब मरे * ती मद्रका भूपको ।
ओर्ले एक गदा लिई पृथिविमा * इच्छा गरी लड्नको॥३९

आए भीम पनी लिईकन गदा * तिनको अगाड़ी जब ।
थाल्यो मच्चिन द्वन्द-युद्ध दुइको * हेर्थे तमाशा सब ॥
हुन्थ्यो वज्र परेसरी ध्वनि ठुलो * साथै गदा बजँदा ।
खोज्थे छिद्र दुवै घुमेर बलमा * ती एकनासे हुँदा ॥४०



राजा शल्य र भीमको गदा-युद्ध

मूर्च्छा पर्न गए दुवै जब गदा * लाग्दो भयो माथमा ।
आई सैन्य लगे दुवै तरफका * विश्रामको स्थानमा ॥
आए चेत फिरेर फेरि रणमा * ती श्रेष्ठ योद्धा जब ।
जै जै कार गरे दुवै तरफका * सेनाहरूले तब ॥४१
केही सैन्य गरी विभाजन लिए * श्री द्रोणका पुत्रले ।
छेके अर्जुनलाइ चौतरफमा * घेरा दिई वेगले ॥
श्री दुर्योधनले प्रहार सहसा * गर्दा भए तोमर ।
त्यस्ले गैकन चेकितान विरको * काटी गिरायो शिर ॥४२

त्यो देखेर समस्त पाण्डु-सुतका * सेनाहरूले पनी ।
बर्साए सबले मिली शरहरू * मछौं कि माछौं भनी ॥
भन्थे पक्र, समात, मार सब ती * हो या विपक्षी दल ।
सेनामा दुइतर्फको हुन गयो * अत्यन्त कोलाहल ४३
घाऊ पारिदिए युधिष्ठिरजिका * सर्वाङ्गमा शल्यले ।
त्यो देखी सहदेव औ नकुलले * श्री सात्यकी भीमले ॥
आफाफ्ना शर, शक्ति, तोमर, गदा * छाड़े ठुलो वेगले ।
तिन्का शस्त्रहरू अनेक टुकुरा * पारेर श्री शल्यले ॥४४॥
एक्लै युद्ध गरे सबै सँग ठुलो * उत्साहले धैर्यले ।
जस्तो श्रेष्ठ गरे पराक्रम त्यहाँ * एक्लै लड़ी शल्यले ॥
त्यस्तो गर्न सकेन त्यो समरमा * अर्को कुनै वीरले ।
भागे सैन्य अनेक टिक्न नसकी * श्री शल्यका चोटले ॥४५
आशा जीवनको त्यजी जति थिए * सेनाहरू लड्दथे ।
लागी बाण अनेक वीरहरूको * ती भूमिमा गिर्दथे ॥
द्रौणीले रिसले तिखा सलह झैं * वर्षा गरी बाणको ।
ढाकेथे रथलाइ हे नरपते ! * श्रीकृष्ण औ पार्थको ४६
त्यो देखेर समस्त कौरवहरू * अत्यन्त खूशी भए ।
योद्धा अर्जुनले सबै शरहरू * तत्काल काटीदिए ॥
द्रौणीले हरि-पार्थलाइ शरले * पारीदिए घायल ।
त्यो देखेर गरे समस्त कुरुले * गर्जेर कोलाहल ॥४७॥
तिन्को चोट खपेर श्री विजयले * छाड़ी हजारौं शर ।
मारी अश्व र सारथी, रथ पनी * फ्याँकीदिएथे पर ॥
तिनको मद्दत गर्न शल्य नृपती * आई ठुलो वेगले ।
वर्षाका जलधार झैं शरहरू * छाड्दा भए रोषले ॥४८

ढाके भूमि-अकाश बाणहरूले * देखिन्नथ्यो क्यै पनि ।
हेर्थे छक्क परी सुरासुर सबै * साश्चर्य के हो भनी ॥
पाङ्ग्राले रथको उड़ीकन धुलो * चारै दिशा ढाकियो ।
धेरै सैन्य मरी दुवै तरफमा * हाहा गराईदियो ॥४९॥
भागे वीर सबै युधिष्ठिर भने * साम्ने डटेका थिए ।
तिन्लाई नृप शल्यले शरहरू * हानेर बाधा दिए ॥
धेरै सैन्यहरू मरी रगतको * धारा बगेथ्यो जब ।
चारै तर्फ सफा भयो नरपते ! * धूलो हराई सब ॥५०॥

युधिष्ठिरद्वारा भाइसहित राजा शल्यको वध :—

राजन् ! अर्जुनको र द्रोणसुतको * संग्राम जो मच्चियो ।
हेर्नेलाइ पनी ठूलो भय दिने * रोमाञ्चकारी थियो ॥
ढाके अर्जुन, कृष्णलाइ तिनिले * छाड़ी हजारौं शर ।
आधा सैनिक पाण्डु-पुत्रहरूको * पारीदिए सोत्तर ॥५१॥
हुन् मेरा गुरु-पुत्र ब्राह्मण भनी * हाँसेर श्री अर्जुन ।
गर्थे बाण प्रहार द्रोण-सुतको * त्यो वेग रोकीदिन ॥
हाने तोमर एक क्रोधित भई * श्री पार्थलाई तर ।
टुक्रा तोमरको गरे विजयले * छाड़ी अनेकौं शर ॥५२
मारे सैनिक पाण्डु-पुत्रहरूका * साहै नराम्रो गरी ।
रोके अर्जुनले अनेक शरको * वर्षा गरी बेसरी ॥
धृष्टद्युम्न तथा सुयोधन उता * लड्दै थिए रोषले ।
श्री दुर्योधन वीर व्याकुल भए * लागी तिखा बाणले ॥५३
तिन्का भाइहरू तुरुन्त दगुरे * गर्छौं भनी मद्दत ।
लागे लड्न सबै मिली द्रुपदका * ती श्रेष्ठ छोरासित ॥

मारेथे कृतवर्मले र कृपले * पाञ्चाल सेना सब ॥
लागी बाण अनेक मूर्च्छित भए * योद्धा शिखण्डी तब ॥५४
लागे उफ्रन हर्षले जति थिए * सेना हजुर्का यता ।
मारे सैन्य अनेक शल्य नृपले * शस्त्रास्त्रद्वारा उता ॥
लागे सैनिक भाग्न पाण्डु-सुतका * साह्रै डराईकन ।
शक्ती पाण्डवको पुगेन रणमा * तिनलाइ फर्काउन ॥५५
लागे धर्म-कुमार भन्न रणको * देखी नराम्रो स्थिति ।
हे भाई ! सुन, वीर सात्यकि पनी * मैले भनेको जति ॥
आजैको दिन मात्र शल्य नृपती * सानन्द बाँचे भने ।
हाम्रा वीर समस्त सैनिकहरू * छन् युद्धमा मारिने ॥५६
मार्ने गर्नुपर्‍यो प्रयत्न रणमा * तिनलाइ मैले अब ।
चारै तर्फ रहेर मद्दत छिटै * देओ मलाई सब ।
साम्ने भीम पछाड़ि अर्जुन रहुन् * दायाँ र बायाँतिर ।
धृष्टद्युम्न र सात्यकी दुइ जना * योद्धा रहुन् तत्पर ॥५७॥
यो आज्ञा सुनि श्री युधिष्ठिरजिको * त्यस्तै तयारी गरे ।
लिन्छु जीवन शल्यको अब भनी * राजा अगाड़ी सरे ॥
देखे कौरवले सुसज्जित भई * योद्धा हिंड़ेका जब ।
रक्षा गर्न भनेर शल्य नृपको * तत्काल दौड़े सब ॥५८
थाले लड्न समस्त सैनिकहरू * आशा त्यजी बाँच्नको ।
ठूलो युद्ध भयो दुवै तरफका * सेना तथा वीरको ॥
श्री दुर्योधनलाइ देखि नजिकै * श्री कर्णका पुत्रले ।
मूर्छा पारिदिए, गिरे रथमहाँ * ती शक्तिको चोटले ॥५९
मारे सारथि भीमले, रथ लिई * ती अश्व भागे जब ।
हाहाकार गरी त्यही रथपछी * दौड़े सबै कौरव ॥

रक्षा कौरव सैन्यको दृढ़ भई * एक्लै गरे शल्यले ।
पाए त्यो उपयुक्त औसर जसै * श्रीधर्मका पुत्रले ॥६०॥
पारे घायल शल्यलाइ शरको * वर्षा गरी वेसरी ।
काटे श्रेष्ठ धनू युष्ठिरजिको * श्री शल्यले त्यो घरी ॥
मारे अश्व र सारथी खुशि हुँदै * थाले तिनी गर्जन ।
तिनको शब्द सुनेर कौरवहरू * लागे सबै उफ्रन ॥६१
त्यो देखी रिसले वृकोदरजिले * छाड़ी हजारौं शर ।
मारी अश्व र सारथी, धनु पनी * काटी दिएथे तर ॥
दौड़े धर्म-कुमारतर्फ रिसले * तर्वार ठूलो लिई ।
काटे त्यो तरवार शल्य नृपको * श्रीभीम साम्ने गई ॥६२॥



राजा शल्यलाई श्रीयुधिष्ठिरले मारेको

दौड़े तैपनि ती युधिष्ठिरतिरै * इच्छा गरी पक्रन ।
छाड़े शक्ति अमोघ धर्म-सुतले * तत्काल मन्त्रीकन ॥

लाग्यो शल्य नरेशको हृदयमा * त्यो श्रेष्ठ शक्ती जब ।
लोटे त्यो रथबाट जीवन त्यजी * संसारको वैभव ॥६३॥
रक्षा गर्न भनेर सैनिकहरू * तिन्को त्यहाँ जो थिए ।
तिन्लाइ पनि भीमले यमपुरी * चाँड़ै पुऱ्याईदिए ॥
हाम्रो जीत भयो भनेर खुशिले * नाच्थे विपक्षी उता ।
आँटे मार्न भनेर सैन्य कुरुका * भाग्थे डराई यता ॥६४॥
भाई शल्य नरेशका अघिसरे * साटो म फेर्छु भनी ।
काटे मस्तक श्री युधिष्ठिरजिले * तत्काल तिन्को पनि ॥
हाम्रो जीत हुने भयो अब भनी * हर्षित् थिए पाण्डव ।
आफ्नो हार हुने सुनिश्चित बुझी * दुःखी भए कौरव ॥६५॥

उभय पक्षको मर्यादा-शून्य युद्ध र दुर्योधनको पराक्रमः—

हात्ती, अश्व सवार शल्य नृपका * जो शेष सेना थिए ।
तिन्ले पाण्डव सैन्यमा पसि ठुलो * संहार गर्दा भए ॥
आए ती कृतवर्म वीर रणको * देखेर त्यस्तो स्थिति ।
रोके सात्यकिले अघिल्तिर गई * तिन्लाई हे भूपति ! ॥६६
ढाकेथे कृतवर्मले शरहरू * छाड़ेर धेरै तर ।
छाड़ी बाण अनेक सात्यकिजिले * काटीदिए ती शर ॥
मारे अश्व र सारथी अनि त्यहाँ * आई कृपाचार्यले ।
तिन्लाइ रथमाथि राखि सहसा * टाढा लगे वेगले ॥६७॥
पाएथे कृतबर्मको र कृपको * मद्दत त्यसै कारण ।
रोके वेग ठुलो विपक्षतिरको * आएर दुर्योधन ॥
पाई मद्दत शल्यका जति त्यहाँ * सेना थिए ती पनी ।
लागे फौज समाप्त पार्न रिसले * हुन् शत्रुपक्षी भनी ॥६८॥

राजन् ! फेरि ठूलो दुवै तरफको * संग्राम त्यो मच्चियो ।
धेरै सैन्य मरे त्यहाँ रगतको * खोलो बनेको थियो ॥
ठूलो श्री कृतवर्मको र कृपको * उत्साह देखीकन ।
योद्धा अर्जुनले पुगी शुरु गरे * शस्त्रास्त्र बर्साउन ॥६९॥
सेना, अश्वपती, रथी, गजपती * धेरै थिए पैदल ।
त्यो संहारमहाँ मरेपछि बचे * चौथाइ नै केवल ॥
आएथे रथमा चढ़ेर शकुनी * देखेर युद्ध स्थिति ।
श्री दुर्योधनका गएर नजिकै * बोले ति हे भूपति ॥७०॥
गर्नू होस कृतवर्मको र कृपको * चाँड़ै गई मद्दत ।
मार्दैछन् सब सैन्य हामितिरका * साह्रै नराम्रोसित ॥
तिन्को बात सुनी सुयोधन गए * दौड़ेर त्यै स्थानमा ।
भागेका निज सैन्यलाइ तिनिले * देख्दा भए युद्धमा ॥७१॥
गर्थे यत्न तिनी कठोर स्वरले * चिच्याई फर्काउन ।
मानेनन् तर फौजले नरपते ! * संग्राममा फर्कन ॥
त्यो देखेर स्वयं सुयोधन भई * संग्राममा उद्यत ।
पाँचै पाण्डवलाइ बाण दसले * पैह्ले गरे स्वागत ॥७२॥
जो - जो पाण्डवका रथीहरू थिए * ती वीरलाई पनी ।
छाड़ेथे शर पाँच-पाँच क्रमले * वैरीहरू हुन् भनी ॥
थाले मार्न अनेक सैनिकहरू * गर्जेर दुर्योधन ।
तिन्को साहसको सबै सुजनले * गर्दा भए बर्णन ॥७३॥
देखी पाण्डव पाँचले समरको * त्यस्तो नराम्रो स्थिति ।
बर्साए हतियार क्रोधित भई * तिन्ले सकेका जति ॥
त्यो देखेर पुगे सहायक अरू * सेना विपक्षी जब ।
ठूलो युद्ध शुरू भयो नरपते ! * रोमाञ्चकारी तब ॥७४॥

मारी सारथी, अश्व धर्म-सुतको * पोड़ा दिई बाणले ।
गर्थे बेसरी सिहनाद शकुनी * भिन्नै उता हर्षले ॥
दाजूको सहदेवले पुगि गरे * रक्षा तथा मद्दत ।
पारे घायल दुष्टबुद्धि शकुनी- * लाई नराम्रोसित ॥७५॥
यौटा म्लेच्छपती थियो अति बली * जो शाल्व भन्ने त्यहाँ ।
आयो शस्त्र लिई म लड्दछु भनी * त्यो मत्त हात्तीमहाँ ॥
गर्नँ मद्दत त्यो हजूरतिरको * निक्कै प्रतापी थियो ।
त्यस्ले पाण्डव सैन्यमा गज हुली * हाहा गराईदियो ॥७६॥
कुल्चन्थ्यो गजले तथा गजपती * हिर्काउँथ्यो बाणले ।
लागे सैनिक मर्न पाण्डु-सुतका * त्यो शाल्वको चोटले ॥
हाहाकार परेर सैनिक सबै * चौतर्फ भागे जब ।
धृष्टद्युम्न पुगे लिईकन गदा * भन्दै म आएँ अब ॥७७
पारे त्यो गजलाइ घेरि बिचमा * वर्षा गरी बाणको ।
आयो फ्याँक्न भनेर श्रेष्ठ रथ, ती * पाञ्चलका पुत्रको ॥
लाग्यो फन्फनि घुम्न बेसरि फुटी * संपूर्ण गण्डस्थल ।
भागे ती रथबाट क्यै पर छिटै * देखेर त्यस्को बल ॥७८
त्यो रित्तो रथलाई मत्त गजले * फ्याँकीदियो वेगले ।
मारे त्यो गजलाइ उत्तम गदा * ठोकेर श्री भीमले ॥
बर्सायो शर शाल्वले समरमा * साह्रै रिसाई तर ।
काटे सात्यकिले तिखा शरहरू * छाड़ेर त्यस्को शिर ॥७९
आए क्रोधित क्षेमधूर्ति नृपती * संग्रामको खातिर ।
तिनको सात्यकिले अनेक शरले * काटी गिराए शिर ॥
हे राजन् ! रणको सुयोधनजिले * देखे नराम्रो स्थिति ।
भेजे सात सय प्रधान बलिया * छानेर योद्धा रथी ॥८०

छेकी धर्म-कुमारलाइ सबले * मार्ने इरादा लिए ।
आई पाण्डव वीर दुर्धर छिटै * तिन्लाइ मारीदिए ॥
हज्जारौं रथका सवारहरूको * सेना लिई दुर्धर ।
आए क्रोध गरेर वीर शकुनी- * संग्रामको खातिर ॥८१॥
त्यो देखेर भने युधिष्ठिरजिले * हे वीर माद्री-सुत !
होऊ मार्न भनेर दुष्ट शकुनी- * लाई तिमी उद्यत ॥
छोरा द्रौपदिका र सैनिकहरू * धेरै लिई साथमा ।
पौंचेथे, शकुनी जतातिर थिए * तत्काल त्यै स्थानमा ॥८२
एकै साथ गरे प्रहार सबले * शस्त्रास्त्र त्यै कारण ।
सोझै पाँच सहस्र अश्वपतिको * तिन्ले लिए जीवन ॥
भागेथे शकुनी डरी शिविरमा * सेना बचेका लिई ।
मारे तैपनि बेसरी द्रुपदका * छोरा लखेट्तै गई ॥८३
लागे भन्न गएर वीर शकुनी * हे मित्र ! दुर्योधन !
रोक्नोस् पाण्डव सैन्यलाइ पहिले * आफैं नआत्तोकन ॥
गर्नेछु हमला म सैनिक लिई * तिन्को पछाड़ी गई ।
गर्नू पर्छ लड़ाइँ हामीहरूले * दायाँ र बायाँ भई ॥८४
त्यो सल्लाह गरेर वीर कुरुले * चौतर्फ घेरा दिए ।
वर्साई हतियार शत्रुदलको * संहार गर्दै थिए ॥
त्यो देखेर समस्त पाण्डु-सुतका * सेनाहरूले पनी ।
वर्साए हतियार शत्रुदलको * संहार गर्छौं भनी ॥८५
जस्तो सम्मति पुत्रलाइ पहिले * हे भूपती ! बक्सियो ।
त्यस्को दुष्परिणामरूप रण त्यो * झन् बेसरी मच्चियो ॥
मर्यादा दुइ पक्षले त्यजिदिए * संग्रामको बन्धन ।
मार्थे सम्मुख जो पर्‍यो नयनले * हेर्दै नहेरीकन ॥८६

देखेको पहिले थिएन कहिल्यै * त्यो युद्ध जस्तो अरू ।
छाड़े पक्ष, विपक्ष चिह्न सहसा * सम्पूर्ण सेनाहरू ॥
भन्थे पक्ष छिटै गराउ टुकुरा * भाग्नेछ यो दुर्मति ।
लागे गिर्न कती धमाधम मरी * ती वीर हे भूपति ! ॥८७

मुर्दाले गज अश्व सैन्यहरूको * बाहु र पाऊ शिर ।
ढाकेको पृथिवी थियो नरपते ! * सम्पूर्ण चारै तिर ॥
सेना मर्न गई दुवै तरफका * जो देखिएथ्यो स्थिति ।
हुन्थ्यो भान त्यहाँ ठुलो प्रलयको * प्रत्यक्ष हे भूपति ! ॥८८

दुर्योधनको पलायन, सेनासहित शकुनिको वध —

योद्धा सात्यकि औ सुयोधन दुवै * गर्जेर लड्दै थिए ।
ती दुर्योधनका प्रहारहरूले * श्री सात्यकी आत्तिए ॥
त्यो देखेर समस्त पाण्डवहरू * उर्लेर आईकन ।
थाले गर्न प्रहार विह्वल भए * तत्काल दुर्योधन ॥८९

भागी दूर गए पनी लुकि-लुकी * त्यो युद्ध हेर्दै थिए ।
सेना अर्जुनले बचे जति सबै * निर्मूल पार्दै गए ॥
योद्धा भीम बजार्दथे घुमि-घुमी * ठूलो गदा वेगले ।
आफ्ना पुत्रसमेत, चोट परि त्यै * योद्धा सुशर्मा ढले ॥९०

छोरा श्री धृतराष्ट्रका सय जना- * मध्ये थिए चौध जो ।
लागी श्रेष्ठ गदा वृकोदरजिको * उद्धार तिन्को भयो ॥
त्यो वेला शकुनी कुमार सहसा * देखा परे युद्धमा ।
मारे दुष्ट उलूकलाइ तिनले * हानी गदा माथमा ॥९१

छोरो मारिदिए भनेर शकुनी * आए रिसाईकन ।
त्यो देखी सहदेवजी अघिसरी * थाले त्यहाँ गर्जन ॥

त्यो वेला शकुनी रिसाइ शरको * वर्षा जती गर्दथे ।
तो सारा सहदेव वीर बिचमै * टुक्रा गरी फाल्दथे ॥९२
त्यो देखी शकुनी लिएर करमा * शक्ती ठुलो गर्जिए ।
त्यो शक्ती सहदेवले करसहित् * काटी खसालीदिए ॥
काटीयो जब हात वीर शकुनी * लाचार साह्रै भए ।
त्य माथी सहदेव झन् शर तिखा * छानेर थप्दै थिए ॥९३॥
हे पापी शकुनी ! जितिस् अघि जुवा* जो जालसाजी गरी ।
त्यस्को दुष्परिणायको फल मिठो * चाख्नूपर्‍यो बेसरी ॥
पासा होइन यो गरिस् जति ठुलो * आशा सबै त्यो गयो ।
जाने श्री यमराजको नगरमा * तेरो तयारी भयो ॥९४



शकुनी र उलूकको वध

गर्दै वाक्शरको प्रहार पहिले * छेड़ी नराम्रो गरी ।
काटे गर्दन बाणले शकुनिको * पच्छारिए बेसरी ॥

तिन्का मित्र तथा सहायक अरू * सेनाहरू जो थिए ।
तिन्लाइ सहदेवले यमपुरी * चाँडै पठाइदिए ॥९५॥
राजन् ! सैन्य थिए सबै हजुरका * एग्घार अक्षौहिणी ।
सारा सैन्य मरे लड़ी समरमा * बाँचेन योटा पनि ॥
देखे सञ्जयलाइ त्यै बखतमा * श्री सात्यकीले जब ।
आँटे मार्न झिकेर खड्ग सहसा * श्रीव्यास आए तब ॥९६
'छैनन् यी वध-योग्य' व्यास मुनिले * आज्ञा भएको सुनी ।
छाड़े सात्यकिले मलाइ त्यहिँ नै * हे मित्र ! जाऊ भनी ॥
सोधे श्री धृतराष्ट्रले जब मरे * सेना भएका जति ।
त्यो दुर्योधनले लियो समरमा * कस्तो र कुन दुर्मति ९७
लागे सञ्जय भन्न आफुतिरको * संहार देखीकन ।
भागे एक गदा लिए करमा * तत्काल दुर्योधन ॥
द्रौणी, श्री कृतवर्म, औ कृपजिले * चौतर्फ खोजी गरी ।
देखेनन् कुरुराजलाइ र हिंडे * ती खोज्न सोही घरी॥९८
श्री दुर्योधनले मलाइ पथमा * भेटेर सोध्नूभयो ।
हाम्रो तर्फ प्रधान वीरहरुमा * बाँचीरहेको छ को ?
तिनको उत्तरमा सबै गरिदिएँ * देखे जती वर्णन ।
देखी दुर्गति श्री सुयोधनजिको * रोएँ दुखी भैकन ॥९९॥
लागे भन्न तिनी—पिताकन गई * सम्झाउनू सञ्जय !
मेरो दुर्मतिले भयो समरमा * हामीहरूको क्षय ॥
बाँधी यो जललाइ मन्त्रबलले * ऐह्ले यहीं बस्तछु ।
के गर्नू छ अगाड़ि त्यो विषयमा * एकान्तमा सोच्तछु॥१००
जस्को कीर्ति थियो तिनै भुवनमा * विख्यात राम्रो गरी ।
त्यस्ले बाँच्नु वृथा छ यो स्थितिमहाँ* मिल्नेछ शान्ती मरी ।

जाऊ सञ्जय ! हस्तिनापुर त्यहाँ * गर्नू सबै वर्णन ।
हाम्फाले रहमा यती भनिसकी * ती वीर दुर्योधन ॥१॥
द्रौणी, श्री कृतवर्म, औ कृप त्यहीं * आएर संयोगले ।
श्री दुर्योधनको परिस्थिति भने * तिनलाइ विस्तारले ॥
फर्के सञ्जय हस्तिनापुर पता * तिनको बताई यता ।
ती दुर्योधनलाइ पाण्डवहरू * खोज्थे शिविर्मा उता ॥२
नारी, बालक, वृद्ध बान्धव त्यहाँ * जो जो बसेका थिए ।
जिम्मा लाइ युयुत्सुको तिनिहरू- * लाई पठाईदिए ॥
सन्ध्याकाल हुँदा पुगे रथहरू * ती राजधानी जब ।
देखे बाहिर नै दुखी विदुरले * आईपुगेका सब ॥३॥
रात्रीमा सब ती बसे विदुरको * सल्हाह मानी घर ।
भोलीपल्ट उठेर अन्ध-नृपको * साम्ने भए हाजिर ॥
सोधे श्री धृतराष्ट्रले समरको * कस्तो छ हाम्रो स्थिति ।
सारा संजयले भने-मरिसके * सेना र योद्धा जति ॥४॥
त्यो सुन्दा धृतराष्ट्र दुःखित भई * क्यै बेर मूर्छा परे ।
आयो चेत फिरेर केहि क्षणमा * रोएर चिन्ता गरे ॥
जस्का बन्धु, पिता मरे सुत, पती * संग्राममा ती पनी ।
रोए माथ पिटेर हात दुइले * हा हा ! विधाता ! भनी ।५

शल्यपर्व समाप्तम् ।



# महाभारत गदापर्व

प्रारम्भः

दुर्योधन रहमा लुक्नु र पाण्डवहरूले भेट्टाउनु—

वैशम्पायनले भने शुभ कथा * हे भूप! जन्मेजय।
सोधे श्री धृतराष्ट्रले भइ दुखी * रोएर हे सञ्जय!
सारा वीरहरू मरे समरमा * हाम्रा र उन्का जब।
के गर्दैछ विचार कुन् विषयमा * छोरो सुयोधन् अब ॥१॥
लागे संजय भन्न—पाण्डवहरू * थाकीसकेका थिए।
आफाफ्ना गइ ती सबै शिविरमा * विश्राम गर्दा भए।
बस्थ्ये जुन् रहमा सुयोधन लुकी * पानी गरी स्तम्भन।
द्रौणी श्री कृतवर्म औ कृप त्यहीं * पौंचेर तीनै जन ॥२॥
लागे भन्न बताइ नाम तटमा * हे वीर दुर्योधन!
हामी जीवित छौं, लुकेर डरले * बस्छौ वृथामा किन?
मारी पाण्डवलाइ राज्य गर वा * जाऊ मरी स्वर्गमा।
लुक्नू कायर झैं हुँदैन तिमिले * आएर यो स्थानमा ॥३
हाम्रा वीर मरे उता पनि सबै * सेनाहरू सिद्धिए।
हाम्रो जीत हुनेछ अन्तिम बुझी * संग्राममा मन् दिए ॥
तिन्को बात सुनेर उच्च स्वरमा * बोले ति दुर्योधन।
लाग्यो हर्ष मलाइ मित्रहरूको * पाएर यो दर्शन ॥४॥
थाकें, घायल छु म आज यहिं नै * विश्राम गर्छु बसी।
भोली युद्ध हुनेछ शत्रुसँग लौ * हे मित्र! घूँड़ा धसी ॥

तीनै वीर बसे अली पर गई * देख्नन् भनी भीतिले ।
वार्तालाप सुनेछ हे नरपते ! * तिनका कुनै व्याधले ५॥
त्यो सम्वाद पुग्यो युधिष्ठिरकहाँ * त्यो व्याधद्वारा जब ।
पायो सम्पति बेसरी खुशि भए * सेना सबै पाण्डव ॥
आए धर्म-कुमार श्रेष्ठ रथमा * भाई र सेना लिई ।
बोल्ले त्यो रहको उभेर डिलमा * गर्जेर क्रोधित् भई ॥६॥



दुर्योधन रहमा लुकेका

यो संहार गराइ बन्धुहरूको * हे वीर दुर्योधन !
गर्छौ यत्न लुकेर बाँच्न जलमा * निर्लज्ज जस्तो किन ?
आऊ लड्न तिमी प्रसन्न मनले * हे वीर ! संग्राममा ।
हामीलाइ जितेर राज्य गर वा * जाऊ मरी स्वर्गमा ॥७॥
गर्थ्यौ वीर बनी घमण्ड पहिले * ऐह्ले गयो त्यो कहाँ ।
बिर्स्यौ कि अधिका कुराहरु सबै * सम्झीरहेछौ यहाँ ॥

त्यस्तो हाँक सुनेर धर्म-सुतको * बोले ती दुर्योधन ।
आएँ केवल भूपते ! म त यहाँ * विश्राम गर्नाकिन ॥८॥
निस्की यो रहबाट भोलि खुशिले * लड्नेछु हे भूपति !
जाउन् आज सबै फिरी शिविरमा * आईरहेऊन् जति ॥
तिनको बात सुनी युधिष्ठिरजिले * हाँसेर भन्दा भए ।
यो अट्ठारै दिनमा भए जति सबै * राजाहरू मारिए ॥९
खोज्छौ मार्न लड़ाइँमा कि तिमिले* बाँकी बचेका पनी ।
बाँकी युद्ध समाप्त पार अहिले * कर्तव्य हो यो भनी ॥
तिनको बात सुनी सुयोधनजिले * भन्दा भए सादर ।
जस्का निम्ति भएँ म यो समरमा * उत्साहले तत्पर ॥१०॥
योद्धा कौरव ती लड़ीकन मरे * बाँचेन कोही जब ।
गर्नोस् राज्य हजूर नै म वनमा * जान्छु खुशीले अब ॥
तिनको बात सुनेर धर्म-सुतले * फेरी भने झोंक्किई ।
भन्छौ भोग्न मलाई आज पृथिवी * हे वीर ! दानी भई ॥११
पैह्लै नै तिमिले मलाइ जति जे * मागें, दिएको भए ।
बाँच्थे भूपति, वीर सैनिक जती * यो युद्धमा मारिए ॥
बोल्छौ कायर झैं बसेर जलमा * आऊ छिटै बाहिर ।
हाम्रो साथ लड़ेर स्वर्गपुरिको * बाटो खुलासा गर ॥१२
हामीले तिमिलाई यो वखतमा * छाड़ीदिए तापनी ।
गर्नेछौ तिमि यत्न निश्चय कुनै * साटो म फेर्छु भनी ॥
सोही कारणले विनाश नगरी * तिम्रो, म छाड्छु कहाँ ।
ठान्छौ क्षत्रिय वीर हूँ यदि भने * निस्केर आऊ यहाँ॥१३
छेडदै बेसरी श्री युधिष्ठिरजिले * आज्ञा भएको सुनी ।
लागे भन्न त्यजेर भीति, मनमा * उत्साह राखी तिनी ॥

तिम्रा सैनिक छन् असंख्य सँगमा * शस्त्रास्त्रले सज्जित ।
एक्लो, घायल, शस्त्र-हीन कसरी * लड्ने म लाखौंसित॥१४
सक्छु लड्न तथापि वीर क्रमले * एकेक आए भने ।
निस्कन्छु जलबाट बात सब यो * स्वीकार गर्छौं भने ॥
पाँचै भाइ र सैन्यलाइ क्रमले * तत्काल मारीकन ।
जो जो बन्धु, हितू मरे नरपते ! * तिन्को म तिर्छु ऋण॥१५
तिन्को तर्क सुनेर धर्म-सुतले * फेरी भने रोषले ।
मार्‍यौ त्यो अभिमन्युलाइ रणमा * कुन् धर्म वा नीतिले ॥
छौं भाईहरू पाँच लौ लड़ तिमी * क्वै एकका साथमा ।
लड्दा मार्न सक्यौ भने विजय यो* तिम्रै भयो युद्धमा ॥१६
बोल्दैनन् अरु कोहि दर्शक बनी * हेरीरहन्छौं सब ॥
आऊ यो जलबाट बाहिर तिमी * शंका नमानी अब ।
वार्तालाप सुनेर वीर दुइको * भन्नूभयो कृष्णले ।
यस्तो हाँक दिनूभयो हजुरले * तिन्लाइ कुन् हेतुले ॥१७
छैनन् भीम पनी बराबर भने * तिन्को गदा युद्धमा ।
अर्को वीर छ को बताउनुहवस् * जित्ने तिनै लोकमा ॥
भाई चारमहाँ कुनैसँग पनी * लड्छु भनेका घरी ।
होला कुन् स्थिति लौ स्वयं हजुरले* सोच्नूहवस राम्ररी॥१८
पर्नू जङ्गलमा र गर्नु अघि झैं * सानन्द भिक्षाटन ।
भाग्नन् राज्य ठुलो बनी नरपती * यी वीर दुर्योधन ॥
कुन्तीका सुतले रहेनछ बुझें * राजा हुनू भाग्यमा ।
मेरो यत्न पनी हुनेछ कि वृथा * भन्ने बुझें चित्तमा ॥१९

गदायुद्धमा भीमसेनले दुर्योधनको तिघ्रा भाँच्नु :—

राजन् ! पाण्डवको सुनीकन तिखा* बाग्बाण दुर्योधन ।
निस्के एक गदा लिएर, जलको * काटी सबै स्तम्भन ॥
इच्छा गर्दछ लड्न जो मसित त्यो* आओस् अगाड़ी सरी ।
येती बात भनेर मत्त गज झैं * डुल्दा भए सुस्तरी ॥२०
तिनको हाँक सुनी वृकोदर पनी * आए गदा लीकन ।
राखी काँधमहाँ मृगेन्द्रसरि नै * थाले तिनी गर्जन ॥
लड्ने मनसुबले तयार ति दुवै * योद्धा भएथे जब ।
पाल्नु भो बलराम तीर्थहरूमा * डुल्दै अकस्मात् तब ॥२१
श्री दुर्योधनले र पाण्डु-सुतले * श्री कृष्णजीले पनी ।
राखी आसनमाथि पूजन गरे * हुन्न मान्य मेरा भनी ॥
सोधेथे सबले मिली कुशलको * वार्ता खुशीले त्यहाँ ।
गर्नोस् वर्णन तीर्थको, दिन कती * बस्नूभएथ्यो कहाँ ॥२२
तिनको प्रश्न सुनेर श्री बलजिले * भन्नूभयो सादर ।
छन् धेरै थरि तीर्थ विज्ञजन हो ! * सम्पूर्ण पृथ्वीभर ॥
लड्छन् पाण्डव वीर कौरव भनी * मैले सुनेथें जब ।
वेला प्राप्त भएछ नाश हुनको * भन्ने बुझेथें तब ॥२३॥
तिस्कें डुल्न भनेर तीर्थहरुमा * त्यो पुष्य नक्षत्रमा ।
आएँ रोहिणिमा डुलीकन सबै * फर्केर यो स्थानमा ॥
हे राजेन्द्र ! समन्तपञ्चक ठुलो * हो तीर्थ त्यै कारण ।
त्यस्मा स्नान गरेर श्राप शशिको * सारा भयो मोचन ॥२४
मेरा यी दुइ शिष्यको समरको * संवाद ऐल्हे सुनी ।
चिन्ताग्रस्त थिएँ तथापि म हिंडें * यो युद्ध हेर्छु भनी ॥

जुन् हो तीर्थ समन्तपञ्चक त्यहाँ * जो मर्छ संग्राममा ।
गर्ला त्यो सुख भोग हे नरपते ! * आनन्दले स्वर्गमा ॥२५
सोही कारणले लड्डुन् त्यहिं गई * यी भीम, दुर्योधन ।
यो आज्ञा दुइतर्फले बलजिको * माने खुशी भैकन ॥
हे राजन् ! बलराम-कृष्णसँगका * सेना तथा पाण्डव ।
आए तीर्थ समन्तपञ्चकमहाँ * उत्साह मानी सब ॥२६
आज्ञाले गुरुको गदा लिई डटे * श्री भीम, दुर्योधन ।
चारैतर्फ खडा भए जनहरू * त्यो युद्ध हेर्नाकन ॥
जस्तै रावण-राम, कैटभ मधु * सुग्रीव, बाली भए ।
जस्तै ती उपसुन्द, सुन्द बलिया * पैह्ले लड़ेका थिए ॥२७
त्यस्तै भीम तथा सुयोधन दुवै * योद्धा प्रतापी हुँदा ।
देखाए रणको बढ्याइँ दुइले * आफ्नो घुमाई गदा ॥
गर्जन्थे कहिले अघिल्तिर बढी * कैह्ले पछी सर्दथे ।
खोज्दै दाउ प्रहारको घरि-घरी * ती क्रोधले हेर्दथे ॥२८
हुन्थ्यो घोर कठोर शब्द कहिले * तिन्को गदा बज्रँदा ।
केही बेर बसे बिसाउन दुवै * थाकीसकेका हुँदा ॥
बोले भीम रिसाइ त्यै बखतमा * हे दुष्ट दुर्योधन !
हामीलाइ दिइस् जती दुख अघी * तैंले विना कारण ॥२९॥
त्यस्को अन्त हुनेछ आज रणमा * तेरो लिई जीवन ।
पाउन्नस् अब हस्तिनापुरमहाँ * हे दुर्मती ! फर्कन ॥
श्री दुर्योधनले भने त्यति सुनी * साह्रै रिसाईक ।
के तेरो डर मान्दछु, म पनि हूँ * भूपाल दुर्योधन ॥३०॥
बोल्छस् व्यर्थ बढी कुलाधम ! कती * शेखी छ तेरो जति ।
मैले तोडिदिनेछु आज बुझिले * सम्पूर्ण हे दुर्मति !

गर्दै बात उठेर हाँक सहसा * श्री भीमलाई दिए।
घाँटीमा अनि वेगपूर्वक गदा * तिन्नले बजार्दा भए ॥३१
तिन्नको चोट खपी वृकोदरजिले * हाने गदा वेगले।
ठूलो चोट छले सुयोधनजिले * थापी गदा धैर्यले ॥
श्री दुर्योधन-भीमका जब गदा * ती माझमा जुड्दथे।
ठूलो वज्र परे सरी हुन गई * प्राणी सबै डर्दथे ॥३२॥
खोज्दै दाउ प्रहारको र कहिले * घुम्थे दुवै फन्फनी।
गर्थे यत्न गदा बजार्न शिरमा * यस्लाइ मारौं भनी ॥
ती दुर्योधनको गदा जब गिऱ्यो * श्री भीमको माथमा।
लोटे फन्न घुमेर मूर्छित भई * क्यै बेर ती भूमिमा ॥३३
आयो चेत फिरी उठेर तिनले * हाने गदा बेसरी।
लागी चोट ठुलो सुयोधन गिरे * तत्काल मूर्च्छा परी ॥
मूर्छाबाट उठे तुरुन्त तर ती * मौका दुवै खोज्दथे।
बारंबार प्रहार उत्तम गदा * ती माथमा गर्दथे ॥३४
हे राजन् ! ति दुवै समान बलका * योद्धा प्रतापी थिए।
गर्दा कौशल युद्धको दिन त्यसै * पूरा बिताई दिए ॥
त्यो देखेर ठटाइ जाँघ हरिले * संकेत जो बक्सियो।
त्यो संकेत बुझी वृकोदरजिको * उत्साह बढ्दै गयो ॥३५॥
ती वृत्रासुरको र स्वर्गपतिको * जस्तो लडाइं भयो।
त्यस्तै ती दुइ वीरको पनि त्यहाँ * हे भूपती ! देखियो ॥
लागी चोट अनेक देहभरिमा * धारा बग्यो रक्तको ॥
देखिन्थ्यो दुइको गुराँस फुल झैं * रातो सफा देह त्यो ॥३६
धेरै बेर लडी परस्पर दुवै * थाकीसकेका थिए।
श्री दुर्योधनको प्रहार सहजै * ती भीम छल्दै गए ॥

केही बेर लडेर सम्झि हरिको * संकेत श्री भीमले ।
हाने एक गदा कठोर स्वरमा * गर्जी ठुलो वेगले ॥३७
छल्ने यत्न गरे निकै तर गदा * लाग्या दुवै जाँघमा ।
तिघ्रा चूर भई सुयोधन गिरे * त्यो चोटले भूमिमा ॥
पृथ्वी कम्प गरी ठुलो रुख सरी * लोटे सुयोधन् जब ।
हाँसे सोमक वीर पाण्डव तथा * पाञ्चाल योद्धा सब ॥३८
योद्धा भीम गएर झट्ट नजिकै * हेलाँ गरी बेसरी ।
लागे भन्न चलाइ लात शिरमा * साह्रै नराम्रो गरी ॥
जूआमा छलले लिएर पहिले * हाम्रो सबै वैभव ।
जाओ मूढ र स्याल हो वनमहाँ * तैंले भनीथिस् जब ॥३९
बिर्सेको अझ छैन त्यो हृदयमा * बिझ्दैछ काँढा सरी ।
मौका आज मिल्यो म लिन्छु बदला * दुष्कर्मको राम्ररी ॥
जो दुष्कर्महरू गरे अघि सबै * त्यस्को गरी वर्णन ।
ती दुर्योधनलाई लात शिरमा * हाने रिसाईकन ॥४०॥
चाला उद्धत भीमको बलजिले * देख्नूभएथ्यो जब ।
भन्नूभो अति क्रोधले सुन कुरा * हेर्नेहरू हो ! सब ॥
गर्नू युद्ध बुझेर धर्म जनले * भन्छन् सबै शास्त्रले ।
कस्ले गर्छ अधर्म युद्ध जसरी * ऐल्हे गरे भीमले ॥४१॥
मैले खप्न सकीनँ शिष्य यी दुवै * मेरा भए तापनी ।
मार्छु निश्चय भीमलाइ हलले * हो दुष्ट पापी भनी ॥
त्यस्तो बात भनेर क्रोधित भई * श्री राम दौडे जब ।
पक्री पाउ दुवै तुरुन्त हरिले * सम्झाउनूभो तब ॥४२॥
आगो लाइदिनू र घोर विषका * लड्डू खिलाई दिनू ।
इज्जत द्रौपदिजो सभाबिच लगी * साम्नू सबैको लिनू ॥

जूवामा लिनु सम्पती छल गरी * वन्मा निकालीदिनू ।
जो दुष्कृत्यहरू गरे अघि कती * बिस्तारले त्यो भनूँ ॥४३॥
भोग्दैछन् त्यहि पापको फल यिनी * सारा मरे कौरव ।
छन् हाम्रै भरमा सुपुत्र फुपुका * सम्पूर्ण यी पाण्डव ॥
जस्ले गर्छ सदैव धर्म पथको * आनन्दले पालन ।
त्यस्को कीर्ति हुनेछ वीर विजयी * भन्छन् सबै सज्जन ॥४४
सोही कारणले प्रसन्न मनले * माफी दिनू योग्य हो ।
त्यो बिन्ती हरिको सुनेर बलजी * द्वारावती पाल्नुभो ॥
देखी दुर्गति श्री सुयोधनजिको * लागी दया चित्तमा ।
लागे भन्न बसी युधिष्ठिर दुवै * बाहू धरी माथमा ॥४५॥
बाबू भीम ! भयो नमार यसरी * जे हो हुने त्यो भयो ।
हान्नू बान्धवलाइ लात तिमिले * साह्रै ठूलो पाप हो ॥
जस्का सैन्य थिए सुसज्जित सबै * एघार अक्षौहिणी ।
स्वामी ती सबका भएर रहने * हुन् श्रेष्ठ योद्धा यिनी॥४६॥
जस्का श्रेष्ठ अनेक भूवतिहरू * पाऊ सदा पर्दथे ।
जो सिंहासनमा बसेर सुरको * सम्मान भेट्टाउँथे ॥
त्यस्ता बान्धवलाइ आज यसरी * हिर्काउनू लातले ।
तिम्रो कीर्ति हुँदैन लोकभरिमा * विख्यात यो कार्यले ॥४७

धर्मराजले सान्त्वना दिनु— दुर्योधन र कृष्णको वार्तालाप :—

भाईलाइ हटाइ धर्मसुतले * रोएर दुःखी भई ।
सम्झाएर भने सुयोधनजिको * केही नगीचै गई ॥
हे बाबू ! पहिले गरिन्छ जति जे * दुष्कर्म संसारमा ।
त्यस्को दुष्फल भोग्नुपर्छ जनले * हे वीर ! यै लोकमा ॥४८॥

हाम्रो युद्ध भयो विधान विधिको * त्यस्तै हुनाले गरी ।
मानेनौ तिमिले पनी हित कुरा * हाम्रो कुनै त्यो घरी ॥
गर्नेछौं सुख-भोग स्वर्गपुरिको * ठूलो तिमीले बरू ।
बस्नूपर्दछ हामिले नरकमा * मारी हितैषीहरू ॥४९॥
सारा वीरहरू मरे पृथिविका * बाँकी रहेनन् जब ।
तिन्को श्राप अवश्य हामिहरुले * पर्नेछ बोक्नू अब ॥
के भन्नू घरका समस्त विधवा * रोएर दुःखी हुँदा ।
आत्तिन्छु म असाध्य बन्धुहरुको * संहार त्यो सम्झँदा ॥५०॥
भोग्नूपर्दछ कर्मका फलहरू * आफ्ना सबैले भनी ।
रोए बात सुनेर धर्म - सुतको * राजा सुयोधन् पनि ॥
वार्तालाप सुनीसकेर दुइको * भन्नूभयो कृष्णले ।
यो संग्राम जिती गरे प्रण पुरा * यी पार्थले, भीमले ॥५१॥
यो दुर्योधन दुष्टको मरणले * सारा गयो कण्टक ।
मुर्दालाइ मुसारि हुन्न अब क्यै * हे धर्मका रक्षक !
गर्नू पर्दछ हस्तिनापुर गई * यो जीतको उत्सव ।
श्री दुर्योधनले सुने त्यति कुरा * ती कृष्णजीको जब ॥५२॥
आधा मात्र उठी तिखा नयनले * हेरी नराम्रो गरी ।
तिम्रो नै छलले गए समरमा * सम्पूर्ण राजा मरी ॥
तिम्रै संमतिले वृकोदरजिले * हाने कटीको मनी ।
सक्थे मार्न मलाइ नत्र कसरी * हानी गदाले तिनी ॥५३
राख्यौ संमुख भीष्मको जब लगी * पापी शिखण्डीकन ।
छाड्थे बाणहरू पछिल्तिर लुकी * त्यो युद्धमा अर्जुन ॥
सोही कारणले भयो पतन ती * ती भीष्मजीको जब ।
हात्ती मारी झुटो प्रचार रणमा * गर्दा भयौ केशव ॥५४॥

त्यागे अस्त्र सबै भयो समरमा * श्री द्रोणको त्यो गति ।
मारेथे अनि कर्णलाइ तिमिले * आफ्नू दिंदा संमति ॥
जित्नू यो छलले यि पाण्डु-सुतले * धिक्कार ! धिक्कार हो ।
गर्छु पालन धर्मको भनि-भनी * हिंड्नू पनि व्यर्थ हो ॥५५
यस्तो बात भनेर बस्न नसकी * लोटे धरामा तिनी ।
त्यस्को उत्तर बक्सियो मुसु-मुसु * हाँस्तै हरीले पनि ॥
जस्ता पापहरू गऱ्यौ सुजनको * शिक्षा नमानीकन ।
त्यस्कै दुष्परिणामले हुन गयो *यो हाल दुर्योधन ! ॥५६॥
आफूले अरूलाइ कष्ट दिनमा * पैह्ले हुनू तत्पर ।
अर्काले पनि क्यै गऱ्यो यदि भने * भन्नू अधर्मी नर ॥
गर्छन् यै रितका कि तर्क तिमिझैं * पापी तथा दुर्जन ।
तिम्रो यो बकवादले अब कुरा * बन्दैन दुर्योधन ! ॥५७
वाचामा सबलाइ बाँधि पहिले * वन्‌मा धपाई दिनु ।
एक्ली द्रौपदिलाइ सिन्धुपतिले * हर्ने इरादा लिनु ॥
एक्लो त्यो अभिमन्युलाइ सबले * घेरेर मारीदिनु ।
छन् तिम्रा अघिका कुकर्महरू जो *धेरै कती त्यो भनूँ ॥५८॥
यस्ता कर्महरू गरेर तिमि झैं * छन् बाँच्न खोज्ने जति ।
तिन्का निम्ति उपाय छैन अरू क्यै* हो अन्त्यमा यै गति ॥
त्यो आज्ञा हरिको सुयोधजिले * सारा सुनेथे जब ।
लागे भन्न भएर शान्त, मुखमा * हेरेर हे केशव ! ॥५९॥
गर्ने पालन धर्मको पृथिविमा * छन् श्रेष्ठ जो क्षत्रिय ।
तिन्को जुन् गति हो, मलाइ पनि त्यै*मिल्ने भयो निश्चय ॥
बस्नेछु म त बन्धुका सँग गई * आनन्दले स्वर्गमा ।
भोग्नन् पाण्डवले ठुलो नरकको * संकष्ट यै लोकमा ॥६०

तिन्को बात सुनेर फेरि हरिले * शिक्षा दिनुभो सुन ।
पापी, दुर्जनलाई दण्ड दिनु नै * हो धर्मको रक्षण ॥
जो कर्तव्य थियो, गरें समरमा * पूरा त्यसै कारण ।
पैह्लेका सब पाप संझ मनमा * हे वीर दुर्योधन ! ॥६१॥

पापी ह्लौ तिमिलाई मार्न सहजै * सक्तैनथे भीमले ।
मेरो संमति वा धनंजयजिको * पाए त्यही हेतुले ॥
त्यो आज्ञा हरिको सुनेर मुखले * बोल्नै सकेनन् तिनी ।
आफाफ्ना रथमा चढ़े शिविरमा * जाऊँ सबै लौ भनी ॥६२

वहाँ त्यो रथबाट पार्थ पहिले * आज्ञा हरीको सुनी ।
पूरा कार्य भयो भनी ध्वज त्यजी * भागे हनूमान् पनि ॥
वहाँथे रथबाट हे नरपते ! * आखीरमा केशव ।
लाग्यो दन्दनि बल्न श्रेष्ठ रथ त्यो * आगो विना नै सब ॥६३

सोधे अर्जुनले डढ्यो किन भनी * आश्चर्य मानीकन ।
तिन्लाई हरिले बताउनुभयो * त्यो बल्नको कारण ॥
लागी शस्त्र अनेक दग्ध पहिले * यो भै सकेको थियो ।
मैले यो रथलाइ योगबलले * रोकीदिंदा थामियो ॥६४

हाम्रो युद्ध भयो समाप्त रथ यो * चाहिन्न ऐह्ले भनी ।
मैले शक्ति खिचीलिंदा रथ बल्यो * आगो विना दन्दनी ॥
त्यो आज्ञा हरिको सुनी खुशि भए * जो जो थिए ती सब ।
जै जै कृष्ण ! भनी परे चरणमा * पाँचै जना पाण्डव ॥६५

गान्धारीको डर मानी पाण्डवहरूले कृष्णलाई हस्तिनापुर पठाउनु :—

राजन् ! सञ्जय हस्तिनापुरमहाँ * सानन्द पुग्दा भए ।
श्री दुर्योधनको परिस्थिति सबै * तिन्ले सुनाईदिए ॥

सम्झी ती पुरुषार्थ वीर सुतको * राजा र रानी पनि ।
रोएथे करले पिटी हृदयमा * हा पुत्र प्यारो भनी ॥६६
गर्थे शोक उता युधिष्ठिर यता * शंकित् हुनाले गरी ।
विन्ती श्री हरिको परी चरणमा * गर्दा भए राम्ररी ॥
हे गोविन्द ! हजूरको भइ दया * यो जीत हाम्रो भयो ।
योटा कार्य हजूरले गरिदिने * हे नाथ बाँकी रह्यो ॥६७
कोही छैन पतिव्रता पृथिविमा * गान्धार-कन्या सरी ।
मारे पुत्र भनेर श्राप रिसले * तिन्ले दिए क्यै गरी ॥
हुन्छौं भस्म अवश्य हामिहरूमा * बाँच्तैन कोही पनि ।
तिन्को क्रोध गएर शान्त प्रभुले * पार्नोस् दयालु बनी ॥६८
यस्तो विन्ति सुनेर धर्म-सुतको * भन्नूभयो सादर ।
तिन्को क्रोध गएर शान्त गरुँला * पर्दैन मान्नू डर ॥
पाँचै भाइ तपाइँ आज निशिमा * यो फौजको बाहिर ।
बस्नूहोस् नदिको गएर तटमा * हे वीर ! केही पर ॥६९
त्यो सल्लाह गरेर सात्यकि तथा * पाँचै जना पाण्डव ।
सन्ध्याकाल हुँदा सबैकन लिई * पाल्नूभयो केशव ॥
पोंची 'ओघवती' नदी तटमहाँ * तिन्लाइ राख्नूभयो ।
आफूचाहिं नदी तरेर रथमा * त्यो रातमै पाल्नुभो॥७०
भेट्नूभो धृतराष्ट्रलाइ त्यहिं नै * श्री व्यास ज्ञानी थिए ।
पाई दर्शन कृष्णको सब जना * क्यै बेर खूशी भए ॥
पक्री श्री धृतराष्ट्रका कर दुवै * पैह्ले मुसारीकन ।
आँसू झारि स्वयं बुझाउनुभयो * ती भूपतीको मन ॥७१॥
जान्नूहुन्छ हजूरले पृथिविका * प्राणीहरूको गति ।
जस्को जे हुनुपर्छ जुन बखतमा * त्यो हुन्छ हे भूपति !

पैह्लेदेखि गऱ्यो, हुने समर यो * दुर्दैवले निश्चित ।
धेरै वीर, असंख्य सैनिक मरे * त्यस्मा नराम्रोमित ॥७२॥
यस्मा दोष ठुलो दुवै तरफको * मैले कुनै देख्दिनँ ।
कस्ले सक्तछ गर्न दैव-गतिको * संसारमा लंघन ॥
व्यर्थै बन्धु मरे भनेर अहिले * छन् व्यग्र ती पाण्डव ।
माफी बक्सनुहोस् प्रसन्न मनले * ती पुत्रलाई अब ॥७३॥
देखी युद्ध हुने परिस्थिति सफा * तिन्‌लाइ लागी डर ।
मागेथे जब ग्राम पाँच तिनिले * आजीविका खातिर ।
ईर्ष्या कौरवले गरी त्यति पनी * दिन्नौं भनेथे जब ।
यो संग्राम भयो र दैवगतिले * सारा मरे कौरव ॥७४॥
ईर्ष्या, द्रोह, अधर्म छैन मनमा * ती पाण्डुका पुत्रको ।
गर्नन् आदर ती पिता सदृश नै * आई प्रजा, नाथको ॥
सम्झाई धृतराष्ट्रलाइ त्यसरी * सद्धर्म चर्चा गरी ।
गान्धारीतिर फर्कि नम्र स्वरले * बोल्नूभयो श्रीहरि ॥७५॥
मान्दैछन् डर हे सती ! हजुरको * पाँचै जना पाण्डव ।
तिन्‌लाई दिनुपर्छ माफ खुशिले * आउन् यहाँ ती सब ॥
मैले दूत भई भनें हित कुरा * धेरै, सभामा तर ।
मानेनन् कुरुले, मलाइ त्यहिं नै * बाँध्ने गरे तर्खर ॥७६॥
भन्नूभो पहिले स्वयं हजुरले * हे मूढ़ दुर्योधन !
खोज्दैछस् किन फाल्न व्यर्थ रणमा * आफ्नू सुखी जीवन ॥
गर्छन् जो उपकार धर्म-पथको * राम्रो गरी पालन ।
तिन्‌को जीत अवश्य हुन्छ रणमा * हार्दैन त्यो सज्जन ॥७७॥
यस्तो बात सुनी सबै हजुरको * केही नबोली गए ।
सोही सत्य भएर आज रणमा * सम्पूर्ण ती मारिए ॥

भोग्छन् निश्चय कर्मको फल सबै * प्राणीहरू लोकमा ।
पाउन्नन् फल क्यै कुकर्महरूको * कोही कुनै कालमा ॥७८॥
लिन्छन् पक्ष अधर्मको समरमा * जो छन् सदा दुर्जन ।
गर्छन् पालन धर्मको पथ सदा * आनन्दले सज्जन ॥
देवी ! धर्म-कुमारको हृदयमा * जस्तो दया धर्म छ ।
भन्नु व्यर्थ म ठान्दछु हजुरमा * त्यो बात जाहेर छ ॥७९॥
कुन्तीदेखि बढी सदा हजुरको * गर्नन् तिनी चाकरी ।
आउन्नन् दरबारमा डर ठुलो * मानेर ती यो घरी ॥
छैनन् पुत्र हजुरका पनि अरू * साध्वी ! त्यसै कारण ।
माफी बक्सनुहोस् प्रसन्न मनले * तिन्लाइ डाकीकन ॥८०॥
पानी-पिण्ड दिनन् मरेपछि पनी * ती पाण्डुका पुत्रले ।
आफ्नै पुत्र बुझेर आशिष दिनोस् * तिन्लाइ आनन्दले ॥
गर्नू पाण्डवमाथि हुन्न अब क्यै * सानू कुदृष्टि पनि ।
आउन्नन् अझ लाजले हजुरको * साम्ने डराई तिनी ॥८१॥
धेरै श्री हरिले बुझाउनूभयो * धर्मार्थ चर्चा गरी ।
त्यो आज्ञा हरिको सुनीकन भनिन् * तिन्ले रुँदै सुस्तरी ॥
मेरा पुत्रहरू सबै मरिसके * क्वै छैन बाँकी अब ।
बस्छन् राज्य गरेर यो पृथिविको * आनन्दले पाण्डव ॥८२॥
शिक्षा बक्सनुभो मलाइ अहिले * कल्याण गर्ने तर ।
मैले बिर्सन पुत्रलाइ सहजै * सक्छु कहाँ ईश्वर !
स्वामी सन्ततिहीन अन्ध र बुढा * दुर्भाग्यले पूर्ण छन् ।
आशा पाण्डवको त्यज्यौं यदि भने * निस्तार अर्को छ कुन् ॥८३॥
वाणी रुद्ध भएर बोल्न नसकी * लागिन् दुखी भै रुन ।
लाग्नूभो हरि फेरि दुःखित बुझी * तिन्लाइ संझाउन ॥

चर्चा धर्म र अर्थ दैवगतिको * सौभाग्य, दुर्भाग्यको ।
गन्धारीसित गर्नुभो प्रभुजिले * राम्रो गरी ज्ञानको ॥८४॥
खोज्छन् द्रोण-कुमार पाण्डु-सुतको * क्यै छिद्र त्यै कारण ।
ऐले जान्छु बिदा दिनोस् पछि यहाँ * भेट्नेछु आईकन ॥
त्यो आज्ञा हरिको सुनेर डरले * बोले दुवै दम्पति ।
रक्षा पर्दछ गर्नु पाण्डु-सुतको * तत्काल हे सद्गति ! ॥८५॥
दिन्छौं हामि बिदा प्रसन्न मनले * जानोस् भनेथे जब ।
ढोगी व्यास र दंपतीकन पनी * फिर्नू भयो केशव ॥
राता रात गरेर वायु - गतिले * पौंची उही स्थानमा ।
भन्नूभो सब बात अन्ध - नृपको * ती पाँचका साथमा ॥८६॥

द्रौणीजिको विषयमा जब कृष्णजीले ।
संकेत केही दिनुभो सुनि त्यो सबैले ॥
चर्चा गरेर निज धर्मविषे प्रधान ।
त्यो रातमा सब रहे अति सावधान ॥८७॥

दुःखी दुर्योधनले अश्वस्थामालाई सेनापति बनाउनु :—

सोधे श्री धृतराष्ट्रले समरमा * जंघा दुवै भाँचिई ।
लोटेथ्यो जब त्यो सुयोधन त्यहाँ * अत्यन्त दुःखी भई ॥
के-के कार्य गऱ्यो सुती-सुती त्यहाँ * कस्तो इरादा लियो ।
बाबू सञ्जय ! लौ सुनाउ निमिले * सम्पूर्ण सुन्छु म त्यो ॥८८॥
लागे संजय भन्न हे नरपते ! * जंघा टुटेथ्यो जब ।
गर्थे ती कुरुराज छट्पट ठूलो * संकष्ट पाई तब
द्रौणी, श्री कृतवर्म, वीर कृपजी * आए सुनी हाल त्यो ।
रोए तीन जना परिस्थिति त्यहाँ * देखेर ती वीरको ॥८९॥

ती दुर्योधनको अधीर मुखमा * देखी ठुलो वेदना ।
बोले द्रोण-कुमार वीर ! तिमिले * भोग्नूपर्‍यो यातना ॥
हे राजन् ! भवमा रहेनछ कुरा * आश्चर्यको क्यै पनि ।
स्वप्नैपछि विपत्ति जे जति परोस् * दुर्भाग्य आफ्नू भनी ९०
जो मूर्धन्य नरेशका वश थिए * संसारका भूपती ।
खाँदैछन् अहिले कसिंगर धुलो * यो भूमिमाथी सुती ॥
दासी-दास अनेक जुन् पुरुषको * सेवा सदा गर्दथे ।
जसको मान गरी सुरासुर सबै * पाऊमहाँ पर्दथे ॥९१॥
गर्थे जो सुकला सफा पलङ्मा * आनन्द मानीकन ।
गर्छन् छट्पट भूमिमा सुति तिनी * भूपाल दुर्योधन ॥
कस्ले सक्दछ गर्न दैव-गतिको * संसारमा लङ्घन ।
तिम्रो संकट घोर देखि बहुतै * दुःखी छ मेरो मन ॥९२
देखिन्छन् जति वस्तु यो पृथिविमा * सम्पूर्ण छन् अस्थिर ।
यौटा मात्र रहन्छ हे नरपते ! * सद्धर्म आफ्नू स्थिर ॥
द्रौणीका सुनी बात हेरी मुखमा * क्यै बेर पर्खीकन ।
लागे भन्न सम्म्याइ केश करले * रोएर दुर्योधन ॥९३॥
ठूला भूपहरू भए पृथिविमा * विख्यात जो सज्जन ।
छैनन् शेष कुनै पनी, हुन गए * ती कालका भोजन ॥
मेरा बन्धु समस्त सैनिक मरे * एघार अक्षौहिणी ।
त्यसको दुःख मलाइ छैन मनमा * हो दैव-लीला भनी ॥९४
जन्मेका जति मर्दछन् नियम जो * पक्का छ संसारको ।
बेला प्राप्त भएछ मित्रगण हो ! * मेरो पनी आज त्यो ॥
मेरा निम्ति लड़ाइँमा पनि ठुलो * संकष्ट खप्नूभयो ।
भेट्नू आइ यहाँ तपाइँहरूको * सत्स्नेह,सौजन्य हो ॥९५

यस्तो हालतमा सुती समरमा * बाँचिन्न धेरै दिन ।
आशीर्वाद बरू मलाइ दिनुहोस् * त्यागछु दुखी जीवन ॥
हेरी मात्र रहे त्यती भनिसकी * बोल्नै सकेनन् जब ।
बोले द्रोण-कुमार क्रोधित भई * हे मित्र ! सुन्नोस् अब ॥९६
जस्तो कष्ट भयो मलाइ छलले * मार्दा पिताजीकन ।
त्यो भन्दा छ बढी लिनू छल गरी * यो वीरको जीवन ॥
यी! दुर्योधनलाइ घोर छलले * यो कष्ट कस्ले दियो ।
त्यसको वंश विनाश गर्दछु, मँगै * सम्पूर्ण पांचालको ॥९७
यस्तो गर्न सकीनँ क्यै गरि भने * गर्छु म ऐहे प्रण ।
मैले भोग्नुपरोस् ठुलो नरकमा * संकष्ट धेरै दिन ॥
तिनको त्यो प्रणले निकै खुशि भए * भूपाल दुर्योधन ।
मागी भट्ट बिदा पसे वनमहाँ * तत्काल तीनै जन ॥९८

मानेर पाण्डु-सुतको भय खूब मन्मा ।
एकान्तमा पुगि बसे सब घोर वन्मा ॥
संग्रामको विषयमा पनि बार बार ।
गर्दा भए प्रकट आफ्नु खुला विचार ॥९९॥

॥ महाभारत गदापर्व समाप्त ॥



# महाभारत सौप्तिकपर्व

प्रारम्भः

अश्वत्थामाको क्रूर विचार जानेर कृतवर्मा तथा कृपाचार्यले दैवको प्रबलता बताउनु—

सोधे श्री धृतराष्ट्रले भई दुखी * अत्यन्त, हे सञ्जय !
पौंची जङ्गलमा ति वीरहरूले * कस्तो गरे निश्चय ?
राजाको सुनि प्रश्न संजयजिले * सन्ताप मानी अति ।
लागे भन्न बुझाइ चित्त नृपको * जाने बुझेको जति ॥१॥
हे राजन् ! कृतवर्म, वीर कृपजी * थाकीसकेका थिए ।
पल्टेथे जब भूमिमा तिनिहरू * चाँडै निदाई गए ॥
द्रौणीको मनमा कुतर्कहरूले * डेरा गरेको हुँदा ।
निद्रा लाग्न सकेन घोर प्रण त्यो * आफ्नो त्यहाँ सम्झँदा॥२
देखे काग अनेक एक रुखमा * विश्राम गर्दै थिए ।
उल्लूको सहसा प्रहार हुन गै * कौवा सबै मारिए ॥
देखेथे जब त्यो परिस्थिति त्यहाँ * श्री द्रोणका पुत्रले ।
आफ्नू निश्चयमा भए अटल झन्* राम्रो गरी क्रोधले ॥३॥
सेना पाण्डवतर्फका शिविरमा * होलान् सुतेका सब ।
मार्नू पर्छ गएर आज निशिमा * सम्पूर्णलाई अब ॥
थाकेका दुइ मित्रलाइ तिनिले * जागा गराई लिए ।
आफ्नू निश्चय जो थियो हृदयमा* सारा सुनाईदिए ॥४॥
के गर्दा हित हुन्छ यो विषयमा * सल्लाह मागे जब ।
भन्नूभो कृपले विनम्र स्वरमा * आफ्नु इरादा सब ॥

जीवात्मा पुरुषार्थ, भाग्य दुइले * प्रत्येक आबद्ध छन् ।
यो मेरो मत हैन शास्त्रमत हो * ज्ञानी यही भन्दछन् ॥५
गर्दा उद्यम मात्र भाग्य नभए * पाइन्न त्यस्को फल ।
सिद्धी मिल्दछ भाग्य उद्यम दुवै * भेला हुँदा उज्ज्वल ॥
'मिल्ने हो फल भाग्यले' भनि कुनै * उद्योग गर्दैन जो ।
त्यो झैं मूर्ख ठूलो तिनै भुवनमा * खोजेर पाइन्छ को ? ६॥
तस्मात् त्याग्न हुँदैन विज्ञ जनले * आलस्यले उद्यम ।
त्यस्मा दैव भई सहाय फल त्यो * भेट्टाउला उत्तम ॥
जस्मा क्रोध, घमण्ड, लोभ, मद औ * ईर्ष्या र आलस्य छ ।
त्यस्लाई सुख-शान्ति हुन्न कहिले * त्यो नर्कमा पर्दछ ॥७
मागौं श्री धृतराष्ट्रको, विदुरको * सल्लाह पैहे गई ।
जे भन्छन् त्यहि गर्नुपर्दछ सखे ! * आज्ञा उनैको लिई ॥
द्रौणीले सुनि बात वीर कृपको * बोले निकै रोषले ।
आफूलाइ 'म मूर्ख हूँ' भनि स्वयं * मान्नेछ कुन व्यक्तिले ८
सिद्धी प्राप्त गर्‍यो कुनै पुरुषले * क्यै युक्तिद्वारा भने ।
त्यस्को दृष्टिमहाँ हुँदैन अरु क्वै * प्राणी सुबुद्धी हुने ॥
बूढो, बाल, युवा र दुःख-सुखमा * संसारका जीवको ।
इच्छा भिन्न विचार हुन्छ मनको * हे मित्र ! प्रत्येकको ॥९
इच्छामाफिक कार्य गर्दछ भने * यौटा कुनै व्यक्तिले ।
राम्रो हो भनि त्यो समर्थन कहाँ * गर्छन् सबै विज्ञले ॥
जन्मै विप्र भएर श्रेष्ठ कुलमा * हे मित्र ! संयोगले ।
बोकें शस्त्र, भएर क्षत्रियसरा * यो आज दुर्भाग्यले॥ १०
मैले ब्राह्मण-धर्म फेरि कसरी * भन्नोस् गरौं पालन ।
मार्छु शत्रु सबै कि वीरगतिले * तैयार छु मारिन ॥

मार्दा भीष्म र कर्ण, शल्य अथवा * मेरो पिताजीकन ।
तिन्ले कुन् रण-धर्मको भन तिमी * गर्दा भए पालन ॥११
धृष्टद्युम्न, शिखण्डि, सोमक तथा * पांचाललाई पनी ।
मारी आज पिताजिको ऋण तिरी * साटो म फेर्छु भनी ॥
साह्रै नै हठको कुरा जब गरे * श्री द्रोणका पुत्रले ।
सम्झाए तिनलाइ क्रोधित भई * योद्धा कृपाचार्यले ॥१२
जस्को बुद्धि अशुद्ध हुन्छ अथवा * दुर्भावना पूर्ण छ ।
त्यस्ले धर्म र अर्थको र हितका * शिक्षा कहाँ मान्दछ ॥
कस्तै पण्डित होस् गुणी, विनयता * देखिन्न त्यस्मा भने ।
त्यो मान्दैन कुरा भने पनि जती * कल्याण आफ्नू हुने ॥१३
डाडू डुब्दछ दूधमा तर सखे ! * त्यो स्वाद के जान्दछ ?
पण्डितका संगमा रही हित कुरा * के मूर्खले मान्दछ ?
जिभ्रोले सब स्वाद जान्दछ छिटै * हे मित्र ! जुन् चालले ।
त्यस्तै बुझ्दछ विज्ञका हित कुरा * राम्रो गरी विज्ञले ॥१४
निर्दोषी तिमी वीर, ब्राह्मण गुणी * शास्त्रज्ञ जान्ने भई ।
पापी झैं झन क्रूर कर्म कसरी * गर्छौ अहीले गई ॥
आएको छु हजूरका शरणमा * भन्ने तथा दर्शक ।
लोटेको रथबाट, शस्त्र नलिने * नारी, बूढो, बालक ॥१५
यस्ताको वध गर्न तत्पर हुने * छन् दुष्ट, पापी जति ।
तिन्लाइ सुख शान्ति हुन्न कहिले * होला बरु झन् खति ॥
थाकेका हतियार राखि सुखले * सुत्ने ति प्राणीकन ।
ठान्छौ के तिमि योग्य मार्नु अहिले * तिन्लाइ आफैं भन ॥१६
थाकेका तिमि छौ र घायल पनी * विश्राम ऐल्हे गर ।
दिन्छौं मद्दत युद्धको गर तिमी * भोली उठी तर्खर ॥

तिम्रो मित्र म हूँ भने जति कुरा * त्यस्को गरे लङ्घन।
गर्नेछौ पहितो तिमी मनमनै * यै बात सम्झीकन ॥१७
तिन्ले धर्म र नीति युक्त हितको * शिक्षा दिएको सुनी।
लागे द्रोण-कुमार भन्न रिसले * झन् उग्र मूर्ति बनी॥
भन्नूभो अहिले कुरा हित हुने * मामा! मलाई जति।
हुन् ती सत्य भनेर मान्छु म पनी * सम्पूर्ण हे सद्मति! ॥१८
मानी धर्म प्रधान पक्ष दुइले * लड्दै गएका भए।
मेरा श्रेष्ठ पिताजीलाइ रणमा * ती मार्न सक्ने थिए?
मारे भीष्म र कर्णलाई तिनिले * कुन् धर्मको युद्धमा।
मारे धर्म बुझी सुयोधनजिको * तिन्ले गदा जाँघमा ॥१९
सम्झी यो तिनका अनीति मनमा * आगो बली दन्दनी।
गर्छु छट्पट बेसरी म अहिले * लाग्दैन निद्रा पनी॥
धृष्टद्युम्न, शिखण्डि, सात्यकि सबै-* लाई नमारीकन।
बाँधेको अहिले छ जो कवच यो * मैले कसै खोल्दिनँ ॥२०

आफ्नू सुनाइकन निश्चय त्यो समस्त।
राखेर अस्त्र रथमाथि गरी दुरुस्त॥
हिंड्दा भए रथ चढी जब द्रोण-पुत्र।
जाँदा भए, प्रण हुँदा सँग लागि मित्र ॥२१॥

मर्न लागेका अश्वत्थामालाई शिवजीले खड्ग दिनु :—

पौंचे वीरहरू जसै शिविरको * तीनै जना द्वारमा।
द्रौणी भित्र पसी भने तिमि दुवै * बस्नू यही स्थानमा॥
भाग्नेछन् जति भित्रबाट सबको * संहार गर्नू यता।
जो-जो छन् सबलाइ आज निशिमा * मार्छु म एक्लै उता ॥२२

द्रोणी भित्र पसे लिएर करमा * शस्त्रास्त्र हे भूपति !
देखे सम्मुखमा खड़ा हुन गयो * कालो कुनै आकृति ॥
जस्को तेज छ सूर्य झैं र शिरमा * छन् चन्द्रमा तेजिला ।
छाला उत्तम बाघको छ कटिमा * बाहू दुवै छन् खुला ॥२३
निस्कन्छन् प्रतिरोमबाट जसका * झिल्काहरू अग्निका ।
चम्कन्छन् हतियार उत्तम सबै * जस्का दुवै हातका ॥
सोध्यो आकृतिले तँ घोर निशिमा* के गर्न आइस् भनी ।
देखी रूप खड़ा भयंकर त्यहाँ * बोल्नै सकेनन् तिनी॥२४
केही बेर पखेर बाण रिसले * ती छाड्न लाग्दा भए ।
तिन्का बाणहरू भएर टुकरा * सम्पूर्ण खस्तै गए ॥
सारा अस्त्रहरू बृथा जब भए * श्री द्रोणका पुत्रका ।
लागे देख्न स्वरूप स्पष्ट तिनिले * चौतर्फ श्रीविष्णुका ॥२५
घुम्थ्यो कृष्णजीको सुदर्शन पनी * निर्बाध त्यै कारण ।
हेर्थे छक्क परेर व्याकुल हुँदै * आश्चर्य मानीकन ।
सिद्धी प्राप्त त्यहाँ कदापि नहुने * देखी नराम्रो स्थिति ।
थाले सम्झन ती कुरा कृपजिले * पैह्ले भनेका जति ॥२६
जो मान्दैन कुरा सदा हित हुने * आफ्ना गुणी मित्रको ।
त्यस्को हुन्छ बृथा परिश्रम म झैं * आपत्तिमा पर्छ त्यो ॥
निर्दोषी जनलाइ मार्दछु भनी * आएँ प्रतिज्ञा गरी ।
पूरा गर्न सकीनँ त्यो अझ ठुलो * आयो विपत्ती परी ॥२७
राजा, ब्राह्मण, मित्र, दुर्बल, गुरु * उन्मत्त, अन्धा जन ।
नारी, गाइ, सुपुत्र, भीरु, जड़ औ* बालो र कन्याकन ॥
यिन्लाइ कहिले नमार्नु जनले * भन्छन् सबै शास्त्रले !
रोक्यो आकृतिले मलाइ अहिले * आएर त्यै हेतुले ॥२८॥

सोध्नेछन् जब मित्रले किन तिमी * फर्केर आयौ भनी ।
रोक्यो आकृतिले भने पनि त्यहाँ * पत्याउनन्न के तिना ?
ठूलो आपतमा परें म अहिले * मनूं नमानूं भयो ।
हा दुर्दैव ! कसो गरौं, म मनमा * आशा गरेको गयो ॥२९
कार्यारम्भ गरी कुनै भय ठुलो * देखेर जो छाड्दछन् ।
त्यस्ता मानिसलाइ विज्ञ जनले * हो मूर्ख त्यो भन्दछन् ॥
आफ्नू मङ्गलको कुनै पथ यहाँ * मैले सफा देख्दिनँ ।
यौटा मात्र उपाय देख्दछु, दिने * यज्ञाग्निमा जीवन ॥३०
बाले अग्नि तुरुन्त निश्चय गरी * श्री द्रोणका पुत्रले ।
थाले गर्न बसेर श्री शिवजिको * आराधना प्रेमले ॥
रक्षा गर्नुहवस् परें विपदमा * साहै ठुलो हे शिव !
लाग्दा व्यर्थ अधर्मम पथ कुनै * देख्दिनँ राम्रो अब ॥३१

हे नीलकण्ठ, वृषभध्वज, शूलपाणि !
हे विश्वरूप, शिव, ईश्वर, दण्डपाणि !
हे भक्तवत्सल दयामय, दीनबन्धो !
हे शर्व, रुद्र, त्रिपुरान्तक, ईश, शम्भो ! ॥३२॥
सृष्टि-स्थिति-प्रलयका प्रभु एक स्वामी !
गर्छु अनेक पदमा, प्रभुको नमामि ॥
हे ब्रह्मचर्य व्रतपालक, हे पुरारि !
पर्छन् सदा चरणमा विधि औ मुरारि ॥३३॥
प्राणीहरू सकल छन् प्रभुका अधीन ।
जीवादिमा प्रभु पनी हुनुहुन्छ लीन ॥
बाघम्बरू छ कटिमा मृगको छ छाला ।
छन् नागरूप गहना, नरमुण्डमाला ॥३४॥

छन् चन्द्रमा विमल मस्तकमा हजुर्को ।
सक्नेछ राख्न विष कण्ठमहाँ अरू को ?
गर्छु प्रणाम प्रभुलाइ म भक्तिसाथ ।
यो अग्निमा अब चढाउँछु आफ्नू माथ ॥३५॥

गर्दै श्रीशिवको पुकार त्यसरी * त्यागछु भनी जीवन ।
आगोमाथि बसे कुमार गुरुका * बाँधेर पद्मासन ॥
तिन्को साहस देखि श्री शिवजिले * पैह्ले दिई दर्शन ।
भन्नूभो तिमि व्यर्थ जीवन दिने * उद्योग गर्छौ किन ॥३६

वेला पूर्ण भई स्वयं यिनिहरू * छन् मर्नमा तत्पर ।
दिन्छु खड्ग तिमी अघोर निशिमा * संहार यिन्को गर ॥
खूशी पार्नुभयो दिएर वर त्यो * ती भक्तलाई जब ।
द्रौणीको तनमा पसे नरपते ! * ज्योति स्वरूपी शिव॥३७

शक्ती श्री हरिको प्रदर्शन गरी * तिम्रो परीक्षा लिन ।
हे द्रौणी ! सब यो चरित्र अहिले * मैले गरेको सुन ॥
त्यो आज्ञा शिवको सुनेर सहसा * गर्जे तिनी हर्षले ।
पाए शस्त्रहरू दुटे जति सबै * श्री द्रोणका पुत्रले ॥३८

कालरूप अस्वत्थामाद्वारा सम्पूर्ण सेनाको संहार—दुर्योधनको अन्त्य :—

पाएथे वरदान शक्ति शिवको * त्यो खड्ग तिनले जब ।
लागे ठान्न तिनी अजेय म भएँ * पुग्नेछ इच्छा अब ॥
धृष्टद्युम्नकहाँ पुगी चरणले * हानी उठाईदिए ।
जुल्फी पक्ति घिसारि भूमितलमा * तिन्लाइ दल्दा भए ॥३९

निद्राको वशमा भएर पहिले * चिन्है सकेनन् तर ।
द्रौणीलाइ चिन्ही ठुलो डर भई * बोले तिनी सादर ॥

ब्रह्मन् ! शस्त्र लिई कुनै बरू छिटो * काटीदिनोस् गर्दन ।
मिल्ला उत्तम लोक शस्त्रवधले * यो कष्ट दिन्छौ किन ?४०
त्यस्तो विन्ति सुनेर द्रोण-सुतले * घाँटी थिची बेसरी ।
छातीमाथि घुँडा धसीकन भने * साह्रै नराम्रो गरी ॥
हत्या ब्राह्मणको गरी शुभ गति * खोज्ने तँ होस् दुर्जन ?
मार्नेछु किन शस्त्रले, दलि-दली * सिध्याउँछु जीवन ॥४१॥
यस्तो बात भनेर लात रिसले * हान्दै दली भूमिमा ।
धृष्टद्युम्नजिलाइ द्रोणसुतले * मारे त्यही स्थानमा ॥
त्यो कोलाहलले उठे नरपते ! * सेना त्यहाँका सब ॥
आफ्ना शस्त्र लिएर द्रोण-सुतको * त्यो वेग रोके जब ॥४२
छाड़ी अस्त्र अनेक वीरहरूको * संहार तिन्ले गरे ।
आई सम्मुख क्रोधपूर्वक लड़ी * श्री उत्तमौजा मरे ॥
रोकेथे तिनलाइ आई अहसा * योद्धा युधामन्युले ।
तिनलाई पनि झट्ट द्रोण-सुतले * काटीदिए खड्गले ॥४३
जो जो वीर परे अघिल्तिर मरे * बाँचेन यौटा पनि ।
आए पाँच कुमार द्रौपदिजिका * संग्राम गर्छौं भनी ॥
साक्षात् रुद्रस्वरूव खड्ग करमा * हल्लाउँदै क्रोधले ।
काटेथे शिर पाँच भाइहरूको * श्री द्रोणका पुत्रले ॥४४
लागे घुम्न लिएर खड्ग गढमा * हाहा मचाईकन ।
भेट्टाएर शिखण्डिको पनि लिए * त्यै खड्गले जीवन ॥
त्यै वेला सहसा युयुत्सु नजिकै * देखापरे तापनी ।
छोरा श्री धृतराष्ट्रका सकलमा * छन् एक बाँकी भनी॥४५
छाडेथे तिनलाइ द्वारतिरको * बाटो नलागीकन ।
भागेथे गढ़को पछिल्तिर गई * ती वीर सोही क्षण ॥

योद्धा पाण्डवतर्फका जति थिए * राजा र सेना त्यहाँ ।
द्रौणीले सबलाइ कत्तल गरे * एक्लै लड़ाईमहाँ ॥४६
तोड़ी बन्धन अश्व औ गजहरू * उन्मत्त सारा भए ।
बाटो निस्कनको नपाइ गढमै * चौतर्फ ती दौड़िए ॥
धेरै सैन्यहरू मरे नरपते ! * ती जन्तुले कुल्चिई ।
बाँचेका जतिलाइ द्रोण-सुतले * माथै लखेट्तै गई ॥४७
ढाकेथ्यो गढलाइ त्यो बखतमा * धूलो उड़ी बेसरी ।
बढ्दै गो अनि अन्धकार निशिको * साह्रै नराम्रो गरी ॥
सेनाले नचिन्हेर आपसमहाँ * बाबू र छोरा पनी ।
लागे मार्न ती अन्धकारबिचमै * यो शत्रु होला भनी ॥४८
निक्कै बेर लड़े मरे अब सबै * भन्ने विचारीकन ।
आगो लाइदिए समस्त गढमा * बल्दो भयो दन्दन ॥
पाएथे जब त्यो प्रकाश सहसा * भागे डराई कति ।
धेरै वीर मरे डढी अनलमा * लुक्ने र भाग्ने जति ॥४९
मुख्य द्वारा गएर सैनिक जति * खोज्थे त्यहाँ उम्कन ।
लिन्थे ती दुइ वीरले खुरु-खुरु * तिन्को पनी जीवन ॥
प्राणीको वध गर्दछन् प्रलयमा * जुन् चालले रुद्रले ।
द्रौणीले त्यहि चालले वध गरे * ती सैन्यको खड्गले॥५०
निस्के द्रोण-कुमार बाहिर छिटै * संहार पूरा गरी
आफ्ना ती दुइ मित्रका सँग भने * सारा कुरा राम्ररी ॥
आफाफ्ना रथमा चढीकन हिंड़े * ती तीन योद्धा उता ।
भूत, प्रेत पिशाच, राक्षसहरू * नाचे शिविर्मा यता ॥५१॥
सोधे श्री धृतराष्ट्रले त्यति सुनी * शंका निकालीकन ।
त्यस्तो कर्म लड़ाइँकै बखतमा * तिन्ले गरेनन् किन ?

साह्रै नीच कुकर्ममा मन दिने * आएछ कुन कारण।
बाबू सञ्जय ! यो मलाइ तिमिले * सारा बुझाई भन ॥५२
लागे सञ्जय भन्न हे नरपते ! * श्री कृष्णको, पार्थको।
द्रोणीलाइ लडाइँमा भय ठुलो * श्री सात्यकीको थियो ॥
सोही कारणले पराक्रम कुनै * गर्नै नसक्ने थिए।
मौका प्राप्त भएर आज मनको * इच्छा पुऱ्याईलिए ॥५३॥
योद्धा तीन समन्तपंचक पुगे * आनन्द मानीकन।
श्री दुर्योधनको अली-अलि थियो * बाँकी दुखी जीवन
पानी खवाइ मुसारि देह करले * तीनै जना वीरले।
सम्झाए पछिबाट दुःखित भई * श्रीद्रोणका पुत्रले ॥५४॥
हे दुर्योधन वीर ! आज रणमा * त्यागेर आफ्नू तन।
बस्नूहुन्छ गएर स्वर्गपुरिमा * आनन्द भोगीकन ॥
हामीलाई स्वयं सबै तरहको * जो गर्दथे मद्दत।
हे दुर्दैव ! मिलेन जान सँगमा * ती श्रेष्ठ राजासित ॥५५
चिन्ता छैन तपाइँको पनि मिल्यो * अत्यन्त राम्रो गति।
गान्धारी, धृतराष्ट्रको पछि बरू * होला नराम्रो स्थिति ॥
जस्का पुत्रहरू सबै मरिसके * ती अन्ध राजाकन।
िन्छन् दुःख कि पाण्डु-पुत्रहरूले * भन्दैछ मेरो मन ॥५६
गर्नोस् वीर ! पुगेर स्वर्ग पहिले * आचार्यको पूजन।
भन्नू-जुन् खलले लियो हजुरको * संग्राममा जीवन ॥
जुल्फी पक्री दली-दली पृथिविमा * हानी दुवै लातले।
मारें त्यस्कन आज जीवित छँदै * मैले गई क्रोधले ॥५७॥
राजा बाह्लिक औ जयद्रथ तथा * भूरिश्रवा भूपति।
हाम्रा स्वर्ग गए लडी समरमा * योद्धा र राजा जति ॥

मेरो भन्नु गई यथोचित सबै * ती वीरका साथमा ।
भोग्दैछु म अनेक कष्ट ति बसुन् * आनन्दले स्वर्गमा ॥५८॥
हे दुर्योधन वीर ! चेत तनमा * बाँकी छ केही भने ।
अर्को भन्छु कुरा दुखी हृदयमा * आनन्द पैदा हुने ॥ ॥
मान्यौं शत्रुहरू गएर निशिमा * हामीहरूले सब ।
पाँचै भाइहरू उतातिर रहे * श्री सात्यकी, माधव॥५९
हामी तीन रह्यौं यता अरू मरे * क्वै छैन बाँकी अब ।
सुन्दा त्यो समाचार हामिहरू झैं * रुन्छन् सबै पाण्डव ॥
द्रौणीको सुनि बात, चेत तनमा * आयो र दुर्योधन ।
बोले सुस्तरि मित्र छट्पट थियो * बर्ता त्यसै कारण ॥६०॥
ब्रह्मन् ! धन्य म धन्य !भन्छु अहिले* जुन् कार्य गर्नू भयो ।
त्यो सुन्दा मनको अशान्ति र व्यथा* सम्पूर्ण मेरो गयो ॥
भीष्म, द्रोण र कर्णले समरमा * गर्नै सकेनन् जति ।
त्योभन्दा बढि गर्नुभो हजुरले * वैरीहरूको खति ॥६१॥
यस्तो बात भनी सुयोधनजिले * त्यागी दिए जीवन ।
द्रौणी औ कृतवर्म, वीर कृपजी * रोए दुखी भैकन ॥
आफाफ्ना रथमा चढीकन पसे * तीनै जना जङ्गल ।
त्यो युद्धस्थलमा सुयोधनजिको * मुर्दा रह्यो केवल ॥६२॥

पाण्डवको शोक र अश्वत्थामाको मणि खोस्नु :—

हे राजन् ! समचार त्यो जब सुने * श्री पाण्डुका पुत्रले ।
रोए धर्म-कुमार विह्वल भई * सन्तानका मोहले ॥
चिन्तित् भाइहरू त्यहीं वरिपरी * घेरी बसेका थिए ।
हेर्दै ती सबको मुहार नृपले * यो बात भन्दाभए ॥६३॥

हाम्रा बालक पुत्रको मरणले * संग्राम जित्नू पनि ।
केही हर्ष भएन ठान्दछु बरू * हो हार हाम्रो भनी ॥
जस्को देह छ शुष्क काठसरिको * चिन्ता अनेकौं परी ।
सुन्दा यो समचार पुत्र-वधको * खप्नू अहो ! के गरी ६४
भाईलाइ भने—तिमी नकुलजी ! * जाऊ ठूलो वेगले ।
ल्याऊ द्रौपदिलाई हामिहरूले * संझाउँला प्रेमले ।
भाईलाइ उता पठाइ मनमा * सन्ताप लागे पनी ॥
आए पैदल बन्धु-पुत्र निशिमा * हेरौं मरेका भनी ॥६५॥
पौंचे द्रौपदिका संगै नकुलजी * त्यै युद्धको स्थानमा ।
देखेथे सबले, मरे जनहरू * निर्दोष जो रातमा ॥
रोए खूब बसेर पाण्डवहरू * श्री द्रौपदी दुःखिनी ।
गर्थिन् घोर विलाप विह्वल हुँदै * हा पुत्र ! हा हा ! भनी६६
हेर्दै धर्म-कुमारतर्फ तिनिले * बिन्ती गरिन् लौ अब ।
भोगुन् बन्धु विहीन राज्य खुशिले * पाँचै जना पाण्डव ॥
मेरा मारिदिए सबै सुतहरू * जो द्रोणका पुत्रले ।
तिन्लाई नदिए सजाय अहिले * यी पाण्डुका पुत्रले ॥६७
त्याग्नेछु जल, अन्न, जीवन सबै * मैले यही स्थानमा ।
त्यस्ता बात गरी बसिन् नरपते ! * ती भीमको सामुमा ॥
साध्वीको हठको कुरा सुनि सबै * श्री धर्मका पुत्रले ।
सम्झाए तिनिलाइ शान्त मनले * धर्मार्थको अर्तिले ॥६८
कल्याणी ! रणमा मरे सुतहरू * शस्त्रास्त्रद्वारा सब ।
भोग्नन् निश्चय स्वर्गमा गइ ठूलो* ती वीरले वैभव ॥
पाएको छ प्रशस्त ज्ञान तिमिले * धर्मार्थ चर्चा सुनी ।
सम्झी ती सबलाइ चिन्तित हुनू * पर्दैन हे मानिनी ! ॥६९

जो दुष्कर्म गरे अघोर निशिमा * ती द्रोणका पुत्रले ।
पत्ती छैन गए कतातिर तिनी * भागेर त्यै हेतुले ॥
जाने खोज्न कहाँ, बताउ तिमि नै * मेट्टाउने के गरी ।
तस्मात् यो हठलाइ छाड़ तिमिले * तत्काल हे सुन्दरी ॥७०
त्यो आज्ञा पतिको सुनेर मनमा * क्यै धैर्य राखीकन ।
बोलिन्–दण्ड अवश्य केहि दिनुहोस * तिन्लाई पक्रीकन ॥
जन्मैदेखि छ एक उज्वल मणी * ती वीरको माथमा ।
खोसी त्यो मणि ल्याउनोस् कित जिती*तिन्लाइ संग्राममा ॥७१
हे स्वामी ! मणि त्यो मिले हजुरको * पैह्राउँथे माथमा ।
शान्ती प्राप्त हुने थियो अलिकती * मेरो दुखी चित्तमा ॥
कृष्णाको सुनि त्यो कुरा रथ चढी * तत्काल श्री भीमले ।
मार्नेछु गुरु-पुत्रलाइ म भनी * जाँदा भए वेगले ॥७२
एक्लै भीम गए भनेर हरिले * चाला बुझी उद्धत ।
आज्ञा गर्नुभयो युधिष्ठिरजिको * मन्मा चिताई हित ॥
राजन् ! भीम गए म लड्दछु भनी * एक्लै ति द्रोणीसित ।
चाँडै गर्नुहवस् गएर सबले * ती वीरको मद्दत ॥७३॥
शिक्षा उत्तम अस्त्र ब्रह्मशिरको * आचार्यले जो दिए ।
द्रौणी वीर अजेय पृथ्विभरिमा * त्यै अस्त्र पाई भए ॥
तिन्ले क्रोध गरेर ब्रह्मशिर नै * छाड़ीदिएका घरी ।
सारा विश्व डढी, वृकोदर पनी * मर्नेन् त्यसैमा परी ॥७४
बस्ता जङ्गलमा तपाईंहरू यी * द्वारावतीमा थिए ।
मेरो चक्र लिएर ब्रह्मशिर त्यो * दिन्छु म भन्दा भए ॥
तिम्रो अस्त्र म लिन्नँ, चक्र बरु यो* दिन्छु भनेथें जब ।
मेरो चक्र उचाल्नलाइ नसकी * लज्जित् भएथे, अब॥७५

सक्छन् गर्न अवश्य ब्रह्मशिरको * श्री पार्थले मार्जन ।
ज्ञानूपर्छ छिटै वृकोदरजिको * रक्षार्थ त्यै कारण ॥
त्यस्तो बात गरी चढेर रथमा * भाई दुवै औ हरि ।
जान्थे भीम जता उतैतिर गए * तत्काल हावासरी ॥७६॥
बस्थे आश्रममा जहाँ नरपते ! * श्री कृष्ण द्वैपायन ।
द्रौणी वीर लुके त्यहीं तर थियो * झन् व्यग्र तिन्को मन ॥
योद्धा भीम पुगेर सोहि कुटिमा * तिन्लाइ देखे जब ।
चिच्याए-पख, मार्दछु, तिमि कहाँ * भागेर जान्छौ अब ॥७७
तिन्को शब्द सुनी डराइ मनमा * आशा त्यजी बाँच्नको ।
भेट्टाए अहिले मलाइ सबले * सल्लाहले कृष्णको ॥
मार्छु पाण्डव पाँचलाइ सहजै * भन्ने लिई दुर्मति ।
छाड़े अन्तिम अस्त्र ब्रह्मशिर त्यो * मन्त्रेर हे भूपति ! ॥७८
त्यस्को मार्जन गर्न ब्रह्मशिर नै * छोड्दा भए पार्थले ।
आए अग्नि-शिखासमान ति दुवै * अकाशमा वेगले ॥
लाग्दा ठक्कर खूब ब्रह्मशिरको * ज्वालाहरू निस्किए ।
भूमी कम्प भइन्, अनेक थरिका * उल्का गिरेका थिए॥७९
प्राणी व्यग्र भए कठोर ध्वनिले * सारा दिशा थर्किए ।
ज्ञानी व्यास, प्रसिद्ध नारद मुनी * आएर भन्दा भए ॥
गर्दछौ किन यो अनर्थ अहिले * हे वीर ! दुःसाहस ।
यस्ले नाश हुनन् चराचर सबै * बद्दैन तिम्रो यश ॥८०
पैह्ले वीरहरू भए अतिरथी * योद्धा प्रतापी जति ।
सारा ज्ञान थियो तथापि कहिले * यस्तो लिएनन् मति !
आफाफ्ना तिमि शस्त्र वीरहरुहो !* यो शान्त चाँड़ै गर ।
आज्ञा पालन पार्थले गरिदिए * श्रीव्यासजीको तर॥८१॥

द्रौणीचाहिं थिए अशक्त तिनिले * बिन्ती गरे सादर ।
मैले सक्तिनँ शान्त पार्न अहिले * यो अस्त्र हे ईश्वर !
रक्षा जीवनको भयो तर पनी * * भन्छु म दुःखी भई ।
गर्ला गर्भ विनाश ब्रह्मशिरले * श्रीउत्तराको गई ॥८२॥
द्रौणीको सुनि बात क्रोधित भई * बोल्नूभयो केशव ।
सक्तैनौ तिमि गर्न पाण्डु-सुतको * ईर्ष्या गरी क्यै अब ॥
भोगे कष्टहरू जती अघि सबै * हुन् दुर्दशाको फल ।
गर्नेछन् सुख-भोग यी पृथिविमा * कीर्ति फिंजी उज्ज्वल ८३
मुर्दा बालक जन्मला सुन तिमी * लागेर त्यो अस्त्रले ।
त्यसलाई म बचाउनेछु सहजै * आफ्नू ठुलो शक्तिले ॥
बग्ला रक्त र पीप देहभरिमा * घाऊ नराम्रो भई ।
सक्तैनौ तिमि बस्न विज्ञ जनका * साम्ने कहीले गई ॥८४
डुल्नू तीन सहस्र वर्ष यसरी * पर्नेछ पृथ्वीमहाँ ।
पापी हौ तिमि, पापका फलहरू * पर्नेछ भोग्नू त्यहाँ ॥
यस्तो श्राप सुनीसकेर हरिको * भन्नूभयो व्यासले ।
तिम्रो मार्जन गर्न श्राप अहिले * यो बक्सियो कृष्णले॥८५
हे द्रौणी ! शिरमा छ जो मणि छिटै* देऊ निकालीकन ।
रक्षा जीवनको हुने म त अरू * बाटो कुनै देख्दिनँ ॥
आज्ञा व्यासजिको सुनी कर परी * सुम्पीदिए त्यो मणि ।
द्रौणा जङ्गलमा पसे नरपते ! * 'जान्छु म ऐल्हे' भनी॥८६
पाई श्रेष्ठ मणी ती द्रोण-सुतको * पारी ठुलो दुर्गति ।
फर्कैथे रथमा चढी शिविरमा * पैल्हे गएका जति ॥
कृष्णलाइ दिए अमूल्य मणि त्यो * हाँसेर श्री भीमले ।
पैह्राइन् शिरमा युधिष्ठिरजिको * तिन्ले उठी प्रेमले ॥८७

बोले भीम शुभे ! सुपुत्रहरुको * जस्ले लियो जीवन ।
त्यस्कै हो मणि यो अमूल्य छ लियौं * पक्रेर खोसीकन ॥
हाम्रो जीत भयो विपक्षतिरको * संहार ठूलो भयो ।
त्यो दुर्योधन दुष्टको मरणले * सम्पूर्ण बाधा गयो ॥८८
सोधे श्री हरिलाइ धर्म-सुतले * हे नाथ ! कुन् युक्तिले ।
मारे सैन्यहरू सबै शिविरमा * श्री द्रोणका पुत्रले ॥
बिन्ती धर्म-कुमारको सुनिसकी * आज्ञा भयो कृष्णले ।
शक्ती छैन मनुष्यमा सब कुरा * गर्छन् कुनै दैवले ॥८९॥
दिन्छन् जो अमरत्वको वर पनी * सेवा गरेका घरी ।
जान्छन् भक्तहरू तरेर सहजै * जस्को गरी चाकरी ॥
त्यस्ता श्री शिवको परी चरणमा * भक्ती गरेथे जब ।
मारे खड्ग दिएर श्री शिवजिले * सेना हजुर्का सब ॥९०
सारा देवहरू मिली मख ठुलो * पैह्ले गरेका थिए ।
त्यस्मा अंश थियो जती शिवजिको * पन्साउने बिर्सिए ॥
हे राजन् ! शिवले तुरुन्त मख त्यो * विध्वंस पार्नू भयो ।
देखेथे जब रुद्र तेज सहसा * सातो सबैको गयो ॥९१
शक्ती क्षीण भई गएर सबले * मागे क्षमा सादर ।
पाएथे शिवबाट शान्ति सुख औ * कल्याण गर्ने वर ॥
जस्ले सौप्तिक पर्व भारत सधैं * पढनेछ हे भूपति !
त्यस्ले तुष्ट भई सदाशिवजिले * दिन्छन् सदा सद्गति ॥९२

महाभारत सौप्तिकपर्व समाप्तम्

★

# महाभारत स्त्रीपर्व

प्रारम्भः

शोकले व्याकुल भएका धृतराष्ट्रलाई व्यास र विदुरको शिक्षा—

वैशम्पायत भन्दथे जति कथा * सुन्थे ति जन्मेजय ।
बिन्ती श्री धृतराष्ट्रका हजूरमा * गर्दा भए सञ्जय ॥
हे राजेन्द्र ! हजूरका सुत मरे * विख्यात दुर्योधन ।
त्यागे भूपति वीर सैन्य सबले * संग्राममा जीवन ॥१॥
ढल्छन् वृक्षहरू अनेक जसरी * आँधी चलेका घरी ।
त्यस्तै श्री धृतराष्ट्र भूपति ढले * तत्काल मूर्च्छा परी ॥
आएथ्यो उपचारले अलिकती * फर्की जसै चेतना ।
सम्झी पुत्र र बन्धुको मरण त्यो * भोगे निकै यातना ॥२॥
लागे भन्न बुझाउँदै विदुरजी * देखेर त्यस्तो स्थिति ।
भूमीमा यसरी सुतेर अब के * पाइन्छ ? हे भूपति ॥
पार्नूहोस् मनलाइ बुद्धि-बलले * रोकेर आफ्नू स्थिर ।
प्राणीको गति आखिरी पनि यही * मानिन्छ लोकेश्वर ॥३॥
मर्ने मानिसका निमित्त जति जो * चिन्ता यहाँ गर्दछन् ।
मर्दैनन् ति स्वयं र जान सँगमा * कुन् व्यक्तिले सक्तछन् ॥
जानेको छ समस्त विज्ञ जनले * संसारको यो स्थिति ।
भोग्नूहुन्छ हजूर मात्र किन यो * संताप हे भूपति ! ॥४॥
बारंबार मरेर जन्म भवमा * गर्छन् सबै धारण ।
हुन्छन् पुत्र पिता अनेक जुनिमा * आफ्ना हितैषी जन ॥

सक्तैनन् तर चिह्न आज भवमा * तिन्लाइ कोही पनि ।
राजन् ! शान्त हुनोस् सदा जगतको * चाला छ यस्तै भनी ॥५
कस्ले गर्दछ प्रेम कालसित वा * द्रोही छ को कालको ?
वेला पूर्ण भयो कि निर्मम बनी * लैजान्छ तानेर त्यो ॥
सोही कारण कालको प्रबलता * जो जान्दछन् ज्ञानले ।
त्यस्ताको मनमा अशान्ति कहिले * पर्दैन क्यै शोकले ॥६
आयो दुःख परी कुनै किसिमको * ठूलो विपत्ती भने ।
चेष्टा पर्दछ गर्नु विज्ञ जनले * त्यस्लाइ बिर्सीदिने ॥
गर्दा चिन्तन दुःखको विषयमा * जानेछ बढ्दै बरू ।
त्यो घटतैन भनेर शोक मनको * त्याग्छन् बुझेकाहरू ॥७
जो गर्दा सुख-दुःख भाव मनमा * आउन्न कैल्है पनी ।
गर्नोस् सोहि विचार शुद्ध मनले * कर्तव्य हो यो भनी ॥
जस्तो कर्म गरिन्छ जुन् बखतमा * जानी नजानीकन ।
त्यस्ले नै सुख-दुःख मिल्दछ तिनै * हुन् शोकका कारण ॥८॥
आत्मज्ञान भुलाइ मोक्ष-पथमा * बाधा दिने शोक यो ।
बाँचुन् वा ति मरुन् सबै हजुर झैं * दुःखी हुनन् विज्ञ को ?
मायामा नपरेर ज्ञान-पथको * जस्ले लियो आश्रय ।
यो संसार समुद्र गोखुरसरी * तर्नेछ त्यो निश्चय ॥९॥
शिक्षा उत्तम व्यक्तिको सुनि-सुनी * जो गर्दछन् मनपरी ।
तिन्लाई सुख-शान्ति हुन्न, दुख ती* भोग्छन् मरेका घरी ॥
त्यागी शोक बनाउनोस् हजुरले * आफ्नो सुखी जीवन ।
भन्दैछु इतिहास यै विषयको * सुन्नोस् लगाई मन॥१०
ठूलो जङ्गमा कुनै दिन पुगे * यौटा दुखी ब्राह्मण ।
देखी ब्राह्मणलाइ जन्तु दगुरे * पायौं भनी भोजन ॥

लागे जन्तु लखेट्न ती वरिपरी * रक्षार्थ भाग्दै थिए ।
पाएनन् तर केहि आश्रय कतै * भाग्दै अगाड़ी गए ॥११
ढाकेको लटरम्म घाँस, तरुले * यौटा थियो खाइल ।
लोटे खाडलमा र माथ द्विजको * संयोगले भो तल ॥
देखे नाग ठूलो, थिए अधरमा * झुण्डीरहेका तिनी ।
लागे थर्थर काम्न विप्र डरले * डस्नेछ यसले भनी १२
कूवाको डिलमाथि षट्-मुख हुने * हात्ती जसै देखियो ।
बाँच्ने आस जती थियो हृदयमा * तत्काल तिनको गयो ॥
त्यो वेला वरको जरा नगिचमा * देखेर पक्री लिए ।
त्यस्तो संकटमा परे पनि तिनी * बाँचीरहेकै थिए ॥१३॥
चाका त्यैं बरको जराउपरमा * मौरीहरूका थिए ।
मौरीले मह चुस्तथे, तल पनी * थोपाहरू झर्दथे ।
हे राजन् ! मह त्यो चुहेर मुखमा * पर्थ्यो जसै विप्रको ।
चाट्ते अमृत झैं मिठो मह तिनी * आनन्द मानेर त्यो ॥१४
देखे ब्राह्मणले अचानक मुसा * काला र सेता दुई ।
थाले काट्न जरा बसेर बरको * चाँडो दुवैले भई ॥
बाँच्ने आस लिई विचार मनमा * गर्दा भए ब्राह्मण ।
काट्नेछन् जब यी मुसाहरू जरा * मर्छु म लोटीकन ॥१५
आफ्नू मृत्यु-स्वरूप काल नगिचै * चौतर्फ देख्ता पनि ।
चाट्थे अमृत झैं बुझी मह मिठो * संतोष मानी तिनी ॥
यस्तोमा पनि विप्रको हृदयमा * बाँच्नेछु भन्ने थियो ।
योभन्दा अरु हुन्छ कुन् स्थिति ठुलो * हे भूपती, अन्त्यको ॥१६
यस्तो बात सुनीसके विदुरको * ती भूपतीले जब ।
लागे सोध्न बुझीनँ भाव जति जे * ऐले भन्यौ त्यो सब ॥

यस्को अर्थ बताउ स्पष्ट अहिले * भाई ! तिमी विज्ञ छौ।
साह्रै व्याकुल छु म पुत्र-बधले * भन्ने तिमी जान्दछौ॥१७
त्यो आज्ञा धृतराष्ट्रको विदुरले * सुन्दा भएथे जब।
लागे भन्न बुझाइ त्यो विषयमा * जाने बुझेको सब॥
जो दृष्टान्त सविज्ञ व्यक्तिहरुले * पैह्ले दिए भूपति !
सोही भन्छु हजुरलाइ अहिले * सप्रन्छ यस्ले मति॥१८॥
हो संसार स्वरूप जङ्गल ठुलो * त्यो कूप नै देह हो॥
खाने जीवन जीवको बसि-बसी * त्यो नाग नै काल हो।
आशा हुन् सब घाँस-वृक्ष, गज त्यो * मानिन्छ सम्वत्सर।
बाह्र, पाउ गजेन्द्रका ऋतु तथा * मैह्राहरू हुन्, तर॥१९
मूसा हुन् दिन-रात रूप नृपते ! * मौरीहरू कामना।
जस्ले सक्तछ बुझ्न यो, नरकको * भोग्दैन त्यो यातना॥
बुद्धि सारथी हो शरीर रथ हो * घोड़ाहरू इन्द्रिय।
जो पक्रन्छ लगाम सोही मन हो * भन्ने गरी निश्चय॥२०
रोक्छन् संयमसाथ वेग हयको * जुन् व्यक्ति राम्रो गरी।
जान्छन् ती नपरी कुनै नरकमा * संसार पारी तरी॥
आई श्री धृतराष्ट्रका नजिकमा * भन्नूभयो व्यासले।
पैह्ले निश्चय जो थियो त्यहि भयो * के हुन्छ यो शोकले २१
आत्मा नित्य, अनित्य देहहरु हुन् * भन्ने तिमी जान्दछौ।
ऐह्ले बन्धु मरे भनी अबुझ झैं * चिन्ता वृथा गर्दछौ॥
ज्ञानी नारदले ठुलो मख हुँदा * जस्तो भनेका थिए।
सोही सत्य भयो, दुवै तरफका * प्राणी सबै मारिए॥२२॥
देऊ पाण्डवलाइ राज्य तिमिले * डाकी यहाँ सादर।
जो जो बन्धुहरू मरे समरमा * संस्कार तिन्को गर॥

शिक्षा धर्म र ज्ञानको दिइ सबै * श्री व्यास ज्ञानी गए ॥
भाईलाइ बुझाइ अन्ध नृपले * तत्काल आज्ञा दिए ॥२३
रानी, पुत्र-वधू पृथा र दुहिता * सम्पूर्णलाई गई ।
ल्याऊ, बाबु ! तिमी, हुनन् सब रुँदै * अत्यन्त दुःखी भई ॥
भाईलाइ त्यतो भनी रथ रढे * ती अन्ध-राजा जब ।
ल्याए झट्ट गएर श्री विदुरले * आए रुँदै ती सब ॥२४॥
गर्दै शोक हिंड़े चढेर रथमा * संग्राम भूमीतिर ।
द्रौणी, श्री कृतवर्म वीर कृपले * भेटी गरे आदर ॥
आफूले जति जे गरे शिविरमा * त्यस्को गरे वर्णन ।
त्यो सुन्दा धृतराष्ट्रको हृदयमा * आगो बल्यो दन्दन॥२५॥
देखनन् पाण्डवले भनेर मनमा * लाग्दैछ ठूलो डर ।
जान्थ्यौं हामिहरू बिदा दिनुहवस् * तत्काल एकातिर ॥
आज्ञा भूपतिले दिए-'सब जना * जानूहवस् लौ' भनी ।
लागे तीन जना विभिन्न पथमा * दुःखी थिए झन् तिनी॥२६

हिंड्दा भए तिनिहरू रणभूमि जान ।
रुन्थे बसेर रथमा कुररी समान ॥
भन्थे कती, विधि भए विपरीत आज ।
गर्थें विलाप बहुतै ति दुखी समाज ॥२७॥

राजा धृतराष्ट्रको पाण्डवप्रति क्रोध, — कृष्णको आश्वासनः —

दुःखी श्री धृतराष्ट्रजी जब पुगे * संग्राम भूमिमहाँ ।
आए भेट्न भनेर पाण्डवहरू * सम्चार पाई त्यहाँ ॥
आफ्नो नाम भनी परी चरणमा * तिन्लाइ ढोग्दा भए ।
भित्री क्रोध थियो तथापि मुखले * आशीष धेरै दिए ॥२४॥

लागे खोज्न ति भीमलाइ अहिले * 'बाबू कता छौ' भनी ।
तिन्को दुष्ट विचार जानि हरिले * केही नबोल्ने पनी ॥
राखेको अघिदेखि लौह प्रतिमा * श्री भीमको जो थियो ।
राजालाइ तुरुन्त भीम यहि हुन् * भन्दै स्वयं बक्सियो ॥२९
भाँचे मूर्ति फलामको नृपतिले * हो पुत्रहन्ता भनी ।
केही शान्त भयो र क्रोध सहसा * दुःखी भए झन् तिनी ।
हा हा भीम ! कता गयौ, किन लिएँ * मैले वृथा दुर्मति ?
यस्तो बात भनेर दुःखित भए * झन् बेसरी भूपति ॥३०॥
फर्केको धृतराष्ट्रको मति जसै * देख्नूभयो कृष्णले ।
भन्नूभो तिनिलाइ बात हितको * सम्झाउने ध्येयले ॥
राजन् ! जीवित छन् वृकोदर यहाँ * छैनन् मरेका तिनी ।
भाँच्नूभो अघि एक लौह-प्रतिमा * हो मुख्य वैरी भनी ॥३१
दैवाधीन हुँदा पुगेर दिन ती * सारा मरे कौरव ।
गर्नू द्रोह वृथा छ यो हजुरले * निर्दोष छन् पाण्डव ॥
मर्थे कौरव ती वृकोदरजिले * मारे, नमारे पनी ।
गर्नोस् स्नेह सहर्ष पाण्डु-सुतको * हुन् पुत्र आफ्नै भनी ॥३२
मारे पाण्डवलाइ वंश कसरी * चल्नेछ यो नाथको ।
केही शान्त भए सुनी सब कुरा * धर्मार्थको कृष्णको ॥
गान्धारी पनि पुत्रको मरणले * साह्रै थिइन् दुःखित ।
लागिन् भन्न रिसाइ सामु सबका * श्रीभीम योद्धासित ॥३३॥
मेरा जो सय पुत्रको वध गर्‍यौ * निःशेष पारीकन ।
हान्यौ नाभि मनी गदा, समरको * कुन् धर्मले लौ भन ?
पापी भीम ! अधर्मपूर्वक जित्यौ * संग्राम त्यै कारण ।
तिम्रो त्यो व्यवहार सम्झि बहुतै * दुःखी छ मेरो मन ॥३४॥

त्यो दुःशासनको पियौ रगत जो * हे भीम ! संग्राममा ।
को भन्नेछ कुकर्म यी जति गर्‍यौ * राम्रो भनी लोकमा ॥
त्यो आक्षेप सुनी वृकोदरजिले * बिन्ती गरे सादर ।
मेरो कार्य अधर्म, धर्म जननी ! * जान्दीनँ केही, तर ॥३५
श्री दुर्योधनको गरें वध छली * हुन् मुख्य वैरी भनी ।
माफी बक्सनुहोस् म मागदछु क्षमा * माता ! दयालु बनी ॥
गान्धारी जब श्री युधिष्ठिरतरफ् * फर्किन्‌ रिसाईकन ।
तिन्को देखि स्वरूप कम्पित भयो * ती भूपतीको मन ॥३६
जोरी हात दुवै बिनम्र स्वरमा * न्यूहेर बिन्ती गरे ।
मैले नै गरि यो लड़ाइँ हुन गो * छोरा हजुरका मरे ॥
मार्नैं भूपति वीर, सैनिक तथा * आफ्ना सबै बान्धव ।
पापी हूँ म, मलाइ श्राप दिनुहोस् * माता ! हजुर्ले अब ॥३७
मारी बान्धवलाइ राज्य सुख यो * खोज्ने म हूँ दुर्जन ।
पर्ला भोग्नु अवश्य पाप पछि यो * कुन् नर्कमा गैकन ॥
त्यो दुःखार्त भई युधिष्ठिरजिले * बिन्ती गरेको सुनी ।
लागिन् गर्न विचार बोल्न नसकी * गान्धार-कन्या पनी॥३८
बाँधेका दुइ नेत्रको हटि लुगा * क्यै भाग खाली थियो ।
खोल्दा क्रोधित नेत्र धर्म-सुतको * नङ् मात्र नै देखियो ॥
त्यस्ता सुन्दर पाउका नखहरू * तत्काल काला भए ।
त्यो देखेर स्वयं युधिष्ठिर पनी *अत्यन्त लज्जित् थिए३९
योद्धा अर्जुन कृष्णको पछि लुके * देखेर त्यस्ता स्थिति ।
भागेथे सहदेव औ नकुलजी * मन्मा डराई अति ॥
चाला पाण्डवको बुझेर मनमा * शान्ती गरी धारण ।
रानीले सबलाइ सादर भनिन् * तत्काल डाकीकन ॥४०

बाबू पाण्डव हो ! नमान मनमा * केही कुराको भय ।
ईर्ष्या छैन गयो सुआशिष सदा * दिन्छु म होला जय ॥
कुन्तीको नगिचै गए त्यति सुनी * पाँचै जना पाण्डव ।
आएका सब वीरलाइ तिनिले * देखिन् अगाड़ी जब ४१
तिन्को देह मुसारि आशिष दिदै * आँसू खसालीकन ।
लागिन् भन्न समस्त बन्धु-वधले * दुःखी छ मेरो मन ॥
प्यारा पुत्र मरे सबै समरमा * यी द्रौपदीका जब ।
जित्नू युद्ध ठूलो, वृथा हुन गयो * साम्राज्य यो वैभव ॥४२
कुन्तीको सुनि बात धर्म-सुतले * धर्मार्थ चर्चा गरी ।
मातालाइ र द्रौपदीकन पनी * शान्ती दिए राम्ररी ॥
गान्धारी, धृतराष्ट्रले पनि दिए * आशीष शिक्षा जब ।
जानी दैवगती प्रधान, करले * राजी भए ती सब ॥४३

दिव्य-दृष्टि सम्पन्न गान्धारीको श्राप श्रीकृष्णले स्वीकार गर्नु :—

गान्धार राज-दुहिताकन व्यासजीले ।
जो दिव्य-दृष्टि खुशिसाथ दिए पहीले ॥
त्यै दृष्टिले समरभूति ति हेर्न लागिन् ॥
देखेर दुःस्थिति मनैमन भन्न लागिन् ॥४४॥

बोसो र हाड़ तनका टुकुरा भएका ।
मासू मुछी रगतमा कहिं थुप्रिएका ॥
बाहु र हाउ शिर मानिसका कतै छन् ।
हात्ती र अश्वहरूका तन उत्तिकै छन् ॥४५॥

शस्त्रास्त्रका र रथका टुकुरा कतै छन् ।
यो नाशका प्रमुख कारण कृष्ण नै हुन् ॥

यस्तो सुनिश्चित गरीकन अश्रु झारी ।
बिन्ती गरिन्—समर हेर्नुहवस् मुरारी ! ॥४६॥

रानी सृञ्जय वंशका र कुरुका * पञ्चालका छन् जति ।
गर्दैछन् कसरी बिलाप रणमा * खोजेर आफ्ना पति ॥
दाज्यू, भाइ र बन्धुका शवहरू * यो हो कि त्यो हो भनी ।
जोर्दैछन् सब अङ्ग ल्याइ शरले * टुक्रा भएका तिनी ॥४७
जसले खप्नुपरेन ताप रविको * दर्बारमा कवै दिन ।
जसले बत्ती उकास्नसम्म नपरी * काटे सुखी जीवन ॥
त्यस्ता यौवनले सुपूर्ण र सती * छोरी बुखारी सब ।
गर्दैछन् कसरी विलाप कुररी * झैं हेर्नुहोस-केशव ! ॥४८
गर्थे गान सदैव जुन पुरुषको * सत्कीर्ति बन्दीजन ।
जसको चाकरि गर्दथे नृपहरू * सौभाग्य ठानीकन ॥
छन् जसका तनमा ठुला कवच औ * रत्नादिका भूषण ।
त्यो दुर्योधनको गति नजर होस् * हे नन्दका नन्दन ! ॥४९
मागेथ्यो अघि युद्ध यो शुरु हुँदा * आएर दुर्योधन ।
'माता' आशिष बक्सियोस् समरमा * जित्ने खुशी भैकन ॥
'होला' धर्म जता उतै 'विजयश्री' * जाने दिएँ उत्तर ।
सोही सत्य भयो, मरे कुरुहरू * दुष्कर्मले आखिर ॥५०॥
सोही कारण पुत्रको मरणमा * मान्दीनँ चिन्ता, तर ।
चिन्ता वृद्ध नरेशको विषयमा * बर्ता छ हे ईश्वर !
जस्का भूपहरू वरीपरि बसी * गर्थे मनोरंजन ।
त्यस्का श्वान र गिद्ध छन् वरिपरी * घेरा लगाईकन ॥५१॥
यो दुर्योधनले पिता, विदुरको * शिक्षा नमानिदिंदा ।
ऐह्ले मर्नुपर्‍यो अधर्म-पथमा * हिंड्दै रहेको हुँदा ॥

जस्का दुर्धर सैन्य उत्तम थिए * एघार अक्षौहिणी ।
त्यस्को हालत जो छ यो बखतमा * हेर्नोस् हजुर्ले पनी ॥५२॥

जस्का गुरु परशुराम थिए प्रसिद्ध
जो गर्दथ्यो दृढ भएर विचित्र युद्ध ॥
संग्राम यो शुरु भयो भर मानि जस्को ।
त्यो कर्णको नजर होस् स्थिति यो छ कस्तो ॥५३॥

पत्नी, मुसारि पतिको तन खूब रुन्छिन् ।
मूर्छा परेर कहिले ति पछारिइन्छिन् ॥
देखेर दुर्गति चरक्क चिरिन्छ छाती ।
यस्मा हजूरकन मान्दछु पक्षपाती ॥५४॥

जस्लाई सबले धनुर्धर तथा * दुर्जय छन् भन्दथे ।
पूजा पाण्डवले र वीर कुरुले * जुन् वीरको गर्दथे ॥
मारे वीर अनेक जुन् पुरुषले * ठूलो लडाइँ गरी ।
त्यस्ता द्रोणजिको छ कुन् गति यहाँ * हेर्नूहवस् हे हरि ! ॥५५॥

एक्लै युद्ध गरेर जुन् पुरुषले * शेखी सबैको लियो ।
हाम्रो वंश-स्वरूप पुत्र-छलले * जो व्यर्थमा मारियो ॥
त्यस्तो श्री अभिमन्युको पृथिविमा * पल्टीरहेको शव ।
खान्छन् गृद्ध र श्यालले लुछि-लुछी* लौ हेर्नुहोस् केशव ! ॥५६

राजामा बलियो जयद्रथ ठूलो * संसारले मान्दथे ।
एक्लै वेग अनेक शत्रुहरूको * जो युद्धमा रोक्दथे ॥
स्वामीको शिर खोज्दछे समरमा * रोएर छोरी जब ।
मैले धारण धैर्य गर्नु कसरी * आज्ञा हवस् केशव !॥५७

छोरी, पुत्र-वधू, तथा अरु पनी * रानीहरु छन् जति ।
आफाफ्ना पति-पुत्रका गुणहरू * सम्झेर छाती पिटी ॥

गर्छन् क्रन्दन खून खप्न नसकी * त्यो सुन्छु मैले जब ।
बाँच्नू व्यर्थ म ठान्दछु पृथिविमा * भारी बनी केशव ! ॥५८
लड्ने पाण्डवलाइ सम्मति तथा * उत्साह जो बक्सियो ।
त्यसले यो रणमा दुवै तरफको * संहार ठूलो भयो ॥
जानी जानि हजूरले समरको * उत्पन्न पारी स्थिति ।
गर्नू भो रणमा विनाश अहिले * सारा मरे भूपति ॥५९
जान्ने धर्म र शास्त्र शक्ति बलले * पूरा भए तापति ।
हेला गर्नुभयो मरुन् सुतहरू * सम्पूर्ण मेरा भनी ॥
जस्तो युद्ध गरेर बान्धवहरू * एहले मरे यी सब ।
त्यस्तै आपुसमा लडीकन मरुन् * जो छन् सबै यादव ॥६०
रुन्छन् पुत्र-पती मरेर जसरी * छोरी, बुहारी, सती ।
त्यस्तै यादवका रुनन् सब वधू * साह्रै भई दुर्गति ॥
हेर्नू बान्धवको विनाश त्यसरी * पर्ला हजुर्ले पनी ।
होला मृत्यु गएर जङ्गलमहाँ * त्यै शोकद्वारा भनी ॥६१
तिन्को श्राप सुनी सकी मुसुमुसू * हाँसेर श्री कृष्णले ।
भन्नूभो शिरमा लिएँ हजुरको * यो श्राप आनन्दले ॥
धेरै यादव छन् लडेर नमरे * आपस्तमा ती सब ।
पृथ्वीको न त भार हुन्छ हलुको * कुन् युक्तिद्वारा सब ॥६२
सारा यादव ती अवध्य पनि छन् * संग्राममा दुर्धर ।
तिन्लाई दिनुभो शराप अहिले * उद्धारको खातिर ॥
त्यो आज्ञा हरिको सुनेर भयले * कम्पित भए पाण्डव ।
गान्धारीकन भन्नुभो प्रभुजिले * नीती बुझाई सब ॥६३॥
छोरा उत्तम, गर्नलाइ तप नै * जन्माउँछिन् ब्राह्मणी ।
क्षत्राणी सुत पाउँछिन् समरमा * मर्नन् कि मार्नन् भनी ॥

वैश्याले पशु पाल्नखातिर भनी * छोरा गुणी पाउँछिन् ।
शूद्रा चाकरि गर्नलाइ सबको * सत्पुत्र जन्माउँछिन् ६५
घोड़ी दौड़न, गाइले सुतहरू * भारी उचाली लिन ॥
दिन्छन् जन्म भने वृथा हजुरले * चिन्ता गरेको किन ?
त्यो धुर्योधनलाइ रोक्न नसकी * स्वच्छन्द छाड़ीदिंदा ।
ऐह्ले शोक ठुलो पऱ्यो सुत सबै * संग्राममा मारिंदा ॥६५
यस्मा दोष हजूरको र नृपको * देखिन्छ, त्यै कारण ।
शान्ती प्राप्त हुँदैन दुष्फल सबै * त्यसको नभोगीकन ॥
साह्रै अप्रिय वाक्य त्यो किसिमको * श्री कृष्णजीको सुनी ।
चिन्ताग्रस्त भएर बोल्न नसकी * रोई रहीथिन् तिनी ॥६६

पाण्डवहरूले सबैको अन्तिम संस्कार गरेर जल-दान दिनु

सोधे श्री धृतराष्ट्रले समरमा * सेना कती मारिए ।
ठूला वीरहरू मरे कति सबै * जम्मा भएका थिए ॥
तिन्को प्रश्न सुनी युधिष्ठिरजिले * बिन्ती गरे भूपति !
सेना, वीरहरू मरे समरमा * सम्पूर्ण[1] आए जति ॥६७
बोले श्री धृतराष्ट्र धर्म-सुतले * बिन्ती गरेको सुनी ।
जो-जो वीरहरू मरे समरमा * आफ्ना बिराना पनि ॥

---

१. युधिष्ठिरले विन्ति गरे- हे राजन् ! महाभारतको युद्धमा जम्मा एक अरब छयसट्ठी करोड़, बीस हजार १६६००२०००० मारिए । चौबीस हजार, एक सय, पैसट्ठी, सैनिकहरू वेपत्ता छन् । धृतराष्ट्रले फेरि सोधे--हे बाबू ! यो कुरा तिमीले कसरी जान्यौ ! ती मरेका व्यक्तिले कुन-कुन गति प्राप्त गरे त्यो सबै मलाई भन । युधिष्ठिरले भने--'यो अनुस्मृति' विद्या मैले वन-वासका बखतमा लोमश ऋषिबाट पाएको हुँ । यस युद्धमा उत्साहले शरीरको आहुति दिने जति बीर देवराज इन्द्र जस्तै उत्तम लोकमा गए । अप्रसन्न मनले भए पनि मर्नै निश्चय गरेर मर्ने र मारिने जति गन्धर्व लोकमा गए । प्राणको भिक्षा माग्दामाग्दै शस्त्र लागेर मरेका जति गुह्यक लोकमा गए। शत्रुद्वारा पछारिएका, शस्त्र-हीन जति मारिए ती सबै ब्रह्मलोकमा गए । यस युद्धको सीमाभित्र परेका र येन-केन प्रकारेण मारिएका वा मरेका जतिले उत्तम कुरु देशमा जन्म लिनेछन् ।

जस्को दाह-क्रियादि गर्न अहिले * छैनन् हितैषी जन ।
तिनको पर्दछ गर्नु हामिहरूले * उद्धार हे सज्जन ! ॥६८
आज्ञा भूपतिको युधिष्ठिरजिले * यस्तो सुनेथे जब ।
डाकी सञ्जय, धौम्य, औ विदुरजी * आफ्ना हितैषी सब ॥
जेठाको क्रमले बनाउनु चिता * मर्नेहरूको भनी ।
आज्ञा ती सबलाइ सादर दिए * दुःखी भए तापनि ॥६९॥

आज्ञा सुनेर नृपको सबले मिलेर ।
ल्याए प्रशस्त लकड़ी अगरू गएर ॥
कर्पूर चन्दन सुवासित वस्तु धेर ।
धेरै चिताहरू गरे क्रमले तयार ॥७०॥

शस्त्रास्त्र बाण रथका टुकुरा थिए जो ।
ल्याए समस्त बटुली, रणभूमिको त्यो ॥
सेता र पीत अरु रेशमि वस्त्र ल्याई
ढाके तुरुन्त क्रमले मृत देहलाई ॥७१॥

राजा सुयोधन, उनान्सय वीर भाई ॥
भूरिश्रवा. शल, जयद्रथ वीरलाई ॥
श्री धृष्टकेतु, अभिमन्यु र सोमदत्त ।
वाल्हीक, सृञ्जय, विराट, द्रुपद् बृहन्त ॥७२॥

श्री द्रोण, कर्ण शकुनी र शिखण्डि वीर ।
त्रैगर्तका जति थिए नृप लड्न धीर ॥
श्री द्रौपदी-सुत, बृहद्बल धृष्टद्युम्न ।
योद्धा अलंबुष घटोत्कच, भूप अन्य ॥७३॥

त्यागने थिए तन अनाथ, सनाथ जो जो।
राखे चिताउपरमा शव ती सबैको॥
आगो दिए विदुरले सब बन्धुलाई।
रोए भई विकल पाण्डव पाँच भाई॥७४॥
दाहक्रिया त्यसरि पूर्ण गरी सबैको।
पुग्दा भए तटमहाँ सब जाह्नवीको॥
भाई-पिता र पति-बान्धव वर्गलाई।
सम्झी जलाञ्जलि दिए सब भूपलाई॥७५॥

कुन्तीले नगिचैं गईकन भनिन् * रोएर हे पाण्डव !
जस्को आश्रयले डटे समरमा * उत्साहले कौरव॥
राधा-पुत्र र सूत-पुत्र सबले * भन्थ्यौ अघी जस्कन।
जस्को शक्ति थियो अपूर्व तनमा * पृथ्वी उचाली लिन॥७६
तिम्रा दाजु थिए कुमार रविका * ती कर्ण योद्धा पनी।
देओ अञ्जलि कर्णलाइ सबले * हुन् पुत्र मेरा भनी॥
कुन्तीको सुनि बात धर्म-सुतले * आश्चर्य मानीकन।
सोधे सूर्य-कुमारको विषयमा * साह्रै दुखाई मन॥७७॥
दाज्यू कर्ण थिए भने हजुरले * त्यो गुप्त राखीकन।
हाम्रो युद्ध गराइबक्सनुभयो * यस्तो नराम्रो किन ?
जस्तो कष्ट थियो मलाइ मनमा * आफ्ना हितैषी मरी।
त्योभन्दा बढि यो कुरा हजुरको * सुन्दा भयो यो घरी॥७८
कुन्तीले सुनि बात धर्म-सुतको * भन्दी भइन् सादर।
देऊ अञ्जलि कर्णलाइ पहिले * उद्धारको खातिर॥
भन्नेछु पछि जन्मको विषयमा * तिन्को म विस्तारले।
कुन्तीकी सुनि बात अञ्जलि दिए * पाँचै जना वीरले॥७९॥

आमालाइ भने युधिष्ठिरजिले * दिक्दार मानीकन ।
माता ! दिन्छु सराप यो विषमा * दुःखी छ मेरो मन ॥
केही गुप्त रहस्य राख्न नसकुन् * स्त्रीजातिले पेटमा ।
दाज्यूको वधमा सहायक हुने * पापी भएँ लोकमा ॥८०॥
सम्भी बान्धवलाइ पाण्वहरू * थाले जलैमा रुन ।
गर्थे रोदन हस्तिनापुर सबै * उर्लेर आईकन ॥
गर्दै वर्णन बीर बन्धु सबको * सत्-शौर्य, कीर्ति बल ।
गङ्गाको तटमा बसीकन गरे * क्यै बेर कोलाहल॥८१॥

पूरा गरी श्राद्ध क्रिया र तर्पण ।
सन्तुष्ट पारीकन शुद्ध ब्राह्मण ॥
धेरै गरी दान सुवर्ण रत्न ।
फर्केर आए पुरमा सबै जन ॥ ८२ ॥

महाभारत स्त्रीपर्व समाप्त ।



# महाभारत शान्तिपर्व

प्रारम्भः

नारदले कर्णको उत्पत्ति वर्णन गरेर युधिष्ठिरको चिन्ता निवारण गर्नु :–

वैशम्पायनले भने नरपते ! * गङ्गाजिको तीरमा ।
मैल्ला एक बसे युधिष्ठिर ठूलो * चिन्ता लिई चित्तमा ॥
आफ्ना पुत्र र बन्धु बान्धवहरू * संग्राममा जो मरे ।
तिनलाई क्रमले जलाञ्जलि दिई * संस्कार पूरा गरे ॥ १॥
ज्ञानी नारद, व्यास- देवल ऋषी * योगी तपस्वी मुनी ।
आइ, अर्ति दिएर धर्म–सुतको * चिन्ता हटाऊँ भनी ॥
राजाले सबको सुयोग्य रितले * सत्कार-पूजा गरे ।
शिक्षा पाउँ भनी सबै सुजनको * भूपाल पाऊ परे ॥२॥
तिनको विन्ति सुनी मिलेर सबले * भन्दा भए भूपति !
सारा कौरवको विनाश हुन गो * बाँकी नराखी रति ?
पापी भूपहरू मरे पृथिविको * भारी हलुको भयो ।
ठूलो भाग्य हुँदा सुखी अब भयौ * संकष्ट तिम्रो गयो ॥ ३॥
जानी श्रीहरिको दया अब तिमी * त्यागी कुशङ्का भय ।
पाँचै भाइ मिलेर राज्य गर यो * हे भूपति ! निर्भय ॥
शिक्षा भूपतिले सबै सुजनको * यस्तो सुनेथे जब ।
आफ्ना दुःखहरू विनम्र स्वरमा * बिन्ती चढाए सब ॥४
हे सर्वज्ञ, महर्षि, हे सुजन हो ! * जो जो थिए बान्धव ।
दाज्यू-भाइ, गुरु हितैषि जन औ * छोरा र नाती सब ॥

कोही शेष रहेन यो समरमा * राजा सबै मारिए ।
कस्का निम्तिगरूँ म राज्य ? वनमा * जान्थें बिदा बक्सिए ॥५॥
हाम्रा दाजु ति सूर्यका सुत थिए * श्री कर्ण योद्धा भनी ।
जानेको पहिले भए, कुरुकहाँ * के हेतु जान्थे तिनी ॥
श्री दुर्योधन लड्न तत्पर भए * मानेर तिन्कै भर ।
हुन्थ्यो नत्र लडाइँ हामिहरूको * कुन् कामको खातिर ॥६॥
दाज्यूको वध भाइबाट हुन गो * थाहै नपाईकन ।
दोषी हुन् जननी मलाइ नभनी * त्यो गुप्त राखिन् किन ?
राधाका सुत कर्ण के गरि भए * पायो कहाँ सूतले ।
पाए जान्न कहाँ गएर कसरी * शस्त्रास्त्र श्री कर्णले ॥७॥
पृथ्वीमा रथ भासियो समरमा * कुन् हेतुले कर्णको ।
हे सर्वज्ञ ! बताइबक्सनुहवस् * इच्छा छ यो सुन्नको ॥
चिन्ताग्रस्त भएर धर्म-सुतले * बिन्ती गरेको सुनी ।
लागे भन्न बुझाइ सूर्य-सुतको * उत्पत्ति नारद् मुनी ॥८॥
पापी भूप अनेक यो पृथिविमा * बढ्दै गएथे जब ।
भूमीको सब भार हर्न सुरले * युक्ती विचारे तब ॥
गर्दै आपुसमा विरोध रणमा * चाँडै मरुन् ती भनी ।
जो तार्तम्य थियो मिलेर सबले * तैयार पारे अनि ॥९॥
कुन्तीका सुत कर्ण जन्मन गए * त्यस्को बनी कारण ।
पाएँ पुत्र भनी गरे जतनले * श्री सूतले पालन ॥
तिन्लाइ पछि द्रोणले दिनुभयो * शिक्षा धनुर्वेदको ।
शिक्षा पाइ भए धुरन्धर ठुलो * श्रीकर्ण शस्त्रास्त्रको ॥१०
पाऊमा गुरुका परीकन भने * ब्रह्मास्त्र सिक्छु जब ।
बर्ता स्नेह भएर श्री विजयको * बोले गुरुजी तब ॥

जस्ले गर्दछ ब्रह्मचर्य तको * राम्रो गरी पालन।
त्यस्लाई अधिकार प्राप्त छ सदा * ब्रह्मास्त्र जानी लिन ॥११
सक्छन् धारण गर्न क्षत्रिय बरू * कोही तपस्वी भए।
त्यो ब्रह्मास्त्र हुँदैन सिक्न अरुले * भन्ने विचारी लिए।
यस्तो बात सुनेर द्रोण गुरुको * आज्ञा लिई राम्ररी।
पौंचे श्री जमदग्निका सुतकहाँ * ती कर्ण सोही घरी ॥१२॥
राजन्! भार्गव वंशको द्विज भनी * बोलेर झूटो त्यहाँ।
थाले चाकरि गर्न श्री परशुराम् * -को श्रेष्ठ आश्रम्महाँ ॥
धेरै काल त्यहीं बसेर गुरुको * सेवा गरी प्रेमले।
शिक्षा प्राप्त गरे महेन्द्र गिरिमै * ब्रह्मास्त्रको कर्णले ॥१३॥



कर्णको उत्पत्तिको विषयमा राक्षसको उदाहरण

गाई ब्राह्मणको कुनै दिन मृगी * ठानेर मारे जब।
पृथ्वीमा रथ गाड़िने ति द्विजको * त्यो श्राप पाए तब ॥

हे राजन् ! गुरुजी कुनै दिन सुते * श्री कर्णको काखमा ।
कीरा आइ कुनै डस्यो नरपते ! * ती वीरको पाउमा ॥१४॥
निद्रा भङ्ग हुनेछ व्यर्थ गुरुको * भन्ने विचारीकन ।
धेरै रक्त बगे पनी सहिरहे * पीड़ा नमानीकन ॥
केही बेरपछी उठेर गुरुले * देखेर त्यस्तो स्थिति ।
सोधे रुष्ट हुँदै 'बता अब छिटो * को होस् तँ हे दुर्मति॥१५
सक्तैनन् द्विज खप्न पीर यसरी * तैंले खपे झैं गरी ।
मानौं विप्र भनी तँलाई कसरी * मैंले बता यो घरी ॥
आफूलाइ बताइ ब्राह्मण छलिस् * व्यर्थैं मलाई किन ?
दिन्छु श्राप र मर्दछस् न त बता * यो छल्नको कारण' ॥१६
त्यो आज्ञा गुरुको सुनी सकसमा * श्री कर्ण योद्धा परे ।
काम्दै थर्थर भीतिले चरणमा * परेर बिन्ती गरे ॥
ब्रह्मन् ! सूत म हूँ, गरें छल ठुलो * ब्रह्मास्त्र जानौं भनी ।
दोषी हूँ अपराध माफ दिनुहोस् * मेरो दयालु बनी ॥१७॥
यस्तो विन्ति सुनी सरोष गुरुले * भन्दा भए 'हे खल !
तैंले विप्र बनी गरिस् मसँग जो * ऐह्ले वृथामा छल ॥
वेला प्राप्त भएपछी मरणको * शस्त्रास्त्र जाने जति ।
होला निष्फल संज्ञना नरहि त्यो * सम्पूर्ण हे दुर्मति ! ॥१८॥
यस्तो श्राप सँगै बिदा पनि दिए * तिनका गुरुले जब ।
मानी दिक्क ठुलो धनुर्धर बनी * श्री कर्ण फर्के तब ॥
ख्याति प्राप्त गरे धनुर्धर तथा * योद्धा बनी कर्णले ।
राखे साथमहाँ सुयोधनजिले * डाकेर सम्मानले ॥१९॥
केही कालपछी कलिङ्ग नृपले * डाकी सबै भूपति ।
छोरी दिन्छु भनी स्वयंवर रचे * आनन्द मानी अति ॥

श्री दुर्योधनले पुगी हरण ती * कन्या गरेथे जब ।
आए लड्न भनेर भूपतिहरू * निम्ता गरेका सब ॥२०॥
त्यो देखेर रिसाइ सूर्य-सुतले * एक्लै लड़ाइँ गरी ।
देखाएर ठुलो पराक्रम जिते * राजाहरू त्यो घरी ॥
जानी वीर ठुलो कलिङ्ग नृपले * डाकेर दर्बारमा ।
सुम्पे शासन अङ्गदेशभरिको * श्रीकर्णको हातमा ॥२१॥
राधाका सुत कर्ण भूपति भए * यस्तो किसिम्ले जब ।
श्री दुर्योधनको सहायक बनी * ती बस्न थाले तब ॥
कुन्तीलाइ दिनू वचन् परशुराम्- * को श्राप त्यो पाउनु ।
आई इन्द्र छलेर कुण्डल-कवच् * मागेर तिन्को लिनु ॥२२
साह्रै नै अपमान सूर्य-सुतको * श्री भीष्मद्वारा हुनु ।
हे राजन् ! नृप शल्यबाट रणमा * साह्रै तिरष्कृत् हुनु ॥
चल्दामा विपरीत नीति हरिले * श्री कर्णका साथमा ।
दैवाधीन भएर सूर्य-सुतले * मर्नू पर्‍यो युद्धमा ॥२३

युधिष्ठिरले चिन्ता गरेर वन जान खोज्नु र सबैले बुझाउनु—

ज्ञानी नारदबाट सूर्य-सुतको * वृत्तान्त सुन्दा पनि ।
चिन्ता नाश भएन, धर्म-सुतको * दुःखी भए झन् तिनी ॥
कुन्तीले जब धर्मका तनयको * देखिन् नराम्रो स्थिति ।
शान्ती प्राप्त हुने भनिन् हित कुरा * तिनूलाइ हे भूपति ! ॥२४
सम्झाएँ रविको गएर सँगमा * मैले पनी बेसरी ।
मानेनन् तर कर्णले हित हुने * शिक्षा कुनै त्यो घरी ॥
हामीलाइ गरी अनादर वृथा * दुष्कर्म जस्तो गरे ।
सोही पाप फलेर कर्ण रणमा * श्री पार्थद्वारा मरे ॥२५

आफ्ना बन्धु तथा हितैषि जनको * शिक्षा नमानीकन ।
मर्नें दुर्जनको वृथा घरिघरी * चिन्ता गरेको किन !
पाँचै भाइ मिली सुयोग्य रितले * यो राज्यको शासन ।
गर्नू पर्दछ दानको र मखको * सानन्द आयोजन ॥ २६
तिम्रो कीर्ति हुनेछ लोकभरिमा * विख्यात सत्कार्यले ।
कुन्तीको सुनि बात धर्म-सुतले * बिन्ती गरे क्रोधले ॥
राख्ता गुप्त हजूरले अघि कुरा * दुर्बुद्धिले कर्णको ।
ऐले हामिहरू परी सकसमा * पायौं वृथा दुःख यो ॥ २७



राजा युधिष्ठिरलाई द्रौपदी सहित सबैले सम्झाएको

सोही कारण श्राप दिन्छु म सबै * स्त्रीजातिलाई अब ।
कस्तै गुप्त कुरा ति राख्न नसकुन् * नारीहरूले सब ॥
कुन्तीलाइ सुनाइ बात त्यसरी * आँसू भरी नेत्रमा ।
सम्झी कर्ण र बन्धु बान्धव जती * आफ्ना मरे युद्धमा ॥ २८

लागे भन्न विषादयुक्त स्वरमा * ती चार भाईकन ।
हे भाईहरु हो ! गरौं म कसरी * यो राज्यको शासन ॥
दाज्यू भाइ र बन्धु बान्धव सबै * मारेर संग्राममा ।
कस्का निम्ति गरेर शासन बसौं * ऐह्ले म यो राज्यमा॥२९
जान्छु जङ्गलमा र योग खुशिले * पैह्ले गरी धारण ।
गर्छु चिद्घनको म चिन्तन सदा * आफ्नू लगाई मन ॥
गर्नू शासन राज्यको तिमिहरू * चारै जनाले अब ।
मेरो चित्त हुनेछ शान्त यसरी * जाला अशान्ति सब॥३०
साह्रै चित्त दुखाइ धर्म-सुतले * आज्ञा भएको सुनी ।
लागे भन्न बुझाइ भीम, वनमा * जानू वृथा हो भनी ॥
हामीले जब नीतिपूर्वक जित्यौं * संग्राम हे भूपति ! ॥
चिन्ता गर्नु वृथा छ बन्धु-वधको * जानेर दैवीगति ॥३१॥
संन्यासी बनि घोर जङ्गलमहाँ * जाने इरादा भए ।
व्यर्थै युद्ध गरेर बान्धवहरू * के हेतु मर्ने थिए ॥
मौरीको मह यत्नपूर्वक झिकी * खानै नपाईकन ।
सारा नाश भए समान हुन गो * हाम्रो दुखी जीवन ॥३२
नारीको सहवास यौवनमहाँ * पाएर त्यागे सरी ।
त्यस्तै हो सुख त्यागि नाथ ! वनमा* जानू पनी यो घरी ॥
आफ्ना शत्रुहरू समस्त रणमा * मारेर आफू पनी ।
मर्नू झैं स्थिति देख्छु हामिहरुको * अत्यन्त दुःखी बनी ॥३३
हाम्रो शक्ति ठुलो छ बाहु - बलले * सम्पन्न छौं सर्वदा ।
भोग्दैछौं तर कष्ट यो हजुर झैं * अल्पज्ञ दाजू हुँदा ॥
दिन्छन् यो उपदेश शास्त्रहरूले * अत्यन्त बूढो हुँदा ।
सारा सम्पति रित्तिंदा र अहिले * साम्राज्य खोसी लिंदा३४

संन्यासी हुनु योग्य हो सुजनले * आनन्द मानीकन ।
गर्नू हुन्छ हजुर शास्त्रमतको * के हेतु उल्लङ्घन ॥



राजा युधिष्ठिरलाई विविध उदाहरण दिएर सम्झाएको

सिद्धी प्राप्त, गएर घोर वनमा * मात्रै हुने हो भने ।
हुन्थे मुक्त अवश्य जन्तु वनमा * वृक्षादि पैदा हुने ॥३५॥
यौता पितृ र सन्तती, अतिथिको* गर्दैन जो पालन ।
शान्ती प्राप्त हुँदैन घोर वनमा * जाँदा पनी त्यस्कन ॥
जस्तै छन् निज कर्ममा रत सबै * प्राणीहरू लोकमा ।
त्यस्तै क्षत्रिय धर्म पालन गरी * बस्नोस् यही स्थानमा ३६
राजन् ! भीम भएर मौन सहसा * बस्ता भएथे जब ।
जोरी हात दुवै भने विजयले * आफ्नू इरादा सब ॥
राजन् ! हामि बन्यौं निमित्त रणमा * दुर्दैवले नै गरी ।
सारा भूप र वीर कौरव गए * संग्रामद्वारा मरी ॥ ३७

पैल्हेको इतिहास यै विषयको * सुन्नुहवस् भूपति !
सन्यासी भइ विप्रका सुत गए * वन्‌मा लिई दुर्मति ॥
गर्थें पालन ब्रह्मचर्य, तपमा * आफ्नू लगाई मन ।
पक्षीरूप भई पुगे सुरपती * तिन्‌को तपस्या लिन ३८
गर्नें भोजन यज्ञ-शेष जति छन् * ती श्रेष्ठ हुन्न ब्राह्मण ।
पक्षीको सुनी बात बालकहरू * बोल्ले खुशी भैकन ॥
हे पक्षी ! तप भैं छ के अरू कुरा * संसारमा उत्तम ।
हुन्छन् नाश तुरुन्त श्रेष्ठ तपले * अज्ञानरूपी तम ॥३९
तिम्रो आदर गर्दछौं हित हुने * देऊ सुशिक्षा अब ।
बोल्ले बालक विप्रको सुनि कुरा * हाँसेर श्री वासव ॥
सानै छौ अहिल्ले चलन् जगतको * कस्तो छ, के जान्दछौ ?
ठूलो हो तप मात्र बाल-हठले * के मूर्ख झैं भन्दौ ? ॥४०
गर्नू वैदिक कर्म ब्राह्मण भई * कर्तव्य हो लोकमा ।
सिद्धि प्राप्त हुनेछ शास्त्र-मत नै * मानेर संसारमा ॥
जस्ले गर्छ घरै बसेर मखको * सानन्द आयोजन ।
थामी धर्म-गृहस्थ, वेद-मतको * जो गर्दछन् पालन ॥४१
पूजा गर्दछ देवता, पितरको * श्रद्धादि जो सज्जन ।
त्यस्लाई सुख-शान्ति मिल्छ घरमै * पर्दैन जानू वन ।
पूजा श्राद्ध गरेर पितृ, सुरको * तिर्दैन जस्ले ऋण ।
त्यागी वैदिक कर्म मन्‌परि स्वयं * जो गर्दछन् दुर्जन ॥४२॥
तिन्‌लाई द्विजमा कुनै सुजनले * भन्दैन हुन्न उत्तम ।
सारा व्यर्थ ठहर्छ घोर तप वा * तिन्ले गरेको श्रम ॥
त्यो शिक्षा सुनि इन्द्रको खुशि हुँदै * हे शत्रु—संहारक ।
आफाफ्ना घरमा गए तप त्यजी * ती विप्रका बालक ॥४३॥

थामी धर्म गृहस्थको अतिथिको * सत्कार सेवा गरी।
पाए बस्न मरेर स्वर्गपुरिको * लोकादिमा राम्ररी॥
सोही कारण गर्नुहोस् हजुरले * यो राज्यको शासन।
गर्दा पालन धर्मको, सुख ठुलो * पाइन्छ त्यागी तन॥४४
त्यस्तो बात सुनीसकी विजयको * क्यै बेर सोचीकन।
लागे भन्न बुझाउँदै नकुलले * ती भूपतिको मन॥
राजन्! बाहिरको र भित्र मनको * पैह्ले पखाले मल।
शान्ती मिल्दछ औ रहन्छ जनको * कीर्ति सदा उज्ज्वल॥४५



राजा युधिष्ठिरलाई व्यासजीद्वारा अनेक विषयको शिक्षा

त्यागी यो घरबार मात्र वनमा * के पाइएला सुख!
त्यागदा धर्म गृहस्थको बरु वृथा * पर्ला अनेकौं दुख॥
आफ्नू धर्म त्यजेर श्रेष्ठ अरुको * हो धर्म जो भन्दछन्।
व्यर्थैको हठले ठुलो नरकमा * पापी तिनै पर्दछन्॥४६॥

आए लड्न भनेर कौरव तथा * जो भूपती दुर्जन ।
मार्‍यौं क्षत्रिय धर्म पालन गरी * संग्राममा तिन्‌कन ॥
पाएको निज धर्मपूर्वक लडी * यो राज्य हो भूपति !
त्यस्को शासन गर्नुहोस् हजुरले * शंका नमानी रती ॥४७॥
चारै भाइ खुशी भए नकुलको * बिन्ती सुनेथे जब ।
लागे श्री सहदेव भन्न खुशिले * आफ्नो इरादा तब ॥
दोटा छन् 'मम' यो सदा दुख दिने * हे भूपती ! अक्षर ।
साक्षात् उत्तम ब्रह्म हो 'न मम' नै * हे भूप ! नित्य स्थिर॥४८
सोही कारणले त्यही 'न मम' को * राम्रो लिई आश्रय ।
गर्नोस् शासन राज्यको अब, भई * निर्लिप्त औ निर्भय ॥
गर्दैनन् शुभ कर्म भूपति भई * जस्ले प्रजा पालन ।
शान्ती जङ्गलमा तथा घरमहाँ * मिल्दैन त्यस्ताकन ॥४९
चारै भाई मिलेर यो किसिमले * बिन्ती चढाए जब ।
जोरी हात भनिन् विनम्र स्वरमा * श्री द्रौपतीले तब ॥
हे स्वामी ! सब भाइले हित कुरा * बिन्ती गरेको सुनी ।
बोल्नू हुन्न हजूर क्यै पनि वृथा * के पुग्छ दुःखी बनी ॥५०
हामीलाइ अनेक कष्ट कुरुले * सन्ताप व्यर्थै दिए ।
सारा सैन्य र भूपतीसहित ती * त्यै पापले मारिए ॥
जो जो वीर नरेश सैनिक तथा * भाई र बन्धू मरे ।
आउन्नन् अब ती फिरेर सहजै * संसार पारी तरे ।५१॥
हामीले जब धर्म-पूर्वक जित्यौं * संग्राम हे भूपति !
तिन्का निम्ति दुखी हुनू हजुरले * हो व्यर्थ हे सद्गति ॥
देखी शोक हजूरको व्यथित छन् * यी चार भाई पनी ।
यिन्को पीर हटाइ उत्तम दिनोस् * शिक्षा दयालु बनी ॥५२॥

राजा बर्बरीकको उपाख्यान :—

चारै भाइ र द्रौपदी पनि मिली * सम्झाउँदा राम्ररी ।
बोल्नेनन् नृपती युधिष्ठिर ठूलो * चिन्ता परी त्यो घरी ॥
त्यै वेला पुरका पुगे द्विजहरू * सत्पात्र नारी, नर ।
सारालाइ बसालि धर्म-सुतले * गर्नू भयो आदर ॥५३॥
तिन्ले पाण्डवको गरे खुशि हुँदै * सत्कीर्तिको वर्णन ।
आशीर्वाद दिए कती सुजनले * आनन्द मानीकन ॥
लागे धर्म-कुमार भन्न--पुरका * हे श्रेष्ठ नारी, नर ।
हाम्रो जीत गराउने समरमा * हुन् कृष्ण योगेश्वर ॥५४
योद्धा कौरवलाइ नत्र कसरी * मार्नै थियौं युद्धमा ।
बारंबार प्रणाम गर्दछु परी * श्री कृष्णका पाउमा ॥
यस्तो बात सुनेर धर्मसुतको * खूशी भए ती सब ।
थाले गर्न कुरा अनादर गुनी * चारै जना पाण्डव ॥५५
मार्‍यौं शत्रुहरू ठुलो दुख खपी * हामीहरूले सब ।
हाम्रो जीत गराउने हुन गए * यी सारथी केशव ॥
हाम्रो त्यो रणमा पराक्रमहरू * देख्दै नदेखेसरी ।
गर्दैछन् गुण गान खूब हरिको * दाज्यू भई यो घरी ॥५६
हामी चित्त बुझाउँ धर्म-सुतको * वार्ता सुनी के गरी ।
ती चारै जनको कुरा सुनिसकी * बोल्नूभयो श्री हरि ॥
हे राजन् ! सब भाइले हजुरका * जस्तो पराक्रम् गरे ।
त्यस्ले जीत लड़ाइँमा हुन गयो * सम्पूर्ण वैरी मरे ॥५७॥
त्यस्को ख्याल नराखि आफ्नु मनमा* आज्ञा भयो जे जति ।
त्यसले चित्त दुख्यो यि भाइहरूको * अत्यन्त हे भूपति !

बोले धर्म-कुमार आदर गरी * आज्ञा हरीको सुनी ।
कस्ले गर्छ बढाइ आफ्नु यसरी * आफैं मपाईं बनी ॥५८
मारे शत्रुहरू बराबर सबै * भाईहरूले हरि !
कस्को श्रेष्ठ थियो पराक्रम भनौं * कुन् मुख्य हो के गरी ?
यस्तो बात सुनी तुरुन्त दिनुभो * श्री कृष्णले उत्तर ।
देख्ने युद्ध सबै छ जीवित अझैं * हे भूप ! यौटा शिर ॥५९
त्यसले भन्छ यथार्थ बात हरिले * आज्ञा भएथ्यो जब ।
पाँचै सोध्न भनी हरीसहित ती * पाँचै जना पाण्डव ॥
सोधे त्यो शिरलाई धर्म-सुतले * देखी ठुलो वृक्षमा ।
देखेथ्यौ तिमिले पराक्रम ठुलो * कुन् वीरको युद्धमा ?६०
लाग्यो त्यो शिर मात्र बोल्न नृपले * आज्ञा भएको सुनी ।
यौटा कृष्णसिवाय वीर रणमा * देखीनँ कोही पनि ॥
हुन्थे कत्तल वीर सैनिक जती * श्री कृष्णका चक्रले ।
खान्थिन् योगिनि झैं घुमी रगत ती * श्रीद्रौपदी रोषले ६१॥
खेल्थे बालक झैं अरू जती थिए * योद्धा त्यहाँ भूपती !
मैले बात यथार्थ वर्णन गरें * प्रत्यक्ष देखे जति ॥
सोधे धर्म-कुमारले--कसरि यो * तिम्रो भयो—दुर्गति ।
बोल्दैछौ शिर मात्र भैकन तिमी * आश्चर्य लाग्यो अति६२
यस्तो प्रश्न सुनेर धर्म-सुतको * हाँसेर बोल्यो शिर ।
राजन् बङ्ग प्रदेशको नरपती * मै बर्बरीक हूँ तर ॥
चर्चा युद्ध हुने सुनी अलिकती * सेना लिई साथमा ।
हार्नेको पुगि गर्छु मद्दत भनी * आएँ म संग्राममा ॥६३
सोधे ब्राह्मणले मलाइ पथमा * भेटेर हे भूपति !
जाँदैछौ अहिले कतातिर तिमी * के गर्न हे सन्मति !

यस्तो प्रश्न सुनेर उत्तर दिएँ * तिन्लाइ हे ब्राह्मण ।
हार्नेतर्फ भई लड़ेर रणमा * जानेछु मद्दत् दिन ॥६४
हाँस्तै ब्राह्मणले भने–'शरहरू * छन् तीन मात्रै किन ?
थोरै सैन्य लिई सहाय कसरी * गर्छौ मलाई भन ?'
मैले ती द्विजलाइ उत्तर दिएँ * 'छाड़ेर यौटा शर ।
मृत्युस्थान बुझेर वीर सबकी * दोस्रो चलाई शर ॥६५॥
मार्नेछु सब वीर सैनिकहरू * चाहिन्न तेस्रो शर' ।
मेरो बात सुनेर फेरि द्विजले * सोधे गरी आदर ॥
शेखीयुक्त कुरा भन्यौ जति यहाँ * आफ्नू गरी वर्णन ।
केही देउ प्रमाण नत्र कसरी * विश्वास मानौं भन ॥६६
इच्छा ब्राह्मणको बुझीकन त्यहीं * मैले परीक्षा दिन ।
यौटा बाण गरें प्रहार पहिले * रातो लगाईकन ॥
जस्को प्राण जहाँ थियो त्यहिं पुगी* विद्युत्सरी वेगले ।
फर्क्यो चिह्न लगाइ फेरि करमा * देखेर ती विप्रले ॥६७॥
माग्छु दान दिने भए प्रण गरी * देऊ भनेथे जब ।
मैले दिन्छु भनी गरें प्रण तिमी * जे माग्दछौ त्यो सब ॥
मेरो बात सुनेर लिन्छु शिर नै * देऊ भने विप्रले ।
सोधें—यो शिर माग्दछौ छल गरी * हे विप्र ! कुन् हेतुले ॥६८
को हौ ? यो शिरले हुनेछ हित के ? * कल्याण तिम्रो भन ।
मेरो विन्ति सुनेर आदर गरी * बोल्दा भए ब्राह्मण ॥
सक्तैनन् तिमिलाइ जित्न रणमा * हे वीर ! कोही पनि ।
पक्का कौरव हार्दछन् र तिमिले * गर्छौं कि मद्दत् भनी ६९
मेरा पाण्डव मित्र हुन् समरमा * तिन्को चिताई हित ।
माग्दैछु शिर दान देउ तिमिले * भक्ती र श्रद्धासित ॥

राजन् ! कृष्ण मलाइ जान 'शिर' यो* काटी लिए तापनी ।
देखौला तिमी युद्ध जीवित रही * मेरो कृपाले भनी ॥७०॥



वन जान तयार भएका राजा युधिष्ठिरलाई व्याधा र मूसाको उदाहरण दिएर शिक्षा दिएको

मेरो भक्ति हुने र दुःख नहुने * दिन्छु खुशीले वर ।
यस्तो अर्ति दिएर रूप त्यति त्यो * श्री कृष्ण योगेश्वर ॥
आफ्नो रूप लिई चतुर्भुज दिए * गोविन्दले दर्शन ।
पाएँ दर्शन नाथका चरणको * प्रत्यक्ष सोही क्षण ॥७१॥
टक्र्याएँ शिर यो प्रसन्न मनले * काटेर मैले जब ।
मेरो यो शिरलाइ राखि रुखमा * पाल्नूभयो केशव ॥
यस्तो विन्ति गरेर मौन हुन गो * बोलेन केही शिर ।
आफ्नू बाहुलिले भुसारिदिनुभो * श्री कृष्णले सादर ॥७२
पाई स्पर्श सुकोमल प्रभुजिको * त्याग्यो दुखी जीवन ।
गर्नूभो हरिले सहर्ष शिरको * संस्कार सोही क्षण ॥

श्री गोविन्द र पाँच पाण्डव अरू * जो जो गएका थिए।
गर्दै वर्णन कृष्णका गुणहरू * आनन्दले फर्किए ॥७३॥

श्री वेदव्यासको शिक्षा, युधिष्ठिरको नगर प्रवेश र राज्याभिषेक :—

देखेथे जब बर्बरीक नृपको * प्रत्यक्ष त्यो सद्गति।
जानी ईश्वर कृष्णका चरणमा * आफ्नू लगाई मति ॥
पाँचै भाइ मिली सुयोग्य रितले * गर्दा भए चाकरी।
आए व्यास मुनी युजिष्ठिरकहाँ *शिक्षार्थ सोही घरी ॥७४॥
राखी आसनमा प्रसन्न मनले * तिन्को गरे स्वागत।
लागे भन्न बुझाइ व्यास मुनिले * सद्धर्म राम्रोसित ॥
राजन् ! खूब अनर्थ दुष्ट कुरुले * तिम्रो पहीले गरे।
लागेथ्यो कर लड्नलाइ र सबै * त्यै पापद्वारा मरे ॥७५॥
तिम्रा भाइ बने निमित्त तर ती * आई ठूलो दुर्दिन।
दैवाधीन भई मरे तिमि वृथा * दुःखी रहन्छौ किन ?
मर्नें भूपतिका र वीरहरूका * सन्तानको राम्ररी।
रक्षा, पालन गर्नुपर्छ तिमिले * राजा बनी यो घरी ॥७६
यस्तो अति सुनेर व्यास मुनिको * शान्ती भई चित्तमा।
सोधे धर्मकुमारले शिर धरी * श्री व्यासका पाउमा ॥
लाग्यो पाप ठूलो अवध्य वध जो * गर्नू पर्‍यो युद्धमा।
सीयोले सरि घोच्छ यो सब कुरा * सम्झीलिंदा चित्तमा॥७७
प्रायश्चित्त स्वधर्मपूर्वक कुनै * कर्तव्य मेरो भए।
तिनका निम्ति पनी म गर्छु खुशिले * जो युद्धमा मारिए ॥
बिन्ती धर्मकुमारको सुनिसकी * भन्नूभयो व्यासले।
निर्दोषी तिमि छौ, मरे समरमा * सम्पूर्ण ती कालले ॥७८

जस्का बन्धु तथा पिता र जननी * छैनन् छ जो निर्दयी ।
मार्‍यो 'काल' त्यही भएर बलवान् * के पुग्छ चिन्ता लिई ॥
राजन् ! क्षत्रिय धर्ममा दृढ रही * त्यस्को गर्‍यौ पालन ।
लाग्यो पाप मलाइ बन्धुवधको * भन्छौ वृथामा किन ? ७९
आफ्नू धर्म ठुलो बुझी जतनले * गर्दैन जो पालन ।
कस्तै पुण्य गरोस् हुँदैन कहिले * उत्तीर्ण त्यो दुर्जन ॥
गर्नेछौ हयमेध एक तिमिले * श्रद्धा पुर्‍याई जब ।
प्रायश्चित्त हुनेछ, ताप मनको * जानेछ तिम्रो सब ॥८०॥
धेरै राक्षसको गरी वध स्वयं * श्री रामले युद्धमा ।
गर्नू भो पछि अश्वमेध मख नै * आनन्दका साथमा ॥
धेरै वर्ष चलीरह्यो अति ठुलो * संग्राम देवासुर ।
मारे राक्षसलाइ स्वर्गपुरिको * भोगादिका खातिर ॥८१॥
पापी कौरवले पनी घरि-घरि * दुष्कर्म जस्तो गरे ।
सोही पाप फलेर दैवगतिले * संग्रामद्वारा मरे ॥
जस्का निम्ति दुखाइ चित्त वनमा * जानू वृथा हो अब ।
जानू योग्य छ हस्तिनापुर; लिई * भाई सबै बान्धव ॥८२॥
यस्तो अर्ति दिएर आश्रममहाँ * श्री व्यास पाल्नूभयो ।
चिन्ता धर्मकुमारको जति थियो * त्यो अर्तिद्वारा गयो ॥
त्यो देखि हरिले हुकुं दिनुभयो * आनन्द मानीकन ।
गर्नूपर्छ छिटो गई नगरमा * हे भूपती ! शासन ॥८३॥
त्यो आज्ञा हरिको सुनी रथ तथा * पाल्की तयारी गरी ।
गान्धारी, धृतराष्ट्रलाइ पहिले * राख्दा भए राम्ररी ॥
राखी भाइहरू वरी-परि अरू * राजा तथा बान्धव ।
आफू माझमहाँ युधिष्ठिर बसे * त्यागेर चिन्ता सब ॥८४

हाँकेथे रथ भीमले विजयले * छाता लिए सुन्दर ।
भाई श्री सहदेव औ नकुलले * हाँक्ता भए चामर ॥
शोभा दिव्य फिंजाइ गौरव ठूलो * दर्शाउँदै भूपको ।
ताराका बिचमा सफा शशिसरी * यात्रा थियो भव्य त्यो ८५
लागेथ्यो जब बढ्न त्यो पुरतरफ् * राजा बसेको रथ ।
थाले हेर्न अनेक मानिसहरू * ढाकेर पूरा पथ ।
कौशी, झ्याल, अटालिमा, सडकमा* हेरौं सवारी भनी ।
पैह्लेदेखि थिए उपस्थित युवा * स्त्री, बाल, बूढा पनी ॥८६
पौंचेथ्यो रथ त्यो जसै नगरमा * सत्कार ठूलो गरे ।
लावा पुष्प अबीर आदि सबले * पानी परे झैं छरे ॥
दिन्थे आशिष दीर्घ जीवन हुने * भूपाललाई कति ।
जै जैकार गरेर उच्च स्वरले * आनन्द मान्थे कति ॥८७
पढदै वेद गुणानुवाद नृपको * गर्थे जहाँ ब्राह्मण ।
चार्वाक् नाम हुने थियो नरपते ! * यौटा त्यहीं दुर्जन ॥
झूटो उक्ति दिएर विप्रहरूको * बोल्यो कराईकन ।
मार्‍यो बन्धु सबै वृथा समरमा * गर्छौं बढाई किन ॥८८॥
गर्ने पाप तिमि समान नृपको * धिक्कार हो जीवन ।
झूटो राक्षसको कुरा सुनि सबै * बोल्दा भए ब्राह्मण ॥
गर्दैनौं मनले पनी अहित वा * निन्दा, गुणी भूपको ।
सुन्नू व्यर्थ हजूरले किन पर्‍यो * झूटो कुरा दुष्टको ८९॥
राजालाइ यती भनेर द्विजले * हुँकारको शब्दले ।
हप्काए, तर दुष्ट राक्षस मर्‍यो * चार्वाक त्यै श्रापले ॥
मानी दुःख ठूलो युधिष्ठिर गए * दर्बारमा त्यो दिन ।
बिन्ती श्री धृतराष्ट्रजीसित गरे * पाँचै जना गैकन ॥९०॥

छोरा हूँ म हजूरको चरणमा * भक्ती सदा गर्दछु ।
आज्ञा मान्न सदा प्रसन्न मनले * हे भूप ! तैयार छु ॥
गर्थे राज्य-प्रबन्ध पूर्ण सहजै * आज्ञा हजुर्ले दिए ।
यो बिन्ती धृतराष्ट्रले सुनिसकी * हाँसेर भन्दा भए ॥९१॥
तिम्रो राज्य थियो अघी र अहिले * हे बाबु ! तिम्रै भयो ।
जे इच्छा मनमा छ त्यै गर तिमी * आज्ञा दिने हूँ म को ?
दिन्छु आशिष दीर्घ-जीवन मिली * कीर्ती हवस् उज्ज्वल ।
पाऱ्यौ उज्ज्वल पाँच भाइहरूको * उद्योगले यो कुल ॥९२॥
यो आज्ञा धृतराष्ट्रको जब सुने * खूशी भए पाण्डव ।
सामग्री अभिषेकको जति थियो * तैयार पारे सब ॥
राखे रत्नजड़ाउ एक सुनको * देदीप्य सिंहासन ।
बस्ने श्री हरिले थियो नगिचमै * त्यस्तै सफा आसन ॥९३॥
माला, चामर, छत्र, तोरण, ध्वजा * टाँगेर चारैतिर ।
पारे स्वर्गसमान रत्नहरूले * प्रासाद बाटो, घर ॥
आएथ्यो अभिषेकको दिन जसै * आनन्द मानीकन ।
आफ्नू आसनमा युधिष्ठिर बसे * तिन्का पछि अर्जुन ॥९४
हाँक्थे श्री सहदेव औ नकुलजी * आनन्दले चामर ।
सामू भीम बसे, अली वर त्यहीं * श्री कृष्ण योगेश्वर ॥
गान्धारी, धृतराष्ट्र, कुन्ति जननी * श्री द्रौपदी सुन्दरी ।
अर्कोतर्फ युयुत्सु औ विदुरजी * बस्ता भए त्यो घरी ॥९५
पढ्थे ब्राह्मण स्वस्तिवाचन, गुरू * धौम्यादि ज्ञानी मुनी ।
गर्थे धर्म-कुमारलाइ अभिषेक् * हुन्न दीर्घजीवी भनी ॥
हे राजन् ! अभिषेक पाण्डु-सुतको * पूरा भएथ्यो जब ।
पारे तुष्ट सहर्ष ब्राह्मण तथा * दुःखी दरिद्री सब ॥९६॥

सेनानायक, भृत्यवर्ग र प्रजा * मन्त्री हितैषीकन ।
इच्छामाफिक वस्तुले र धनले * राजी गराए मन ॥
राजाले युवराजको पद दिए * श्री भीम योद्धाकन ।
सल्लाहा दिनमा रहे विदुरजी * सेनापती अर्जुन ॥९७॥
योग्यायोग्य गरी विचार नृपले * उत्साहका साथमा ।
राखेथे सबलाइ राज्यभरको * सानू ठुलो काममा ॥
बाँधी राज्य प्रबन्ध योग्य रितले * पैह्ले भए झैं गरी ।
थाले शासन गर्न धर्म-सुतले * साम्राज्यको राम्ररी ॥९८

पाण्डवलाई लिएर श्रीकृष्ण भीष्मकहाँ जानू :—

हे राजन् ! धृतराष्ट्रको जतनले * गर्दै रही चाकरी ।
गर्थे शासन वीर पाण्डवहरू * तिन्ले भने झैं गरी ॥
आए भेट्न भनी स्वयं कृप गुरु * भूपाललाई जब ।
राखेथे गुरुलाइ आदर गरी * पैह्ले सरीको सब ॥९९॥
हे राजन् ! हरिको युधिष्ठिरजिले * गर्छु भनी दर्शन ।
प्रातःकालमहाँ पुगे विजयको * प्रासादमा क्वै दिन ॥
चिम्ली नेत्र दुवै सफा पलङमा * बाँधेर पद्मासन ।
गर्थे इन्द्रिय रोकि शुद्ध मनले * चिद्‌ब्रह्मको चिन्तन॥१००
टाढैबाट गरी प्रमाण हरिको * देखेर त्यस्तो स्थिति ।
बोले धर्म-कुमार नम्र स्वरमा * आनन्द मानी अति ॥
गर्नै पालन, सृष्टि-नाश क्षणमा * हे नाथ ! लक्ष्मीपति !
गर्नूहुन्छ हजूर ध्यान यसरी * कस्को लगाई मति ?॥१
पाई दर्शन नाथको चरणको * कल्याण मेरो भयो ।
मेरो केहि भए कसूर अहिले * गर्नोस् क्षमा हे विभो !

मन्छन् जस्कन 'नेति-नेति' श्रुतिले * ब्रह्माण्डका पालक !
चिन्ता छैन मलाइ केहि, प्रभु भँै * पाएर संरक्षक ॥२॥
जोरी हात थड़ा भएर नृपले * बिन्ती गरेको सुनी ।
आज्ञा गर्नुभयो जनार्दनजिले * हाँस्तै दयालु बनी ॥
मेरो चिन्तनमा निमग्न अहिले * छन् भीष्म, त्यै कारण ।
ऐल्हे हे अधिराज ! भीष्मतिर नै * मेरो हुनाले मन ॥३॥
मैले जान्न सकीनँ भेट्न यसरी * पाल्नूभएको पनी ।
जान्छु भीष्मकहाँ म भेट्न नगए * दुःखी हुनेछन् तिनी ॥
जानूहुन्छ भने हजूर मसँगै * पाल्नूहवस् भूपति !
गर्नेछन् उपदेश योग्य हितको * जाने बुझेको जति ॥४॥
त्यो आज्ञा हरिको सुनेर मनमा * आनन्द मानीकन ।
चारै भाइ लिई चढेर रथमा * जाँदा भए त्यै क्षण ॥
ज्ञानी नारद, व्यास, तुम्बुरु कुरु * शाण्डिल्य औ जैमिनी ।
विश्वामित्र, वसिष्ठ, दक्ष क्रतु औ * मौद्गल्य गौतम् मुनि॥५
देवस्थान र वात्स्य, हारित अरू * ज्ञानी गुणी ब्राह्मण ।
गर्थे चिन्तन कृष्णको बसी त्यहाँ * घेरा लगाईकन ॥
पढ्थे वेद अनेक ब्राह्मणहरू * सानन्द हे भूपति !
श्री योगेश्वरको प्रसन्न मनले * श्रीभीष्म गर्थे स्तुति ॥६॥
पाँचै पाण्डव वीरका सँग जसै * श्री कृष्ण योगेश्वर ।
ल्याए भीष्मकहाँ सवारि हरिको * गर्दै ठुलो आदर ॥
आज्ञा गर्नुभयो सहर्ष हरिले * श्री भीष्म योद्धाकन ।
जानी स्नेह ठुलो ममा हजुरको * आएँ म हे सज्जन ! ॥७॥
कस्तो कष्ट छ ? देहमा अझ पनी * छन् घाउ शस्त्रास्त्रका ।
देख्ता दुःख हजूरको, सुख वृथा * ठान्छु म संसारका ॥

राखेको वशमा छ मृत्यु यसरी * कुन् व्यक्तिले लोकमा ।
पारेको छ हजूरलाई अहिले * दुर्दैवले कष्टमा ॥८॥
ज्ञानी धार्मिक वीर को हजुर झैं * संसारमा छन् अब ?
त्याग्नू हुन्छ हजूरले तन भनी * सन्ताप मान्छौं सब ॥
दुःखी धर्म-कुमार छन् समरमा * राजा र बन्धू मरी ।
तिन्लाइ उपदेश उत्तम दिनोस् * कल्याण मिल्ने गरी ९॥
त्यो आज्ञा हरिको सुनेर मनमा * आनन्द मानीकन ।
जोरी हात भने पितामहजिले * हे देवकी-नन्दन !
जस्को चिन्तनले सबै तरहका * संकष्ट जान्छन् टरी ।
जान्छन् नाम जपेर जुन् पुरुषको * संसार पारी तरी ॥१०॥
सोही श्री हरिको दया हुन गई * पाएँ यहीं दर्शन ।
बारंबार प्रणाम गर्दछु प्रभो ! * खूशी छ मेरो मन ॥
जस्को तेज र शक्तिले स्थिति सदा * मानिन्छ ब्रह्माण्डको ।
तिन्का सामु ठुलो भएर अहिले * शिक्षा दिने हूँ म को ॥११
शिक्षा बक्सनुहोस् स्वयं हजुरले * तिन्लाइ धर्मार्थको ।
शक्ती इन्द्रियमा रहेन अघि झैं * घाऊ छ झन् शस्त्रको ॥
गल्दै देह गयो, बढी शिथिलता * सुद्धी हरायो सब !
सक्नेछु उपदेश गर्न कसरी * धर्मार्थको केशव ! ॥१२॥
यस्तो विन्ति सुनी पितामहजिको * बोल्नूभयो माधव ।
आज्ञा गर्नुभयो जती हजुरले * हुन् सत्य वार्ता सब ॥
आफ्ना बान्धवलाइ यो बखतमा * शिक्षा हजुर्ले दिंदा ।
होला मङ्गल लोकको, हजुरको * बढ्नेछ कीर्ति सदा ॥१३
त्यागने प्राण हजूरले अब रहे * छप्पन्न मात्रै दिन ।
त्यस्का बाद गएर स्वर्गपुरिमा * बस्नोस् खुसी भैकन ॥

जस्तो बढ्दछ अन्धकार नभमा * श्रीसूर्य अस्ताउँदा ।
त्यस्तो ज्ञान हुनेछ लुप्त भवको * यो देह त्यागी दिंदा॥१४॥
मूर्च्छा ग्लानि र भोक-प्यासहरुको * बाधा नहोस् देहमा ।
पीड़ा नाश भएर बाणहरुको * शान्ती रहोस् चित्तमा ॥
बढ्ला निर्मल ज्ञान, तेज रविको * फैले सरी भूमिमा ।
देलान् लोकहरू जलाञ्जलि ठुलो* कीर्ति रही लोकमा ॥१५॥
गर्नुहोस् उपदेश लोकहरुको * कल्याणको खातिर ।
होला सुन्दर दिव्यदृष्टि, खुशिले * मैले दिएँ यो वर ॥
पाई यो वरदान भीष्म मनमा * अत्यन्त खुशी भए ।
भोली दर्शन गर्दछौं भनि सबै * दर्बार फर्की गए ॥१६ ॥
प्रातःकाल अनेक मङ्गल हुने * बाजा बजे सुन्दर ।
शय्या त्यागनुभयो सहर्ष हरिले * नित्य क्रिया खातिर ॥
सन्ध्या स्नान सकेर विप्रगणको * सत्कार पूजा गरी ।
पाँचै भाइ लिई पितामहकहाँ * पाल्नूभयो श्रीहरी ॥१७॥
पाई दर्शन कृष्णको खुशि भए * श्री भीष्म ज्ञानी जब ।
तिनूको भाव बुझी प्रसन्न मनले * बोल्नूभयो केशव ॥
'क कस्तो छ बताउनोस् शरिरको * ग्लानी, अशान्ती, दुख।'
बोले भीष्म कुरा सनी कमल झैं * हेर्दै प्रभूको मुख ॥१८॥
'जस्ले गर्दछ सृष्टि-नाश क्षणमा * संसारको पाल्न ।
त्यस्ता श्री जगदीशको भइ दया * पाएपछी दर्शन ॥
के टिक्थे मनका अशान्ति दुख ती * भागे डराईकन ।
शक्ती ज्ञान बढी सबै तरहले * खुशी छ मेरो मन ॥१९॥

श्री कृष्णले दिनुभयो वर जो मलाई ।
त्यस्ले दियो नयन दिव्य दुवै खुलाई ॥

इच्छा छ जे अब युधिष्ठिर सोध्न आउन् ।
सन्ताप बन्धु-वधको मनमा नमानुन्' ॥२०॥

श्री भीष्मले युधिष्ठिरलाई राज-धर्मको उपदेश दिनु :—

राजन् ! धर्म-कुमारलाइ खुशिले * डाके जसै भीष्मले ।
जोरी हात भने अघिल्तिर गई * श्री धर्मका पुत्रले ॥
इच्छा गर्दछु राज-धर्म अहिले * सुन्ने म राम्रो गरी ।
आज्ञा गर्नुहवस् प्रसन्न मनले * राखी दया यो घरी ॥२१
यस्तो प्रश्न सुनेर धर्म-सुतको * श्री भीष्म खूशी भए ।
हेर्दै भूपतिको प्रसन्न मुहुडा * क्यै बेर ती घोरिए ॥
चिम्ली नेत्र समस्त इन्द्रियहरू * आफ्ना गराई स्थिर ।
लागे भन्न बुझाइ नम्र स्वरमा * श्री भीष्मले सादर ॥२२॥
बाबू ! पितृ र देवता र द्विजको * गर्नै सदा पूजन ।
गर्नैछन् उपकार भूपति भई * जो सत्यको पालन ॥
तिन्लाइ कहिल्यै हुँदैन मनमा * केही कुराको दुख ।
भोग्नेछन् इहलोकमा पछि मरी * स्वर्गादिको ती सुख ।२३
योद्धा, धार्मिक औ जितेन्द्रिय गुणी * वाणी हुने कोमल ।
दानी श्रेष्ठ उदार चित्त र सदा * कीर्ति हुने उज्ज्वल ॥
जस्मा छन् गुण यी र विप्रगणको * जो गर्दछन् आदर ।
तिन्को राज्य हुँदैन भ्रष्ट, घरमा * लक्ष्मी हुने छिन् स्थिर२४
राजद्रोह र भ्रूण-त्याग, गुरुको * स्त्रीलाइ राख्ने अनि ।
ज्ञानी विप्र भएर गर्दछ भने * हत्या कसैको पनि ॥
त्यस्ता ब्राह्मणलाइ दण्ड नदिई * पक्रेर राख्ने थुनी ।
देश-त्याग गराउनू नृपतिले * कर्तव्य हो यो भनी ॥२५

गर्नै हुन्न क्षमा सदैव नृपले * दोषी र द्रोहीकन ।
गर्छन् भूपतिको कुनै बखतमा * निन्दा तिनै दुर्जन ॥
आफ्नो शक्ति गरी विचार मनमा * औकातको माफिक ।
राख्नूपर्दछ विज्ञ मानिसहरू * भूपालले सेवक ॥२६॥
सेना, सम्पति, शस्त्र-अस्त्र, पृथिवी * पानी तथा जंगल ।
हे बाबू ! उपरोक्त वस्तुहरु हुन् * राजाहरूका बल ॥
गर्नू पर्दछ वृद्धि भूपति भई * यो वस्तुको राज्यमा ।
सक्तैनन् अनि शत्रु आउन कुनै * ती भूपको सामुमा ॥२७॥
त्यस्मा केहि कमी कुनै बखतमा * देखे भने शत्रुले ।
गर्छन् राज्य लिने प्रयत्न सहसा * ईर्ष्या तथा द्रोहले ।
मैत्री हुन्छ समानका सँग सदा * हो नीति राम्रो तर ।
मान्छन् स्वार्थ नराखि मित्र जनले * कुन् कामको खातिर ॥२८
पूरा स्वार्थ हुँदा समाप्त सहजै * मैत्री पनी हुन्छ त्यो ।
सोही कारणले बलाबल बुझी * आफ्ना तथा शत्रुको ॥
गर्नू पर्दछ राज्य शासन सदा * आफ्नो सुरक्षा गरी ।
सक्तैनन्न अनि गर्न शत्रुहरुले * क्यै हानिकोही घरी ॥२९॥
अर्काको वशमा परेर नृप जो * बोल्छन्न घमण्डी बनी ।
गर्छन् यत्न घमण्ड तोड्दछु भनी * वैरीहरूले पनी ॥
बर्ता नम्र हुदैन बन्नु र बढी * शेखी नगर्नू सदा ।
बोल्नूपर्छ विचारपूर्वक कुरा * राजा भई सर्वदा ॥३०॥
गर्नू न्याय कड़ा बनेर यम झैं * अन्यायमा भूपले ।
राख्नू कोष भरी कुबेरसरि नै * सम्पत्ति सत् नीतिले ॥
हुन्नन् दीन दुखी र दुर्बल प्रजा * जुन्न भूपको राज्यमा ।
मानिन्छन् त्यहि भूप उत्तम गुणी * सम्पूर्ण संसारमा ॥३१॥

जो राजा भई लिन्छ दुर्व्यसनको * आनन्दले आश्रय ।
त्यस्लाई भय हुन्छ शत्रुहरूको * धेरै थरी निश्चय ॥
ठट्टा सेवक वर्गका सँग बसी * जो भूपती गर्दछन् ।
पाई ती मन-पेट भृत्यहरूले * टेनैं पनी छाड्दछन् ॥३२
सुन्छन् गुप्त कुरा र भन्न नहुने * क्यै भेद तिन्ले जब ।
भन्छन् शत्रुकहाँ गएर धनका * लोभीहरूले सब ॥
सोही कारणले विचार नगरी * ठट्टा गरेमा पनी ।
केही गुप्त कुरा खुल्यो यदि भने * हो मूर्ख भन्छन् तिनी॥३३
त्यागी लाज अदेय बस्तु पनि ती * भूपालको माग्दछन् ।
पाएनन् धन वस्तु इच्छित भने * ती क्रोधले जाग्दछन् ॥
जस्लाई मन-पेट मिल्छ नृपको * प्यारो छ जो नोकर ।
त्यस्ले गर्छ कुरा बढेर मनले * हेप्तै नमानी डर ॥३४॥
सोही कारण भृत्य वर्गकन जो * आधीनमा राख्तछन् ।
त्यस्ता भूपतिलाइ विज्ञ जनले * हुन श्रेष्ठ यी भन्दछन् ॥
खेती गर्न भनी दुखी कृषकले * मागेर लिन्छन् ऋण ।
थोरै ब्याज लिई दिनू नृपतिले * तिन्लाइ आफ्नो धन॥३५
उब्जा जे जति हुन्छ, कष्ट नदिई * षष्ठांश त्यसको लिनू ।
बाँकीको सब अन्न ती कृषकको * खातीर छाडीदिनू ।
राजाले कर वा जगात नलिनू * बर्ता बढाईकन ।
व्यापारी जनले नपार्नु महँगो * धेरै विनाकारण ॥३६॥
किन्नूपर्छ अनेक वस्तु घरको * त्यै अन्न बेची जब ।
सामग्री महँगो भयो यदि भने * हुन्छन् दुखी ती सब ॥
दुःखी रैयतबाट हुन्छ कसरी * साम्राज्यको उन्नति ।
सोही कारण गर्नुपर्छ नृपले * मद्दत् सकेको जति ॥३७॥

गर्छन् ब्राह्मणको, गुणी सुजनको * सम्मान जुन् राज्यमा।
रैती छन् धन-धान्य पूर्ण र सुखी * जुन् ग्राम वा देशमा॥
धेरै व्यक्तिहरू प्रसन्न मनले * आई त्यहीं बस्तछन्॥
राजाको बढिया हुने थरि-थरी * उद्योगमा लाग्दछन्॥३८
त्यस्ले बढ्दछ राजकोश र प्रजा * सारा सुखी बन्दछन्।
त्यस्तै भूपतिलाइ विज्ञ जनले * ठूलो भनी मान्दछन्॥
व्यर्थै प्राण लिने, कुसंगत गरी * हिंड्नू कृतघ्नी हुनू।
जूवा खेल्नु सदा र मद्य पिउनू * अत्यन्त लोभी हुनू॥३९
मिथ्या बोल्नु परस्त्रिमा रत हुनू * त्याग्नू हितैषी जन।
त्यस्को नाश हुनेछ निश्चय स्वयं * जस्मा छ यी दुर्गुण॥
जस्मा छैन विवेक बुद्धि बल औ * चातुर्य गम्भीरता।
जस्का शत्रु अनेक छन् वरिपरी * राख्ने ठूलो योग्यता॥४०
जो गर्छन् भरमा परेर अरुको * साम्राज्यको शासन।
त्यस्ता भूपतिलाइ शत्रुहरुले * मार्छन् समाईकन॥
जुन् उद्योग गरेर स्वर्ग-पतिले * पाए अघी अमृत।
मारी राक्षस वीर देवपुरिमा * उद्योगले छन् स्थित॥४१
उद्योगी जनले नगर्न सक्ने * क्यै छैन त्रैलोक्यमा।
गर्नू पर्दछ योग्य भूपति भई * उद्योग संसारमा॥
राम्रो बुद्धि भए पनी नृपति जो * उद्योगले हीन छन्।
हे बाबू! विषहीन सर्पसरिका * राजा तिनै मूर्ख हुन्॥४२
सानू शत्रु भनी नगर्नु कहिल्यै * हेलाँ कसैको पनि।
आगोले सहसा जलाउँछ सबै * थोरै भए तापनि॥
त्यस्तै घातक हुन्छ बीज विषको * भन्ने विचारीकन।
यी तीनै थरिबाट रक्षित भई * जो गर्दछन् शासन॥४३॥

त्यस्ता भूपतिको सुकीर्ति भवमा * फैलिन्छ चारैतिर ।
लक्ष्मी राज्य दुवै हुनन् स्थिर सबै * गर्नन् ठुलो आदर ॥
बाबू ! राज्य, प्रजाहरू सकलको * हो भोग्य वस्तू तर ।
त्यस्को रक्षण गर्नु भूपति भई * कर्तव्य हो सुन्दर ॥४४॥
राजाले हुनुपर्छ क्रूर कहिले * कोही घरी कोमल ।
रक्षा प्राण दिएर गर्नु जनको * सद्धर्म हो केवल ॥
साह्रै उत्तम राजधर्म सबमा * मानिन्छ त्यै कारण ।
नीतीपूर्वक राज्यको नृप भई * गर्दैन जो शासन ॥४५
त्यस्लाई सुख-शान्ति हुन्न कहिल्यै* आत्तिन्छ बर्ता बरु ।
भन्छन् मूर्ख अयोग्य शासक सबै * सत् नीति जान्नेहरू ॥
जे इच्छा मनमा छ सोध तिमिले * शंका नमानी अब ।
शंकाको सहजै निवारण पनी * गर्नेछु मैले सब ॥४६॥
आज्ञा भीष्मजिको सुनेर हितका * शिक्षाहरू सुन्दर ।
जै जैकार गरेर उच्च स्वरले * तिन्को गरे आदर ॥
सन्ध्याकाल भयो र त्यो दिन-बिदा* मागेर राम्रो गरी ।
फर्कंथे सब हस्तिनापुरमहाँ * खुशी हुँदै बेसरी ॥४७॥

राजा पृथुको आख्यान

वैशम्पायनले भने खुशि हुँदै * हे भूप ! जन्मेजय ।
भोलीपल्ट उठेर धर्म-सुतले * मन्मा गरी निश्चय ॥
चारै भाइ र वीर सात्यकि तथा * श्री कृष्ण योगेश्वर ।
सारालाइ लिई पितामहकहाँ * फेरी भए हाजिर ॥४८॥
पाई दर्शन भीष्मको खुशि हुँदै * ढोगे सबैले जब ।
बोले भीष्म–'भएँ कृतार्थ यसरी * पाल्नू हुँदा केशव !' ॥

सोधे धर्म-कुमारले कर दुवै * जोरेर पाऊ परी ।
शंका गर्नुहवस् निवारण प्रभो ! * राखी दया राम्ररी ॥४९॥
'राजा' शब्द चल्थो कसोरि पहिले * कुन्न कालदेखी कब ?
गर्छन्न आदर भूपको किन ठुलो * प्राणीहरूले सब ॥
मज्जा, मांस, शरीर, पीठ मुख औ * हड्डी र छाला, मन ।
श्वासोच्छ्वास र मर्नु, जन्मनु तथा* रक्तादि औ जीवन ॥५०॥
यौटै हुन्छ नरेशको र अरुको * देखिन्न क्यै भिन्नता ।
पाए कुन् श्रम वा सुकर्म गरि त्यो * भूपालले श्रेष्ठता ॥
बाहु, पाउ र पेट, इन्द्रियहरु * उस्तै छ देख्ता तर ।
गर्छन् व्यक्तिहरू सबै किन ठुलो * भूपालकै आदर ॥५१॥
यौटा व्यक्ति बसेर भूपति बनी * सानन्द आज्ञा दिनू ।
अर्कों भृत्य बनी अनेक थरिका * आपत्तिमा गाड़िनू ॥
लाग्यो दिक्क मलाइ चाल ननिको * देखेर संसारको ।
आज्ञा गर्नुहवस् हजूर अब यो * अन्याय वा न्यायहो ?५२
यस्तो विन्ति सुनेर धर्म-सुतको * भन्नूभयो भीष्मले ।
त्यस्को हेतु बताउँछु सुन तिमी * हे बाबू ! आनन्दले ॥
राजा, राज्य थिएन कोहि पहिले * रैती थिए धार्मिक ।
चल्थ्यो शासन धर्मले, सब थिए * त्यै धर्मका रक्षक ॥५३॥
पापी कोहि थिएन काल त्यसरी * धेरै बितेथ्यो जब ।
ढाक्यो मोह बढी परस्पर अनी * द्रोही भए ती सब ॥
बाधा पर्न गएर कार्यहरुमा * सद्धर्म घट्दै गयो ।
राग, द्वेष बढेर काम जनको * चल्दै नचल्ने भयो ॥४५
आयो विप्लव धर्ममा सकलले * कर्तव्य त्यागीदिए ।
थाले गर्न अगम्यमा गमन औ * निर्दोष दोषी भए ॥

भक्ष्याभक्ष्य कुनै विचार नगरी * ती चल्न लागे जब ।
त्यस्ले नाश भएर धर्म श्रुतिको * द्यौता डराए सब ॥५५॥
ब्रह्माको सबले मिलीकन गरे * क्यै काल आराधना ।
तिन्लाई विधिले सहर्ष दिनुभो * शिक्षा तथा सान्त्वना ॥
धर्मज्ञान र कर्मकाण्ड श्रुतिको * औ नित्यका कार्यको ।
गर्नू भो उपदेश श्रेष्ठ विधिले * तिन्लाई कर्तव्यको ॥५६॥
मान्थे दुर्जनले कुरा हित हुने * कल्याण गर्ने किन ?
श्री नारायणलाइ विन्ति विधिले * गर्नू भयो गैकन ॥
गर्दैछन् निज धर्म लोकहरुले * आनन्दले पालन ।
त्यसको गर्नु पर्‍यो उपाय प्रभुले * सोची विचारीकन ॥५७॥
ब्रह्मालाइ बिदा दिएर, पहिले * एकाग्र पारी मन ।
गर्नू भो जब विष्णुले, दृढ भई * चिद्ब्रह्मको चिन्तन ॥
जन्मे तैजस नामका नरपति * श्री विष्णुका तेजले ।
थाले शासन गर्न ती पृथिविमा * आएर आनन्दले ॥५८॥
राखे दण्ड दिएर आफ्नु वशमा * पापी तथा दुर्जन ।
तिन्को शासनमा सुखी हुन गए * सारा प्रजा सज्जन ॥
राजन् ! तैजसका सुकर्महरुले * बढ्दै गए सन्तति ।
जन्मे 'वेन' नरेश काल गतिले * त्यै वंशमा दुर्मति ॥५९॥
थाले गर्न अनर्थ 'वेन' खुशिले * भन्थे म हूँ ईश्वर ।
मेरो हो धन-रत्न, राज्य सबले * पूजा मलाई गर ॥
रोकेथे हवनादि कर्म द्विजको * तिन्ले रिसाई जब ।
टुक्राले कुशको सुमन्त्रित गरी * तिन्लाइ मारे तब ॥६०॥
तिघ्रा वेन नरेशको सब मिली * गर्दा भए मन्थन ।
पैदा एक कुरूप मानिस भयो * कालो तथा दुर्जन ॥

त्यस्लाई द्विजले, 'निषाद' यति नै * बोलेर संमानमा ।
त्यै द्वारा हुन गो निषादहरूको * उत्पत्ति संसारमा ॥६१
दायाँ बाहुलि फेरि मन्थन गरे * पढ्दै ऋचा वेदको ।
जन्मे सुन्दर व्यति एक सहसा * श्री इन्द्र झैं तेजिलो ॥
हेर्दै ब्राह्मणतर्फ त्यो पुरुषले * भन्दो भयो सादर ।
पैदा गर्नु भयो मलाइ यसरी * कुन् कामको खातिर॥६२
बोले ब्राह्मण, भूपती तिमि भयौ * हे वीर ! हाम्रो अब ।
राम्रो शासनले सुकीर्ति र प्रजा * राजी गराऊ सब ॥
आज्ञा ब्राह्मणको सहर्ष तिनिले * स्वीकार गर्दा भए ।
ज्ञानी विप्र तथा मुनी र ऋषिले * आशीष धेरै दिए ॥६३॥
ती राजा 'पृथु' नामले हुन गए * विख्यात संसारमा ।
हुन्थे दुर्जन खूब दण्डित सदा * ती भूपको राज्यमा ॥
जानी सज्जनको सुआदर तिनी * गर्थे खुशी भैकन ।
मानी उत्तम राज-धर्म तिनिले * गर्थे सदा पालन ॥६४॥
पारे सम्थर भूमिलाइ पृथुले * पैह्ले कुनै कालमा ।
हे बाबू ! त्यति हेतु नाम पृथिवी * चल्दो भए लोकमा ॥
नाना अन्न र शस्त्र-अस्त्र अहिले * संसारमा छन् जति ।
मानिन्छन् पृथु भूपकै बखतमा * पैदा भए वस्तु ती ॥६५
तिनूले नै क्षतिबाट विप्रहरुको * रक्षा गरेको हुँदा ।
भन्थे 'क्षत्रिय वीर' मानिसहरू * ती भूपलाई सदा ॥
'राजा' नाम चल्यो,प्रजा सुजनको* गर्नै हुँदा रञ्जन ।
कोही भूप भएन श्रेष्ठ पृथु झैं * नीतिज्ञ औ सज्जन ॥६६
जस्ले दिन्छ सहर्ष इच्छित कुरा * हर्षित भएका घरी ।
प्यारो जीवन लिन्छ क्रोधित हुँदा * जुन् भूपतीले हरी ॥

तिनूलाई कति दुष्ट मानिसहरू * कालाग्नि झैं भन्दथे ।
त्यस्ता श्री पृथुलाई सज्जनहरू * देवांश हुन् भन्दथे ॥६७

वर्णाश्रम धर्म

खुशी युधिष्ठिर भए मुनि राज-धर्म ।
पाए सुशान्ति मनमा बुझि भित्रि मर्म ॥
इच्छा थियो हित कुरा जति सुन्न फेरी ।
सोधे विनम्र स्वरमा दुइ हात जोरी ॥६८॥

क्षत्री, ब्राह्मण, वैश्य; शूद्र सबको * कुन् धर्म हो उत्तम ?
भिन्ना-भिन्न बताउनोस् हजूरले * हे नाथ ! वर्णाश्रम ॥
त्यस्तो प्रश्न सुनेर धर्म-सुतको * श्री भीष्म खुशी भए ।
जुन् हो उत्तम वर्ण धर्म जनको * सम्पूर्ण भन्दै गए ॥६९
सन्ध्या,स्नान र ध्यान योग तप औ* विज्ञानको ज्ञानको ।
योग्यायोग्य बिचार राखि हितको * शिक्षा दिनू शास्त्रको ॥
त्यागनू क्रोध र सत्य बोल्नु खुशिले* बाँड़ेर भोग्नू धन ।
गर्नू शान्त रही क्षमा अरु दया * सन्तानको पालन ॥७०
त्यागनू द्रोह र लोभ-मोह, रहनू * सन्तोष मानीकन ।
आफ्नू उत्तम वर्ण धर्महरूको * गर्नू सदा पालन ॥
निर्लोभी उपकारमा रत हुने * जो विप्र छन् सज्जन ।
जस्मा यी उपरोक्त छन् गुणहरू * हुन् श्रेष्ठ ती ब्राह्मण ॥७१
गर्छन् वर्णन वर्ण-धर्म द्विजको * यै हो भनी शास्त्रले ।
हे बाबू ! द्विजको गरे तिमि पनी * सम्मान आनन्दले ॥
गर्ने दान सहर्ष आफु नलिने * दानादि केही पनी ।
आफू यज्ञ गरी, गराउन अघी * सर्दैन जो सद्गुणी ॥७२

सारा शास्त्र पढेर जो अघि सरी * गर्दैन अध्यापन ।
रैती सज्जनको र विप्रहरूको * जो गर्दछन् पालन ॥
अन्यायी जनलाइ जो समरमा * मार्छन् नमानी भय ।
भन्छन् लोकहरू र शास्त्र मतले * हुन् श्रेष्ठ ती क्षत्रिय ॥७३॥
हो यो क्षत्रियको स्वधर्म, तिमिले * गर्दै रहे पालन ।
गर्नैछौ सुख भोग यै शरिरले * स्वर्लोकमा गैकन ॥
पढ्नू दान दिनू र श्रेष्ठ मखमा * बाँड्नू प्रशस्तै धन ।
किन्नू-बेच्नु बजारमा र घरमा * पाल्नू सदा गोधन ॥७४॥
आफ्नू वृत्ति चलाउनाकन ठुलो * व्यापार जो गर्दछन् ।
हो यो उत्तम धर्म वैश्यहरूको * शास्त्रादिने भन्दछन् ॥
क्षत्री, ब्राह्मण, वैश्य तीन थरिको * गर्नू सदा चाकरी ।
बाबू ! उत्तम धर्म शूद्रहरूको * जाने तिमी राम्ररी ॥७५॥
जसले शूद्र भई बटुल्दछ कुनै * व्यापारद्वारा धन ।
त्यसलाइ दिनुपर्छ दण्ड नृपले * कर्तव्य जानीकन ।
गर्थे पालन वर्ण-धर्म मनको * सङ्कल्पद्वारा पनी ।
गर्नू योग्य छ शूद्रले मख, पछी * उद्धार होला भनी ॥७६॥
यस्तो वर्ण विभाग शुद्ध विधिले * चारै थरीको गरे ।
त्यसको पालन गर्छ जो जन त्यही * तर्नेछ पारी भरे ॥
गर्छन् कर्ममहाँ सदा स्थिर रही * जो सत्यको पालन ।
भोग्छन् सत्य-सुकर्मले सुख ठुलो * ती स्वर्गमा गैकन ॥७७॥

आश्रम-धर्मः—

चारै आश्रमको युधिष्ठिरजिले * सारा सुनी वर्णन ।
जोरी हात दुवै भने विनयले * श्री भीष्म ज्ञानीकन ॥

जो कर्तव्य छ चार वर्णहरूको * मैले सुनें उत्तम ।
आज्ञा गर्नुहवस् ति चार थरिमा * कुन् श्रेष्ठ हो आश्रम ७८
कुन् हो धर्म प्रधान व्यक्तिहरूको * कर्तव्य कुन् श्रेष्ठ हो ?
आज्ञा गर्नुहवस् पितामह ! ठुलो * इच्छा छ त्यो सुन्नको ।
कुन् हो सेवक धर्म, भूपतिकहाँ * जो गर्दछन् चाकरी ॥
तिन्को धर्म पनी बताउनुहवस् * हे नाथ ! राम्रो गरी ॥७९॥
यस्तो विन्ति सुनेर धर्म-सुतको * भन्नूभयो भीष्मले ।
बस्नू योग्य छ धर्म पालन गरी * चारै थरी वर्णले ॥
पैह्लो आश्रम ब्रह्मचर्य व्रत हो * दोस्रो गृहस्थी हुनू ।
वानप्रस्थ लिएर जानु वनमा * सन्यास चौथो लिनू ॥८०
चूड़ा औ व्रतबन्ध आदि जति छन * संस्कार पूरा गरी ।
पढ्नू वेद र ब्रह्मचर्य व्रतको * पालन् गरी राम्ररी ॥
बस्नूपर्छ गृहस्थ आश्रममहाँ * सानन्द केही दिन ।
गर्नैपर्छ विवाह धर्म हित औ * सन्तानको पालन ॥८१॥
वानप्रस्थ लिएर, पत्निसँगमा * एक्लै भए तापनी ।
गर्नू जङ्गलमा गई तप ठुलो * उद्धार होला भनी ॥
हो यो आश्रम धर्म विप्रहरूको * यस्को गरे पालन ।
भोग्छन् उत्तम लोकका सुखहरू * आनन्दले ब्राह्मण ॥८२॥
ज्ञानी विप्र भई कुकर्म पशु झैं * जो गर्दछन् लोकमा ।
भोगी कष्टहरू यहाँ, पछि मरी * पर्छन् ठुलो नर्कमा ॥
रोक्छन् इन्द्रिय वेग, सोम रस जो * खान्छन् ठुलो यज्ञमा ।
गर्छन् जो उपकार दीन जनको * राखी दया चित्तमा ॥८३॥
ज्ञानी सज्जन, कर्म-निष्ठ तपसी * छन् शुद्ध जो ब्राह्मण ।
ती बाहेक समस्त विप्र पशु झैं * हे बाबू ! हुन् दुर्जन ॥

खेती गर्नु र युद्धमा धनुषको * ताँदो चढाई लिनू ।
गर्नू चाकरि संपती लिन तथा * व्यापार गर्नै हुनू ॥८४॥
खेती गर्नु पनि निषिद्ध द्विजको * निम्तो छ संसारमा ।
गर्नू पर्छ कुनै विपत्ति सहसा * आयो भने लोकमा ॥
गर्नेछन् विपरीत कार्य द्विजले * सत्कर्म त्यागी जब ।
तिनको नाश हुनेछ सन्तति तथा * आयुष्य कीर्ति सब ॥८५॥
त्यस्तै क्षत्रिय भूपको पनि ठूलो * मानिन्छ वर्णाश्रम ।
देख्नूपर्छ नरेशले बखतमा * आफ्न प्रजामा सम ॥
राजा रक्षक एक श्रेष्ठ नभए * निर्वाह संसारले ।
गर्नू केगरि औ असम्भव थियो * बाँच्नू पनी लोकले ॥८६॥
राजाले यदि यत्नपूर्वक प्रजा * पाल्दैन आफ्ना भने ।
त्यस्ता दुष्ट नरेशलाइ कसरी * शान्ती सुविस्ता हुने ?
जो गर्नेछ अनेक यज्ञहरूको * सानन्द आयोजन ।
ज्ञानी ब्राह्मणको र शास्त्र मतको * जो गर्दछन् पालन ॥८७॥
जस्ले पितृ र देवता र ऋषिको * तिर्नेछ ठूलो ऋण ।
त्यस्ता क्षत्रिय भूपको समयमा * बढ्ला सुकीर्ति धन ॥
जस्मा छैन कुनै पनी व्यसन औ * अन्याय गर्दैन जो ।
जस्ले दुर्जनलाइ राख्छ वशमा * राजा त्यही श्रेष्ठ हो ॥८८॥
साह्रै उत्तम राज-धर्म सबमा * मानिन्छ त्यै कारण ।
गर्नू पर्छ नरेशले दृढ रही * त्यो धर्मको पालन ॥
तेस्रो आश्रम धर्म वैश्यहरूको * संसारमा श्रेष्ठ छ ।
बाबू! उत्तम राज्यमा धन सदा * व्यापारले बढ्दछ ॥८९॥
सेवा गर्नु नरेशको र द्विजको * कर्तव्य हो वैश्यको ।
खेती गर्नू र मुख्य वैश्यहरुको * व्यापार नै धर्म हो ॥

गर्नु क्षत्रियको र वैश्य, द्विजको * शूद्रादिले चाकरी ।
तिन्का निम्ति हुँदैन उत्तम कुनै * सद्धर्म यस्को सरी ॥९०॥
आफ्नू आश्रय-धर्म चार थरिले * गर्दै रहे पालन ।
दुर्भिक्षादि हुँदैन देशभरिमा * सम्पन्न हुन्छन् जन ॥
चारै आश्रमका स्वधर्महरु जो * छन् श्रेष्ठ संसारमा ।
तिन्मा उत्तम राज-धर्मकन नै * मान्छन् सबै लोकमा ॥९१
राजा श्री मुचुकुन्द दिग्विजयको * खातीर सेना लिई ।
लागे लड्न कुबेरको नगरमा * आफै अगाड़ी भई ॥
तिन्का सैनिकलाइ यक्षहरुले * आएर मारीदिए ।
राजालाइ समाइ आफ्नु वशमा * तिन्ले गराई लिए ॥९२
सम्झे भूपतिले वशिष्ठकन त्यो * देखेर आफ्नो स्थिति ।
मारे यक्षहरू पुगेर गुरुले * तत्काल हे भूपति !
त्यो देखेर कुबेरले नृपतिको * सम्मान गर्दा भए ।
बाबू ! मेल गरेर आफ्नु घरमा * ती भूपती फर्किए ॥९३॥
भन्दैछु इतिहास यै विषयको * यौटा म अर्को सुन ।
ज्ञानी विप्र र विज्ञ भूप नभई * चल्दैनथ्यो शासन ॥
राजाले पनि विज्ञ ब्राह्मण गुरू * दर्बारमा राख्दथे ।
रक्षा ब्राह्मणले सदा नृपतिको * मौका परे गर्दथे ॥९४॥
राजा कोशल देशका अधि कुनै * श्री क्षेमदर्शी थिए ।
यौटा काग लिएर कालक मुनी * तिन्को सभामा गए
लागे सोध्न नरेश-ल्याउनुभयो * यो कागलाई किन ?
थाले भन्न मुनी नरेशसित ती * सामान्य यो होइन ॥९५
जे सोधे पनि दिन्छ उत्तर सफा * मानीस झैं कागले ।
जे इच्छा मनका छ सोधिलिनुहोस्* हे भूप ! आनन्दले ॥

सोधे भूपतिले—छ राज्यभरिमा * हे काग ! कस्तो स्थिति ?
जो देख्यौ तिमिले बताउ सब त्यो * शंका नमानी रती ॥९६
आज्ञा भूपतिको सुनेर खुशिले * भन्दो भयो कागले ।
आएका जति छन् यहाँ सब जना * यौटा कुनै स्वार्थले ॥
गर्दैनन् उपकार वा हित हुने * क्यै कार्य साम्राज्यको ।
हाँसे चित्त बुझी मुमुक्क नृप ती * वार्ता सुनी कागको ॥९७
पार्ने विघ्न अनेक शासनमहाँ * जो जो विरोधी थिए ।
तिन्ले रात्रिमहाँ गएर मुनिको * त्यो काग मारीदिए ॥
बोल्दा सत्य कुरा विचार नगरी * त्यसको गयो जीवन ।
बोल्नूपर्छ विचारपूर्वक कुरा * सोची विचारीकन ॥९८
सोही कारण गर्दछन् जन जती * भूपालको चाकरी ।
राजाको डरले असत्य पनि ती * बोल्छन् अगाड़ी सरी ॥
बाबू ! सेवक धर्म पालन गरी * जो पाल्दछन् जीवन ।
झूटो बात नबोल्नु केहि तिनिले * दर्बारमा गैकन ॥९९॥
जो सोध्छन् नृपले तुरुन्त त्यसको * मात्रै दिनू उत्तर ।
ठानी ईश्वर झैं प्रसन्न मनले * गर्नू सदा आदर ॥
आफ्नो आदर वा अनादर हुने * ख्याले नराखीकन ।
राजाको हित मात्र सेवक भई * गर्नेछ जो सज्जन ॥२००
साँचो बोल्दछ जो सदैव अरुको * गर्दैन निन्दा स्तुति ।
त्यसको मद्दत गर्दछन् बखतमा * खूशी भई भूपति ॥
मन्त्री, मित्र, गुरू, सभासद हितू * ज्ञानी गुणी ब्राह्मण ।
यिन्ले मद्दत गर्नुपर्छ नृपको * कल्याण सोचीकन ॥१॥
राख्नूपर्छ गुरू वसिष्ठ ऋषि झैं * नीतिज्ञ भूपालले ।
बद्ला क्षत्रिय भूपती र द्विजको * सत्कीर्ति त्यो मेलले ॥

गर्न पर्छ नरेशले बखतमा * कर्तव्यको पालन ।
रैतीमा सुख शान्ति बढ्दछ स्वयं * राम्रो हुँदा शासन ॥२॥

गृहस्थको कर्तव्य :–

शिक्षा उत्तम श्री पितामहजिले * आज्ञा भएको सुनी ।
सोधे धर्म गृहस्थको र नृपको * कर्तव्य कुन् हो भनी ॥
यस्तो प्रश्न सुनेर धर्म-सुतको * खूशी भई भीष्मले ।
आज्ञा गर्नुभयो गृहस्थहरूको * सद्धर्म संक्षेपले ॥३॥
प्रातःकाल उठेर गर्नु जनले * नित्य क्रिया छन् जति ।
गर्नू आदर गण्य-मान्य जनको * संमान हे भूपति !
त्यस्को बाद गृहस्थ पूजन गरुन् * द्यौता तथा पितृको ।
गर्नू ध्यान निमग्न भैकन बसी * क्यै बेर गोविन्दको ॥४॥
आएका जति पाहुनाकन दिनू * संमानले भोजन ।
गर्नू भोजन शेष अन्न सबले * सानन्द बाँड़ीकन ॥
पाकेको घरमा उपस्थित छ जो * मीठो नमीठो जति ।
फर्की पूर्व, पचाउने बल जती * आफ्नो छ खानू उति ॥५
खाँदामा झगड़ा, विवाद मनमा * चिन्ता लियो क्यै भने ।
त्यस्ले हुन्छ अजीर्ण अन्न नपची * हो रोग पैदा हुने ॥
खानूपर्दछ अन्नदेखि जनले * पानी दुई दोबर ।
केही बेर बिसाइ कार्यहरूमा * आफ्नो हुनू तत्पर ॥६॥
सन्ध्याकाल हुँदा सके जति सबै * कार्यादि पूरा गरी ।
पूजा पाठ र खान पान जति हो * गर्नू बिहानै सरी ॥
जो गर्दैन ठुलो परिश्रम हुने * कार्यादि क्यै दैहिक ।
त्यस्का निम्ति हुनेछ ईश्वर सरी * व्यायाम नै रक्षक ॥७॥

गर्दैनन् सहवास विज्ञ दिनमा * हो पाप ठूलो भना ।
जो गर्छन् सहवास खूब दिनहूँ * मर्छन् छिटै नै तिनी ॥
चिन्ता क्रोध बढाइ ताप मनमा * जो गर्दछन् बेसरी ।
लागी रोगहरू अनेक तनमा * तो शीघ्र जान्छन् मरी ॥८
आफ्नू कर्म सकी सदैव सुखको * निद्रा लिनू रातमा ।
राख्नू हुन्न अशान्ति विज्ञ जनले * कैह्ले पनी चित्तमा ॥
जे उद्योग गरेर जुन् बखतमा * पाइन्छ जो धर्मले ।
त्यस्मा तुष्ट हुनू गृहस्थ जनले * भन्छन् सबै शास्त्रले ९॥
पाएमा धन मान मूर्ख जनले * बर्ता घमण्डी बनी ।
गर्छन् काम अधर्मपूर्वक सदा * गर्ने नगर्ने पनि ॥
अर्कालाइ गनेर तुच्छ तृण झैं * शेखी ठुलो गर्छ जो ।
त्यै पापी धन मानले नरकमा * आखीरमा पर्छ त्यो ॥१०
आफ्नू दोष नदेखि विज्ञ जनको * जो गर्छ निन्दा-स्तुति ।
तिन्को धर्म विनाश हुन्छ सहजै * पैल्हे गरेको जति ॥
बाबू ! दुर्गुण, दोष दुर्जनहरू * कस्तै लुकाउन् तर ।
मौकामा गुण दोष, कुन् पुरुषको * कैह्लै लुकेको छर ? ॥११
गर्थे द्रोह सुविज्ञ विप्रहरुको * राजा बली व्यर्थमा ।
त्यस्ले नाश भएर राज्य, धन छन् * ऐह्ले ती पातालमा ॥
त्याग्नू क्रोध, नगर्नु द्रोह द्विजको * बाबू ! तिमीले पनि ।
गर्नू पालन राजधर्म, सबमा * हो श्रेष्ठ भन्ने गुनी १२
भन्दैछु इतिहास यै विषयको * यौटा म ऐह्ले सुन ।
यौटा केकय नामका नृप थिए * ज्ञानी तथा सज्जन ॥
आयो राक्षस एक मार्दछु भनी * सामू ठुलो दुर्जन ।
देखी ज्ञान नरेशको तप ठुलो * भाग्यो डराईकन ॥१३॥

शिक्षा धर्म-कुमारले हित हुने * धेरै सुनी भीष्मको ।
जोरी हात भने विनम्र स्वरमा * चिन्ता गयो चित्तको ॥
गर्छु राज्य भनी थिएन सुखको * इच्छा मलाई तर ।
राखे भाइहरू र द्रौपदि मिली * यो राज्यमा सादर ॥१४॥
भाईलाइ दिएर राज्य वनमा * जाने इरादा भयो ।
के गर्दा हित हुन्छ यो विषयमा * कर्तव्य कुन् श्रेष्ठ हो ?
शान्ती प्राप्त हुने र जो छ मनको * जाने अशान्ती सब ।
गर्नु होस् उपदेश उत्तम तथा * कल्याण गर्ने अब ॥१५॥
यस्तो विन्ति सुनेर धर्मसुतको * भन्नुभयो भीष्मले ।
रक्षा गर्छ विपत्तिमा र सुखमा * सत्कर्मले, धर्मले ॥
व्यर्थै तर्क गरी अनेक थरिका * चिन्ता गरेको किन ?
होला मङ्गल के गरेर तप नै * सद्धर्म त्यागी भन ? ॥१६
जस्को जे जति कार्य धर्म विधिले * पैल्हे गरे निश्चय ।
त्यस्लाई सुख छैन पूर्ण नगरी * त्यो काम जन्मेजय !
जस्तो पक्षिहरू ठुलो रुखमहाँ * बस्छन बनाई गुँण ।
सोही वृक्ष ढल्यो, जल्यो यदि भने * त्याग्छन् दुखी भैकन ॥१७
त्यस्तै भूपति-रूप वृक्ष बलियो * पाए भने आश्रय ।
आफ्नू धर्म गरेर पालन सदा * हुन्छन् प्रजा निर्भय ॥
उत्साही जनलाइ मद्दत सदा * गोविन्दले गर्दछन् ।
अल्छी मानिसलाइ विज्ञ जनले * दोषी भनी त्यागदछन् ॥१८
त्याग्नू हुन्न स्वधर्म भूपति भई * उत्साह औ उद्यम ।
गर्नू शासन राज्यको नरपते ! * कर्तव्य हो उत्तम ॥
मंत्री विज्ञ 'सुदेव' अम्बरिषका * ठूला प्रतापी थिए ।
मार्नू शत्रु सबै भनेर नृपले * तिन्लाइ आज्ञा दिए॥१९

देखे शत्रु 'सुदेव'ले समरमा * घेरै डटेका जब ।
एक्लै जित्न पनी असंभव कुरा * देखे तिनीले तब ॥
पाऊमा परि शम्भुको जब गरे * क्यै बेर आराधना ।
आफ्ना शस्त्र दिई, पुऱ्याउनुभयो * श्रीशम्भुले कामना ॥२०
मान्धाता नृपले गरे मख ठुलो * पैह्ले कुनै कालमा ।
श्री योगेश्वर पाल्नुभो खुशि भई * श्री इन्द्रको रूपमा ॥
राखी आसनमा सहर्ष नृपले * गर्दा भए पूजन ।
तिनको प्रेम बुझी प्रसन्न मनले * बोल्नूभयो मोहन ॥२१
जे इच्छा मनमा छ हे नरपते ! * शंका नमानी भन ।
बोले भूपति-'गर्दछु अब प्रभो ! * संन्यास नै धारण ॥
जान्छु जङ्गलमा म राज्य सुख यो* त्यागछु' भनेको सुनी ।
ज्ञानी भूपतिलाइ बक्सनुभयो * शिक्षा दयालु बनी ॥२२
जो गर्दैन नरेश क्षत्रिय भई * आफ्ना प्रजा पालन ।
योगी बन्नु र राज्य गर्नु नृपले * ठान्छु वृथा तिनकन ॥
संन्यासी र गृहस्थ धर्म, तप वा * कस्तै गरुन् साधना ।
हुन्नन् मोक्ष कदापि, झन नरकको * भोग्नन् ठुलो यातना २३
जानी क्षत्रि-धर्म श्रेष्ठ सबमा * श्री कृष्णजीले पनी ।
सोही धर्म लिनूभयो, असुरको * संहार गर्छु भनी ॥
आफ्नू क्षत्रिय धर्म छाडि वनमा * जान्छु भनेको किन ?
मान्छौ की तिमि तुच्छ हे नरपते !* त्यो धर्मलाई भन ॥२४
शिक्षा भूपतिले सुनेर हरिको * त्यस्को गरी पालन ।
पाए मुक्ति स्वधर्ममा दृढ हुँदा * त्यो देह त्यागीकन ॥
छैनन् क्षत्रिय-धर्म झैं अरु ठुलो * सद्धर्म संसारमा ।
चिन्ता त्याग गरी रहू दृढ तिमी * हे बाबु ! त्यै धर्ममा ॥२५

बलवान्‌सित दुर्बलले निस्तार पाउने विषयमा बाघको र स्यालको उपाख्यानः—

शिक्षा नीति र राज्य-धर्महरूको * श्री भीष्मद्वारा सुनी ।
बोले धर्मकुमार फेरि मनको * शंका हटाऊँ भनी ॥
मान्छु उत्तर राजधर्म नृपको * कल्याण गर्ने तर ।
होलान् दुर्बल भूपहेरु कसरी * त्यो धर्ममा सुस्थिर ॥२६
धेरै सैन्य हुने र हीन मतिको * भूपाल कोही भए ।
ठूलो भूपति कोहि लड्दछु भनी * सामू खड़ा भैदिए ॥
थाम्नू राज्य र राजधर्म कसरी * ती भूपले त्यो घरी ।
तिनको उत्तम भन्नुहोस् हजुरले * कर्तव्य राम्रो गरी ॥२७
यस्तो विन्ति सुनेर धर्मसुतको * भन्नूभयो भीष्मले ।
रक्षा गर्छ प्रजा र भूपहरूको * आपत्तिमा धर्मले ।
जो राजा बल, बुद्धि, सैन्य, धनमा* सामर्थ्यले हीन छन् ।
त्यस्तालाइ सुविज्ञ भूपहरूले * आधीनमा राख्तछन्॥२८
आफ्नै शक्ति र सैन्य, दुर्ग, धनको* जुन भूप मान्छन भर ।
हुन्छन् शत्रु खड़ा हुँदा बखतमा * जो युद्धमा तत्पर ॥
जो गर्ला हित औ प्रजा सुजनको * सद्धर्मले पालन ।
मान्नन् उत्तम विज्ञ व्यक्तिहरूले * भूपाल त्यस्ताकन ॥२९
भन्दैछु इतिहास यै विषयको * यौटा म अर्को सुन ।
कोही पैरिक नामक नृप थिए * पापी ठूला दुर्जन ॥
जन्मे स्याल भएर पूर्व जुनिको * दुर्भाग्यले भूपति !
सम्झन्थे तर ती सबै सुखहरू * पैह्ले गरेका जति ॥३०॥
त्यागी क्रूर स्वभाव मांस पनि त्यो * गर्दैनथ्यो भोजन ।
देखी चाल कुचाल बन्धुहरूले * भन्दा भए त्यस्कन ॥

गर्दैनौ किन मांस भोजन तिमी * हामीहरू भैं भन ?
चल्नूपर्छ स्वजातिको नियममा * यो धर्म त्यागीकन॥३१॥
शिक्षा बाघको अधर्म पथको * मानेन त्यो स्यालले ।
त्यस्को धर्म र नीतिको जब सुन्यो * चर्चा कुनै बाघले ॥
लाग्यो भन्न–सखे ! सहायक बनी * मेरो रहू साथमा ।
यस्तो बात मृगेन्द्रको सुनि पऱ्यो * त्यो स्याल सङ्कोचमा॥३२
लाग्यो भन्न-हुनेछ हामि दुइको * सल्लाह एकान्तमा ।
चल्नूपर्छ हजूरले नृप भई * सद्धर्ममा नीतिमा ॥
धेरै उत्तम धर्मको वचनमा * आबद्ध पारीकन ।
मन्त्री भैकन बाघका संग गऱ्यो * त्यो स्यालले शासन ॥३३
पैहलेका जति दुष्ट दुर्जनहरू * त्यो बाघका जो थिए ।
बाधा मन्परि गर्नमा परि सबै * त्यस्का विरोधी भए ॥
सल्लाहा सबले मिलीकन गरी * त्यो बाघको भोजन ।
राखी स्यालकहाँ भने-हजुर, त्यो * हो चोर ओ दुर्जन ॥३४
आफ्ना सेवक वर्गको सुनि कुरा * त्यो बाघ क्रोधित् भयो ।
त्यस्ले सज्जन स्याललाइ सहसा * मार्ने इरादा लियो ॥
आमाले गइ सिंहलाइ हितको * शिक्षा दिई सुन्दर ।
हे बाबू ! तिमि काम यो बखतमा * सोची विचारी गर ॥३५॥
दोषी स्याल छ, छैन योग्य रितले * त्यस्को परीक्षा लिनू ।
बाबू, त्यसपछि मात्र दण्ड तिमिले * त्यो स्याललाई दिनू ॥
गर्छन् दुर्जन द्रोह व्यर्थ, अरुको * सम्मान देख्दा पनि ।
गर्नू पर्छ विचार भूपति भई * कुन् सत्य होला भनी॥३६
मौका पाई गएर बाघसँग त्यो * विन्ती गऱ्यो स्यालले ।
मेरो मान ठुलो गरेर पहिले * राख्नूभयो नाथले ॥

ऐह्ले जो अपमानको विषय यो * आयो विना कारण ।
त्यस्ले बस्न हजूरको सँगमहाँ * आँटे पनि सक्तिनँ ॥३७॥
शुक्राचार्य तथा बृहस्पतिजिको * जस्तो छ यस्मा मत ।
सुन्नोस् नीति र धर्म भूपहरुको * कर्तव्य राम्रोसित ॥
छिद्रान्वेषण गर्नुपर्छ पहिले * राजा भई शत्रुको ।
तिन्को आपुसमा विरोध सहसा * पार्नु ठुलो नीति हो ॥३८॥
जुन् वैरीकन जित्नलाइ छ कठिन् * सामु लड़ाइँ गरी ।
धोका वा छलले तथा कपटको * नीती चली राम्ररी ॥
निर्धोले बलवानलाइ वशमा * आफ्नो गराई लिनु ।
आफ्नो काम बनाइ जीवन दिई * त्यस्लाइ छाड़ीदिनु ॥३९
आफ्नो राज्य र देश, मित्र, ढुकुटी* मैत्री तथा देहको ।
रक्षा गर्नु सचेत भैकन सदा * कर्तव्य हो भूपको ॥
सानो छु, धन, सैन्यहीन कसरी * गर्ने लड़ाइँ भनी ।
बस्ने निष्क्रियको हुँदैन भवमा * उत्थान कैह्ले पनि ॥४०॥
हानी-लाभ, बिरोध-मेल अथवा * संग्राममा तम्सिनु ।
रक्षा सैनिकको गरेर गुणिको * सम्मानमा मन् दिनु ॥
वैरीको बुझि भावना रसदको * जो गर्छ रक्षा सदा ।
निर्धो भूप पनी हुनेछ विजयी * यो युक्तिले सर्वदा ॥४१॥
बस्नुपर्छ स्वधर्ममा दृढ भई * भूपालले जान्नुहोस् ।
सानु एक कथा यसै विषयको * भन्छु म सुन्नुहवस् ॥
कोही तीन सखा बनेर सरमा * माछा बसेका थिए ।
माझीले गइ जाल हाल्न सहसा * आँटेपछी आत्तिए ॥४२॥
योटाले दुइ मित्रका संग भन्यो * मन्मा डराईकन ।
त्यागे यो सरलाइ हामिहरुको * बाँच्ने थियो जीवन ॥

दोस्रोले डरले समर्थन गऱ्यो * त्यस्को कुराको जब ।
तेस्रोले दुइ मित्रको सुनिसकी * इच्छा र वार्ता सब ॥४३॥
लाग्यो भन्न डराइ व्यर्थ अहिल्यै * चिन्ता गरेका किन ?
माझी आउँछ जाल हाल्दछु भनी * हे मित्रहो ! जुन् दिन ॥
गर्नू पर्छ विचार त्यै बखतमा * हामीहरूले पनी ।
ऐले देखि डराइ हुन्छ मन के ? * कल्याण दुःखी बनी ॥४४
त्यस्तो बात सुनेर मत्स्य पहिलो * त्यो स्थान त्यागी गयो ।
दोस्रोचाहिं विचारपूर्वक रही * त्यो कालदेखी बच्यो ॥
तेस्रो मत्स्य घमण्डको गरि कुरा * त्यो दीर्घसूत्री मऱ्यो ।
मौका हेरि विचार गर्नु जनको * हे नाथ ! कर्तव्य हो ॥४५

निर्धा र बन्दी भइसकेका भूपको कर्तव्य :—

हे राजन् ! यसरी पितामहजिले * शिक्षा दिएको सुनी ।
सोधे धर्म-कुमारले चरणमा * पर्नेर दुःखी बनी ॥
मंत्री सेवक सैन्य शत्रुतिर नै * लागीसकेका भए ।
कैदी भूप भएर, शस्त्र, ढुकुटी * साम्राज्यको रित्तिए ॥४६
राजा भैकन शत्रुको वश परी * काट्नूपरे दुर्दिन ।
के कर्तव्य गरेर फेरि कसरी * सप्रन्छ तिनको दिन ?
यस्तो विन्ति सुनेर पाण्डुसुतको * कल्याणको खातिर ।
आज्ञा गर्नुभयो पितामहजिले * शिक्षा दिई सुन्दर ॥४७॥
राजा श्रेष्ठ भई विचार नगरी * गर्ला अनाचार जो ।
अर्काको वशमा परी दुखहरू * भोग्ला ठूलो मूर्ख त्यो ॥
कोही कैद पऱ्यो भने नरपति ! * क्यै दोष वा पापले ।
त्यस्को मार्जन गर्नु पर्छ गुण वा * सत् नीतिले भूपले ॥४८॥
कैदी भूपतिले नगर्नु अरुको * निन्दा र शेखी पनि ।

बस्नूपर्छ सहेर मुक्त हुनको * मिल्नेछ मौका भनी ॥
सक्ला मित्रसमान शत्रुसित जो * सद्भाव दर्शाउन ।
जस्ले बुद्धि पुऱ्याइ गर्दछ कुरा * मौका विचारीकन ॥४९॥
हे बाबू ! सुन शत्रुका त्रुटिहरू * जो युक्तिले जान्दछन् ।
मौकामा गरि घात राज्य-धन तो * सानन्द फर्काउँछन् ॥
जस्ले गर्छ घमण्ड व्यर्थ दुखमा * गाड़िन्छ त्यो दुर्जन ।
मैले भन्दछु नीतिकै विषयको * आख्यान योटा सुन ॥५०
कोही जंगलमा बसीकन ठुलो * गर्थे तपस्या मुनि ।
डुल्थे जन्तु अनेक निर्भय त्यहीं * साना र ठूला पनि ॥
तिन्मा स्नेह थियो असाध्य मुनिको * गर्थे सबै आदर ।
निर्धो एक थियो तिनै पशुमहाँ * क्वै गाउँले कुक्कुर ॥५१
भोको एक कुनै बलिष्ठ चितुवा * आयो कुटीमा जब ।
माग्यो जीवन श्वानले चरणमा * पस्री मुनीको तब ॥
त्यसलाई तपले बनाइ चितुवा * पारी दिए निर्भय ।
लाग्यो डुल्न सहर्ष श्वान कुटिमा * केही नमानी भय ॥५२॥
आई एक बलिष्ठ सिंह सहसा * आँटचो जसै झम्टन ।
काखामा मुनिको लुकी कुकुरले * माग्दो भयो जीवन ॥
त्यस्लाइ बलवान सिंह मुनिले * तत्काल पारीदिंदा ।
थाल्यो निर्भय डुल्न घोर वनमा * आनन्द मानी सदा ॥५३
आयो मत्त गजेन्द्र, फेरि, मुनिले * त्यस्तै बनाईदिए ।
त्यादेखि बलियो पछी 'शरभ' झैं * पारेर छाड्दा भए ॥
पाएथ्यो मुनिको दया हुन गई * त्यो रूप त्यसले जब ।
थाल्यो मत्त भएर डुल्न वनमा * त्यो श्वान पापी तब ॥५४
मारे यो मुनिलाइ नै भय सबै * जानेछ मेरो भनी ।

लाग्यो गर्न विचार त्यो कुकुरले * साह्रै कृतघ्नी बनी ॥
त्यो जाने मुनिले प्रभाव तपको * ठूलो हुनाले गरी ।
बाबू ! श्राप दिएर श्वान अघि भैं * पारी दिए त्यै घरी ॥५५
भाग्यो श्वान डराइ ग्रामहरुमा * अत्यन्त दुःखी बनी ।
सोही कारणले नगर्नु जनले * शेखी म ठूलो भनी ॥
गर्नू बुद्धि पुऱ्याइ कार्य जनले * मौका परेका घरी ।
त्यसले नै सुख-शान्ति मिल्दछ स्वयं* हे बाबु ! राम्रो गरी ॥५६
सुन्नू योग्य छ बुद्धिमान जनको * चातुर्य औ सद्गुण ।
भन्छू एक कथा यसै विषयको * अर्को म ऐल्है सुन ॥
ठूलो क्वै वरको थियो रुख कहीं * त्यै वृक्षको फेदमा ।
बस्थ्यो कोहि मुसो बनाई बढ़िया * सौ द्वारको प्वालमा ॥५७
हाँगामा त्यहि वृक्षको घर हुने * योटा बिरालो थियो ।
त्यसले मार्छ भनी लिई डर मुसो * बाहीर निस्कन्नथ्यो ॥
ठूलो वृक्ष हुँदा चराहरु निकै * बस्थे बनाई गुँड ।
व्याधाले गइ जाल सोहि रुखमा * थाप्यो चरा पक्रन ॥५८
अल्झुन् रातभरी चराहरु भनी * फर्केर व्याधा गयो ।
सोही जालमहाँ बिडाल सहसा * संयोगले अल्झियो ॥
त्यो देखेर खुशी भएर मनमा * निस्क्यो मुसो बाहिर ।
थाल्यो निर्भय डुल्न त्यो वरिपरी * हेर्दै बिरालोतिर ॥५९॥
आयो न्याउरि एक त्यै बखतमा * उल्लू सँगैमा लिई ।
लागेथ्यो भय भन्न बेसरी मुसो * देखेर वैरी दुई ॥
पारी अन्तर तीन हात जतिको * त्यै जालको छेउमा ।
बाठो मूषक त्यो लुकीकन बस्यो * चिन्ता लिई चित्तमा॥६०

यौटा न्याउरिको ठुलो डर उता * पापी बिरालो थियो ।
बाँच्ने यी दुई शत्रुबाट कसरी * भन्दै मुसो आत्तियो ॥
मार्ला न्याउरिले यहीं रहिरहे * आएर क्यै बेरमा ।
निस्की जाउँ भने छ शत्रु बलियो * लाटोकोसेरो त्यहाँ ॥६१
तेस्रो शत्रु परीरहेछ अहिले * संयोगले जालमा ।
बाँच्ने युक्ति कुनै म देखिदनँ परें * हे दैव ! आपत्तिमा ॥
गर्नू पर्छ विचार विज्ञ जनले * आपत्तिमा राम्ररी ।
गर्छु अन्तिम यत्न यो बखतमा * के पुग्छ व्यर्थै डरी ॥६२
दोटालाइ बिडालको भय ठुलो * पैह्ले म देखाउँछु ।
तेस्रोदेखि पनी मिलीकन कुरा * मीठो गरी बाँच्तछु ॥
कस्तै कष्ट परे पनी बखतमा * बुद्धी पुऱ्यायो भने ।
वैरीबाट बचिन्छ वा पथ कुनै * देखिन्छ रक्षा हुने ॥६३
पैह्ले नै मनमा डराइ बहुतै * हाऱ्यो भने हिम्मत ।
बाँच्ने युक्ति भए पनी चुकिदिंदा * देख्दैन राम्रो हित ॥
यस्तै तर्कहरू गरेर मनमा * बाँच्ने इरादा गुनी ।
लाग्यो भन्न परै बसीकन मुसो * साह्रै हितैषी बनी ॥६४॥
हे मार्जार ! मलाइ मार्न भनि छन् * वैरी दुवै तत्पर ।
भाग्थे भाग्न त यी दुवै खलहरू * मानेर तिम्रो डर ॥
इच्छा त तिमीलाइ मुक्त अहिले * पार्ने मलाइ थियो ।
माछौं की तिमिले भनेर मनमा * शङ्का बढाईदियो ॥६५
मैले जाल नकाटि बाँच्न तिमिले * आशा लिनू व्यर्थ हो ।
गर्दैनौ तिमि केहि मद्दत भने * मर्छु म, वेला भयो ॥
हाँगामा तिमी बस्तछौ, म रुखको * बस्छु सखे ! फेदमा ।
सोही कारणले परस्पर गरौं * साहाय आपत्तिमा ॥६६॥

मूसोको सुनि यो कुरा हित हुने * खुशी बिरालो भयो ।
आशा जीवनको गए जति सबै * त्यो बातले फर्कियो ॥
लाग्यो मूषकलाइ भन्न खुशिले * गर्दै ठुलो आदर ।
मान्दैछौ किन हे सखे ! तिमि वृथा* मेरो अहोले डर ॥६७॥
काट्यौ जाल भने छुटेर म पनी * आफ्नू बुझी रक्षक ।
गर्नेछु तिमिलाइ मद्दत सदा * मौकामहाँ मूषक !
काट्तैनौ तिमि जाल क्यै गरि भने* मानी वृथामा भय ।
हाम्रो नाश हुनेछ केहि क्षणमा * भन्ने बुझे निश्चय ॥६८
आशा केहि थिएन यो बखतमा * बाँच्ला भनी जीवन ।
तिम्रो बात सुनेर हर्षित भयो * हे मित्र ! मेरो मन ॥
माग्छु जीवन दान देउ तिमिले * मेरो चिताई हित ।
गर्छु मुक्त भएपछी म खुशिले * तिम्रो सदा मद्दत ॥६९॥
धेरै नै हितका कुरा जब भन्यो * विश्वास पार्नै गरी ।
थाल्यो मषूक जाल काट्न, मनमा* मार्ला कि भन्दै डरी ।
त्यो देखीकन न्याउरीसहित त्यो * लाटोक्वसेरो पनि ।
भागेथ्यो डरले छुटेर सहजै * मार्नेछ त्यस्ले भनी ॥७०
बन्धन् मुक्त भए छिटै मकन नै * खानेछ मार्जारले ।
भन्दै जाल अली-अली गरि मुसो * काट्दै थियो दाँतले ॥
प्रातःकाल भयो लिई कुकुर त्यो * आयो शिकारी जब ।
लाग्यो भन्न विडाल—हेर खलले * मार्ने भयो लौ अब ७१
काट्तैनौ तिमी जाल यो बखतमा * हे मित्र ! चाँडै किन ?
देख्दैछौ बलवान त्यो कुकुरले * मार्नेछ आईकन
त्यस्को भाव बुझेर जाल सहसा * काटेर त्यो मूषक ।
भाग्यो प्राण बचाइ आफ्नु घरमा * हे शत्रुसंहारक ! ॥७२॥

यस्तो संकटमा परे पनि मुसो * चातुर्यताले गरी ।
रक्षा जीवनको गऱ्यो बखतमा * सङ्कल्प पक्का धरी ॥
त्यस्को संकटको विचार मनमा * आफ्नू तिमीले गर ।
बोल्ने बुद्धि गऱ्यो र शत्रुहरुको * सारा हटायो डर ॥७३॥
आँटे मानिसले नगर्न सकिने * कुन् कर्म छन् लोकमा ।
जस्मा छैन विवेक बुद्धि जन ती * पर्छन् सदा शोकमा ॥
राजा श्रेष्ठ भएर मूर्खसरिको * कर्तव्य जो त्यागदछन् ।
अर्काको वशमा परी दुखहरू * ती अन्त्यमा भोग्दछन् ७४
गर्दा बुद्धि पुऱ्याइ कार्य, गुणको * गर्छन् सबै वर्णन ।
राजन् ! एक कथा यसै विषयको * भन्छु म अर्को सुन ॥
यौटा उत्तम 'ब्रह्मदत्त' पहिले * कोही थिए भूपति ।
तिन्को राज्यमहाँ सुखी सब थिए * रैती भएका जति ॥७५॥
बोली मानिसको र पक्षिहरूको * बुझ्ने र बाठो पनि ।
पालेको नृपले चरी पनि थिई * दर्बारमा 'पूजनी' ॥
डुल्थी नित्य थिएन त्यसकन कुनै * काहीं पानी बन्धन ।
चल्ला एक थियो प्रसन्न मनले * त्यो गर्दथी पालन ॥७६॥
यौटा बालक भूपको पनि थियो * खेल्थे दुवै साथमा ।
राजाको सुत झट्ट क्रोधित भयो * सानू कुनै बातमा ॥
चल्ला मारिदियो चरी पुजनिको * ती भूपको पुत्रले ।
चिन्ताग्रस्त भई असाध्य पुजनी * त्यो पुत्रको शोकले ॥७७॥
केही बेर पछी रिसाइ र तिखा * सम्पूर्ण नंग्रा धसी ।
फोरी राजकुमारका नयन त्यो * दर्बारमाथी बसी ॥
लागी भन्न गरी विलाप बहुतै * संसारका क्षत्रिय ।
हुन्नन् संगति गर्न लायक कुनै * जीवादिले निर्भय ॥७८॥

जैलेसम्म हुँदैन पूर्ण मनको * आफ्नू इरादा सब ।
गर्छन् यी तब सम्म आदर दिई * सम्मान औ वैभव ॥
इच्छा पूर्ण भयो कि बिर्सि अधिका* त्यसका सबै सद्गुण ।
त्यागछन् सज्जनलाइ क्षत्रियहरु * स्वार्थीसरी भैकन ॥७९॥
बस्छन् पक्षिहरू मिलेर वनमा * सानन्द जुन् चालले ।
बस्नू योग्य थियो गएर म पनी * त्यस्तै मिली प्रेमले ॥
आफ्नू धर्म त्यजेर क्षत्रियकहाँ * मैले लिदा आश्रय ।
छाड्थ्यो आफ्नू स्वभाव त्यो किन भयो*हा दैव ! मेरो क्षय॥८०
जस्को भिन्न छ खान-पान र चलन्* सम्बन्ध औ वाहन ।
त्यस्ताका सँगमा मिलेर कसरी * बस्नू चरी भैकन ॥
जस्को शक्ति र बुद्धिमा छ समता * बानी र चाला पनि ।
त्यस्ताका सँगमा मिलीकन बसे * मान्नन् सखा हो भनी८१
स्वार्थी, निष्ठुर राजपुत्र ! जसरी * तैंले गरिस् पाप यो ।
सोही माफिकको दिएँ फल पनी * कर्तव्य पूरा भयो॥
रोई घोर विलाप त्यो पुजनिले * धेरै गरेको सुनी ।
राजालाइ भने गएर चरले * आए दगुर्दै तिनी ॥८२
हाँगामा रुखको चरी पुजनि त्या * देखे बसेकी थिई ।
लागे भन्न बुझाइ नीति नृपले * त्यस्लाइ दुःखी भई ॥
तैंले निष्ठुर कार्य राज-सुतको * देखेर हे पूजनी !
जस्तो दण्ड दिइस्,प्रसन्न म भएँ * त्यो दूतद्वारा सुनी ॥८३
माफी दिन्छु तँलाइ आज मनमा * मेरो नमानी डर ।
बस्नू यो घरमा हुनेछ अघि झैं * सम्मान औ आदर ॥
तैंले त्यो अपराध माफिक दिइस् * जुन् दण्ड त्यो नीति हो ।
मैले माफ दिएपछी बसिदिनू * दर्बारमा धर्म हो ॥८४॥

सम्झाईकन नीति धर्म नृपले * शिक्षा दिएको सुनी ।
हाँगामा रूखको बसीकन हुँदै * भन्दी भई पूजनी ॥
मैले जो अपराध यो बखतमा * तिम्रो गरें भूपति ! ।
त्यस्ले यो घरमा म बस्न अघि झैं * सक्तीनँ हे सद्गति ! ॥८५
जस्ले अप्रिय गर्छ त्यस्कन निको * को मान्दछन् लौ भन ?
गर्छन् द्रोह बरू सदैव मनले * सम्झी उही दुर्गुण ॥
आफ्नै दुःख बताउँछन् जनहरू * यस्तो पऱ्यो यो भनी ।
अर्काको दुखमा दुखी हुन निको * मान्दैन कोही पनि ॥८६
तिम्रो पुत्र वयस्क हुन्छ तिमि झैं * क्यै कालमा यो जब ।
मेरो दोष बताउला घरि-घरी * ऐले गरेको सब ॥
वैरी हो सुतको भनीकन तिमी * ईर्ष्या लिई चित्तमा ।
मार्नेछौ तिमिले मलाइ सहजै * हे भूपते ! व्यर्थमा ॥८७
बस्नू यो घरमा सहर्ष अघि झैं * भन्छौ तिमीले तर ।
मैले शत्रु बनेर बस्नु कसरी * तिम्रो नमानी डर ।
मोती, दूध र व्यक्तिको मन जसै * क्यै हेतुले फाट्तछ ।
जोरिन्नन् कहिल्ले, बरू दिनहरू * त्यो दुःखले काट्तछ ८८
बोली क्षुद्र कुरा र गर्छ जन जो * ईर्ष्या र निन्दा स्तुति ।
गर्नू हुन्न सुकार्य विज्ञ जनले * त्यस्को लिई सम्मति ॥
मान्छन् उत्तम विज्ञले मत ठुलो * श्री शुक्र आचार्यको ।
वैरीका संग मित्रता गरिलिने * संसारमा मूर्ख हो ॥८९॥
आफ्नै भाइ र बन्धुले पनि गरे * वैरत्व क्यै बातमा ।
तिन्को गर्नु हुँदैन क्षत्रिय भई * विश्वास संसारमा ॥
यस्तो तर्क सुनी सकी पुजनिको * फेरी बुझाऊँ भनी ।
लागे भन्न ति ब्रह्मदत्त नृपती * तत्काल हे पूजनी ॥९०॥

कस्तै शत्रु भए पनी मिलिजुली * साथै बसे क्यै दिन ।
सक्छन् स्नेह बढेर ती समयले * त्यो शत्रुता बिर्सन ॥
दैवाधीन भई भलो र कुभलो * गर्छन् सबैको जन ।
को सक्ला नत लोकमा दिन तथा * खोसी कसैको लिन ॥९१॥
सोही कारण कर्मको फल दिने * हो दैव प्राणीकन ।
भन्ने बात गरी विचार रिस यो * गर्छस् तँ व्यर्थै किन ?
जस्तै वृक्षभरी फली फल सबै * पाकेपछी झर्दछन् ।
प्राणी जन्म लिएर त्यै किसिमले * संसारमा मर्दछन ॥९२
जस्तै पोल्नु स्वभाव हो अनलको * भन्ने सबै जान्दछन् ।
त्यस्तै जन्म लिएर मर्नु जनको * हो धर्म नै भन्दछन् ॥
सोही कारण क्रोध गर्नु जनले * हो मूर्खता लोकमा ।
तैंले बस्नु उचित् छ क्रोध नगरी * आएर दर्बारमा ॥९३॥
यस्तो बात सुनीसकेर नृपको * भन्दो भई पूजनी ।
हे राजन् ! तिमिले भने जति सबै * साँचो भए तापनी ॥
गर्दैनन् किन मर्नको मन सबै * प्राणीहरूले भन ?
मर्नाखातिर मात्र जन्मनु भए * गर्थे दवाई किन ॥९४॥
व्यर्थै हो सुख दुःख मान्नु अथवा * बाँचे मरे बान्धव ।
मान्नू हर्ष र शोकले रुनु पनी * भन्थे वृथा हो सब ॥
हे राजन् ! व्यवहार चल्नु त्यसरी * गाह्रो थियो लोकको ।
को खोज्छन् दुख भोग्न खोज्नु सुखनै * प्रत्येकले योग्य हो ॥९५
दैवाधीन बनेर केहि नगरी * मानीसले उद्यम ।
निर्वाहा जनको हुँदैन भवमा * हो नीति यो उत्तम ॥
आफैंले ननिले स्वयं उदरमा * जाँदैन खाने कुरा ।
प्राणीको भन हुन्छ उद्यम विना * कुन् कार्य आफैं पुरा॥९६

गर्छन् यत्न तथा परिश्रम दुवै * जुन व्यक्ति संसारमा ।
बस्नेछन् धन-धान्य पूर्ण सुखले * सम्मानले लोकमा ॥
दिन्छन् दैव अवश्य सम्पति स्वयं * मेरो भए भाग्यमा ।
यस्तो बात भनेर उद्यम त्यजे * पर्छन् ठुलो दुःखमा ॥९७
गर्नू उद्यम औ निरोग रहनू * विद्वान ठुलो हुनू ।
गर्नू खूब विचार दोष-गुणको * योद्धा प्रतापी हुनू ।
गर्नू शासन नीतिपूर्वक, प्रजा * सत्पात्रको रक्षण ।
राजन् ! उत्तम उद्यमी पुरुषका * हुनू यी सबै लक्षण ॥९८॥
जन्मी मानिस रूपले हृदयमा * छैनन् भने यी गुण ।
फेर्नें सास खलाँति झैं पृथिविमा * ज्यूँदै मरेको जन ॥
यस्तै तर्क र नीतिपूर्वक कुरा * धेरै थरीका भनी ।
राजाको नसुनेर उत्तर उड़ी * वनमा गई पूजनी ॥९९।
पक्षी तुच्छ भए पनी जब पऱ्यो * त्यो शत्रुताको स्थिति ।
राजाको सहसा पत्यार मनमा * मानीन हे सद्मति !
धोका हुन्छ पछी भनेर अथवा * मार्नन् भनी भूपले ।
ठानी शत्रुसमान बात नृपको * मानीन त्यो पक्षिले ॥२००
गर्ने मद्दत राजकाज सबमा * सल्लाहदाता गुणी ।
आफ्नो झैं गृह कार्यमा पनि रुजू * हुन्थी सदा पूजनी ॥
ऐहले पर्न गयो विरोध सहसा * योटा कुरामा भनी ।
त्यागी आज गई, मलाइ वनमा * त्यो पूजनी बेगुनी ॥१॥
राजालाइ थिएन केहि चिजको * खाँचो र गाह्रो तर ।
लाग्यो दुःख निकै सदैव गुणको * गर्नै हुँदा आदर ॥
हे बाबू ! बलवानको डर कती * मान्दा रहेछन् जन ।
त्यसको एक कथा म भन्दछु अरू * विश्वास मानी सुन ॥२

सोधे नारदले पुगी रुखमनी * हाँसेर कोही दिन ।
चल्दा खूब ठुलो हुरी रुख ! तिमी * टिक्छौ कसोरी मन ?
लाग्यो भन्न तुरुन्त वृक्ष मुनिको * त्यो प्रश्नलाई सुनी ॥
सक्छु रोक्न हुरी मुने ! म बलिया * हाँगाहरूले पनि ॥३॥
शेखीयुक्त कुरा सुनी मुनि छिटै * केही नबोली गए ।
होस्याईकन वायुलाइ रुखको * शेखी सुनाईदिए ॥
बानी नारदको छ यो किसिमको * भन्ने बुझेकै थियो ।
हावाको डर मानि वृक्ष मनमा * क्यै बेर दुःखी भयो ॥४
हाँगा औ फल-पुष्प, पातहरु जो * त्यस्का थिए साथमा ।
सारा झारिदिएर ठिङ्ग उभियो * चिन्ता लिई चित्तमा ॥
चुक्ली नारदको सुनेर रुखको * शेखी म तोड्छु भनी ।
आए वायु, विरूप देखि रुखको * सोधे दयालू बनी ॥५॥
यस्तो हालत के गरी हुन गयो * हे वृक्ष ! तिम्रो मन ?
तिन्को बात सुनीसकेर रुखले * बिन्ती गऱ्यो कारण ॥
मेरो सुन्दर रूप नारदजिले * देखेर ईर्ष्या गरे ।
मैले नै फल-पुष्प, पात सब यी * झारीदिनाले झरे ॥६॥
बानी नारदको र बात रुखको * त्यस्तो सुनी वायुले ।
फर्के वेग हटाइ आफ्नु घरमा * हे भूप ! आनन्दले ॥
ठूलाको वशला परे पनि यदी * इच्छा छ बाँच्ने मन ।
गर्नू पर्छ कुरा नुहेर रुख झैं * कल्याण आफ्नू हुने ॥७

चाण्डाल र विश्वामित्रको संवाद : —

शिक्षा श्रेष्ठ सुनी चिताइ मनले * प्राणीहरूको हित ।
सोधे धर्मकुमारले विनयले * श्री भीष्म योद्धासित ॥

छाडी धर्म, अधर्म श्रेष्ठ जनले * मानी लिनेछन् जब ।
बद्ला लोभ ठगी र मानिसहरू * निर्वाह गर्नन् सब ॥८॥
गर्दा आपसमा विरोध बहुतै * दुःखी हुनेछन् जन ।
स्वामी संपतिको हुनन् पृथिविका * पापी तथा दुर्जन ॥
गर्दैनन् जब भूपले सुजनको * कल्याण औ रक्षण ।
थाम्नू ब्राह्मणले स्वधर्म कसरी * रक्षा गरी जीवन ॥९॥
यस्तो प्रश्न सुनी पितामहजिले * श्री धर्मका पुत्रको ।
केही बेर गरी विचार मनमा * हाँसेर भन्नूभयो
योगक्षेम र मृत्यु; व्याधि, भय औ * बर्सातको कारण ।
हुन्छन् भूपतिका सुकर्म अथवा * दुष्कर्मले नै सुन ॥१०॥
विश्वामित्र मुनी तथा श्वपचको * संवादको रूपमा ।
दिन्छन् विज्ञहरू उदाहरण जो * हे बाबू! संसारमा ॥
भन्छु सोहि कुरा तिमी स्थिर भई* शङ्का नमानी सुन ।
यस्ले बुद्धि विवेक बढ्छ मनको * जान्छन् सबै दुर्गुण॥११॥
त्रेता द्वापरको थियो नरते ! * संधी कुनै कालमा ।
ठूलो पर्न गयो खडेरि र परे * प्राणी सबै कष्टका ॥
राखेका जति अन्न व्यक्ति रूले * सम्पूर्ण खाई सके ।
वापी, कूप, नदी, तडाग, स्वर-पात* पानी नपाई सुके ॥१२॥
खाने अन्न नपाइ धर्म जनले * बिस्तार त्याग्दै गए ।
पापी, चोर अनेक कष्ट सहसा * उत्पातमा तम्सिए ॥
हाहाकार पर्‍यो चतुर्दिक ठूलो * संहार बढ्दै गयो ।
भागे मानिस कष्टले गृह त्यजी * गाउँ सबै रित्तियो ॥१३॥
गर्थे धर्म, सुकर्म यज्ञहरू जो * ज्ञानी तपस्वी जन ।
थाले गर्न डुली-डुली घर-घरै * ती व्यक्ति भिक्षाटन ॥

विश्वामित्र मुनी त्यसै बखतमा * सन्तान छाड़ीकन ।
डुल्थे पागल भैं ठुलो दुख सही * राखौं भनी जीवन ॥१४॥
देखे शूद्रकहाँ पुगा कुकुरको * मासू मुनीले जब ।
थाले माग्न मलाइ देउ तिमिले * हे शूद्र ! मासू सब ॥
बोल्यो शूद्र-मुनी, क्षुधार्त म पनी * छु बेसरी यो घरी ।
भोको आफु बसी तपाईंकन यो * मासू दिउँ के गरी ॥१५॥
माग्नोस् अन्न कहीं गईकन अरू * त्यस्ले भनेको सुनी ।
थाके यत्न गरेर अन्न नमिली * दुःखी भए झन् मुनी ॥
धेरै तर्क गरेर फेरि घरमा * त्यस्को पसी रातमा ।
मासू चोर्न भनी लिए कुकुरको * साँप्रो जसै हातमा ॥१६॥
लाग्यो भन्न कराउँदै श्वपच त्यो * जागै हुनाले गरी ।
को हौ, मासु लिने बताउ निशिमा * यो भाग मेरो हरी ?
जागा छू तिमिलाइ मार्छु यसरी * त्यस्ले भनेको सुनी ।
लागे भन्न डराई केहि मनमा * चाण्डाललाई मुनी ॥१७॥
विश्वामित्र म हूँ बिते दिन निकै * केही नखाईकन ।
राखौं प्राण भनेर रात्रि बिचमा * आएँ म मासू लिन ॥
तिन्को बात सुनी भन्यो श्वपचले * सम्मानका साथमा ।
गर्दैछौ किन यो कुकर्म तिमिले * ज्ञानी भई रातमा ॥१७॥
मान्छन् निन्दित विज्ञले श्वपचको * कयै वस्तु वा संपति ।
त्यस्माथी पनि यो अभक्ष्य कसरी * खान्छौ तिमी सद्मति !
आफ्नू प्राण बचाउने बरु कुनै * यत्नादि अर्को गर ।
यस्ले नष्ट हुनेछ धर्म, तप औ * कीर्ति छ जो सुन्दर ॥१९
जस्ले खान्छ अभक्ष्य मांस त्यहि हो * पापी तथा निर्दयी ।
त्यसका नष्ट हुनन् सबै नियम औ * बस्नेछ दुःखी भई ॥

खान्नन् मांस कदापि पांच नङ्का * कोही पनी जीवको ।
खाए घट्तछ धर्म, कीर्ति बल औ * आयुष्य ती व्यक्तिको ॥२०
यस्ले तृप्ति हुँदैन अमृतसरी * भन्ने विचारीकन ।
जानी-जानि स्वधर्म नष्ट यसरी * गर्छौं वृथमा किन ?
यस्तो नीति बुझाउँदै श्वपचले * बिन्ती गरेको सुनी ।
लागे भन्न अनेक शास्त्र मत ती * केही नजान्ने बनी ॥२१॥
आगो हो मुख विप्रको जति कुरा * खाए पनी पच्तछ ।
खाए राक्षस ती अगस्त्य ऋषिले * संसारले जान्दछ ॥
त्योभन्दा पनि मांस के कुकरको * मान्छौ तिमी निन्दित ?
आफ्नू प्राण बचाउनू पनि त हो * शास्त्रादिले सम्मत ॥२२॥
बाँचे मात्र सकिन्छ गर्न तप औ * सद्धर्मको पालन ।
सोही कारण मांसले कुकुरको * राख्छू म यो जीवन ॥
पार्छू तृप्त म पितृ-देव पहिले * यो मासु होमीकन ।
बच्ला शेष जती जहान सबले * गर्छौं पछी भोजन ॥२३॥
तिम्रो अर्ति म सुन्नसक्तिनँ कुनै * टारीदिने यो घरी ।
दिन्नौ मांस भने म जान्छु अहिल्यै* तिम्रै अगाडी मरी ।
यो आज्ञा ऋषिको सुनी श्वपचले* बिन्ती गर्‍यो सादर ।
ज्ञानीलाइ अभक्ष्य दान खुशिले * गर्दीनँ मैले तर ॥२४॥
लैजानोस् खुशिले स्वयं हजुरको * इच्छा भए हे मुनि !
विश्वामित्र खुशी भए मनमनै * त्यस्ले भनेको सुनी ॥
फर्के आश्रममा तिनी कुकुरको * साँप्रा लिई काँधमा ।
थाले गर्ग विधानले हवन ती * त्यो मांसले अग्निमा २५
तिन्ले भाग गरे समर्पण जसै * मन्त्रेर श्री इन्द्रको ।
राजा इन्द्र भए प्रसन्न र ठुलो * तत्काल पानी पर्‍यो ॥

वापी, कूप, तड़ाग औ नद नदी * जो जो सुकेका थिए ।
सारा, वृक्ष सुधासमान जल त्यो * पाई हरीया भए ॥२६॥
हे राजन् ! ऋषिको सुरम्य कुटिमा * चेलाहरू जो थिए ।
खाने वस्तुहरू गएर सबले * खोजेर ल्याई दिए ॥
प्रायश्चित्त निमित्त खूब ऋषिले * ठूलो तपस्या गरे ।
आफ्ना ती शुभ कर्मले पछि तिनी * संसार पारी तरे ॥२७॥
ठूलो संकटमा परी, बखतमा * त्याग्दैन जो साहस ।
त्यस्लाई फल मिल्छ श्रेष्ठ, ऋषि झैं * फैलिन्छ ठूलो यश ॥
यस्तो कर्म पनी सुविज्ञ जनले * राखौं भनी जीवन ।
गर्नू पर्छ भने कुरा म अरुको * धेरै भनौं के भन ? ॥२८

शरणागतको विषयमा व्याधा-कपोल आख्यान :-

यस्तो अर्ति सुनेर धर्मसुतले * सोधे परी पाउमा ।
जान्नू हुन्छ हजूरले सब कुरा * लेखे जती शास्त्रमा ॥
गर्नू उत्तम धर्म हो अतिथिको * सेवा सकेको जति ।
अर्काको जब पर्दछन् शरणमा * आएर हे सद्मति ! ॥२९॥
तिन्का निम्ति सहर्ष जीवन दिई * जो गर्दछन् चाकरी ।
तिन्लाई फल मिल्छ कुन्न किसिमले * सुन्छु म त्यो राम्ररी ॥
यस्तो प्रश्न सुनी पितामहजिको * सानन्द भन्नूभयो ।
रक्षा गर्नु विपत्तिमा सुजनको * कर्तव्य औ धर्म हो ॥३०
गर्ने पाप विनाश उत्तम कथा * योटा म भन्छु सुन ।
व्याधा एक थियो सदा पशुहरू * मार्ने ठूलो दुर्जन ॥
मासु दोष विहीन दीन पशुको * त्यो गर्दथ्यो भोजन ।
मान्थे मानिसले ठूलो डर परे * देखे पनी त्यसकन ॥३१॥
रोके भाइ र बन्धुले 'नगर यो * दुष्कर्म व्यर्थै' भनी ।

तिन्को उत्ताम अर्ति व्याध खलले * मानेन कैल्है पनी ॥
शिक्षा दुर्जनलाइ व्यर्थ छ दिनू * भन्ने विचारीकन ।
राजन् ! भाइ र बन्धु आदि सबले * त्यागीदिए त्यसूकन ॥३२
झन् त्यो खुशि भएर जङ्गलमहाँ * हत्या सदा गर्दथ्यो ।
मर्नूपर्छ भनेर भीति मनमा * त्यो दुष्ट मान्दैनथ्यो ॥
बस्ता जङ्गलमा कुनै दिन चल्यो * आँधी र पानी पऱ्यो ।
ढाकेथ्यो जलले चतुर्दिक जसै * चिन्ता परी त्योडऱ्यो ३३



अतिथिको स्वागत

पानी खूब परे पनी पथ सबै * जाने बुझेकै थियो ।
औंसीको निशि नै थियो तपनि त्यो* बिस्तार हिंड्दै गयो ॥
देख्यो एक चरी निकै पर पुगी * मूर्च्छा परेकी थिई ।
खानूपर्छ भनेर त्यसूकन पनी * पक्ऱ्यो बनी निर्दयी ॥३४

यौटा वृक्षमनी पुगेर त्यहिं नै * त्यो रात काट्छु भनी ।
पल्ट्यो पात बिछ्याइ व्याध,बहुतै * जाड़ो भए तापनी ॥
गर्थ्यो पक्षि विलाप सोहि रुखमा * यौटा दुखी भैकन ।
चारो खोज्न गएकि पत्नि अझ तक् * आईन मेरी किन ? ॥३५॥
पानी खूब पऱ्यो हुरी पनि चल्यो * रात्री अँध्यारो छ यो ।
बाँचेकै छ कि वा कतै कि त परी * आपत्तिमा आज त्यो ॥
गर्थी त्यो गृहकार्य खूशि मनले * मेरो सदा चाकरी ।
एक्लै यो घरमा बसौं म कसरी * पत्नी विना यो घरी ॥३६
भाई, बन्धु र पौत्र, पुत्र घरमा * सारा भए तापनी ।
शोभाहीन र शून्य हुन्छ घर त्यो * छैनन्न भने कामिनी ॥
कस्तै कष्ट परे पनी मिलिजुली * बस्छन्न भने दम्पति ।
तिन्को स्वर्गसमान हुन्छ गृह यो * संसारमा भूपति ! ॥३७॥
मेरी पत्नि पतिव्रता गुणवती * अत्यन्त प्यारी थिई ।
त्यस्ती पत्निबिना वृथा छ घरमा * बस्नू गृहस्थी भई ॥
स्त्रीका सद्गुग संझि बेसरी गऱ्यो * त्यस्ले बिलौना जब ।
बन्धन्भित्र भए पनी सुनि कुरा * आफ्ना पतिको सब ॥३८
लागी भन्न बुझाइ कर्म-फल छन् * जीवादिका प्राक्तन ।
दैवाधीन भएर जीव फल त्यै * जन्मन्छ भोग्नाकन ॥
आफ्नाका सँगमा बिछोड़ अथवा * संयोग पर्नै पनी ।
मान्छन् प्राक्तन कर्मको फल सबै * गर्नै यही हो भनी ॥३९॥
आफ्नु कर्म सपार्नु विज्ञ जनको * कर्तव्य हो लोकमा ।
मेरा निम्ति तपाईंले नलिनुहोस् * चिन्ता वृथा चित्तमा ॥
आएको रुखका मनी छ अहिले * यो व्याध अभ्यागत ।
यस्को गर्नुहवस् प्रसन्न मनले * सम्मान औ स्वागत ॥४०

पत्नीको सुनि आर्ति खूब मनमा * त्यो पक्षिको गाड़ियो ।
व्याधाको नगिचै गएर खुशिले * यो बात त्यस्ले भन्यो ॥
आफ्नो सेवक हो भनेर मनमा * इच्छा छ जे त्यो भन ।
आज्ञा शक्ति पुगे जती म खुशिले * गर्छू सबै पालन ॥४१॥
पक्षीको सुनि त्यो कुरा खुशि भई * भन्दो भयो व्याधले ।
जाड़ो शान्त हुने थियो अलिकती * हे मित्र ! आगो भए ॥
व्याधाको सुनि बात पक्षि खुशिले * तत्काल उड्दै गयो ।
बल्दो अग्नि लिएर आफ्नु मुखमा* क्यै बेरमा फर्कियो ॥४२॥
व्याधाले खर-पात आदि बटुली * आगो जलाईकन ।
ताप्यो बेसरि अग्नि त्यो अनि भयो* क्यै शान्त त्यस्को मन ॥
पक्षीलाइ भन्यो गयो शरिरको * जाड़ो त मेरो सब ।
आँटें मर्न म भोकले अलिकती * क्यै खान देऊ अब ॥४३
व्याधाको सुनि बात चिन्तित भई * भन्दो भयो पक्षिले ।
केही सम्पति छैन, पेट कसरी * तिम्रो भरूँ अन्नले ॥
पक्षी हूँ वनमा डुलेर दिनहूँ * गर्नै हुँदा भोजन ।
मैले अन्न जुटाई मानिससरी * कैल्है पनी राख्तिनँ ॥४४
सेवा उत्तम धर्म हो अतिथिको * भन्छन् सबै विज्ञले ।
तिम्रो पेट म भर्दछू परख छिटै * आफ्नो यही देहले ॥
हाम्फाल्यो सहसा भनीकन यती * त्यो पक्षिले अग्निमा ।
देखी साहस पक्षिको गुनिलियो * त्यो व्याधले चित्तमा ४५
मेरा निम्ति सहर्ष जीवन दियो * जाबो चरो भैकन ।
आफ्नो उत्तम धर्मको; भय त्यजी * त्यसले गर्‍यो पालन ॥
गर्दै निन्दित कर्म मात्र वनमा * मेरो बित्यो जीवन ।
मैले काट्न सकीनँ मानिस भई * सद्धर्मद्वारा दिन ॥४६॥

पश्चात्ताप गरी चरीकन त्यहीं * छाडीदियो व्याधले ।
स्वामीका सँगमा चरी पनी मरी * त्यै अग्निमा शोकले ॥
भोगी प्राक्तन कर्मका फलहरू * जन्मेर संसारमा ।
केही काल बिताइ दम्पति गए * त्यौ धर्मले स्वर्गमा ॥४७॥
व्याधाले निज देहलाइ दुखले * धिक्कार धेरै दिई ।
मुक्ति प्राप्त गर्‍यो सुकर्म पथमा * लागेर ज्ञानी भइ ॥
हे बाबू ! इहलोकमा अतिथिको * सत्कार जो गर्दछन् ।
धेरै काल गएर स्वर्गपुरिमा * त्यो धर्मले बस्तछन् ॥४८

अज्ञानमा गरिएको पाप कसरी नाश हुन्छ ? :—

सोधे भीष्मजिलाइ धर्म-सुतले * सानन्द पाऊ परी ।
होला पाप विनाश नाथ ! जनको * अज्ञानको के गरी ?
यस्तो प्रश्न सुनी पितामहजिले * सानन्द भन्नूभयो ।
भन्छु एक कथा तिमी सुन, सदा * कल्याण गर्नेछ त्यो ४९
श्री जन्मेजय नामका नरपती * साह्रै थिए सज्जन ।
लाग्यो भूपतिलाइ विप्र-वधको * हत्या नजानीकन ॥
पापी भूप भनी प्रजा सुजनले * तिन्लाइ त्यागीदिए ।
छाडी शासन राज्यको वनमहाँ * दुःखी हुँदै ती गए ॥५०॥
बस्थे आश्रममा कुनै, तप गरी * इन्द्रोत ज्ञानी मुनी ।
सोधे भूपतिले हुनेछ कसरी * उद्धार मेरो भनी ॥
हत्यारा नृपती भनेर पहिले * धिक्कार धेरै दिई ।
देखेनन् जब क्रोध ती नृपतिमा * बोले दयालु भई ॥५१॥
राजन् ! गर्दछ पाप जुन् पुरुषले * जान्दै नजानीकन ।
पश्चात्ताप र धर्म-कर्म तपले * सक्नेछ त्यो मेटिन ॥

गर्नू ईश्वरको प्रसन्न मनले * सेवा तथा कीर्तन ।
हत्या पाप भई विनाश हरिमै * लाग्नेछ त्यस्को मन ५२
राजन् ! उत्तम ब्रह्म-कर्म रत जो * सत्पात्र छन् ब्राह्मण ।
तिन्को क्यै अपराध गर्दिनँ भनी * गर्नू पहिले प्रण ॥
डुल्नू तीर्थ प्रभास, पुष्कर ठुलो * श्रद्धा लिई पैदल ।
गर्नू यज्ञ र स्नान, दान, तप औ * सेवा सदा निश्छल ॥५३
राजन् ! सूर्य उदाउँदा तम स्वयं * नाशिन्छ जुन् चालले ।
तिम्रो पाप पनी त्यसै किसिमले * छुट्नेछ सत्कर्मले ॥
त्यो शिक्षा मुनिको सुनेर नृपले * विश्वास मानीकन ।
बद्रीमा तपको गरे दृढ भई * क्यै काल आयोजन ॥५४
त्यस्ले पाप सबै छुट्यो नरपती * अत्यन्त खुशी भए ।
केही काल पछी ति स्वर्गपुरिमा * त्यो देह त्यागी गए ॥
जानी-जानी कुकर्म पाप जनले * संसारमा गर्दछन् ।
केही छैन उपाय मुक्त हुनको * ती नर्कमा पर्दछन् ॥५४

मृतकले पुनर्जीवन पाउने विषयमा आख्यान :—

सोधे धर्म-कुमारले विनयले * श्री भीष्म ज्ञानीसित ।
शंका गर्नुहवस् निवारण प्रभो * मेरो चिताई हित ॥
यो संसारभरी मनुष्य दिनहूँ * देख्छु मरेका तर ।
मुर्दालाइ बचाउने यदि भए * युक्ती कुनै सुन्दर ॥५६॥
आज्ञा गर्नुहवस् मलाइ प्रभुले * जाने बुझेको भए ।
पैल्हे मृत्यु भएर कुन् पुरुषको * कस्ले बचाई दिए ॥
यस्तो प्रश्न सुनेर धर्म-सुतको * भन्नूभयो भीष्मले ।
जो आख्यान म भन्दछु सुन तिमी* हे भूप ! आनन्दले ॥५७

धेरै यत्न गरेर एक द्विजको * छोरो भएको थियो ।
लागी रोगहरू अनेक थरिका * त्यो बालकैमा मऱ्यो ॥
मुर्दा बोकि मसानमा जब पुगे * त्यस्का सबै बान्धव ।
थाले गर्न विलाप बेसरि रुँदै * राखेर भैंमा शब ॥५८॥
यौटा गिद्ध गई, गए यिनिहरू * चाँडै म खान्थें भनी ।
लाग्यो भन्न बुझाई नीति खुशिले * तिन्लाइ ज्ञानी बनी ॥
यो संसार असारमा जन जती * जन्मे सबै मर्दछन् ।
ज्ञानी बन्धु मऱ्यो भनेर तिमि झैं * चिन्ता कहाँ गर्दछन्?॥५९
रोऊ खूब कराउ शोक जति जे * इच्छा छ सारा गर ।
बाँच्नेछैन कदापि बालक बरू * फर्केर जाओ घर ॥
देख्तैछौ सबले श्मशान भरि छन् * कङ्काल चारै तिर ।
डुल्छन् स्याल र काग, गिद्ध दिनहूँ* आहारको खातिर ॥६०
ठूलो शत्रु तथा हितू, स्वजन वा * कोही मरे तापनी ।
गर्नू शोक मनुष्य भैकन वृथा * हो मूर्ख जस्तो बनी ॥
जो जन्मन्छ अवश्य मर्दछ भनी * जानीरहेछौ तर ।
जाँदैनौ किन लौ त्यजेर शिशु यो * तत्काल आफ्नू घर ॥६१
यौटा स्याल थियो त्यहीं र मनमा* त्यस्ले विचारी लियो ।
मैले गर्न सके प्रयत्न सहजै * आहार मिलो थियो ॥
गर्ला भोजन गिद्धले यिनिहरू * फर्केर चाँडै गए ।
मिल्थ्यो खान मलाइ मानिसहरू * क्यै बेर पर्खी दिए ॥६२॥
लाग्यो भन्न गएर स्याल नगिचै * सारा मलामीसित ।
जाँदैछौ किन मूर्ख झैं घर, पऱ्यो * कुन् कामको हत्पत ॥
हुन्छन् मानिस रोगले पनि मरे * जस्तो तथा मूर्च्छित ।
हुन्छन् कोहि मरे पनी कहिं-कहीं * संयोगले जीवित ॥६३॥

देख्छौ तत्पर गिद्धलाइ, कसरी * पाऊँ र खाऊँ भनी ।
जान्छौ त्याग गरेर, आयु शिशुको * बाँकी भए तापनी ॥
आफ्नू देह नपाई पुत्र कसरी * बाँच्नेछ तिम्रो भन ।
बाँच्ने आश लिई बसीरहु यहीं * रोई कराईकन ॥६४॥
त्यागी यो प्रिय पुत्रलाइ घरमा * दौड़ेर जान्छौ किन ?
बाँच्ने आश लिएर साँझतक के * गाह्रो पर्‍यो पर्खन ?
आफ्नू स्वार्थ बुझाउँदै जब भन्यो * यस्तो कुरा स्यालले ।
मुर्दाको सब ती वरिपरि बसे * बाँच्ने ठुलो आशले ॥६५
फर्के मानिस, स्यालको सुनि कुरा * पत्त्यार मानीकन ।
आई गिद्ध भयो--वृथा तिमिहरू * फर्केर आयौ किन ?
यस्मा प्राण रहेन शेष अब यो * बाँच्तैन कैल्है पनी ।
गर्छौ आश कि स्यालको सुनि कुरा* यो फेरि बाँच्ला भनी ६६
बाँचेको अझसम्म को छ ? भन लौं* जो जो मरे लोकमा ।
बाटो हो सबको यही, किन सबै * पर्छौ वृथा शोकमा ॥
आफाफ्ना घरमा हिंडे सुनि कुरा * त्यो गिद्धको ती जब ।
लाग्यो स्याल गएर भन्न नजिकै * आफ्नू इरादा सब ॥६७॥
यस्को देह खड़ा हुँदै अबुझ झैं * त्यागेर जान्छौ कहाँ ।
सक्छन् जीवित पार्न यस्कन कुनै * आए महात्मा यहाँ ॥
कोही ब्राह्मणको मर्‍यो सुत अघी * वेला नपुग्दै जब ।
मुर्दालाइ बचाइबक्सनुभयो * आफै गई राघव ॥६८॥
आफ्नो पक्ष गरे समर्थन जसै * ती गिद्ध औ स्यालले ।
थाले सुन्न बसी मलामिहरु ती * अत्यन्त आश्चर्यले ॥
पाल्नूभो शिवजी त्यसै वखतमा * हे भूप ! संयोगले ।
छोरो ब्राह्मणको बचाइदिनुभो * आफ्नो ठुलो शक्तिले ६९

भागे गिद्ध र स्याल श्रीशिव पनि * पौल्नूभयो धाममा ।
आफ्नाफ्ना घरमा गए शिशु लिई * आनन्दका साथमा ॥
मैले यो इतिहास जुन् किसिमले * पैह्ले सुनेको थिएँ ।
हे राजन् ! तिमिलाइ उत्तम बुझी * ऐह्ले सुनाई दिएँ ॥७०॥
जस्ले गर्दछ कार्य योग्य रितले * विश्वास मानीकन ।
त्यस्लाई सुख शान्ति मिल्दछ सुखी* होला सदा जीवन ॥
ठूलो सिद्ध तथा सदाशिवाबिनां * ब्रह्माजिको लेखनी ।
राजन् ! मेट्न समर्थन छैन भवमा* मानीस कोही पनी ॥७१॥
सोही कारण विज्ञ मानिसहरू * संसारमा छन् जति ।
मर्छु आज कि भोलि मर्दछु भनी * आफ्नो सपारुन्न मति ॥
जस्तो शङ्करको कृपा हुन गई * बाँच्तो भयो बालक ।
त्यस्तै टर्दछ कालको गति पनी * हे शत्रु संहारक ! ॥७२॥

लोभ, तप सत्य र पापहरूको वर्णन :—

सोधे धर्म-कुमारले वियतले * श्री भीष्म ज्ञानीसित ।
हुन्छन् मानिस कुन् परिस्थिति परी* दुष्कर्ममा उद्यत ॥
यस्तो प्रश्न सुनेर धर्म-सुतको * भन्नूभयो भीष्मले ।
गर्छन् पाप मनुष्यले थरिथरी * संसारमा लोभले ॥७३॥
गर्छन् लोभ बढेर व्यक्ति धनको * इच्छा र चोरी पनी ।
गर्थें लोभ नभै दिए किन वृथा * दुष्कर्म पापी बनी ॥
हत्या गर्नु मनुष्यको र छलले * खोसी लिनू सम्पति ।
आफू विज्ञ बनेर गर्नु अरुको * हेलाँ र निन्दा स्तुति॥७४
गर्ने पाप गराउने पनि यिनै * हुन् लोभका लक्षण ।
हुन्छन् मानिस लोकमा वश परी * पापी तथा दुर्जन ॥

माया, मोह र काम, क्रोध, अभिमान् * दुष्कीर्ति, उद्दण्डता ।
चिन्ता, बृद्धि र धर्म, वैभव सबै * नाश्ने र निर्लज्जता ॥७५
ईर्ष्या आदि अनेक छन् अरू पनी * हे भूप ! यी दुर्गुण ।
गर्छन् त्याग सुविज्ञले र यिनि नै * हुन् लोभका कारण ॥
गर्छन् पाप अनेक मानिसहरू * संसारमा लोभले ।
काट्नू लोभ र पापको दृढ जरो * संतोषको खड्गले ॥७६॥
शिक्षा उत्तम यो युधिष्ठिरजिले * सारा सुनेथे जब ।
सोधे भीष्मजिलाइ आफ्नु मनमा * शङ्का उठेको सब ॥
लोभै हो जड़ पापको भनी सबै * हे नाथ ! जानीकन !
गाड़िन्छन् सब मूर्ख भैं जनहरू * त्यो लोभमा नै किन ॥७७
आज्ञा गर्नुभयो पितामहजिले * हाँसेर हे भूपति ।
इच्छा लौकिक वस्तुको र सुखको * गर्नेहरू छन् छति ॥
भोग्ने वस्तु अनेक तुच्छ जब ती * संसारमा देख्तछन् ।
बिर्सी धर्म तथा हिताहित पनी * ती लोभमा पर्दछन् ॥७८
जे होला पछि लौ, अगाड़ि सुख जो * देखिन्छ भोगौं भनी ।
गर्छन् पाप कुनै विचार नगरी * कर्तव्य आफ्नो तिनी ॥
ठान्छन् कोहि ठुलो परिश्रम पनी * मैले नगर्नूपरोस् ।
मैलाई सुख-शान्ति, वैभव तथा * आनन्द बर्ता मिलोस्॥७९
यस्तो दुष्ट विचार औ कपटले * सद्धर्म त्यागछन् जब ।
राजन् ! लोभ र पापले नरकमा * ती पर्न जान्छन् सब ॥
यस्तो लोभ र पापको जब गरे * श्री भीष्मने वर्णन ।
सोधेथे तपको अपार महिमा * पाऊ समाईकन ॥८०॥
राजाको बुझि त्यो विचार मनको * भन्नूभयो भीष्मले ।
मान्छन् उत्तम हो तपोधन भनी * सर्वज्ञ औ शास्त्रले ॥

योगी उत्तम औ मुनी र ऋषिले * ठूलो तपस्या गरी ।
पाए ज्ञान समस्त वेदहरूको * हे भूपती ! राम्ररी ॥८१
ब्रह्माले तप नै गरीकन ठुको * संसार सृष्टि गरे ।
ज्ञानी, सिद्ध, मुनीहरू तप गरी * संसार पारी तरे ॥
हत्या, पाप र चोर्नमा मन दिने * द्रोही तथा दुर्जन ।
हुन्छन् शुद्ध, गरे कठोर तपको * क्यै काल आयोजन ॥८२
भिन्ना-भिन्न अनेक रूप तपको * देखिन्छ शास्त्रादिमा ।
मानिन्नन् उपवासरूप तप झैं * ठूली तिनै लोकमा ॥
छैनन् उत्तम दान झैं अरु कुनै * सत्कर्म हे भूपति !
हुन्नन् श्रेष्ठ मनुष्यमा अरु कुनै * वेदज्ञ झैं सद्गति ॥८३॥
सारा धर्म र श्रेष्ठ आश्रममहाँ * संन्यास हो उत्तम ।
त्यस्ले सिद्धि र मुक्ति मिल्दछ अरू * पर्दैन गर्नु श्रम ॥
राजाले तपको सुनेर महिमा * सन्तोष मानीकन ।
सोधे भीष्मजिलाइ सत्य महिमा * सुन्ने छ मेरो मन ॥८४॥
लिन्छन् ब्राह्मण, देवता, पितरले * जुन्न सत्यको आश्रय ।
त्यस्को वर्णन गर्नुहोस् हजुरले * मेरो चितलाई जय ॥
तिन्को प्रश्न सुनी प्रसन्न मनले * भन्नूभयो भीष्मले ।
रक्षा गर्छ अवश्य, पालन गरे * सद्धर्मको सत्यले ॥८५॥
लज्जा, धैर्य, क्षमा, जितेन्द्रिय ठुलो * दानी, दयालु, गुणी ।
अर्काको उपकार खातिर दिने * सर्वस्व त्यागी बनी ॥
आफ्नु धर्ममहाँ सदा स्थिर रही * त्याग्ला अहंकार जो ।
गर्ला पालन देहले र मनले * जो सात्विकी वृत्तिको ॥८६
योगी हो त्यहि व्यक्ति जुन् पुरुषमा * देखिन्छ यी लक्षण ।
छैनन् उत्तम सत्य पालन भरी * अर्को कुनै सद्गुण ॥

छैनन् सत्य समान धर्म भवमा * भूटोसरी नाशक !
हुन्छन् मुक्त सुविज्ञ मानिस बनी * त्यो सत्यका रक्षक ॥८७॥
हज्जारौं हयमेधका फलहरू * राखेर एकातिर ।
योटा सत्य धरुन् तुलाउपरमा * हे भूप ! अर्कोतिर ॥
होला धर्म-प्रधान 'सत्य' विजयी * त्रैलोक्यमा निश्चय ।
गर्दा पालन सत्यको सब हुनन् * दुष्कर्म आफैं क्षय ॥८८॥
जान्ने उत्तम सत्य'का गुणहरू * छन् शास्त्र औ वेदमा ।
मैले भन्न यथार्थ सक्तिनँ सबै * त्यो सत्यको श्रेष्ठता ॥
शिक्षा धर्म-कुमारले जब सुने * विस्तारले सत्यको ।
लागे सोध्न समाउँदै चरणमा * आनन्दले भीष्मको ॥८९
मैले सत्य र धर्मको सुनिसकें * शिक्षा अनेकौं तर ।
गर्छन् पापहरू अनेक थरिका * हे नाथ ! नारी नर ॥
कस्तो कर्म गरेर हुन्छ कसरी * त्यो पापको मार्जन ।
प्रायश्चित्त सबै कुकर्महरुको * गर्नूहवस् वर्णन ॥९०॥
सुन्छु लक्षण नीच व्यक्तिहरुको * राम्रा जतीको सुनें ।
कुन् हो उत्तम धर्म-कर्म मनमा * शान्ती र मुक्ती दिने ॥
यस्तो प्रश्न सुनेर धर्म-सुतको * भन्नूभयो भीष्मले ।
यस्को वर्णन चार वेदहरुमा * पाइन्छ विस्तारले ॥९१॥
जानेको जति भन्दछु सुन तिमी * हे भूप ! संक्षेपले ।
छैनन् श्रेष्ठ परोपकारसरिका * सद्धर्म संसारमा ।
गर्ला थाह नपाइ जुन पुरुषले * दुष्कर्म हे भूपति !
त्यो निर्दोष ठहर्छ ज्ञान नहुँदा * बिग्रन्न त्यसको गति॥९२
ज्ञानी-जानि कुकर्ममा मन दिने * पापीहरू छन् जति ।
प्रायश्चित्त हुँदैन ती पुरुषको * सप्रन्न कैल्हे मति ॥

हिंसा कुत्सित कर्म वा घृणित जो * इच्छा सदा राख्तछन् ।
हे राजन् ! अभिमानले थरि-थरी * दुष्कर्म जो गर्दछन् ॥९३
गर्दैनन् हितमा र श्रेष्ठ जनको * विश्वास जो दुर्मति ।
तिन्ले कष्ट यहाँ, मरेपछि उहाँ * भोग्छन् कती हो कति ॥
प्रायश्चित्त अनेक पापहरुका * छन् भिन्न-भिन्नै तर ।
पश्चात्ताप समान छैन अरु क्यै * कल्याणको खातिर ॥९४॥
जस्ले पाप परेर मानि पछितो * गर्दैन फेरी भने ।
त्यस्का पापहरू यही जुनिमहाँ * सम्पूर्ण छन् नासिने ॥
भन्छन् शास्त्रहरू र विज्ञ-जन औ * चारै थरी वेद जो ।
रोक्नू इन्द्रियलाइ चित्त वशमा * राखेर, कर्तव्य हो ॥९५॥
जस्मा छैन विकार, रूप-गुण औ * देखिन्न जो दृष्टिले ।
भन्छन् विज्ञहरू 'अगोचर' भनी * जस्लाइ आनन्दले ॥
सोही ब्रह्मस्वरूप वा प्रकृति छन् * ब्रह्माण्डमा व्यापक ।
दिन्छन् तो फल कर्मको बखतमा * आफैं बनी रक्षक ॥९६
आज्ञा लीकन ब्रह्मको प्रकृतिले * यो सृष्टि गर्ने हुँदा ।
भुल्छन् जीवहरू सबै जगतको * सौन्दर्यमा लोभिंदा ॥
छन् जो इन्द्रियका मिठा सुखहरू * भोगार्थ संसारमा ।
तान्छन् मानिसलाइ आफुतिर ती * गाड़ौं भनी मोहमा ९७॥
त्यस्लाई अनभिज्ञ व्यक्तिहरूले * मानेर साँचो सुख ।
गर्दा भोगहरू अनेक थरिका * भोगी रहन्छन् दुःख ॥
ज्ञानीले सुख त्यो बुझीकन झुटो * रोकी सबै इन्द्रिय ।
बस्छन् लीन भएर ब्रह्मपदको * आनन्दमा निर्भय ॥९८

खड्गको परंपरा र पाण्डवहरूको वार्तालाप :—

ब्रह्मज्ञान इर धर्म-अर्थ, हितको * शिक्षा सुनी राम्ररी ।
सोधे भीष्मजिलाइ श्री नकुलले * यो बात पाऊ परी ॥
डुल्छ हातमहाँ लिएर दिनहूँ * यो खड्ग त्यै कारण ।
कस्तो हुन्छ गति मरेपछि भनी * आत्तिन्छ मेरो मन॥९९॥
यस्को केहि भए उपाय सजिलो * मेरो चिताई हित ।
आज्ञा गर्नुहवस् प्रभो ! हजुरले * सुन्छु म श्रद्धासित ॥
यस्तो प्रश्न सुनीसकी नकुलको * भन्नूभयो भीष्मले ।
मेरो चित्त भयो प्रसन्न बहुतै *हे बाबु ! यो प्रश्नले ॥४००
यो संसार छँदा जलामय, भयो * उत्त्पत्ति ब्रह्माजिको ।
धारी लौकिक देह सृष्टि विधिले * सानन्द गर्नूभयो ॥
द्यौता दानव, यक्ष-राक्षस सबै * पैदा भएथे जब ॥
तिनूका कार्यहरू विभाजन गरी * सुम्पीदिनूभो सब ॥१॥
गर्थे देवहरू प्रसन्न मनले * त्यो नीतिको पालन ।
थाले दानव वर्ग गर्न बलले * त्यो नीति उल्लङ्घन ॥
त्यो देखी विधिले हिमालयमहाँ * गर्नू भयो यज्ञ जो ।
यौटा उग्र स्वरूप भूप बलियो * त्यसबाट पैदा भयो ॥२॥
देखी त्यस्कन देवताहरू सबै * साह्रै डराए जब ।
भन्नूभो विधिले नमान डर क्यै * हे देवता हो ! अब ।
हो यो खड्ग प्रसिद्ध आयुध भनी * संग्रामका निम्तिमा ।
यस्तो बात भनेर खड्ग दिनुभो * श्री रुद्रका हातमा ॥३॥
मारे दुष्ट अनेक दानवहरू * त्यो खड्गले रुद्रले ।
पाएथे शिवबाट आयुध त्यही * क्यै कालमा विष्णुले ॥

सोही खडग पछी मरीचिगणले * श्री इन्द्रलाई दिए ।
धेरै दानव इन्द्रले पनि लड़ी * संहार गर्दा भए ॥४॥
पाएथे सुरराजबाट मनुले * त्यो खडग क्यै कालमा ।
हे बाबू ! अझसम्म आयुध त्यही * चल्दैछ संसारमा ॥
रक्षा खातिर भूपतीहरू सदा * लिन्छन् यही आयुध ।
मार्छन् शत्रु र गर्दछन् बखतमा * पापीहरूको वध ॥५॥
योद्धा क्षत्रिय औ ठुला नृपतिका * भाई हुनाले गरी ।
डुल्नू खड्ग लिएर धर्म पनि हो * तिम्रो ठुलो यो घरी ॥
रक्षा सज्जनको गरेर वशमा * राख्नू सबै दुर्जन ।
जस्ले हुन्छ भलो यहाँ, पछि उहाँ * पर्दैन चिन्ता लिन ॥६॥
शिक्षा भीष्मजिको सुनेर मनको * शंका हटाई सब ।
सायंकाल भयो, फिरे घरमहाँ * पाँचै जना पाण्डव ॥
भोलीपल्ट बसे सभा-भवनमा * आनन्द मानीकन ।
सोधे धर्म-कुमारले—हित कुरा * के के बुझ्यौ लौ भन॥७
यस्तो प्रश्न सुनी भने विदुरले * तत्काल हे भूपति !
श्रद्धा, त्याग, दया, क्षमा, तप सबै * हुन् चित्तका सम्पति ॥
तिन्को शासन धर्म हो नरपते ! * त्यस्को सुरक्षा गरे ।
शान्ती मिल्दछ धर्मले ऋषि-मुनी * संसार पारी तरे ॥८॥
पैह्ले 'धर्म' र 'अर्थ' मध्यम तथा * हो काम तेस्रो भनी ।
गर्छन् पालन धर्मको जतनले * ज्ञानी तपस्वी मुनी ॥
यस्तो बात सुनीसकी विदुरको * भन्दा भए पार्थले ।
गर्छन् पालन धर्म-काम दुइको * जान्नेहरू अर्थले ॥९॥
हेला हुन्छ मनुष्य अर्थ नभए * बाठो र जान्ने पति ।
सोही कारण मान्दछन् जनहरू * हो अर्थ ठूलो भनी ॥

जस्तै ईश्वर प्राप्तिको जतनले * गर्छन् सबै साधना ।
त्यस्तै सादर गर्दछन् जनहरू * सम्पत्तिको कामना ॥१०॥
केही कार्य हुँदैन अर्थ नभई * पूरा तिनै लोकमा ।
गर्छन् यत्न तथा ठुला श्रमहरू * सम्पत्तिकै निम्तिमा ॥
पाल्ने खूब जटा त्रिपुण्ड शिरमा * जो लाउँछन् चन्दन ।
योगी, सिद्ध, तपी मुनीश्वर, गुणी * ज्ञानी, दुखी, सज्जन॥११
नाना रूप लिई अनेक थरिका * दानादि गर्छन् जति ।
तिन्को ध्येय रहन्छ एक कसरी * पाउँ ठुलो सम्पति ॥
जस्ले संग्रह धर्म-युक्त धनको * गर्नेछ संसारमा ।
त्यस्का पूर्ण हुनन् मनोरथ, मरी * जानेछ त्यो स्वर्गमा ॥१२
अस्तो अर्थ-प्रधान श्री विजयले * वार्ता गरेको सुनी ।
माद्रीका सुतले समर्थन गरे * साँचो कुरा हो भनी ॥
त्यस्तो बात सुनी विचार मनमा * गर्दै भने भीमले ।
खोज्छन् सम्पति कामना बढि हुने * जो छन् तिनै व्यक्तिले१३
खोज्दैनन् धन, भोग वा सुख कुनै * राख्तैन जो कामना ।
गर्छन् विज्ञ, मुनी, गुणी, ऋषि पनी * आसक्तिकै साधना ॥
नौनी सार स्वरूप जुन् किसिमले * झिक्छन् दही-दूधको ।
त्यस्तै काम र भोग हे नरपते ! * हो सार धर्मार्थको ॥१४॥
गर्छन् यत्न तथा परिश्रम ठुलो * धेरै थरी साधना ।
त्यस्मा सारस्वरूप हुन्छ सबको * आसक्तिकै कामना ॥
यस्तो बात सुनी वृकोदरजिको * शंका सबैको गयो ।
अर्को धर्म-कुमारले हित कुरा * सम्झाइ भन्नूभयो ॥१५॥
त्यागीको मनमा हुँदैन सुख वा * धर्मार्थको चाहना ।
त्यो भोग्दैन झुटा प्रपञ्च, दुख वा * आसक्तिको यातना ॥

जसले देख्दछ पाप-पुण्य सम, जो * ठान्नेछ माटो सुन ।
त्यसलाइ धन, धर्म, कामहरूले * के गर्न सक्छन् मन ॥१६
गर्नू पर्छ मुमुक्षुले जतनले * त्रैवर्गको पालन ।
जीवन्-मुक्त हुँदैन मानिस सबै * इच्छा नत्यागीकन ॥
यस्तो उक्ति सुनेर धर्म-सुतको * खूशी भए पाण्डव ।
भोलीपल्ट उठी पितामहकहाँ * पुग्दा भए ती सब ॥१७॥

सज्जन दुर्जनको विषमा कृतघ्न गौतमको उदाहरण :—

सोधे धर्म-कुमारले विनयले * श्री भीष्मको साथमा ।
शंका गर्नुहवस् निवारण प्रभो ! * मेरो छ जो चित्तमा ॥
हुन्छन् दुर्जनमा र सत्पुरुषमा * हे नाथ ! कस्ता गुण ?
चिन्ने ती सबलाइ कुन् किसिमले * देखेर के लक्षण ॥१८॥
मैत्री, सन्धि नगर्नु विज्ञ जनले * कस्ता कृतघ्नीसित ।
यस्को वर्णन गर्नुहोस् हजुरले * शास्त्रादिले सम्मत ॥
यस्तो विन्ति सुनेर धर्म-सुतको * भन्नूभयो भीष्मले ।
भन्दैछु सुन शास्त्रका मतहरू * हे भूप ! आनन्दले ॥१९
पापी, धूर्त, नृशंस, दुष्ट, कपटी * लोभी तथा निन्दित ।
त्याग्ने संकटमा र द्रोह मनमा * जो गर्छ आफ्नासित ॥
त्यस्ताका सँगमा नगर्नु जनले * मैत्री कहीले पनी ।
त्याग्छन् निश्चय कष्टको समयमा * तिन्ले कृतघ्नी बनी ॥२०
दानी शूर कृतज्ञ, श्रेष्ठ कुलको * सन्तान ज्ञानी-गुणी ।
बोल्ने सत्य, परोपकार खुशिले * गर्ने दयालु बनी ॥
यस्ताका सँग मित्रता गरिलिनू * कर्तव्य हो विज्ञको ।
हानी हुन्न र कष्टको बखतमा * साहाय गर्नेछ त्यो ॥२१

बाबू ! भन्छु कथा यसै विषयको * ऐहले म यौटा सुन ।
यौटा 'गौतम' नाम भिक्षुक कुनै * पापी थिए ब्राह्मण ॥
आफ्नू धर्म र ब्रह्मकर्म द्विजको * कर्तव्य त्यागीकन ।
गर्थे भोजनका निमित्त दिनहूँ * ती विप्र भिक्षाटन ॥२२
डाकूका घरमा कुनै दिन पुगे * ती माग्नलाई जब ।
त्यस्ले विप्र भनेर आदर गरी * दिक्कै दियो वैभव ॥
दासी एक थिई त्यसैसित फँसी * पाएर त्यो सम्पति ।
थाले गर्न अनेक पापहरू तो * आनन्द मानी अति ॥२३
खेल्थे नित्य शिकार जङ्गलमहाँ * ती दस्यु जस्तै बनी ।
यौटा ब्राह्मणले कुनै दिन भने * दुष्कर्म त्याग्नू भनी ॥



कृतघ्न गौतमको उदाहरण

घत्लाग्दो द्विजको कुरा सुनिसकी * त्यागी सबै संपति ।
तिन्का साथमहाँ ति गौतम हिंडे * सम्झेर आफ्नू गति॥२४

जाँदा क्यै दिनमा समुद्र तटमा * पुग्दा भए गौतम ।
देखेथे वट बृक्ष सुन्दर ठुलो * शोभा हुने उत्तम ।
पल्टे विप्र थलाइले रुखमनी * विश्रामको खातिर ।
लाग्यो भन्न थियो त्यहीं बक कुनै* त्यस्ले गरी आदर ॥२५
हे ब्रह्मन् ! तिमिलाइ देख्छु किन हो* अत्यन्त नै दुर्बल ।
तिम्रो दर्शनले कृतार्थ म भएँ * हो पुण्यको यो फल ॥
पक्षीको सुनि यो कुरा मनमहाँ * आश्चर्य मानीकन ।
लागे गौतम भन्न—ब्राह्मण म हूँ * अत्यन्त छु निर्धन ॥२६
मारी जङ्गलका चराहरू सदा * राख्ने हुँदा जीवन ।
हुन्छु खान नपाइ स्वस्थ कसरी * पक्षी ! तिमी नै भन ?
लाग्यो त्यो बक भन्न—हे द्विज ! तिमी * दुष्कर्म छाड्छौ भने ।
मैले यत्न बताउँछु धन मिली * गुजारा तिम्रो हुने ॥२७॥
लागे ब्राह्मण भन्न 'यत्न म कुनै * जान्दीनँ गुजारानको ।
सोही कारणले शिकार वनमा * गर्छु गई जीवको ॥
हे पक्षी ! दिनहुँ बसेर घरमा * पाए मिठो भोजन ।
मारी जीवहरू अनेक वनका * हत्या म बोक्थें किन २८
लाग्यो त्यो बक भन्न हर्षित भई * सत्पात्र, हे ब्राह्मण !
राजा छन् विरूपाक्ष सज्जन सखा * मेरा, त्यसै कारण ॥
जानोस् भोलि अवश्य विप्र ! तिनिछन्*दानी तथा सद्गुणी ।
दिन्छन् वैभव बेसरी नृपतिले * सम्चार मेरो सुनी ॥२९
पक्षीको सुनि बात ब्राह्मण बने * त्यो रात अभ्यागत ।
भोलीपल्ट उठी बिदा भइ हिंडे * ती श्रेष्ठ पक्षीसित ॥
केही कालपछी पुगीकन भने * सारा कुरा विप्रले ।
राखी क्यै दिन बेसरी धन दिए * राजा विरूपाक्षले ॥३०

बोकी सम्पति त्यो उही रुखमनी * पुग्दा भए गौतम ।
गर्दै आदर फेरि आइ बकले * तिन्को हटायो श्रम ॥
भेट्टाइ बकलाइ झट्ट मनमा * तिन्ले गरे चिन्तन ।
खाने वस्तु रहेन केहि पथमा * मेरो, त्यसै कारण ॥३१
मारी यो बकलाई खान्छु पथमा * बाँकी बचेका जति ।
पुग्नेछु घरमा प्रसन्न मनले * बोकेर यो संपति ॥
बिर्सी त्यो उपकार श्रेष्ठ बकको * घाँटी निमोठीकन ।
भुत्ल्याई द्विजले गरे अलिकती * मासु त्यहीं भोजन ॥३२॥
दासीकै घरमा पुगेर अघि झैं * सुम्पी सबै सम्पति ।
थाले बस्न तिनी महाजन बनी * सानन्द हे भूपति !
हुन्थ्यो भेट सदैव मित्र बकको * राजा विरूपाक्षको ।
राजा छक्क परी भने किन अझै * आएन लौ मित्र त्यो ॥३३
आफ्ना दूतहरू पठाई नृपले * पत्ता लगाए जब ।
मारे गौतमले अवश्य बक त्यो * भन्ने बुझेथे तब ॥
माने दुःख असाध्य नै नृपतिले * ती मित्रको खातिर ।
ल्याए गौतमलाइ पक्रि बलले * आफ्ना पठाई चर ॥३४॥
पापी गौतमलाइ मार अहिले * भन्दा विरूपाक्षले ।
काट्यो गौतमलाइ त्यै बखतका * ती भूपको दूतले ॥
हे बाबू ! द्विजको शरीर सबले * काटेर टुक्रा गरे ।
मासु गिद्ध र कागका नजिकमा * मानीसद्वारा छरे ॥३५॥
खाएनन् नर-मांस पक्षिहरूले * पापी, कृतघ्नी भनी ।
सुम्पे राक्षसलाइ मांस लगि त्यो * खाएन त्यसले पनि ॥
प्रायश्चित्त छ शास्त्रमा थरि-थरी * हत्या ठुलो पापको ।
बाटो छैन कृतघ्न व्यक्तिहरुको * हे भूप ! उद्धारको ॥३६॥

खोजी प्वाँख र हाड़ आदि बकको * सम्पूर्ण जम्मा गरी ।
यौटा श्रेष्ठ चिता तयार सबले * पारी लिए राम्ररी ॥
प्यारो मित्र भनी गईकन दिए * आगो विरूपाक्षले ।
त्यै वेला सुरधेनु, यक्ष दुहिता * आएर संयोगले ॥३७॥
जाँदा त्यै पथबाट फींज मुखको * सोही चितामा चुह्यो ।
त्यस्ले ती बकराजलाइ सहसा * जीवित् गराईदियो ॥
भेटथे बकले सखासित गई * अत्यन्त आनन्दले ।
राखे आदरसाथ मित्रकन ती * राजा विरूपाक्षले ॥३८॥
आए श्री सुरराज भूपतिकहाँ * भेट्छु भनी त्यै दिन ।
राखी आसनमा गरे नृपतिले * सम्मान औ पूजन ॥
बोले श्री सुरराज, जीवित भए * तिम्रा सखा यी बक ।
लाग्यो हर्ष मलाइ यो बखतमा * हे शत्रु-संहारक ! ॥३९॥
लागे ती बकराज भन्न खुशिले * वार्ता सुनी इन्द्रको ।
बस्थें स्वर्गमहाँ म नाम पहिले- * को 'सत्यधर्मा' थियो ॥
ब्रह्माको पहिले अनादर गरें * मैले सभामा जब ।
तिन्ले श्राप दिई मिल्यो बक जुनी * पूरा भयो त्यो अब ॥४०
बस्छू स्वर्ग गएर फेरि अघि झैं * कल्याण मेरो भयो ।
मेरै कारणले मरे द्विज भनी * चिन्ता मलाई छ जो ॥
सोही कारणले दिनोस हजुरले * यी विप्रको जीवन ।
गर्दैनन्न यिनले कुकर्म अघि झैं * भन्दैछ मेरो मन ॥४१॥
तिन्को बात सुनेर स्वर्गपतिले * आनन्द मानीकन ।
छर्की अमृत अस्थिमा दिनुभयो * ती विप्रको जीवन ॥
भेटी गौतमलाइ स्वर्गपुरिमा * श्री सत्यधर्मा गए ।
राजन् ! ब्रह्मसभासमहाँ ति अघि झैं * सानन्द बस्ता भए ॥४२॥

पापी गौतमचाहिं फेरि अघिको * त्यै ग्राममा फर्किए ।
शूद्रा स्त्रीतिरबाट सन्ततिहरू * ती विप्रका जन्मिए ॥
भोगे दुःखहरू परी नरकमा * त्यो पापले बेसरी ।
जान्नन् दुष्ट कुकर्मका वश परी * संसार पारी तरी ॥४३॥
मैले नारदबाट यो शुभ कथा * जस्तो सुनेको थिएँ ।
तिम्रो प्रश्न सुनेर हे नरपते ! * त्यस्तै सुनाइ दिएँ ॥
सोही कारणले नगर्नु जनले * मैत्री कृतघ्नीसित ।
बिर्सन्छन् उपकारका गुण तथा * आफ्नू गरेको हित ॥४४
कस्तै सज्जनले गरुन् हित तथा * कल्याण तिन्को तर ।
गर्छन् घात अवश्य मित्रसंग ती * पाए भने औसर ॥
जो पापी र कृतघ्न, दुर्जन, सखा * द्रोही, कुलांगार छन् ।
लज्जाहीन मनुष्यलाइ नृपते * सत्पात्रले त्यादछन् ॥४५
अर्काको उपकार झैं अरु ठुलो * सद्धर्म देख्दैन जो ।
त्यस्ता मानिसलाइ विज्ञ जनले * मान्नू सखा योग्य हो ॥
यो आख्यान समस्त धर्म-सुतले * श्री भीष्मद्वारा सुनी ।
थाले सोध्न कथा पुराणहरुको * सद्धर्म चर्चा तिनी ४६॥

विचारपूर्वक कार्य गर्ने र कल्याणको इच्छा हुने पुरुषको कर्तव्यको विषयमा विविध उदाहरण

मर्दा स्त्री र सुपुत्र, बान्धव पिता * सर्वस्व नै नाशिंदा ।
गर्छन् शोक मनुष्यले थरि-थरी * आपत्तिमा गाड़िंदा ॥
चिन्ता शोक, दुवै निवारण हुने * कुन् युक्ति वा बुद्धि हो ।
त्यस्को वर्णन गर्नुहोस् हजूरले * कर्तव्य सुन्छु म त्यो ॥४७
तिनको प्रश्न सुनी पितामहजिले * भन्नूभयो सादर ।
गर्नू पर्छ कठोर कार्य जनले * सोचेर चारैतिर ॥

छोरा उत्तम सेनजित् नृपतिको * चेला नपुग्दै मऱ्यो ।
सम्झी त्यो सुतलाइ शोक मनमा * ती भूपतीको थियो ॥४८
देखी विह्वल भूपलाइ बहुतै * ज्ञानी कुनै ब्राह्मण ।
थाले नश्वर देहको विषयमा * आएर सम्झाउन ॥
मेरो छैन कुनै र भिन्न अरुको * निम्ती म छु लोकमा ।
राख्दैनन् ममता ममाथि, म पनी * राख्दीनँ क्वै जीवमा॥४९
मेरै देह तथा समस्त पृथिवी * आफ्नू भनी ठान्दिनँ ।
मेरा यी नभएपछी म अरुका * हुन् वस्तु यी भन्दिनँ ॥
सोही कारणले हुँदैन मनमा * केही कुराको दुख ।
गर्नोस् धारण वृत्ति यै हजुरले *मिल्नेछ शान्ती सुख॥५०
गर्नू हुन्छ हजूर शोक अहिले * सत्-पुत्रको मृत्युमा ।
घुम्छन् चक्रसमान दुःख-सुख यी * हे भूपती लोकमा ॥
केह्ले हुन्छ सुखी मनुष्य कहिले * आत्तिन्छ संकष्टले ।
तिम्रो दुःख रहन्न यो स्थिर बनी * हुन्छौ सुखी कालले ॥५१
ज्ञानी ब्राह्मणको सुने नृपतिले * यस्तो सुशिक्षा जब ।
शान्ती प्राप्त भयो र दुःख अघिको* बिर्से तुरुन्तै सब ॥
राजन् ! भन्छु कथा यसै विषयको * अर्को म यौटा सुन ।
स्वाध्यायी र गुणी, सुशील पहिले * कोही थिए ब्राह्मण ॥५२
'मेधावी' द्विजका थिए सुत पनी * त्यो नाम जस्तै गुणी ।
लागे सोध्न गई पितासित दुवै * पाऊ समाई तिनी ॥
आयु क्षीण भएर तीव्र गतिले * देख्छन् मरेका तर ।
गर्दैनन् किन यत्न मानिसहरू * उद्धारको खातिर ॥५३॥
के गर्दा हित हुन्छ धीर जनको * कर्तव्य कुन् श्रेष्ठ हो ?
बाबा, भन्नुहवस् मलाइ अहिले * सुन्ने इरादा छ त्यो ॥

लागे ब्राह्मण भन्न, प्रश्न सुनि त्यो* सत्पात्र छोरासित ।
गर्नू उत्तम हो सदैव जनले * प्राणीहरूको हित ॥५४
चर्ने घाँस गएर जङ्गलमहाँ * बाख्रा र भेड़ाकन ।
पक्रन्छन् जसरी गएर सहसा * व्याघ्रादिले तिन्कन ॥
संसारी सुखमा डुबी जनहरू * भुल्दा त्यही चाले ।
आई श्वास्स लिएर जान्छ बलले * पक्री स्वयं कालले ॥५५॥
सोही कारणले सुकाम जति हो * वेला छँदैमा गर ।
लैजाला नत मृत्युले नसुनि क्यै * तानेर आफूतिर ॥
भोलीको शुभ कार्य गर्नु छ जती * त्यो आज सिध्याउनू ।
क्यै वेलापछि गर्नको मन भए * तत्काल त्यो गर्दिनू ॥५६
तिम्रा छन् शुभ कार्य आज अपुरा* भन्दैन त्यो मृत्युले ।
बाबू ! जान्न कसैले कुन् बखतमा* लैजान्छ त्यो कालले ॥
स्त्री छोराहरुका निमित्त धन जो * संसारमा जोर्दछन् ।
तिन्कै निम्ति कुकर्म वा असल नै * नै उद्योग जो गर्दछन् ५७
निद्राका मृगलाई जुन् किसिमले * लैजान्छ व्याघ्रादिले ।
त्यस्तालाइ घिसार्छ आइ सहसा * त्यै चालले कालले ॥
बाबू ! मृत्यु तथा शुभाशुभ सबै * यै देहमा छन् स्थित ।
मोहित् मृत्यु अँगाल्छ, सज्जनहरू * सत्कर्मले अमृत ॥५८
शिक्षा यै रितका दिए अरु पनी * आफ्ना पिताले जब ।
त्यस्को पालनले भए द्विज सुखी * आसक्ति त्यागी सब ॥
सोधे धर्म-कुमाले सुनिसकी * शिक्षाहरू भीष्मको ।
भिन्ना-भिन्न स्वरूप चार युगमा* देखिन्द जो धर्मको ॥५९
यौटा मानिस गर्छ उत्तम बुझी * जुन् धर्मको पालन ।
अर्कोले त्यही धर्म त्यागदछ ठूलो * दुष्कर्म ठानीकन ॥

के गर्दा हित हुन्छ औ सुजनको * कर्तव्य कुन् श्रेष्ठ हो ।
पाऊँ सुन्न गरी निराकरण त्यो * सद्धर्मको हे प्रभो ! ॥६०
आज्ञा गर्नुभयो पितामहजिले * क्यै बेर सोचीकन ।
राजन् ! धर्म प्रधान यै विषयको * आख्यान भन्छु सुन ॥
योटा 'जाँजलि'नामका अघि थिए * ज्ञानी कुनै ब्राह्मण ।
लागे ती तप गर्न सिन्धु-तटमा * बाँधेर पद्मासन ॥६१॥
तिनको केशमहाँ निकै दिनपछी * लाए चराले गुँड ।
त्यो जानेर पनी सुविज्ञ मुनिले * वास्ता गरेनन् सुन ॥
वेला प्राप्त भई चरा युगलका * अण्डा र बच्चा भए ॥
बच्चा जाँजलिकै जटाबिच रही * क्यै कालमा हुर्किए ॥६२



जाँजली ब्राह्मणको तपस्या

सिद्धि प्राप्त भएछ घोर तपको * भन्ने विचारीकन ।
थाले डुल्न अनेक स्थानहरूमा * ती जाँजली ब्राह्मण ॥

गर्थे वर्णन ती कठोर तपको * आफ्नू अहंकारले ।
यौटा सज्जनले तिनीसित भने * सम्झाउँदै प्रेमले ॥६३॥
गर्दैछौ किन व्यर्थ वर्णन तिमी * हे विप्र ! सत्कर्मको ।
छैनौ श्रेष्ठ तिमी तुलाधरसरी * ज्ञाता सबै धर्मको ॥
जाऊ भेट्न वरू प्रसन्न मनले * तिन्लाइ वाराणसी ।
तिन्को बात सुनी तुलाधरकहाँ * जाँदा भए जाँजली॥६४॥
हे राजन् ! बनियाँकहाँ द्विज पुगे * सानन्द कोही दिन ।
राखी आसनमा प्रसन्न मनले * तिन्को गरे पूजन ॥
लागे भन्न मुने ! कृतार्थ म भएँ * पाएर यो दर्शन ।
पाल्नुभो कति कामले घरमहाँ * मेरो स्वयं सज्जन ! ॥६५
सेवा गर्न तयार छु हजुरले * आफ्नो बुझी सेवक !
आज्ञा गर्नुहवस् म पूर्ण गरूँला हे * हे धर्मका रक्षक !
लागे जाँजलि भन्न ती वणिकले * बिन्ती गरेको सुनी ।
आएँ भेट्न यहाँ तुलाधर ठुला * छौ रे तपस्वी भनी ॥६६
किन्नू-बेच्नु सुकार्य यो वणिकको * देख्छु गरेको वरू ।
गर्छौ रे तप भन्छन् किन झुटो * व्यर्थै नजान्नेहरू ॥
लागे भन्न बुझाउँदै वणिकले * सत्पात्र हे ब्राह्मण !
जस्को केशमहाँ चराहरू बसी * हुर्के लगाई गुँड ॥६७॥
त्यस्ता सज्जनको मिल्यो घर बसी * सौभाग्यले दर्शन ।
साह्रै छक्क परे कुरा वणिकको * त्यस्तो सुनी ब्राह्मण ॥
लागे ब्राह्मण भन्न--श्रेष्ठ तपको * जान्यौ कुरा के गरी ?
तिन्को बात सुनी भने वणिकले * हाँसेर सोही घरी ॥६८॥
आमाको र पिताजीको द्विजपते * सेवा सदा गर्दछु ।
थामी धर्म जहानलाइ घरका * आनन्दले पाल्दछु ॥

व्यर्थै द्रोह गरी कुनै सुजनको * गर्दीनँ निन्दा खति ।
हे ब्रह्मन् ! उपकार गर्दछु बरू * मैले सकेको जति ॥६९॥
मैले देख्छु समान यो पृथिविको * माटो तथा काञ्चन ।
रोगी, दुर्बल वृद्ध झैं विषयमा * लम्कन्न मेरो मन ॥
गर्दैनन् मन वा क्रिया वचनले * निन्दा-स्तुति द्वेष जो ।
जस्मा छैन विकार भोग-सुखको * ब्रह्मज्ञ त्यै श्रेष्ठ हो॥७०॥
यौटै ब्रह्मस्वरूप व्यापक सदा * छन् ती सबैमा भनी ।
हत्या गर्दिनँ जीवको म कहिले * यज्ञादि गर्दा पनी ॥
निर्दोषी पशुलाइ यज्ञहरूमा * काटेर जो होम्दछन् ।
सिद्धि प्राप्त हुँदैन ती नरकमा * त्यो पापले पर्दछन् ॥७१॥
खेती उत्तम हो भनी जनहरू * गर्छन् खुशीले तर ।
दिन्छन् जो पशुलाई कष्ट तिनिले * त्यो वृत्तिको खातिर ॥
हत्या हुन्छ अनेक जीवहरूको * भन्ने विचारीकन ।
त्यस्लाई पनि श्रेष्ठ मान्दिनँ मुने ! * मैले त्यसै कारण ॥७२॥
गर्छु मानस-यज्ञ दूध, घृतको * नै आहुती दीकन ।
गर्दछु त्यहि हेतुले वणिकको * यो वृत्तिको पालन ॥
आफ्नू यो व्रतले त्रिलोकभरिको * सारा कुरा जान्दछु ।
जान्नू त्यो तपको कुरा हजुरको * आश्चर्य के मान्दछु ॥७३
यस्तो विन्ति बुझाइ ती वणिकले * शिक्षा दिएको सुनी ।
शंका बढ्न गएर चित्त नबुझी * भन्छन् तपस्वी मुनी ॥
नाना धर्म-सुकर्म यज्ञहरु जो * हुन्छन् सदा लोकमा ।
त्यस्को धूम उडेर मिल्दछ जसै * सम्पूर्ण आकाशमा ॥७४॥
पानी पर्छ बनेर मेघ त्यहि नै * पृथ्वीभरीमा जब ।
पैदा हुन्छ थरी-थरी बखतमा * अन्नादि त्यस्ले सब ॥

हुन्नन् पूर्ण बिना-बली मख कुनै * षट्शास्त्र यो भन्दछन् ।
सोही जारण यज्ञमा पशु-बली * जान्नेहरू गर्दछन् ॥७५॥
तिम्रा बातहरू तुलाधर सबै * मैले पत्याऊँ भने ।
सारा कर्म विनाश हुन्छ, कसरी * हो धर्म रक्षा हुने ?
कुन् हो यज्ञ ठुलो, विना बलि दिई * पूरा हुने लौ भन ।
तिन्को प्रश्न सुनी भने वणिकले * फेरी बुझाईकन ॥७६॥
आत्मा रूप सुतीर्थमा सुख दिने * सत्यस्वरूपी सर ।
त्यस्मा स्नान गरेर नाम शिवको * जो जप्तछन् सादर ॥
गर्ली चञ्चल वृत्तिको बलि दिई * हे विप्र ! जो यज्ञ त्यो ।
गर्ने उत्तम यज्ञकर्म पहिलो * मानीस त्यै श्रेष्ठ हो ॥७७
होम्छन् गो-घृत, दुग्ध आदि मखमा* देवांश जानीकन ।
गर्छन् धर्ममहाँ रहेर स्थिर जो * गोविन्दको चिन्तन ॥
पानी शुद्ध भएर वर्षण हुने * हो यज्ञ त्यो मध्यम ।
रक्षा जीवनको हुने फल भने * त्यस्को छ झन् उत्तम७८
जस्ले गर्दछ यज्ञ क्षुद्र पशुको * हत्या गरी लोकमा ।
पानी अन्न बढाउने गरि सफा * बर्सन्न त्यो भूमिमा ॥
गर्दैनन् लिइ भाग देवगणले * त्यो होमको भोजन ।
सोही कारण भन्दछन् अधम हो * त्यो यज्ञ हे ब्राह्मण॥७९॥
यी तीनै थरी यज्ञ शास्त्र, श्रुतिले * राम्रो भने तापनी ।
गर्छन् उत्तम यज्ञ विज्ञ जनले * कर्तव्य हो यो भनी ॥
हे ब्रह्मन् ! शशिवंशका नहुषजी * राजा प्रतापी थिए ।
तिन्लाइ ऋषिवर्गले र यतिले * आएर भन्दा भए ॥८०
गाईको र प्रजापती वृषभको * हत्या गर्‍यो भूपति !
हामीलाइ व्यथा भयो मनमहाँ * त्यो पाप सम्झी अति ।

राजालाइ यती भनेर सबले * सै भाग पारीकन ।
सुम्पे रोग-स्वरूप पाप तनमा * जीवादिको त्यै क्षण॥८१
गर्दैनौं हवनादि शुद्ध चरुको * तिम्रो कुनै यज्ञमा ।
तिम्रो कीर्ति हुनेछ नाश नृपते ! * पापी भनी लोकमा ॥
राजालाइ यती भनेर मनमा * तिन्ले विचारे जब ।
जाने सत्य कुरा प्रभाव तपको * ठूलो हुनाले सब ॥८२॥
लाग्यो श्राप नरेशलाइ तर त्यो * अज्ञानको हो भनी ।
आशीर्वाद दिई प्रसन्न मनले * फर्के तपस्वी मुनी ॥
मेरा पूर्वजले गरे जति सबै * मैले नगर्नै किन ?
जस्ले गर्छ विचार यो किसिमले * हो मूर्ख त्यो दुर्जन ॥८३
ब्रह्मन् ! वेद; पुराण शास्त्रहरुले * जुन् धर्म हो भन्दछन् ।
सोही उत्तम धर्म पालन गरी * ज्ञानीहरू बस्तछन् ॥
गर्दा कार्य कुनै ठुलो भय हुने * कल्याणको खातिर ।
गर्नु पर्छ विचार विज्ञ जनले * राम्रो तथा दुष्कर ॥८४
भन्दैछु इतिहास यै विषयको * सुन्नूहवस् ब्राह्मण !
ज्ञानी गौतम नामका द्विज थिए * निष्पाप और सज्जन ॥
हे राजन् ! चिरकारी नामक थिए * छोरा तिनै विप्रका ।
गर्थे कार्य विचारपूर्वक तिनी * राम्रा र कल्याणका ॥८५
त्यो बानी चिरकारिको सब जना * राम्रो गरी जान्दथे ।
सोही कारण मूर्ख ब्राह्मण भनी * हेलाँ गरी हाँस्तथे ॥
पत्नी गौतमकी थिइन् गुणवती * राम्री अहिल्या सती ।
देखी सुन्दर रूप मोहित भए * श्रीइन्द्र हे सद्मति ॥८६॥
ज्ञानी गौतमजी बटुल्न समिधा * वन्मा गएका थिए ।
तिन्को रूप लिएर आश्रममहाँ * श्रीइन्द्र पुग्दा भए ॥

थाले फर्कन ती समागम गरी * साध्वी अहिल्यासित ।
भेटे गौतमले र कारण बुझी * साह्रै भए क्रोधित ॥८७



चिरकारी र उसका माता-पिता

हे पापी, सुरराज ! आज तिमिले * ऐल्हे गऱ्यौ कर्म जुन् ।
त्यस्ले श्राप म दिन्छु देहभरिमा * हज्जार योनी हउन् ॥
छोरो श्री चिरकारिलाइ रिसले * भन्छन् अहिल्या-पति ।
बाबू ! यस्कन काट झट्ट मनमा * शंका नमानी रती ॥८८
आज्ञा गौतमको सुनेर करमा * तर्वार तीखो लिई ।
आमा काट्न भनी पसे घरमहाँ * ती विप्र दुःखी बनी ॥
थाले गर्न विचार आज जननी * निर्दोष छिन् तापनी ।
माताको वध गर्छु निर्भय भई * आज्ञा पिताको भनी॥८९
गर्नू पर्छ पिताजिको हुकुमको * मैले सदा पालन ।
गर्छन् योग्य पिता सबै तरहले * सन्तानको रक्षण ॥

आशीर्वाद दिने सदा हित हुने * शिक्षा दिने जीवन ।
बाबूको कसरी गरौं र अहिले * आज्ञा म उल्लंघन ॥९०
छन् मेरी जननी सबै तरहले * निर्दोष साध्वी, सती ।
तिन्लाई म भएर पुत्र कसरी * मारौं बनी दुर्मति ॥
आमाले शिशुकालमा दुख सही * गर्छिन् ठुलो चाकरी ।
हुन्छन् पुत्र सहायहीन, टुहुरा * माता मरेका घरी ॥९१
छोरो वृद्ध भए पनी घरमहाँ * आमा भए जीवित ।
देख्छिन् ती सुतलाइ वर्ष दुइको * जस्तो तथा रक्षित ॥
नारीको वध गर्नु पाप छ ठुलो * त्यस्माथि माता यि हुन् ।
माताको वधले हुनेछ कसरी * उद्धार मेरो त झन् ॥९२
गर्थे ती चिरकारि तर्क मनमा * यस्तै अनेकौं यता ।
थाले गर्न विचार गौतम पनी * सन्ताप मानी उता ॥
नारीको वध गर्न मूर्खसरि जो * आज्ञा अहीले दिएँ ।
मैले पाप ठुलो विचार नगरी * यो व्यर्थ बोक्ने भएँ ॥९३
ढीलो त्यो चिरकारि गर्दछ सदा * जे काम गर्दा पनी ।
सोही कारण छन् अझैतक पनी * ज्यूँदै दुखी भामिनी ॥
माताको वध गर्न क्रोधित हुँदा * आज्ञा दिएथें तर ।
हुन्थ्यो सार्थक नाम आज सुतले * पारीदिए सुन्दर ॥९४॥
ढीलोको चिरकारिलाइ अघि जो * बानी परेको थियो ।
माताको वधमा पनी त्यहि ढिलो * आएर रोकी दियो ॥
आए गौतम पुत्रको नजिकमा * सन्ताप मानी जब ।
फ्याँकी अस्त्र त्यहीं परे चरणमा * छोरा मुनीका तब ॥९५॥
देखी जीवित पत्निलाइ कुटिमा * अत्यन्त खूशी भए ।
छोराको शिरमा सुँघेर मुनिले * आशीष धेरै दिए ॥

गर्ने काम विचारपूर्वक ढिलो * छन् विज्ञ जो सज्जन ।
त्यस्ताको इतिहास गौतमजिले * धेरै सुनाईकन ॥९६॥
छोरालाइ भने—तिमीहरू दुवै * निर्दोष छौ हे सुत !
दोषी हो त्यही क्रोध जो अधि गरें* मैले नराम्रोसित ॥
आजै यो चिरकारि नाम हुनगो * राम्रो गरी सार्थक ।
दिन्छु आशिष दीर्घ जीवन मिलोस् * हे धर्मका रक्षक ! ॥९७॥
हाम्रो धर्म र पापबाट तिमिले * आफ्नू सुरक्षा गऱ्यौ ।
गर्दा कार्य विचारपूर्वक ठुलो * सन्ताप मेरो हऱ्यौ ॥
जस्तो काम भए पनी बखतभा * सोचेर जो गर्दछन् ।
आशङ्का र विपत्तिको भय स्वयं * तिन्का सबै टर्दछन् ॥९८
रोक्नू अञ्चल चित्त, उत्तर दिनू * सद्धर्मका प्रश्नको ।
गर्नू आदर वृद्ध, विज्ञ जनको * सत्संग सत्पात्रको ॥
यस्ता कार्यमहाँ नगर्नु जनले * चाँडो कहीले पनी ।
शिक्षा गौतमले दिए अरू पनी * यस्तै, दयालू बनी ॥९९

खररूप बली र इन्द्रको संवाद :—

सोधे धर्म-कुमारले विनयले * श्री भीष्म ज्ञानीसित ।
राज्य भ्रष्ट हुने नरेशहरु छन् * जो शोकले दुःखित ॥
तिन्लाई सुख हुन्छ आचरण कुन् * कस्तो गरी लोकमा ।
लक्ष्मी प्राप्त हुने उपाय छ अरू * कुन् श्रेष्ठ संसारमा ॥५००
संपत्ति स्थिर हुन्छ नित्य कसरी * नाशिन्छ कुन् पापले ।
यस्तो प्रश्न सुनेर धर्म-सुतको * भन्नू भयो भीष्मले ॥
भन्छु एक कथा म विज्ञ जनले * पैल्हे भनेको सुन ।
सोधेथे सुरराजले विधिकहाँ * पौंचेर कोही दिन ॥१॥

जस्को कीर्ति ठुलो तिनै भुवनमा * फैलीरहेको थियो ।
खोजे तो बलिराजलाइ तर क्यै * पत्ता नलाग्ने भयो ॥
काहाँ छन् अहिले बताउनुहवस् * भेटछु भनेथे जब ।
भन्नूभो विधिले कुरा सुनिसकी * हाँ मेर हे वासव ! ॥२॥
जाऊ जङ्गलमा ठुलो पशु कुनै * देख्यौ तिमीले भने ।
सोही हुन् बलिराज चिन्नु तिमिले * सत्कीर्ति ठूलो हुने ॥
ब्राह्माको सुनि त्यो कुरा सुरपती * आनन्दले फर्किए ।
खोज्दै ती बलिलाइ एक वनमा * पौंचेर भेट्ता भए ॥३॥
राजन् ! गर्दभ रूप दैत्यपतिको * देखी ठुलो दुर्गति ।
सोधे-के गरि नाशियो यश तथा * साम्राज्य त्यो सम्पति ॥
खान्छौ घाँस तिमी बनेर गदहा * राजा बली ! के गरी ।
मान्छौ के सुख दुःख, दुस्थितिमहाँ* आएर बस्नू परी ॥४॥
खाँदा हौ तिमीले चुटाइ दिनहूँ * यो रूपमा हे बली !
सम्झन्दा पनि हौ अवश्य अघिको * भोगादि त्यो झल्झली ॥
तिम्रो छत्र-ध्वजा र चामर पनी * मैले यहाँ देख्दिन ।
आफ्नू यो स्थितिमा तिमी सुखठुलो* वा दुःख मान्छौ मन॥५
लागे भन्न बली कुरा सुनिसकी * सम्पूर्ण देवेन्द्रको ।
गर्छौ बात तिमी वृथा किन बढी * हेपेर आक्षेपको ॥
भोगें पुण्य ठुलो भएर अघिको * धेरै थरीको सुख ।
भोगदैछु फल कर्मको खर बनी * हे इन्द्र ! मैले दुख ॥६॥
त्यो बेला मनमा थियो सुख तथा * आनन्द मेरो जति ।
त्यस्तै यो खररूपमा सुख ठुलो * मान्छु म हे सद्गति !
राम्रो रूप हुने कुरूप अथवा * साहू दरिद्री धनी ।
निर्धो वा बलवान, मूर्ख अथवो * विद्वान होस् दुर्गुणी ॥७

मर्छन् निश्चय कालका वश परी * वेला पुगेका घरी ।
दुःखी हुन्छु अनित्यता म भवको * जानेपछी के गरी ?
जस्तै जन्मनु मर्नु रात-दिन झैं * चल्दो छ संसारमा ।
त्यस्लाई सुख-दुःख मान्छ जन जो* हो मूर्ख त्यो लोकमा ॥८
गर्छौं जे जति गर्व आज स्थिर छन् * यी राज्य-लक्ष्मी भनी ।
बस्तीनन् स्थिर भावले कहिं पनी * डुल्दै रहन्छन् तिनी ॥
जस्तै त्याग गरी मलाइ अहिले * तिम्रो गइन् पासमा ।
त्याग्नेछिन् तिमिलाइ त्यै किसिमले* भन्ने बुझी चित्तमा ॥९॥
अर्कालाइ हुँदैन भन्नु सहसा * क्यै बात बिझ्ने गरी ।
गर्थे बात यता बली, सुरपती * यस्तै अनेकौं थरी ॥
लक्ष्मी आइपुगिन् त्यसै बखतमा * सामू दुवैका जब ।
सोधे इन्द्रजिले बलीसित यिनी * को हुन् बताऊ अब॥१०॥
लागे भन्न बली सुध्याउ तिमि नै * को हुन् यिनो चिन्दिनँ ।
थाले श्री सुरराज सोध्न सुमुखी * को हौ तिमी नै भन ?
लक्ष्मीले सुनी प्रश्न स्वर्गपतिको * क्यै बेर सोची भनिन् ।
हे देवेन्द्र ! मलाइ मानिसहरू *लक्ष्मी,रमा भन्दछन्॥११
सोधे श्री सुरराजले कर दुवै * जोरेर हे सुन्दरी !
त्याग्नूभो बलिका रहेर संगमा * कुन् हेतुले यो घरी ॥
लागिन् भन्न रमा प्रसन्न मनले * बिन्ती सुनी इन्द्रको ।
मेरो उत्तम स्थान सत्य, व्रत औ * सद्धर्म, उद्योग हो ॥१२
यस्को पाल्न गर्दथे बलि सदा * श्रद्धा पुऱ्याईकन ।
गर्थे दान ठुलो, ठुला मखहरू * डाकी गुणी ब्राह्मण ॥
जैल्हेसम्म गरे मुनी र ऋषिको * सत्पात्रको पालन ।
तैल्हेसम्म बसें बलीसित ठुलो * कीर्ति बढाईकन ॥१३॥

थाले ठान्न यिनी तिनै भुवनमा * छ श्रेष्ठ त्यै कारण।
मेरो नै सबले मिलीकन गरुन् * सम्मान ओर पूजन ॥
निन्दा ब्राह्मण वर्गको जब गरे * यिन्ले घमण्डी बनी।
मैले त्यागिदिएँ बनेर गदहा * छन् दुःख भोग्दै यिनी १४
गर्नै उद्यम यत्नपूर्वक सदा * आलस्य त्यागीकन।
अर्काको उपकार शुद्ध मनले * जो गर्दछन् सज्जन ॥
जस्ले बुद्धि पुर्‍याइ सम्पति ठुलो * उद्योगमा लाउँछन्।
तिन्लाई दुख हुन्न वैभव ठुलो * त्यस्बाट ती पाउँछन्॥१५
गर्दैनन् धन खर्च जुन् पुरुषले * सन्तानका निम्तिमा।
तिन्लाई सुख शान्ति हुन्न धनले * कैह्ले पनी चित्तमा ॥
गर्ला जो पुरुषार्थ सत्य पथमा * आफ्नू लगाई मन।
जस्ले गर्छ ठुला पराक्रमहरू * मौका विचारीकन ॥१६॥
त्यै मेरो प्रिय हो म बस्तछु सदा * त्यै व्यक्तिको साथमा।
मेरो दिव्य प्रभावले सुख ठुलो * भोग्नेछ त्यो लोकमा ॥
लक्ष्मीको हितका कुरा सुनिसकी * श्री इन्द्र खूशी भए।
जोरी बाहु दुवै प्रसन्न मनले * बिन्ती चढाई लिए ॥१७॥
हे देवी ! स्थिर भै हजूर रहने * बाटो भए सुन्दर।
आज्ञा गर्नुभए त्यही पथमहाँ * हिंड्ने थिएँ सादर ॥
त्याग्नूभो बलिराजलाइ जसरी * त्यस्तै मलाई पनि।
त्याग्नू हुन्छ भनेर भीति मनमा * मान्छु म हे भामिनी ॥१८
'मेरो उत्तम चार जो चरण छन् * तिन्लाइ राखी लिन।
दिन्छौ स्थान भने कुनै सुरपते ! * सोची विचारीकन ॥
बस्नेछु स्थिररूपले म त्यहिं नै * तिम्रो सुरक्षा गरी।'
लागे श्री सुरराज भन्न खुशिले * तत्काल पाऊ परी ॥१९॥

जस्ले भार त्रिलोकको श्रम गरी * थामी रहिछन् यहाँ ।
पैह्ले पाउ हजूर राखिलिनुहोस् * सोही धरित्रीमहाँ ।
बाँचेका बलवान जन्तुहरु छन् * आधार जस्को लिई ।
दास्रो पाउ जमाउनोस् जलमहाँ * साह्रै दयालु भई ॥२०॥
जस्ले गर्दछ भस्म वस्तु सब औ * यज्ञादिको आहुती ।
तेस्रो पाउ तिनै हुताशन महाँ * राख्नूहवस् हे सती !
साध्वी ! ब्राह्मण, देवता, पितरको * जो गर्दछन् पूजन ।
जस्ले गर्दछ धर्म-कर्म, व्रतको * आनन्दले पालन ॥२१॥
दुःखी, दीन, अनाथ, हीन जनको * रक्षा सदा गर्छ जो ।
तिनको काँधमहाँ चतुर्थ पद यो * राखीलिनू योग्य हो ॥
बस्नूपर्छ हजूरले स्थिर भई * मेरो सुरक्षा गरी ।
लक्ष्मी खुशि भइन् कुरा सुनिसकी* श्रीइन्द्रको त्यो घरी ॥२२
'इच्छा पूर्ण हुनेछ' हे सुरपते ! * मैले दिएँ यो वर ।
आशीर्वाद दिई तिनै स्थलमहाँ * लक्ष्मी भइन् सुस्थिर ॥
छन् मेरा वशमा रमा अब भनी * श्री इन्द्र खुशी भए ।
तिनको हर्षित भाव विज्ञ बलिले * हेरेर जानी लिए ॥२३॥
लागे भन्न-वृथा घमण्ड यसरी * हे इन्द्र ! गर्छौ किन ?
लक्ष्मीले जब त्यागदछिन् समय त्यो* ऐह्ले म भन्छू सुन ॥
मेरो दुःस्थिति नाश हुन्छ जब यो * फिर्नेछ मन्वन्तर ।
भोग्नेछू अघि झैं म स्वर्गपुरिको * साम्राज्य त्यो सुन्दर २४
मेरो कीर्ति बढी रमा वश भई * सम्पत्ति होला स्थिर ।
पक्का हुन्छ नभै रहन्न तिमिले * जे सक्छौ त्यो गर ॥
लक्ष्मी प्राप्त हुने र निश्चय कुरा * त्यस्तो बलीको सुनी ।
थाले श्री बलिलाइ भन्न रिसले * श्रीइन्द्र आगो बनी॥२५

ह्ले पश्चिममा हुनन् उदय ती * श्री सूर्य नारायण ।
क्ष्मी प्राप्त गरेर स्वर्गपुरिमा * बस्छौ तिमी त्यै दिन ॥
दैंछौ बकवाद यो 'खर' बनी * ऐह्ले वृथामा किन ?
रो के हुन सक्छ दुर्वचनले * हानी, तिमी नै भन ॥२६
स्तै बात भनी गए सुरपती * नाना थरी सोच्दछन् ।
यस्मा चित्त लगाइ कार्य हित वा* कल्याणको त्यागदछन् ॥
यस्तो बात भनी गए सुरपती * आनन्दले स्वर्गमा ।
येरै वर्ष रहे बली खर बनी *राजन् ! त्यही स्थानमा२७

युधिष्ठिरको कृष्णविषयक जिज्ञासा निवारण गर्नू :—

सोधे भीष्मजिलाइ धर्मसुतले * सानन्द पाऊ परी ।
उत्पत्ति, स्थिति, नाश औ प्रलयका* कर्ता र धर्ता हरि ॥
सर्व व्यापक, नित्य शुद्ध भगवान् * छन् कृष्ण जो अच्युत ।
तिनूको भन्नुहवस् मलाइ महिमा * हे नाथ ! राम्रोसित॥२८
यस्तो प्रश्न सुनेर धर्म-सुतको * भन्नूभयो भीष्मले ।
जस्तो नारद; व्यासले अघि भने * हे बाबु ! विस्तारले ॥
सोही श्री हरिको अनन्त महिमा * भन्छु म जाने जति ।
ज्ञानी ब्राह्मण जान्दछन् सुमहिमा * संपूर्ण हे भूपति ॥२९॥
जस्को आदि न मध्य,अन्त्यछ कहीं*सम्पूर्ण ब्रह्माण्डमा ।
आत्मा रूप भएर जीवहरूको * जो बस्तछन् देहमा ॥
तिनूले वायु र अग्नि,भूमि जलऔ* आकाश सृष्टी गरी ।
आफू सुत्नुभयो गएर जलमा * आनन्दले श्री हरी ॥३०
तिनूकै चिन्तनले भए पृथिविमा * उत्पन्न संकर्षण ।
तिनूले शेष बनेर भूमि शिरमा * गर्छन् सदा धारण ॥

नाभीबाट तिनै अनन्त प्रभुको * जो पद्म पैदा भयो ।
ब्रह्माजी त्यहि पद्मका उपरमा * बस्नूभएको थियो ॥३१
हे बाबू ! हरिको तमोगुण स्वयं * बढ्दै गएथ्यो जब ।
जन्मेथ्यो 'मधु' नाम उग्र बलियो * यौटा ठुलो दानव ॥
ब्रह्माको हितका निमित्त हरिले * त्यस्लाइ मार्नू भयो ।
ब्रह्माले तप विष्णुको त्यहिं बसी * गर्नू भएको थियो ॥३२॥
जन्मे मानस पुत्र सात विधिका * जेठा मरीची भए ।
कान्छा दक्ष र अंगिरा, पुलह औ * अत्री, क्रतू मानिए ॥
छोरा कश्यप श्री मरीचि ऋषिका * पैदा भए सज्जन ।
कान्छा दक्ष भए प्रजापति ठुलो * तिन्मा हुनाले गुण ॥३३
छोरी तेह्र जना प्रजापतिजिका * पैदा भएका थिए ।
तिन्ले कश्यपलाइ वेद विधिले * छोरी सबै सुम्पिए ॥
कन्या श्रेष्ठ अरू प्रजापतिजिका * पैदा भएका जति ।
तिन्को सोम र धर्मजीसित बिहा * गर्दा भए भूपति ! ॥३४
जेठी ती सबमा थिइन् दिति गुणी * जो पुत्र तिन्का भए ।
विश्वेदेव र साध्य, रुद्र वसु यो * संसारमा फैलिए ॥
श्री आदित्य र देवता अदितिको * छोरा भई जन्मिए ।
तिन्मा वामन रूप श्रीहरि स्वयं * पैदा भएका थिए ॥३५॥
धेरै दानहरू दिएर बलिको * शेखी बढेथ्यो जब ।
तिन्को तोड्न घमण्ड वामन बनी * जानूभयो माधव ॥
पाऊ तीन बढाइ खोसिलिनुभो * साम्राज्य ती दैत्यको ।
त्यसले कष्ट सबै निवारण भयो * राजन् तिनै लोकको ॥३६
प्राणी, स्थावर जङ्गमादि हरिकै * संकल्पद्वारा भए ।
पृथ्वीको पनि सृष्टि तेजमय यो * पूरा गरेकै थिए ॥

उत्पत्ती मुखबाट विप्रहरूको * श्रीकृष्णद्वारा भयो ।
धेरै क्षत्रिय जन्मने प्रभुजिको * बाहु दुवै मानियो ॥३७॥
जन्मेथे दुइ जाँघबाट हरिका * जो वैश्य धेरै थरी ।
पाऊबाट समस्त शूद्रगणका * हुन् सृष्टिकर्ता हरी ॥
ब्रह्मालाइ बनाइ भूतगणको * अध्यक्ष राख्नूभयो ।
गर्नूभो निज चित्तबाट हरिले * सृष्टी विरूपाक्षको ॥३८
उत्पत्ती यमराज औ वरुणको * श्री कृष्णले नै गरे ।
स्वामी इन्द्र गराइ देवगणको * सन्ताप यिन्ले हरे ॥
जुन् योगेश्वर हुन् तिनै भुवनका * उत्पत्तिका कारण ।
सक्ला को तिनिलाइ भन्न कसरी * मानीस साधारण ॥३९॥
हे बाबू ! तिमिले पनी गर सधैं * आराधना कृष्णको ।
इच्छा पूर्ण हुनेछ भ्रान्ति जति हो* जाला सबै चित्तको ॥
सोधे धर्मकुमारले विनयले * शिक्षा सुनी भीष्मको ।
मेरो चित्त हुँदैन शान्त किन हो * सम्झी कुरा युद्धको ॥४०
मान्छन् बन्धु विनाशको मनमनै * संसारले कारण ।
गर्दा आज विचार त्यो विषयमा * आत्तिन्छ मेरो मन ॥
चारै वर्ण तथा तिनै भुवनका * उत्पत्ति कर्ता हरि ।
जन्मे मानिस रूपले पृथिविमा * कुन् हेतु कस्तो परी ॥४१
सुन्दैछू महिमा अनादि प्रभुको * मैले प्रशस्तै तर ।
तिन्को अद्भुत कर्म सुन्दछु अरू* आज्ञा हवस् सुन्दर ॥
यस्तो प्रश्न सुनेर धर्म-सुतको * भन्नूभयो भीष्मले ।
हे बाबू ! अघिको कथा सुन तिमी * भन्छू म आनन्दले ॥४२
जान्थें खेल्न भनी शिकार वनका * पैहे म कोही दिन ।
मार्कण्डेयजिको सुआदर मिली * खूशी भएथ्यो मन ॥

ज्ञानी कश्यपले भने हरिकथा * जस्तो खुशीले त्यहाँ ।
भन्छू सोहि कथा तिमी सुनिरहू * शंका नमानी यहाँ ॥४३॥
पैह्ले जो बलवान दानवहरू * पापी र लोभी भए ।
तिन्ले युद्ध गरेर देवगणको * सम्पत्ति, खोसी लिए ॥
ब्रह्माको परि पाउमा स्तुति गरे * द्यौताहरूले जब ।
भन्नूभो विधिले नमान डर क्यै * हे देवताहो ! अब ॥४४॥
पापी दानव जो सहर्ष अहिले * पातालमा बस्तछन् ।
तिन्लाई सहजै अनन्त प्रभुजी * वाराहले मार्दछन् ॥
होला कष्ट छिटै निवारण भनी * आनन्द मानीकन ।
द्योता शान्त भए सुनेर विधिको * त्यो श्रेष्ठ आश्वासन ४५
पृथ्वीलाइ लग्यो रसातलमहाँ * पापी हिरण्याक्षले ॥
श्री वाहार स्वरूप धारण गरे * राजन् ! यिनै कृष्णले ॥
मारे दानव वीरलाइ यिनिले * पौंचेर पातालमा ।
रक्षा भूमि र देवको पनि गरे * श्रीविष्णुले लोकमा ॥४६
गर्नन् धारण कृष्णले परशुराम् * -को रूप क्यै कालमा ।
गर्नन् दुष्ट अनेक भूपहरूको * संहार संसारमा ॥
यिन्ले रामस्वरूप धारण गरी * पैदा हुनेछन् जब ।
मार्नन् रावण आदि दुष्ट बलिया * धेरै थरी दानव ॥४७॥
ऐह्ले कृष्ण स्वरूप धारण गरी * तिम्रा रही साथमा ।
गर्दैछन् तिमिलाइ मद्दत स्वयं * हे बाबू ! संग्राममा ॥
राजा श्री शिशुपाल कंस सबको * संहार गर्ने यिनी ।
साक्षात् विष्णु-स्वरूप कृष्ण तिमिले* जानीलिनू हुन् भनी॥४८
भूमीका सब भार-रूप नृपती * छन् फैलिएका जति ।
मारी ती सबलाइ यादवहरू * छन् जो ठुलो भूपति ॥

तेन्को युद्ध गराइ आपुसमहाँ * भूभार सारा हरी ।
जानेछन् निज धाम देह त्यजि यी * त्यो काम पूरा गरी ॥४९

श्री नारायण र नारदजीको संवाद—

सोधे धर्म-कुमारले विनयले * श्री भीष्म ज्ञानीसित ।
कस्को ध्यान गरेर हुन्छ कसरी * प्राणीहरूको हित ॥
हुन्छन् मुक्त समस्त जीवहरु यी * कस्को गरी चाकरी ।
कुन् हो उत्तम तत्व लोक-हितको * भन्नूहवस् राम्ररी ।५०॥
यस्तो प्रश्न सुनेर जर्मसुतको * भन्नूभयो भीष्मले ।
सम्झें एक प्रसंग त्यो सुन तिमी * हे बाबु ! आनन्दले ॥
बद्री पर्वतमा कुनै दिन पुगे * देवर्षि डुल्दै जब ।
श्री नारायणको परी चरणमा * विन्ती गरे केशव ॥५१
चारै वेद पुराण शास्त्र जति छन् * हे नाथ ! संसारमा ।
तिनूले वर्णन गर्दछन् हजुरकै * आनन्दका साथमा ॥
गर्नुहुन्छ हजुर नाश सबको * रक्षा तथा पालन ।
कस्को यो तप गर्नुहुन्छ यसरी * कुन् देवको पूजन ॥५२
को छन् श्रेष्ठ हजूरदेखि पनि यो * संसारमा ईश्वर ।
बोल्नूभो मुनिको कुरा सुनिसकी * श्री कृष्ण योगेश्वर ॥
ज्ञानी नारद यो रहस्य तिमिले * सोधी लिएको हुँदा ।
भन्छू गुप्त भए पनी म तिमि भैं * सत्पात्र भेट्टाउँदा ॥५३
नित्य ब्रह्म अखण्ड पूर्ण अज जो *छन् शुद्ध औ‌र चिद्घन ।
तिनूको पूजन गर्दछू म तपमा * आफ्नू लगाई मन ॥
गर्नू कर्म भनेर वेदहरुको * वाणी छ प्राणीकन ।
दिन्छन् त्यो फल कर्मको श्रम बुझी* जस्ले विचारीकन ॥५४

आउन्नन् श्रमले पनी सहज जो * जीवादिको ध्यानमा ।
तिनको गर्न यथार्थ वर्णन मुनी ! * क्यै छैन शक्ती ममा ॥
आविर्भाव गरे तिनै प्रभुजिले * हामी दुवैको मुनि !
तिन्को पूजन गर्दछौं तप ठुलो * कर्तव्य हो यो भनी ॥५५
श्वेतद्वीप छ जो समुद्र तटमा * छन् जो त्यहाँ ईश्वर ।
तिन्को दर्शन गर्दछन् जनहरू * कल्याणको खातिर ॥
त्यस्को दिव्य प्रभावले अमरता * पाएर ज्ञानी जन ।
गर्छन् भोग त्यहाँ अनेक थरिको * आनन्द मानीकन ॥५६
श्री नारायणको सुनी हित कुरा * विन्ती गरे हे प्रभो !
जस्को गर्न यथार्थ वर्णन स्वयं * सक्तीनँ आज्ञा भयो ।
तिन्को दर्शन पाउनन् कसरि लौ * मानीस साधारण ।
शिक्षा पाउँ हजूरबाट म गई * गर्छु त्यहाँ दर्शन ॥५७॥
श्री नारायण बोल्नूभो बुझिसकी * इच्छा मुनीको सब ।
'इच्छापूर्ण हुनेछ हे मुनि ! तिमी * जाऊ खुशीले अब' ॥
ज्ञानी नारदजी बिदा भई हिंडे * आज्ञा प्रभूको सुनी ।
श्वेत द्वीप उडेर योगबलले * तत्काल पौंचे तिनी ॥५८
देखे दिव्य स्वरूपका जनहरू * त्याहाँ भएका जति ।
गर्थे ती शुभकर्म ईश्वरमहाँ * आफ्नू लगाई मति ॥
व्याधिग्रस्त र मृत्युको भय हुने * देखिन्नथे क्वै पनी ।
भेटी ती सबलाइ तारिफ गरे * हुन् धन्य प्राणी भनी॥५९
ज्ञानी नारदका पनी अतिथि हुन् * भन्ने विचारीकन ।
श्रद्धासाथ लगेर आदर गरी * राख्ता भए क्यै दिन ॥
केही काल सहर्ष देवऋषिको * त्यो द्वीपमा नै बित्यो ।
ज्ञानी नारदलाइ एक दिन यो * आकाशवाणी भयो ॥६०

ाधा पर्दछ पुण्य कार्यहरूमा * प्राणीहरूको भनी ।
आफ्नू आश्रममा छिटै अब तिमी * फर्केर जाऊ मुनी !
ठूलो पुण्य भएर सत्पुरुषको * पायौ यहाँ दर्शन ।
भक्तैनन् तिमि झैं प्रभाव नभई * कोही यहाँ आउन ॥६१
आफ्नू चित लगाउला सुख झुटो * त्यागेर जस्ले ममा ।
यस्ला दिव्य शरीर प्राप्त गरि त्यो * आएर यो द्वीपमा ॥
ज्ञानी ब्रह्म, अखण्ड व्यापक ममा * जो लाउनेछन् मन ।
ानैछन् सुखभोग, हुन्न दुख यो * संसारको तिन्कन ॥६२
ज्ञानी नारदले त्यहाँ स्तुति गरे * आकाशवाणी सुनी ।
ाजन् ! दर्शन बिष्णुले दिनभयो * हुन् भक्त मेरो भनी ॥
श्री नारायणलाइ त्यो सब कथा * आएर भन्दा भए ।
आफ्नू आश्रममा प्रसन्न मनले * डुल्दै तिनी फर्किए ॥६

वृत्रासुर शुक्राचार्य संवाद :—

ोधे धर्मकुमारले गरि ठुलो * श्री भीष्मको आदर ।
ाम्रो कीर्ति लडाइँमा विजयले * बढ्दोछ ऐहले तर ॥
शान्ति प्राप्त हुँदैन बन्धुवधको * दुष्कर्म त्यो सम्झँदा ।
जानी कारण आफुलाइ रणको * दुःखी रहन्छु सदा ॥६४॥
कस्तो कर्म गरेर कुन् किसिमले * त्यो पाप हो नाशिने ।
केही युक्ति भए बताउनुहवस् * शान्ती सुबिस्ता हुने ॥
यस्तो प्रश्न सुनेर धर्म-सुतको * भन्नूभयो भीष्मले ।
बाबू ! नाश हुँदैन ताप मनको * त्यो पाप यो शोकले ॥६५
हुन्छन् नष्ट अवश्य दुःख सब यो * वेला पुगेका घरी ।
कैनन् वस्तु कुनै विनाश नहुने * सम्पूर्ण पृथ्वीभरी ॥

दोषी हो धन भन्दछौ तिमि वृथा * आसक्तिको कारण ।
हुन्छन् पूर्ण सुकार्य कुन् धनविना * संसारमा लौ भन ॥६६॥
उद्योगी तिमिहेरु छौ थरि-थरी * गर्दै रही साधना ।
हुन्छौ मोक्ष अवश्य केहि दिनमा * पूरा गरी कामना ॥
मर्छन् निश्चय जन्मने जन सबै * बाँचीरहन्छन् र को ?
जस्को जन्म हुँदैन, मर्छ न त त्यो* जो नित्य औ ब्रह्म हो ६७
हे राजेन्द्र ! क्रियात्म यत्न जनले * जस्तो गरे तापनि ॥
भन्छन् प्राप्ति हुँदैन ब्रह्म सुखको * ज्ञानी तपस्वी मुनि ।
सम्झें एक प्रसङ्ग यै विषयको * पैह्ले भएको सुनि ।
श्री वृत्रासुरको गयो जब सबै * सम्मान, कीर्ति, धन॥६८
खोसे राज्य समस्त देवगणले * संग्राममा गैकन ।
तिन्को कोहि रहन मद्दत दिने * आफ्नू हितैषी जन ॥
बस्थे वृत्र सदा प्रसन्न मनले * त्यस्तो स्थितिमा पनि ।
शुक्राचार्यजिले कुनै दिन गई * सोधे दयालु बनी ॥६९॥
हे वृत्रासुर ! राज्य वैभव गयो * तिम्रो लड़ाइँ परी ।
देख्छु तैपनि छौ प्रसन्न किन हो * निर्लिप्त झैं यो घरी ॥
यस्तो प्रश्न सुनीसकेर गुरुको * बिन्ती गरे वृत्रले ।
जानेको छु प्रभाव सत्य, तपको * मैले त्यही हेतुले ॥७०॥
चिन्ता, शोक वृथा म दुःख-सुखको* खातीर क्यै गर्दिनँ ।
सोही कारणले प्रसन्न छ गुरो ! * मेरो सधैं यो मन ॥
गर्छन् धर्म-अधर्म प्रेरित भई * प्राणीहरू कालले ।
त्यस्को जो फल स्वर्ग वा नरकमा * भोग्छन गई जीवले ॥७१
प्राणीले गरि भोग कर्म-फल ती * बाँकी रहन्छन् जति ।
गर्छन् भोग अनेक योनिहरुमा * जन्मेर सम्पूर्ण ती ॥

चल्छन् जीवहरू विधान विधिको * मानेर संसारमा ।
भोग्छन् दुःखहरू अनेक थरिका * ती स्वर्ग वा नर्कमा ॥७२
प्राणी मर्छ अनित्य जीव जनको * मर्दैन कैल्हे पनी ।
ठान्छन् देह मरेपछी जनहरू * आफैं मरें लौ भनी ॥
घुम्ने चक्रसमान दुःख-सुख त्यो * मिथ्या भए तापनी ।
गर्छन् आस कुबुद्धि त्यै नियमको * स्थायी यही हो भनी॥७३
सोही कारणले सबै विषयमा * निर्लिप्त जस्तो बनी ।
गर्छन् उत्तम कार्य विज्ञ जनले * कर्तव्य हो यो भनी ॥
गर्नेछन् सुख दुःख त्यागिकन जो * अध्यात्मको चिन्तन ।
आत्मज्ञान भएर ब्रह्मपदमा * पुग्छन् तिनै सज्जन ॥७४
यस्तो बात सुनेर दैत्यपतिको * आश्चर्य मानीकन ।
शुक्राचार्यजिले सुध्याउनुभयो * त्यो ज्ञानको कारण ॥
गर्छौं बात भने सुविज्ञ गुरु म्हैं * विज्ञानको, ज्ञानको ।
कस्तो कारणले गरी असुरको * यो देह तिम्रो भयो ॥७५
यस्तो प्रश्न सुनीसकेर गुरुको * बिन्ती गरे वृत्रले ।
मैले जो पहिले गरें तप ठूलो * जित्छ भनी आज्ञाले ॥
गर्थें राज्य सहर्ष स्वर्गभरिको * श्री इन्द्रले त्यो घरी ।
हारे युद्ध र देवताहरु सबै * भागे मदेखी डरी ॥७६
कस्को के स्थिति हुन्छ कुन् बखतमा * जान्दैन कोही पनी ।
भन्छन् 'इन्द्र' मलाइ देवगणले * हुन् वृत्र योद्धा भनी ॥
धेरै सम्पत्ति, राज्य मान, बलको * इच्छा लिई चित्तमा ।
खप्छन् कष्ट ठूलो सुरासुर सबै * प्राणीहरू लोकका ॥७७
इच्छा पूर्ण हुँदैन जे जति कुरा * पाए पनी व्यक्तिको ।
जस्ले गर्छ विचार यो विषयमा * प्राणी त्यही श्रेष्ठ हो ॥

मेरो श्रेष्ठ प्रभावले वशमहाँ * देखें परेका सब ।
थालें भोग्न विलास भोगहरुको * आनन्द मैले जब ॥७८॥
मेरो जो तपको प्रभाव अधिको * अत्यन्त ठूलो थियो ।
त्यो सम्पूर्ण अनेक भोगहरूले * बिस्तार घट्तै गयो ।
इच्छा शक्ति भने बराबर बढी * तानीरहेथ्यो मन ।
मेरो देह तमोगुणी हुन गयो * भोगादिकै कारण ॥७९॥
कैल्हे मर्छ पिता र मिल्दछ सबै * सम्पत्ति चाँडै भनी ।
गर्छन् चिन्तन हे गुरो ! मनमहाँ * स्वास्नी र छोरा पनी ॥
त्यस्को मृत्यु भयो कि सम्पत्ति सबै* दुष्कर्ममा लाउनन् ।
त्यस्ले पाप बढी ठुलो नरकमा * त्यस्लाइ पारीदिनन् ॥८०
सोही कारणले अनित्य सुख वा * आपत्ति पर्दा पनी ।
मान्छु एक समान दुःख-सुख यी * हुन् कष्टदाता भनी ॥
मेरो युद्ध सुरेन्द्रका सँग अघी * चल्दै रहेको घरी ।
पाएँ दर्शन विष्णुको, नत कहाँ * मिल्थे तपस्या गरी ॥८१
गर्नू युद्ध तमोगुणी शरिरले * तिन्को विरोधी बनी ।
ठान्छु उत्तम भक्ति गर्न हरिको * सक्तीनँ आँटे पनी ॥
हुन्छु मुक्त अवश्य दिव्य प्रभुको * पाएपछी दर्शन ।
गर्थे ती गुरु-शिष्य यो किसिमले * वार्ता खुशी भैकन ॥८२
डुल्दै ताहिं सनत्कुमार सहसा * आई पुगेथे जब ।
सोधेथे ऋषिलाइ दैत्य-पतिले * पाऊ समाई तब ॥
मुक्ति प्राप्त हुने उपाय सजिलो * कुन्चाहिं हो हे प्रभो !
आज्ञा गर्नुहवस् मलाइ, मनमा * राखी दया हे विभो॥८३
थाले भन्न सनत्कुमार ऋषिले * बिन्ती सुनी वृत्रको ।
ब्रह्मज्ञानविना हुँदैन कहिले * मुक्ति कुनै व्यक्तिको ॥

पायौ पुण्य ठुलो हुँदा समरमा * श्री विष्णुको दर्शन ।
गर्दैछौ त्यहि पुण्यले अझ तिमी * यो स्वर्गको शासन ॥८४
जस्ले पालन, नाश, सृष्टि सहजै * ब्रह्माण्डको गर्दछन् ।
मुक्ती पाउन पाउमा ऋषि-मुनी * तिन्का गई पर्दछन ॥
भक्ती गर्दछ जो परी चरणमा * हे वृत्र ! ती विष्णुका ।
त्यस्ले सक्छ छिनाल्न बन्धनहरू * संसारका दुःखका ॥८५॥
ब्रह्मज्ञान भएर केहि दिनमा * तिन्कै दयाले गरी ॥
जान्छन् मुक्त भएर भक्तहरू ती * संसार पारी तरी ॥
यो शिक्षा ऋषिको सुनेर हरिको * भक्ती गरे वृत्रले ।
सोधे भीष्मजिलाइ चित्त नबुझी * श्री धर्मका पुत्रले ॥८६



देवेन्द्रद्वारा वृत्रासुरको वध

भक्ती श्री हरिको गऱ्यो खुशि भई * हे नाथ ! जुन् वृत्रले ।
मारे त्यस्कन युद्धमा अघि सरी * कुन् हेतुले इन्द्रले ॥

यस्तो विन्ति सुनी पितामहजिले * भन्नूभयो भूपति !
त्यो वृत्रासुर इन्द्र भैकन बस्यो * सम्पूर्ण द्यौता जिती ॥८७
राज्य भ्रष्ट सुरेन्द्रलाइ शिवले * देखी दयालु बनी ।
आफ्नू तेज दिई पठाउनुभयो * लौ लड्न जाऊ भनी ॥
पौंचे लड्न भनेर इन्द्र रिसले * शक्ती मिली शम्भुको ॥
ठुलो युद्ध पऱ्यो पछी वध गरे * श्रीइन्द्रले वृत्रको ॥८८॥
मारेथे जब वृत्रलाइ त्यसरी * त्यो ब्रह्महत्या भयो ।
थाले ती सुरराज भाग्न डरले * हत्या लखेटतै गयो ॥
ब्रह्माले बुझि इद्रको स्थिति भने * आएर त्यो स्थानमा ।
जाँदैछौ यसरी कहाँ, पछि - पछी * श्रीइन्द्रको साथमा ॥८९॥
छाड़ीदेउ सुरेन्द्रलाइ मनमा * शंका नमानी कन ।
हे हत्या ! वरदान माग अथवा * इच्छा छ जे त्यो भन ॥
हत्याले विधिको सुनीकन कुरा * बिन्ती गरिन् हे प्रभो !
बस्ने स्थान मलाइ बक्सनुहवस् * यौटा कुनै हे विभो ! ९०
हत्याको विधिले सुने जब कुरा * राम्रो तथा निश्छल ।
डाकी चार जना भने रुख तथा * नारी र अग्नी, जल ॥
केही वस्तु बनाइ अग्निकन जो * दिन्नन् भने आहुती ।
कुल्ला वा मलमूत्र आदि जलमा * गर्नेछ जो दुर्मति ॥९१॥
जानी-जानि रजस्वलासित गई * संभोग जो गर्दछन् ।
काट्छन् जो फल-फूलका रुखहरु * यो पाप ती बोक्तछन् ॥
यस्को भाग लगाइ चार, खुशिले * लेओ तिमी चारले ।
दिन्नन् दोष तिमीहरूकन कुनै * मानीस शास्त्रज्ञले ॥९२॥
ब्रह्माको सुनि त्यो कुरा तिनिहरू * अत्यन्त खूशी भए ।
हत्या भाग लगाइ चार सबले * एकेक बाँडी लिए ॥

ब्रह्माको वरदान चार थरिको * ती चारलाई दिए ।
हत्या बोक्नुपरे पनी तर मिली * निष्पाप चारै भए ।।९३।।
गर्भाधान गराउने वर दिईं * सम्पूर्ण नारी जन ।
भोग्छन् पाप रजोवती हुन गई * मैन्हामहाँ तिन् दिन ।।
पानीलाइ समान वस्तुहरुमा * मिल्ने मिलेथ्यो वर ।
त्यस्ले उठ्तछ फींज जो जलमहाँ * हो पापको खातिर ।।९४।।
पार्ने भस्म र शुद्ध वस्तु वर यो * पाए जसै अग्निले ।
धूँवा उठ्तछ अग्निबाट पहिले * त्यै दोष वा पापले ।।
काटे फेरि पह्लाउने वर मिल्यो * वृक्षादिलाई जब ।
त्याग्छन् 'चोप' अझै पनी रुखहरु * त्यो पापले नै सब ।।९५।।
गर्दामा हयमेध स्वर्गपतिले * हत्या नलागोस् भनी ।
गर्दैछन् सुख भोग फेरि अधि झैं * सम्पूर्ण राजा बनी ।।
हे बाबू ! हयमेध एक तिमिले * श्री इन्द्र जस्तै गर ।
छुट्ला पाप सबै, सहायक हुनन् * श्री कृष्ण योगेश्वर ।।९६
त्यो वृत्रासुरको कथा सुनिसकी * भूपाल खुशी भए ।
पाऊ भीष्मजिको मुसारी करले * यो बात सोधीलिए ।।
ज्ञानी शुक्र थिए बने किन गुरु * कुन् हेतुले दैत्यका ।
लिन्थे पक्ष सदैव ती असुरकै * को हुन् पिता वृत्रका ।।९७
यस्तो प्रश्न सुनेर धर्म-सुतको * भन्नूभयो भीष्मले ।
सोध्यौ उत्तम बात यो सुन तिमी * हे भूप ! आनन्दले ।।
हे राजन् ! सब देवतासँग लड़ी * बाधा दिई बेसरी ।
जान्थे लुक्न भनेर दैत्य भृगुकी * पत्नीकहाँ ती डरी ।।९८।।
तिनले पुत्र भनेर दैत्यहरूको * रक्षा गरिन् राम्ररी ।
यौताले हरिलाइ गैकन भने * त्यो बात पाऊ परी ।।

साह्रै कष्ट बुझेर देवगणको * रक्षार्थ श्री विष्णुले ।
आश्रम्मै भृगुपत्निको शिर स्वयं * काट्नुभयो चक्रले ॥९९
छोरा श्री भृगुका महर्षि उशना * निक्कै प्रतापी थिए ।
माताको वधले ति देवगणका * साह्रै विरोधी भए ॥
साटो फेर्न भनी लुकेर तिनिले * थाले तपस्या जब ।
इच्छा ती भृगु-पुत्रको बुझि, निकै * क्रोधितहुनूभो शिव॥६००
त्यो जानी उशना पसे उदरमा * श्री शम्भुको वेगले ।
निस्केथे शिवलिङ्गबाट र भए * श्री शुक्र त्यै हेतुले ॥
तिनको चित्तमहाँ विरोध सुरको * बाँकी रहेको हुँदा ।
लिन्छन् पक्ष हितार्थ दैत्यहरुको * श्री शुक्रले सर्वदा ॥१॥

श्राद्ध गर्ने प्रथा कसरी आरम्भ भयो—

आख्यान त्यो सुनिसकीकन भीष्मलाई ।
सोधे युधिष्ठिरजिले मनमा रमाई ॥
कैल्हे चल्यो कसरि श्राद्ध प्रथा मलाई ।
आज्ञा हवस् हजुरले करुणा जनाई ।२॥

यस्तो प्रश्न सुनेर धर्म-सुतको * भन्नूभयो भीष्मले ।
पैह्लेको इतिहास भन्दछु तिमी * सुन्दै रहू ध्यानले ॥
हे बाबू ! जलमा अदृश्य पृथिवी * पैल्हे भईथिन् जब ।
श्री वाराह स्वरूप धारण गरे * श्री विष्णुजीले तब ॥३
दाह्राले पृथिवी उचालि सहजै * उद्धार गर्नूभयो ।
दाह्रामाथि वराहको अलिकती * माटो र हीलो थियो ॥
त्यस्को पिण्ड बनाइ तीन कुशको * राखी सफा आसन ।
त्यस्माथी दिइ पिण्ड पितृहरुको * गर्नूभयो पूजन ॥४॥

सम्झी पितृहरू सबैकन, छरी * ती पिण्डमाथी तिल ।
पारे तृप्त वराहले दिई स्वयं * ती पितृलाई जल ॥
त्यो वेला नगिचै त्यहाँ जति थिए * ज्ञानो, तपस्वी, मुनी ।
श्री वाराहजिले सबैकन थिए * शिक्षा दयालु बनी ॥५॥
स्रष्टा हूँ म त्रिलोकको र सबको * उत्पत्तिकर्ता पनी ।
थाले चिन्तन गर्न पितृहरूको * पूजा म गर्छु भनी ॥
दाह्राबाट खसे त्यसै समयमा * जो पिण्ड ऐल्हे यहाँ ।
ती हुन् पितृस्वरूप लोकहरूले * जानीलिउन् मनमहाँ॥६
चल्ने नाम मरे पनी पृथिविमा * हुन् ती फलाना भनी ।
दिन्छन् पिण्ड सुपुत्रले यदि भने * कल्याण गर्छन् तिनी ॥
मुक्ति प्राप्त हुँदैन देह त्यजि यो * सानन्द जैल्हे तक ।
आत्मालाइ हुनेछ प्राप्त सहजै * पिण्डादि तैह्ले तक ॥७॥
मिल्छन् ईश्वरमा गएर जब ती * मुक्ती मिलेका घरी ।
पूजा पिण्ड दिइन्छ जो जति सबै * हुन् प्राप्त गर्न हरी ॥
सिन्धूको जल सूर्यका किरणले * तानिन्छ आकाशमा ।
त्यो एकत्र भई पछी समयमा * बर्सन्छ संसारमा ॥८॥
खैंचेको जल त्यो नदेखि जनले * मिथ्या भने झैं गरी ।
भन्छन् यो जल-पिण्ड पितृहरूले * भेट्टाउँछन् के गरी ?
मूर्ख्याइँ नगरेर ईश्वरमहाँ * विश्वास मानीकन ।
जो गर्ला शुभ कर्म हुन्छ त्यहि नै * कल्याणको भाजन ॥९
सोही पुत्र सुपुत्र हुन् बखतमा * श्राद्धादि जो गर्दछन् ।
पाई आशिष पितृको पछि गई * ती स्वर्गमा बस्तछन् ॥
श्री वाराहजिले गरीकन चल्यो * संसारमा यो प्रथा ।
अन्तर्धान हुनूभयो प्रभु त्यहीं * पूरा भयो यो कथा ॥१०

शुकदेवको ज्ञान प्राप्ति :—

राजन् ! भीष्मजिलाइ धर्मसुतले * सानन्द बिन्ती गरे ।
ब्रह्मज्ञान भएर को अघि ठुलो * संसार पारी तरे ॥
छोरा श्री शुकदेव व्यास मुनिका * कोदेखि पैदा भए ।
शिक्षा ब्रह्म र ज्ञानको शिशु छँदै * तिन्लाइ कस्ले दिए ॥११
थाहा छैन मलाई यो विषयमा * हे नाथ ! त्यै कारण ।
इच्छा गर्दछु सुन्नको अब त्यही * गर्नुहवस् वर्णन ॥
यस्तो विन्ति सुनेर धर्मसुतको * जानेर श्रद्धा पनी ।
भन्नूभो अनि श्री पितामहजिले * साह्रै दयालू बनी ॥१२॥
राजन् ! व्यास मुनी समेरु गिरिमा * गर्थे तपस्या बसी ।
तिन्को त्यो तपले गरी हुनुभयो * श्रीशम्भु साह्रै खुशी ॥
मागेथे वरदान पुत्र सुगुणी * पाऊँ म योटा भनी ।
भन्नूभो शिवले मुने ! सुत तिमी * छौ पाउने सद्गुणी ॥१३
त्यस्को कयौ दिनमा लिएर अरणी * गर्दै थिए मन्थन ।
आएकी त्यहिँ अप्सरा गुणवती * देखे घृताचीकन ॥
कामोद्दीपन व्यासजीकन भयो * त्यो दिव्य सौंदर्यले ।
आई झट्ट शुकी बनेर नगिचै * त्यो अप्सरा प्रेमले ॥१४॥
गर्थे मन्थन व्यासले अरणिमै * आफ्नू लगाई मन ।
शान्ति प्राप्त भएन कामतिर नै * थाले तिनी ढल्कन
तिन्को वीर्य पतन् भयो अरणिको * त्यै काष्ठमाथी जब ॥
ज्ञानी श्री शुकदेव, सूर्यसरिका * पैदा भएथे तब ॥१५॥
छोरालाइ गुरु बृहस्पतिकहाँ * आफैं पठाईकन ।
गर्नूभो व्रतबन्ध आदि द्विजको * सत्कर्म सम्पादन ॥

चारै वेद पढेर शास्त्र र समा * -वर्तन् गरी पुत्रको ।
गर्थे पाठ सधैं पिता-सुत बसी * आनन्दले वेदको ॥१६॥



शुकदेवलाई व्यासजीले शिक्षा दिएको

चेला व्यासजिका थिए जनकजी * ज्ञानी ठुला भूपति ।
छोरालाइ भने-तिनै नृपकहाँ * जाऊ तिमी सद्मति ॥
ज्ञानी छन् तिनले अनेक थरिका * देलान् सुशिक्षा जति ।
त्यस्ले प्राप्त हुनेछ ज्ञान सहजै * सप्रन्छ तिम्रो मति ॥१७
पौंचेथे मिथिलापुरी शुक मुनी * आज्ञा पिताको सुनी ।
राखे भूपतिले सुआदर गरी * हुन् ब्रह्मज्ञानी भनी ॥
सोधेथे शुकले जती, नृपतिले * त्यस्को दिए उत्तर ।
पाई ज्ञान अनेक शास्त्रहरुको * फर्केर आए घर ॥१८॥
बाबूलाइ भने समस्त शुकले * चर्चा चल्यो यो भनी ।
गर्थे व्यास सुपुत्रका सँग बसी * सानन्द वेदध्वनी ॥

थाल्यो चल्न हुरी उसै बखतमा * साह्रै ठुलो वेगले ।
सोधेथे शुकदेवले हुरि चल्यो * हे तात ! कुन् हेतुले ॥१९
चेष्टा सुन्दछु वायुको हुन गयो * उत्पत्ति पैह्ले कहाँ ।
छोराको सुनि प्रश्न व्यास मुनिले * भन्नूभयो यो त्यहाँ ॥
जाने मृत्यु भएर मार्ग दुइ छन् * संसारका जीवको ।
योटा सात्विक देवयान हरिको * प्राप्ती हुने श्रेष्ठ हो ॥२०॥
अर्को तामम 'पितृयान' कहिने * हावा छ जो लोकमा ।
चल्छन् यी दुइ वेगले बखतमा * आकाश पातालमा ॥
जो छन् वायु अदृश्य साध्य तिनका* सत्पुत्र हुन् दुर्जय ।
तिन्का पुत्र 'समान' हुन् नरपते !* डुल्ने सधैं निर्भय ॥२१॥
तिन्का पुत्र 'उदान' वायु तिनका * सत्पात्र जो हुन् सुत ।
यिन्को नाम 'अपान' हो जगतको* गर्छन् सदा ती हित ॥
तिन्का 'प्राण' सुपुत्र हुन् तर भए * सन्तानले हीन ती ।
भिन्नाभिन्न छ कर्म वायुहरुको * भन्छु म जाने जति ॥२२
गर्मीबाट र धूपबाट छ स्वयं * उत्पत्ति जुन् वायुको ।
पार्ने बादल छिन्न-भिन्न असिना * हावा पहीलो छ जो ॥
पैह्लो मार्गमहाँ प्रभावित हुने * त्यो श्रेष्ठ हावा हुँदा ।
भन्छन् त्यस्कन लोकले 'प्रवह' हो* त्यो वायुलाई सदा ॥२३॥
जो आकाशमहाँ रहन्छ रसको * मात्रा हुने बेसरी ।
जस्को शक्ति ठुलो छ नेत्र बिजुली * चम्कन्छ पानी परी ॥
ठूलो शब्द हुने र पूर्ण नभमा * हावा छ जो व्यापक ।
दोस्रो 'आवह' नाम वायु त्यही हो * हे शत्रुसंहारक ॥२४॥
जस्ले गर्दछ सोम सूर्य ग्रहको * मौकामहाँ उद्भव ।
भन्छन् वायु 'उदान' जीवन दिने * जस्लाइ जान्ने सब ॥

जस्ले चार समुद्रको जल झिकी * आकाशमा फाल्दछन् ।
तेस्रो 'उद्वह' नाम वायु, भवमा * हे भूप ! विख्यात छन्॥२५
टुक्रा मेघ मिलाइ घोर जल जो * संसारमा पार्दछन् ।
बाक्लो बादल छिन्नभिन्न नभमा * पारेर जो चल्दछन् ॥
जस्ले गर्दछ मान मर्दन ठुला * पार्वतहरूको पनी ।
चौथो 'संवह' नाम वायु सबमा * हुन् प्राणदाता यिनी ॥२६
रूखो भाव लिएर घोर रवले * जो हिंड्छ आकाशमा ।
जस्ले वृक्ष उखेलि फाल्दछ ठुला * साना सबै भूमिमा ॥
जुन् हावा बहँदा भयानक ठुलो * उत्पात देखिन्छ त्यो ।
हावा पञ्चम नामको 'विवह' त्यो * हे भूपती ! श्रेष्ठ हो ॥२७
जस्ले पोषण हुन्छ तेज शशिको * आकाशमा फैलिने ।
माथी-माथि बहन्छ जो जल लिई * हे बाबू ! बर्साउने ॥
पानी बोकि दगुर्छ जो नभभरी * आकाश गङ्गाजिको ।
छैटौं वायु त्यही 'संवह' भनी * जानी लिनु श्रेष्ठ हो॥२८॥
जस्ले स्पर्श नरी, मरेपछि यहाँ * पर्कन्न कोही पनी ।
ज्ञानीलाई दिने सुधारस सधैं * जुन हो दयालु बनी ॥
पाएथे गति दक्ष पुत्रहरुले * जुन वायुको शक्तिले ।
सातौं वायु भए 'परावह' तिनै * विख्यात यै हेतुले ॥२९
आँधी चल्दछ जो ठुलो थरिथरी * निःश्वास हो विष्णुको ।
पढ्नू वेद हुँदैन त्यो बखतमा * बाबू ! अनध्याय हो ॥
यो शिक्षा शुकलाइ दीकन गए * आकाश गङ्गामहाँ ।
डुल्दै नारदजी पुगे शुक थिए * एक्लै बसेका जहाँ ॥३०
पूजा श्री शुकदेवले जब गरे * देवर्षिको सादर ।
सोधे नारदले सहर्ष शुकको * कल्याणका खातिर ॥

बाबू ! जे मनमा छ माग तिमिले * शङ्का नमानीकन ।
मैले प्राप्त गराउँ कुन्न शुभ कुरा * कल्याण गर्ने भन ॥३१
लागे श्री शुकदेव भन्न, मुनिले * आज्ञा भएको सुनी ।
'शिक्षा साधनको म पाउँ सजिलो * कल्याण गर्ने मुनि !'
लागे नारद भन्न—वत्स ! पहिले * ज्ञानी र तत्त्वज्ञले ।
गर्दा प्रश्न सनत्कुमार ऋषिले * भन्नूभयो प्रेमले ॥३२
भन्छु सोहि प्रसंग छैन सजिलो * आँखा अविद्यासरी ।
सिद्धि प्राप्त हुँदैन सत्यसरिको * कस्तै तपस्या गरी ॥
अर्को दुःख हुँदैन रागसरिको * हे वत्स ! संसारमा ।
छैनन् त्याग समानका सुख कुनै * अर्को तिनै लोकमा ॥३३
टाढा बस्नु कुकर्मदेखि र सधैं * सत्कर्ममा मन दिनू ।
गर्नू काम सदैव श्रेष्ठ जन झैं * आसक्ति त्यागी हुनू ॥
यी चारै सुखका र विज्ञ जनका * कल्याणका मार्ग हुन् ।
जस्को चञ्चल वृत्ति हुन्छ दुख ती * धेरै थरी भोग्दछन् ॥३४
सम्झन्छन् सुख-दुःख जुन्न पुरुषले * पैह्ले बितेका सब ।
पाउन्नन्न तिनि धर्म औ यश ठुलो * संसारको वैभव ॥
अर्थाभाव गरी विचार मनमा * चिन्तित् रहे तापनी ।
पाउन्नन् सुख, धर्म, मान, धन औ * दुःखी रहहन्छन् तिनी ॥३५
ब्रह्मज्ञान हुने उपाय सजिलो * मानिन्छ जो लोकमा ।
त्यागनूपर्दछ वासना विषयको * मिथ्या बुझी चित्तमा ॥
पुग्ने ज्ञान मिली परंपदमहाँ * शिक्षा मुनिले दिए ।
ज्ञानी श्री शुकदेवले हृदयमा * त्यसलाई राखी लिए ॥३६
बाबूलाइ भने—म बस्न कुटिमा * गर्दीनँ इच्छा अब ।
आज्ञा बक्सनुहोस् प्रसन्न मनले * त्यागेर जान्छु सब ॥

यस्तो विन्ति गरी, उड़े गरुड़ झैं * आकाशमा वेगले ।
गर्थे तारिफ सिद्ध चारणहरू * देखेर आनन्दले ॥३७॥
केही बेरपछी पुगे शुक जसै * मन्दाकिनी तीरमा ।
गर्थे स्नान अनेक स्त्रीहरु जहाँ * आनन्दका साथमा ॥
ढाकेनन् सबले शरीर डरले * नाङ्गा भए तापनी ।
थाले ती गुणगान गर्न शुकको * हुन् ब्रह्मज्ञानी भनी ॥३८
पुत्र स्नेह बढेर व्यास सहसा * क्यै बेर चिन्तित् भए ।
छोरा झैं लिइ योग आश्रय तिनी * उड्दै, लखेट्तै गए ॥
देखेथे जब अप्सरा सकलले * श्री व्यास ज्ञानीकन ।
मानी लाज डराउँदै लुकि-लुकी * थाले लुगा पैह्रन ॥३९॥
छोरोको बुझि मुक्तता मनमनै *श्री व्यास लज्जित् भए ।
आफूलाइ अनेक कोटि तिनिले * धिक्कार आफैं दिए ॥
बाबू ! पर्ख, नजाउ आज यसरी * भन्दै थिए ती तर ।
योटै 'ब्रह्म' छ हे पिता ! शुकजिले* भन्दै दिए उत्तर ॥४०॥
ब्रह्मीभूत भए जसै शुक मुनी * आकाशको बीचमा ।
थाले गर्न गुणानुवाद सबले * तिन्को तिनै लोकमा ॥
मानी दिक्क असाध्य व्यास त्यहिं नै* क्यै बेर पर्खें जब ।
तिन्लाई दिन ज्ञान त्यै बखतमा * पाल्नूभयो श्रीशिव॥४१॥
भन्नूभो शिवले वृथा किन तिमी * व्यामोहमा पर्दछौ ?
ज्ञानी छौ तिमिले हिताहित सबै * राम्रो गरी, जान्दछौ ॥
मागेथ्यौ तिमीले सुपुत्र अघि जो * ठूलो तपस्या गरी ।
पायौ उत्तम पुत्र, श्री शुकसरी * छैनन् कुनै यो घरी ॥४२॥
जैह्ले सम्म रहन्छ तेज शशि औ * श्री सूर्यको लोकमा ।
तैह्ले सम्म सुकीर्ति हुन्छ शुकको * हे व्यास ! ब्रह्मज्ञमा ॥

गर्नू उत्तम हो गएर कुटिमा * आध्यात्मको चिन्तन ।
छायारूप सुपुत्रको तिमी सधैं * गर्दै रहे दर्शन ॥४३॥



व्यासजीको चिन्तन

ज्ञानी व्यास भए प्रसन्न शिवले * शिक्षा दिएको सुनी ।
थाले आश्रममा बसेर अघिझैं * सानन्द वेदध्वनी ॥
हे राजन् ! तिमिझैं प्रसन्न मनले * सुन्नेछ जो यो कथा ।
त्यस्लाई सुख-शान्ति मिल्छ मनको* जाला अशान्ति व्यथा ४४

श्री सूर्य महिमा

सोधे धर्म-कुमारले सुनिसकी * आख्यान श्री व्यासको ।
सुन्छु आश्रम-धर्म पालन गरी * बस्ने गुणी व्यक्तिको ॥
के गर्दा हित हुन्छ वा अहित कुन् * दुष्कर्मले हो हुने ।
शिक्षा सुन्छु हजूरले दिनुहवस् * कल्याण मेरो हुने ॥४५॥

यस्तो प्रश्न सुनेर धर्मसुतको * भन्नूभयो भीष्मले।
भन्छु नारद-इन्द्रको सुन तिमी * संवाद आनन्दले ॥
भेटे नारदले कुनै दिन पुगी * श्री इन्द्रलाई जब।
थाहा केहि भए नवीन घटना * भन्नूहवस् लौ अब ॥४६
डुल्नू हुन्छ त्रिलोकमा हजुर झैं * ज्ञानी तपस्वीकन।
थाहा हुन्छ सबै कुरा सहजमा * सोधैं त्यसै कारण ॥
तिनको प्रश्न सुनीसकीकन भने * देवर्षिले सादर।
भन्छु एक प्रसंग हे सुरपते ! * सुन्नूहवस् सुन्दर ॥४७
पद्मा नाम पुरी थियो अधि ठुलो * राम्रो कुनै स्थानमा।
बस्थे एक गृहस्थ ब्राह्मण त्यहीं * भागीरथी तीरमा ॥
ज्ञानी, क्रोध विहीन, धर्मपथमा * चल्ने गुणी ब्राह्मण।
गर्थे राम्ररि न्यायपूर्वक तिनी * संतानको पाल्न ॥४८॥
आए विप्र कुनै सुपात्र अतिथी * ती विप्रका गेहमा।
तिन्को मान सके जती गरिसकी * सोधे परी पाउमा ॥
खाने आर्जन पुत्रको मनमहाँ * इच्छा लिई व्यर्थको।
धेरै भाग बितीसक्यो सुखविना * यो श्रेष्ठ आयुष्यको ॥४९
खोज्छु संग्रह गर्न धर्ममय त्यो * कल्याण गर्नै धन।
जुन् सद्धर्म लिएर हुन्छ सजिलो * पाथेयको साधन ॥
बाँध्ने यो भव-सिन्धुलाइ मनमा * इच्छा छ मेरो तर।
ढङ्गा मिल्दछ धर्म-रूप कसरी * जान्नून् उनै ईश्वर ॥५०
भोग्ने वस्तु तथा अनेक थरिका * छन् श्रेष्ठ जो साधन।
मिथ्या जानि त्यता कुनै तरहले * जाँदैन मेरो मन ॥
के गर्दा हित हुन्छ कुन् पथ लिए * कल्याण होला अब।
भन्नोस् विप्र ! कुनै उपाय सजिलो* जाने अशान्ति सब ॥५१

तिन्को बात सुनी तिनै अतिथिले * भन्दा भए ब्राह्मण !
दुःखी छु तिमी झैं, छ यो बखतमा * उद्विग्न मेरो मन ॥
मोक्षद्वार अनेक छन् तर कुनै * यज्ञादिले तर्दछन् ।
वानप्रस्थ र मौनको व्रत लिई * पारी कुनै पुग्दछन् ॥५२



श्रीकृष्णको पाण्डवहरूले पूजा गरेको

कोही युद्धमहाँ मरीकन तरे * कोही विरोधी पना ।
मैले जान्न सकीनँ कुन् पथ लिई * उद्धार होला भनी ।
स्वाध्यायी र गुणी, जितेन्द्रिय तरे * सद्धर्म आधारमा ।
सेवा भाव र सत्य पालन गरी * कोही गए स्वर्गमा ॥५३॥
यौटा नाग छ पद्म नाम कहिले * श्री नैमिषारण्यमा ।
जाऊ भेट्न समस्त सद्गुणहरू * छन् श्रेष्ठ तो नागमा ॥
त्यो शिक्षा द्विजको सुनी अतिथिले * अत्यन्त खुशी भए ।
प्रातःकाल उठेर भेट्दछु भनी * तो नागकाहाँ गए ॥५४

पत्नी मात्र थिइन् सहर्ष तिनिले * तिन्को गरिन् पूजन ।
स्वामी पाल्नुहुनेछ पन्ध्र दिनमा * बस्नूहवहस् ब्राह्मण !
मैल्हा एक जती गएर रविको * तिनले घिसार्छन् रथ ।
बोले ब्राह्मण हे शुभे ! दिन त्यती * हेर्छु म तिन्को पथ॥५५
बस्छु गैकन गौतमी तटमहाँ * ती नाग आए यहाँ ।
जाऊ दर्शन देउ भन्नु तिमिले * मेरो कुटीयामहाँ ॥
यस्तो बात भनी, गई द्विज बसे * बाँधेर पद्मासन ।
थाले श्री हरिलाइ सम्झन, त्यजी * पानी तथा भोजन ॥५६
जो जो नाग थिए त्यहाँ अरु सबै * आएर भन्दा पनी ।
खाएनन् जल-अन्न केहि द्विजले * भोकै म बस्छु भनी ॥
फर्के नागहरू गए जति सबै * सन्ताप मानी घर ।
स्वामी आइपुगे भनी गृहिणिले * ठूलो गरिन् आदर ॥५७
इच्छा ब्राह्मणको विनम्र स्वरमा * बिन्ती गरीथिन जब ।
आए भेट्न भनेर नाग द्विजको * सामू खुशीले तब ॥
ठूलो कष्ट सहेर आउनुभयो * हे विप्र ! कुन् हेतुले ।
जे आज्ञा दिनुहुन्छ त्यो खुशि भई * गर्नेछ यो दासले ॥५८॥
तिन्को नम्र कुरा सुनेर मनमा * आनन्द मानीकन ।
केही बेर गरी विचार मनमा * बोल्दा भए ब्राह्मण ॥
तिम्रो दर्शन गर्न नाग ! बहुतै * इच्छा हुनाले गरी ।
आएँ जे मनमा छ त्यो सुन तिमी * भन्छु सबै राम्ररी ॥५९
मेरो चञ्चलमा चित्तमा विषयको * बाँकी छ जो वासना ।
त्यस्ले पर्दछ विघ्न, गर्दछु जहाँ * मैले जती साधना ॥
पाऊँ उत्तम ज्ञान भोग्नु नपरोस् * मैले कुनै यातना ।
शिक्षा पाउँ म ज्ञानका विषयको * पुग्ने सबै कामना ॥६०॥

सोध्छु एक कुरा मलाइ पहिले * त्यस्को दिनोस् उत्तर ।
के-के देख्नुभयो रहेर रविको * सान्निध्यमा सुन्दर ॥
देख्नुभो घटना कुनै कि मनमा * आश्चर्य लाग्ने त्यहाँ ।
त्यस्को वर्णन सुन्दछु म पहिले * हे नाग भन्नोस् यहाँ ६१
ज्ञानी ब्राह्मणले विनम्र स्वरमा * बिन्ती गरेको सुनी ।
लागे भन्न प्रभाव श्रेष्ठ रविको * देखें त्यहाँ यो भनी ॥
ब्रह्मन् ! स्थानहरू अनेक थरि छन्* आश्चर्य लाग्ने त्यहाँ ।
तिन्को गर्न यथार्थ वर्णन सबै * सक्छु र मैले कहाँ ॥६२॥
हाँगामा रुखका निवास जसरी * पक्षीहरू गर्दछन् ।
त्यस्तै श्री रविका सफा किरणमा * ऋषीहरू बस्तछन् ॥
निस्केका रवि-तेजबाट नभमा * छन् वायु हे विप्र ! जो ।
त्यो देखी बढि देख्न मिल्दछ कहाँ * कुन् बात आश्चर्यको॥६३
प्राणीको हितका निमित्त रवि नै * दिन्छन् बखत्मा जल ।
त्यो भन्दा अरु कुन ठुलो छ मनमा* आश्चर्य लाग्ने स्थल ॥
पानी तान्दछ सूर्यका किरणले * वर्षा गरेको सब ।
त्यो देखी अरु के छ छक्क परिने * भन्नूहवस् लौ अब ? ॥६४
बस्नू हुन्छ अनादि ईश्वर स्वयं * जुन् सूर्यको तेजमा ।
त्योभन्दा हुन सक्छ के अरु ठुलो * आश्चर्य कुन् लोकमा ॥
अर्को जुन् घटना भयो द्विजपते ! * आश्चर्य लाग्ने त्यहाँ
भन्छु सुन्नुहवस् यथार्थ सब त्यो * हे विप्र ! मैले यहाँ । ६५
आए दिव्य प्रभा फिंजाइ रवि झैं * मानीस कोही दिन ।
थाले हेर्न त्यहाँ भए जति सबै * आश्चर्य मानीकन ॥

तिनको तेज मिल्यो बढेर सहसा * श्री सूर्यको तेजमा ।
सोधेथें रविलाइ हे द्विजपते ! * भ्रान्ती हुँदा चित्तमा ॥६६



उञ्छवृत्तिको विषयमा

मेरो विन्ति सुनी प्रसन्न मनले * भन्नूभयो सूर्यले ।
ज्ञानी ब्राह्मण बस्तथे तप ठुलो * ली उञ्छको वृत्तिले ॥
आत्मज्ञान भई सबै विषयको * त्यागे जसै कामना ।
मेरो तेजमहाँ मिलेपछि भयो * पूरा सबै साधना ॥६७॥
देखिन्छन् जति वस्तु लोकभरिमा * सम्पूर्ण मिथ्या भनी ।
गर्नू होस् तप ती गुणी द्विजसरी * ब्रह्मन् ! हजुर्ले पनी ॥
त्यो शिक्षा सुनि नागको द्विज गए * फर्केर आफ्नू घर ।
लागेथे सुख भोग त्यागि खुशिले * ती उञ्छवृत्तितिर ॥६८॥

केही कालपछी गए वनमहाँ * ठूलो तपस्या गरे ।
आत्मज्ञान भएर देह त्यजि ती * संसार पारी तरे ॥
शान्तीपर्व सहर्ष पाठ दिनहूँ * गर्नेछ जो सादर ।
बस्ला देह त्यजेर स्वर्गपुरिमा * आनन्दले त्यो नर ॥६९

इति शान्तिपर्व समाप्त

*



पाण्डवहरूले द्रौपदीलाई सान्त्वना दिएका

# महाभारत अनुशासनपर्व

प्रारम्भः

युधिष्ठिरलाई गौतमीको उदाहरण दिएर भीष्मजीले सान्त्वना दिनु :—

राजन् ! धर्मकुमारको मनमहाँ * बर्ता अशान्ती हुँदा ।
शान्ती प्राप्त हुने उपायहरु नै * खोज्थे तिनी सर्वदा ॥
लागे सोध्न गई पितामहकहाँ * त्यो दुःखका कारण ।
धेरै अर्ति सुनिसकें तर पनी * पाउन्न शान्ती किन ! ॥१
मैले देख्नुपर्‍यो वृथा हजुरको * बाँचेर यो दुर्गति ।
देख्दैनन्न दुख यो सुयोधन मरी * पाए स्वयं सद्‌गति ॥
शय्यामा शरको हजूरकन यो * हे वीर ! देख्नूपरी ।
त्यस्को कारण ठान्दछु मनमनै * मै हूँ भनी यो घरी ॥२॥
यौटा दुष्ट हुँदा सुयोधन, भयो * संहार जो वीरको ।
संम्झेरै सब त्यो अशान्ति कहिल्यै * जाँदैन यो चित्तको ॥
गर्दा बन्धु विनाश यो समरमा * पापी म ठूलो बनें ।
शिक्षा योग्य कुनै मलाइ दिनुहोस् * शान्ती सुविस्ता हुने ॥३
लागे भीष्म बुझाइ भन्न नृपले * बिन्ती गरेको सुनी ।
यौटै पुत्र हुने थिइन् अघि कुनै * श्री गौतम ब्राह्मणी ॥
तिन्को बालक पुत्र त्यो मरिगयो * टोक्ता कुनै सर्पले ।
पक्री सर्प पुर्‍याइ गौतमकहाँ * भन्दो भयो व्याधले ॥४
टोक्ने बालक पुत्रलाइ यहि हो * पापी, दुरात्मा पनी ।
आज्ञा देउ मलाइ मार्दछु छिटै * यस्लाइ हे ब्राह्मणी !

बोलिन् गौतमि पुत्र यो मरिगयो * फर्कन्न फेरि भने ।
व्यर्थै मार भनेर सर्प - वधको * के हेतु दोषी हुने ॥५॥
व्याधा भन्दछ पुत्रको गरिदियो * हत्या यसैले जब ।
भन्छयौ छाडन भनी वृथा किन तिमी*यो मूर्खता लौ अब ॥
गर्छन् शत्रु विनाश सज्जन पनी * संसारमा यत्नले ।
सोही कारण मार्छु यस्कन भनी * लट्ठी लियो व्याधले ॥६
लाग्यो भन्न डराइ सर्प सहसा * देखी नराम्रो स्थिति ।
आज्ञा मान्दछु मृत्युको म त सदा * निर्दोष छु सद्मति ! ॥
मानूँ दोष दिई मलाइ अहिले * हो भूल औ मूर्खता ।
टोक्ने व्यक्ति-विशेषलाइ यसरी * मेरो छ कुन् योग्यता॥७॥
राजन् ! मृत्यु पनी त्यसै बखतमा * आएर भन्दा भए ।
हामी सेवक कालका भनि तिमी * विश्वास मानी लिए ॥
आज्ञा दिन्छु म कालका हुकुमले * यो सर्पलाइ जब ।
यस्ले पालन गर्छ, आफ्नु मनले * के गर्न सक्थ्यो कब ॥८॥
पृथ्वी, अग्नि, नदी, सुरेन्द्र, जलधी* पर्जन्य, हावा, जल ।
भावाभाव र चन्द्र-सूर्य, वसु औ * आकाश, पर्वत, स्थल॥
यिनको जन्म र नाश, पालन स्वयं* गर्नै हुदा कालले ।
दिन्नन् दोष मलाइ काल बलियो * जानी कुनै विज्ञले ॥९॥
चर्चा चल्न गएर तीन थरिमा * संयोगले धर्मको ॥
आए कालस्वरूप ईश्वर पनी * सामू तिनै व्यक्तिको ॥
भन्छन् काल–तिमी विचार गरिल्यौ* राम्रो गरी लुब्धक ।
दोषी छैन म, सर्प, मृत्यु र मऱ्यो * जुन् हेतुले बालक ॥१०॥
भन्छु त्यो सुन कर्म पूर्वजुनिको * जस्को छ जस्तो जति ।
यस्ले गर्दछ प्राप्त त्यै किसिमको * राम्रो नराम्रो गति ॥

हामीलाइ नठान कारण तिमी * यो वालको मृत्युमा ।
जस्तो कर्म गऱ्यो अघी फल त्यही * पाइन्छ यो जन्ममा ॥११

तिन्को बात सुनी प्रसन्न मनले * भन्दी भइन् ब्राह्मणी ।
हे व्याधा ! तिमि छाड़िदेउ अहिले* त्यो सर्पलाई भनी ॥

जानी कर्म प्रधान पुत्र वधको * मान्दिनँ सुतां अब ।
सुन्दा गौतमिको कुरा घर - घरै * फर्की गए ती सब ॥१२॥

सुदर्शनको अतिथि सत्कार :—

भन्छन् भीष्म-दिएँ उदाहरण जो * ती गौतमीको यहाँ ।
मानी कर्म-प्रधान त्याग तिमिले * चिन्ता छ जो मन्महाँ ॥

शान्ती प्राप्त हुने म भन्छु अघिको * आख्यान अर्को सुन ।
अग्नीका सुत श्री सुदर्शन थिए * यौटा गुणी ब्राह्मण ॥१३॥

पत्नी ओघवती सुशील र गुणी * तिन्की थिइन् सुन्दरी ।
दिन्थे अर्ति सदा तिनी अतिथिको * गर्नू भनी चाकरी ॥

गर्थे आफु पनी प्रसन्न मनले * सद्धर्मको पालन ।
हिंड्थिन् मृत्यु अघी-पछी ति द्विजको* अग्नी-परीक्षा लिन॥१४॥

राजन् ! ब्राह्मण ती बटुल्न समिधा* जाँदा भए क्वै दिन ।
लागे भन्न त्यहाँ पुगेर अतिथी * यौटा कुनै ब्राह्मण ॥

बस्छु आज यहीं म सुन्दरि ! तिमी* आतिथ्य मेरो गर ।
तिन्को बात सुनेर आसन दिई * पूजा गरिन् सादर ॥१५॥

लागिन् भन्न ति सुन्दरी अतिथिको* संमानका खातिर ।
के इच्छा छ हजुरको अब गरों * ल्याएर के हाजिर ?

बोले विप्र—गृहस्थ धर्म तिमिले * गर्ने हुँदा पालन ।
सोही धर्म बुझेर देउ खुशिले * माग्छु म तिम्रो तन ॥१६

संझाइन् तिनिले कुनै अरु कुरा * मागे म दिन्छु भनी ।
मानेनन् द्विजले, गराइ बिचमा * त्यै धर्म, जिद्दी बनी ॥
तिनले 'हुन्छ' भनिन् सुदर्शन पनी* आई पुगे द्वारमा ।
लागे डाक्न तिनी डुबेर बहुतै * ती पत्निको प्रेममा ॥१७
आऊ हे सुमुखी, म डाक्दछु यहाँ * के काममा छौ त्यहाँ ।
मेरो चाकरिदेखि श्रेष्ठ अरु के * छौ काम गर्दै कहाँ ?
स्वामीको सुनि बात लज्जित भई * बोल्नै सकीनन् तिनी ।
तिनको उत्तरमा भने अतिथिले * चिच्याउँदै भूपति ॥१८॥
इच्छापूर्ण गरी दिने प्रण गरिन् * तिम्री प्रियाले अब ।
सेवामा रत छिन् बसी मसँग ती * आनन्द भोग्दै सब ॥
आऊ भित्र तिमी कि जाउ अहिले * अन्तै कहीं ब्राह्मण ।
गर्थें मृत्यु पनी विचार करमा * ठूलो खुँड़ा लीकन॥१९
गर्छन् क्रोध हुनेछ भ्रष्ट द्विजको * सद्धर्म ठूबो अब ।
मौका मिल्दछ खड्गले म टुकुरा * पारी दिनेछु तब ॥
बोले ब्राह्मण भित्रका अतिथिको * इच्छा बुझी सादर ।
हे अभ्यागतजी ! पवित्र हुनगो * पाल्नू हुँदा यो घर ॥२०॥
बाधा दिन्न हजूरको सुरतमा * मैले कुनै यो घरी ।
पत्नीले पनि गर्दछिन् हजुरको * राम्रो गरी चाकरी ॥
यस्तो बात सुनेर झट्ट अतिथी * तिनको अगाड़ी गए ।
ज्ञानी ब्राह्मणको सुआदर गरी * हाँसेर भन्दा भए ॥२१॥
मेरो पूर्ण भयो मनोरथ ठुलो * आतिथ्य पाएर यो ।
ब्रह्मन् ! धर्म म हूँ, सबै तरहले * तिम्रो परिक्षा भयो ॥
जित्ने मृत्यु तिमीसमान अरु क्वै * छैनन् तिनै लोकमा ।
मेरो आशिषले गईकन बसे * यै देहले स्वर्गमा ॥२२॥

हे राजन् ! तिमिले पनी अब सबै * चिन्ता हटाईदिनू ।
सारा वैभव राज्यको अतिथिको * सेवामहाँ अर्पनू ॥
जो अभ्यागतको सुदर्शनसरी * गर्ला सदा चाकरी ।
त्यस्का पूर्ण हुनन् मनोरथ स्वयं * त्यै धर्मले राम्ररी ॥२३

इन्द्र र शुकको संवाद :—

सुन्दैछु म कथा पितामह ! सबै * कल्याण गर्ने सदा ।
शान्ती प्राप्त हुँदैन, चिन्तित भई * बस्छु अशान्ती हुँदा ॥
यस्को केहि भए उपाय सजिलो * शिक्षा मलाई दिनोस् ।
मेरा पापहरू सुनी हजुरका * आख्यानले नाशियोस् २४
आज्ञा गर्नुभयो पितामहजिले * बिन्ती सुनी भूपको ।
राजन् ! भन्छु कथा सुनी हित हुने * सूगा तथा इन्द्रको ।
धर्मात्मा शुक बस्तथ्यो अघि कुनै * ओडारमा वृक्षको ॥
हाँगा, पात झरी ठुटो हुन गयो * क्यै कालमा वृक्ष त्यो २५
सोही जङ्गलमा थिए रूखहरू * राम्रा अनेकौं तर ।
मायाले रूखको त्यजेन शुकले * हे भूपती ! कोटर ॥
सोधे इन्द्र गएर ब्राह्मण बनी * आश्चर्य मानीकन ।
हे ज्ञानी शुक ! यो ओडार तिमिले* त्यागीदिँदैनौ किन ॥२६
हाँगा पात हुने अरू रूखहरू * धेरै यहाँ छन् तर ।
बस्छौ कष्ट खपेर शुष्क रूखमा * के कामका खातिर ?
यस्तो बात सुनेर स्वर्गपतिको * हाँसेर बोल्यो शुक ।
मैले चिह्न सकें तपोबल हुँदा * हे वृत्रसंहारक ! ॥२७॥
पाएँ जन्म यहीं सिकें गुणहरू * मैले यही वृक्षमा ।
मेरो स्नेह हुँदा यसैसँग बसें * हे इन्द्र ! यो स्थानमा ॥

यस्कै आश्रयमा रहीकन बिते * सानन्द मेरा दिन ।
देखी वृद्ध ठुटो म त्यागन रुख यो * आँटे पनी सक्तिनँ ॥२८
लागे भन्न सुरेन्द्र फेरि शुकको * गर्दै ठुलो आदर ।
तिम्रो उत्तम कर्मले खुशि भएँ * मागेर लेऊ वर ॥
लाग्यो भन्न सुघा मलाइ वरको * क्यै छैन इच्छा तर ।
पैल्हेकै सरि वृक्ष यो गरिदिनोस् * हे इन्द्रजी ! सुन्दर ॥२९
इच्छा पूर्ण गरे तुरन्त शुकको * हे भूपती ! इन्द्रले ।
त्यो ज्ञानी शुक स्वर्गमा गइ बस्यो* अत्यन्त आनन्दले ॥
जस्तै त्यो रुखालाइ फेरि हरियो * पाऱ्यो सुघाले त्यहाँ ।
त्यस्तै प्रेम गरेर बस्नु जनले * हे भूपती ! मन्महाँ ॥३०

बाँदर र स्यालको उदाहरण—

सोधे फेरि पनी युधिष्ठिरजिले * श्री भीष्मको साथमा ।
जान्छन् दिन्छु भनेर दान नदिने * दुष्टात्म कुन् योनिमा ॥
आज्ञा गर्नुहवस् मलाइ अब यो * झर्को नमानीकन ।
लागे भन्न अनी पितामहजिले * तिन्को बुझाइ मन ॥ ३१
दिन्छन् विज्ञहरू उदाहरण जो * मौका विचारीकन ।
भन्छु एक कथा म स्याल-कपिको * त्यस्तै खुशीले सुन ॥
हे राजन् ! पुरुषार्थ केहि नगरी * हुन् दैव ठूलो भनी ।
बस्नेलाइ हुँदैन धर्म-धन औ * शान्ती सुविस्ता पनी ३२
बस्ने मित्र बनी मनुष्य जुनिमा * दोटै मरेथे जब ।
जन्मे स्याल भएर बानर दुवै * अर्को जुनीमा तब ॥
खान्थ्यो स्याल गह्राउने शव बसी * हेर्दै थियो बानर ।
सोध्यो यो स्थितिमा पुग्यौ किन तिमी*हे मित्र ! वर्णन् गर ॥३३

बोल्यो स्याल 'गरें दिने प्रण अघी * सत्पात्रलाई धन ।
ढाँटी ब्राह्मणलाइ यो जुनि हुँदा * गर्छु म यो भोजन ॥
तिम्रो वानर योगि के गरि भयो * हे मित्र ! साँचो भन ।'
बोल्यो वानर "विप्रको फल सदा * खान्थें म चोरीकन ॥३४॥
सोही कारणले म हीन गतिमा * आईपुगें जन्मन ।
चोर्नू, खोस्नु हुँदैन विप्रहरुको * हे मित्र ! केही धन ॥
गर्नू आदर विप्रको अथितिको * सत्पात्रको चाकरी ।
शान्ती प्राप्त हुनेछ हे नरपते !" * सत्कर्मले नै गरी ॥३५॥

संभोगको विषयमा भङ्गास्वनको भनाइ—

श्री गङ्गास्वन पुत्र हीन नृपती * पैह्ले भएका थिए ।
पुत्रेष्टी शुभ यज्ञमा नृपतीका * श्री इन्द्र वैरी भए ॥
छिद्रान्वेषण गर्दथे सुरपती * ती भूपतीको सदा ।
खेल्दा जङ्गलमा शिकार भुलिए * राजा अँध्यारो हुँदा ॥३६
देखी एक तलाउ वहिं रुखमा * बाँधेर घोड़ा त्यहाँ
गर्दा स्नान पसी सरोवरविषे * नारी भए छिन्महाँ ।
यौटा आश्रममा बसेर मुनिले * तिनको लिए आश्रय ।
राजाको मुनिबाट स्त्री स्वरूपमा * छोरा भएथे सय ॥३७॥
आफू स्त्री हुनको गएर घरमा * सारा भनी कारण ।
राखे ती सय पुत्र भाइहरू हुन् * भन्ने बुझाईकन ॥
राजाका सुत ती दुवै सय मिली * त्यो राज्य भोग्दा भए ।
हे राजन् ! तप गर्नलाइ नृपती * त्यै स्थानमा फर्किए॥३८॥
छोरा भूपतिका मिलेर त्यसरी * देखे बसेका जब ।
पारे आपुसमा विभेद रिसले * आई स्वयं वासव ॥

काटाकाट गरी दुवै सय मरे * ती भूपतीका सुत ।
त्यो संवाद सुनेर स्त्री स्वरूपका * राजा भए मूर्च्छित ॥३९॥
सोधे इन्द्र पुगेर ब्राह्मण बनी * तिन्का अगाड़ीमहाँ ।
गर्दैछौ किन शोक यो किसिमले * सौम्ये ! वृथामा यहाँ ॥
पैह्ले देखि कुरा क्रमैसित सबै * तिन्ले गरिन् वर्णन ।
आफ्नू जीत बुझेर इन्द्र सहसा * बोले खुशी भैकन ॥४०॥
छोरा जो दुईतर्फका सय दुई * तिम्रा मरे यो घरी ।
आधालाइ बचाइदिन्छु तिमिले * जुन् भन्दछचौ सुन्दरी !
लागिन् भन्न तिनी बचाइदिनुहोस्* स्त्री रूपका नै सुत ।
सोधे फेरि सुरेन्द्र शङ्कित भई * तिन्को चिताई हित ॥४१
मागीनौ अधिका सुपुत्र सयको * के हेतुले जीवन !
माग्दैछौ किन पुत्र स्त्री स्वरूपका * हे सुन्दरी ! लौ भन ?
बोलिन् फेरि तिनी पिता र जननी * हुन्न एकनासे, तर ।
गर्छन् स्नेह पनी बराबर दुवै * सन्तानका खातिर ॥४२॥
आमादेखि बढ़ी हुँदैन कहिल्ले * माया पिताको भनी ।
मागें जीवन ती सुपुत्रहरुको * त्यै हेतु मैले पनी ॥
बोले इन्द्र खुशी भएँ अरु पनी * मागेर लेऊ वर ।
नारी रूपमहाँ प्रसन्न मनले *बस्छचौ कि बन्छचौ नर४३
लागिन् भन्न तिनी 'खुशी छु म सदा* हे इन्द्र ! यै रूपमा ;
नारीलाइ हुँदो रहेछ बढि नै * आनन्द संभोगमा ॥'
राजन् ! खूशि हुँदा तथास्तु भनि ती* फर्की गए स्वर्गमा ।
यो नीती छ अझै पनि चलनमा * सम्पूर्ण संसारमा ॥४४॥

शिव महिमा र अष्टावक्रको उपाख्यान —

हे राजन् ! शिवको गरे कपिलले * सानन्द आराधना ।
पाए ज्ञान र सांख्यको विषयमा * तिनको पुग्यो कामना ॥
ज्ञानी व्यासजिले पनी शिवजिकै * ठूलो तपस्या गरी ।
पाएथे सय पुत्र धार्मिक गुणी * हे भूपती त्यो घरी ॥४५॥
पाएथे ऋषिबाट श्राप पहिले * श्री वाल्मिकीले तर ।
तिनको श्राप छुट्यो,गरे तप मिल्यो* श्री शम्भूद्वारा वर ॥
छोरो पाउँ भनी गरे तप ठुलो * श्री कृष्णजीले जब ।
पाए साम्ब सुपुत्र धार्मिक गुणी * खूशी हुँदा श्रीशिव ॥४६
जानी श्री शिवको अनन्त महिमा * त्यागी कुशंका जति ।
तिनको स्तोत्र गरेर पाठ तिमिले * आफ्नू बनाऊ गति ॥
सोधे धर्मकुमारले बिचमहाँ * रोकेर शङ्का गरी ।
नारीका गुण दोष लक्षणहरू * आज्ञा हवस् यो घरी ॥४७
बोले भीष्म-तिमी यसै विषयको * आख्यान भन्छु सुन ।
अष्टावक्र थिए ऋषीश्वर ठुला * ज्ञानी तथा सज्जन ॥
तिनले गर्न बिहा वदान्य ऋषिकी * मागे सुपुत्री जब ।
लागे भन्न वदान्य आदर गरी * आफ्नू इरादा सब ॥४८
पैल्है उत्तरमा तपस्विनि बुढी- * को गर्नुहोस् दर्शन ।
कन्या दिन्छु विवाह गर्नु खुशिले * फर्केर आईकन ॥
'ऐल्हे जान्छु' भनी ऋषीश्वर हिंडे* मागी बिदा भूपति !
शोभा जङ्गलको र श्रेष्ठ गिरिको * हेर्थे रमाई अति ॥४९॥
अष्टावक्र कुबेरको नगरमा * पुग्दा भएथे जब ।
जम्मा भैकन शम्भुका गणहरू * गर्थे ठुलो उत्सव ॥

आफैं आइ कुबेरले ति ऋषिको * गर्दै ठुलो आदर ।
राखे स्वर्गसरी ठुलो महलमा * आतिथ्यका खातिर॥५०
अष्टावक्र बसे प्रसन्न मनले * त्यै स्थानमा क्यै दिन ।
मागी फेरि बिदा, ठुलो वन गिरी * नाघ्दै गए सज्जन ॥
देखे स्वर्गसमान सुन्दर ठुलो * प्रासाद त्यै स्थानमा ।
लागे सोध्न परेर छक्क उभिई * प्रासादको द्वारमा ॥५१
'को छन् यो घरमा म एक अतिथि * आईरहेछु यहाँ ।'
कन्या सात सुनेर बात ऋषिको * आए अगाड़ीमहाँ ॥
'पाल्नूहोस् घरमा' भने मुसुमुस् * हाँसेर तिन्ले जब ।
हेर्थे छक्क परेर भित्र गइ त्यो * प्रासादको वैभव ॥५२॥
वृद्धा एक तपस्विनी पलँगमा * देखे बसेकी थिइन् ।
पाई आशिष ती ऋषीश्वरजिको * त्यागेर शय्या उठिन् ॥
कन्या एक बसिन् अरू सब गए * आज्ञा ऋषीको सुनी ।
सन्ध्याकाल बित्यो बसे पलँगमा * वृद्धा-तपस्वी मुनी ॥५३॥
आधा राता भएपछी निहुँ गरी * जाड़ो जनाईकन ।
वृद्धाले ऋषिको गरिन् पलँगमा * पौंचेर आलिङ्गन ॥
देखी शुष्क विकार शून्य ऋषिको * त्यो काठ जस्तै तन ।
लागिन् भन्न तपस्विनी नरपते ! * साह्रै दुखाई मन ॥५४
स्त्री जातीहरूले गुणी पुरुषको * सामीप्य पाए भने ।
गर्छन् केवल बात तो सुरतमा * आनन्द प्राप्ती हुने ॥
आएकी छु हजूरको शरणमा * स्वीकार गर्नू हवस् ।
छु कामातुर लौ समागम गरी * इच्छा पुर्याईदिनोस् ५५
देख्नूहुन्छ हजुरले जति यहाँ * प्रासाद औ वैभव ।
मेरो देहसमेत जानिलिनुहोस् * आफ्नै हजुरै अब ॥

ज्ञानी सज्जन औ गुणी पुरुषको * संसर्ग देखी अरू।
खोज्दैनन् सुखका कुनै पनि कुरा * सम्पूर्ण नारीहरू ॥५६॥
लागे भन्न बुझाउँदै ति ऋषिले * यो काम हो निर्घिनी।
जानी धर्म विरुद्ध गर्दिनँ म यो * दुष्कर्म कैल्हे पनी ॥
आधा रात बितीसक्यो पलँगमा * आफ्नो तिमी गै सुत।
लागिन् भन्न बुझाइ फेरि तिनिले * अत्यन्त राम्रोसित ॥५७
भोगेच्छा नहुने हुनन् ऋषिपते ! * क्वै एक हज्जारमा।
भेट्नू हुन्छ पतिव्रता पनि कहीं * यौटी कुनै लाखमा ॥
इच्छापूर्ण गराउने पुरुष क्वै * भेट्टाउँछन् स्त्री जब।
मर्यादा कुलको पिता र जननी * त्याग्छन् सबै बान्धव ५८
मेरो छैन परस्त्रिमा रुचि तिमी * रित्तो छ शय्या सुत।
वृद्धा सुत्न भनी गइन् पलँगमा * अत्यन्त गाह्रोसित ॥
प्रातःकाल हुँदा ऋषीश्वर उठे * वृद्धा उठेकै थिइन्।
ल्याई तेल सुगन्ध युक्त तनमा * तिन्ले ऋषीको घसिन् ५९
मन्तातो जलले दलेर करले * पैल्हे नुहाई दिइन्।
सन्ध्योपासन गर्न आसन तथा * सामग्रि राख्ती भइन् ॥
सारा काम सकी उठेपछि ऋषी * तिन्ले दिइन् भोजन।
पाई खाद्य पदार्थ अमृतसरी * खाए खुशी भैकन ॥६०॥
सन्ध्याकाल बित्यो सुते पलँगमा * वृद्धा र ज्ञानी मुनी।
आधा रात हुँदा पुगिन् ऋषिकहाँ * त्यागेर शय्या तिनी ॥
हे ब्रह्मन् ! म स्वतन्त्र छु र रतिको* इच्छा पनी गर्दछु।
त्यस्ले पाप हुँदैन, धर्म कहिल्यै * नाशिन्न यो जान्दछु॥६१
लागे भन्न ऋषी-'स्वतन्त्र र फुका* नारी हुँदैनन्' भनी।
भन्छन् विज्ञ र धर्मशास्त्रहरूले * देखिन्छ प्रष्टै पनी ॥

लागिन् भन्न तिनी 'म अन्धसरि छु* इच्छा बढ़ी कामको ।
लाग्ला पाप हजूरलाइ बहुतै * हेलाँ गरे प्रेमको' ॥६२॥
तिन्ले तर्क गरिन् उपस्थित अरू * थरै थरीका तर ।
मानेनन् ऋषिले गइन् पलँगमा * विश्रामको खातिर ॥
प्रातःकाल हुँदा पुगिन ति ऋषिको* गर्छु भनी चाकरी ।
त्यो वेला ति बुढी अलभ्य रति झैं * थिन् षोडशी सुन्दरी ॥६३
तिन्को रूप छटा अलौकिक मुनी * हेर्थे खुशी भैकन ।
के आश्चर्य भयो भनेर मनमा * गर्दा भए चिन्तन ॥
वृद्धा त्यो अघिकी कसोगरि बनी * यो रूपकी सुन्दरी ।
हो यो जाँच वदान्यको कि छल हो* जानुन् उनै श्रीहरि ॥६४॥
मैले जान्न सकीनँ यो बखतमा * कर्तव्य मोहित् बनी ।
गर्छु पालन, वेग रोकि मनको * हो धर्म ठूलो भनी ॥
सोधे सुन्दरिलाइ तर्क मुनिले * तत्काल रोकीकन ।
सौम्ये ! आज स्वरूप यो किन लियौ* साँचो नढाँटी भन ॥६५॥
लागिन् भन्न-मुने ! अघी हजुरको* मैले परीक्षा लिएँ ।
पाएँ सत्य र धर्ममा दृढ अनी * प्रत्यक्ष दर्शन् दिएँ ॥
दिन्छू आशिष, 'हूँ म उत्तर दिशा'* कल्याण होला सब ।
गर्नू होस् घरमा पुगीकन बिहा * मागेर कन्या अब ॥६६॥
जोरी हात दुवै बिदा भइ हिंडे * तत्काल ज्ञानी मुनी ।
यात्राको सब बात वर्णन गरे * यस्तो भएथ्यो भनी ॥
सारा बात सुनी वदान्य ऋषिले * सानन्द पुत्री दिए ।
थामी धर्म गृहस्थको ऋषि पनी * हे भूप ! बस्ता भए ॥६७

मतङ्गोपाख्यान : —

राजन् ! दान कुपात्र पात्र जनले * जाँची विचारी दिनू ।
गर्दा श्राद्ध सुपात्र ब्राह्मण गुणी * कर्मिष्ठ डाकी लिनू ॥
गर्नूपर्छ विचार हेरि मुखमा * मानीसको लक्षण ।
जान्नूपर्दछ स्वर्ग वा नरकको * पापी तथा सज्जन ॥६८
अन्धा, पंगु र मूक औ वधिरको * सर्वस्व खोस्ने जति ।
पर्छन् नर्क अनेक कल्पभरि ती * ब्रह्मघ्न हुन् भूपति !
जस्ले दीन दरिद्र विप्रहरुको * आजीविका हर्दछन् ।
लागी पाप ठुलो सदा नरकमा * ब्रह्मघ्न मै बस्तछन् ॥६९
हे राजन् ! महिमा अनन्त छ ठुलो* भागीरथीको पनि ।
गर्दा स्नान र दान स्वर्गपुरिमा * बस्नेछ ज्ञानी बनी ॥
निन्दा ब्राह्मणको नगर्नु कहिले * छन् पूज्य ती लोकमा ।
तिन्का निम्ति अदेय छैन नृपते ! * क्यै वस्तु संसारमा ॥७०
बाबू शूद्र थिए मतङ्ग ऋषिकी * आमा थिइन् ब्राह्मणी ।
जानेनन् तिनिले, हुँदा पनि युवा * त्यो हेतु कैल्हे पनि ॥
'बाबू यज्ञ गराउ जाउ' भनि यो * आज्ञा पिताको सुनी ।
जोती गर्दभलाइ एक रथमा * जाँदा भएथे तिनी ॥७१
आमा बाबु संगै गयो नरपते ! * बच्चा गदाहा पनि ।
जोते त्यो गदहा पनी रथमहाँ * चाँड़ै पुगौंला भनी ॥
कोर्राले शिशुलाइ खूब ऋषिले * हाने जसै नाकमा ।
लागेथ्यो जब बग्न रक्त अनि त्यो* रोयो परी दुःखमा ॥७२॥
छोरोको अति कष्ट देखि गदही * भन्दी भई स्नेहले ।
हे बाबू ! तिमिलाइ विप्र नभई * कुट्दैछ चाण्डालले ॥

हुन्छन् विप्र सदा सुशील गुणका * खानी दयाका धनी ।
चिन्ता गर्नु वृथा छ कष्ट सहु यो * हो क्रूर पापी भनी ॥७३
सोधे छक्क परी मतङ्ग ऋषिले * हे गर्दभी ! लौ भन ।
छोरो हूँ द्विजको, छ के र तनमा * चाण्डालको लक्षण ॥
मेरो उत्तम ब्राह्मणत्व कसरी * कुन् हेतुले नाशियो ?
जानेकी रहिछौ सबै भनिदिए * आनन्द लाग्ने थियो॥७४
यस्तो बात मतंगको सुनिसकी * त्यो गर्दभीले भनी ।
बाबू शूद्र थिए गुणी र रजनी * थिन् पापिनी ब्राह्मणी ॥
आमाले गरि ब्राह्मणत्व सहजै * तिम्रो गएथ्यो जब ।
थाल्यौ गर्न कुकर्म घोर तिमिले * चाण्डाल जस्तै सब ॥७५
हे राजेन्द्र ! मतंग त्यै बखतमा * फर्केर आए घर ।
बाबू ! यज्ञ गराउनाकन स्वयं * मैले पठाएँ तर ॥
आयौ झट्ट तिमी फिरेर घरमा * कुन् विघ्नको कारण ।
संचै छौ कि गऱ्यो अनादर वृथा * आई कुनै दुर्जन ॥७६॥
बाबूको सुनि बात सादर भने * जो गर्दभीले भनी ।
जाँदैछु तप गर्न गर्न जङ्गलमहाँ * भन्दै हिंड़ेथे तिनी ॥
बन्छु विप्र भनी मतङ्ग ऋषिले * थाले तपस्या जब ।
आई इन्द्र भने वृथा किन तिमी * यो कष्ट खप्छौ सब॥७७
जे इच्छा मनमा छ माग खुशिले * तत्काल दिन्छु वर ।
यस्तो बात सुनी मतङ्ग ऋषिले * बिन्ती गरे सादर ॥
गर्दैछु तप यो महेन्द्र ! वनमा * बन्छु भनी ब्राह्मण ।
मागेको वरदान बक्सनुभए * जान्थें खुशी भैकन ॥७८
बोले इन्द्र असाध्य दुर्लभ कुरा * मागीरहेछौ किन ?
पाउन्नौ तिमिले द्विजत्व कहिले * त्यागे पनी जीवन ॥

मानेनन् ऋषिले कुनै तरहले * श्री इन्द्र फर्की गए।
बन्छु विप्र भनी मतङ्ग तपमा * झन् बेसरी गाडिए ॥७९॥
आई इन्द्र भने बुझाइ अघि झैं * जिद्दी गरेका किन।
मानीलेउ, हुनू असम्भव छ यो * चाण्डालले ब्राह्मण ॥
मानेनन् ऋषिले बिते युगहरू * ठूलो तपस्या गरी।
तेस्रोपल्ट पुगी भने नरपते ! * श्रीइन्द्रले त्यो घरी ॥८०
देख्छु हाड़, नसा मतङ्ग ! तनमा * बाँकी छ तिम्रो अब।
छाड़ी ब्राह्मण बन्न, जे अरु तिमी * माग्छौ म दिन्छु सब ॥
लागे भन्न मतङ्ग हे सुरपते ! * हे विप्रहन्ता प्रभो !
जानें आज रहेछ दुर्लभ कुरा * विप्रत्व प्राप्ती विभो !॥८१
इच्छा माफिक रूप धारण गरी * डुल्ने बनूँ देवता।
पाऊँ क्षत्रियको र विप्रहरुको * सत्कारको योग्यता ॥
भन्छन् इन्द्र 'तथास्तु' सादर दिएँ* मागे जती हे मुने !
'छन्दोदेव' हुनेछ नाम भवमा * सत्कीर्ति फैलाउने ॥८२॥
पल्नुभो निज धाम इन्द्र, ऋषिको* इच्छा पुऱ्याई जब।
मैले राख्नुछ शूद्रको तन वृथा * यस्लाइ त्यागछु अब ॥
यस्तो बात गरी विचार मनमा * त्यो देह त्यागीदिए।
पैह्लेको तपले ति स्वर्गपुरिमा * सानन्द बस्ता भए ॥८३॥

नारीहरूका गुण-दोषको सोदाहरण वर्णन :—

सोधे धर्मकुमारले पुरुष औ * नारीहरूका गुण।
तिन्को विन्ति सुनि पितामहजिले * भन्छन् बुझाईकन ॥
हे राजन ! इतिहास यै विषयको * योटा म भन्छु सुन।
नारीका गुणदेखि कोटि बढ़ि छन् * हे भूपती ! दुर्गुण ॥८४॥

ज्ञानी एक कुनै ऋषीश्वर ठुला * श्री देवशर्मा थिए ।
तिनले स्त्री रुचि नामकी गरि विहा * सानन्द बस्ता भए ॥
साह्रै सुन्दर रूपकी रुचि हुँदा * श्री इन्द्र मोहित् बनी ।
गर्थें सोच्च ति भोग गर्न कसरी * मिल्नेछ मौका भनी ॥८५
निम्तामा रुचिका पती नरपते ! * जाँदा भए क्वै दिन ।
रक्षाखातिर शिष्यलाइ, रुचिको * राखे बुझाईकन ॥
हे बाबू ! जब इन्द्रकी गुणवती * छन् स्वर्गमा स्त्री शची ।
इच्छा गर्दछ तैपनी म कसरी * पाऊँ भनी यी रुची ॥८६
सक्छन् धारण गर्न रूपहरु ती * आँटे त जस्तो पनी ।
रक्षा गर्नु रही सतर्क रुचिको * त्यो आउला की भनी ॥
शिक्षा यै रितका दिईकन हिंडे * श्री देवशर्मा जब ।
मौका श्रेष्ठ छ यो भनी रुचिकहाँ * पुग्दा भए वासव ॥८७॥
थाले गर्न कुरा बसीकन दुवै * एकान्तको स्थानमा ।
त्यो जानेर विचार श्री विपुलले * गर्दा भए चित्तमा ॥
आई 'वासव' कामको वश भई * छन् भोगमा तत्पर ।
रक्षा यी गुरु पत्निको म कसरी * ऐह्ले गरौं ईश्वर ! ॥८८॥
सुन्छू बात म स्पष्ट रूप तर क्यै * देख्दीनँ श्री इन्द्रको ।
दिन्छन् श्राप अवश्य आइ गुरुले * जानेर दुष्कर्म यो ॥
यस्तो तर्क गरेर योगबलले * कर्तव्य पारी स्थिर ।
बेह्र श्री रुचिको पसी शरिरमा * तिन्ले भई तत्पर ॥८९॥
ढाके इन्द्रियमा मिलाइ रुचिको * आफ्ना सबै इन्द्रिय ।
पारे निश्चल झैं रुचीकन अनी * बस्ता भए निर्भय ॥
देखे शक्ति सुरेन्द्रले विपुलको * अत्यन्त ठूलो जब ।
इच्छा त्याग गरेर स्वर्गपुरिमा * भागी गए वासव ॥९०॥

पूरा यज्ञ गराइ फर्कि घरमा * श्री देवशर्मा गए ।
त्यो दुस्साहस इन्द्रले जति गरे * सम्पूर्ण सुन्दा भए ॥
आशीर्वाद दिए गुणी विपुलको * जानेर सत्साहस ।
हे बाबू ! भय क्यै नमानि अघिझैं * हाम्रो कुटीमा बस ॥९१॥
आज्ञाले गुरुको बसे विपुलजी * सानन्द केही दिन ।
राजन् ! जंगलमा बटुल्न समिधा * जान्थे खुशी भैकन ॥
रक्षा षट् ऋतुले र रात-दिनले * गर्थे तिनैको त्यहाँ :
त्यो संवाद सुनेर दुःखित भई * फर्के गुरूजी कहाँ ॥९२॥
तिन्को कष्ट बुझेर योग बलले * शिक्षा गुरूले दिए ।
तिम्रो देखि प्रभाव, मान डरले * श्री इन्द्र फर्की गए ॥
रक्षा जो तिमिले पसी शरिरमा * स्त्रीको गर्‍यौ रात्तरी ।
ढाँटेका किन त्यो मलाइ नभनी * दुष्कर्म जानी डरी ॥९३
गर्छन् पाप मनुष्यले थरि-थरी * एकान्त पारी, तर ।
देख्छन् त्यो दिन-रातले र ऋतु वा * मैन्हा र संवत्सर ॥
सोही कारणले नगर्नु जनले * दुष्कर्म केहे पनी ।
गर्नू पर्छ सुकर्म नै बखतमा * कल्याण गर्ला भनी॥९४
पायौ कष्ट वृथा मलाइ तिमिले * हे शिष्य ! ढाँटीकन ।
तिम्रो भाव खराब केहि नहुँदा * खुशी छ मेरो मन ॥
पश्चात्ताप गरी भन्यौ मसित जो * साँचो कुरा यो धरी ।
दिन्छु आशिष जाउ स्वर्गपुरिमा * मेरो कृपाले गरी ॥९५॥
हे राजन् ! वनमा गई विपुलले * ठूलो तपस्या गरे ।
आशीर्वाद् गुरुको र योग बलले * संसार पारी तरे ॥
हे राजेन्द्र ! पतिव्रता गुणवती * नारीहरू छन् जति ।
दिन्को आदर गर्नु पर्छ, जननी * जानेर साध्वी सती ॥९६

त्यस्ता स्त्रीहरूले पवित्र कुलको * उद्धार गर्ने हुँदा ।
रक्षा गर्नु सुयोग्य हो विपुल झैं * तिन्को सदा सर्वदा ॥
जो नारी गुण-शील, हीन मति छन् * प्रत्यक्ष कृत्या सरी ।
तिन्ले प्राण मनुष्यको सहजमै * लिन्छन् बठ्याईं गरी॥९७
बर्ता राख्नु हुँदैन स्त्री विषयमा * आसक्ति ईर्ष्या पनी ।
गर्छन् काम कुनै पनी सहजमा * राम्रो नराम्रो तिनी ॥
वस्त्राभूषण, रूप, यौवन तथा * कीर्ती र सम्पत्तिमा ।
गन्छन् उत्तम ती गुणी पुरुषको * संसर्ग औ भोगमा ॥९८
जैहेसम्म हुँदैन पूर्ण मनको * इच्छा र दुर्भावना ।
त्यै बेला तक गर्दछन् पुरुषको * नारीहरू चाहना ॥
इच्छा पूर्ण भयो कि प्रेम सकियो * त्यस्लाइ त्यागीदिनन् ।
अर्को इच्छित व्यक्तिलाइ कुलटा * राजी गराई लिनन् ॥९९
आफ्नी स्त्रीसित नै रजोवति पछी * सानन्द चौथो दिन ।
गर्नू पर्दछ भोग, सुन्दर गुणी * सन्तान जन्माउन ॥
गर्छन् जो जन भोग हे नरपते ! * आनन्दको खातिर ।
होला मृत्यु अकालले कि क्षयले * मर्छन् छिटै ती नर ॥१००

राजा नहुष र महर्षि च्यवनको संवाद :—

सोधे धर्मकुमारले विनयले * श्री भीष्मका साथमा ।
कस्तो हुन्छ छिमेकिमा सुजनको * कर्तव्य संसारमा ॥
गाईको महिमा बताउनूहवस् * इच्छा छ सुन्ने सब ।
बोले भीष्म कथा सबै विषयको * भन्छू म यौटा अब ॥१॥
गङ्गा औ यमुना मिलीकन थियो * जुन् स्थानमा संगम ।
थालथे तप गर्न श्री च्यवनले * जलमा बसी उत्तम ॥

हाले जाल गएर क्यै दिन त्यहीं * माझीहरूले जब ।
तान्दा जाल मुनी र मत्स्य जलका * बाहीर आए सब ॥२॥
देखेथे जब जालमित्र मुनिको * त्यो काठ जस्तो तन ।
ती माझी मुनिको परी चरणमा * बोले डराईकन ।
हामीले अपराध जो हजुरको * थाहै नपाई गऱ्यौं ॥
माफी बक्सनुहोस् भनी चरणमा * आएर हामी पऱ्यौं ॥३॥
लागे भन्न मुनी निकै दिन बसें * यी मत्स्यका साथमा ।
मेरो प्रेम छिमेकि झैं हुन गयो * त्यै हेतुले मत्स्यमा ॥
माछाका संगमा छ बाँच्नु अथवा * त्यागीदिनू जीवन ।
माछालाइ त्यजीदिए त म पनी * हे माझि हो ! बाँच्तिनँ॥४
त्यस्तो बात सुनेर भूपतिकहाँ * तत्काल माझी गए ।
त्यो संचार सुनेर श्री नहुषजी * आएर भन्दा भए ॥
'के सत्कार गरौं यहाँ हजूरको * आज्ञा हवस् हे मुनि !
मागे अर्पण गर्छु खूशि मनले * यो राज्य, देहै पनि ॥५॥
राजाको सुनि बात श्री च्यवनले * आज्ञा दिए त्यो घरी ।
माझीले जलबाट बाहिर झिके * ठूलो परिश्रम् गरी ॥
बस्ने साथमहाँ छिमेकिहरु हुन् * मेरा यी माछा भनी ।
जो लाग्ने तिमि मूल्य देउ घरमा * फर्केर जाउन् यिनी ॥६॥
यस्तो बात सुनि हजार रुपियाँ * तिन्ले गरे अड्कल ।
मेरो के तिमि मूल्य यत्ति नृपते ! * ठान्दा भयौ केवल ?
दिन्छू लाख भने तुरन्त नृपले * राजी भएनन् मुनी ।
मानेनन् मुनि राज्य औ शरिर नै * सुम्पीदिंदामा पनी ॥७॥
सल्लाहा नृपले त्यहिं बसि गरे * मन्त्री हितैषीसित ।
के कर्तव्य ठहर्छ, मूल्य दिनु के ? * मैले र होला हित ?

अर्का एक मुनी पुगेर सहसा * भन्छन् बुझाईकन ।
राजन् ! मूल्य दिने उपाय छ सफा * पर्दैन चिन्ता लिन ॥८॥
गाई, ब्राह्मणको हुँदैन भवमा * हे भूप ! मूल्यांकन ।
गाई सुन्दर, मूल्यमा च्यवनको * गर्नूहवस् अर्पण ॥
लागे भन्न मुनी-प्रसन्न म भएँ * पाई उचित् मूल्य यो ।
जे इच्छा मनमा छ माग खुशिले * तत्काल दिन्छू म त्यो ॥९
माझी, मत्स्य तिमीहरू पनि सबै * मेरो कृपाले गरो ।
गर्नेछौ सुख भोग स्वर्गपुरिमा * यै देहले रात्तरी ॥
आज्ञाले मुनिको उड़ेर सहसा * ती जान लागे जब ।
लागे हेर्न परेर छक्क, मनमा * आश्चर्य मानी सब ॥१०
श्रद्धापूर्वक राख्छ जो घरमहाँ * हे भूपती, गोधन ।
लक्ष्मी जानि सहर्ष गर्छ दिनहूँ * सेवा तथा पूजन ॥
त्यस्का पूर्ण हुनन् मनोरथ सबै * सन्तान वृद्धि भई ।
द्यौता झैं सुख-भोग स्वर्गपुरिमा * गर्नेछ त्यस्ले गई ॥११॥

महर्षि च्यवनद्वारा राजा कुशिकको परीक्षा :—

सोधे भीष्मजिलाइ चित्त नबुझी * श्री धर्मका पुत्रले ।
शान्ती प्राप्त भएर भ्रान्ति मनको * जानेछ कुन् युक्तिले ?
भन्छन् भीष्म कथा म यै विषयको * भन्छु खुशीले सुन ।
धेरै काल अघी गुणी कुशिक क्वै * राजा थिए सज्जन॥१२
तिन्को वंश विनाश गर्न मनमा * पक्का इरादा गरी ।
आएथे अतिथी बनी च्यवनजी * राजा कहाँ क्वै घरी ॥
देखी भूपतिले डराइ मनमा * बिन्ती गरे सादर ।
जे इच्छा छ बताइबक्सनुभए * गर्छू छिटै हाजिर ॥१३॥

मेरो राज्य र बन्धु-बान्धव तथा * प्रासाद औ वैभव ।
गर्छु अर्पण हे मुने ! चरणमा * आनन्द मानी सब ।
यस्तो बात सुनी भने च्यवनले * ईर्ष्या लुकाईकन ।
तिम्रो यो घरमा बनेर अतिथी * बस्छु म केही दिन ॥१४
राजन् ! पालन गर्छु श्रेष्ठ व्रतको * मैले, त्यसै कारण ।
रानीलाई लिएर गर्नु तिमिले * सेवा खुशी भैकन ।
त्यो स्वीकार गरी लगी महलमा * राख्दा भए सादर ।
जो तैयार थियो, गरेर नृपतिले * खाने कुरा हाजिर ॥१५॥
राजन् ! तृप्त भई भने च्यवनले * विश्राम गर्छु अब ।
पाऊ दाबिरहू त्यजी नरपते ! * आलस्य निद्रा सब ॥
यस्तो बात सुनी प्रसन्न मनले * निष्पाप ती दम्पति ।
थाले मिच्न बसेर पाउ मुनिको * आनन्द मानी अति ॥१६
निद्रा हुन्छ कि भङ्ग, क्रोधित भई * उठ्छन् कि ऐहे मुनि ।
त्यागी भोजन नींद दम्पति बसे * सानन्द खुड्डामनि ॥
एक्काइस् दिनसम्म ती सुतिरहे * कोल्टे नफर्कीकन ।
सेवामा रत दम्पती पनि बसे * निद्रा त्यजी भोजन ॥१७
बाईसौं दिनमा उठेर सहसा * बोल्दै नबोलीकन ।
निस्की त्यो दरबारबाहिर मुनि * हिंड्दा भए त्यै क्षण ॥
त्याग्दा भोजन नींद दुर्बल थिए * राजा र रानी तर ।
लागे हिंड्न पछी-पछी च्यवनको * मानेर मन्मा डर ॥१८॥
अन्तर्धान भए त्यसै बखतमा * ती क्रोधमूर्ति मुनि ।
फर्के चित्त दुखाउँदै महलमा * राजा र रानी पनि ॥
शय्यामा मुनिलाइ फेरि अघिझैं * देखे सुतेका त्यहाँ ।
खुड्डा मिच्न भनेर दम्पति बसे * हर्षित् भई मन्महाँ ॥१९

एक्काइस् दिनसम्म ती मुनि सुते * फेरी अघी झैं गरी ।
रानीका सँग भूपले पनि गरे * झन् राम्ररी चाकरी ॥
गर्छु स्नान भनो उठे मुनि पनी * बाईस दिन्मा जब ।
ल्याएथे जल भूपले र सहसा * पोखीदिएथे सब ॥२०॥
लागे भन्न म बाँड्दछु रथभरी * राखेर ल्याओ धन ।
आज्ञा पालन भूपले गरिदिए * तिन्को स्वयं गैकन ॥
बोले त्यो रथमा बसी च्यवनजी * डुल्छु म हे भूपति !
घिच्याओ रथलाइ मुख्य पथमा * गोरू बनी दम्पति ॥२१



राजा कुशिकको मुनि च्यवन द्वारा कठिन परीक्षा



राजा नृगको दानको उदाहरण

शक्ति क्षीण भए पनी नृपतिले * रानी लिई साथमा ।
लागे तान्न खुरू-खुरू रथ ठुलो * राखी दुवै काँधमा ॥
कोर्रा एक लिएर ती च्यवनले * राजा र रानीकन ।
हानी बेसरी भन्दथे रथ वृथा * हल्लाउँदैछौ किन ?॥२२
लागी चोट प्रशस्त पीठभरिमा * धारा बग्यो रक्तको ।
हेर्थे छक्क परेर दर्शकहरू * त्यो धैर्य भूपालको ॥

गर्थें बात कती प्रभाव तपको * लौ हेर हे भाइहो !
रुन्थे मौन भई कती नृपतिको * संकष्ट देखेर त्यो ॥२३॥
लागे बाँडन मुनी दरिद्र र दुखी * हेरेर धेरै धन ।
सिद्ध्याउँ नृपको म वैभव सबै * भन्ने विचारीकन ॥
निर्दोषी नृपले अनेक थरिका * संकष्ट भोगे तर ।
जे भन्थे मुनिले प्रसन्न मनले * त्यो गर्दथे हाजिर ॥२४॥
देखी धैर्य सुशीलता नृपतिको * क्यै पग्लिएथे मुनी ।
बोले—दुःख नमान हे नरपते ! * यो हो परीक्षा भनी ॥
राजन् ! खूशि भएँ प्रसन्न मनले * मागेर लेऊ वर ।
यो आज्ञा मुनिको सुनी नृपतिले * बिन्ती गरे सादर ॥२५
इच्छा छैन मलाइ राज्य अथवा * सम्पत्तिको हे मुनि !
गर्नू पर्छ दया सदा हजुरले * हो दास मेरो भनी !
बोले फेरि मुनी-तिमी कुशिक छौ * विख्यात् जुन् नामले ।
होलान् कौशिक गोत्रका द्विजहरू * मान्नेछ संसारले ॥२६
तिम्रो नाति हुनेछ, क्षत्रिय भई * जन्मे पनी ब्राह्मण ।
के माग्छौ वरदान माग मनमा * शंका नमानीकन ॥
मेरो वंश बनोस् मुने ! हजुरको * आशीषले ब्राह्मण ।
राजालाई भने 'तथास्तु' मुनिले * आनन्द मानीकन ॥२७॥
त्याहाँबाट हिंडे म गर्दछु भनी * सम्पूर्ण तीर्थाटन ।
विश्वामित्र भएर क्षत्रिय बने * यै वंशमा ब्राह्मण ॥
सक्छन् जे पनि गर्न श्रेष्ठ तपले * पाइन्छ मुक्ति पनि ।
सोही कारणले बसेर वनमा * गर्छन् तपस्या मुनि ॥२८

दान-धर्म महिमा र कृष्णको स्तुति गरेर भीष्मले शरीर त्याग्नु

वैशम्पायनले भने नरपते ! * शिक्षा सुनी भीष्मको ।
बोले धर्मकुमार भ्रान्ति कसरी * जाला हटी चित्तको ॥
धेरै अर्ति सुनीसकें हजुरले * आज्ञा भएको तर ।
मेरो चित्त हुँदैन शान्त किन हो * लागी सुबाटोतिर ॥२९॥
गाई, अन्न सुवर्ण वस्त्र धन औ * कन्या र भूमी घर ।
कुन् हो उत्तम, प्राप्त हुन्छ फल के ?* कुन् दानले सुन्दर ?
पाटी कूप तलाउ सत्तल तथा * धारा र पौवा पनी ।
धर्मी व्यक्ति बनाउँछन् थरिथरी * कल्याण गर्ला भनी ॥३०
तिन्मा उत्तम, नीच, मध्यम गुणी* कुन् शास्त्र छुट्ट्याउँछन् ।
ज्यूँदैमा कि मरेर के फल तिनी * त्यो कर्मको पाउँछन् ॥
रोप्छन् वृक्षहरू अनेक फलका * उद्यान पुष्पादिका ।
गर्छन् सज्जन कर्म लोकहितको * खातीर कल्याणका॥३१॥
तिन्लाइ फल मिल्छ के र कसरी * यो लोक वा स्वर्गमा ?
मैले गर्न सकीनँ लोक-हितको * क्यै काम संसारमा !
सन्ध्या स्नान र तीर्थ, ध्यान व्रतको* जो गर्दछन् पालन ।
गर्छन् प्राप्त सुकर्मका फलहरू * कस्ता र कुन् सज्जन३२
यस्तो विन्ति सुनेर धर्म-सुतको * शिक्षा दिए भीष्मले ।
मान्छन् उत्तम दान पाँच थरिका * ज्ञानी र सत्पात्रले ॥
'दिन्छन् ब्राह्मणलाइ क्रोध नगरी * सम्मानले दान जो ।
त्यस्लाई सुख मिल्छ स्वर्गपुरिमा * त्यो दान नै श्रेष्ठ हो ॥३३
इच्छा याचकको बुझी सुजन जे * दिन्छन् सकेको जति ।
बढ्ने कीर्ति र धर्ममूलक त्यही * हो दान हे भूपति !

सम्बन्धी नभएर कोहि बलियो * आएर मागे धन ।
त्यस्लाई दिइने कुदान भयले * मानिन्छ हे सज्जन ॥३४
आफ्नालाइ दिइन्छ दान खुशिले * आलस्य त्यागेर जो ।
भन्छन् त्यस्कन कामनासहितको * ज्ञानीहरू दान हो ॥
दुःखी, दीन, दरिद्र, हीन जनमा * जो दान दिन्छन् धन ।
त्यै हो दान दया भएर दिइने * धर्मार्थ हे सज्जन ! ३५॥
राजन् ! दान दिने अनेक थरिका * छन् लोकमा तैपनि ।
जस्ले दिन्छ सुपात्रमा धन त्यही * मानिन्छ ठूलो भनी ॥
गाईको महिमा छ श्रेष्ठ कपिला * गोदान जो गर्छन् ।
भोगी भोग यहाँ र स्वर्गपुरिमा * आनन्दले बस्तछन् ॥३६
गाई गोठमहाँ कुनै दिन पुगिन् * लक्ष्मी बनी सुन्दरी ।
देखी रूप अलभ्य गाइहरूले * सोधी लिए त्यो घरी ॥
हे देवी ! तिमिलाइ देखि मनका * आश्चर्य लाग्यो अति ।
को हौ सुन्दर रूप, शील, गुणकी * खानी तिमी हे सति ! ३७
आएकी किन छ्यौ यहाँ, अब कहाँ* इच्छा छ जाने ! भन ?
लक्ष्मीले सुनि बात गाइहरूको * बोलिन् बुझाईकन ॥
हे देवीहरू हो ! मलाइ सबले * लक्ष्मी रमा भन्दछन् ।
मेरो दैत्य, मनुष्य, देवगणले * आराधना गर्दछन् ॥३८॥
सिद्धि प्राप्त गरौं भनेर दिनहूँ * जो गर्दछन् साधना ।
पूरा गर्दछु धर्म-अर्थ मनको * भोगादिको कामना ॥
श्री सम्पन्न गराउने मनमहाँ * इच्छा हुनाले गरी ।
आएँ बस्न भनी तिमीहरूसँगै * यै हेतुले यो घरी ॥३९॥
लक्ष्मीको सुनि बात खिन्न मनले * गाईहरूले भने ।
देवी ! छौ तिमि चञ्चला घरघरै * डुल्ने र चाहारने ॥

कल्याणी ! तिमिलाइ राख्न सँगमा * त्यै हेतु मान्छौं डर ।
ऐल्हे नै सँगमा नराखि नहुने * खाँचो पनी के छ र ?॥४०
हाम्रा पूर्ण भए मनोरथ स्वयं * तिम्रो हुँदा दर्शन ।
जाऊ जे मनमा छ त्यै गर तिमी * शंका नमानीकन ॥
लागिन् भन्न रमा ति गाइहरूले * हेलाँ गरेको सुनी ।
त्यागदैछौ किन हो नडाकिकन नै * आफैं म आएँ भनी ?४१
गर्छन् देव मनुष्यले तप ठुलो * मेरो कृपा पाउन ।
साम्रू पाइ मलाइ राख्न सँगमा * गाह्रो परेको किन ?
दोषी छैन म माग्दछु शरण लौ * तिम्रा परी पाउमा ।
देओ बस्न मलाई स्थान खुशिले * आफ्ना कुनै अङ्गमा४२
लक्ष्मीको सुनि बात गाइहरूले * भन्दा भए सादर ।
मान्छन् लोकहरू पवित्र सुमुखी * गो-मूत्र औ गोबर ॥
सोही कारणले तिमी बस सदा * सानन्द त्यै स्थानमा ।
गाइको सुनि बात सादर बसिन् * त्यै स्थानमा श्रीरमा ॥४३
राजन् ! अर्ति वशिष्ठले दिनुभयो * सौदासलाई जति ।
गाई दान गरेर स्वर्गपुरिमा * बस्छन् गई भूपति ।
गाईको महिमा म वर्णन गरी * सक्तीनँ कैल्हे पनी ।
इच्छा पूर्ण हुनेछ पूजन गरे * लक्ष्मी यिनै हुन् भनी॥४४
यो आख्यान सुनाइ धर्मसुतको * कल्याणका खातिर ।
भन्नूभो महिमा पितामहजिले * श्री कृष्णको सादर ॥
चिन्ता गर्नु वृथा छ बन्धु-वधको * यो पाप लाग्यो भनी ।
राजन् ! मानिस आयु पूर्ण नभई * मर्दैन कैल्हे पनी ॥४५॥
छन् प्राणीहरू कालका वशमहाँ * वेला पुगेका घरा ।
गर्छन् भोग सबै शुभाशुभ पछी * त्यै कालद्वारा मरी ॥

सोही कालस्वरूप हे नरपते ! * हुन् कृष्ण योगेश्वर ।
चिन्दैनौ किन ? छन् सदैव सँगमा * रक्षार्थ ती तत्पर ॥४६॥
जस्ले चिन्दछ कालरूप यम झैं * हुन् दण्डधारी भनी ।
त्यस्लाई भय हुन्न दुःख सुख वा * मानें र मनैं पनी ॥
यिन्कै अंश स्वरूप देवगण हुन् * तेत्तीस कोटी सब ।
गर्छन् पालन, नाश, सृष्टि सहजै * कल्पान्तमा माधव ॥४७
आशीर्वाद तथा सुयोग्य रितले * सल्लाह यिन्को लिई ।
बस्नू राज्य चलाइ पर्छ तिमिले * सानन्द राजा भई ॥
रक्षा गर्नु सदा प्रजा सुजनको * ज्ञानी गुणी विप्रको ।
गर्नु दान सुवर्ण अन्न पृथिवी * रक्षार्थ सद्धर्मको ॥४८॥
श्री नारायण कृष्ण, पार्थ नर हुन् * भन्ने विचारीकन ।
जप्नू विष्णुसहस्रनाम दिनहुँ * यिन्को गरी पूजन ॥
यस्ता पाइ सुयोग्य रक्षक वृथा * सन्ताप मान्छौ किन ?
चारै भाइहरू लिई गर तिमी * साम्राज्यको शासन ॥४९
सोधे सादर फेरि धर्मसुतले * श्री भीष्म ज्ञानीसित ।
शंका गर्नु हवस् निवारण प्रभो * मेरो चिताई हित ॥
जस्ले गर्छ सुकर्म मात्र दिनहूँ * सद्धर्मको पालन ।
त्यस्लाई सुख हुन्न प्राप्त कहिल्यै *उल्टो छ यस्तो किन ?५०
जसले गर्छ कुकर्म पाप मनले * राम्रो विचारीकन ।
त्यो देखिन्छ सुखी सबै तरहले * यस्तो भएको किन ?
ज्ञानी, विप्र-सुपात्र पण्डित तथा * पापिष्ट औ दुर्गुणी ।
देखिन्छन् किन हो दुवै थरि कहीं * ती एकनासे धनी ॥५१
विद्याले धन-मान मिल्दछ भनी * विश्वास पक्का भए ।
सेवा दुर्जनको गुणी सुजनले * के हेतु गर्नें थिए ?

मर्दैनन् किन जीव आयु नपुगी * काटे पनी शस्त्रले ।
मर्छन् आयु पुगेपछी जन स्वयं * सानू कुनै स्पर्शले ॥५२॥
यस्तो विन्ति सुनेर धर्मसुतको * भन्दा भए भीष्मले ।
राजन् ! सिद्धि अवश्य मिल्छ जनको * सत्कर्म औ धर्मले ॥
पाउन्नन् जब जीव इच्छित कुरा * चेष्टा र उद्योगले ।
जान्नूपर्छ दिएन सत्फल भनी * दुष्कर्म, दुर्भाग्यले ॥५३॥
बीजारोपणले अवश्य जसरी * निस्कन्छ त्यो अंकुर ।
त्यस्तै मिल्दछ सिद्धि सम्पति दुवै * लागे तपस्यातिर ॥
आशा गर्नु सुकर्मको फल सदा * पाइन्छ राम्रो भनी ।
जस्ले गर्छ कुकर्म श्रेष्ठ फल त्यो * पाउन्न कैल्हे पनी ॥५४॥
मानी धर्म प्रधान गर्नु तिमिले * राजन् ! प्रजापालन ।
नीतीपूर्वकले चलाउनु सदा * साम्राज्यको शासन ॥
गर्नू ब्राह्मण डाकि यज्ञहरुको * सानन्द आयोजन ।
धेरै अर्ति दिएर धर्मसुतको * चिन्ता हटाईकन ॥५५॥
अठ्टाउन् दिनसम्म त्यो शरिरको * रक्षा गरी बाणमा ।
लागेथ्यो जब उत्तरायण भने * श्री कृष्णका साथमा ॥
हे गोविन्द, प्रणाम गर्छु पदमा * राखेर आफ्नो शिर ।
आशीर्वाद दिनोस् प्रसन्न मनले * कल्याणका खातिर ॥५६॥
हे योगेश्वर, वासुदेव भगवन् ! * गोविन्द ! दामोदर !
गर्दैछु म प्रमाण अन्तिम प्रभो ! * पाऊ परी सादर ॥
त्यो दुर्योधनलाइ अर्ति हितको * मैले दिएथें तर ।
त्यस्को ख्याल नराखि झन् हुन गयो * संग्राममा तत्पर ॥५७॥
सारा भूपति बन्धु बान्धवहरु * संहार पारीकन ।
बर्ता जिद्दि गरी स्वयं पनि मर्‍यो * पापिष्ट दुर्योधन ॥

हे गोविन्द ! अगाड़िमा हजुरको * यो देह त्याग्छु अब ।
मुक्ती मिल्छ भनेर मान्छु मनमा * विश्वास हे माधव ! ॥५८
यस्तो विन्ति सुनी पितामहजिको * भन्नूभयो कृष्णले ।
जानूहोस् वसुलोकमा तन त्यजी * हे भीष्म ! आनन्दले ॥
पैह्ले गर्नुदुँदा कठोर प्रण औ * सद्धर्मको पालन ।
ऐह्ले जित्नूभयो, खड़ा अलि परे * छन् काल आईकन ॥५९
यो आज्ञा हरिको सुनेर खुशिले * भन्दा भए भीष्मले ।
प्राणायाम गरी शरीर अब यो * त्याग्छु म आनन्दले ॥
तान्थे मास्तिर प्राण योगबलले * जुन अङ्ग देखी तिनी ।
गर्थे बाणहरू स्वयं जमिनमा * तत्काल आफै अनि ॥६०


राजा बलि र शुक्रको संवाद


भीष्मपितामहको देह-त्याग

राखेथे जब प्राण त्यो किसिमले * तानेर ब्रह्माण्डमा ।
यौटा घाउ रहेन कञ्चन भयो * श्री भीष्मको देहमा ॥
हेर्थे छक्क परेर दर्शक तथा * जो जो थिए भूपति ।
गर्थे आपुसमा कुरा थरि-थरि * आश्चर्य मानी अति॥६१

निस्क्यो प्राण स्वयं पितामहजिको* ब्रह्माण्ड फोरी जब ।
लावा, पुष्प, अबीर देवगणले * वर्षा गरेथे तब ॥
रोए श्री धृतराष्ट्र दुःखित भई * हे भीष्म योद्धा ! भनी ।
तिन्को दाह क्रियादि धर्म-सुतले * गर्दा भए त्यो घरी ॥६२
राजन् ! दान दिएर विप्रगणको * सन्तोष पारी मन ।
फर्के बन्धुहरू लिएर पुरमा * श्री पाण्डुका नन्दन ॥
जस्ले यो इतिहास सुन्छ अथवा * पढ्नेछ श्रद्धा गरी ।
त्यस्का पूर्ण हुनन् मनोरथ, ठूलो * आनन्द भोग्ला मरी ॥६३

इति महाभारत अनुशासनपर्व समाप्त

*

# महाभारत अश्वमेधपर्व

प्रारम्भः

वैशम्पायनले भने नरपते ! * हे श्रेष्ठ जन्मेजय !
सम्झेथे जब श्री युधिष्ठिरजिले * श्री भीष्मजीको क्षय ॥
चिन्ता बढ्न गई ढले जमिनमा * मूर्छा परी शोकले ।
संकेत श्रीहरिको मिलीकन गई * पक्री लिए भीमले ॥१॥
बोले श्रीधृतराष्ट्र—धर्मसुतको * जानेर त्यस्तो स्थिति ।
बाबू ! कार्य छ जो उपस्थित यहाँ * त्यस्मा लगाऊ मति ॥
चिंताग्रस्त हुने म देख्दिनँ यहाँ * तिम्रो कुनै कारण ।
मैले योग्य थियो रुनू धुरुधुरू * दुष्कर्म सम्झीकन ॥२॥
साह्रै उत्तम अर्ति श्री विदुरको * मैले अघी मानिनँ ।
यौटाको हठले गरी सय जना * छोरा गए मारिन ॥
सोही कारणले म यो बखतमा * अत्यन्त छु चिन्तित ।
गान्धारी र मलाई बात हितको * संझाउ राम्रोसित ॥३॥
यस्तो बात सुनेर धर्मसुत क्यै * बोल्नै सक्नेनन् जब ।
भन्नूभो हरिले वृथा छ यसरी * सन्ताप मान्नू अब ॥
जानीसक्नुभयो सबै हजुरले * हो जान्नुपर्ने जति ।
गर्ने योग्य कुराहरू पनि सबै * गर्नूभयो भूपति ! ॥४॥
ज्ञानी नारद व्यास औ विदुरले * श्री भीष्मजीले पनी ।
सम्झाए जति बुझ्नुभो हजुरले * कर्तव्य यो हो भनी ॥

राजन्! क्षत्रिय-धर्म पालन गरी * संग्राममा जो मरे।
तिन्का निम्ति वृथा छ शोक ति सबै * संसार पारी तरे॥५॥
लाग्यो पाप मलाइ यो समरको * हत्याहरूको भनी।
ठान्नूहुन्छ हजूरले यदि भने * युक्ती छ यस्को पनी॥
गर्छन् यज्ञ र दान वा तप ठुलो * क्यै पाप लाग्यो भने॥
गर्नोस् यज्ञ हजूरले पनि कुनै * दुष्कर्म त्यो नाशिने ६॥
मारी रावण आदि राक्षसहरू * श्री रामले सादर।
गर्नू भो हय-मेध योग्य रितले * कल्याणको खातिर॥
तिम्रा पूर्वज भूपती भरतले * यज्ञादि धेरै गरे।
धेरै काल गरेर भोग सहजै * संसार पारी तरे॥७॥
शिक्षा श्री हरिको सुनेर हितको * क्यै बेर सोचीकन।
बोले धर्मकुमार—पाउँ म कहाँ * त्यो यज्ञ गर्ने धन॥
पैह्लेको धन जो थियो ढुकुटिमा * त्यो रित्तियो युद्धले।
मागौं कोसँग छन् प्रजा सब दुखी * छन् बन्धुको मृत्युले॥८॥
बोले व्यास मुनी—युधिष्ठिरजिको * शङ्का र बिन्ती सुनी।
हुन्छौ चिन्तित व्यर्थ संपति कहाँ * यज्ञार्थ पाऊँ भनी॥
पैह्ले यज्ञ गरी दिए मरुतले * सम्पत्ति जो दानमा।
हे राजन्! द्विजले नबोक्न सकि त्यो* फाले त्यही स्थानमा॥९
ऐह्ले सम्म छँदैछ, ल्याउ धन त्यो * इच्छा भएको जति।
तिम्रै राज्य भएर दोष पनि क्यै * लाग्दैन हे भूपति!
भन्छन् धर्म-कुमार श्री मरुतले * कुन् यज्ञ कैह्ले गरे।
के-के दान दिएर कुन् किसिमले * संसार पारी तरे॥१०
तिन्को प्रश्न सुनेर व्यसा मुनिले * भन्नूभयो सादर।
इक्ष्वाकू कुलमा, थियो मरुतको * सत्कीर्ति चारैतिर॥

श्री संवर्त तथा बृहस्पति दुवै * हुन् अङ्गिराका सुत ।
गर्थें द्रोह सदा मिलाप नभई * साह्रै नराम्रोसित ॥११॥
माने वासबले बृहस्पति गुणी * लाई पुरोहित् जब ।
श्री संवर्त गए तुरुन्त वनमा * त्यागी सबै वैभव ॥
गर्थें यज्ञ उता बृहस्पति गुरु * आज्ञा हुँदा इन्द्रको ।
निम्ता भन्न गए बृहस्पतिकहाँ * राजा मरुत् यज्ञको ॥१२
मानेनन् तिमिले पुरोहित भएँ * द्यौताहरूको भनी ।
श्री सम्वर्तकहाँ पुगी मरुतले * बिन्ती गरे हे मुनि !
मेरो यज्ञमहाँ पुरोहित बनी * दीक्षा मलाई दिई ।
इच्छा पूर्ण गराउनोस् हजुरले * मेरो दयालु भई ॥१३॥
मेरो पक्ष तिमी समर्थन सदा * गर्छौ भने भूपति !
तिम्रो यज्ञ गराउनेछु मनमा * शंका नमाने रती ॥
त्यो स्वीकार गरेर श्री मरुतले * आनन्दका साथमा ।
राखे पात्रहरु समस्त सुनकै * ल्याएर त्यो यज्ञमा ॥१४
दिन्थे मन्त्र पढेर योग्य रितले * संवर्तले आहुति ।
आएनन् लिन देवता गरि मतो * त्यो भाग हे भूपति !
श्री रवैवानर दूत भैकन गए * आज्ञा हुँदा इन्द्रको ।
गर्छन् यज्ञ गुरु बृहस्पति यहीं * आएर भूपालको ॥१५॥
रोकी यज्ञ दिउन् तुरन्त नृपले * संवर्तलाई विदा ।
होला नत्र विनाश श्री सुरपती * ले वज्र हिर्काउँदा ॥
त्यो सम्चार सुनेर श्री मरुतले * माने असाध्यै भय ।
श्री संवर्तजिले भने नरपते ! * होऊ तिमी निर्भय ॥१६
मेरो द्रोह गरेर यो किसिमले * सम्चार आयो तर ।
जे इच्छा मनमा छ माग तिमिले * तत्काल दिन्छु वर ॥

बोले भूपति 'देवताहरू सबै * आएर यो यज्ञमा ।
आफाफ्नो लिइ भाग सोमरस यो * खाउन् बसी साथमा'॥१७
राजालाइ भनी 'तथास्तु' पहिले * संवर्तले सादर ।
हाले आहुति वेदको पढि ऋचा * हेर्दै रही मास्तिर ॥
आई इन्द्र तथा बृहस्पति गुरू * संपूर्ण द्यौता पनी ।
खाए साथ बसेर सोमरस त्यो * हामी खुशी छौं भनी ॥१८
पूरा यज्ञ गरेर देवगण औ * संवर्त ज्ञानी गए ।
इच्छा पूर्ण भएर श्री मरुतजी * अत्यन्त खुशी भए ॥
तिनले दान दिएर बोक्न नसकी * फ्याँके जती विप्रले ।
ल्याऊ यज्ञ हुनेछ पूर्ण सहजै * तिम्रो त्यही द्रव्यले ॥१९

श्रीकृष्णले युधिष्ठिर र अर्जुनलाई विविध ज्ञानको उपदेश दिनु :—

फर्केथे जब हतिनापुरमहाँ * आनन्दले पाण्डव ।
सोधे धर्मकुमारले विनयले * श्री कृष्ण ! हे माधव !
शिक्षा पाइ हजूरबाट मनको *जाँदैन चिन्ता किन ?
यस्को गर्नुहवस् निवारण प्रभो * आत्तिन्छ मेरो मन॥२०॥
यस्तो विन्ति सुनेर धर्मसुतको * आज्ञा भयो कृष्णले ।
काट्नूपर्दछ शत्रु, मित्र मनको * विज्ञानको खड्गले ॥
पाल्नूहुन्छ हजूर शत्रु बलियो * हे भूप ! जैह्ले तक ।
शान्ति प्राप्त हुँदैन, ताप मनको * जाँदैन तैह्ले तक ॥२१॥
जुन् वृत्रासुरले समस्त पृथिवी * ढाकी लिएको थियो ।
भूमीको गुण गन्ध नाशिन गई * दुर्गन्ध बढ्दै गयो ॥
त्यो देखेर गरे प्रहार रिसले * वज्रास्त्र श्री इन्द्रले ।
थाल्यो तान्न पसेर सार जलको * सम्पूर्ण त्यो वृत्रले ॥२२॥

पानीमा पनि वज्र क्रोधित भई * त्यस्लाई हाने जब ।
तेजस्तत्त्वमहाँ पसी गुण जती * तान्थ्यो नछाड़ी सब ॥
हाने वज्र त्यहाँ पनी, असुर त्यो * बस्तो भयो वायुमा ।
थाल्यो भोग्न बसेर स्पर्श गुण त्यो* आनन्दका साथमा ॥२३
राजन् ! वज्र गरे प्रहार रिसले * मार्ने इरादा धरी ।
झन् आकाश भएर वृत्रमय त्यो * ढाकी दियो बेसरी ॥
हाने वज्र रिसाई फेरि मनको * त्यो वृत्रलाई जन ।
तिनकै देहमहाँ पसी, विषयको * बाटो थुनेथ्यो सब ॥२४॥
ढाकेथ्यो जब वृत्रले नरपते ! * श्री इन्द्र मोहित् भए ।
पढ्दा साम ऋचा वशिष्ठ मुनिले * त्यो मोह टारीदिए ॥
हाने वज्र अदृश्य, त्यो खल मर्‍यो* तत्काल हे भूपति !
त्यस्तै गर्नुहवस् निवारण स्वयं * मन्मा छ चिन्ता जति२५
व्याधी एक छ धृष्ट मानसिक औ * अर्को छ शारीरिक ।
हुन्छन् वायु र शीत उष्ण गुण नै * यो देहका रक्षक ॥
जैल्हेसम्म समान यो शरिरमा * हुन्छन् यि तीनै गुण ।
आधि-व्याधिविहीन स्वस्थ तनको *मानिन्छ त्यो सज्जन२६
गर्छन् आश म कष्टमा सुख सदा * पाऊँ भनी लोकले ।
पाऊ कष्ट भनी ठुलो सुख छँदा * माग्छन् कुनै व्यक्तिले ?
संझाए अघि व्यास, नारद अरू * ज्ञानी मुनीले तर ।
चिन्ता नाश हुँदैन भन्न् वरु बढी * देख्छु भएको स्थिर ॥२७
ताने वस्त्र लखेटि, द्रौपदि थिइन् * ती एकवस्त्रा सती ।
जाओ जङ्गलमा भनी पशुहरू * हाँस्थे सबै दुर्मती ॥
हान्यो कीचकले सभाबिच पुगी * तिनूलाई लात्ती जब ।
त्यो वेला त्यहिं नै उपस्थित थिए * पाँचै जना पाण्डव॥२८॥

जस्तो कष्ट दियो जयद्रथ पुगी * श्री द्रौपदीजीकन ।
व्यर्थै दुःख दियो जटासुर तथा * गन्धर्व आईकन ॥
चिन्ता गर्नु हुँदैन यी सब कुरा * सम्झी हजुर्लै किन ?
सुन्छु केवल द्रोण, भीष्म र त्यही * संग्रामको गन्थन ॥२९॥
गर्नू याद वृथा छ जो हुन गयो * पैल्हे महा - भारत !
गर्नू पर्छ लड़ाइँ आफ्नू मनको * जुन्न वेग हो त्योसित ॥
त्यस्ले प्राप्त हुनेछ ब्रह्मपदको * आनन्द हे भूपति !
चाहिन्नन् रथ-बाण, अश्वहरु क्यै * त्यो युद्धमा सद्गति ॥३०
हे राजन्न ! मनलाइ जित्न नसके * मैले भने झैं गरी ।
होला दुर्गति बेसरी हजुरको * ठूलो पछीतो परी ॥
मनूं जन्मनु जीवको जगतमा * कर्तव्य जानीकन ।
आफ्ना पूर्वज झैं प्रसन्न मनले * गर्नू हवस् शासन ॥३१॥
सिद्धि प्राप्त हुँदैन बाह्य मनले * सर्वस्व त्यागे पनी ।
जस्ले ठान्दछ भोगको सुख ठुलो * आसक्ति नै हो भनी ॥
त्यो पाउन्न कदापि ब्रह्मपदको * आनन्द हे भूपति !
दोटा अक्षर मृत्युरूप 'मम' ले * पार्छन् ठुलो दुर्गति॥३२॥
हुन्न आनन्द दिने सदा 'नमन' नै * जीवात्मलाई सुख ।
जस्ले त्याग्छ ममत्व यो किसिमले* भोग्दैन त्यस्ले दुख ॥
जस्मा लोभ हुँदैन यो पृथिविको * साम्राज्य पाए पनी ।
त्यस्को गर्छ अनर्थ के र धनले * जो बस्छ त्यागी बनी॥३३
गर्थे श्रेष्ठ मुनी ऋषीश्वर कुरा * चर्चा हुँदामा जुन ।
मैले वर्णन गर्दछु नरपते ! * त्यो 'कामगीता' सुन ॥
संसारी जनलाइ भन्छ मनले * अभ्यासले योगको ।
मेरो नाश हुँदैन, मार्दछु भनी * आँट्ने ठुलो मूर्ख हो॥३४

जो गर्छन् व्रत दान पूजन अरू * धेरै थरी साधन ॥
हो त्यो व्यर्थ ममत्व त्याग नगरी * राख्ने पछी कामना ॥
गर्छु नष्ट भनी मलाइ जन जो * आँट्ने छ शस्त्रास्त्रले ।
शस्त्रैमा अभिमान रूप लिइ झन् * हुन्छु प्रकट् वेगले ॥३५॥
ठूलो यज्ञ गरी मलाई जन जो * खोज्नेछ मारीदिन
जङ्गम् योनिमहाँ गुणी पुरुष झैं * देखिन्छु जन्मीकन ॥
जो गर्नेछ मलाइ मार्दछु भनी * स्वाध्यायको साधना ।
त्यस्मा स्थावर प्राणि झैं भइ प्रकट् * नास्छु सबै कामना ॥३६॥
जस्ले खोज्छ मलाइ मार्न बलले * वा धैर्य औ शक्तिले ।
मिल्छु भावमहाँ गएर मनको * चिन्दैन त्यो व्यक्तिले ॥
जस्ले लिन्छ 'म'लाइ मार्न तपको * हे भूपति ! आश्रय ।
जन्मन्छु तपरूपले शरिरमै * आत्तिन्छ त्यो निश्चय३७
जस्ले आँट्तछ मार्न मोक्ष-पथको * गर्दै रही पालन ।
आफैं पुग्दछ मोक्षकै विषयको * आसक्तिमा गाड्नि ॥
हाँसो उठ्छ मलाइ देखि जनको * यस्तो नराम्रो गति ।
यौटा छु म अवश्य प्राणिहरुका * निम्ती सदा भूपति ! ॥३८
आफ्नो लाउनुहोस् सुयज्ञहरुले * सद्धर्ममा कामना ।
सिद्धि प्राप्त हुनेछ क्यै दिनपछी * गर्दै रहे साधना ॥
जो जो बन्धु मरे लडी समरमा * तिन्को गरी सम्झना ।
देखिन्नन् अब ती, छ पाउनु वृथा * चिन्ता गरी यातना ॥३९
गर्नुहोस् अब अश्वमेध मखको * सानन्द आयोजन ।
ठूलो कीर्ति फिंजाइ लोकभरिको * गर्नू हवस शासन ॥
शिक्षा सुन्नुभयो युधिष्ठिरजिले * कल्याण गर्ने जब ।
बिन्ती गर्नुभयो प्रसन्न मनले * गोविन्द ! हे माधव !४०

चिन्ता छैन मलाइ बन्धु-वधको * वा युद्धको क्यै अब।
शांति प्राप्त भयो दया हजुरको * पाएर हे केशव !
राजालाइ प्रसन्न पारि यसरी * चिन्ता हटाईकन।
श्री योगेश्वर हस्तिनापुरमहाँ * बस्नूभयो क्यै दिन ॥४१
इन्द्रप्रस्थ गए कुनै दिन दुवै * सन्मित्र कृष्णार्जुन।
सोधेथे हरिलाइ श्री विजयले * सानन्द ढोगीकन ॥
जो शिक्षा रणभूमिमा हजुरले * आज्ञा भएको थियो।
मैले राख्न सकीनँ त्यो हृदयमा * ऐल्हे सबै बिर्सियो ॥४२॥
देखेथें अघि विश्वरूप प्रभुको * त्यो दिव्य औ अद्‌भुत।
उत्कण्ठा मनमा छ सुन्न अघिको * त्यो ज्ञान हे अच्युत !
आज्ञा गर्नुभयो मलाइ म छिटै * जान्छू भनी द्वारका।
मौका मिल्दछ सुन्न फेरि कहिले * शिक्षाहरू ज्ञानका ॥४३॥
यस्तो विन्ति सुनीसकी विजयको * हाँसेर गोविन्दले।
केही बेर गरी विचार मनमा * आज्ञा भयो प्रेमले ॥
जो शिक्षा अति गोप्य, उत्तम दिएँ * मैले त्यहाँ अर्जुन !
त्यस्तै गर्न यथार्थ वर्णन सखे ! * आँटे पनि सक्तिनँ॥४४॥
पाउन्नौ अब गर्न दर्शन तिमी * हे मित्र ! त्यो रूपको।
'बिर्से' भन्नु तिमी समान जनले * हो मूर्खता, ज्ञान त्यो ॥
मैले नै अघि योगमा स्थित भई * जस्तो गरें वर्णन।
यस्को याद हुने म ज्ञान-पथको * आख्यान भन्छु सुन ॥४५
योटा विप्र थिए सुशील तपसी * दुर्धर्ष ज्ञानी गुणी।
डुल्दै स्वर्ग र ब्रह्मलोक मकहाँ * आई पुगेथे तिनी ॥
पैल्हे पूजन विप्रको गरिसकी * सोधी लिएँ सादर।
मोक्षार्थी जनको छ धर्म-पथमा * कर्तव्य कुन् सुन्दर ॥४६

मेरो प्रश्न सुनीसकेर द्विजले * जस्तो दिए उत्तर ।
भन्छु त्यो तिमिले सुनेर मनमा * राख्नू गरी सुस्थिर ॥
ज्ञानी सिद्ध सुशील ब्राह्मण थिए * पैल्हे कुनै धार्मिक ।
जान्ने पाप र पुण्य, शास्त्र-मत ती * कर्तव्यका पालक ॥४७
डुल्थे ती अवधूत झैं कहिं बसी * सत्संग ती गर्दथे ।
अन्तर्धान हुने तथा अरु पनी * विद्या सबै जान्दथे ॥
तिनको कीर्ति सुनी कुनै दिन गए * भेट्छु भनी काश्यप ।
खोज्दै आश्रममा पुगे श्रम गरी * गर्थे जहाँ ती तप ॥४८॥
धेरै काल त्यहीं बसीकन गरे * ती सिद्धको चाकरी ।
देखी काश्यपको चरित्र मनमा * खूशी भई राम्ररी ॥
बोले सिद्ध 'बनेर शिष्य यसरी * सेवा गरेका किन ?
जे इच्छा मनमा छ त्यो अब तिमी * शंका नमानी भन' ॥४९
बोले काश्यप 'अर्ति पाउँ म गुरो ! * विज्ञानको ज्ञानको ।
इच्छा छैन मलाइ क्यै पनि अरू * संसारका वस्तुको' ॥
बिन्ती काश्यपको सुनेर मनको इच्छा बुझी सिद्धले ।
जस्तो अर्ति दिए, म भन्छु सुन त्यै * हे पार्थ ! आनन्दले ॥५०
बाबू काश्यप ! लोकमा जनहरू * सत्कर्म जो गर्दछन् ।
सोही पुण्य फलेर स्वर्गपुरिको * आनन्द ती भोगदछन् ॥
पाउन्नन् कहिं बस्न जीव सुखले * इच्छा गरे तापनी ।
खोज्दै शान्ति सदा तिनै भुवनमा * डुल्दै रहन्छन् तिनी॥५१
जान्छन् स्वर्ग गरेर श्रेष्ठ तप वा * सत्कर्म द्वारा, तर ।
पुण्य क्षीण भएर फेरि यहिं नै * जन्मेर मर्छन् नर ॥
मैले काम र लोभको वश परी * दुष्कर्म धेरै गरें ।
भोग्दै कष्टहरू ठूलो नरकमा * त्यै पापद्वारा परें ॥५२॥

मनूँ जन्मनुरूप दुःख भवको * भोगें हजारौं थरी ।
माताहेरु अनेकका स्तन पिएँ * संसारमा बेसरी ॥
धेरैपल्ट अनेक योनिहरूमा * जन्मेर मर्दै गएँ ।
आमा बाबु भए कती म कतिको * बाबू भएको थिएँ ॥५३॥
आफ्नाको छुटि संग दुष्ट जनको * बस्नूपर्‍यो साथमा ।
आर्जेको जति सम्पति सब गयो * भोगादिले व्यर्थमा ॥
पाएँ कष्ट भएर क्षुद्र र बनें * ठूलो म कोही दिन ।
मिथ्या ठान्छु प्रपञ्च लोकभरिका * मैले त्यसै कारण ॥५४
ईर्ष्या, क्रोध मलाई छैन, सुखको * इच्छा पनी गर्दिनँ ।
सोही कारणले प्रसन्न र सुखी * मेरो छ यो जीवन ॥
गर्दैछु व्यवहारमा म नफसी * आराधना ब्रह्मको ।
पाएँ ईश्वरको दया हुन गई * सन्मार्ग यो मुक्तिको॥५५
जीवन्मुक्त भई गएपछि यहाँ * आउन्नँ फेरि अब ।
मैले झैं गर सिद्धि प्राप्त, मनको * ईर्ष्यादि त्यागी सब ॥
तिम्रो काश्यप ! शुद्ध आचरणले * खुशी छ मेरो मन ।
मैले के प्रिय कार्य यो बखतमा * तिम्रो गरूँ लौ भन ?॥५६
लागे काश्यप भन्न सादर नुही * आज्ञा सुनी सिद्धको ।
इच्छा छैन मलाइ केहि मनमा * हे देव ! सम्पत्तिको ॥
गर्छन् कर्म यहाँ शुभाशुभ सबै * प्राणीहरूले जति ।
त्यसको त्यो फल भोग गर्छ कसरी * कस्तो स्थितीमा कति५७
त्यस्को कर्म कहाँ रहन्छ जब त्यो * जानेछ प्राणी मरी ।
मेरो चित्त बुझाइबक्सनुहवस् * यस्मा गुरो ! राम्ररी ॥
लागे सिद्ध बुझाइ भन्न खुशिले * बिन्ती सुनी शिष्यको ।
बाबू ! गर्नु सदैव कर्म शुभ नै * कर्तव्य हो व्यक्तिको ॥५८

त्यस्को जो विपरीत चल्दछ सधैं * बाँची रहन्छु भनी ।
आयू क्षीण भएर मर्दछ छिटै * वेला नपुग्दै पनी ॥
उल्टो बुद्धि भएर जान्छ जनको * आयो बुढ्याइँ जब ।
त्यस्ले भोजन गर्छ, माग्छ मन जे* मीठो नमीठो सब ॥५९॥
थोरै भोजन गर्छ फेरि कहिले * बर्ता नपच्ने गरी ।
दूषित् अन्न विभिन्न दुर्गुण हुने * खाला कहीं बेसरी ॥
होला लम्पट भोगमा र कहिले * गर्नेछ बर्ता श्रम ।
कैह्ले रोक्दछ वेग मूत्र-मलको * हेलाँ गरी त्यो जन ॥६०
वृद्धि भैकन वात, पित्त, कफको * पक्रन्छ रोगादिले ।
अर्को गर्छ शरीर धारण त्यजी * त्यो देह जीवात्मले ॥
शस्त्राघात र अग्निमा र जलमा * मर्नेछ जो झुण्डिई ।
भोगी कष्ट अनेक, देह त्यजि त्यो * जन्मन्छ पापी गई ॥६१
आजै मर्नुपरोस् कि कल्पभरि नै * बाँची रहे तापनी ।
जान्नूपर्दछ जीव एक कहिल्यै * मर्दैन आत्मा भनी ॥
जस्ले गर्छ विचार आफ्नु मनमा * यो तत्त्वको राम्ररी ।
त्यस्लाई सुख दुःख हुन्न कहिल्यै * जानेछ पारी तरी ॥६२॥
शिक्षा काश्यपलाइ राम्ररि दिए * कल्याण गर्ने जब ।
अन्तर्धान भए त्यसै बखतमा * ती सिद्ध ज्ञानी तब ॥
यो आख्यान सुनाइ फेरि हरिले * आज्ञा भयो अर्जुन !
भन्दैछु इतिहास यै विषयको * अर्को म योटा सुन ॥६३
गर्थे चिन्तन ब्रह्मको द्विज कुनै * एकान्तको स्थानमा ।
तिन्को ब्राह्मणिले कुनै दिन भनिन्* बिझ्ने गरी चित्तमा ॥
गर्नू छैन कमाइ वस्तु छ फगत् * भक्ती गरी ध्यानमा ।
गर्दैनन् तप दान यज्ञ यिनि क्यै * आनन्दका साथमा ॥६४

आफ्ना जो व्यवहार धर्महरू छन् * त्यागी दिंदा त्यो पनी ।
गर्दैनन् उपदेश केहि हितको * कैह्ले मलाई यिनी ॥
मेरो के गति हुन्छ हे शिव ! भनी * धेरै गरिन् गन्थन ।
पत्नीको सुनि बात शान्त मनले * बोल्दा भए ब्राह्मण ॥६५॥
कल्याणी ! तिमिले भने जति सबै * साँचा कुरा हुन्, तर ।
द्रव्योपार्जन, यज्ञ, दान, जप जे * सत्कर्म गर्छन् नर ॥
तिन्लाई शुभकर्मका फलहरू * संसारमा मिल्दछन् ।
पुण्यक्षीण हुँदा तिनै घरि-घरी * आपत्तिमा पर्दछन् ॥६६॥
त्यस्ता दुर्जनले सुशील र सुखी * देखे छिमेकी भने ।
गर्छन् द्रोह वृथा प्रयत्न दिनहूँ * तिन्को नजाती हुने ॥
मेरो द्रोह पनि कदापि नगरुन् * भन्ने विचारीकन ।
संसारी सुख भोगको म सुमुखी ! * इच्छा कवै गर्दिनँ ॥६७॥
शिक्षा दिन्छु शुभे ! सुनीरहु तिमी * एकाग्र पारी मन ।
त्याग्नूपर्दछ लोकका सुख सबै * मिथ्या विचारीकन ॥
पृथ्वी, सूर्य र चन्द्रमा, सुरपती * वायू, दिशा श्री हरी ।
आगो, मित्र, प्रजापती दस यिनै * होता तयारी गरी ॥६८॥
शब्द, स्पर्श र रूप, गन्ध, रस औ * वाणी क्रिया सद्गति ।
शक्ती औ मल-मूत्रत्याग दस हुन् * अंगादि त्यस्का सति !
जिह्वा, नेत्र, त्वचा र कान, कर औ * पाऊ दुवै नासिका ।
जानी लेउ गुदा, उपस्थ दस हुनू * कर्ताहरू यज्ञका ।६९॥
सारा इन्द्रिय रोकि वेग मनको * जो गर्दछन् साधना ।
चाँडै पुग्दछ यज्ञले दुख टरी * ती व्यक्तिको कामना ॥
जो जन् नित्य विकार हीन र सदा * यो सृष्टि देखी पर ।
जो देखेर चिनिन्न, पक्कि करले * पक्किन्न जुन् ईश्वर ॥७०

त्यै हुन् ब्रह्म भनी विशुद्ध मनले * तिनकै गरे चिन्तन ।
मिल्नेछौ गइ श्रेष्ठ ब्रह्मपदमा * यो देह त्यागीकन ॥



श्रीकृष्णद्वारा गुरु-शिष्यको उदाहरण



उतङ्कले कुण्डल ल्याएर दिएको

पत्नीलाई दिए अनेक थरिका * शिक्षाहरू विप्रले ।
तिम्रो चित्त हुनेछ शुद्ध सहजै * हे पार्थ ! यो ज्ञानले ॥७१

उत्तङ्क मुनिको आख्यान :—

हे राजन् ! हरि हस्तिनापुरमहाँ * बस्नूभयो क्यै दिन ।
जान्छु द्वारवती भनेर सबको * शान्ती गराई मन ॥
बैह्नीलाई लिएर पत्निसंगमा * प्रस्थान गर्नू भयो ।
पाल्नुभो हरि श्रेष्ठ आश्रम जहाँ *उत्तङ्कजीको थियो ॥७२
राखी आसन श्रेष्ठ, पूजन गरी * सोधे—प्रभो केशव !
होला पाण्डवको र वीर कुरुको * सम्बन्ध राम्रो अब ॥
तिनको छिन्नु भयो विवाद कि त्यसै * फिर्नुपर्‍यो हे हरि !
जानी रक्षक बस्तछन् हजुरकै * आशा भरोसा गरी ॥७३
आफ्नो भाग लिएर पाण्डवहरू * होलान् सुखी यो घरी ।
॥तिनको हाल यथार्थ वर्णन गरी * आज्ञा हवस् हे हरि ॥

यो बिन्ती मुनिको सुनेर रणको * गर्नुभयो वर्णन ।
बर्ता जिद्दी गरी सबान्धब मरे * भूपाल दुर्योधन ॥७४॥
यो आज्ञा हरिको सुनीकन भए * उत्तङ्क उत्तेजित ।
बोले रोक्नुभएन कृष्ण किन हो * सम्झाइ राम्रोसित ॥
सम्बन्धी सब वीर कौरव थिए * आश्रित् हजुर्का जब ।
सक्थे लड्न कहाँ स्वयं हजुरको * इच्छाविना ती सब॥७५॥
सामर्थी भइ गर्नुभो सकलको * त्यस्तो उपेक्षा किन ।
दिन्छु श्राप हजूरलाइ अहिले * दुःखी छ मेरो मन !
आज्ञा भो हरिले रिसाइ मुनिले * हप्की दिएको सुनी ।
व्यर्थैमा तप नाश गर्नु यसरी * हो मूर्खता हे मुनी ! ॥७६
तत्त्वज्ञान बताइबक्सनुभयो * तिन्लाइ श्री कृष्णले ।
पाए दर्शन विश्वरूप हरिको * सत्पात्र उत्तङ्कले ॥
आज्ञा भो मुनिलाइ इच्छित कुनै * मागेर लेऊ बर ।
मागेथे मरुभूमिमा जल दिनोस् * पर्याप्त योगेश्वर ! ॥७७॥
पानी प्राप्त हुनेछ उत्तम मुने ! * इच्छा गरेका घरी ।
यस्तो अति दिएर द्वारवतिमा * जानूभयो श्री हरी ॥
सोधे भूपतिले-भए किन मुनी * उत्तंकजी क्रोधित ।
सामुन्ने हरिकै वृथा किन भए * ती श्रापमा उद्यत ।७८॥
वैशम्पायनले भने गुरु थिए * तिन्का मुनी गौतम ।
तिन्लाइ खुशि पार्न खूब दिनहूँ * उत्तंक गर्थे श्रम ॥
सेवामा गुरुकै भए तिनि बुढा * थाहै नपाई जब ।
गर्थे क्वै दिन ती विचार मनमा * बूढो भएँछु अब ॥७९॥
सोधे गौतमले बुझेर मनको * तिन्को दुखी भावना ।
मान्दैछौ किन दुःख जाउ घरमा * पुग्ला सबै कामना ॥

बाबू ! रूप अठार वर्ष जतिको * आफ्नो बनाऊ अनि ।
कन्यादान गरेर दिन्छु अहिले * छोरी सुशीला गुणी ॥८०
यो आज्ञा गुरुको सुनेर तपको * शक्ती हुनाले गरी ।
श्री उत्तङ्क युवा बनीकन गरे * आफ्नू बिहा त्यै घरी ॥
सोधेथे गुरु-पत्निलाइ तिनिले * आमा ! हजुर्ले पनि ।
मौका चाकरिको कुनै दिनुहवस् * हो दास आफ्नै भनी॥८१
मेरो जो छ प्रभाव श्रेष्ठ तपको * जान्नूभएकै छ त्यो ।
गर्ला हजिर दासले सहजमै *इच्छा छ जुन् वस्तुको ॥
लागिन् ती गुरु-पत्नि भन्न खुशिले* बिन्ती सुनी शिष्यको ।
बाबू ! कुण्डल ल्याउ शक्तिछ भने * सौदासकी पत्निको ॥८२
घुम्थे श्राप परेर जङ्गलमहाँ * राजा बनी राक्षस ।
हे राजन् ! मुनिले गरे नृपकहाँ * पुग्ने ठुलो साहस ॥
बोले भूपति-खोज्दथें म वनमा * आहार आफ्नू मुनि !
भेट्टाएँ तिमीलाइ, भेजिदिनुभो * गोविन्दले खा भनी॥८३॥
तिन्को बात सुनेर सादर भने * आफ्नू इरादा जब ।
दिन्छिन् ती दमयन्तिले मुनि, त्यहीं* जाऊ भनेथे तब ॥
मागे कुण्डल ती अलभ्य मुनिले * रानीकहाँ गैकन ।
आज्ञाले नृपको दिइन् खुशि भई * त्यस्को बताई गुण ॥८४॥
पायो कुण्डल नागले पृथिविमा * राखेर उत्तंकले ।
पाए मद्दत इन्द्रको अनि दिए * पातालमा नागले ॥
ल्याई कुण्डल त्यो ठुलो श्रम गरी * सुम्पे अहिल्याकन ।
ज्ञानी गौतमलाइ सादर गरे * पातालको वर्णन ॥८५॥

उत्तङ्कलाई वर इच्छित बक्सिएर ।
राजी गराइकन आशिष पाइ धेर ॥

द्वारावती पुगि सबैकन खुशि पारी
सानन्द क्यै दिन बसे त्यहिं नै मुरारी ॥८६॥

पाण्डवहरूको हिमालयतिर प्रस्थान र गर्भस्थ परीक्षितको श्री कृष्णद्वारा रक्षा—

राजन् ! श्री हरि द्वारिकापुरितरफ् * पाल्नूभएथ्यो जब ।
शिक्षा धर्म-कुमारलाइ दिनुभो * श्री व्यास आई तब ॥
डाकी ब्राह्मण स्वस्तिवाचन गरी * हेरेर राम्रो दिन ।
धेरै सैन्य लिएर पाण्डव हिंडे * सम्पत्ति त्यो ल्याउन ८७
लागे उत्तरतर्फ जङ्गल नदी * नाघ्दै ठुला पर्वत ।
गर्दै पूजन स्नान तीर्थहरुमा * श्रद्धा र भक्तीसित ॥
राजन् ! वास बसे प्रसन्न मनले * गंगोत्तरीमा गई ।
गंगा - स्नान र शम्भु पूजन गरे * अत्यन्त हर्षित् भई ॥८८
दानी शङ्करको र व्यास मुनिको * शिक्षा कृपाले गरी ।
थाले खन्न असंख्य सम्पतिहरू * निस्के त्याँ बेसरी ॥
हात्ती, गर्दभ, अश्व, ऊँट, रथमा * राखेर त्यो सम्पति ।
लागे फर्कन वीर पाण्डवहरू * सानन्द हे भूपति ॥८९॥
छोरा, नाति, पनाति, बान्धव लिई * उत्साहका साथमा ।
पाल्नूभो हरि हस्तिनापुरमहाँ * राजन् ! त्यही बीचमा ॥
आई श्री धृतराष्ट्र औ विदुरले * गर्थे ठुलो स्वागत ।
राखे बन्धुसहित् ठुलो महलमा * अत्यन्त राम्रोसित ॥९०॥
हे जन्मेजयजी ! त्यसै बखतमा * तिम्रा पिता जन्मिए ।
त्यो संवाद सुनी थिए जति त्यहाँ * पैहे त खुशी भए ॥
कुन्ती द्रौपति उत्तरा र हरिकी * बैह्नी सुभद्रा सती ।
थाले गर्न विलाप बेसरि रुंदै * हे रुक्मिणीका पति ॥९१॥

मुर्दा बालक जन्मियो हजुरकै * साम्रू छ हे केशव !
हाम्रो दुःख बुझी जिलाउनुहवस् * यस्लाइ चाँडो अब ॥
द्रौणी दुष्ट भएर बालक मऱ्यो * गर्भस्थ ब्रह्मास्त्रले ।
यस्को गर्नुहवस् निवारण प्रभो ! * आफ्नो कुनै शस्त्रले ॥९२
मर्नैछिन् नत उत्तरा शिशु तथा * वैधव्यको शोकले ।
के भन्छन् प्रभुलाइ दुर्गति यहाँ * देखेर यो पार्थले ॥
पानी, पिण्ड दिएर पितृगणको * उद्धार गर्ने थियो ।
त्यस्को मृत्यु भएर बीज कुलको * श्रीपाण्डुको नाशियो ॥९३
देखी दुर्गति त्यो विलाप सबको * सुन्नूभएथ्यो शव ।
मुर्दा बालक काखमा लिइ त्यहीं * बस्नूभयो केशव ॥
पैह्ले शान्त गराइबक्सनुभयो * ब्रह्मास्त्र ती विप्रको ।
पानी मागि अचाइ साम्रु सबका * आज्ञा भयो बात यो ॥९४
गर्छु आदर विप्रको, म कहिल्ले * झूटो कुरा बोल्दिनँ ।
अर्काको उपकार गर्दछु सदा * सद्धर्मको पालन ॥
केही सत्य भए ममा प्रण गरी * भन्छु सबैले सुन ।
होला जीवित वंश पाण्डुसुतको * यो उत्तराको धन॥९५॥
आज्ञा गर्नुभयो जसै प्रभुजिले * त्यस्तो प्रतिज्ञा गरी ।
रोयो जीवन पाइ बालक सबै * खुशी भए बेसरी ॥
लावा पुष्प, अबीर देवगणले * वर्षा गरे सादर ।
जै - जैकार गरे मिलेर सबले * हे कृष्ण ! योगेश्वर॥९६
यिनूको नाम भयो परीक्षित भनी * आज्ञा भयो कृष्णले ।
रक्षा पाण्डव वंशको हुन गयो * हे भूप ! त्यो युक्तिले ॥
आए सैन्यसमेत पाण्डहरू * संपत्ति धेरै लिई ॥
पाई दर्शन कृष्णका चरणको * ढोगे सबैले गई ॥९७॥

बस्नूभयो हरि त्यहीं मखका निमित्त ।
गर्दै गए सकल वस्तु सबै दुरुस्त ॥
सल्लाह जुन् किसिमको हरि बक्सिइन्थ्यो ।
तैयार त्यै किसिमले सब वस्तु हुन्थ्यो ॥९८॥

अश्वमेध यज्ञारम्भः—

वैशम्पायनले भने खुशि भई * भूपाल जन्मेजय !
गर्छु यज्ञ भनेर धर्मसुतले * गर्दा भए निश्चय ॥
हेर्दै कोमल शुभ्र औ कमल झैं * श्री कृष्णको पाउमा ।
बोले गर्दछु अश्वमेध अब यो * उत्साहका साथमा ॥९९
यस्ले पाप पखाल्छ बन्धु-वधको * भन्ने विचारीकन ।
ल्याएँ उत्तरको गएर गिरिमा * मैले प्रशस्तै धन ॥
श्री योगेश्वरले प्रसन्न मनले * आज्ञा भयो भूपति !
भन्नू योग्य छ यो कुरा हजुरले *आनन्द लाग्ने अति॥१००
यज्ञारम्भ छिटै गराउनुहवस् * शंका नमानी अब ।
मैले पूर्ण गराउँला जति जहाँ * पर्नेछ गाह्रो सब ॥
हुन्थ्यो बात यता उपस्थित उता * श्री व्यास ज्ञानी भए ।
पाद्यार्घादि गरेर धर्म-सुतले * तिन्लाइ सोधीलिए ॥१॥
ल्याएँ उत्तरमा गई हजुरले * आज्ञा भएको धन ।
पूरा त्यो मख हुन्छ के गरि भनी * चिन्तित् छ मेरो मन ॥
होला त्यो हयमेध पूर्ण यसरी * त्यो काम गर्नु भनी ।
शिक्षा पाउँ म धर्मको र हितको * कर्तव्यको हे मुनि ! ॥२
यस्तो विन्ति सुनेर धर्मसुतको * भन्नूभयो व्यासले ।
राजन् ! वर्णन गर्छु जो नियम त्यो* सुन्दै रहे ध्यानले ॥

आऊला जब पूर्णिमा तिथि यही * वर्षान्तमा चैत्रको ।
राखी ब्राह्मण श्रेष्ठ शास्त्र विधिले * दीक्षा लिनू यज्ञको ॥३॥
गर्नू पर्दछ ब्रह्मचर्य व्रतको * राम्रो गरी पालन ।
सुत्नू भूमिमहाँ र चर्म मृगको * गर्नू सफा धारण ॥
खानू अन्न हविष्य, त्याग्नु मनको* सम्पूर्ण दुर्भावना ।
अर्काको उपकार गर्नु, नदिनू * जीवात्ममा यातना ॥४॥
गर्नू पालन धर्मशास्त्रहरूले * आज्ञा दिएको जति ।
गर्नेछौं अरु काम हामि सबले * सम्पूर्ण हे भूपति !
डाकी श्रेष्ठ मुनी ऋषीश्वर तथा * ज्ञानी गुणी ब्राह्मण ।
गर्नू दान सुवर्ण, अन्न, धनको * श्रद्धा बढाईकन ॥५॥
गर्नू पर्दछ भीमले नकुलले * साम्राज्यको शासन ।
गर्नेछन् सहदेवले महलको * रक्षा बसी क्यै दिन ॥
योद्धा अर्जुन अश्वको पछि-पछि * जाऊन् बनी रक्षक ।
गर्नेछौ तिमि काम पूर्ण मखको * राजन् प्रजापालक ! ॥६॥
शक्ती मिल्दछ हामिलाइ बलियो * यो कामना कृष्णको ।
तिम्रो पूर्ण हुनेछ काम सहजै * यो युक्तिले यज्ञको ॥
चाहिन्छन् जति वस्तु जुन बखतमा * त्यस्को तयारी गर ।
निम्ता बाँड्न भनेर चौतरफमा * आफ्ना पठाऊ चर ॥७॥
आज्ञा व्यासजिको युधिष्ठिरजिले * यस्तो सुनेथे जब ।
लागे भन्न भई प्रसन्न मनले * डाकेर भाई सब ॥
आज्ञा व्यासजिले भयो जति यहाँ * त्यस्मा रही तत्पर ।
आफाफ्नो सब काम योग्य रितले * तत्काल पूरा गर ॥८॥
यस्तो पाइ हुकुम् युधिष्ठिरजिको * उत्साहका साथमा ।
चाहिन्थ्यो जति जे जहाँ लगिदिए * त्यो वस्तु त्ये स्थानमा ।

आएथ्यो जब चैत्रको सुख दिने * त्यो पूर्णिमाको दिन ।
दीक्षा धर्मकुमारलाइ दिनुभो * श्री व्यास आईकन ॥९॥
ज्ञानी विप्र तथा मुनी र ऋषिको * पैह्ले गरी पूजन ।
गाई, वस्तु सुवर्ण, अन्न-धनले * सन्तुष्ट पारीकन ॥
भूमि उत्तम एक योजन जती * खोजेर राम्रो गरी ।
पारे शुद्ध हलो बनाइ सुनको * जोतेर सोही घरी ॥१०॥
चाहिन्छन् जति कुण्ड, वस्तुहरु जो * त्यो यज्ञ गर्दा जहाँ ।
पारी कुण्ड तयार, वस्तुहरु त्यो * ल्याएर राखे त्यहाँ ॥
राखे व्यासजिलाइ धर्मसुतले * आचार्यको स्थानमा ।
ब्रह्मा भैकन याज्ञवल्क्य मुनिजी * बस्नूभयो यज्ञमा ॥११॥
ज्ञानी नारद, श्रेष्ठ कश्यप ऋषी * श्री अङ्गिरा सद्गुणी ।
श्री पौलोम तथा थिए अरु पनी * ज्ञानी तपस्वी मुनी ॥
सारालाइ खटाइ कार्य दिनुभो * श्री व्यासजीले जब ।
आफाफ्नो लिइ भाग स्थानहरुमा * बस्ता भए ती सब ॥१२॥
थाले त्यो हयमेध शास्त्रविधिले * पढ्दै ऋचा वेदको ।
लिन्थे आहुति देवताहरु गई * आनन्दले यज्ञको ॥
पैह्ले दीन तथा दरिद्र जनमा * बाँडेर धेरै धन ।
दीक्षित् भै यजमानको लिनुभयो * भूपालले आसन ॥१३॥
वेला भो जब श्यामकर्ण हयको * पूजा गरी छाड्िने ।
ल्याए यज्ञमहाँ लगाइ गहना * लूगा सबै टल्कने ॥
घोड़ाको विधिसाथ धर्मसुतले * गर्दा भए पूजन ।
लेखे पत्र मगाइ एक सुनको * भूपालको वर्णन ॥१४॥
जो जो छन् अहिले धरातलमहाँ * साना ठुला भूपति ।
हेरुन् पत्र अवश्य धर्मसुतको * यो उक्ति लेखे जति ॥

जानुन् भूपहरू "युधिष्ठिर म हूँ * विख्यात राजा भनी ।
छाड़ेको हय अश्वमेध मखको * जानुन् सबै यो पनी ॥ १५
यस्को रक्षक रूपमा पछि-पछी * हिंड्छन स्वयं अर्जुन ।
जस्ले यो हय पक्रला, समरमा * मार्छन् लड़ी त्यस्कन ॥
पैह्ले भारत युद्धमा हुन गयो * संहार ठूलो भनी ।
गर्दछु हयमेध पाप अघिको * नाशिन्छ मेरो भनी ॥ १६
जस्लाई छ घमण्ड वीर हुँ भनी * त्यस्ले समाओस् हय ।
शक्तीहीन भए परोस् शरणमा * श्री पार्थको निर्भय ॥"
यस्ता उक्तिहरू अरू पनि स्वयं * लेखे श्री व्यासले ।
छाड़े त्यो हयलाइ पूजन गरी * श्री धर्मका पुत्रले ॥ १७॥
भन्छन् धर्मकुमार अर्जुन ! तिमी * यो अश्वको साथमा ।
रक्षा गर्न भनेर जाउ खुशिले * यो जान्छ जुन देशमा ॥
होला मङ्गल औ भएर विजयी * चाँड़ै यहाँ फर्कनू ।
जो चाहन्न लड़ाइँ त्यस्कन तिमी * हे भाइ ! छाड़ीदिनू ॥ १८
भाग्ने, मूर्च्छित, शस्त्रहीन विरथी * नारी र नाबालक !
यिनलाइ रणमा नमार्नु कहिले * हे शत्रु—संहारक !
माफी पाउँ म पर्दछु शरणमा * भन्नेछ जुन् व्यक्तिले ।
संझी धर्म नमार्नु त्यस्कन तिमी * हे वीर ! शस्त्रास्त्रले ॥ ॥ १९
चाँड़ै त्यो स्थल छाड़ि उत्तर दिशा * पक्र्यो जसै अश्वले ।
दाजूको सुनि अर्ति अर्जुन पछी * लागे ठुलो वेगले ॥
वस्त्राभूषणले सुसज्जित भई * जान्थ्यो अगाड़ी जति ।
तिनूको वर्णन गर्दथे जनहरू * आनन्द मानी अति ॥ २०

त्रिगर्त सिन्धु तथा ज्योतिषपुरका राजाहरूसित युद्ध

राजन् ! भारत युद्धमा नृपहरू * जो जो मरेका थिए ।
तिन्का बान्धव पार्थको रिस गरी * मौका विचार्दै थिए ॥
पुग्दो भो हय त्यो त्रिगर्तहरुको * सीमानगीचै जब ।
आए लड्न भनी सुसज्जित भई * विख्यात योद्धा सब ॥२१
पैल्हे अश्व लगे समाइ मखको * हेरेर चारै तिर ।
ढाकेथे रथ पार्थको सब मिली * छाड़ी अनेकौं शर ॥
लाग्यो चोट तथापि क्रोध मनमा * त्यस्को नराखीकन ।
बोले अर्जुन—'दुष्टहो ! किन लड़ी* फाल्छौ वृथा जीवन ॥२२
जाओ माफ म गर्छु धर्म-सुतको * आज्ञा हुनाले गरी ।
त्यस्तो बात सुनेर क्रोधित भए * ती वीर झन् बेसरी ॥
ती राजाहरूका प्रधान मुखिया * श्री सूर्यवर्मा थिए ।
तिनले अर्जुनलाइ बाणहरूले * घाऊ गराईदिए ॥२३॥
तिन्का बाणहरू गराइ टुकरा * छाडेर आफ्नो शर ।
घांऊ लागि कती ढले त्यहिं कती * भागे डराई घर ॥
आए पर्न भनी जती शरणमा * तिन्लाई माफी दिए ।
घोड़ा मुक्त गरी, भएर विजयी * बढ्दै अगाड़ी गए ॥२४
प्राग्ज्योतिष्पुरमा कुनै दिन पुग्यो * त्यो अश्व घुम्दै जब ।
पक्रेथे हय वज्रदत्त नृपका * आएर सेना सब ॥
छोरा हुन् भगदत्तका ति बलमा * आफ्नै पिता झैं थिए ।
सम्झी मृत्यु पिताजिको समरमा * ती क्रोधले तम्सिए ॥२५
थीयो योजनपाद नाम बलियो * विख्यात ऐरावत ।
आए लड्न चढेर सोहि गजमा * ती पार्थ योद्धासित ॥

हाँके त्यो गजलाइ पार्थतिर नै * कुल्चाइ मारीदिन ।
तिन्को भाव बुझेर श्री विजयले * रोके रिसाईकन ॥२६॥
गर्थ्यो यत्न जती गजेन्द्र रणमा * बढ्ने अगाड़ीतिर ।
हुन्थ्यो घायल बेसरी शरिरमा * लागेर तीखा शर ॥
लाग्यो सर्न पछाड़ि मानिसहरू * किच्तै र मिच्तै जब ।
त्यो देखीकन वज्रदत्त नृपती * झन् मुर्मुरिन्थे तब ॥२७
यौटा शक्ति लिई भने–'अब छिटै * मर्छौ तिमी अर्जुन !
केही शक्ति भए बचाउ रणमा * आफ्नो सुखी जीवन' ॥
येती बात भनेर गर्जन गरी * त्यो शक्ति छाड़ीदिए ।
लाग्दा चोट ठुलो विशाल शिरमा * क्यै बेर ती आत्तिए ॥२८
मौका पाइ गजेन्द्र क्यै अघि बढ्यो * संकेतले भूपको ।
हात्तीको सुनि घोर गर्जन, फिऱ्यो * क्यै चेतना पार्थको ॥
गर्जे शंख फुकेर उग्र स्वरले * थर्काई युद्धस्थल ।
तीखा बाण गरी प्रहार पहिले * पारी दिए घायल ॥२९॥
मर्मस्थान फुटी बग्यो रगतको * धारा नराम्रो गरी ।
तीनोटा शरले गिऱ्यो समरमा * त्यो श्रेष्ठ हात्ती मरी ॥
हाम्फालीकन वज्रदत्त नृपले * रक्षा गरे प्राणको ।
हाने एक गदा रिसाइ शिरमा * ताकेर श्री पार्थको॥३०॥
पाँचोटा शरले गराइ टुकरा * ती भूपतीको गदा ।
पारे घायल, गर्वको अघि कुरा * बर्त्ता गरेको हुँदा ॥
चिन्ताग्रस्त भए त्यहीं नरपती * देखेर आफ्नो स्थिति ।
रक्षा जीवनको हुनेछ कसरी * सम्झन्छ मेरो गति ॥३१॥
गर्थे चिन्तन वज्रदत्त मनमा * धिक्कार मानीकन ।
देखी दुर्गति भूपको गरि दया * बोल्दा भए अर्जुन ॥

हे राजन् ! मनमा नमान तिमिले * केही कुराको डर ।
मैले माफ दिएँ कसूर जति हो * फर्केर जाऊ घर ॥३२॥
हे राजन ! अब हस्तिनापुर तिमी * त्यो यज्ञमा आउनू ।
जो लाग्ने कर श्री युधिष्ठिरजिको * शंका नमानी दिनू ॥
त्यो आज्ञा सुनि पार्थको नृपतिले * स्वीकार गर्दा भए ।
आफ्ना सैन्य जती लिएर संगमा * दर्बारमा फर्किए ॥३३॥
नाघ्दै जङ्गल औ नदी गिरिहरू * हिंड्दो भयो त्यो हय ।
डुल्दै क्वै दिन सिन्धु देश पुगिगो * हे भूप ! भै निर्भय ॥
जस्का भारत-युद्धमा अघि मरे * छोरा, पिता, बान्धव ।
साटो फेर्न भनेर पक्रि हय त्यो * आए रिसाई सब ॥३४॥
बर्साए सर बेसरी सब मिली * घेरेर चारैतिर ॥
घाऊ अर्जुनको भयो तनभरी * लागेर तीखा शर ।
काटे त्यो शरजाल श्री विजयले * तत्काल सारा तर ॥
पारे घायल भूपती सब मिली * तिन्को शरीरै भर ॥३५॥
राखेथे रथमाथि गाण्डिव धनू * पीडा हुँदा बेसरी ।
मोहाच्छन्न भई ढले रथमहाँ * श्री पार्थ मूर्छा परी ॥
भूमी कम्प भयो गिरे पृथिविमा * उल्का अनेकौं थरी ।
भागेथे पशु-पक्षि चौतरफको * उत्पात देखी डरी ॥३६॥
देखेथे जब देवता, ऋषि मुनि * सम्पूर्णले त्यो स्थिति ।
गर्थे मङ्गल कामना विजयको * कल्याणको ती अति ॥
तिन्ले मन्त्र जपेर आशिष दिई * रक्षा गरेथे जब ।
आयो चेत किरीटिको शरिरमा * उत्साह ठूलो तब ॥३७॥
बर्साए शर शत्रुको दलभरी * पानी परे झैं गरी ।
थाले डढ्न ति अग्निमा खर लगी* हाले सरी बेसरी ॥

हाहाकार पऱ्यो सुनेर धनुको * टंकार भागे कति ।
देखी सैन्धवको विनाश मनमा * सन्ताप मानी अति ॥३८
छोरी श्री धृतराष्ट्रकी गुणवती * श्री दुःशला जो थिइन् ।
नातीलाइ लिएर अर्जुनकहाँ * तत्काल पुग्दी भइन् ॥
लागिन् भन्न रुँदै-'लडाइँ अब यो* हे दाजु ! रोक्नुहवस् ।
हो यो भानिजको सुपुत्र र दया * यस्माथि गर्नुहवस् ॥३९
यस्को बाबु मरी भएर टुहुरो * दुःखी छ यो बालक ।
यो गर्दैछ प्रणाम हेरिदिनुहोस् * हे शत्रु—संहारक !
श्री दुर्योधन औ जयद्रथ दुवै * दोषी थिए तापनी ।
हामी छौं टुहुरा क्षमा गरिदिनोस् * हुन्न बन्धु आफ्ना भनी४०
दोषी सैन्धव हुन् तथापि अब यो * संग्राम रोकीकन ।
माफी बक्सनुहोस् फिरेर घरमा * जाउन् लिई जीवन ॥
बैह्नीको सुनि यो कुरा मनमनै * दुःखी भई अर्जुन ।
भन्छन् जाउ लिएर सैन्धवहरू * शंका नमानीकन ॥४१॥
आशीर्वाद म दिन्छु ईश्वर गरुन् * कल्याण तिम्रो सदा ।
मर्छन् जीव समस्त काल गतिले * बुद्धी बिगारी दिंदा ॥
मैले क्षत्रिय धर्मलाइ बहिनी ! * धिक्कार हो भन्दछु ।
व्यर्थै पाप गरेर बान्धवहरू * मारें तथा मार्दछु ॥४२॥
जस्ले भन्दछ काम गर्दिनँ म यो * हो पाप लाग्ने भनी ।
गर्न पर्दछ कालको वश परी * त्यै काम दोषी बनी ॥
सोही कारणले नमान मनमा * सन्ताप व्यर्थै अब ।
बैह्नी ! जाउ तिमी फिरेर घरमा * सारा लिई सैन्धव ॥४३
सुन्दा अर्जुनको कुरा खुशि भयो * श्री दुःशलाको मन ।
फर्किन् वीर सबै लिएर घरमा * आनन्द मानीकन ॥

लागे हिड्न पछि-पछि विजयजी * जान्थ्यो जंता त्यो हय ।
रक्षाखातिर वीर सैनिकहरू * हिंड्थे सबै निर्भय ।।४४।।

बभ्रुवाहनको युद्धमा पार्थको पुनर्जीवन :—

डुल्दै अश्व पुग्यो मणीपुरमहाँ * हे भूप ! कोही दिन ।
अर्जुनका सुत बभ्रुवाहन बसी * गर्थे त्यहाँ शासन ॥
बाबू आइपुगे भनेर मनमा * आनन्द मानीकन ।
आए भेट्न भनी लिए सँगमा * रत्नादि धेरै धन ॥४५॥
सम्झी क्षत्रिय धर्म केहि नलिई * सम्पत्ति त्यो भेटको ।
लागे अर्जुन भन्न हेरि मुखमा * क्यै रोषले पुत्रको ॥
मेरो पुत्र भएर वीर यसरी * लाछी बनेको किन ?
पर्थ्यो अश्व समाइ लड्नु अहिले * तैंले रिसाईकन ।।४६॥
त्यागी क्षत्रिय धर्म वीर ! यसरी * धिक्कार हो आउनु ।
मान्छन् उत्तम धर्म क्षत्रियहरू * संग्राममा तम्सिनू ॥
पर्थ्यो स्वागत गर्नु शस्त्रहरूले * आएर संग्राममा ।
चाँड़ो आइज लड्न क्षत्रिय भए * उत्साहका साथमा ॥४७
यस्तो बात सुनी पिता र सुतको * आइन उलूपी त्यहाँ ।
लागिन् भन्न बुझाइ पुत्रकन ती * दुःखी भई मन्महाँ ॥
हे बाबू ! यदि लड्नमै सुख ठुलो * मान्छन् भने पार्थले ।
यिन्को चित्त बुझाउ योग्य रितले * संग्राममा शस्त्रले। ४८॥
बाबूबाट तिनी तिरस्कृत निकै * पैल्हे भएकै थिए ।
आमाको सुनि बात फर्कि घरमा * लड्ने इरादा लिए ॥
सारा शस्त्र लिई चढेर रथमा * तत्काल आए तिनी ।
आज्ञा सेवकलाइ त्यै घरि दिए * घोड़ा समाओ भनी॥४९

आफू आइ अगाड़ि श्री विजयको * ती छोड्न जागे शर।
देखे शौर्य सुपुत्रको अनि भए * ती लड्नमा तत्पर ॥
काटे बाणहरू समस्त सुतका * टुक्रा अनेकौं गरी।
मारी अश्व र सारथी, रथ ध्वजा * काटी दिए त्यो घरी ५०
छाड़े मन्त्रित पाँच बाण विरथी * पारे पिताले भनी।
लागी त्यो शर पार्थ मोहित भए * योद्धा थिए तापनी ॥
संज्ञा पाइ भए प्रसन्न सुतको * देखेर त्यो वीरता।
लागे भन्न–'भएँ म हर्षित निके * देखी ठुलो योग्यता॥५१
ठूलो कर्म गरेर नाम कुलको * पारिस निके उज्ज्वल।
दिन्छु आशिष वीर ! धन्य रहिछस् * हो धन्य तेरो बल ॥
छाड्छु बाणहरू सतर्क रहनू * हे बाबु ! तैंले अब।'
येती बात भनेर बाण दसले * हाने रिसाई जब ॥५२
त्यस्ले घायल बभ्रुवाहन भए * धारा बगी रक्तको।
हाने बाण रिसाउँदै हृदयमा * ताकेर श्री पार्थको ॥
छातीमा गइ वेगले सलह झैं * ती बाण लागे जब।
त्यागी प्राण गिरे धनञ्जय, ठुलो * हा हा परेथ्यो तब ॥५३
देखेथे जब बभ्रुवाहनजिले * आफ्ना पिताको गति।
मूर्छा पर्न गई ढले जमिनमा * सन्ताप मानी अति ॥
हे राजन् ! समचार त्यो महलमा * चित्राङ्गदाले सुनिन्।
हा हा नाथ ! भनेर ती समरमा * तत्काल पुग्दी भइन्॥५४॥
लागिन् गर्न विलाप पुत्र-पतिको * देखेर त्यस्तो गति।
स्वामी जानुभयो कहाँ ? हुन गयो * के हेतुले यो गति ?
केही बेर भएर मूर्छित उठिन् * ती चेत पाई जब।
लागिन् भन्न उलूपिलाइ रिसले * दोषी तुल्याई सब ॥५५॥

सुर्ता केहि नमानि व्यर्थ सुतको * उत्साह वृद्धि गरी ।
यो संग्राम गराइ पुत्र पतिको * हत्या गऱ्यौ सुन्दरी !
ठूलो काम गरे समान खुशिले * हेरीरहीछयौ किन ?
देखी मृत्यु पती र वीर सुतको * खूशी छ तिम्रो मन ?॥५६
स्वामी वीर गुणी र धार्मिक तथा * सर्वस्व हाम्रा थिए ।
तिनूले के अपराध वा अहित कुन् * तिम्रो गराई दिए ?
दोषी हुन् भनि ठान्दछयौ यदि तिमी* निर्दोष छन् तापनी ।
माफी माग्छु तिमी क्षमा गर शुभे !* चाँडो दयालू बनी ॥५७॥
तिम्रो दिव्य प्रभाव जान्दछु दिदी !* यस्तो छ भन्ने सब ।
देऊ जीवन पुत्रको र पतिको * हे नाग-कन्या ! अब ॥
राख्छन् स्त्रीहरू धेर तैपनि सदा * निर्दोष हुन्छन् नर ।
स्वामी एक हुने, छ जो नियम यो* स्त्री जातिका खातिर ॥५८
स्त्रीले गर्न हुँदैन धर्म-पतिको * यो नीति उल्लङ्घन ।
मर्यादा तिमि थाम पुत्र-पतिको * ऐले दिई जीवन ॥
मान्दीनौ यदि यो कुरा तिमि भने* भन्छु प्रतिज्ञा गरी ।
त्यागी जीवन तुच्छ, स्वर्ग म पनी* जानेछु साथै मरी ॥५९
सौतालाइ सुनाइ बात यसरी * चित्राङ्गदा सुन्दरी ।
पक्री पाउ दुवै बसिन् विजयको * मर्ने इरादा धरी ॥
आयो होश र बभ्रुवाहन उठे * बर्ता सुते झैं गरी ।
खूशी देखि उलूपिलाइ नगिचै * भन्दा भए त्यो घरी ॥६०
नारीका पतिदेखि श्रेष्ठ अरु क्यै * मानिन्न संसारमा ।
उल्टो देख्छु हजूरलाई म खुशी * श्री पार्थको मृत्युमा ॥
इच्छा पूर्ण हजूरको गरिदिएँ * मानेर आज्ञा उता ।
बोकें पाप ठूलो पिता-वध गरी * मैले वृथामा यता ॥६१॥

प्रायश्चित्त छ के म जान्दिनँ कुनै * यो पापको लोकमा ।
त्यागछु जीवन बस्नुहोस् हजुर नै * आनन्दका साथमा ॥
आमालाइ सुनाइ बात, अब यो * त्यागछु भनी जीवन ।
राजन् ! भूपति बभ्रुवाहन बसे * बाँधेर पद्मासन ॥६२॥
सीताको, सुतको र वीर पतिको * देखी नराम्रो स्थिति ।
लागिन् गर्न विचार नाग-दुहिता * सन्ताप मानी अति ॥
तिन्ले ध्यान गरिन् अलौकिक मणी* सञ्जीवनीको जब ।
तिन्का हातमहाँ अदृश्य गतिले * आईपुगेथ्यो तब ॥६३॥
हो यो प्राण बचाउने मणि सदा * पातालका नागको ।
राखीदेउ म दिन्छु यो हृदयमा * बाबू ! तिमी पार्थको ॥
येती बात भनेर पार्थ-सुतको * हातमा दिइन् त्यो मणि।
राखे त्यो मणि पार्थका हृदयमा * तत्काल बाँचुन् भनी ॥६४
त्यस्को स्पर्श हुँदा धनंजय उठे * निद्रा खुले झैं गरी ।
ढोगी सादर बाबुका चरणमा * बिन्ती गरे त्यो घरी ॥
माफी मागदछु पुत्र हूँ हजुरको * दोषी भए तापनी ।
आज्ञा बक्सनुहोस् प्रसन्न मनले * यो युद्ध रोक्नू भनी ॥६५
यस्तो विन्ति सुनेर वीर सुतको * श्री पार्थ खुशी भए ।
देख्दा पत्नि त्यहाँ उपस्थित हुवै * आश्चर्य मानीलिए ॥
सोधेथे सुतलाइ यो समरमा * आइन् उलूपी किन ।
देख्दैछु म प्रसन्न खूब किन हो * यी नाग-कन्याकन ॥६६
मैले लड्न भनें, लड्यौ तिमि अरू* केही कुरा जान्दिनँ ।
देख्छु चिन्तित वीर ! सैनिक सबै * के हेतुले लौ भन ?
लागे भन्न ... बभ्रुवाहन, भई * त्यो प्रश्नले चिन्तित ।
यस्को कारण सोधिबक्सनुहवस् * सारा उलूपीसित ॥६७ ॥

सोधे अर्जुनले उलूपीसित नै * हे सुन्दरी ! लौ भन ।
नारी भैकन युद्धमा तिमिहरू * आयौ अहीले किन ?
सौताले कि त पुत्रले यदि कहीं * मैले नजानीकन ।
के हानी, अपराध के गरिदियौं * सारा बुझाई भन ॥६८
यस्तो प्रश्न सुनीसकेर पतिको * बोलिन् उलूपी सती ।
सौता वा सुतले तथा हजुरले * के गर्नुहुन्थ्यो खति ॥
गर्छन् आदर बभ्रुवाहन तथा * चित्राङ्गदाले पनी ।
विन्ती गर्दछु युद्धको समयमा * यो हेतु आएँ भनी ॥६९
गर्दछु म प्रणाम वीर ! पहिले * स्वीकार गर्नुहवस् ।
मेरो दोष भए कुनै बखतको * माफी मलाई दिनोस् ॥
पैल्हे भारत युद्धमा हजुरले * लड्ने शिखण्डीसित ।
मार्नु भो किन भीष्मलाइ शरले * आफ्नू चिताई हित ॥७०
पार्थ्यो जानु हजूरले नरकमा * हे नाथ ! त्यो पापले ।
मैले गर्नुपऱ्यो प्रयत्न अहिले * आएर त्यै हेतुले ॥
गङ्गाले जब नाथको छल परी * छोरो गिरेको सुनिन् ।
होला मृत्यु किरीटिको पनी छिटै * यो श्राप तिन्ले दिइन्॥७१
गंगाका परि पाउमा जब गरें * मैले ठुलो चाकरी ।
लागिन् भन्न मलाइ क्वै दिन तिनी* खूशी भएका घरी ॥
मारे भीष्मजिलाइ श्री विजयले * जुन् चालले युद्धमा ।
गर्छन् धर्म त्यजी अनीति त्यसरी * कुन् वीरले लोकमा ॥७२
जस्ले भोग्छ कुकर्मको फल सबै * आफ्नू यही जन्ममा ।
त्यस्ले फेरि मरेर कष्ट सहनू * पर्दैन त्यो नर्कमा ॥
सोही कारण दण्ड पाउनु यही * हो मार्ग कल्याणको ।
मार्नू भीष्मजिलाइ व्यर्थ छलले * हो पाप श्रीपार्थको ॥७३॥

पर्थ्यो भोग्नु मरेर दण्ड यमको * त्यै पापले नै तर ।
मैले श्राप दिएँ यही जुनिमहाँ * उद्धारको खातिर ॥
पक्का अर्जुन मर्दछन् समरमा * आघातले शस्त्रको ।
मर्दा प्राण बचाउनू तिमि गई * हे सुन्दरी ! पार्थको ॥७४

गङ्गाले यसरी बताउनुभयो * युक्ती मलाई जब ।
थालें गर्न विचार मिल्छ कसरी * मौका मलाई अब ॥
योभन्दा सजिलो म फेरि कहिले * पाउन्नँ मौका भनी ।
टारें श्राप हजूरको, दिनुहवस् * माफी दयालु बनी ॥७५


अर्जुनको पुनर्जीवन


उञ्छवृत्तिको उदाहरण

आफ्नू जीवनको विलक्षण कुरा * तिन्ले भनेको सुनी ।
लागे अर्जुन भन्न तारिफ गरी * निर्दोष छचौ भामिनी !
हे सौम्ये ! हयमेधको बखतमा * सारा तयारी गरी ।
साथै आउनु बभ्रुवाहन तिमी * चित्रांगदा सुन्दरी ॥७६॥

केही बेर बसौं गई महलमा * भन्दै थिए पुत्रले ।
दीक्षित छु अहिले म जान्न भनि त्यो * टारीदिए पार्थले ॥

पत्नीलाइ र पुत्रलाइ त्यसरी * राजी गराईकन ।
घोड़ाको पछि लाग्न फेरि अघि झैं * हिंड्दा भए अर्जुन ॥७७

अर्जुनद्वारा मगध र गान्धार आदिका राजाहरूको पराजय :—

घुम्दै अश्व पुगेपछी मगधको * माहिष्मती देशमा ।
पक्रेथे हयलाइ वीरहरुले * उत्साहका साथमा ॥
छोरा श्री सहदेवका नृप थिए * नाती जरासन्धका ।
सानैदेखि ति मेघसंधि नृपती * ज्ञाता थिए नीतिका ॥७८
आए लड्न भनी चढेर रथमा * शस्त्रास्त्र धेरै लिई ।
थाले गर्न प्रहार बाणहरु ती * बढ्दै अगाड़ी गई ॥
त्यो देखेर रिसाउदै लिइ धनू * गाण्डीव श्री पार्थले ।
तिन्का बाणहरू अनेक टुकरा * पारीदिए वेगले ॥७९॥
पारे घायल पार्थलाइ रणमा * तिन्ले रिसाई जब ।
काटे अर्जुनले ध्वजा, रथ, धनू * छत्रादि तिन्का सब ॥
रक्षा गर्न नरेशको जति-जति * सेना अघी सर्दथे ।
लागी बाणहरू तिखा विजयका * तत्काल ती मर्दथे ॥८०॥
आफ्ना सैन्य मरे भनेर नृपले * प्रत्यक्ष देखे जब ।
भन्दै एक गदा लिएर दगुरे * मार्छु तँलाई अब ॥
काटे भूपतिको गदा विजयले * छाड्नै नपाईकन ।
आफू शस्त्र विहीन देखि विरथी * लागे तिनी आत्तिन ॥८१॥
तिनलाई दिइ सान्त्वना विजयले * भन्दा भए भूपति !
सानै छौ अहिले वृथा किन लियौ * लड्ने तिमीले मति ?
माफी दिन्छु तिमी प्रसन्न मनले * फर्केर जाऊ घर ।
आऊ यज्ञ हुँदा लिएर सँगमा * संपत्तिरूपी कर ॥८२॥

बोले सादर मेघसन्धि नृपती * शिक्षा सुनी पार्थको ।
हुन्छु हाजिर यज्ञमा र अहिले * इच्छा पुग्यो युद्धको ॥
यस्तो विन्ति गरी परी चरणमा * लज्जित भई बेसरी ।
बन्धन् मुक्त गराइ अश्व, घरमा * जाँदा भए त्यो घरी ॥८३
त्याहाँबाट हिँडेर अश्व मखको * लाग्यो दिशा पश्चिम ।
जान्थे पार्थ पछी-पछी नरपते * मान्दै नमानी श्रम ।
नाघ्दै देशहरू अनेक पथका * पौंचेर द्वारावती ॥
पारेथे वशमा ति पञ्चनदका * साना ठुला भूपति ॥८४॥
भेटी श्री वसुदेवले विजयको * सम्मान गर्दा भए ।
आफै आइ ति उग्रसेन नृपले * धेरै बिदाई दिए ॥
त्याहाँबाट हिँडेर भूप, पथका * आफ्ना गराई सब ।
श्री गान्धार नरेशको नगरमा * घोड़ा पुगेथ्यो जब ॥८५॥
सम्झी दुर्गति बाबुको समरमा * साह्रै दुखाई मन ।
पक्रे अश्व रिसाउँदै शकुनिका * सत्पुत्र आईकन ॥
आज्ञा धर्म-कुमारको विजयले * सारा सुनाई भने ।
मैले देख्दिनँ वीर हो ! समरले * कल्याण हाम्रो हुने ॥८६
मेरा साथमहाँ लड़ी तिमीहरू * छौ व्यर्थमा मारिने ।
आओ यज्ञ हुँदा लिई कर, यही * बाटो छ रक्षा हुने ॥
सम्झाए यसरी सबै तरहले * ती भूपलाई तर ।
मानेनन् हितका कुरा बरु भए * ती लड्नमै तत्पर ॥८७॥
बर्साई शर बेसरी समरमा * राजा तथा सैन्यले ।
पारे घायल पार्थलाई रणमा * अत्यन्त उत्साहले ॥
तिनको देखि घमण्ड क्रोधित भए * श्री पार्थ योद्धा जब ।
काटेथे शर जाल शत्रुदलको * बाँकी नराखी सब ॥८८॥

छाड़ी बाण अनेक बीरहरूको * संहार गर्दै गए ।
हाहाकार परेर सैनिकहरू * चौतर्फ भाग्दा भए ॥
भागे प्राण बचाउँदै मगधका * राजा डराई जब ।
माताले नृपकी सुनिन् जनहरू * आफ्ना मरेका सब ॥८९

मन्त्रीका संगमा पुगी विजयको * पैह्ले गरी पूजन ।
लागिन् भन्न लड़ाइँ थाम अब यो * संहार हे अर्जुन !
छोरो मूर्ख भएर बीरहरूको * व्यर्थै भयो दुर्गति ।
माफी देउ बचाइ प्राण घरमा * जाऊन् बचेका जति॥९०

तिन्को विन्ति सुनेर श्री विजयले * संग्राम थामीकन ।
गर्दै आदर औ कुरा हित हुने * तिन्को बुझाए मन ॥
हेर्दै श्री मगधेशको मुखतरफ् * भन्दा भए अर्जुन ।
दाजूको शुभ यज्ञका बखतमा * आऊ तिमी सज्जन ॥९१

आमालाई लिई प्रसन्न मनले * जाऊ अहिले घर ।
मामाका सुत हुन् भनीकन गरे * तिन्को निकै आदर ॥
यस्तो अर्ति सुनी गए सब फिरि * आनन्द मानीकन ।
लाग्यो अश्व जता उतैतिर हिंडे * मागी विदा अर्जुन ॥९२

अश्वमेधको समाप्तिः

राजन् ! त्यो हय हस्तिनापुरतरफ् * लाग्यो जसै फर्कन ।
त्यो संवाद सुनेर धर्म-सुतको * खूशी भएथ्यो मन ॥
ल्याए विप्रहरू निकै पर गई * गर्दै ठूलो स्वागत ।
सुन्दा अर्जुनका पराक्रमहरू * सारा भए हर्षित ॥९३॥

आएथ्यो अघिको सुनिश्चित जसै * त्यो चैत्रको पूर्णिमा ।
यज्ञारम्भ भयो युधिष्ठिरजिको * उत्साहका साथमा ॥

आए रत्न लिई जिते जति अघी * चौतर्फका भूपति ।
गर्थे स्वागत भीमसेन सबको * आनन्द मानी अति॥९४
राखे चित्र-विचित्र तोरण ध्वजा * चौतर्फ त्यो यज्ञमा ।
पारे सज्जित पञ्चपल्लवहरू * राखी सबै स्थानमा ॥
जम्मा छन् मणि सम्ब रत्नहरुले * श्री सूर्य झैं टल्कने ।
छन् चारै तिर यज्ञपात्र सुनका * रत्नादिका झल्कने ॥९५
दिन्थे आहुति यज्ञमा द्विजहरू * आज्ञा हुँदा व्यासको ।
दिन्थे आहुति यज्ञमा द्विजहरू * आज्ञा हुँदा व्यासको ।
गर्थे पूजन विप्र औ ऋषि मुनी * द्यौता तथा पितृको ॥
ज्ञानी सज्जन गर्दथे बसि कहीं * चर्चा सबै शास्त्रको ॥९६
गर्थे गान सुकीर्ति धर्म-सुतको * सानन्द बन्दीजन ।
हुन्थे हर्षित सूत, भाट, नटले * पाएर धेरै धन ॥
पाए ब्राह्मणले मनग्य दछिना * बोक्नै नसक्ने गरी ।
दुःखी दीन, दरिद्र मानिस कुनै * देखिन्नथे त्यो घरी॥९७
आफै बज्न शुरू भए थरिथरी * बाजाहरू स्वर्गका ।
हेर्थे देवहरू बसेर नभमा * वर्षा गरी पुष्पका ॥
गर्थे नाच कतै सुसज्जित भई * वाराङ्गना सुन्दरी ।
मीठा खाद्य पदर्थ मानिस, कतै * खान्थे बसी बेसरी ॥९८
द्यौता, यक्ष, मनुष्य, राक्षस तथा * गन्धर्व, विद्याधर ।
हेर्थे कार्य सहर्ष श्रेष्ठ मखको * स्त्री, बाल, नारी, नर ॥
भन्थे व्यास मुनी जहाँ जति कुरा * त्यस्को गरी पालन ।
त्याई अश्व गराई स्नान विधिले * गर्दा भए पूजन ॥९९॥
काटी त्यो हयलाइ वेद विधिले * छाला निकालीकन ।
त्यस्मा द्रौपदि औ युधिष्ठिर बसी * गर्दा भए पूजन ॥

मासूको टुकरा गराइ द्विजले * हाल्दा भए आहुति ।
बोसो होमि सुँघे धुवाँ सकछले *आनन्द मानी अति ॥२००
पाँचै भाइ बसेर पूजन गरे * श्री कृष्णको सादर ।
बोले धर्म–कुमार आशिष दिनोस् * हे कृष्ण योगेश्वर !
नाना रत्न सुवर्ण आदि दछिना * श्री व्यासलाई दिए ।
कुन्तीलाइ सहर्ष व्यास मुनिले * त्यो दक्षिणा सुंपिए ॥१॥

पाएर भोजन मिठा कति खूब खान्थे ।
देखेर यज्ञ कति धन्य भनेर ठान्थे ॥
धेरै भएर दछिना कति लिन्न भन्थे ।
कोही लिए पनि अरूकन बाँड़िदिन्थे ॥२॥

ज्ञानी सज्जन विप्रलाई धनले * सन्तोष पारे जब ।
पारे पूर्ण सहर्ष कार्य मखको * बाँकी रहेको सब ॥
पाँचै भाइ भए प्रसन्न अवभृत् * यज्ञान्तको स्नानले ।
आशीर्वाद दिए प्रसन्न मनले * कल्याणको व्यासले ॥३॥
जो जो भूपहरू लिई कर त्यहाँ * पैह्ले पुगेका थिए ।
तिन्लाइ घर जान धर्म-सुतले * आफैं बिदाई दिए ॥
ज्ञानी ब्राह्मण यज्ञका अरु त्यहाँ * जो कार्यकर्त्ता थिए ।
आफ्नाफ्नू लिई भाग सादर बिदा * मागी सबै फर्किए ॥४॥

श्री धर्मका तनयले मख पूर्ण पारे ।
आफ्ना सुबन्धु-वधको सब पाप टारे ॥
ती पाँच भाइहरूको, मख पूर्ण गर्नें ।
हाँस्थे मुसु-मुसु बसी, मुर दैत्य मार्नें ॥५॥

न्याउरी मुसोको आख्यान :—

हे राजन् ! हय मेध धर्म-सुतको * पूरा भरे राम्ररी ।
लाग्यो भन्न गरेर गर्जन कुनै * आई त्याँ न्याउरी ॥
ज्ञानी सज्जन श्रेष्ठ याजकहरू * मेरो कुरा सुन्नुहोस् ।
वर्ता दान, घमण्डले शुभ गती * पाइन्न जानीलिनोस् ॥६
मैले एक दरिद्र ब्राह्मणकहाँ * धेरै बिताएँ दिन ।
वृत्ती उञ्छ थियो र धर्म-पथको * गर्थे सदा पालन ॥
आए धर्म बनेर एक अतिथी * तिनको परीक्षा लिन ।
सातू खान दिई सहर्ष द्विजको * तिनले गरे पूजन ॥७॥



सातू दानको महिमा



धृतराष्ट्रले मृतकको श्राद्ध गर्न धन मागेको

सातू खाइ चुठे जसै अतिथिले * छीटा त्यसैको परी ।
बायाँ अंग भयो तुरुन्त सुनको * हेर्नू हवस् यो घरी ॥
दायाँ अंग पनी बनाउँ सुनकै * भन्ने गरी चिन्तन ।
आएँ धर्म-कुमारको मखमहाँ * दौडेर त्यै कारण ॥८॥
हज्जारौं ऋषिले र विप्रहरुले * मेरो चुठे देहमा ।
दायाँ अङ्ग भएन हेर सुनको * यस्तो ठुलो यज्ञमा ॥

गर्छन् दान सुवर्ण वस्त्र धन औ * रत्नादि जो लोकमा ।
त्यस्ले पुण्य हुँदैन हे नरपते ! * श्रद्धा नभै चित्तमा ॥९॥
श्रद्धा श्रेष्ठ भनेर क्षुद्र पशुले * निन्दा गरेको सुनी ।
लागे धर्मकुमार सोच्न, मनमा * अत्यन्त दुःखी बनी ॥
श्रद्धाहीन भन्यौ मलाइ तिमिले * कुन्न कर्म देखीकन ।
दुःखी ब्राह्मणमा मदेखि बढि के * श्रद्धा थियो लौ भन ?१०
लाग्यो न्याउरी भन्न धर्म-सुतको * त्यो प्रन्नलाई सुनी ।
राजन् चार थिए जहान द्विजका * स्त्री, पुत्रको ब्राह्मणी ॥
खान्थे ब्राह्मण कन्द-मूल वनका * खोजेर ल्याईकन ।
राख्ने जीवन क्यै थिएन घरमा * सम्पत्ति वा साधन ॥११॥
पाएनन् फल-मूल केहि वनमा * लाग्यो खड़ेरी जब ।
खाने वस्तु नपाइ पाँच दिन तो * भोकै बसेथे सब ॥
ल्याए जो द्विजले मिला अलिकती * खोजेर छैटौं दिन ।
बाँड़े चार जना मिलेर खुशिले * सातू बनाईकन ॥१२॥
सातू खान नपाइ एक अतिथि * आईपुगे ब्राह्मण ।
राखी आसनमा गरे खुशि हुँदै * संमान ओर पूजन ॥
केही बेर गरी कुरा कुशलको * सन्तुष्ट पारीकन ।
आफ्नू भाग जती लगीकन गरे * सातू सबै अर्पण ॥१३॥
सातू खाइ सबै भने अतिथिले * हाँसेर हे ब्राह्मण !
हुन्थें तृप्त अलीकती अरु भए * ल्याऊ छिटो गैकन ॥
लागे गर्न विचार बात घरका * मालीक चिन्ता परी ।
पारूँ तृप्त म पाहुनाकन दिई * खाने कुरा हे हरि ॥१४॥
स्वामीको बुझि भाव आइ नगिचै * भन्दी भइन् ब्राह्मणी ।
मेरो भाग पनी दिनोस् हजुरले * यो सातू खाउन् तिनी ॥

पत्नीको सुनि बात साहस ठुलो * देखी भने—भामिनी !
बोल्यौ योग्य कुरा तथापि कसरी * मानौं म हे मानिनी !॥१५
पक्षी कीट पतंग भृङ्ग पशुले * कर्तव्य जानीकन ।
हे सौम्ये ! सुत-पत्निको जतनले * गर्छन् सदा पालन ॥
भोकी छ्यौ दिन पाँचकी तिमि पनी * देखेर यस्तो स्थिति ।
तिम्रो भाग दिने लगेर कसरी * मैले बताऊ सति ! ॥१६
भद्रे, संतति, भोग औ सुख दिने * अर्द्धाङ्गिनीका पनी ।
हेला गर्दछ जो मरी नरकमा * बस्नेछ कीरा बनी ॥
पत्नीको बुझि भाव आदर सदा * गर्दैन जो मानिस ।
त्यस्लाई सुख-शांति हुन्न कहिले * नाशिन्छ सारा यश॥१७
लागिन् भन्न सती बुझाइ पतिले * शिक्षा दिएको सुनी ।
साह्रै दुर्बल भोकले शरिर यो * देख्छु हजुर्को पनि ॥
गर्छौं प्राप्त समान हामी दुइले * राम्रो नराम्रो फल ।
एक्लै खान बसेर सातु अहिले * पुग्दै मेरो बल ॥१८॥
स्वामीले सुख भोग आदर गरी * स्त्रीलाइ दिन्छन् सदा ।
दिन्छन् आशिष देव पितृहरूले * सन्तान पैदा हुँदा ॥
ब्रह्मन् ! दान, सुकर्म धर्म व्रत औ * पूजा र तीर्थाटन ।
स्वामीदेखि ठुलो कुरा अरु कुनै * हुन्नन् सती स्त्रीकन॥१९॥
मान्नूपर्दछ देवता र पति नै * स्त्रीले त्यसै कारण ।
मेरो भाग दिनोस् प्रसन्न मनले * खाउन् गुणी ब्राह्मण ॥
राजन् ! नीति र धर्म-युक्त हितको * सल्लाह स्त्रीको सुनी ।
तिन्को भाग दिए सहर्ष द्विजले * खानू हवस् यो भनी ॥२०
सातू खाइसको भने अतिथिले * खाईसकें यो तर ।
ल्याऊ थप्न अरू भए अलिकति * क्यै तृप्तिको खातिर ॥

यस्तो बात सुनेर फेरि घरका * स्वामी भए चिन्तित ।
छोराले बुझि भाव सादर भने * आफ्ना पिताजीसित ॥२१
इच्छा पूर्ण गराउनोस् अतिथिको * यो भाग मेरो दिई ।
यो सल्लाह सुनेर योग्य, सुतको * बोले ति दुःखी भई ॥
भोका छौ दिन पाँचका, म अघिझैं * देख्छु अझ बालक ।
खान्छन् बालक पाँचपल्ट दिनमा * मागेर पाएतक ॥२२॥
छाला-हाड़ छ देहमा, हुन गयौ * झन् भोकले दुर्बल ।
मीठो अन्न नपाई खान तनमा * बढ्दैन तिम्रो बल ॥
इच्छा छैन मलाइ बाँच्न दिनहूँ * यो कष्ट खप्तै अब ।
तिम्रो मृत्यु भयो भने त ठहरें * जाहान हुन्छन् सब॥२३
बढ्ला देश र सन्तती पछि तिमी * बाँचीरहे हे सुत !
होलान् पितृ खुशी कहाँ तिमीविना * को गर्छ हाम्रो हित ॥
भोको राखि सुपुत्रलाइ यसरी * मैले अधर्मी बनी ।
तिम्रो भाग दिने बताउ कसरी * हो धर्म ठूलो भनी ॥२४
बाबूले द्विजलाइ सातु दिनको * इच्छा गरेनन् जब ।
लागे भन्न सुपुत्रले हित कुरा * जाने बुझेका सब ॥
सेवा गर्नु सदा पिता-जननिको * कर्तव्य हो पुत्रको ।
त्यो गर्दैन भने सुपुत्र भवमा * त्यसलाइ भन्ने छ को२५
आत्मा हो सुत भन्दछन् ऋषि-मुनी * षट् शास्त्र औ वेदले ।
आत्माले खुशिले भनेपछि दिनोस् * यो सातु आनन्दले ॥
छोराको सुनी तर्क चित्त द्विजको * राम्रो बुझ्थ्यो जब ।
सातू त्यो पनि पाहुनाकन दिए * बाँकी नराखी सब ॥२६॥
लागे भन्न—पुगेन फेरि अतिथी * त्यो सातु खाँदा पनी ।
थाले गर्न विचार फेरि घरका * मालीक दुःखी बनी ॥

तिन्को कष्ट बुझी बुहारि विनती * गर्दी मइन् सादर ।
मेरो सातु दिनूहवस् अतिथिको * तृप्ती हुनाखातिर ॥२७॥
तिन्को बात सुनेर वृद्ध ससुरा * बोले विचारीकन ।
दुब्ली छौ अति, धर्म-कर्म व्रतको * गर्दा सबै पालन ॥
तिम्रो छैन उमेर भोक यसरी * संकष्ट खप्ने तर ।
गछ्यौं दुःख सहेर काम घरको * राखी सफा सुग्घर ॥२८॥
हाम्रो दुःखमहाँ दुखी र सुखमा * हुन्छयो सुखी सादर ।
तिम्रो चाकरिले जहान घरका * सन्तुष्ट छौं यो घरी ॥
भोकी राखि तिमी सुशील गुणकी * खानी बुहारीकन ।
त्यागौं धर्म लिएर सातु कसरी * मैले तिमी नै भन ॥२९॥
यस्तो आर्ति सुनी सकी श्वसुरको * बोलिन् बुहारी सती ।
हुन्छन् व्यक्ति सुखी सदैव मनमा * सन्तोष माने जती ।
मैले ता गुरुका गुरू हजुरको * गर्नू सदा चाकरी ।
हो कर्तव्य र धर्म स्वर्ग-सुखको * भागी हुनेछु मरी ॥३०॥
सेवाले घरका जहानहरुको * कल्याण मेरो हुने ।
छोराले दिइ नाथकै सुख दिने * सन्तान हुन् पाइने ॥
ती सन्तान बढेर पिण्ड जलले * सन्तोष पार्छन् जब ।
दिन्छन् आशिष देव पितृहरुले * कल्याण गर्ने तब ॥३१॥
पाएकी छु हजूरबाट घरमा * सम्मान मैले जति ।
त्यो देखेर मलाइ हुन्न मनमा * संकष्ट हे सद्मति !
सोही कारणले प्रसन्न मनले * सन्तोष मानीकन ।
मेरो भाग लिएर सातु द्विजमा * गर्नू हवस् अर्पण ॥३२॥
यस्तो बात सुनेर आशिष दिई * धेरै बुहारीकन ।
तिन्को भाग दिए प्रसन्न मनले * खाउन् भनी ब्राह्मण ॥

देखे ब्राह्मणको जसै अतिथिले * सत्कर्म त्यो अद्‌भुत ।
श्रद्धा प्रेम बुझेर उत्तम, भने * तिनको चिताई हित ॥३३
ब्रह्मन् ! धर्म म हूँ बनेर अतिथी * आएँ परीक्षा लिन ।
तिम्रो यो शुभकर्म देखि अहिले * खुशी छ मेरो मन ॥
श्रद्धायुक्त र धर्मपूर्वक गऱ्यौ * जो दान यो स्थानमा ।
त्यस्को वर्णन गर्दछन् सुरहरू * आनन्दले स्वर्गमा ॥३४॥
भोको मानिसको रहन्न कहिले * सत्कर्म, बुद्धि स्थिर ।
त्यस्ले गर्छ अनर्थ पाप दिनहूँ * केही नमानी डर ॥
वेला संकटको उपस्थित थियो * साह्रै नराम्रो तर ।
सातू खान दिई विशुद्ध मनले * मेरो गऱ्यौ आदर ॥३५॥
तिम्रा निम्ति खुला छ द्वार अहिले* त्यै धर्मले स्वर्गको ।
गर्दैछन् जयकार देवगणले * वर्षा गरी पुष्पको ॥
गर्दा दान ति रन्तिदेव नृपले * श्रद्धा पुऱ्याई जल ।
पाए बस्न गएर स्वर्गपुरिमा * कीर्ति फिंजी उज्वल ॥३६
गर्छन् दान अनेक यज्ञहरुको * सानन्द आयोजन ।
अन्यायी धनले हुँदैन जनको * कल्याण हे ब्राह्मण !
श्रद्धायुक्त सहर्ष दान तिमि झैं * सातू गरे तापनी ।
गर्ला त्यो सुखभोग स्वर्गपुरिको * द्यौतासरीको बनी ॥३७॥
ब्रह्मन् ! केवल पत्र, पुष्प, फलले * दीक्षा लिई यज्ञको ।
बर्साए जब श्री अगस्त्य ऋषिले* शेखी हरी इन्द्रको ॥
आफैं इन्द्र बने अगस्त्य तपको * ठूलो हुनाले बल ।
डुल्दैछन् अझ ती तिनै भुवनमा * कीर्ति फिंजी उज्वल ॥३८
सोही कारण दान, धर्म मखमा * श्रद्धा छ राम्रो भने ।
त्यस्ले कष्ट हुनेछ नाश जनको * मर्नै तथा जन्मने ॥

श्रद्धाहीन भई सहर्ष बटुली * अन्यायद्वारा धन ।
गर्छन् दान घमण्ड-युक्त मखको * जो व्यक्ति आयोजन ॥३९
पाउन्नन् शुभ कर्मको जन कुनै * राम्रो नराम्रो फल ।
सोही कारण जान्नुपर्छ जनले * श्रद्धा ठुलो केवल ॥
दिन्थे ब्राह्मणलाइ अति अतिथी * यस्ता अनेकौं थरी ।
आयो एक विमान स्वर्गपुरिको * बर्लेर सोही घरी ॥४०॥
चारै व्यक्ति बसे तिनै अतिथिले * आज्ञा दिएको सुनी ।
लागे डुल्न पुगेर स्वर्गपुरिमा * ती चार द्यौता बनी ॥
बाँडेको धन बेसरी थरि-थरी * देखें सबै राम्ररी ।
गर्नू भो तर यज्ञ धर्म-सुतले * को भन्छ श्रद्धा गरी ॥४१
अन्तर्धान भएर धर्म सहसा * पाल्नूभएथ्यो जब ।
दायाँ अङ्ग सुवर्णको गरुँ भनी * आएँ दगुर्दै तब ॥
यो आक्षेप गरी विलीन भइ त्यो * जाँदो भयो न्याउरी ।
फर्कें छक्क परेर दर्शकहरू * जो जो थिए त्यो घरी ॥४२
श्री जन्मेजयले भने मुनि ! यहाँ * शंका मलाई भयो ।
भन्ने धर्म-कुमारलाइ त्यसरी * त्यो न्याउरी को थियो ?
वैशम्पायनले भने—नरपते ! * सुन्नूहवस् कारण ।
पौंचेथे जमदग्निको कुटिमहाँ * श्रीधर्म कोही दिन ॥४३॥
राखे दूध दुहेर एक बलियो * तिन्नले सफा पात्रमा ।
पारे दूषित दूध क्रोध रूपले * श्री धर्मले व्यर्थमा ॥
त्यो जाने जमदग्निले तर तिनी * क्रोधित् भएनन् जब ।
मागेथे डरि धर्मले 'मुनि ! क्षमा * गर्नोस् मलाई अब' ॥४४
गर्छु श्राद्ध भनेर दूध त्यसरी * राखे जोगाईकन ।
त्यसका मालिक पितृ नै हुन गए * हे धर्म ! त्यै कारण ॥

जाऊ माग्न क्षमा उनैसित तिमी * यस्तो भनेथे जब ।
जन्मे श्राप परेर पितृहरूको * ती न्याउरी भै तब ॥४५
सोधे विन्ति गरेर श्राप कसरी * हट्ने छ मेरो भनी ।
'गर्नेछन् हयमेध धर्मसुतले * श्रद्धा पुन्याई अनि ॥
जानेछौ तिमि हेर्नलाइ मख त्यो * टाक्तै नडोके पनी ।
हुन्छौ मोक्ष गरेर धर्म-सुतको * निन्दा मपाइँ बनी ॥४६
ओही हेतु विलीन त्यो घरि भए * श्री धर्म वा न्याउरी ।
जस्ले सुन्दछ यो विशुद्ध मनले * आख्यान श्रद्धा गरी ॥
त्यसले यो भव-सिन्धु गोखुरसरी * नाघेर पारी तरी ।
भोग्ला सौख्य यहाँ मरेपछि उहाँ * कल्याण गर्नन् हरि ॥४७॥

अश्वमेधपर्व समाप्तम् शुभम्



# महाभारत आश्रमवासपर्व

प्रारम्भः

धृतराष्ट्रको वन गमन —

श्री जन्मेजयले सुध्याउनुभयो * श्रद्धा गरी राम्ररी ।
मेरा पूर्वज पाण्डुका तनयले * त्यो यज्ञ पूरा गरी ॥
गर्थे भाइहरू लिएर कसरी * साम्राज्यको शासन ।
अन्धा श्री धृतराष्ट्रको पनि कती * सम्मान गर्थे मन ॥१॥
गान्धारी र अरू बुहारिहरुको * हुन्थ्यो कती आदर ?
हुन्थ्यो के शुभकर्म त्यो महलमा * कल्याणको खातिर ?
वैशम्पायनले भने—मख सकी * त्यो राज्य पाए पनी ।
मान्थे श्री धृतराष्ट्रजीकन सबै * राजा यिनै हुन् भनी ॥२॥
पैल्हे देखि बढ़ी सबै विषयमा * सम्मान पाए जब ।
अन्धा दम्पतिले भुले समरमा * छोरा मरेका सब ॥
दासी-पुत्र युयुत्सु सञ्जय तथा * पाँचै जना पाण्डव ।
जे भन्थे धृतराष्ट्रले विदुरजी * त्यो पूर्ण पार्थे सब ॥३॥
कैदीको अपराध माफ दिनु वा * बक्सीस बाँड़ी दिनु ।
अर्काको उपकार औ अतिथिको * इच्छा पुऱ्याई दिनु ॥
गर्नु दान, सुकर्म पितृ-सुरको * श्राद्धादि औ पूजन ।
चाहिन्थ्यो धृतराष्ट्रजीकन जती * जुन् काम गर्ने धन ॥४॥
दिन्थे धर्म-कुमारले धन कुनै * बाधा नपारीकन ।
खूशी श्री धृतराष्ट्रको हुन गयो * त्यो भक्ति देखी मन ॥
आफ्नै पुत्रसमान स्नेह सबको * सानन्द गर्थे तिनो ।
गर्थिन् स्नेह वधूहरू सकलको * गान्धार-पुत्री पनि ॥५॥

आनन्दै सित पन्ध्र वर्षतकका * तिनूका बितेथे दिन ।
पैह्लै झैं धृतराष्ट्र भूपति बनी * गर्दा त्यहाँ शासन ॥
पैह्लै जो धृतराष्ट्रले विदुरको * शिक्षा नमानीकन ।
छोरोको वशमा परीकन लिए * जुन द्यूतद्वारा धन ॥६॥
आफ्नै सन्तति झैं सहर्ष अहिले * ती स्नेह गर्थें जति ।
भन्थे भीम गरी विरोध धन यी * बाँड्छन् वृथामा कति ॥
झूटो प्रेम गरी सबैकन यिनी * झुक्याउँदैछन् तर ।
सम्झी दुर्गतिमा सहायक हुने * को मान्छ यिनूको भर ॥७॥
एकान्तस्थलमा वृकोदरजिले * यस्तो भने तापनी ।
सुन्नेले धृतराष्ट्रजीसित भने * बाझुन् रिसाई भनी ॥
दोषारोपण त्यो वृकोदरजिले * व्यर्थै गरेको सुनी ।
दुःखी भूप भए अनादर गरे * मेरो असाध्यै भनी ॥८॥



धृतराष्ट्रको वन गमन



व्यासजीले मरेका सबैलाई भेट गराउनू

डाकी विप्र सुमित्र भृत्य र हितू * आफ्ना सबै बान्धव ।
दासी पुत्रवधू चरीपरि बसे * पाँचै जना पाण्डव ॥

बोल्ले श्री धृतराष्ट्र दुःखित भई * सुन्नोस् सबै सज्जन ।
मेरै कारण बन्धु बान्धव मरे * संग्राममा गैकन ॥९॥
शिक्षा द्रोण र भीष्म औ विदुरको * श्री व्यासको कृष्णको ।
छोरो दुष्ट हुँदा अनादर गर्ने * मैले गुणी व्यक्तिको ॥
सोही कारणले मरे समरमा * मेरा सबै बान्धव ।
आफ्नो त्यो अपराध भुल्न नसकी * सम्झीरहन्छु सब ॥१०॥
वानप्रस्थ लिनू चतुर्थ वयमा * भन्छन् सबै शास्त्रले ।
त्यसको पालन गर्दछु तप गरी * क्यै काल आनन्दले ॥
प्रायश्चित्त म गर्छु पापहरुको * तत्काल यो युक्तिले ।
जान्छु जङ्गलमा बिदा दिनुहवस् * हे बन्धुहो ! प्रेमले ॥११॥
गर्छन् शासन श्री युधिष्ठिरजिले * साम्राज्यको राम्ररी ।
तिनको मद्दत गर्नुपर्छ सबले * मेरो गरे झैं गरी ॥
जुन् दुष्कर्म गऱ्यो सुयोधन ठुलो * पापी दुरात्मा हुँदा ।
त्यो संझेर अशान्ति बढ्छ मनमा * रोईरहन्छु सदा ॥१२॥
त्यस्लाई र मलाइ विज्ञ जनले * राखी दया चित्तमा ।
बिर्सी त्यो अपराध घोर अघिको * गर्नोस् सबैले क्षमा ॥
सारालाइ बुझाइ यो किसिमले * राजी गराईकन ।
बोल्ले धर्म-कुमारजीकन गरी * सानन्द सम्बोधन ॥१३
कुन्ती-नन्दन, वीर, धीर, सुमते ! * कल्याण तिम्रो हवस् ।
गर्दा पालन लोक, धर्म सबको * तिम्रो सुकीर्ति बढोस ॥
हे बाबू ! तिमिले सबै तरहले * हाम्रो गरी चाकरी ।
राजी पारिलियौ, खुशा पनि भयौं * हामी दुबै बेसरी ॥१४॥
जुन् पापीहरूले बिइज्जत ठुलो * श्री द्रौपदीको गरे ।
छुआमा छलले मिलेर जसरी * सम्पत्ति तिम्रो हरे ॥

मेरा दुर्मति वीर पुत्र सय ती * त्यै पापले नै मरे ।
लडदा क्षत्रिय धर्मले समरमा * संसार पारी तरे ॥१५॥
तिन्का निम्ति विषाद छैन मनमा * चिन्ता मलाई अब ।
मैले दान सुकर्म बेसरि गरें * तिम्रो कृपाले सब ॥
आफ्नू अन्त्य सपार्न भूप वनमा * बस्छन् तपस्या गरी ।
हे बाबू ! कुलको हुँदा चलन यो * माग्छु बिदा यो घरी॥१६
सो जानेर बिदा दिनू उचित हो * ऐह्ले तिमीले पनी ।
जान्छौं हामि दुवै प्रसन्न मनले * कर्तव्य हो यो भनी ॥
इच्छा श्री धृतराष्ट्रले भनिसके * आफ्नू सभामा जब ।
कोही बोल्न सकेन हेरी मुखमा * आश्चर्य मान्थे सब ॥१७
केही बेर गरी विचार मनमा * साह्रै सकस्मा परी ।
लागे धर्मकुमार भन्न सबले * सुन्ने र बुझ्ने गरी ॥
आफ्नै उत्तम यो बसी महलमा * दुःखी हजुरैं हुनु ।
सामग्री सुखका र भोजन लुगा * सम्पूर्ण त्यागी दिनु ॥१८
यस्तो कष्ट सहेपछी हजुरले * मैले गरे शासन ।
होला जो अपकीर्ति लोकभरिमा * मेरो विनाकारण ॥
त्याग्छु राज्य बरु म त्यो सहन ता * आँटे पनि सक्तिनँ ।
बाबूलाइ पुऱ्याइ कष्ट, कसरी * राखूँ म यो जीवन ॥१९॥
आफ्नू पुत्र युयुत्सुलाइ अथवा * इच्छा छ लौ जसूकन ।
यो साम्राज्य दिनोसम जान्छुवनमा * सन्तोष मानीकन ॥
श्री दुर्योधन, भीष्म, कर्ण, शकुनी * श्री द्रोण आचार्यको ।
केही दोष थिएन जे जति हुनू * प्रारब्धले नै भयो ॥२०॥
मर्थे नत्र अजेय वीर कसरी * संग्राममा ती सब ।
तिन्का निम्ति हजूर चिंतित हुनू * व्यर्थै म ठान्छु अब ॥

आफ्नू क्षत्रिय-धर्म पालन गरी * जो जो मरे युद्धमा ।
गर्दैछन् सुख भोग इच्छित सबै * आनन्दले स्वर्गमा ॥२१
टारी मानिसले कुनै तरहले * टर्दैन दैवी - गति ।
यस्मा गर्नु विषाद विज्ञ जनले * हो मूर्खता भूपति ॥
श्री दुर्योधनले अनीति पहिले * जस्तो गरेथे जति ।
त्यस्को क्रोध, विषाद केहि मनमा * मान्दीनँ मैले रती ॥२२
राजा हौन, हजूरको हुकुममा * चल्ने म हूँ सेवक ।
आज्ञा पालन गर्दछु म खुशिले * हे शत्रु—संहारक !
पैह्री यो मृगचर्म भोजन त्यजी * सुत्नू हुँदा भूमिमा ।
गान्धारी र हजूरले सहनुभो * संकष्ट जो व्यर्थमा ॥२३
त्यस्ले दुःख ठुलो दिँदैछ मनमा * मेरो नराम्रो गरी ।
जाने जङ्गलमा बिदा दिन कहाँ * सक्छु म लौ यो घरी ॥
इच्छा गर्छु हजूरलाइ सुख होस् * भन्ने म बर्ता जति ।
आफ्ना निम्ति मलाइ हुन्न सुखको * इच्छा त्यती भूपति ॥२४
केही प्रेम दया भए हजुरको * हामीहरूका प्रति ।
बस्नोस् राज्य चलाइ फेरि अघि झैं * आनन्द मानी अति ॥
मान्नूहुन्न हजूरले यदि भने * भन्छु प्रतिज्ञा गरी ।
जानेछु त्यजि राज्य वैभव सबै * यो तापले नै मरी ॥२५॥
यस्तो विन्ति सुनेर धर्म-सुतको * देखी नराम्रो स्थिति ।
तिन्को चित्त बुझाउँ के गरि भनी * चिंतित भए भूपति ॥
केही बेर गरी विचार मनमा * आफ्नू, गरे निश्चय ।
गर्छन् व्यासजिले निवारण छिटै * यिन्को सबै संशय ॥२६
राजा श्री धृतराष्ट्र धर्मसुतको * चिन्ता हटाऊँ भनी ।
लागे भन्न बुझाइ बात हितको * कल्याण गर्ने पनी ॥

हे बाबू ! व्यवहारका जति कुरा * भन्छौ सबै सत्य हुन् ।
मौकामा जति बोल्नुपर्छ तिमि भैँ *त्यो बोल्न जान्ने छ कुन् २७
पाएँ भोग्न अनेक स्वर्गसरिको * आनन्द मैले सब ।
जाने जङ्गलमा बिदा दिइ तिमी * इच्छा पुऱ्याऊ अब ॥
जे गर्दा हित हुन्छ हामिहरूको * कल्याण जुन कार्यले ।
त्यस्को निर्णय गर्नुपर्छ तिमिले * सद्बुद्धिले युक्तिले ॥२८॥
शिक्षा धर्म-कुमारलाइ दिइ यो * श्री व्यास ज्ञानीसित ।
बोले श्री धृतराष्ट्र ढोगि पदमा * हे लोकका पूजित ॥
राखी स्नेह ममा गरेर करुणा * हाम्रो चितलाई हित ।
शिक्षा धर्म-कुमारलाइ दिनुहोस् * हे नाथ ! राम्रोसित ॥२९
तिनको विन्ति सुनेर व्यास मुनिले * क्यै बेर सोचीकन ।
भन्छन् हे नरपाल ! शान्त मनले * जे भन्दछु त्यो सुन ॥
ऐले श्री धृतराष्ट्रको वनमहाँ * जाने इरादा छ जो ।
चिंता शोक त्यजी बिदा गरिदिनू * नै श्रेष्ठ कर्तव्य हो॥३०॥
राजा वृद्ध भए गुणी, सुतहरू * संग्राममा मारिए ।
त्यागी भोजन, पुत्रशोक परि झन् * भूपाल गल्दै गए ॥
मौका देउ तिमी गरुन् तप गई * आनन्दले दम्पति ।
त्यागे देह भने कठोर तपले * बिग्रन्न यिन्को गति ॥३१
बस्नेछन् जबसम्म यो महलमा * अन्धा दुवै दम्पति ।
सम्झन्छन् दिन-रात पुत्र रणमा * आफ्ना मरेका जति ॥
त्यो सङ्कष्ट कठोर खप्न नसकी * मर्नन् अकस्मात् जब ।
भन्नेछन् तिमिलाइ लोकहरूले * अन्याय गर्नें तब ॥३२॥
शिक्षा व्यासजिको सदा हित तथा * कल्याण गर्नें मुनी ।
जोरी हात भने युधिष्ठिरजिले * हे व्यास ! ज्ञानी, मुनी !

हाम्रा बाबू गुरु र रक्षक तथा * कल्याण गर्नें हुँदा ।
मेरो झन् हित गर्नुहुन्छ मनले * औ देहले सर्वदा ॥३३॥
आज्ञा नाघ्न हजूरको म अहिले * आँटे पनी सक्तिनँ ।
यस्तो व्यासजिलाइ उत्तर दिई * क्यै बेर सोचीकन ॥
हेरी श्री धृतराष्ट्रतर्फ तिनले * बिन्ती गरे सादर ।
जे इच्छा छ हजूरको म अहिले * गर्छु सबै हाजिर ॥३४॥
जैहले सम्म सवारि हुन्न वनमा * सानन्द तैहले तक ।
गर्नूपर्दछ खान-पान अघि झैं * हे राष्ट्रका नायक ॥
यस्तो विन्ति गरी सबै चिज त्यहीं * ल्याएर आफू बसी ।
खुवाए श्री धृतराष्ट्रलाइ र भए * धर्मांश केही खुशी ॥३५॥

भीमको विरोध भए पनि धृतराष्ट्रलाइ श्राद्ध गर्न धन दिनु :—

हे राजन् ! धृतराष्ट्रलाइ त्यसरी * राजी गराईकन ।
थाले पाण्डव गर्न फेरि अघिझैं * साम्राज्यको शासन ॥
डाकी श्री धृतराष्ट्रले विदुरको * सम्पत्तिको खातिर ।
भेजे धर्मकुमारको महलमा * गर्दै ठुलो आदर ॥३६॥
लागे भन्न गएर श्री विदुरजी * हे वीर हो ! पाण्डव !
भन्थे भूपतिले मलाइ रणमा * जो जो मरे बान्धव ॥
तिनूको श्राद्ध म गर्दछु वनमहाँ * जाने अगाड़ी अब ।
देओ भाइहरू मिलेर खुशिले * जो चाहिने वैभव ॥३७॥
चारै भाइ खुशी भए विदुरले * बिन्ती गरेको सुनी ।
बोले भीम रिसाउँदै 'किन दिने * सम्पत्ति मागे भनी ॥'
जस्को निम्ति भयो कदापि नहुनू * पर्ने महाभारत ।
जस्को दुर्मतिले सबै तरहले * हाम्रो लियो इज्जत ॥३८॥

त्यस्कोश्राद्ध निमित्त व्यर्थ छ दिनू* हामीहरूले धन ।
जस्को गर्नु उचित् छ हामिहरु नै * गर्छौं विचारीकन ॥
देखी क्रोधित भीमलाइ त्यसरी * बोल्दा भए अर्जुन ।
दाज्यू शान्त हुनोस् रिसाउनुभयो * ऐल्हे वृथामा किन ॥३९॥
हाम्रा मान्य,बुढा पितासदृश छन् * दुःखी दुवै दम्पति ।
तिन्लाइ दिनुपर्छ हामिहरूले * मागे जति सम्पति ॥
जस्को कीर्ति थियो ठुलो नरपति * संसारका जो थिए ।
जस्का पुत्र अनेक बान्धवहरू * संग्राममा मारिए ॥४०॥
पर्थ्यो जोसित माग्न कोहि दिनमा* हामीहरूले धन ।
माग्दैछन् धन आज हामिसित नै * शङ्का नमानीकन ॥
उल्टो दैवगती विचित्र बलियो * साम्ने छ हेर्नू हवस् ।
अन्धा दम्पतिलाइ सम्पति दिई * कीर्ति फिंजाईलिनोस् ॥४१
योग्यायोग्य कुनै विचार नगरी * माता-पिता मान्यको ।
आज्ञा पालन गर्नु शास्त्र-मत औ * हो धर्म सत्पुत्रको ॥
मान्दैनन् हितका कुरा बखतमा * जुन् मूर्ख सन्तानले ।
छोरा हैन भनी रुनू पनि वृथा * ठान्छु म संसारले ॥४२॥
भीमार्जुन् दुइलाइ धर्मसुतले * रोकेर सोही घरी ।
गर्दै आदर भन्नुभो विदुरजी * -लाई कुरा राम्ररी ॥
हे काका ! धृतराष्ट्रलाइ दिनुहोस्* मागे जति वैभव ।
उन्का निम्ति सदा खुला छ ढुकुटी* छेकें र मैले कब ॥४३॥
गर्नू बात वृथा छ हे विदुरजी ! * यो तुच्छ सम्पत्तिको ।
मागे अर्पण गर्दछु चरणमा * आनन्दले देह यो ॥
राजालाइ नभन्नुहोस् हजुरले * जो जो भने भीमले ।
तारुन् पुत्र र बन्धुलाइ नृपले * सत्कर्म वा श्राद्धले ॥४४

आज्ञा धर्मकुमारको विदुरले * त्यस्तो सुनेथे जब ।
चाहिन्थ्यो जति जे त्यही धन झिकी* तैयार पारे सब ॥
राजालाइ गएर श्री विदुरले * बिन्ती चढाईदिए ।
आशीर्वाद दिएर धर्म-सुतको * तारीफ गर्दा भए ॥४५॥
थाले श्राद्ध सहर्ष केहि दिनमा * आयो जसै पूर्णिमा ।
औंसीसम्म गरी रहे विधिसहित् * उत्साहका साथमा ॥
गाई रत्न सुवर्ण, अन्न, धनले * सन्तुष्ट पारीकन ।
ज्ञानी ब्राह्मणको प्रसन्न मनले * गर्दा भए पूजन ॥४६॥
दुःखी दीन, दरिद्र, पंगुहरु जो * आफ्ना थिए देशमा ।
बाँड़े ती सबलाई अन्न कपड़ा * आनन्दका साथमा ॥
आफ्नू श्राद्ध र पत्निको पनि गरी * बाँड़े प्रशस्तै धन ।
सारा बन्धु र पितृको पनि तिरे * ती भूपतिले ऋण ॥४७॥

धृतराष्ट्र, विदुर आदिको बनगमन :-

इच्छा पूर्ण गरे अनेक धनको * दानादिले श्राद्धमा ।
आएथ्यो दिन क्यै बितेपछि जसै * त्यो कातिकी पूर्णिमा ॥
गान्धारी धृतराष्ट्रले त्यजि लुगा * पैह्री लिए वल्कल ।
गर्थे भोजन राजसी चिज त्यजी * ती दूध, मेवा, फल ॥४८
राखी हात दुवै गुणी विदुर औ * कुन्तीजिका काँधमा ।
निस्के बाहिर दम्पती महलको * आनन्दका साथमा ॥
वानप्रस्थ लिएर दीक्षित भई * निस्के जसै भूपति ।
माने दुःख असाध्य पाण्डुसुतले * देखेर तिन्को गति ॥४९
रानीहेरू रूँदै हिंडे पछि पछी * ती पाँच भाई पनी ।
निस्केथे पुरवासि सज्जन रूँदै * जान्छौं सँगैमा भनी ॥

चिन्ता बढ्न गएर धर्मसुत झन् * विक्षिप्त जस्ता भए।
तिन्को देखि अधैर्यता विजयले * पक्की सुविस्ता दिए ॥५०
जान्थे जङ्गलतर्फ दम्पति दुवै * बढ्दै अगाड़ी जति।
पाँचै भाइ तथा प्रजा पनि रुँदै * जान्थे पछाड़ी उति॥
आएका सबलाइ दुःखित हुँदै * जाने जसै भूपले।
लागे भन्न बुझाइ वीरहरु हो * के हुन्छ यो शोकले ॥५१
आत्मा नित्य छ देह यो क्षणिक हो* मर्ने तथा जन्मने।
इच्छाले फलको तरिन्न, सुख नै * हो स्वर्गको पाइने॥
गर्नूपर्छ विचार विज्ञ जनले * त्यै हेतु कल्याणको।
कस्का निम्ति दुखी हुनू छ यसरी * हो नाशिने देह यो ॥५२
शिक्षा यै रितका दिए अरु पनि * ती भूपतीले जब।
फर्कै चित्त बुझाइ मानिसहरु * जो जो गएथे सब॥
कुन्तीलाइ बुझाइ धर्मसुतले * बिन्ती गरे सादर।
आमाले किन जानुपर्छ वनमा * फर्केर जाऊँ घर ॥५३॥
जुन् सम्चार अघी पठाउनुभयो * श्री कृष्णका साथमा।
आज्ञा पाइ हजूरको अघि सऱ्यौं * हामीहरु युद्धमा॥
सारा भूपहरू मरे हजुरको * त्यै एक आदेशले।
ऐह्ले जान हुनूभयो वनमहाँ * तैयार कुन् धर्मले ॥५४॥
हाम्रो स्नेह भए अलीकति पनी * जे भन्दछु सुन्नुहोस्।
आफ्नी पुत्रबधू लिएर घरमा * आनन्दले फर्कनोस्॥
यस्तो विन्ति सुनेर धर्मसुतको * कुन्ती भइन् चिन्तित।
लागिन् भन्न बुझाइ बात हितको * तिन्लाइ राम्रोसित ॥५५
हे बाबू! सहदेवको तिमि सदा * रक्षा गरे राम्ररी।
मैले मौन हुँदा गए समरमा * श्री कर्ण योद्धा मरी॥

मेरो दोष ठुलो, विचार नगरी * श्राद्धादि गर्दा पनी ।
सम्झीराख्नु सदैव कर्ण बलवान् * दाजू थिए ती भनी ॥५६
गर्नू नीति र धर्मपूर्वक सदा * साम्राज्यको शासन ।
राख्नूपर्दछ भूपले सब प्रजा * राजी गराईकन ॥
शिक्षा यै रितका दिईकन हिंड्दिन् * कुन्ती अगाड़ी जब ।
लागे फर्कन दुःख मानि घरमा * श्री द्रौपदी, पाण्डव ॥५७
पक्री बाहु युयुत्सु औ कृपजिको * रोएर भूपालले ।
रक्षा गर्नु भनेर धर्मसुतको * जिम्मा दिए प्रेमले ॥
गान्धारी धृतराष्ट्र औ विदुरजी * कुन्ती तथा सञ्जय ।
थाले जङ्गलतर्फ बढ्न सहसा * पाँचै जना निर्भय ॥५८॥
पाँचै भाइ र द्रौपदी महलमा * फर्केर आए यता ।
योटा वृक्षमनी बसे निशिमहाँ * पाँचै जना ती उता ॥
गङ्गाको तटमा बसे तिनिहरू * सानन्द दोस्रो दिन ।
सिध्याईकन स्नान-दान, फल क्यै * गर्दा भए भोजन ॥५९॥
चारै वर्ण भई उपस्थित गरे * सम्मान ती पाँचको ।
त्याहाँबाट बिदा भईकन लिए * बाटो कुरुक्षेत्रको ॥
भेटी विज्ञ मुनी शतायु नृपले * गर्दा भए सादर ।
दीक्षा ती ऋषिले दिए खुशि हुँदै * कल्याणको खातिर ॥६०॥
सेवा श्री धृतराष्ट्रको बसि त्यहाँ * चारै जना गर्दथे ।
चर्चाले परमार्थको नृपतिको * चिन्ता सबै हर्दथे ॥
काटेथे दिन एक वर्ष जतिको * सोही कुटीमा अनि ।
सुम्पे सञ्जयलाइ श्री विदुरले * गर्नू सुरक्षा भनी ६१॥
आफू लीन भए कठोर तपमा * एकान्तको स्थानमा ।
गर्थे चिन्तन ती लगाइ खुशिले * आत्मा परब्रह्ममा ॥

आई नारद व्यास आदि मुनिले * भूपाललाई पनी ।
दिन्थे अर्तिहरू सदा हित हुने * कर्तव्य हो यो भनी ॥६२

पाण्डवहरू धृतराष्ट्रलाई भेट्न जानु, विदुर युधिष्ठिरमा लीन हुनु :—

फर्कीनन् जननी भनेर घरमा * दुःखी थिए पाण्डव ।
चिन्तामैं दुइ वर्षका दिनहरू * तिनका बितेथे सब ॥
कुन्तीको गुणगान खिन्न मनले * गर्थे बसी क्ये दिन ।
इच्छा धर्मकुमारको हुन गयो * गर्ने गई दर्शन ॥६३
रानी भाइहरू सबैसँग भने * आफ्नू इरादा जब ।
साथै जान भनेर तत्पर भए * जो जो थिए ती सब ॥
इच्छा ती सबको बुझेर नृपले * श्री भीमलाई भने ।
चाँड़ो पार तयार जान वनमा * सर्जाम जो चाहिने ॥६४॥
दाजूको सुनि त्यो हुकुम् खुशि हुँदै * मानीस डाकीकन ।
पारे झट्ट तयार अश्व, रथ औ * पाल्की तथा वाहन ॥
सुम्पे भार युयुत्सुलाइ नृपले * प्रासादको राज्यको ।
राखे योग्य अनेक सेवकहरू * छानेर विश्वासको ॥६५॥
रानी भाइहरू तथा अरु पनी * जो जो थिए बान्धव ।
दर्जा माफिकले बसे रथ तथा * डोलीहरूमा सब ॥
पढ्थे ब्राह्मण वेद-मन्त्र नृपको * कल्याणका खातिर ।
निस्के स्त्री पहिले गुणी द्विजहरू * दर्बारको बाहिर ॥६६॥
पाँचै भाइ र द्रौपदी अरु सबै * तिन्का पछी निस्किए ।
सारा व्यक्ति खुशी भएर त्यसरी * बढ्दै अगाड़ी गए ॥
पारी त्यो पुरलाइ शून्यसरिको * साना र ठूला पनी ।
लाखौं पैदल फौज त्यस्पछि हिंडे * जान्छौं सँगैमा भनी॥६७

हात्ती, अश्व सवार पैदल रथी * हिंड्दा भयो शब्द जो ।
त्यस्ले भूमि भएर कंपित स्वयं * चारै दिशा हल्लियो ॥
नाघ्दै ग्राम अनेक जङ्गलहरू * उत्साहका साथमा ॥
केही कष्ट नमानि फौज नृपको * पौंच्यो कुरुक्षेत्रमा॥६८॥
गङ्गा-स्नान गरे कठोर पथको * सारा हरायो श्रम ।
देखे श्री धृतराष्ट्रको अलि परै * भूपालले आश्रम ॥
रानी भाइहरू लिई अलि वरै * त्यो फौज राखीकन ।
पौंचे आश्रममा प्रसन्न मनले * गर्छु भनी दर्शन ॥६९॥
देखे दम्पतिलाइ धर्मसुतले * साम्ने बसेका जब ।
ढोगी नाम बताउँदै चरणमा * खूशी भएथे सब ॥
बोलीले सबको चिह्नीकन दिए * आशीष भूपालले ।
कुन्तीलाइ गरे प्रणाम पदमा * पस्तेर ती पाँचले ॥७०॥
गान्धारी अति वृद्ध, श्रीविदुरजी * सत्पात्र श्री सञ्जय ।
ढोगेथे सबलाइ पाण्डुसुतले * हे भूप ! जन्मेजय ॥
सिध्याईकन ढोग भेट त्यसरी * आनन्दका साथमा ।
घेरा लागि बसे वरीपरि सबै * भूपालका पासमा ॥७१॥
बाहूले तनमा मुसारि मनमा * आनन्द मानीकन ।
सोधे श्री धृतराष्ट्रले-कुशल के * कस्तो छ बाबू ! भन ?
रानी बान्धव औ दिदी र बहिनी * भाई हितैषी गुरु ।
मन्त्रीवर्ग, प्रजा र आश्रित गुणी * विप्रादि जो छन् अरु॥७२
साराको पहिले सुनाउ अहिले * कस्तो छ तिन्को स्थिति ।
गर्छु मङ्गल कामना कुशलको * तिन्को म हे भूपति ! ॥
तिम्रो शासनमा प्रजा, द्विजहरू * छन् रुष्ट वा हर्षित ।
लिन्छौ की बलले तिमी कर-तिरो * अन्यायले इच्छित ॥७३

तिम्रो कीर्ति अकीर्ति के छ अहिले * साम्राज्यको शासन ।
गर्दैछौ अघि झैं ? नयाँ चलन क्यै * थाल्यौ कि बाबू ! भन !
आयौ भेट्न भनी तिमीहरू यहाँ * ऐह्ले त्यसै कारण ।
सोधें शासनको कुरा अरु पनी * कर्तव्य ठानीकन ॥७४॥
तिम्रो मङ्गल होस् भनीकन गरें * मैले निकै गन्थन ।
मेरो प्रश्न सुनेर दुःख मनमा * लाग्यो कि बाबू ! भन ?
यो आज्ञा धृतराष्ट्रको सुनिसकी * अत्यन्त खूशी भई ।
लागे धर्म-कुमार भन्न नृपको * पाऊ दुवै पक्रिई ॥७५॥
हे पितृव्य ! प्रतापले हजुरको * शिक्षा र आशीषले ।
हाम्रो मंगल हुन्छ औ कुशल छौं * भूपालकै पुण्यले ॥
गर्दैछौं सब काम-काज अघि झैं * सम्राज्यको शासन ।
गर्छौं पितृ र देवता अतिथिको * सत्पात्रको पूजन ॥७६॥
राजी छन् अघि झैं प्रजाहरु तिरो * मागिन्न बर्ता कर ।
निन्दा छैन, सुपुण्यले हजुरको * कीर्ति छ चारै तिर ॥
मान्छौं दुःख वियोगको त्यजि यहाँ* पाल्नू हुँदा त्यो घरी ।
आयौं कष्ट ठुलो नखप्न सकि त्यो * भेट्ने इरादा गरी ॥७७॥
रोकी इन्द्रिय चित्त राखि वशमा * गर्दा तपस्या यहाँ ।
शान्ती प्राप्त भयो कि शेष छ अझै* भूपालको मन् महाँ ॥
माताले रहि साथमा हजुरको * सेवा तथा चाकरी ।
गर्नू हुन्छ कि हुन्न तत्पर रही * भन्नूहवस् यो घरी ॥७८॥
गान्धारी जननी मरे सुतहरू * सम्पूर्ण मेरा भनी ।
मान्दैछ डर बक्सिइन्छ कि भनी * क्यै श्राप दुःखी बनी ॥
सेवा संजयले तथा विदुरले * गर्छन् हजुर्को जति ।
तिन्को सद्‌गुणलाइ संझि मनमा * हुन्छु म लज्जित् अति७९

हुन्थ्यो बात यता उता विदुरजी * बोल्दै नबोलीकन ।
त्याहाँबाट हिंडेर धर्मसुतले * तिन्लाइ फर्काउन ॥
काका हूँ म उही युधिष्ठिर भनी * जान्थे लखेट्ते जति ।
बौलाहासरि बेसरी विदुरजी * भाग्थे दगुर्दै उति ॥८०॥
केही दूर पुगेर ठिङ्ग उभिए * ती वृक्षको फेदमा ।
पौंची धर्म-कुमारले विदुरको * पक्रे दुवै पाउमा ॥
बोलेनन् मुखले तथा नयनले * हेरी रहे त्यो घरी ।
आफ्ना इन्द्रिय प्राण योगबलले * तानी सबै बेसरी ॥८१॥
राखे धर्मकुमारको शरिरमा * एकत्व पारी जब ।
तिन्को तेज बढेर दोबर भयो * त्यो तेज मिल्दा सब ॥
शक्तीहीन भई गिऱ्यो विदुरको * त्यो देह मुर्दा बनी ।
दुःखी धर्म-कुमार तत्पर भए * अन्त्येष्टि गर्छु भनी ॥८२॥
संन्यासी र गुणी थिए विदुरजी * तिम्रै स्वरूपी जब ।
गर्नू दाह हुँदैन जाउ घरमा * भूपाल ! फर्की अब ॥
यस्तो त्यै स्थलमा युधिष्ठिरजिले * आकाशवाणी सुनी ।
पौंचे आश्रममा भने सब कुरा * यस्तो भयो लौ भनी॥८३
त्यो वेला धृतराष्ट्रका वरिपरी * जो जो बसेका थिए ।
त्यस्तो मृत्यु सुनेर श्री विदुरको * आश्चर्य मान्दा भए ॥
केही बेर गरे विषाद सबले * सम्झेर तिन्को गुण ।
खाई क्यै फल-मूल मात्र ती गए * विश्राम गर्नाकन ॥८४॥
गङ्गा स्नान र देव पूजन गरे * तिन्ले विहानै गई ।
गाई, अन्न, सुवर्ण, वस्त्र सबले * सत्पात्रलाई दिई ॥
फर्के आश्रममा प्रसन्न मनले * हेर्दै अनेकौं स्थल ।
शोभा जंगलको, अनेक कुटिको * हेर्दा भए निर्मल ॥८५॥

गर्थे श्री धृतराष्ट्रजीसित बसी * चर्चा सधैं ज्ञानको ।
सुन्थे ती उपदेश आदर गरी * ज्ञानी र सत्पात्रको ॥
बस्ता जंगलमा पनी मन सदा * खुशी सबैको थियो ।
मैह्ना एक त्यहीं सहर्ष सबको * थाहै नपाई बित्यो ॥८६॥

व्यासजीको शिक्षा :—

राजाले गइ बस्नु जंगलमहाँ * हो विघ्नकर्ता भनी ।
आए व्यास बुझाउनाकन त्यहीं * आफै दयालु बनी ॥
राखी आसनमा गरे नृपतिले * श्री व्यासको पूजन ।
शिक्षा सुन्न सबै वरीपरि बसे * तत्काल आईकन ॥८७॥
इच्छा ती सबको बुझेर मनको * श्री व्यासजीले भने ।
गर्दैछौ धृतराष्ट्र ! के तप तिमी * कल्याण आफ्नो हुने ॥
गान्धारीसुत जो मरे समरमा * तिनूलाइ सम्झीकन ।
हुन्छिन् दुःखित वा प्रसन्न मनले * बस्छिन् मलाई भन ? ॥८८॥
ऐल्हे पुत्रवधू तथा अरु पनी * जो छन् यहाँ साथमा ।
गर्दा हुन् निजधर्म पालन सदा * तिनले रही सत्यमा ॥
त्यागी क्रोध नगर्नु लोभ जनले * वरत्व बिर्सी दिनू ।
गर्दैनन् यदि धर्म पालन भने * हो व्यर्थ नै जन्मनू ॥८९
जस्तै व्याप्त रहन्छ हे नरपते ! * आकाश त्रैलोक्यमा ।
त्यस्तै व्याप्त छ धर्म जान्नु जनले * प्रत्येकको चित्तमा ॥
पापी छैन तथा दुराग्रह पनी * गर्दैन कैह्ले भने ।
त्यस्ले केवल देख्छ धर्मपथले * उद्धार आफ्नो हुने ॥९०
जो हुन् धर्म तिनै बनी विदुरजी * पैदा भएका थिए ।
तिनूकै रूप हुँदा युधिष्ठिरजिको * यो देहमा लिन् भए ॥

जन्मेका तिनि हुन् मवाट पहिले * माण्डव्यको श्रापले ।
गर्थे ती उपकार मात्र जनको * सम्पत्तिले देहले ॥९१॥
बाटो हो सबको त्यही, पृथिविमा * जन्मे जति मर्दछन् ।
जस्ले पालन गर्छ धर्मपथको * पारी तिनै तर्दछन् ॥
आएँ गर्न भनेर हे नरपते ! * कल्याण तिम्रो अब ।
जे इच्छा मनमा छ त्यो भन तिमी * पूरा म गर्छु सब ॥९२॥
मेरो हेर ठुलो पराक्रम यहाँ * आए जतो सज्जन ।
केही देख्न र सुन्नको मन भए * शङ्का नमानी भन ॥
शिक्षा श्री धृतराष्ट्रले हित हुने * श्री व्यासजीको सुनी ।
लागे भण्न झुकी दुवै चरणमा * गर्नोस् दया हे मुनि॥९३॥
पाईं दर्शन नाथका चरणको * कल्याण मेरो भयो ।
सारा पाप छुटेर ताप मनको * हे नाथ ! ऐल्हे गयो ।
त्यो दुर्योधन दुष्टको कुमतिले * जो जो मरे युद्धमा ।
साराको गति के भयो भनि ठुलो * चिन्ता छ यो चित्तमा॥९४
सम्झन्दा सबको विनाश रणमा * सन्ताप बढ्ने हुँदा ।
त्यस्को यत्न भए बताउनुहवस् * राखी ममाथी दया ॥
गान्धारी पतिको र व्यास मुनिको * संवाद त्यस्तो सुनी ।
लागिन् भन्न मलाइ छैन मनमा * सन्ताप केही पनी ॥९५॥
राजोले गरि शोक पुत्रहरुको * त्याग्नू हुँदा भोजन ।
निद्रा, पीर, अशान्ति घोर तपले * गल्दोछ यिनको तन ॥
राजालाइ उपाय के छ मनमा * शान्ती सुविस्ता हुने !
सोही गर्नुपर्‍यो हितू हजुर झैं * हाम्रो छ को हे मुने ! ९६
कुन्तीले पनि व्यासजीसँग रुँदै * बिन्ती गरिन् सादर ।
शान्ती प्राप्त हुँदैन ताप मनमा * के हेतु योगेश्वर !

सम्झन्छु अघि कर्णलाइ जलमा * फालीदिएको जब ।
मेरो पाप हुनेछ नाश कसरी * दुष्कर्मको त्यो अब ॥९७
इच्छा छैन मलाइ भोग सुखको * माग्दीनँ केही पनि ।
त्यस्को मुक्ति हुने उपाय छ भने * आज्ञा हवस् हे मुनि !
र नी पुत्रवधूहरू सब मिली * श्री व्यासलाई भने ।
शिक्षा बक्सनुहोस् प्रभो ! हजुरले * कल्याण हाम्रो हुने ॥९८
जस्का पुत्र, पती र बान्धवहरू * संग्राममा मारिए ।
भेट्ने तीसँग एकपल्ट सबले * इच्छा जनाई लिए ॥
साह्रै आर्त भई रुँदै सकलले * विन्ती गरेको सुनी ।
लागे भन्न बुझाइ व्यास मुनिले * नीती दयालु बनी ॥९९॥
जस्का पुत्र-पती र भूपति जती * गर्दै लड़ाई मरे ।
तिनका निम्ति वृथा छ चिंतित हुनू * संसार पारी तरे ॥
देखिन्छन् जति यी प्रपञ्च भवमा * सम्पूर्ण हुन् अस्थिर ।
गर्नै मंगल लोकको हित छ त्यो * सद्धर्म यौटा स्थिर॥१००
द्यौता, दानव, यक्ष, राक्षस तथा * गन्धर्व विद्याधर ।
साराको लिइ अंश जन्मन गए * भूपाल पृथ्वीभर ॥
आफ्नाफ्नो मिलि अंशमा सकल ती * संग्रामद्वारा मरे ।
चिन्ता गर्नु वृथा छ आफ्नु सबले * उद्धार आफैं गरे ॥
मान्दैछौ पति पुत्र ती नरकमा * छन् की भनी जो भय ।
आजै हुन्छ तिमीहरू सकलको * निर्मूल त्यो संशय ॥
गंगा का तटमा प्रसन्न मनले * जाओ अहील सब ।
गर्नू स्नान र दान पुण्य सबले * आनन्दमानी, तब ॥२॥
डाक्नेछु म पुगेर योग बलले * तिम्रा सबै बान्धव ।
गर्नू भेट स्वयं तिमीहरू अनी * जानेछ शंका सब ॥

आज्ञा व्यासजिको सुनीकन सबै * गंगा किनार्मा गए।
संध्याकाल भएपछी जलमहाँ * श्रीव्यासजी देखिए ॥३॥
तिनले ध्यान गरेर योग बलले * आँखा जसै चिम्लिए।
मर्नें भारत युद्धमा जति थिए * सारा त्यहीं देखिए ॥
रानी, पुत्रवधू तथा अरु त्यहाँ * जो जो गएका थिए।
आफ्ना बान्धवलाइ देखि सबले * आश्चर्य मान्दा भए ॥४॥

पाण्डव र कौरव को युद्धमा मारिएका सबैसित भेट :

राजन् ! भारत युद्धमा अघि भयो * संहार जुन् वीरको।
आए श्रेष्ठ विमानमा बसि त्यहाँ * आह्वानमा व्यासको ॥
पानीभित्र अनेक सैन्यहरुको * पैह्ले भयो खल्बल।
थाले त्यै जलबाट निस्कन लिई * सम्पूर्ण आफ्ना दल ॥५॥
श्री दुर्योधन निष्किए सय जना * भाई र छोरा लिई।
थाले निस्कन भीष्म, द्रोण अघिकै * मानीस जस्ता भई ॥
धृष्टद्युम्न, विराट, कर्ण, शकुनी * श्री द्रौपदीका सुत।
निस्के श्री भगदत्त, लक्ष्मण हुँदै * अत्यन्त उत्साहित ॥६॥
दुःशासन, वृषसेन, श्री शल तथा * भूरिश्रवा भूपति।
निस्क्यो राक्षस त्यो घटोत्कच लिई* सेना मरेका जति ॥
जस्ता छत्र ध्वजा थिए जति थरी * शस्त्रास्त्र संग्राममा।
वस्त्राभूषणले सुसज्जित सबै * आए त्यही रूपमा ॥७॥
गान्धारीकन दिव्य-ज्ञान दिनुभो * पैह्ले मुनी व्यासले।
पाएथे अनि दिव्य दृष्टि सहसा * ती अन्ध भूपालले ॥
लागे हेर्न सहर्ष पुत्रहरूको * शोभा दुवै दम्पति।
हेर्थे टक्क परेर योगबल त्यो * त्याहाँ गएका जति ॥८॥

आई सुन्दर अप्सरागण तथा * गन्धर्व विद्याधर ।
राखे उज्ज्वल दीप पालहरूमा * तत्काल चारैतिर ॥
आफाफ्ना पति-पुत्रका सँग बसे * आएर त्यै पालमा ॥
ईर्ष्या क्रोध त्यजी परस्पर मिले * आनन्दका साथमा ॥९॥
भेटे कौरव वीर पाण्डवहरू * वैरत्व त्यागीकन ॥
भेटे दुःख वियोगको र सबको * खुशी भएथ्यो मन ॥
योद्धा श्रीअभिमन्युका सँग मिलिन् * श्री उत्तरा सुन्दरी ।
पाँचोटा सुत देखि हर्षित भइन् * श्रीद्रौपदी त्यो घरी ॥१०॥
राजाका विधवा अरू पनि सबै * रानीहरू जो थिए ।
आफाफ्ना पति पुत्रका सँग मिली * अत्यन्त खुशी भए ॥
कुन्तीको अनि कर्णको मिलनले * सन्ताप सारा गयो ।
राजन् ! स्वर्गसमान सुन्दर सबै * त्यो रातमा देखियो ॥११
ईर्ष्या क्रोध त्यजेर त्यो मिलनमै * रात्री बितेथ्यो जब ।
प्रातःकाल हुँदा विलीन भइ ती * जाँदा भएथे सब ॥
त्यो देखेर भयो सबैकन ठूलो * आश्चर्य हे भूपति ! ॥
सारा ती विधवाहरूसित घने * श्री व्यासले हे सती !१२
जो जो छौ पतिलोकमा तन त्यजी * जाने खुशीले सब ।
शंका त्याग गरी प्रवेश गर, यी * भागीरथीमा अब ॥
त्यो आज्ञा सुनि व्यासको ति विधवा * सम्पूर्ण खुशी भए ।
हाम्फाली जलमा तुरुन्त सबले * त्यो देह त्यागीदिए ॥१३
पाए दिव्य स्वरूप योगबलले * श्री व्यासजीको जब ।
आयो श्रेष्ठ विमान स्वर्गपुरिको * जाँदा भए ती सब ॥
पाई बस्न सहर्ष देवगण झैं * तिन्को हरायो दुख ।
पाए भोग्न अनेक लोकहरूको * धेरै थरीको सुख ॥१४॥

गान्धारी, धृतराष्ट्र पाण्डुसुतको * राजी गराई मन ।
जान्भो मुनि व्यास आश्रममहाँ * तत्काल फर्कीकन ॥
पत्नी शेष वधू र पाण्डवहरू * सारा लिई साथमा ।
लागे श्री धृतराष्ट्र फेरि कुटिमा * आएर सत्संगमा ॥१५॥

धृतराष्ट्र आदि डढेलोमा परी मरेको सुन्दा सुर्ता गर्नु :—

आएथे रणमा मरे जति सबै * भूपाल भन्ने सुनी ।
श्री जन्मेजयले भने—हुन गयो * शंका मलाई मुनि !
आए भूपहरू मरेर कसरी * फर्केर त्यो स्थानमा ।
तिनको दर्शन फेरि संभव भयो * कुन् हेतु त्यै रूपमा ?१६
वैशम्पायनले भने जनहरू * जुन कर्म गर्छन् जति ।
त्यस्को भोग नभोगि सुक्ख कहिले* पाइन्न हे भूपति !
जीवात्माकन मिल्छ, जो थरि·थरी * देहादि औ आकृति ।
त्यस्ले भोग्छ सुकर्मका फलहरू * आफ्ना गरेका जति ॥१७
जस्ले गर्छ सुकर्म भोगफलको * इच्छा नराखीकन ।
त्यस्लाई सुख-दुःख हुन्न, भवमा * आउन्न त्यो सज्जन ॥
शंका भूपतिको निवारण गरे * धेरै सुशिक्षा दिई ।
रीकेथे नृपले कथा अघि जहाँ * थाले त्यही सम्झिई । १८
गर्थे चाकरि भूपको सँग बसी * आनन्दले पाण्डव ।
सेवाले धृतराष्ट्र हर्षित भई * आशीष दिन्थे तब ॥
लागे भन्न बुझाइ एक दिन ती * आज्ञा मुनी व्यासको ।
गर्नु पर्दछ योग्य शासन सदा * भूपालले राज्यको ॥१९॥
बस्ता जङ्गलमा तिमीहरू, उता * मौका विचारीकन ।
गर्नन् साहस शत्रुले थरि-थरी * साम्राज्य खोसी लिन ॥

सोही कारणले सहर्ष घरमा * फर्केर जाओ अब ।
दिन्छु आशिष औ बिदा, गरिरहुन्* कल्याण श्रीमाधव ॥२०॥
गान्धारी अनि कुन्तीले पनि बिदा* आँसू बगाई दिए ।
वाणी रुद्ध भएर धर्म-सुत क्यै * बोल्ने नसक्ने भए ॥
राजन् ! तीन परिक्रमा गरि रुँदै * ढोगी दुवै पाउमा ।
पाँचै भाई हिंडे नबोल्न सकि क्यै* गाँठो परी चित्तमा ॥२१
फर्के धर्म-कुमारका सँग अघी * जो जो गएका थिए ।
चाँडै नै सब हस्तिनापुरमहाँ * सानन्द पुग्दा भए ॥
संझन्दै जननी र अन्ध नृपती * गान्धार कन्याकन ।
गर्थे चित्त दुखाइ पाण्डवहरू * साम्राज्यको शासन॥२२॥
आए भेट्न भनेर नारद मुनी * सानन्द कोही दिन ।
सोधे भूपतिले गरेर मुनिको * पाद्यार्घले पूजन ॥
गान्धारी धृतराष्ट्रको र जननी * कुन्ती सतीको पनी ।
केही जान्न सकीनँ हालत मुने ! * यस्तो छ तिनको भनी२३
बोले नारद, व्यग्रचित्र नृपले * बिन्ती गरेको सुनी ।
भन्थे सञ्जयले मलाइ कुटिमा * भेटेर दुःखी बनी ॥
आयौ भेट गरी तिमीहरु सबै * फर्केर याहाँ जब ।
लागेछन् तप गर्न भोजन कुटी * त्यागी भएको सब ॥२४
गान्धारी पतिका रहेर सँगमा * पानी पिई केवल ।
गर्दा संयमले कठोर तप ती * साह्रै थिइन् दुर्बल ॥
कुन्तीले फल-मूल, पातहरुको * गर्दै रही भोजन ।
आधा दम्पतिको गरिन् संग बसी * सेवा खुशी भैकन ॥२५॥
मैन्हा सात बित्यो कठोर तपमै * तीनै जनाको जब ।
राजाका मुखबाट अग्नि सहसा * निस्केछ बल्दो तब ॥

आगो सोहि उड़ी ठुलो वनभरी * लाग्यो डढेलो अनि ।
त्यस्मा पर्न गई मरे नरपति * रानी र कुन्ती पनि ॥२६
देखे संजयले उपस्थित हुँदा * तीनै जनाको गति ।
बद्रीमा तप गर्न खातिर गए * सन्ताप मानी अति ॥
त्यो संचार सुनेर पाण्डवहरू * अत्यन्त दुःखी भए ।
थाल्ने गर्न विलाप जो महलमा * तिन्का हितैषी थिए ॥२७
फैलेथ्यो बिजुलीसमान पुरमा * सम्चार त्यो दुःखको ।
रोएथे पुरवासि सद्गुणहरू * सम्झेर भूपालको ॥
ज्ञानी नारदलाइ धर्म-सुतले * रोएर बिन्ती गरे ।
हाम्रो जीवनमै डढेर वनमा * बाबू र आमा गरे ॥२८॥
जस्को राज्य सुकीर्ति, पुत्र सय औ *सम्पत्ति, सेना भई ।
मर्नु आज पर्‍यो अनाथहरू झैं * त्यो घोर वन्मा गई ॥
हात्ती साठि सहस्र केवल थिए * जुन भूपको गेहमा ।
तिन्को मृत्यु सुनी, परें म अहिले* आश्चर्य औ दुःखमा॥२९
जस्को चाकरि गर्दथे रुजु रही * केटी सुसारे यहाँ ।
रानी भूतलकी पतीसित मरिन् * हामी छँदै वन्महाँ ॥
जस्का पाँच सुपुत्र वीरहरू छौं * दिक्पाल झैं हे मुनि !
हाम्रो जीवनमै डढीकन मरिन * हा दैव ! कुन्ती पनि ३०
बाँच्नू दुर्गति भूपको सुनि पर्‍यो * हामीहरूले जब ।
व्यर्थै हुन् पुरुषार्थ, राज्य सुख यो * धिक्कार ठान्छु अब ॥
मर्नू बाँच्नु छ दैवको अधिनमा * भन्ने विचारीकन ।
मिथ्या वैभवको घमण्ड जनले * गर्छन् वृथामा किन ?३१

यस्तो तर्क सुनेर धर्म-सुतको * राम्रो दिई उत्तर ।
तिन्को चित्त बुझाइ नारद मुनी * पाल्नूभएथ्यो घर ॥
मानी दुःख असाध्य, ब्राह्मणहरू * डाकेर श्रद्धा गरी ।
अन्त्येष्टी धृतराष्ट्रको गरिदिए * भूपालले राम्ररी ॥३२॥
गर्दा स्नान र पिण्डदान नृपका * निम्ती सबै तीर्थमा ।
राजन् ! कुन्ति र अन्य दम्पति गए* त्यो पुण्यले स्वर्गमा ॥
थाले पाण्डव वीर गर्न अघि झैं * साम्राज्यको शासन ।
जस्ले सुन्दछ यो कथा, दुख कुनै * भोग्दैन त्यो सज्जन ३३

महाभारत आश्रमवासपर्व समाप्त



# महाभारत मुशलपर्व

प्रारम्भः

यदुवंशको नाश हुनेछ भन्ने श्राप :—

वैशम्पायनले भने खुशि भई * हे भूप जन्मेजय !
गर्थे पाण्डव राज्य योग्य रितले * यो पृथ्विको निर्भय ॥
तिन्को छत्तिस वर्ष का दिनहरू * आनन्दमा नै बित्यो ।
रैती खुशि थिए सबै तिर ठुलो * सत्कीर्ति बढ्दै थियो ॥१
'धेरै भूप मरेर भार हलुको * केही भयो भूमिको ।
सारा पूर्ण भए मनोरथहरू * ती पाण्डुका पुत्रको ॥
मेरो काम यहाँ समस्त सकियो * वैकुण्ठ जान्छु अब ॥
बढ्दो अन्धक वृष्णिवंश कसरी * मर्छन् सबै यादव' ॥२॥
यस्तो गर्नुभयो विचार मनमा * श्री कृष्णजीले जब ।
पौंचे खेल्न शिकार यादवहरू * वन्मा तुरुन्तै सब ॥
विश्वामित्र, वशिष्ठ, नारद तथा * श्री कण्व ज्ञानी मुनि ।
गर्थे जुन् वनमा बसी तप त्यहीं * पौंचे सबै ती पनी ॥३॥
उल्टो दैवगती विचित्र छ भनी * ख्यालै नराखीकन ।
इच्छा यादवको भएछ मुनिको * व्यर्थै परीक्षा लिन ॥
बेह्री वस्त्र तुल्याई गर्भिणी सरी * श्री साम्बको पेटमा ।
वस्त्राभूषणले सुसज्जित गरे * तत्काल स्त्रीरूपमा ॥४॥
दुर्वासा ऋषिको अघिल्तिर लगी * हाँसेर ठट्टा गरी ।
लागे सोध्न सबै मिलेर—अहिले * दुःखी छ यो सुन्दरी ॥

गर्छे आश अवश्य यो उदरमा * छोरो छ मेरो भनी ।
हे सर्वज्ञ ! बताउनोस् हजुरले * के पाउँछे गर्भिणी ? ॥५
मिथ्या बात र दुष्ट भाव सबको * जाने र त्यस्तो छल ।
बोल्ले श्राप दिएर यो मुशल नै * जन्माउला केवल ॥
हेला सज्जनको गरेर यसरी * सोधेपछी लौ सुन ।
होला यादव वंश त्यौं मुशलले * संहार भन्ने गुन ॥ ६ ॥
देखी क्रोध, सुनेर श्राप मुनिको * मानेर ठूलो डर ।
हेरे वस्त्र फुकाइ झट्ट सबले * ल्याएर केही वर ॥
निस्क्यो एक फलामको मुशल नै* तिनको अगाड़ी जब ।
सल्लाहा गरि उग्रसेन नृपको * आए सभामा सब ॥७॥
यस्तो श्राप पऱ्यो भनी मुशलत्यो* तत्काल राखी दिए ।
यस्तो हाल सुनी सभासद तथा * राजा पनी आत्तिए ॥
लागे सोध्न उपाय सज्जन बुढा * जो जो थिए तोसित ।
के गर्दा कसरी हुनेछ जन हो ! * कल्याण, हाम्रो हित ॥८॥
त्यो आज्ञा सुनि उग्रसेन नृपको * जो वृद्ध ज्ञानी थिए ।
सल्लाहा सबले गरेर पहिले * बिन्ती चढाई लिए ॥
राजन्! घोट्न लगाइ यो मुशलको* धूलो बनाई लिनू ।
त्यो धूलो बटुली ठुलो उदधिमा * चाँड़ो बगाई दिनू ॥९॥
आज्ञा सज्जनको सुनी मुशल त्यो * घोटे सकेको जति ।
टुक्रा शेष रह्यो लगी जलधिमा * फाली दिए, भूपति !
इच्छाले हरिको निलेछ जलमा * टुक्रा कुनै मत्स्यले ॥
माझीले त्यही मत्स्य पक्रि घरमा * ल्याएछ उत्साहले॥१०॥
व्याधा एक जरा छिमेकि नजिकै * त्यस्को बसेको थियो ।
केही द्रव्य लिएर मत्स्य खुशिले * त्यसलाई बेची दियो ॥

काट्यो मत्स्य पकाउने मन गरी * राजन् ! जराले जब ।
निस्केथ्यो टुकुरा उही मुशलको * बाँकी रहेको तब ॥११॥
टुप्पामा शरको जड्यो खुशि हुँदै* टुक्रा त्यही व्याधले ।
फालेथे जलमा धुलो लगि जहाँ * घोटेर मानीसले ॥
उम्र्यो झार बनेर खड्गसरिको * त्यो चूर्णको तेजले ।
मार्‍यो अन्धक वृष्णिका कुल सबै* सत्पात्रको श्रापले ॥१२॥

अन्धक, वृष्णि, यदुवंशको संहार, कृष्ण, बलरामको वैकुण्ठ गमन :—

राजन् ! द्वारवतीभरी शुरू भयो * उत्पाप धेरै थरी ।
त्यो देखीकन चित्त व्याकुल भयो* श्री कृष्णको बेसरी ॥
आफ्ना पुत्र र बन्धु बान्धव सबै * डाकेर भन्नूभयो ।
उल्कापात हुँदैछ जुन् किसिमले * त्यो नाशको चिन्ह हो १३
जाऊँ तीर्थ प्रभासमा सब जना * छाड़ेर द्वारावती ।
शान्तीखातिर दान, यज्ञ गरुँला * हामी सकेको जति ॥
त्यो आज्ञा हरिको सुनेर सबले * सामग्रि जम्मा गरी ।
छाड़ी बालक, पत्निलाइ घरमा * रक्सी लिई बेसरी ॥१४॥
आफाफ्ना रथमा चढ़ीकन हिंड़े * प्रेरित भई कालले ।
पौंचे तीर्थ प्रभासमा सब जना * अत्यन्त उत्साहले ॥
गर्दै स्नान सुवर्ण, गोधन दिए * डाकी गुणी ब्राह्मण ।
टाँगी पाल बसे कती चउरमा * छाप्रो बनाईकन ॥१५॥
देखे उद्धवले त्यहाँ सब जना * जम्मा भएका जब ।
जाने 'वंश विकाश हुन्छ यदुको * सम्पूर्ण चाँडै अब' ॥
मागी ती यदुवीरका संग बिदा * ढोगी मुरारीकन ।
बद्रीतर्फ गई कठोर तपमा * आफ्नू लगाए मन ॥१६

सन्ध्याकाल हुँदा भए सकल ती * जम्मा ठुलो चौरमा ।
ल्याएको मदिरा पिए थरि-थरी * आनन्दका साथमा ॥



श्री कृष्ण, बलराम स्वर्गारोहण



श्री कृष्ण र व्याधाको वार्तालाप

लागे गर्न विवाद मत्त भइ ती * बर्ता हुँदा वारुणी ।
छाडे चिन्ह बढेर जोश सबले * आफ्ना बिराना पनी॥१७
भन्दै 'वीरहरू अनेक निदमा * मा-यो यही दुष्टले' ।
मारेथे कृतवर्मलाइ रिसले * श्री सात्यकी वीरले ॥
त्यो देखेर रिसाइ वृष्णिकुलका * आएर योद्धा जति ।
मारी सात्यकि वीरका सँग गरे * प्रद्युम्नको सद्गति ॥१८
श्री योगेश्वरले उखेलो रिसले * तर्वार झैं झार त्यो ।
सामुन्ने जति पर्दथे सकलको * संहार गर्नुभयो ॥
थाले गर्न प्रहार वीरहरू ती * आपस्तमै क्रोधले ।
काटाकाट गरी ढले जमिनमा * शस्त्रास्त्रको चोटले ॥१९॥
बाबूले सुतको र वीर सुतले * आफ्नै पिताको पनी ।
घाँटी काटिदिए पिएर मदिरा * हो शत्रु मेरो भनी ॥

आफ्ना बान्धवको विनाश त्यसरी* प्रत्यक्ष देखीकन ।
आज्ञा भो बलरामले तिमिहरू * लड्छौ वृथामा किन?२०
मानेनन् हितका कुरा सब थिए * ती काललें प्रेरित ।
मेरो बात गरे अनादर भनी * मन्मा भई दुःखित ॥
जानूभो बलराम केहि नभनी * श्री सिन्धुको तीरमा ।
पुग्नूभो त्यजि देह शेष रूपले * श्री विष्णुको धाममा॥२१
लड्दा अन्धक-वृष्णि वीरहरुका * शस्त्रास्त्र टुक्रा भए ।
छाड़ेनन् तर लड्न क्रोधित हुँदै * झन् बेसरी तम्सिए ॥
फालेथे अघि लौह-चूर्ण बलले * घोटेर जुन् स्थानमा ।
उम्र्यो झार भएर खड्गसरिको * त्यै सिन्धुको तीरमा ॥२२॥
थाले गर्न प्रहार झार रिसले * सोही उखेली जब ।
त्यसको चोट परेर खड्गसरिको * दैंम गए यादव ॥
सारा वीर मरे लड़ेर मुनिको * क्रोधाग्निको श्रापले ।
जो जो शेष बचे सबैकन गरे * संहार श्रीकृष्णले ॥२३॥
आफ्नू वंश गरी विनाश त्यसरी * भूभार सारा हरी ॥
डुल्दै पोपल वृक्षका मुनि पुगे * श्री कृष्ण सोही घरी ॥
पल्टे रूप लिई चतुर्भुज त्यहीं * विश्रामको खातिर ।
आयो व्याध जरा लिई मुशलको * टुक्रा जड़ेको शर ॥२४
देखेथ्यो परबाट पाउ हरिको * हल्लीरहेको थियो ।
त्यस्ले ठानि शिकार सोहि शरले * ताकेर हानीदियो ॥
लाग्यो बाण गएर त्यो चरणमा * गोविन्दको बेसरी ।
आयो व्याध शिकार हेर्न नजिकै * दौड़ेर, सोही घरी ॥२५॥
श्री योगेश्वरको प्रसन्न मुहुड़ा * देख्यो जराले जब ।
लाग्यो भन्न-'मलाई माफिदिंनुहोस्*जानीनँ हे माधव ॥'

पक्री पाउ दुवै विनीत स्वरमा * त्यस्ले भनेको सुनी ।
आज्ञा गर्नुभयो जनार्दनजिले * हाँस्तै दयालु बनी ॥२६
हे व्याधा ! मनमा नमान तिमिले* शंका र केही डर ।
त्यागी देह तिमी परंपद पछी * जाने म दिन्छु वर ॥
राजन् !खुशि भयो'जरा'प्रभुजिका* पाएर आश्वासन ।
पाए दारुकले पुगीकन त्यहीं * गोविन्दको दर्शन ॥२७॥
देखी दारुकलाई आदर गरी * आज्ञा भयो कृष्णले ।
भन्नू यादव-वंशको हुन गयो * संहार जुन् चालले ॥
साता एक बितेपछी जलधिमा * डुब्नेछ द्वारावती ।
भन्नू गैकन हस्तिनापुर पनी * हामीहरूको गति ॥२८
आई पार्थ तुरुन्त द्वारवतिका * नारी, बुढा बालक ।
सारालाइ लगेर रक्षण गरुन् * तत्काल हे दारुक !


बलराम श्रीकृष्ण स्वर्गारोहण,


श्रीकृष्ण र जराको वार्तालाप

दैवाधीन भई म जान्छु तन यो * त्यागेर वैकुण्ठमा ।
भेट्नेछौ तिमिले मलाई तन यो * त्यागेपछी स्वर्गमा ॥२९॥

पाएथे वरदान आशिष हुवै * गोविन्दजीको जब ।
ढोगे दारुकले परी चरणमा * आनन्द मान्दै तब ॥
पैहले द्वारवती पुगीकन भने * सम्चार श्री कृष्णको ।
त्यो संहार सुनेर दुःखित भए * आफ्ना सबै बन्धुको ॥३०
थाले गर्न विलाप बेसरि रुँदै * रानी, बुढा, बालक ।
घोड़ामा चढि हस्तिनापुर पुगे * तत्काल श्री दारुक ॥
जाने दारुकलाइ द्वारवतिमा * आज्ञा दिनूभो जब ।
आफाफ्ना बढिया विमानहरुमा * आएर धौता सब ॥३१॥
लावा पुष्प छरेर दुन्दुभिहरू * बाजा बजाईकन ।
हे राजन् ! सबले गरे स्तुति तथा * श्री कृष्णको दर्शन ॥
आफ्नू सूक्ष्म लिई स्वरूप , अरुले* जान्नै नसक्ने गरी ।
पाल्नूभो निज धाममा तन त्यजी * श्रीकृष्ण सोही घरी ॥३२

वसुदेव-देवकी र कृष्णका मुख्य-मुख्य रानीहरूको देह त्याग :—

राजन् ! दारुक हस्तिनापुर पुगे * सानन्द अर्को दिन ।
पाए दर्शन पाण्डु-पुत्रहरूको * दर्बारमा गैकन ॥
सारा अन्धक, वृष्णिवंश जसरी * संग्राम गर्दै मरे ।
रोई श्रीहरिको हुकुम् जति सबै * विस्तार तिन्ले गरे ॥३३
त्यो संचार सुनेर पाण्डवहरू * अत्यन्त दुःखी भए ।
यस्तो के हुन सक्छ संभव भनी * आश्चर्य मानी लिए ॥
हेर्छु यादवको म द्वारवतिमा * कस्तो छ ऐल्हे स्थिति ।
भन्दै पार्थ हिंड़े चढेर रथमा * सन्ताप मानी अति ॥३४
देखे शून्य समान झैं विजयले * द्वारावती कृष्णको
बाबा श्री वसुदेव मूर्छित थिए * चिन्ता परी पुत्रको ॥

देखी अर्जुनलाइ राज-महिषी * सारा भई विह्वल ।
थाले गर्न विलाप, झन् हुन गयो * चौतर्फ कोलाहल ॥३५॥
चिंताग्रस्त भए धनञ्जय पनी * देखेर त्यस्तो स्थिति ।
ढोगे श्री वसुदेवका चरणमा * पक्रेर हे भूपति !
काखामा वसुदेवले प्रिय गरी * राखेर रोईकन ।
थाले गर्न विलाप संझि हरिको * सेवा तथा सद्गुण ॥३६॥
फाली हामिहरू सबैकन ठुलो * यो दुःखको सिन्धुमा ।
छैनन् आज यहाँ उपस्थित, गए * गोविन्द वैकुण्ठमा ॥
हे बाबू ! वशमा थिए सुतहरू * त्रैलोक्य जुन् वीरको ।
तिन्ले हेर्न सके बसेर कसरी * संहार ती बन्धुको ॥३७॥
रोकेनन् सबलाई लड्न नदिई * श्री कृष्णजीले किन ?
इच्छाले हरिकै भयो स्वजनको * संहार हे अर्जुन !
करूलाई दिनु दोष बन्धुवधको * मैले तिमी नै भन !
जानी दैवगती विचित्र म बसें * सन्तोष मानीकन ॥३८॥
श्री योगेश्वर भन्दथे अघि कुनै * चर्चा चलेका घरी ।
जो हुन् पार्थ त्यही म हूँ, बुझिलिनू * संसारले राम्ररी ॥
सोही कारण भन्दछु म तिमि हौ * श्री कृष्ण झैं अर्जुन ।
सुम्पन्छु तिमिलाइ द्वारवतिमा * छन् जो बचेका सुन ॥३९॥
बाबू ! आइपुग्यौ तिमी बखतमा * हाम्रो ठुलो भाग्यले ।
त्यागी भोजन मर्दछु अब, अरू * बाँचूँ म कुन् आसले !
बोले श्री वसुदेवको सुनि कुरा * सम्झाउँदै अर्जुन ।
देख्दा कृष्णविहीन आज पृथिवी * आत्तिन्छ मेरो मन ॥४०॥
जानूपर्छ त्यहीं, त्यजीकन गए * सर्वस्व हाम्रा जहाँ ।
गर्ने सोख गरी सक्यौं अब बसी * के गर्नु व्यर्थै यहाँ ॥

पैह्ले राख्दछ हस्तिनापुर लगी * सम्पूर्ण यी यादव ।
सुम्पन्छु गइ वज्रनाभकन नै * * त्यो राज्य-भारा सब ॥४१।
झ्याली द्वारवती भरी पिटिदिनू * चाँड़ो सबैले सुनुन् ।
सारा मानिस हस्तिनापुर छिटै * जाने तयारी गरुन् ॥
रानी जो हरिको वियोग ननिको * खप्तै थिए यातना ।
सारालाइ दिए बसी बिजयले * शिक्षा तथा सान्त्वना ४२
उर्दी अर्जुनको भने पुरभरी * झ्याली पिटी दूतले ।
लैजाने जति वस्तु तत्पर भई * बाँधे सबै व्यक्तिले ॥
प्रातः काल हुँदा उठी विजयले * आफैं गरी तर्खर ।
गर्नै दाह क्रिया सबै चिजहरू * बाधे रही त पर ॥४३॥
रानी सोह्र हजार आठ विधवा * मामा लिई साथमा ।
पौंचे तीर्थ प्रभास, वंश यदुको * संहारको स्थानमा ॥
देखेथे वसुदेव देवकिजिले * त्यो स्थानलाई जब ।
त्यागे प्राण भनेर व्याकुल हुँदा * 'हे कृष्ण हे माधव' ॥४४
रानी आठ प्रधान औ अरु त्यहाँ * जानेहरू जो थिए ।
घेरैले प्रभुलाइ सम्झि मनले * त्यो देह त्यागीदिए ॥
श्री प्रद्युम्न र साम्ब आदि सबका * रानीहरूले पनी ।
त्यागे देह भएर विह्वल रुँदै * हा प्राणप्यारा ! भनी४५

देखे गती सकलको जब पार्थले त्यो ।
मूर्छापरे सरि भए, पछि चेत आयो ॥
दाह क्रियादि सबको क्रमले गरेर ।
फर्कँ तुरुन्त सबलाइ सँगै लिएर ॥४६॥

द्वारकाबाट फर्कंदा भिल्लहरूले चुट्नु, लुट्नु :—

हे राजन् ! बलरामको र हरिको * त्यो देह खोजीकन ।
आफैं दाह क्रिया गरे विजयले * साह्रै दुखाई मन ॥
भोली बुड्दछ सिन्धुमा प्रभुजिको * यो श्रेष्ठ द्वारावती ।
आजै निस्कनुपर्छ हामिहरूले * चाँड़ै सकेको जति ॥४७
भन्दै अर्जुनले अनेक रथ औ * गाड़ाहरूमा पनि ।
सामग्री धन रत्न जो जति थियो * संपूर्ण राखे अनि ॥
रानी बालक वृद्ध वन्धुहरू जो * बाँकी बचेका थिए
पाल्कीमा रथमा सुरक्षित गरी * तिनलाइ राखीलिए ॥४८
रक्षा गर्न भनेर सैनिकहरू * राखेर चारैतिर ।
निस्के अर्जुन ती सबैकन लिई * द्वारावती बाहिर ॥
सारा यादव फौज त्यो किसिमले * बढ्दै अगाड़ी गयो ।
बढ्दै सागरले तुरन्त पुर त्यो * सारा डुबाई दियो ॥४९॥
नाघ्दै ग्राम अनेक पञ्चनदमा * पुग्दा भए ती जब ।
संध्याकाल हुँदा बसे थरि-थरी * डेरा बनाई सब ॥
लुट्ने मानिस, संपती पथिकको * डाकू रहन्थे जहाँ ।
डेरा पर्न गएछ ती सकलको * थाहै नपाई त्यहाँ ॥५०॥
यौटा अर्जुन मात्र रक्षक त्यहाँ * देखी ठुलो फौजको ।
आए दुष्ट लिएर अस्त्र करमा * इच्छा गरी लुट्नको ॥
लागे चुट्न पछाड़िबाट सहसा * डाकूहरूले जब ।
हाहाकार परेर आत्तिन गए * सम्पूर्ण ती यादव ॥५१॥
पाए स्त्री धन रत्न मालहरू जो * डाकूहरूले जति ।
साम्ने अर्जुनकै लगे बलजफत * तानेर हे भूपति !

डाकूलाइ सशस्त्र सैन्यहरूले * रोके सकेको जति ।
लागे भाग्न पछाडि टिक्न नसकी * सेना डराई अति ॥५२॥
त्यो देखेर विषाद मानि धनुमा * ताँदो चढाऊँ भनी ।
आँटेथे तर त्यो चढेन र भए * अत्यन्त दुःखी तिनी ॥
बिर्से शस्त्रहरू समस्त अधिका * मोहित् हुनाले गरी ।
जाने दैवगती विचित्र मनमा * चिंता परो बेसरी ॥५३॥
आए फेरि सबै मिलेर सहसा * डाकू अगाडी सरी ।
रानी श्री हरिका लगे बलजफत् * तानेर सोही घरी ॥
कोही लाज त्यजी गए खुरुखुरू * छोड्ला भनी दुष्टले ॥
भागे कोहि कतै, त्यहीं कति लडे * मूर्छा परी शोकले ॥५४
त्यो देखेर रिसाइ फेरि बलले * ताँदो चढाए तर ।
चाँडै अर्जुनको समाप्त हुनगो * ठोक्काभरीको शर ॥
टुप्पाले धनुकै अनेक अरिका * सातो हरे तापनी ।
ती पापीहरूलाइ जित्न नसकी * दुःखी भएथे तिनी ॥५५
धेरै नै खलका परेर करमा * रानी हरीका गए ।
जो जो शेष बचे सबै विजयका * सामू उपस्थित् भए ॥
स्त्री, बूढा, शिशुको र सैन्यहरूको * देखी ठुलो दुर्गति ।
लामू सास लिंदै भने विजयले * 'दैवी विचित्रा गति' ॥५६॥
हे राजन् ! बलवान हो समय नै * मानीस हुन् निर्बल ।
हर्थे स्त्री धन-रत्न, नत्र कसरी * हाम्रा सबै ती खल ॥
जस्को श्रेष्ठ थियो पराक्रम, ठुलो * कीर्ति तथा गौरव ।
जो देखी डर मान्दथे सुरहरू * सम्पूर्ण ती यादव ॥५७॥
इच्छाले हरिको समुद्र तटमा * बर्ता पिई वारुणी ।
गर्दै युद्ध मरे परस्पर सबै * उन्मत्त जस्ता बनी ॥

शोभा भव्य थियो सबै तरहले * द्वारावतीको तर ।
ऐल्हे सागरमा डुबेर जल नै * देखिन्छ चारैतिर ॥५८॥
मैले शस्त्रहरू प्रहार रणमा * जो जो अघी गर्दथें ।
त्यस्को याद रहेन बिर्सन गईं * लाचार ऐल्हे भएँ ॥
ठोक्को देख्नुहुँदैछ यो समरमा * रित्तिन्नथ्यो बाणले ।
यौटा बाण रहेन रित्तिन गयो * सम्पूर्ण दुर्दैवले ॥५९॥
जस्ले युद्ध गरी सुरासुर सबै * एक्लै पनी जित्दथ्यो ।
डाँकूका संगमा पराजित भई * बाँचीरहेकै छ त्यो ॥
योद्धा श्रेष्ठ, बली र वैभव हुने * राजा भए तापनी ।
वेला आइपुगेपछी, बुझिलिनोस् * त्यो नाश होला मनी ॥६०
ती दुःखीहरुलाइ यो किसिमले * शान्ती दिई राम्ररी ।
जो जो शेष रहे सबैकन लिई * हिंड्दा भए त्यो घरी ॥
इन्द्रप्रस्थ पुगेर सोहि दिनमा * बिश्राम गर्दा भए ।
भोलीपल्ट सहर्ष राज्य अभिषेक * श्री वज्रलाई दिए ॥६१॥
रानी श्रीहरिका त्यहीं महलमा * राखे सुरक्षा गरी ।
रक्षा खातिर राज्यको त्यहिं रहे * सेनाहरू त्यो घरी ॥
बाँकी यादव जो थिए अरु त्यहाँ * आफ्ना हितैषी जन ।
तिनलाइ पनि ग्राम औ नगरमा * राखे मिलाईकन ॥६२॥

दुःखी अर्जुनलाई व्यासको शिक्षा :—

साम्राज्य भार खुशिले दिइ वज्रलाई ।
राखी सुरक्षित सबै यदुवीरलाई ॥
योद्धा धनञ्जय भई मनमा मलीन ।
श्री व्यासजीसित गए हित अर्ति माग्न ॥६३॥

देखे दीन मलीन व्यग्र मुनिले * सामू खड़ा अर्जुन ।
गर्दै स्वागत एक आसन दिई * सोधे डराईकन ॥
देख्छु श्रीहत औ मलीन बहुतै * के हेतु तिम्रो मुख ।
आयौ व्यग्र हुँदै परेर कि तिमी * केही नराम्रो दुख ॥६४
बाबू ! स्नान गऱ्यौ अशुद्ध जलले * हत्या गऱ्यौ विप्रको ।
की वा भोग गऱ्यौ रजोवति कुनै * स्त्री कर्कशा दुष्टको ॥
अर्को हेतु छ की पराजय भयो * तिम्रो कुनै युद्धमा ।
सुन्छु भन्न हुने भए मन सबै * मेरो तिमी सामुमा ॥६५
यस्तो प्रश्न सुनेर व्यास मुनिको * बिन्ती गरे पार्थले ।
पाल्नुभो निजधाममा प्रभु, भएँ * दुःखी त्यही शोकले ॥
योद्धा अन्धक, वृष्णि, भोज यदुका * जो जो प्रतापी थिए ।
आफै युद्ध गरी प्रभासतटमा * सम्पूर्ण मर्दा भए ॥६६
रानी श्री हरिका लिएर म यता * फर्कीरहेको घरी ।
नारी-रत्न लगे अहीरहरूले * मेरै अगाड़ी हरी ॥
डाकू मार्न भनी कठोर श्रमले * नाँदो चढाएँ तर ।
शक्ती क्षीण हुँदै गयो र सकियो * ठोक्राभरीको शर ॥६७॥
अस्त्र ज्ञान हुँदा विलुप्त, मनले * सम्झी मुरारीकन ।
साह्रै व्यग्र भएँ मुने ! अब वृथा * ठान्छु म यो जीवन ।
साह्रै दिक्क भएर श्री विजयले * बिन्ती गरेको सुनी ।
लागे भन्न बुझाइ बात हितको * श्रीव्यास ज्ञानी मुनी ॥६८
हे बाबू ! जति छन् प्रपञ्च भवका * सम्पूर्ण हुन् अस्थिर ।
त्यस्लाई सुख प्राप्त हुन्न कहिल्यै * जो मान्छ नित्य स्थिर ॥
ऐल्हे जो भवितव्यले हुन गयो * त्यस्लाइ रोकौं भनी ।
लाखौं यत्न गरुन् तथापि नभई * छाड्दैथ्यो त्यो पनी ॥६९

जो जो अंश लिएर देवगणको * पैदा भए लोकमा ।
पूरा काम गरेर ती सब मिले * सारा त्यही देवमा ॥
गर्छन् पालन सृष्टि नाश सहजै * जो व्यक्ति यो विश्वको ।
तिन्ले रोक्न थियो कठिन् कति कुरा* संग्राम ती बन्धुको ॥७०
रोकेनन् तर कालको गति ठुलो * जानेर तिन्ले जब ।
तिन्का तिम्ति वृथा छ गर्नु तिमिले* यो शोक, चिन्ता अब ॥
कालैले बल दिन्छ दुर्बल पनी * पार्नें त्यही काल हो ।
गर्नू पालन, सृष्टि, नाश पनि ता * त्यै कालको काम हो ॥७१॥
सम्झाए मुनिले सबै तरहले * श्री पार्थलाई जब ।
केही शान्ति मिले र भ्रान्ति मनको * तिन्को गएथ्यो सब ॥
फर्की अर्जुन हस्तिनापुर गए * मागी बिदा सादर ।
गर्दा धर्मकुमारका सँग कुरा * आँसू गिरे बर्बर ॥७२॥

महाभारत मुशलपर्व समाप्त ।



गाईका अंगमा देवता हरूको निवास

# महाभारत स्वर्गारोहणपर्व

प्रारम्भः

पाण्डवहरूको महाप्रस्थान, बाटोमा चार भाइ, द्रौपदी गिर्दा त्यसको कारण युधिष्ठिरले बताउनु—

वैशम्पायनले भने—जब त्यजी * जानूभयो श्री हरि ।
तिनको वंश भयो विनाश द्विजको * त्यो श्राप ठूलो परी ॥
त्यो सम्चार सुनेर धर्म-सुतले * मन्मा गरी निश्चय ।
भन्नूभो अब हुन्छ भाइहरू हो ! * हामी सबैको क्षय ॥१॥
सोही कारण जानुपर्दछ छिटै * श्री उत्तरा पन्थमा ।
हाम्रो हुन्छ भनेर जान सबले * कल्याण त्यै स्थानमा ॥
यस्तो बात गरेर भूषण-लुगा * त्यागी सबै राजसी ।
पैह्री वल्कल विप्र-आदि सबको * पूजा गरेथे बसी ॥२॥
वैश्यापुत्र युयुत्सु राज्यभरिको * हेर्चाहमा राखिए ।
सारा कौरव वीरका अधिपती * राजा परीक्षित भए ॥
बाँकी यादव वीरका हुन गए * श्री वज्र नै भूपति ।
राखे रक्षक रूपमा थरि थरी * सेना र सेनापति ॥३॥
राजन् ! श्री वसुदेव दम्पति तथा * गोविन्दलाई पनी ।
राखी विप्रहरू जलाञ्जलि दिए * कर्तव्य हो यो भनी ॥
डाकी विप्र, मुनी, ऋषीश्वर तथा * ज्ञानी, गुणी, सज्जन ।
गाई वस्त्र सुवर्ण अन्न धन औ * मीठो दिए भोजन ॥४॥
डाकी योग्य प्रजा, समस्त पुरका * आफ्ना हितैषी जन ।
मागे जान बिदा युधिष्ठिरजिले * आनन्द मानीकन ॥
त्यागी मोह समस्त बन्धु, पुरको * प्रासादको, राज्यको ।
राखी चञ्चल चित्तमा कमल झैं * पाऊ दुवै कृष्णको ॥५॥
पाँचै भाइ र द्रौपदी लिइ, महा- * प्रस्थानको खातिर ।
निस्केथे वनवासको बखत झैं * प्रासादको बाहिर ॥

त्यो देखेर रुँदै हिंडे पछि पछी * सम्पूर्ण नारी-नर ।
सम्झाई नृपले भने पछि सबै * फर्केर आए घर ॥६॥
यौटा श्वान र सुन्दरी द्रुपदजा * पाँचै जना पाण्डव ।
गर्दै पालन धर्म, पूर्वतिर नै * बढ्दै गएथे सब ॥
नाघ्दै ग्राम, नदी र पर्वत पुगे * ती सिन्धुको तीरमा ।
लागे भन्न प्रकट भएर सहसा * श्रीअग्नि त्यै स्थानमा ७
यस्को काम रहेन गाण्डिव धनू * फालुन् यहीं पार्थले ।
मागेथें म गई दिए वरुणले * तत्काल, त्यै हेतुले ॥
फिर्ता गर्नुपर्‍यो लगी वरुणजी * लाई भनेथे जब ।
फाले सागरमा धनू विजयले * चाहिन्न भन्दै अब ॥८॥
राम्रा दक्षिण सिन्धुका तटहरू * हेर्दै अगाडी गए ।
शोभा उत्तरमा सुमेरु गिरिको * देखेर खुशी भए ॥
पृथ्वी पूर्ण प्रदक्षिणा गरुँ भनी * इच्छा र उत्साहले ।
नाघ्दै पर्वत औ ठुला बगर ती * बढ्दै गए वेगले ॥९॥
त्यै बेला पथमा लडीकन मरिन् * श्री द्रौपदी सुन्दरी ।
सोधे धर्मकुमारलाई अडिई * श्री भीमले त्यो घरी ॥
दाजू ! पाप तथा अधर्म कहिले * गर्दिनथिन् यी सती ।
भन्नोस् कारण के परीकन भयो * यिन्को यहाँ दुर्गति ?१०
भाईको सुनि त्यो कुरा, नअडिई * बोल्दा भए भूपती ।
बढ्ता प्रेम गरेर श्री विजयकै * पैहले मरिन् यी सती ॥
देखेथे सहदेव क्यै पर गई * लोटी धरामा मरे ।
सोधे धर्म-कुमारलाइ यिनिले * दुष्कर्म केही गरे ॥११॥
आज्ञामा बरु चल्दथे हजुरकै * त्यागी अहं भावना ।
कस्तो पाप गरेर भोग्नु यसरी * यिन्ले पर्‍यो यातना ॥
तिन्को प्रश्न सुनी सवेग पथमा * हिंड्दै दिए उत्तर ।
यिन्को दृष्टिमहाँ थिएन अरु क्वै * सद्बुद्धिवाला नर ॥१२॥

बाठो हूँ म भनेर गर्व मनमा * बर्ता हुनाले गरी ।
यिन्को मृत्यु भयो यती भनि हिंड़े * भूपाल झन् बेसरी ॥
केही दूर गई ढले नकुलजी * देखेर श्री भीमले ।
सोधे धर्म-कुमारलाइ यि मरे * कुन् दोष वा पापले ॥१३
आफ्नू बुद्धि र रूपमा नकुलको * ठूलो अहङ्कारले ।
यिन्ले मर्नुपऱ्यो र गर्छ जति जो * त्यो भोग्छ त्यै व्यक्तिले ॥
यस्तो बात भनेर धर्म-सुतले * ठानी वृथा पखन ।
आऊ भीम ! भनी सरासर हिंड़े * हेर्दै नहेरीकन ॥१४॥
यौटा श्वान र तीन भाइ त्यसरी * जाँदा भए क्यै पर ।
योद्धा पार्थ पनी ढले जमिनमा * तत्काल एकातिर ॥
सोधे छक्क परेर टक्क अडिई * श्री भीमले सादर ।
गर्थे पालन धर्मको र यिनि हुन् * श्रीकृष्णरूपी नर ॥१५॥
यिन्को मृत्यु हुने बताउनुहवस् * हे भूपती ! कारण ।
हिंड्दै भन्नुभयो युधिष्ठिरजिले * हे भीम बाबू ! सुन ॥
मार्छु शत्रु सबै म एक दिनमा * भन्ने प्रतिज्ञा गरे ।
पूरा त्यो नगरी, घमण्ड मनमा * बर्ता हुँदा यी मरे ॥१६॥
भन्दै बात यती सरासर गए * बढ्दै अगाड़ीतिर ।
शक्ती-क्षीण भई गिरे पृथिविमा * श्री भीम केही पर ॥
हे दाज्यू ! म पनि ढलें किन यहाँ * थाहा भए कारण ।
भन्दै जानुहवस् प्रसन्न मनले * हेर्दै नहेरीकन ॥१७॥
हिंड्दै भन्नुभयो युधिष्ठिरजिले * बिन्ती सुनी भीमको ।
बढ्ता भोजन गर्नु भीम तिमि भैं * हो दोष मानीसको ॥
हे भाई ! बलको घमण्ड मनमा * तिम्रो हुनाले अति ।
अर्कालाई गनेर तुच्छ अहिले * तिम्रो भयो यो गति ॥१८

यस्तो साफ जवाफ नफर्किकन नै * श्री भीमलाई दिई ।
लागे धर्म-कुमार हिंड्न अघिझैं * त्यो श्वान साथै लिई ॥
रानी द्रौपदि चार भाई पथमा * प्रारब्धले नै मरे ।
भन्दै धर्म-कुमार दुःखित भई * सन्ताप ठुलो गरे ॥१९

इन्द्र-युधिष्ठिर संवाद र धर्ममा दृढ रहेर स्वर्ग जानु :—

राजन ! शब्द ठुलो गरेर मनसा * थर्काउँदै त्यो स्थल ।
आयो एक विमान स्वर्गपुरिको * पार्दै दिशा उज्ज्वल ॥
वहाँ इन्द्र विमानबाट, नजिकै * आएर भूपालको ।
वाणी नम्र गरी भने विनयले * कल्याणको बात यो ॥२०॥
ल्याएको छु विमान हे नरपते ! * यस्मा बसी स्वर्गमा ।
जाऊँ, हिंड्नुहवस् यही शरिरले * आनन्दका साथमा ॥
बोले धर्मकुमार आदर गरी * आज्ञा सुनी इन्द्रको ।
आज्ञा गर्नुभयो जती सब कुरा * स्वीकार गर्छु म त्यो ॥२१
रानी द्रौपदि चार भाइ पथमा * लोटेर मेरा मरे ।
जान्थें स्वर्ग सँगै लिई हजूरले * तिन्को व्यवस्था गरे ।
लागे भन्न सुरेन्द्र धर्मसुतले * बिन्ती गरेको सुनी ।
पैल्हे स्वर्ग पुगे मरी हजुरका * भाई र रानी पनी ॥२२॥
तिन्को खातिरमा वृथा हजुरले * पर्दैन चिन्ता लिन ।
गर्दैछन् सुख भोग, पुण्य फल ती * आनन्द मानीकन ॥
लागे सादर भन्न धर्म-सुत त्यो * बिन्ती सुनी इन्द्रको ।
मेरो भक्त छ श्वान एक सँगमा * इच्छा छ लैजानको॥२३
लागे भन्न सुरेन्द्रजी हजुर झैं * धर्मज्ञ भूपालले ।
यस्तो तुच्छ विचार राख्नु मनमा * हो व्यर्थ, अज्ञानले ॥
हो यो श्वान अशुद्ध जात सँगमा * यस्लाइ राख्यो भने ।
धर्म भ्रष्ट र स्वर्गको सुख कुनै * पाइन्न शान्ती दिने ॥२४

सोही कारणले प्रसन्न मनले * यस्लाइ त्यागी दिनोस् ।
जाऊँ स्वर्ग विमानमा बसि ठुलो * आनन्द भोग्नूहवस् ॥
बोले धर्म-कुमार हे सुरपते ! * साँचा कुरा हुन् तर ।
आयाँ हामि सँगै र मान्दछु ठुलो * यो श्वान मेरो भर ॥२५
रक्षा दुर्बलको र आर्त जनको * गर्ने छ मेरो प्रण ।
सोही कारणले म त्याग्न सहसा * आँटे पनी सक्तिनँ ॥
लागे भन्न सुरेन्द्र फेरि नृपको * इच्छा बुझी सादर ।
गर्छन् दान र धर्म-यज्ञहरु जो * स्वाध्याय ज्ञानी नर ॥२६
त्यस्मा दृष्टि पर्‍यो भने कुकुरको * हुन्छन् सबै निष्फल ।
राम्रा धर्महरू गरे पनि कुनै * पाइन्न त्यस्को फल ॥
सक्नूधो जब त्याग्न उत्तम गुणी * भाई र रानीकन ।
त्याग्दा श्वान हजूरलाइ यसरी * गाह्रो परेको किन ? ॥२७
बोले धर्मकुमार—हे सुरपते ! * सम्पूर्ण संसारमा ।
चिन्ता गर्नु वृथा छ, जो मरिसके * ती व्यक्तिका निम्तिमा ॥
बाँचुन्जेल रहन्छ व्यक्तिहरुको * सम्बन्ध प्राणीसित ।
मनलाइ सकिन्न पार्न बलले * वा यत्नले जीवित ॥२८
त्रासी औ भयभीत, बालक तथा * नारी दुखी सज्जन ।
आफ्नू आश्रित व्यक्ति औ शरणमा * आएर पर्नेकन ॥
त्याग्नेछैन भनी गरें प्रण स्वयं * मैले त्यसै कारण ।
त्याग्दा पाप मलाइ लाग्दछ भनी * आत्तिन्छ साह्रै मन ॥२९
आफ्नू आश्रित श्वानलाइ यसरी * त्यागेर यो स्थानमा ।
एक्लै स्वर्ग म जान्नँ, श्रेष्ठ सुख वा * आनन्दका लोभमा ॥
राजन् ! वासवलाइ धर्म-सुतले * त्यस्तो दिंदा उत्तर ।
त्यागी श्वान स्वरूप धर्म सहसा * आफैं भए हाजिर ॥३०॥

ढोगे दिव्य स्वरूपको चरणमा * तत्काल तो भूपले ।
देखी प्रेम सहर्ष नम्र स्वरमा * शिक्षा दिए धर्मले ॥
हे बाबू ! म हुँ धर्म द्वैतवनमा * देख्यौ बकुल्लो हुँदा ।
तिम्रो धर्म रहेछ सुस्थिर भनी * जानें परीक्षा लिंदा ॥३१॥
त्यागी भाइहरू गुणी नकुलकै * माग्यौ त्यहाँ जीवन ।
बाँचे भाइहरू सबै, वर दिएँ * मैले त्यसै कारण ॥
मेरो आश्रित भक्त हो शरणमा * आयो भनी श्वानको ।
बर्ता स्नेह गरी स्वयं त्यजिदियौ * आनन्द जो स्वर्गको ॥३२

यो कार्यले खुशि भएँ, तिमिदेखि ऐले ।
राजा तिमीसरि भएन, कुनै पहीले ॥
छैनन् उपस्थित, हुने पनि आस छैन ।
जाऊ सदेह अब स्वर्ग र गर्नु चैन ॥३३॥

युधिष्ठिर सदेह स्वर्ग जानु र मायामय नरकमा आफ्ना बन्धुहरू देखेर त्यहीं बस्ने निश्चय गर्नुः

साक्षात् धर्म तथा युधिष्ठिर दुवै *-को बात हुन्थ्यो जहाँ ।
आए भेट्न भनी विमानहरुमा * सम्पूर्ण द्यौता तहाँ ॥
केही बेर गरी परस्पर कुरा * सम्मानका साथमा ।
राखे धर्म-कुमारलाइ रथको * ती देवले माझमा ॥३४॥
लागे जान उड़ेर स्वर्ग, पथ औ * पार्दै दिशा उज्ज्वल ।
जाने स्वर्ग सदेह उत्तम यिनै * हुन् भूपती केवल ॥
राजा कोहि भएन धर्मसुत झैं * ज्ञानी तथा सज्जन ।
गर्थे नारद आदि देव ऋषिले * भूपालकै वर्णन ॥३५॥
सुन्दै आफ्नु गुणानुवाद खुशिले * ती स्वर्ग पौंचे जब ।
लागे खोज्न तुरुन्त भाइहरु औ * आफ्ना सबै बान्धव ॥
देखे सिद्ध तपस्वि औ वसुहरू * राजर्षि, ज्ञानी, मुनि ।
धर्मात्मा जन औ मरुद्गण तथा * सम्पूर्ण द्यौता पनि ॥३६॥

देखे भूपतिले सुयोधनजिको * सम्मान वीरोचित ।
सारा कौरव स्वर्गका अधिपती * श्री इन्द्र झैं शोभित ॥
त्यो देखेर रिसाउँदै मनमनै * फर्केर अकीर्तिर ।
सोधे देवहरू सबैसित त्यहाँ * क्यै उच्च पारी स्वर ॥३७
जस्का निम्ति भयो दुवै तरफको * संहार संग्राममा ।
योद्धा शेष रहेन शून्य हुन गो * जस्ले गरी लोकमा ॥
त्यस्ता कौरवले अलभ्य गति यो * पाए भने स्वर्गमा ।
मेरा धार्मिक भाइ बन्धुहरू छन् * हे देव ! कुन् लोकमा ३८
भाई भीम र पार्थ श्री द्रुपदकी * छोरी र तिन्का सुत ।
धृष्टद्युम्न र सात्यकी र जननी * श्री कर्ण दाज्यूसित ॥
हाम्रा निम्ति दिए सहर्ष जतिले * संग्राममा जीवन ।
पाए भेट्न समस्त बन्धुहरूको * गर्नैं थिएँ दर्शन ॥३९॥
पापी कौरवको म बस्न सँगमा * आँटे पनी सक्तिनँ ।
मेरा बान्धव छन् जहाँ अब त्यहीं * जाने छ मेरो मन ॥
साह्रै चित्त दुखाइ धर्म-सुतले * बिन्ती गरेको सुनी ।
ज्ञानी नारदले भने हित कुरा * हँस्तै दयालु बनी ॥४०॥
हे राजन् ! सुख-दुःख जे जति परे * संसारमा ज्नुन् घरी ।
धामी धर्म सबै सहीकन बस्यौ * कर्तव्य पूरा गरी ॥
सोही कारण स्वर्गका सुखहरू * पायौ तिमीले सब ।
शान्तीले उपभोग त्यो गर तिमी * श्राइन्द्र जस्तै अब ॥४१
गर्नन् सादर अप्सरागण तथा * गन्धर्वले चाकरी ।
भोग्नू कल्पभरी अनेक थरिका * आनन्द राम्रो गरी ॥
राजन् ! नन्दन नामको वन सधैं * डुल्नू तिमी स्वर्गको ।
आफ्नू श्रेष्ठ विमानमा, फल त्यही * हो श्रेष्ठ सत्कर्मको ॥४२

ज्ञानी, सज्जन मात्र स्वर्गपुरिमा * हुन् आउने केवल ।
सक्तैनन् खल स्वर्ग आउन तथा * पुग्दैन तिनूका बल ॥
जस्तो स्नेह रहन्छ व्यक्तिहरुको * आपरतमा लोकमा ।
त्यस्तो प्रेम रहन्न बन्धुहरुको * आएपछी स्वर्गमा ॥४३॥
आपना शत्र र बन्धुको तिमी पनी* सम्बन्ध बिर्सीकन ।
भोग्नू योग्य छ पुण्यका फलहरू * सानन्द हे सज्जन !
शिक्षा नारदको युधिष्ठिरजिले * यस्तो सुनेथे जब ।
जोरी हात दुवै भने विनयले * आपनो इरादा सब ॥४४
रानी, भाइ र बन्धु, बान्धवहरू * मेरा रहन्छन् जहाँ ।
मान्छु स्वर्ग त्यहीं र बस्तछु पनी * आनन्द मानी त्यहाँ ॥
योद्धा भीम र पार्थलाइ कसरी * बिर्सूं म ऐहे मुनि !
सम्झन्छु दिन रात कर्णकन नै * दाजू थिए ती भनी ॥४५
मेरा निम्ति हुनेछ स्वर्ग त्यहिं नै * बस्छन् जहाँ बान्धव ।
भेट्ने ती सबलाइ गर्दछु मुने ! * इच्छा म चाँडै अब ॥
यस्तो बात्त सुनेर धर्म-सुतको * डाकेर यौटा चर ।
आज्ञा इन्द्रजिले दिए—नरपती- * लाई लगी सादर ॥४६॥
यिनूका बान्धव छन् जहाँ त्यहिं छिटो* ऐहे पुऱ्याई दिनू ।
गर्नेछन जब फर्कने मन यिनी * फेरी यहीं ल्याउनू ॥
आज्ञा पाइ सुरेन्द्रको अघि-अघी * हिंड्दो भयो त्यो चर ।
लागे धर्म-कुमार हिंड्न चर त्यो * जान्थ्यो जता त्यैतिर॥४७
नाघी स्वर्ग, बढेर दक्षिण दिशा * जाँदा भए तीं जब ।
आयो दुर्गम मार्ग कण्टकहरू * धेरै भएको तब ॥
चारै तर्फ छ अन्धकार पथमा * देखिन्न क्यै राम्ररी ।
बाटाका तरवार झैं रुखहरू * कोथैं नराम्रो गरी ॥४८॥